# नेपाली

(त्रैमासिक)

२०६६ साउन, भदौ र असोज पूर्णाङ्क २००

## *गुठीको समाचार*

### २०६५ का पुरस्कार

२०६६/५/१२/६

ललितपुर, पाटनढोका, यलमायाकेन्द्रमा आज बसेको गुठीको साधारण सभाले संवत् २०६५ सालका पुरस्कार जगदम्बा-श्री तथा मदन पुरस्कारबारे निर्णय गरेको छ । सोअनुसार–

(क) "लोकसङ्गीत र बाजाको सङ्कलन, अनुसन्धान तथा लेखनका माध्यमले गत तीन दशकदेखि अनवरत रूपमा कार्यरत रही नेपाली भाषाको श्रीवृद्धिमा योगदान गरिरहेबापत" २०६५ सालको पुरस्कार 'जगदम्बा-श्री' श्री रामशरण दर्नाललाई प्रदान गर्ने

र

(ख) 'एक हातको ताली' नामक निबन्धसङ्ग्रहका लागि संवत् २०६५ सालको 'मदन पुरस्कार' श्री युवराज नयाँघरेलाई प्रदान गर्ने ।

ललितपुर, २०६६/६/५/२ । आज पाटनढोकास्थित रातो बङ्गला स्कूलको कमलमणि थियटर हलमा २०६५ सालको पुरस्कार वितरण समारोह सम्पन्न भयो ।

*(बाँकी पृष्ठ ६९९ मा)*

## मे.ज. कृष्णशमशेरको व्रतबन्ध र विवाह

चन्द्रशमशेर महाराजका (त्यसबेलाका) कान्छा छोरा कृष्णशमशेरको जन्म १९५२ सालमा भएको हो । उनको व्रतबन्ध उनी दस वर्ष नपुग्दै १९६१ सालमा माघभन्दा अघि भएको अनुमान गर्नुपर्छ । किनभने माघमा उनकी माता, महारानी लोकभक्तकुमारीको मृत्यु भएको थियो । यस व्रतबन्धको खर्च- लगत राखिएको एक मुठा कागज मपुपुमा छ । ह-३८५ नम्बरको त्यो अभिलेख, नमड्याएको नेपाली कागजमा छ– १० इन्ची (२४.३ सेन्टिमिटर) चौडा र २ मिटर २१ सेन्टिमिटर (७ फिट ३ इन्ची) लामो । त्यसमा अत्यन्त विस्तृत रूपमा खर्चको हिसाब लेखिएको भए पनि तिथिमिति केही दिइएको छैन । त्यसै हुँदा नै माथि त्यो अनुमान गर्नुपरेको, आमाको मृत्युमितिले समय मिलाउनु परेको हो । त्यो पनि यसमा अन्त्यमा भएको एउटा प्रविष्टिबाट । त्यहाँ उल्लेख छ, ती श्री ३ बडामहारानीले आफ्ना छोराको व्रतबन्धको खुसीयालीमा आफ्ना घरमा रहेका द्वारे, धाई, सुसारे, भान्छेबाहुनी इत्यादिलाई बाँड्न भनी ३२९८ रुपियाँ ‘बाहुली दाखिल’ लिएको खर्च जनाइएको छ । आमाले हर्कबढाइँ गरी आफ्ना कामदारलाई रकम बाँडेबाहेक किशोर जर्नेलले समेत आफ्ना मान्छेहरूलाई त्यस्तै गरी रकम बाँडेको देखाइएको छ, “व्रतबन्ध गर्नेका हजुर दाषील वापत् १७५६ रुपियाँ” । ती ‘आफ्ना मान्छे’मा चाहिँ पर्दा रहेछन्– धाई, धाईका छोरा, ददा, भित्रका सुसारे, बैठके, भान्छे, छाते, धोबी, सुजीकार इत्यादि । धाईले १ हजार पाउँदा ददाले ८० रुपियाँ मात्र पाएका छन्, सुसारेहरूले ४० र भान्छेले ३५ पाएका देखिन्छन् ।

यस व्रतबन्धमा जम्माजम्मी खर्च रु. ९२६६/६९ भएको देखाइएको छ । तर त्यसमा दुई दिनको मात्र खर्च सामेल छ, अघिल्लो दिन ‘पूर्वाङ्ग’ को र ‘व्रतबन्धका दिन’को । खर्चमा धार्मिक क्रियातर्फ चोखीमाटी खन्ने र बिस्कुन सुकाउनेसम्मको क्रियाका खर्च सामेल छन् भने लौकिक क्रियातर्फ पन्चेबाजा बजाउन आउने र

*(बाँकी पृष्ठ ७२७ मा)*

# बिम्बको यथार्थ कथाबाट

*- अच्युतरमण अधिकारी*

नेपाली साहित्यको इतिहासमा साहित्यिक पत्रपत्रिका ज्यादै कम मात्र छन् । इतिहासको आदर्श आफ्नै ठाउँमा छ तर व्यवहारको यथार्थ सत्य अर्कै किसिमले सञ्चालित भएर देखिएको छ । समय-समयमा पत्रिकाहरू निस्किए पनि केही समयमै, छोटो अवधिमै ती हराए, गए । साहित्यिक पत्रिकामा पनि कथाप्रधान पत्रिका एकादुई होलान् तर लामो समयसम्म टिकी उभिएर अस्तित्व बनाएका पत्रिका त्यति देखिएनन् । बिम्बले बिम्बको आकाङ्क्षा राखे पनि स्तम्भनिर्माण गर्न त्यति सकेन । हो नि ! केवल छ अङ्कमा अस्ताएको बिम्ब उच्च स्तम्भमा खडा भएर उभिन त्यति सकेन पनि । कथाप्रधान, मनोवैज्ञानिक कथाको उद्देश्यमा आबद्ध कथामूलक पत्रिका भए पनि त्यति मात्रामा आफ्नो गतिमा सञ्चालित हुन सो सकेन पनि । मनोविज्ञानमा पनि रतिरागात्मक मनोवैज्ञानिक कथालाई महत्त्व दिन चाहने यसभित्रका कथाले जुन रूप र जस्तो यथार्थ देखाए, कथासर्जक जे-जस्ता देखा परे तिनको सही समीक्षात्मक इतिहास प्रस्तुत गर्न यो लेखनी अघि सरेको छ । हेरौँ यथार्थ कथा कस्तो छ ।

सर्वप्रथम कथाकार दौलतविक्रम विष्टका कथामाथि नै समीक्षा गरिएको छ । यो कथा 'धाँजाभित्र'[१] शीर्षकमा आबद्ध छ । प्रेमको स्मृति छ यसमा । बिन्दु नाउँकी प्रेमिकाको सम्झना र त्यो यथार्थ यसले प्रस्तुत गरेको छ । उसको सम्झना तर तटस्थ भई सम्झने गरेको यथार्थमा आबद्ध छ यो कथा । सन्तान हुन नसक्ने, त्यस्तो वीर्य नभएको भनी प्रमाणित छ तर छोरो जन्मिएको यथार्थ छ। यसो हुनुका पछाडि रहस्य के छ त ? यहाँ सम्झिएकी, प्रस्तुत भएकी बिन्दु मात्र होइन कुनै पनि महिलाको गन्ध एकप्रकारको रागात्मक अनि विलासात्मक हुन्छ । तर यसमा त छोरो जन्मिएकै यथार्थ छ । त्यो यथार्थ के हो त वास्तवमा ? यस कथामा प्रस्तुत विषयवस्तु, भेद-विभेद र रागपूर्ण मनोविज्ञानले एकप्रकारको विगाग नै सिर्जना गरेको

---

*१. बिम्ब १ पृष्ठ १८-२७*

मनोवैज्ञानिक यथार्थ यस कथाबाटै देखिएको छ । कथाकै दृश्यमा प्रबल कथा प्रस्तुत गर्ने कथालेखक विष्टले प्रस्तुत गरेको सामाजिक यथार्थभित्रको आशङ्कापूर्ण मनोविज्ञान निकै गहन छ र सामाजिक सत्यमा आबद्ध पनि त्यतिकै छ। कर्तव्य अगाडि छ तर विश्वासमा दुर्गन्ध छ, किन ?

अर्का कथाकार शङ्कर कोइरालाका दुई कथा 'बिम्ब'[२] भित्र छन्। रतिरागात्मक प्रकृतिको यथार्थ र मानिसभित्रको सही मानसिकताका केही प्रमाण हेर्ने आधारमा 'भाङको सुरमा' पनि एक सफल कथा देखिएको छ । भाङ खाएपछिको यथार्थमा र मानिसको रागात्मक परितृप्तिको चाहनामा देखिएको सही यथार्थ अजेश र पुष्पाका बीचको यौनक्रिडाबाट देखिन्छ । अजेश नायक, पुष्पा नायिका हुन् यस कथाका। अजेशको चाहना भए पनि पुष्पाले बेवास्ता गरेको यथार्थ पनि यसै कथामा छ। तर अजेशको त्यस प्रवृत्तिलाई प्रयोग गर्ने परिपाटी फरक छ। आफ्नू घर नभएका डेरा सरी-सरी बस्ने समस्या भएका तिनले डेरा बदल्ने प्रक्रिया पनि यथावत् रूपमा व्यहोर्नै परेको थियो। खास गरी भाङको सुरमा चडेको रङ्गको रागले व्याप्त भएकी पुष्पा अजेशलाई नाङ्गो पारीपारी रागतृप्तिमा संलग्न हुन्छे तर उसलाई पटक्कै थाहा हुँदैन। एक त रागात्मक प्रवृत्तिले ग्रस्त जीवन यसै मस्त हुन्छ त्यसमाथि भाङ खाएपछि झनै चलाइ नसक्नै हुन्छ। सम्बादात्मक शैलीको मनोरञ्जक यस कपो भाङको मानसिकताका साथै कामुकता र नारी अहम्लाई समेत राम्ररी प्रस्ट पारिदिएको छ ।

'भेट नभएकी युवती'मा पुरानो प्रेमकथाको मनोविज्ञान छ । सुकीर्तिको मनोविज्ञान प्रेममा आकर्षित थियो । बालकलाई देखाई युवकहरूसँग बिहेको अभिनय गर्ने सुकीर्ति उदाहरण थिई। सुकीर्तिलाई देखेपछि 'म' पात्र अथवा नायक आत्मकथालाई सम्झँदै जान्छ। पहिले प्रेम गरेको यथार्थमा उसको मनोविज्ञान सञ्चालित हुँदै जान्छ । वास्तवमा पुरानु प्रेम, नयाँ आकर्षण, बिहे भइसकेको प्रेमिकालाई प्रेममा फसाउने कुरा यी मनोवैज्ञानिक यथार्थ हुन्। पुरानु प्रेम, नयाँ

---

*२. बिम्ब १ पृष्ठ ३४-४०, बिम्ब ४ पृष्ठ ८-१५*

चाहना, प्रेमिका सुकीर्ति, गृहिणी राधा यी दुईका बीचको खेल यस कथामा छ। छोरी स्वर्णाका उमेरकी सुकीर्ति र 'म' पात्रका बीचको प्रेमालाप अनौठो खालको छ र रमाइलो पनि छ। प्रेमप्रसङ्गको कुरा छुट्टै भयो तर नियम उल्लङ्घन गरी पाँच-छ महिनासम्म जेल पर्ने प्रसङ्ग अर्कै छ। अरू जेल यातानाका समयमा श्रीमती र प्रेमिका सँगै भेट्न पुग्नु अर्को आश्चर्य हो। जेलको जीवनपछि त आफ्नै सन्तानका सामु मुख देखाउन कष्ट पर्नु आदि कुराले गर्दा नायकलाई जुन किसिमको पीडा अनुभूति हुन्छ त्यो निकै महत्त्वपूर्ण कुरा हो। प्रेमप्रसङ्गको मनोविज्ञानदेखि त्यसका विविध यथार्थसम्मको सत्य यस कथामा छ।

अर्का कथाकार पोषण पाण्डेका पनि दुई कथा नै छन् यसमा[३]। 'देवताको उपहार' अङ्क २ को कथा हो। यसमा हीरामान ज्यापूको जीवन, मर्म, विशेष गरी आर्थिक पीडा आदिले परिपूर्ण यस जीवनको वास्तविकता यहाँ प्रस्तुत छ। श्रीमतीको चाहना कस्तो छ, उसप्रतिको आकर्षण तर आर्थिक पीडासहितको आकर्षणात्मक पीडा आदि कुरा यसमा प्रस्तुत छन्। घरमा पुगेको हीरामानले श्रीमतीलाई एकप्रकारकी सम्पन्न देख्नु, त्यसको रहस्य नबुझ्नुजस्ता कुराका पछाडि पुरुषको मानसिकता कस्तो छ त ? यो पनि प्रश्नकै विषय बनेको छ। पहिले अभाव, यातना श्रीमतीको चाहनासहितको घुर्की-पीडा, पछि उसको तात्कालिकको चाहानाविहीन परिपूर्णता तर पुरुषको आकर्षणविहीन आशंका आदि कुरा यस कथामा छन्। शिष्ट पीडासहितको अभावग्रस्त गम्भीर मानसिकता पोषण पाण्डेका कथाबाट देख्न पाइन्छ। स्थिति, मनस्थिति, अभाव, अपूर्णता आदिको पीडासहितको सामाजिक यथार्थ यिनका कथाले देखाएको पाइन्छ। निम्नमध्यम वर्गीय अरू त्यसभन्दा पनि तल पुगेका सामाजिक पात्रको आर्थिक तथा मनोवेज्ञानिक यथार्थ प्रस्तुत गर्छन् उनी।

बिम्ब अङ्क ५ को 'बेसुरमा' भन्ने कथामा सुर नपाई काम गर्दै जाँदाको मानसिकता देखिन्छ। त्यसप्रकारको मानसिकतासँग सम्बन्धित यसमा शीला र गायत्री दुई बालिका विशेष रूपमा प्रस्तुत

---

*३. बिम्ब २ पृष्ठ १-६, बिम्ब ५ पृष्ठ २२-२६*

भएका छन् । ती बालिका मन्दिरको परिसरमा घुम्छन्, हेर्छन् । विशेष गरी त्यहाँ मन्दिरमा भएका सिंहका पाखुरा देखेर शीला तर्क-वितर्क गर्छे । दुवै बालिका त्यहाँ घुमी, हेरी हँस्सीमजाक पनि गर्दछन् । पूजारी आएर आरती गर्छ, घुम्छ- ऊ आफ्नै सुरमा हुन्छ । आरती लिएर घुमेको पूजारी आफ्नै सुरमा हुन्छ, गायत्री उसको धोतीको पछिल्लो फुर्को तान्छे । बिस्तार-बिस्तार धोती खुस्कन्छ र पूजारी नाङ्गो हुन्छ । पूजारीको अवस्था देखेर शीला खित्का छाडीछाडी हाँस्छे । गायत्रीचाहिँ ओठ बन्द गरी बस्छे हाँस्न सक्तिन । पछि पूजारी उनीहरू उभिएका ठाउँमा आएपछि शीला सिँढीहरूबाट ओर्लिन्छे तर गायत्री छट्पटिँदै लड्छे । मुखबाट आएको सेतो फिँज घाँटीसम्म पुगेको हुन्छ । यो रहस्य मृत्यु कि मूर्छा त ? प्रश्नकै रूपमा प्रश्न खडा छ । वास्तवमा बालमनोविज्ञानमा आधारित यो कथा ग्लानिपूर्ण मनोवैज्ञानिक यथार्थसँग सम्बन्धित छ । आफ्नै त्रुटिले पैदा गरेको ग्लानि निकै गहन हुन्छ । यो सत्य छ ।

कथाकार विजय मल्लको 'मात्तिएकी गाई'[४] तात्कालिक राणाशासनको वरपर त्यसै परिवेश र अवस्थाको सौखिन मनोविज्ञानसँग सम्बन्धित कथा हो । सामन्ती प्रथाको प्रज्वल अनुहार प्रदर्शन गर्ने यसकथामा गाई उपहार पाएको साहूलाई उपहारका रूपमा गाई प्राप्त हुनु यसै पनि उसै पनि धेरै गह्रुँगो कुरा हो । प्राप्त भयो, पाल्नु पऱ्यो तर ठाउँ पनि छैन, ज्ञान पनि छैन । सहरभित्र गाईबस्तु पाल्ने ठाउँ हुँदैन यो स्वाभाविक कुरा हो र भुक्तभोगी यथार्थ पनि हुँदै हो । तर त्यो गाई सहरमै राख्ने आफ्नै घरका माथिल्लो तलामा चढाई बरन्डामा बाँधेर राख्ने यथार्थका पछाडि तात्कालिक सामन्ती शासनप्रति भक्ति प्रदर्शन गर्नु पनि त हो नि ! मालिकबाट प्राप्त त्यस गाईलाई आफ्नै रेखदेख वरिपरि राखी पालनतालन गर्दै राखे पनि गाई त एक दिन मऱ्यो नै । पछि उसैको बाच्छीलाई पालीताली गर्दै हुर्काएर उसले गोरु खोजेका बेला साँढे लगाई ब्याउने बनाएको प्रसङ्गसम्म कथामा चर्चित छ । वास्तवमा यस कथाको त्यसबखतको सामन्ती प्रथा, चाकरीपूर्ण मनोविज्ञान, गौ प्राणीको

---

*४. बिम्ब ४ पृष्ठ १-८*

शिष्ट मनोविज्ञानदेखि उत्तेजित मनोविज्ञानसम्म यसमा मिलाएर प्रस्तुत गरेका छन् ।

अर्का कथाकार रमेश विकलको पनि एकै मात्र कथा *बिम्ब*[५] मा प्रकाशित छ । 'भग्न ओडारको आवाज' नाउँको यो कथा एउटा गजबको मनोविज्ञानमा आधारित छ । समयचेतनाको गतिमा विकसित भएको प्रगतिको यथार्थको प्रदर्शक यो कथा नारीजागरण उसको जागिरे जीवनसँग सम्बन्धित छ । नारीले जागिर खाएको यथार्थ त छँदै छ, भयको साङ्केतिक चेतना त्यत्तिकै प्रबल छ । नारी कतै जाँदा, आउन ढिलो गर्दा पुरुष मनोवैज्ञानिक बेदनाबाट कसरी र कति पीडित हुन्छ, कति छटपटिन्छ त्यो यथार्थ पनि यसमा छ । वास्तवमा त्यसबखतका अन्तर्राष्ट्रिय ऐतिहासिक घटनादेखि लिएर यहाँका विभिन्न ठाउँका बाढी-पैरो इत्यादिका समस्यासम्मको उल्लेख कथामा पाइन्छ । वेदना पुरुषको छ, उत्साह र नयाँ चाहना नारीको बढी छ । प्रगति र आजका यथार्थको सङ्केत नारीबाट बढी देखिएको छ यसमा । समयचेतना र नारीजागरण स्वाभाविक हो तर पुरुषको सङ्कालु मनोविज्ञानले भने नारीजागरणको मानसिकतामा पनि प्रहार गर्न सक्तछ । तर कथाकार विकलको यो कथा त्यस मानेमा कमजोर मनस्थितिमा छैन । तर नारीजागरण र चेतनाका हिसाबले यो कथा ऐतिहासिक महत्त्वको देखिन्छ । नारीजागरण पुरुषका लागि शङ्कालु विषय भएको छ ।

अर्का कथाकार कुमार नेपालका तीन कथा *बिम्ब*[६] मा प्रकाशित छन् । कथाकार नेपालले 'चुपी:अचानो: जीवन' कथाका माध्यमबाट असमानताप्रति गम्भीर पाराले विद्रोह व्यक्त गरेका छन् । आफूले गरे ठीक अरूले गरे बेठीक भन्ने भावनाको विरोध देखाएका छन् कथाकारले । गौना गरेर ल्याएकी ब्यौली, त्यसको लोग्ने बेहुलो, गाडावालहरूसहितको विवाह जीवनको एक दृश्य, खास गरी तराईन जीवनको दृश्य यसमा प्रस्तुत छ । 'वुरचोदी', मातरचोद' जस्ता शब्दको प्रयोगमा हुने, देखिने अश्लीलता यस कथाबाट देखिएको

---

५. *बिम्ब ५ पृष्ठ १-१०*

६. *बिम्ब १ पृष्ठ १२-१८, बिम्ब २ पृष्ठ ४५-४७, बिम्ब ४ पृष्ठ १६-१९*

छ। तराईको अश्लीलतालाई, सामान्य जीवन र निम्नस्तरीय जीवनलाई यस कथामा प्रस्तुत गरिएको छ। कथाले तराईको जीवनले भोग्ने जाडो र गर्मीको समस्यालाई पनि देखाएको छ। त्यहाँको यथार्थ केही दृश्यमा धेरथोर मनोविज्ञानमा प्रस्तुत छ। यसमा तराईको जीवनको, विशेष गरी महिलाको शोषित जीवन, यौन चाहना, भलाद्मी मानिस भेट्ता उससँग यौनक्रीडा गर्ने उत्साह आदि कुरालाई प्रस्तुत छ। त्यो जीवन, त्यहाँको यथार्थ र त्यहाँका विविध पक्षका मनोविज्ञानलाई पनि राम्ररी प्रस्तुत गर्ने प्रयास कथाकारले गरेका छन्। यौनचेतना शोषित चरित्रको यथार्थका साथै वास्तविक कामुक रागात्मक मनोविज्ञानमा कथा निकै सफल छ।

अर्को कथा 'भैगो' भन्ने पनि छ। माया, प्रेम, समर्पण इत्यादिसँग सम्बन्धित यो कथा अर्को मार्मिक खालको छ। मायाका लागि अर्धाङ्गिनीमा समर्पित कृष्णको गहन, गम्भीर मायाको यथार्थ छ। त्यस्तै सन्तुमायाको रोग पीडित यथार्थ पनि छ। कृष्णले अत्यन्त माया गरेको कुरालाई पनि सन्तुमायालाई पटक्कै मन पर्दैन। त्यो मायाको समर्पण उसलाई वाकवाकीलाग्दो हुन्छ। त्यस्तो उपेक्षात्मक र घृणात्मक मनोविज्ञान यस कथामा देखिन्छ। वास्तवमा बिहे भएको, छोराछोरी भएको र कता हो कता परिवर्तन भएको लोग्नेले माया गर्‍यो कि अभिनय गर्‍यो त ? यो पनि पीडित र उपेक्षित नारीको मनोविज्ञानले शङ्का गर्ने विषय नै भएको छ। यसमा पीडित नारी, उसको आन्तरिक व्यथा अनि पुरुषप्रतिको आशङ्का आफ्नू वास्तविक आन्तरिक व्यथा व्यक्त भएको पाइन्छ। यहाँ त रागात्मक र पीडित मनोविज्ञानका बीचको यथार्थ वास्तविकता गम्भीर रूपमा व्यक्त भएको मानिन्छ। यहाँ सहज अभिनय, आशङ्कापूर्ण चेतना र भित्री तहमा रहेको नारी मानसिकता व्यक्त भएको पाइन्छ। सन्तुमायाको आत्मपीडाले मायालाई पनि उपेक्षा गरेको यथार्थ यसमा छ।

अर्को 'बाँच्नु एक विधि' कथाचाहिँ बिहे नभएर त्यसै बसेका मानिसलाई लिएर कुरा काट्नेको कुरौटेहरूको मनोवैज्ञानिक यथार्थदेखि लिएर अविवाहित युवतीले खेप्नुपरेको मनोवैज्ञानिक पीडासँग सम्बन्धित छ। खास गरी विवाहको निर्णय नहुनुलाई लिएर कुरा काट्नेहरूको मानसिकतामा आधारित छ यो कथा। अरु वैवाहिक निर्णयमा

नपुगेका युवतीको मानसिकता त्यतिकै प्रबल छ । कुरौटेलाई लक्ष्य गरेर 'म' पात्रले जस्तो भावना व्यक्त गरेको पाइन्छ त्यो मानसिक निर्णय सही हो र सत्य हो । यहाँ उसलाई सम्झेर स्कूलदेखिका साथीलाई लक्ष्य गरेर म पात्रले व्यक्त गरेको मानसिकता निकै प्रभावशाली, मार्मिक र प्रेरक पनि छ। आफूमा विश्वास गर्ने साथी श्रीमती र केटाकेटी भएको छ। त्यसले चाहेर पनि आफूलाई स्वीकार गर्दैन, अनुशासन उल्लङ्घन गर्दैन। यता आफूलाई सुश्री भएबापत लागेको त्यो आक्षेप 'म' पात्रलाई धेरै असह्य छ। युवतीहरूमा विशेष गरी अविवाहित युवतीमा हुने त्यो यथार्थ यस कथाले राम्ररी व्यक्त गरेको छ। एउटी अविवाहित युवतीले आरोप, पीडा, त्यो छटपटसहितको मानसिकतालाई खपेर कसरी जीवन निर्वाह गरिरहेकी हुन्छे त्यो यथार्थ राम्ररी व्यक्त छ यसमा ।

यसमा कथाकारका रूपमा देखिएका मोहन कोइरालाको 'अनिद्रित आँखा'[७] मा उपेक्षित र पीडित नारीको यथार्थ कथा र व्यथा व्यक्त भएको छ । वास्तवमा यस कथामा एकातिर पतिवियोगको विछोड, पीडा र एकल्काटे जीवन र त्यो व्यथा त छँदै छ भने अर्कातिर साह्रै अमिल्दो अवस्थामा पुगेको पतिसँग भेट गर्न चाहने छोरीको लालसाले आमा झन् अत्यन्त पीडित छ र छक्क पनि परेकी छ। विभिन्न प्रश्न गरेर सानीले उसकी त्यो पीडित आमालाई एकातिर छक्क पारेकी छ भने अर्कातिर पतिवियोगको ईर्ष्या अझ जागा गराइदिएकी छ । बाबुसँग भेट्ने उत्साहको बालमनोविज्ञान र पतिपीडित मनोदशाको नारीमनोविज्ञान यस कथामा छ। पतिपीडित रुक्मिनी भन्दा छोरीको चासो र पीडा छुट्टै । अझ विविध प्रश्नले उसलाई विशेष सतर्क बनाएको छ । अदालतमा पुग्नुभन्दा पहिल्यै घरमै छोरीका विविध प्रश्न र चासो पीडित रुक्मिनी पारपाचुकेपछि श्रीमान् आफू बसेका घरमै आएको देखी अझ पीडित हुन्छे। वास्तवमा त्यो पीडा, त्यो छटपटी, त्या मानसिक दशा इत्यादिको प्रदर्शनका साथ कथाको टुङ्गो लाग्छ । नारीबेदनाको छटपटी छ, छोरीबाट छुट्ने डर पनि छ र माइतीले पूर्व ज्वाइँलाई स्वागत गरेर राखेकामा ईर्ष्या पनि केही मात्रामा देखिन्छ ।

*७. बिम्ब ६ पृष्ठ १-१०*

कवि हरिभक्त कटुवालको 'क्यान्भासभरिको रात'[८] यस कथामा शोभा र वसन्त नायिका र नायक देखिएका छन् । वसन्तले पालेकी एघार वर्षीया बालिका विस्तार जवान बन्दै जान्छे । वसन्तको रागात्मक आकर्षण झन्झन् बढेर जान्छ । प्रत्येक तिहारमा टीका लगाइदिने गर्थी । यसोदासँग बिहे भएर आनन्दले जीवन चलेको अवस्थाको वसन्त आफूले बहिनीका रूपमा पालेकी शोभाप्रति नराम्रोसँग फस्छ, बिग्रन्छ पनि । पहिले आठ वर्षमा आमाबाट वञ्चित भएकी एघार वर्षमा बाबुबाट टुहुरीएकी शोभा वसन्तकहाँ पालिएकी तर वसन्त चारित्रिक त्रुटिबाट नराम्रोसँग फस्छ । उन्नाइस वर्षमा प्रवेश गरेर पनि बिहे गर्न नमान्ने उसमा दृढ निश्चय र विश्वास थियो । छरछिमेकीले कुरा काटे, शङ्का गरे पनि आरोप नै गाए पनि सहेर बसेकै थिए । वसन्त बहकिन्थ्यो तर यसोदा शङ्का गर्दिनथी । वसन्त विभिन्न कल्पनाका साथ विश्वविद्यालयमा दाखिल हुन आएकी शोभालाई छाड्नुपर्दा पनि पीडित भएको यथार्थ छ यसमा । उन्नाइस वर्षे शोभालाई ६ वर्षे बालिका सम्झी अँगाल्छ, बत्ती निभ्छ, ऊ फस्छ । आफूले गरेको कुकर्मबाट पीडित भई आफूलाई मरिसकेको देख्ने वसन्त र शोभाको धैर्यपूर्ण व्यवहारमा कति फरक छ ! यस मनोविज्ञानमा रहस्य के छ त ?

ईश्वर वल्लभद्वारा लेखिएको कथा 'बिहान हुनपर्छ'[९] पनि *बिम्ब*को पहिलो अङ्कमै प्रकाशित छ । लडाइँको कथा हो यो । लडाइँभन्दा खास लडाइँ होइन तर त्यहाँ प्रयोग भएका सैनिकको रागात्मक यथार्थमा आधारित मनस्थिति यसमा देखाइएको छ । त्यहाँ सन्तोष नाउँको सैनिक प्रयोगमा छ । त्यो सैनिक जुन किसिमले प्रयुक्त छ त्यसमा मनोविज्ञान अनौठो किसिमको छ । सन्तोषको मनोविज्ञान जति छ र जसरी प्रयुक्त छ उसलाई फसाउने महिलाको चाहना त्यत्तिकै छ । सैनिकले हमला गरेका ठाउँमा तिनै सैनिकद्वारा बलात्कृत महिला र तिनको यथार्थ अवस्था, दु:ख, पीडा, वेदना, व्यथा देखिने सम्भावना हुन्छ । यस कथामा भने महिलाद्वारा प्रेरित आकाङ्क्षा र चाहना पूर्ण

---

*८. बिम्ब १ पृष्ठ १-६*

*९. बिम्ब १ पृष्ठ ७-११*

भएको चाहिँ देखाइएको छ । यसप्रकारको नौलो अवस्था, स्वभाव र प्रकृति यस कथामा व्यक्त भएको पाइन्छ। सूर्योदय हुन लागेको दृश्य प्रस्तुत छ, त्यसमा प्रयुक्त दृश्यमा भित्रका रेसा-रेसा र रेखाहरू काव्यात्मक पाराले नै वर्णन गर्दै प्रस्तुत गरेको यथार्थ छ । काव्यिक चेतनाको मूल प्रवाहको रङ्ग प्रस्तुत गर्ने कवि ईश्वरवल्लभ कथाभित्र पनि शैलीगत प्रस्तुतिमा काव्यिक रङ्गको तरङ्ग प्रस्तुत गर्दछन् । हमलाकारी र बलात्कारीको मनोविज्ञानभन्दा यसमा नारी मनोविज्ञान छ ।

कथाकार परशु प्रधानको 'अप्रत्याशित'[१०] नाउँको यो कथा पतिपीडित गरिब नारीको वास्तविक मानसिकतासँग सम्बन्धित कथा हो र यथार्थ अवस्था वास्तविक रूपमा प्रदर्शित पनि भएको छ । यसमा देउरानी जेठानी दुई नारी प्रमुख पात्रका रूपमा छन्। जेठानी लोग्ने मरेकी विधवा छ भने देउरानी ज्यादै रक्सीसेवक लोग्नेकी पीडित स्वास्नीका रूपमा प्रस्तुत छ । उनीहरूको मानसिकता त्यही यथार्थभित्र त्यहीँ छ, मानसिक छटपटीका वेदनाबाट जस्तो त्रास पैदा हुन्छ त्यो यथार्थ पनि यसमा छ । सपनामा जेठानीले नाङ्गिएर आफूतिर आएर आफूलाई थिचेको त्यो यथार्थ कथाकारले प्रस्तुत गरेका छन् । त्यस अवस्थाको त्यो आक्रमण बोक्सीको भएको मानसिकता यसमा देखिन्छ। यो स्वाभाविक नेपाली महिलामा पाइने मानसिकता हो । अर्को अनौठो कुरा त के पनि छ भने देउरानी जेठानी नै मिलेर बिहे गर्ने कुरा गर्छन् त्यो मानसिक प्रकृति नेपाली नारीअनुसारको छैन। यसमा देउरानीचाहिँको अर्को मानसिकता कस्तो पनि छ भने विलासी रक्स्याहा लोग्ने आएका दिनमा चुरा, पोते फुकाली-फोरी आफूलाई विधवा घोषणा गर्छे। यो अनौठो मनोविज्ञान र मनोविकृति यस कथामा छ । वास्तवमा साह्रै मार्मिक तरिकाले नेपाली जीवनको निम्नस्तरीय यथार्थभित्रको सहज पीडा व्यक्त गरिएको पाइन्छ ।

कथाकार प्रेमा शाहको कथा 'कुनै रङ्ग'[११] अर्को अनौठो खालको मनोविज्ञानसँग सम्बन्धित छ। जीवन, विश्वास, रङ्ग-तरङ्ग र

*१०. बिम्ब ३ पृष्ठ २०-२४*

*११. बिम्ब ३ पृष्ठ ४१-४७*

उत्साहका शिखरमा घुमेको प्रेम शाहको जीवनमय लेखन रागात्मक प्रवृत्तिको हुन्छ । रागात्मकता र त्यो यथार्थ घुमीफिरी हेर्दा प्रस्तुति, प्रयोग र प्रवृत्ति फरक देखिन्छ । अलग रागात्मक प्रस्तुति भएका यिनका कथामा बिम्बचित्रमै फरक छ । प्रकृतिका पदार्थहरूमा, फूलका रङ्गहरूमा भएका यथार्थहरूलाई टिपेर लोलाउँदै, टोलाउँदै र सुम्सुम्याउँदै रङ्गचेतना प्रस्तुत गरेको पाइन्छ । त्यो मानसिक वास्तविकतामा भर्सक त प्राकृतिक प्रतीकका आधारमा आफूभित्रको चाहना र चेतना व्यक्त गर्नु प्रेमा शाहका कथाको मुख्य लक्षण हो । विश्वासलाई नै अपाहिज देख्ने मानसिकता भएकी ओमीजस्ता पात्रहरूको प्रयोगबाट कथाकारले कतै कथामार्फत् आफ्नै मानसिकता व्यक्त गरेको जस्तो लाग्दछ । कथा र इतिहास बोकेर नाच्ने र बाँच्ने मान्छेको यथार्थ प्रतीकात्मक व्यङ्ग्यसमेत दिने कथाकारले आफू र आज अनि समय र यथार्थ आदिमा राम्रो व्यङ्ग्य पनि पाइन्छ । रङ्गको तरङ्ग, विलासी चेतनाको उत्प्रेरणा, साङ्केतिक सत्यको समाज, स्पर्श आदर्शको मर्म गहन तरिकाले व्यक्त गरेको पाइयो ।

नेपाली साहित्यमा प्रख्यात अस्तित्व बनाएकी कथाकार पारिजातले पनि एक कथामार्फत् *बिम्ब*को 'बिम्ब' प्रदर्शनमा केही योगदान दिएकी छन् । कथाको नाउँ 'प्रतीक'[१२] हो । 'प्रतीक' प्रतीकमै होला तर सर्वप्रथम गरिबीको गुञ्जन छ यस कथामा । गरिबी छ, रतिरागात्मक मानसिकता छ, त्यो पीडा छ त्यहाँ । अर्थको पीडा, जीवनका बखडा, तिरस्कृत मानसिकताको आत्मयातनापूर्ण अवस्था आदि यसबाट व्यक्त गरेको पाइन्छ । हल्लिएको मानसिकता गरिबीमा छ, सङ्ग्लिएको चेतना कतै छैन । यस प्रकारको जीवन यस कथामा पाइन्छ । निनुराल्फाले 'रामेशलाई'[१३] शीर्षक दिई लेखेको यस कथामा त्यसबखतको राल्फाली मनोविज्ञान प्रस्तुत भएको छ । कथा छ, केही कतै चेतना छ अनि घृणा पनि छ । प्रकृतिका पाटा-पाटामा केही देख्ने, परम्पराभन्दा फरक गरेर हेर्ने र देख्ने यथार्थ यसमा छ । राग छ, रङ्ग छ, चेतना छ, समर्पण छ तर सही सन्तुलन त्यति

---

*१२. बिम्ब अङ्क २ पृष्ठ ११-१४*

*१३. बिम्ब २ पृष्ठ ३४-३८*

छैन । राग-रङ्ग, गरिबी र असन्तुलित छटपटी जताबाट जसरी हेरेर मूल्याङ्कन गरे पनि राल्फाली रागमा दाग त छैन तर खास अनुराग छैन ।

कथाकार शैलेन्द्र साकारको 'उदाहरण'[१४] यो कथा मानसिकता, मनोव्यथा, आकर्षण, विकर्षण, मानिसभित्रको जातीय विभाजन आदिको एक चेतनासँग सम्बन्धित छ । यसमा साह्रै असुहाउँदो कुरा मन्दिरभित्रको छ । पुजारी बाख्रालाई त्यहीँ मैथुन गर्ने, फेरि बोको भनी काट्नेजस्ता दानवीय यथार्थमा देखिन्छ । जातीय विभाजनको विरोध-भाव व्यक्त गर्नु स्वाभाविक छ । यसमा त मारिसकेर पनि युवतीको लासमा रतिरागात्मक, घृणात्मक विलाश गर्ने युवक, मूर्ति बेचेर पनि श्रीमतीलाई साडी-लुगा किनिदिने र आफू रक्सी खाने सार्कीजस्ता पात्र र त्यो यथार्थ पनि व्यक्त भएको पाइन्छ । स्वास्नीले खटाएर रक्सी दिँदा बोलाएको अभिनय गर्ने लोग्नेको चरित्र पनि छ यसमा । बिदाइको धुन बजाउने, त्यसलाई बजाउन अभ्यास गराउने यथार्थ पनि छन् यस कथामा । साथसाथै भाग्ने वा गाउँ छाड्ने चेतना पनि छ । यतिसम्म कि बहादुरी देखाउने अभिनयमा कैदी भएको सामाजिक सत्य पनि प्रस्तुत गरेका छन् । वास्तवमा कथाकार साकारले समाजभित्रका चेतना, संवेदना, विद्रोह, रागात्मक अनुभूति र विकृति आदि कुरालाई सकेसम्म प्रभावकारी ढङ्गले व्यक्त गरेको पाइन्छ । समाजको यथार्थ चित्र र विशेष गरी ग्रामीण यथार्थमा सफलता राम्रो देखिन्छ ।

अर्का कथाकार कृष्णप्रसाद उपाध्यायको 'चिरिएको आकाश'[१५] यो कथा दाम्पत्य जीवन, त्यसभित्रका यथार्थ र विशेष कमजोरी आदिसँग सम्बन्धित छ। सामाजिक जीवनका यथार्थमा देखिने वैवाहिक जीवन, त्यसमा भएको सुरुसुरुका हर्षका प्रसङ्ग सन्तुष्टिका सुरुसुरुको उन्मादको यथार्थ यसमा छन् । सुरुसुरुमा माइतीले पनि छोरीको भाग्यमानी जीवनबारे प्रशंसा गरे, गौरव पनि त्यतिकै गरे । पछिपछि बिस्तार घर बिथोलिँदै गयो । श्रीमान् त विल्कुलै उल्टोपाल्टो हुँदै

---

*१४. बिम्ब २ पृष्ठ ४०-४४*

*१५. बिम्ब ३ पृष्ठ १५-१९*

गयो। पहिली श्रीमतीलाई देखी सहेन पनि। बिस्तारबिस्तार अर्को बिहे भयो, सौता भित्र्याइयो पनि । श्रीमान् अचानक भाँडिनु, सौता ल्याइनुजस्ता कुरामा पनि खास कारण देखिएको छैन। पछि अचानक श्रीमान् र सौताको मृत्युमा पनि कुनै खास कारण छैन । तैपनि कारावासमा जाने सजाय पाएकी जेठी स्वास्नीले मृत्यु-दण्ड नै पाएको भए अझ बेस हुने थियो भन्ने आसय व्यक्त गरेकाले पति र सौताकी हत्यारा उही हो भन्ने त केही खुल्छ तर राम्ररी प्रष्ट हुँदैन। कथा सरल, सहज र प्रभावकारी छ तर वास्तविक यथार्थ प्रस्ट पार्ने कुरामा केही फितलो पनि भइदिएको छ। यसको शीर्षकको स्तरचाहिँ गहन छ ।

प्रकाश 'प्रेमी'द्वारा लेखिएको 'चमेलीको फूलः एउटा स्मृत-गन्ध'[१६] नामक यो कथा मनोवैज्ञानिक यथार्थसँग सम्बन्धित छ । यसमा 'म' पात्र पहिलो प्रेमीका रूपमा छ। प्रेम गर्न चाहेको तर प्रेम त पाएर पनि नपाएको देखिन्छ। एकातिर यस्तो मनोवैज्ञानिक यथार्थ छ भने अर्कातिर विवाहित पति छ, उसबाट जन्मेकी बालिका छोरी छ। प्रेमले भरिपूर्ण जीवन छ तर पनि पुरानु प्रेमीको सम्झना उसमा छ । बगैँचामा चमेलीका फूलहरू छन्, तिनको सुगन्धपूर्ण बासना छ। त्यो सुगन्ध आइरहन्छ। ऊ चमेलीका फूलहरूलाई र छोरीको चमेली नाउँलाई पटक्कै मन पराउन्न । एक दिन फूलै काटेर फ्याँकिदिने प्रयास गर्छे तर लोग्नेको मायापूर्ण आलिङ्गनले विमोहित हुन्छे । त्यसपछि उसमा पछुतो लाग्छ तर यसमा कथा नै सकिन्छ । वास्तवमा नारी अहम्, प्रेमको चाहनामा पनि देखिने अभिमान, ईर्ष्या इत्यादिबाट नारीमनोविज्ञानलाई राम्ररी प्रस्तुत गरिएको छ । नारी मनोविज्ञानका वास्तविकतालाई छामेर अनौठो तरिकाले यथार्थ मनोविज्ञान प्रस्तुत गर्ने प्रकाश 'प्रेमी' निकै सफल मनोवैज्ञानिक प्रस्तोताका रूपमा पनि देखिएका छन् । समाजभित्रका मनोविज्ञानमा यो प्रस्तुति पनि निकै सफल छ र नवीन पनि छ ।

एक समयका, एक खास इतिहासका प्रसिद्ध कवि मदन रेग्मी पनि बिम्ब ५मा एक कथाकारका रूपमा देखिएका छन्। यहाँ कथा

---

*१६. बिम्ब ५ पृष्ठ ११-२१*

छ, व्यङ्ग्य छ अनि विद्रोह छ। 'आजको खण्डित'[१७] नाउँ भएका यस कथाको शीर्षक नै अर्कै खालको हीनत्वपूर्ण व्यङ्गित निराशायुक्त छ। तात्कालिक वर्तमानको यथार्थलाई अँगालेर, पखालेर र पछारेर गहन व्यङ्ग्यका साथ प्रस्तुत गरिएको छ। अन्धकारपूर्ण त्यो समय, त्यो यथार्थ र त्यसबखतको कालो संसारलाई, त्यहाँ वरपर राखिएको, घेरिएको पर्खाललाई लक्ष्य गरेर लेखिएको यस कथामा कथाकार निकै गहन व्यङ्ग्यसाथ प्रयोग गर्दछन्। त्यस पर्खालमाथि भएको प्रहार, त्यस प्रहारको विफलता इत्यादि कुरालाई प्रतीकात्मक पाराले प्रयोग गर्दै यस कथाबाट एउटा कालो इतिहासलाई सङ्केत गर्दै छन्। यो तत्काल हो, त्यहाँ विद्रोह छ, क्रान्ति छ तर प्रयासहीन छ। कथाको यथार्थ यही हो तर कथाभित्रको व्यङ्ग्यात्मकता र प्रतीकात्मकता भने कवितात्मक पाराको छ। मदन रेग्मीको गहनता कथामा पनि काव्यात्मकता हो। यस प्रकारले देखिएका कथाकार मदन रेग्मी वास्तवमा यहाँ कथाकार देखिए पनि प्रबल कवि हुन्।

अर्का कथाकार ध्रुवकुमार देउजाद्वारा लेखिएको 'मित बा'[१८] भन्ने कथा कामुक, रतिरागात्मक यथार्थको अरु यथार्थलाई देखाउन सफल छ। विवाहिता नारी, उसका दुलाहासँगको सहवास, आफ्नू बढेको पेट, पेटभित्र भएका बालकको छटपटी इत्यादि कुरा आफ्ना ठाउँमा छन्, ती सहज प्रकृति र अनुशासनको स्वीकृतिभित्रै छन्। त्यस परिवेशभित्र आफ्नू जीवनको यथार्थ भोगिरहेकी 'म' पात्र उसकी आमा र मीतबाका बीचको नाङ्गो यथार्थलाई सम्झिन्छे। त्यतिमात्र होइन उसले कलेज जान छाडेर मीतबालाई भेटी आफ्नी आमा र उसका बीचको अनैतिक सम्बन्धको रहस्य खोल्न लाग्दा उल्टै बलात्कृत भई बेरिएको सत्य पनि यस कथाले देखाइदिएको छ। वास्तवमा दुलाहाले पेट छाम्दापछिको यथार्थ त्यति प्रष्ट छैन पनि। त्यो पेट आफ्नै दुलाहाको हो अथवा मीतबाको हो वा कसैको हो प्रष्ट भएको छैन पनि। सामाजिक विकृतिपूर्ण अत्यन्त आततायी रागात्मक मनोविज्ञान र त्यस्ता कुकृत्य यस कथाबाट प्रष्ट देखाइदिएका छन्।

---

*१७. बिम्ब ५ पृष्ठ ३६-४१*

*१८. बिम्ब ६ पृष्ठ ११-१४*

सामाजिक विकृतिमध्येको चरंविकृतिपूर्ण मनोविज्ञान यस कथामा देखिन्छ ।

कथाकार पुष्कर लोहनीका 'एक थुप्रो क्याक्टस'[१९], 'बलात्कार हिजो र आज'[२०], 'थेग्रिएको रगत'[२१] यति तीन कथा यसमा प्रकाशित छन् पहिलो कथामा अमर, कुमुद, घरमा भेटिएकी गीता, छिमेकी युवती इत्यादि पात्रसहितको त्यो विलासपूर्ण प्रकृति र परिस्थिति देखाइएको छ। विलासी जीवनका अनेक रङ्ग-राग देखिन्छन्। क्याक्टस माध्यम हो विलासजीवन हो लेखकले त्यसरी प्रस्तुत गरे। 'बलात्कार हिजो र आज'मा नारीहरूको प्रकृति, अवस्था आदिका साथसाथै अनेक किसिमका रहस्यपूर्ण ढङ्गका षड्यन्त्रबाट नारीमाथि बलात्कार हुने परम्पराको यथार्थलाई सङ्केत गर्दै सामाजिक विकृतिलाई प्रस्तुत गरे। रहस्यका रेखाहरू, त्यहाँभित्रका यथार्थहरू, नारीहरूलाई मौकाछोपी अपहरण गर्नेहरूको रहस्यपूर्ण वास्तविकता यसमा प्रस्तुत छन्। तेस्रो कथा 'थेग्रिएको रगत'ले पनि रतिरागात्मक मनोविज्ञानमा आधारित छ । अविवाहित युवती, उसका रागात्मक चाहना, समय-समयका युवकहरूसँगको खेल आदि कुरा यसमा छन् । युवतीको रागात्मक चाहनाअनुसारको अप्राप्ति र त्यसबाट विकृत भएको मानसिकतासमेतलाई समेटेर यसमा प्रस्तुत गरेका छन् । पुष्करले मानवीय विलासपूर्ण विकृतिसहितको आन्तरिक र रतिरागात्मक प्रवृत्तिलाई विशेष दृष्टि दिएर आफ्ना कथामा प्रस्तुत गरेका छन् ।

बद्रीचन्द्र खनालका पाँचोटा कथा यसमा प्रकाशित छन्। 'मुनि संसदमा मोजमजा'[२२], 'छोरी ताक्ने बाबु'[२३], 'घोडो ताक्ने महिला'[२४], 'पोथीको जिद्दीमा'[२५] र 'गुरुचेला एउटै स्वास्नीमा'[२६] यति पाँच कथा

---

*१९. बिम्ब १ पृष्ठ ४१-५१*
*२०. बिम्ब ३ पृष्ठ ३३-४०*
*२१. बिम्ब ४ पृष्ठ ३१-३८*
*२२. बिम्ब २ पृष्ठ ४९-५२*
*२३. बिम्ब ३ पृष्ठ ४९-५५*
*२४. बिम्ब ४ पृष्ठ ३९-४५*
*२५. बिम्ब ५ पृष्ठ ४२-४५*
*२६. बिम्ब ६ पृष्ठ ४०-४७*

*बिम्ब*मा प्रकाशित देखिए । यसमा पहिलो कथाकै चर्चा गरौँ न ! 'मुनि संसद्...' यस कथामा प्रकृतिको दृश्य पनि, खास चित्र पनि देखाउँदै हिमाली क्षेत्रको यान उडान देखाएका छन् । विद्याधर, चित्रकेतु र विष्णुदत्तहरू विमानमा बसेर कैलाश पुगेको त्यो रमाइलो दृश्य यस कथामा देखाएका छन् । शिव, पार्वती, एकर्काको हेराहेर, मुस्कान, त्यहाँको खेल र त्यसबेलाको रतिरागात्मक दृश्य यसमा प्रस्तुत छ । यस प्रस्तुतिमा कथा पौराणिक भए पनि त्यस विषयलाई केवल स्पर्श गरेको मात्र हो । वास्तवमा त्यसबेला शिवपार्वतीको त्यो खेल हेरेर रमाइलो मान्ने चित्रकेतुलाई 'क्षत्री भएस्' भनी पार्वतीले श्राप दिएको यथार्थ पनि छ यहाँ । खेलमा भएको मनोवैज्ञानिक आनन्द अर्कै कुरा हो त्यसमा अरूको दृष्टि पर्दा लजाउनु अर्कै हो । यस्तो अबस्थामा शिवपार्वती पनि सामान्य मानिससरह नै देखिन्छन् । अनुशासन, संयम, सत्य र संयोगभित्रका यथार्थबाट हेर्दा यसले पौराणिककालिक त्रुटिलाई पनि प्रष्टसँग देखाइएको छ ।

'छोरी ताक्ने बाबु' कथाबाट त सामाजिक विकृतिमा देखिने अति विकृतिलाई प्रष्टसँग देखाइएको छ । अति विकृति मात्र होइन सीमाहीन रागात्मकता मुक्त पुरुषत्वलाई यस कथाले देखाएको छ । कामुक, रतिरागात्मक प्रवृत्तिले मानिसलाई कतिसम्म निम्नकोटीमा पुऱ्याउँछ त्यो यथार्थ निकै प्रतीकात्मक ढङ्गले प्रस्तुत भएको पाइन्छ । जीवन, त्यसको कर्तव्य, अनुशासनआचरणबाट वञ्चित यौनपिपासुलाई लक्ष्य गरेर लेखिएको यस कथामा आचरण र अनुशासनहीनताप्रतिको राम्रो उदाहरण यसमार्फत पेस गरेका छन् । त्यस्तै 'घोडा ताक्ने महिला' कथाका माध्यमबाट समाजलाई अझै अर्कै खालको गहन व्यङ्ग्य गरिएको छ । *देवीभागवत* छैटौँ स्कन्धको सत्रौँ र अठारौँ अध्यायमा आधारित यो यौनकथा नै विष्णु र लक्ष्मीसँग सम्बन्धित छ । अतृप्त यौन चेतना, जीवनका मनोवैज्ञानिक चाहना इत्यादि कुरा भनेका, जीवनका व्यथा बोकेका नारीको यथार्थलाई मनोवैज्ञानिक रूपले प्रस्तुत गरिएको छ यसमा । पात्र विष्णु र लक्ष्मी छन्, यथार्थ पौराणिक विषयमा आधारित छ तर रागात्मकताको चरम् अवस्थाको सङ्केत छ यस कथामा ।

'पोथीको जिद्दीमा' भन्ने कथा *श्रीमद्भगवत* तृतीय स्कन्धको चौथो अध्यायमा आधारित छ । दितीले ज्यादै ढिपी गरेर नारीभित्रको कामुकता देखाएपछि कश्यप ऋषिको धैर्य टुट्यो अनि ऋतुदान गरे । सन्ध्याकालको ऋतुदानमा विवश कश्यपबाट त्यसबखत राक्षसको उत्पत्ति भएको हो भन्ने पौराणिक यथार्थलाई लिएर नारीको आग्रह, ढिपी र त्यस सन्ध्याकालिक कर्मलाई वर्तमानमा राखेर एकप्रकारको प्रवल व्यङ्ग्य दिएका छन् । त्यस्तै 'गुरुचेला एउटै स्वास्नीमा'बाट *श्रीमद्भगवत* प्रथम स्कन्धको एघारौँ र नवस्कन्धको चौधौँ अध्यायको सत्यकथा राखी मानवीय विकृतिमाथि व्यङ्ग्य गरेका छन् । वृहस्पतिकी पत्नी ताराले चन्द्रमालाई पति मानी बसेकी थिइन् । तारा घर नफर्केकाले पीडित वृहस्पतिले फर्काउने प्रयास गरे, गए-सकेनन् । आखिर लडाइँ भयो, ठूलो क्षति भयो । बाबुको आदेश पाएपछि चन्द्रमाले तारालाई फिर्ता नै गरे । तारा फर्किए पनि सन्तान जन्म्यो । पछि लामो सहवासपछि सन्तान चन्द्रमाले नै लगे, तारामात्र वृहस्पतिकी अर्धाङ्गिनी रहेको यथार्थ यसमा छ । यसमा सामाजिकभन्दा पौराणिक सत्य बढी भएको सही हो । मनोवैज्ञानिक पिन्चे विकृतिको व्यङ्ग्यका लागि यो प्रस्तुत भएको हुन सक्छ ।

अर्का कथाकार ब.आ. कनकद्वीपद्वारा लेखिएका तीन कथा यस पत्रिकामा प्रकाशित छन् । ती कथा 'रिँगटा लाग्छ'[२७], 'मानिस जिउँछ'[२८] र 'हिउँ पग्लन्छ'[२९] हुन् । सर्वप्रथम यीमध्येको पहिलो कथा 'रिँगटा लाग्छ'को चर्चा गरौँ । शङ्कर यस कथाको नायक हो । उसको जीवन ज्यादै पीडाग्रस्त छ । आर्थिक पीडाले ज्यादै छटपटिएको मानसिकता छ यसमा । आफू मास्टर हुँदा फिट नभएको, कतै घुम्न गएको यथार्थ घुम्छ यस छटपटीमा । काठमाडौँ सहर घुम्न पनि उसले कुनै उपाय देख्तैन । भनेका बेला चिया-चमेना लिने आशा पनि नगरे हुन्छ उसले । त्यहाँ कसैले टेर्दैन, गन्दैन । ऊ आफूलाई कतै गएको, पहाडतिर पुगेको, कुल्ली कामको आनन्दमा घुमेको हाँसेको

---

*२७. बिम्ब २ पृष्ठ ६-१०*
*२८. बिम्ब ४ पृष्ठ २०-२३*
*२९. बिम्ब ६ पृष्ठ २८-३२*

जीवनमा देख्छ तर शङ्कर भनेको त उस्ताको उस्तै छ, रित्तै छ । वास्तवमा गरिबीका पीडाको मनोवैज्ञानिक छटपटीमा कथा सञ्चालित छ । जीवन, जीवनको सञ्चालन, कर्म, व्यवसाय, त्यसबाट प्राप्त स्वार्थसञ्चयको संयम इत्यादिका साथ-साथ छटपटिने मनोवैज्ञानिक यथार्थ यस कथाबाट देखा परेको पाइन्छ । गरिबीले ग्रस्त पीडक मनोविज्ञान यसको माध्यम बनेको छ ।

'मानिस जिउँछ' चाहिँ त्यस्तै नै निराशाग्रस्त मानसिकतामा आधारित छ। तर यसमा निराशा हो वा विलास त्यति प्रष्ट पनि हुन सकेको छैन र देखिएन पनि । यसको परिस्थिति, प्रस्तुति शैली नै अस्पष्ट देखिन्छ । 'हिउँ पग्लन्छ'मा चाहिँ शङ्करै नायक छ । गरिबीद्वारा पीडित पुरुषको जीवनको कथा, गरिबीको व्यथा छ यसमा । शङ्करले बिहे गरेकी वा फकाएर ल्याएकी रञ्जु अर्कैसँग जान्छे । त्यसै पीडालाई भोगेको शङ्कर यसमा देखिन्छ । ज्यादै वासनामयी रञ्जु एकातिर वासना पीडित छ भने अर्कातिर गरिबीको पीडा पनि त्यत्तिकै छ। सिंहेले स्वास्नी भगायो, लग्यो अनि त उसलाई पनि शत्रु ठान्यो शङ्करले । यो पुरुष मनोविज्ञानको स्वाभाविक प्रक्रिया हो । महोत्तरीमा बसेका बखत हात लगाएकी रञ्जना गई, बानेश्वरकी नीलुलाई पनि ल्याउन आँटै गरेको थिएन । साधारण प्रकृतिकी नीलु साधारण प्रकृतिकै हो, मनले मानेकी तर तल्लो जातकी भनी ल्याएको हुन्न । राति हिँड्दै र घुम्दै जाँदा कसैसँग जिस्किएर बसेकी नीलुलाई रञ्जु देख्छ । घरबारसमेत बन्धकमा परेको ऊ आर्थिक कमजोर पनि हो । त्यो यथार्थसहितको यो कथा गरिबी पीडित र नारी पीडित यथार्थमा आधारित छ ।

मञ्जुल राल्फा त्यसबखतका राल्फा समूहका एक व्यक्ति हुन् मेघराज मञ्जुल नाउँका यी व्यक्ति त्यसबखत राल्फा समूहमा थिए । यिनका दुई कथा 'घ्योम मोलिङ'[३०] र 'रोङदा'[३१] हुन् । चाहे 'घ्योम मोलिङ' होस् वा 'रोङदा' यी दुवैले तात्कालिक विकृत यथार्थ भित्रको बेमेललाई लक्ष्य गरेर अरू विद्रोहका साथ आफूभित्रको चेतनालाई

---

*३०. बिम्ब ३ पृष्ठ १-१४*

*३१. बिम्ब ६ पृष्ठ ३३-३९*

अघि सार्दै सामाजिक चेतनामा गम्भीरतासाथ फरक चेतना दिने प्रयास भएको थियो । राल्फा अभियानका एक सशक्त व्यक्तित्व मञ्जुल पनि हुन् र यिनले पनि त्यसै आधारमा आफूभित्रको विद्रोही अभियान सञ्चालन गरेका थिए । विकृति, विसङ्गति, बेमेल, बेचैन, विद्रोह आदिका साथसाथै मानसिक तनाव, अतृप्ति आदि कुरालाई यिनले पनि सकेसम्म सफलतासाथ व्यक्त गरी एक समयको एक इतिहासलाई सजीव राखेका छन् । विद्रोहको रेखा छ, भाषा-भाव, शैली, शिल्प कतै सहजता छैन र प्रष्ट देख्नु पनि असम्भवै भएको छ । जे भए पनि त्यसबखतको त्यो राल्फा समूहको अस्पष्ट अनि गम्भीर अभियानका केही नमुना मञ्जुल राल्फाका यी कथा पनि भएका छन् । जे आयो त्यही शब्द, जे लाग्यो त्यही अर्थ मञ्जुलका कथाले पनि त्यही त देखाए ।

बेटी बज्राचार्यको 'धरहराको आँखा'[३२]मा अनमेल विवाह, अमिल्दो जीवन, नारीको अस्तव्यस्तता आदि कुरा छन् । म पात्र आफ्नी श्रीमतीलाई हेरेर कार्यालयका महिला युवतीहरूलाई पनि समाउँछ, भ्रम हुन्छ । त्यहाँ पनि के-के गर्ने र उनीहरूलाई बलात्कार गर्ने इच्छा पनि जागृत हुन्छ उसमा । वास्तवमा यस कथामा अमिल्दो जीवन छ । नारीको ढिपी, रूप अवस्था आदिको अनाकर्षण तर जीवनका विवशता इत्यादि कुरा यसमा छन् । आकर्षक यौवन तर एकान्तको हेराइका बीचमा देखिएको हत्यारा मानसिकताको सङ्केत पनि यस कथाले गरेको छ । त्यतिमात्र होइन दोस्रो विवाह, नयाँ केटी, गाउँ र सहरियाको सम्बन्ध, अमिल्दो जीवनमित्र पनि सबैको तारिफ आदि कुरा यस कथामा छन् । भाषा त्यति शुद्ध छैन तर पनि बेदना, प्रवाह, छटपटी र मानसिकताले सामाजिक सङ्केत लेखिकादेखि नै प्रष्ट देखिँदै जान्छ । सामाजिक विकृतिमा पाइने वितृष्णा बेटीदेवी शाक्यका कथाले पनि व्यक्त गरेको पाइयो । जीवन छ, सरलता छ तर हल्कापन केही मात्रामा छ तर जीवन, दर्द र यथार्थ प्रष्टै भएर आएको छ । समाजको एक बिम्ब छ, पक्ष छ र सन्दर्भ छ यही सत्य यथार्थ हो ।

---

*३२. बिम्ब ६ पृष्ठ २१-२४*

'भेट'[३३] अमृता प्रीतमको यो कथा मानवीय चेतना, बेदना, चाहना र स्वार्थका जिज्ञासा भित्रका छटपटीभित्रको यथार्थसँग सम्बन्धित छ । जीवन, जीवनको सटिक सूक्ष्मतम् व्याख्या छ । जीवनभित्रका बेदनाको छटपटीयुक्त यसमा बेदनालाई साम्य गर्ने उपायको चाहना आदि कुरा छन् । कथाकारले कथाभित्र व्यक्त गरेका भावनामा अरूका तुलनामा फरक मानसिकता पनि देखाएको पाइयो । मानसिक चाहनाअनुसारको इच्छित व्यक्ति, विशेष गरी त्यस महिलामा प्रेमिका मात्रै बन्ने क्षमता छ कि पछि आमा बन्छे, बन्दिन होला ? यस्तो खालको प्रश्न पनि यस कथामा छ । मानसिकता, छटपटी, चाहना इत्यादिका साथसाथ विविध व्यावहारिक यथार्थभित्र रहेका अनेकौं कुरामा प्रश्न खडा हुनु आश्चर्यजनक कुरा होइन तर पनि सबैतिरबाट सबै चेतनाबाट यस्तो प्रश्न अगाडि खडा भएको त्यति देखिएको पनि छैन । कथाले भावनाको एक पक्षलाई समेट्ने गरेको हुन्छ विशेष गरी तर अमृता प्रीतमको यसमा त्यही मानसिकता, त्यही चाहना र त्यस्तै यथार्थमा पनि फरकफरक अवस्था र शंका अनि प्रश्न खडा भएको देखिन्छ । आधार, चेतना, मानसिक चाहना, छटपटी र तर्क-वितर्कको यो कथा त्यसै मानसिकतामा नवीनताका साथ देखिएको छ ।

यासुनारी कवावाताद्वारा लेखिएको के.पी. शैलद्वारा नेपालीमा अनुदित 'चन्द्र बिम्ब'[३४] भन्ने कथा त्यसबखतको जापानी यथार्थ जीवनको आन्तरिक पक्षलाई समेटेर लेखिएको छ । बेदना, छटपटी, आन्तरिक मामला क्योकोका ज्यादा छन् । यसले त क्योकोका सुरुसुरुका रागात्मक तिर्सना, उसको, उसको पहिलो श्रीमान्को जीवनको यथार्थ आदिलाई राम्ररी प्रस्तुत गरेको छ । सौन्दर्यानुभूतिको रङ्ग र तरङ्गलाई जे-जसरी जुन रूपमा प्रस्तुत गरेको छ त्यो रमाइलो मोहक छ र केही मात्रामा दर्दनाक पनि छ । क्योको भन्ने नाम भएकी नायिका क्षयरोगले ग्रस्त भएकी पहिलो पति मरेपछि दोस्रोसँग बिहे गर्छे । दोस्रो श्रीमान्सँग हनिमुनमा जाँदा पहिले-पहिले श्रीमान्ले ठट्टा

*३३. बिम्ब ६ पृष्ठ १५-२०*

*३४. बिम्ब ५ पृष्ठ २७-३५*

गर्दा पनि दुःख मान्छे– रिसाउँछे। सानु नानीजस्तै छ्यौ भन्दा त दुःखी भएर ऊ रोएकै पनि हो। यसका पछाडि उसभित्रको अपरितृप्त अहम्ग्रस्त मनोविज्ञान छ। क्योकोका जीवनको यथार्थ, पहिलो र दोस्रा पतिका बीचको जीवनसन्दर्भ यस कथामा छ। पात्र जीवन, बेलाबखतका कुराकानी, एकर्कालाई हेर्दै, कोर्दै र बताउँदै गर्दाको यो ऐतिहासिक यथार्थ पनि सङ्केत गर्ने कथा वास्तवमा प्रेमविनोदको त्यो यथार्थमा आधारित छ। निकै सफल ढङ्गको अनुवादन कला यसमा देखिन्छ।

श्रीधर लोहनीद्वारा अनुदित पाँच कथामध्ये 'रेलको भिडन्त'[३५] पहिलो अङ्कमा प्रकाशित छ। टोमासमान भन्ने जर्मनी लेखकद्वारा लेखिएको यस कथामा रेलको यात्रा गर्ने यात्रु, त्यहाँको यथार्थ, यात्राका बखतको पीडा, रेलको दुर्घटना भएपछि यात्रीमा आइपर्ने यथार्थ दुर्दशा, शङ्कट आदि कुरा व्यक्त गरिएका छन्। यसमा त कुकुरलाई अति प्यारो गर्ने मानिसले देखाएको कुकुरप्रियताको मनोविज्ञान पनि त्यतिकै प्रभावकारी छ। अनुवादको कला पनि राम्रो छ। 'आम्दानी र खर्च'[३६] भन्ने डी.एच.लरेन्सको कथा पनि लोहनीद्वारा नै अनुदित हो। घर, व्यवहार आम्दानीको यथार्थ, आयस्तरको कमी, बालबालिकालाई पर्ने पीडा इत्यादि कुरा यस कथामा छन्। वास्तवमा 'पोल' नाउँका बालकलाई उसकी आमाले 'भाग्य छैन' भनेकाले कति पीडा भयो त्यो मनोवैज्ञानिक यथार्थ यस कथाबाट प्रष्ट हुन्छ। यस कथामा बालचासो, बालकको मानसिक चेतना, उसका चाहना इत्यादि कुरा प्रष्ट पारिएको छ। वरपरको परिस्थितिलाई हेरेर गर्ने कर्म, बालकको आत्मविश्वास आदि जस्ता कुरा पनि यसमा प्रष्टसँग देखाइएको छ। कथाले मानवीय जीवन, आर्थिक पीडा, जीवनका अन्य वास्तविकताका साथै बालमनोविज्ञानको यथार्थ पनि प्रस्तुत गरेको छ। अनुवादकको अनुवादनकलाले पनि अरू प्रष्टता देखाएको छ।

आर.यु.ज्वाइसद्वारा लेखिएको 'पञ्जा'[३७] कथाका अनुवादक पनि श्रीधर लोहनी नै हुन्। जेम्स ज्युन नाउँको एक प्रख्यात चोरको कथा

---

*३५. बिम्ब १ पृष्ठ २८-३३*

*३६. बिम्ब २ पृष्ठ १५-३३*

*३७. बिम्ब ३ पृष्ठ २५-३२*

यसमा छ । त्यो चोर बेलाबखत चोर्ने, जेल पर्ने, उम्कने यस्तै गर्दथ्यो । वास्तवमा उसको बेलाबखतका चोरीसम्बन्धी अपराधी कर्मले उसलाई प्रख्यात बनाएको थियो । उसको अपराधी मनोविज्ञान पनि सामान्यजस्तै भइसकेको थियो । ब्राम्पटनको सानो सहरको एक भलाद्मी बाँडाका रूपमा फस्टाउनुभन्दा अघि पनि चोरी गरेकै थियो । एक गोप्य शोषक (ब्लाकमेलर) को दिनानुदिन बढेको मागले गर्दा उसलाई (जेम्सड्युनलाई) आपत्तितिर धकेल्दै लगेको थियो । डयुनको व्यापार चम्केकाले गोप्य शोषक अझ बढी माग गर्दै गयो । यस्तै गर्दै गयो । पछि-पछि धनको कमी हुँदै गएपछि जुवाहरू पनि खेल्दै गयो । बिस्तार-बिस्तार सर्वनाशै भयो । अनि पछि फेरि पनि चोरीमै लागेको यथार्थ यस कथाले देखाएको छ । उसले स्टुडका घरमा चोरी गर्दा घरधनीले देख्यो । घरधनीलाई नै हत्या गरी सफल भएर फर्के पनि हातका पञ्जा बाटामा खसे, पक्राउ पऱ्यो । उसले गरेका अपराधको वास्तविकता त्यसरी खुलेको यथार्थ यसमा छ । सामाजिक अपराधको वास्तविकता कहिल्यै छिप्तैन भन्ने सत्यलाई देखाउने यो कथा प्रभावकारी छ । अनुवाद निकै सफल छ ।

'सलाईको काँटी'[३८] भन्ने शार्ललुइ फिलिपको कथा पनि श्रीधर लोहनीद्वारा नै अनुवाद भएको हो । मानवीय मनोविज्ञानभित्रको एक अनौठो मनोवैज्ञानिक यथार्थ यसमा छ । वास्तवमा जुरिच पुगेका अँरिलेटँले खानापिना सकेपछि आराम गर्ने सन्दर्भमा चुरोट झिक्यो, सल्कायो तर सलाईको काँटी त तल फ्याँकिदियो । फ्याँकिसेपछि शङ्का लाग्यो सलाईका काँटीले जलाउन सक्छ भन्ने । त्यस आशङ्काले तलतिर हेर्दा खाटमुनिबाट हात फिँजाई सलाईको काँटी निभाएको देख्यो हात प्रष्ट देखिएन । त्यसपछि उसमा जुन श.का बढ्यो त्यो निकै पीडादायक पनि त थियो नि ! यहाँ त्यसपछिको मनोवैज्ञानिक आशङ्का कस्तो भयो होला ? प्रश्न चिह्न छ । 'त्यो··· ?'[३९] जे रोम ब्रन्ड फिल्डद्वारा लेखिएको यस कथाका अनुवादक पनि श्रीधर लोहनी नै हुन् । योचाहिँ यात्रामनोविज्ञानमा आधारित छ । यात्राका समयमा,

---

*३८. बिम्ब ४ पृष्ठ २४-२९*

*३९. बिम्ब ६ पृष्ठ २५-२७*

विशेष गरी रेल्वेयात्रामा नारीहरूसँगको भेटघाट र मिलन, उनीहरूको अहंग्रस्त बेवास्ता र बिदाइको समयको मुस्कान कस्तो हुन्छ र कति समान र भिन्न हुन्छ त्यो यथार्थ यस कथामा पाइन्छ । वास्तवमा कथा जति प्रभावशाली छ अनुवादको प्रभाव त्यत्तिकै छ। लोहनीजीले अनुवाद गरेका पाँच कथा *बिम्ब*मा पढियो । अनुवादमा मौलिक स्वाभाविकता पाइयो । यो अनुवादनको ठूलो सफलता हो ।

समष्टिमा भन्दा कथाप्रधान *बिम्ब* पत्रिकाले दिएको योगदान निकै मूल्यवान् छ । पत्रिका सानो आकारमा छ । *बिम्ब*ले *बिम्ब* प्रस्तुत गरेको छ तर मनोविज्ञानबाट कोट्याउने प्रयास गरेको छ । कथामा लघु कथा नै छन् तर सामाजिक वास्तविकता मनोविज्ञानले नै ज्यादा केलाएको छ । मनोविज्ञानले एकातिर केलाउँछ अर्कातिर राम्ररी खेलाउँछ। नेपाली समाजबाट मात्र होइन विदेशी आकाशबाट र विविध भाषाबाट अनुवाद गरी गरीकन प्रस्तुत गर्नु निकै मूल्यवान कुरा हो। यसमा सम्पादक पुष्कर लोहनीले गरेको योगदान मूल्यान् छ तर केवल अङ्क छ मात्र प्रकाशनमा आएकाले नेपाली साहित्यिक पत्रिकाको छोटो परम्परा यसमा पनि कायमै छ। कथाप्रधान यसमा मनोविज्ञानलाई विशेष चासो राखेर लेखिएका कथा छन् । मनोविज्ञानभित्रबाट पनि विकृति र स्वीकृति दुवैलाई केलाइएको छ । त्यो यथार्थ मानवमा छ, मानवबाट मानवलाई केलाइएको छ । रागात्मक रञ्जनभित्र व्यङ्ग्यात्मक व्यञ्जन हुन्छ त्यसलाई हेरी, कोरी, कोट्याई देखाउने प्रयास 'बिम्ब' प्रकाशनले गरेको थियो । रागात्मकता मुख्य हो तर अन्य विविध प्रकारका मनोविज्ञानलाई यसले प्रस्तुत गरेको छ। आधारम्भ समाज हो, चेतना समाजिक हो तर पनि *बिम्ब*ले मनोवैज्ञानिक आधार कसरी प्रस्तुत गऱ्यो समष्टिमा हेर्दा यस्तै यस्ता मुख्य कुराहरू देखिएका छन् ।

भाङका सुरमा हुने व्यवहार, प्रेमक्रीडा, रागात्मक पक्ष-विपक्ष, सामाजिक जीवनमा आइपर्ने आर्थिक तथा मनोवैज्ञानिक पीडा आदि छन्। अरु हेर्दै जाँदा सुरै नपाई काम गर्ने मानसिकता, बालबालिकाको मनोविज्ञान र तिनको छटपटी अनि चकचकीलाई पनि प्रस्तुत गरिएको छ । नारी जागरण, जागिरे जीवन, पुरुषको शङ्कालु मनोविज्ञान, तराईको जीवनको वास्तविकता, त्यहाँको यथार्थ मनोविज्ञान यहाँ

प्रस्तुत भएको पाइन्छ । मायाकै उपेक्षा गर्ने उपेक्षात्मक र घृणात्मक मनोविज्ञान पनि प्रस्तुत छ । ईर्ष्या, छटपटी छ, बालचासो, बालपीडा, सम्बन्धविच्छेदपछि ससुरालीमा आएको ज्वाइँ आदि यहाँ प्रस्तुत भएको पाइन्छ । रहस्यात्मक मनोविज्ञान, सैनिक हमलाभित्रका बलात्कृत महिलाको मनोविज्ञान, रक्सीपीडित जीवन, त्यो मानसिकता, नारीभित्रको पीडित यथार्थ र विद्रोह यी कथाहरूमा पाइन्छ । सामाजिक बिकृतिपूर्ण अत्यन्त आततायी रागात्मक मनोविज्ञान, त्यसका विविध पक्ष, पौराणिकदेखि सामाजिकसम्मको जीवनका रागात्मक यथार्थका साथै मनोवैज्ञनिक पिन्चे विकृति अनि नारीभित्र हुने र भएको रागात्मक यथार्थ आदि कुराहरू यहाँ प्रस्तुत छन् । कथा परम्पराको इतिहासमा सामाजिक मनोविज्ञानको यथार्थलाई प्रस्तुत गर्ने बिम्ब थोरै प्रकाशन भए पनि मूल्यवान् छ । कथा प्रधानता विशेष मूल्य हो ।

# मानव जीवन र साहित्य

– *आचार्य श्रीखेमराजकेशवशरण*

सर्जनशील मानवजातिले आफ्नो विकासको क्रममा विविधतापूर्ण प्रतिभाद्वारा जन्माएका बहुआयामिक फाँट भएका विषयवस्तुहरूमा साहित्यले आफ्नै अति विशिष्ट स्थान प्राप्त गरेको छ । साहित्यले मानवीय भावना एवं कल्पनाहरूको मूल भावभूमिमा आधारित रहेर मानवीय जीवनविकासका चरणबद्ध क्रमहरूलाई समेटेको हुन्छ । आफ्नो उदयकालको परिवेश, परिस्थिति, मूल्य एवं मान्यताहरूको सँगालो बोकेर युगविशेषका आस्था र भावनाहरूको परिचयसँगै उत्थान र प्रगतिका शाश्वत सन्देशहरूलाई पनि मुखरित गर्दछ । त्यसैले साहित्यलाई 'मानवसमाजको दर्पण'का रूपमा मान्यता प्रदान गरिएको पाइन्छ ।

यस सन्दर्भका साहित्य शब्दले बुझाउने वाच्य अर्थ अथवा यस शब्दको प्रतिपाद्य विषय के हो ? भन्ने कुरा स्पष्ट रूपले सम्झनु आवश्यक छ । साहित्य शब्दले वाङ्मय अथवा अङ्ग्रेजीको Literature लाई बुझाउने गरेको पाइन्छ। परन्तु साहित्य शब्दको व्युत्पत्तिलाई केलाउँदै जाँदा यसले विविध विधाहरूमा फैलिएको काव्यात्मक रचनाहरूको सँगालोलाई बुझाउने कुरा स्पष्ट हुन्छ। 'साहित्यो र्भाव: साहित्यम्' यस्तो व्युत्पत्तिद्वारा शब्द र अर्थसहित भएर विशेष अर्थ प्रतीति गराउने हुनाले 'शब्दार्थौ सहितौ काव्यम्' भनेर काव्यको लक्षण गरिएको छ । काव्यसम्बन्धी लक्षणग्रन्थकारहरूमध्ये जसको लक्षण पढे पनि सारांशमा काव्यरचनामा शब्द र अर्थ दुवैको विशिष्ट योगदान अपरिहार्य रहेको तथ्य स्पष्ट हुन्छ। त्यसैले साहित्य शब्दले 'समग्र वाङ्मय' भन्ने विस्तृत अर्थ छोडेर बिस्तारै काव्यात्मक रचनालाई नै आफ्नो प्रतिपाद्य अर्थ बनाउँदै लगेको स्पष्ट प्रतीत हुन्छ । साहित्यदर्पणकार विश्वनाथले 'वाक्यं रसात्मकं काव्यम्' भनेर आत्माको रूपमा रसलाई नै व्यक्त गर्ने रहेको विशिष्ट वाक्यलाई काव्य मानेका छन् ।

पण्डितराज जगन्नाथ- 'रमणीयार्थप्रतिपादक: शब्द: काव्यम्' भनेर रमणीय अर्थलाई अभिव्यक्त गर्ने शब्द नै काव्य हो भन्दछन् ।

यी सबै भनाइहरूभित्र काव्यमा शब्द र अर्थ दुवैले मिलेर विशिष्ट अर्थको प्रतीति गराउँदै महत्त्वपूर्ण योगदान पुऱ्याउँछन् भन्ने आशय निहित छ। यही तिनको 'सहितता' हुन्छ जसबाट साहित्यको निर्माण हुन्छ। साहित्यको क्षेत्रमा काव्यका विधाहरूको विशद विवेचना गरिएका लक्षणग्रन्थहरू धेरै छन्। तिनका लेखक, आचार्यहरू पनि धेरै छन्। प्रारम्भमा कसैले अलङ्कारलाई, कसैले रीतिलाई र कसैले गुणलाई प्रधान स्थान दिएर काव्यको निरूपण गरेका थिए तर यसरी बाह्य सौन्दर्यमा मात्र विचरण नगरी जब काव्यचिन्तनको यो यात्रा रसप्रस्थान हुँदै ध्वन्यमान अर्थको सौन्दर्यतर्फ अभिमुख हुन्छ। अनि साहिस्यविद्याको पूर्ण प्रतिष्ठित स्वरूप स्थापित हुन पुग्दछ।

काव्यचिन्तनको यो धारामा आन्तरिक सौन्दर्यतर्फ अघि बढ्दै जब रसतिर केन्द्रित बन्ने चिन्तनक्रम सुरु हुन्छ, व्यङ्ग्यप्रधान प्रतीतिसहितको एउटा विशिष्ट दिशा निर्धारण हुन थाल्दछ। आचार्य आनन्दवर्धनद्वारा रचित ध्वन्यालोकको उदय भएपछि त ध्वनिचिन्तनले एउटा विशिष्ट प्रस्थानकै प्रतिष्ठा प्राप्त गर्दछ। वाचक शब्द र वाच्य अर्थसमेत सँगसँगै व्यञ्जक बन्दै जुन ध्वन्यमान अर्थको प्रतीति गराउँछन्, त्यसको विशिष्टताद्वारा चमत्कृत रचनाले उत्तम काव्यको प्रतिष्ठा प्राप्त गर्दछ। प्रतीयमान अर्थको गरिमाप्रति इङ्गित गर्दै आचार्य आनन्दवर्धन भन्दछन्–

*प्रतीयमानं पुनरन्यदेव वस्त्वस्ति वाणीषु महाकवीनाम्।*
*यत् तत् प्रसिद्धावयवातिरिक्तं विभाति लावण्यमिवाङ्गनासु॥*

*ध्वन्यालोक ४*

उनले दृष्टान्त दिएर सम्झाएका छन्। उनी भन्दछन्– एउटी नारीको सौन्दर्यलाई व्यक्त गर्ने आधार केलाई मान्ने? कुनै अङ्गविशेषलाई, कुनै शृङ्गारविशेषलाई? होइन। कुनै विशेष शृङ्गार र अवयवलाई त्यसको कारक नमानेर समस्त अवयव र शृङ्गारहरूको समष्टि मिलेर ती वाह्य रूपरचनाभन्दा बिलकुलै भिन्न त्यो एउटा अलग्गै कुरा प्रकट हुन्छ। त्यसैले 'तत् प्रसिद्धावयवातिरिक्तम्' भनिएको हो। वास्तवमा नारीका तत् प्रसिद्ध अवयवहरू र तिनको सजावटभन्दा पृथक् तत्त्वका रूपमा त्यो 'लावण्य' प्रकट भइरहेको हुन्छ। त्यसै गरी सारस्वत् साधनाका पथिक महाकविहरूका वाणीमा वाचक शब्द

र वाच्य अर्थको परिवेशलाई छिचोलेर त्यो प्रतीयमान अथवा ध्वन्यमान अर्थ छुट्टै रूपमा चमत्कारपूर्ण बनेर प्रकाशित हुन्छ। यसरी चमत्कारपूर्ण रूपमा प्रकाशित हुने ध्वन्यमान अर्थ नै काव्यको आत्मा हो भन्ने ध्वनिसिद्धान्तका प्रवर्तक आचार्य आनन्दवर्धनले भनेका छन्।

करुणरसप्रधान रामायण महाकाव्यका रचयिता आदिकवि वाल्मीकिद्वारा क्रौञ्चपक्षीको जोडाको वियोगप्रति लक्ष्य गर्दै भनिएको श्लोकलाई उदाहरणका रूपमा दर्शाउँदै उनी भन्दछन्–

*काव्यस्यात्मा स एवार्थस्तथा चादिकवे पुरा।*
*क्रौञ्चद्वन्द्ववियोगोत्थः शोकः श्लोकत्वमागतः॥*

*ध्वन्यालोक ५*

अर्थात्– काव्यको आत्मा बनेको त्यही ध्वन्यमान अर्थ उहिल्यै आदिकवि वाल्मीकिको मुखबाट करुण रसको स्थायीभावका रूपमा मुखरित भएको शोक नै श्लोकत्वमा परिणत भएको थियो। त्यो श्लोक हो–

*'मा निषाद प्रतिष्ठां त्वमगमः शाश्वतीः समाः।*
*यत् क्रौञ्चमिथुनादेकमवधीः काममोहितम्॥'*

यसरी कायस्यात्मा ध्वनिः भनेर आचार्य आनन्दवर्धनले प्रतिष्ठापित गरेको ध्वनिकाव्यको उद्भावनालाई आचार्य अभिनव गुप्तपादद्वारा लिखित ध्वन्यालोकको 'लोचन' टीका र भरतमुनिको नाट्यशास्त्रउपर उनै आचार्यद्वारा लिखित अभिनवभारती टीकाले उत्कर्षको चरम विन्दु प्रदान गर्दछन्। आचार्य अभिनवगुप्तपादद्वारा ध्वनिसिद्धान्तको प्रतिष्ठापनमा पुऱ्याइएको योगदान साहित्यशास्त्रको क्षेत्रमा एउटा अतुलनीय अवदान बन्न पुगेको पाइन्छ।

ध्वनिकाव्यको सर्वोत्कृष्टता स्थापित भएपछि अलङ्कार, गुण, रीति आदिलाई काव्यशोभाका बहिरङ्ग तत्त्वको मान्यता प्राप्त हुन्छ। प्रतीयमान अर्थको तुलनामा ती सबै गौण ठानिन पुग्दछन्। आचार्य आनन्दवर्धन ध्वन्यमान अर्थको वैशिष्ट्यप्रति एकाग्र बनेर काव्यरचनामा प्रवृत्त हुने कविका लागि यी बाह्य सौन्दर्यका उपकरणहरू अलङ्कार, गुण, रीति आदि 'अपृथग्यत्ननिर्वत्य' (आफैँ प्रयत्न गरिरहनु नपर्ने आफैँ सहयोगी बनेर आइपुग्ने) बन्न पुग्दछन्। प्राचीन समयमा

साहित्यशास्त्रलाई 'क्रियाकल्प' भन्ने नाम पनि दिइएको थियो । व्याकरणद्वारा सिद्ध भएका शब्दहरूको प्रयोग गर्ने क्षेत्र भएको हुनाले साहित्यलाई त्यस्तो भनिएको हो भन्ने अर्थ लगाइएको थियो । सुरुसुरुमा साहित्य शास्त्रलाई अलङ्कारको नै मान्यता थियो । व्यास र वाल्मीकिको समयपछिका अन्य सम्पूर्ण काव्यचिन्तकहरूभन्दा प्राचीन मानिएका भरतमुनि ई.पू. चतुर्थ शताब्दीका मानिन्छन् । उनका विश्वविश्रुतकृति नाट्यशास्त्र हो । त्यसैबेलादेखि काव्यसम्बन्धी लक्षणग्रन्थहरूको निर्माणक्रम सुरु हुन्छ । काव्यका गुण, रीति, दोष आदिको चर्चा भरतले नै गरेका थिए । अलङ्कारवादी आचार्यहरूमा छैठौँ शताब्दीका काव्यालङ्कार का लेखक आचार्य भामह अग्रिम मानिन्छन् । उनी र उनका अनुयायी रुद्रट, रुय्यक आदि आचार्यहरूले अलङ्कार नै काव्यको आत्मा सिद्ध गर्ने प्रयास गरेका थिए । अलङ्कार निर्माणमा पनि शब्द र अर्थको सहगामित्व त अपरिहार्य नै मानिन्थ्यो ।

त्यसपछि आठौँ शताब्दीका दण्डीले वैदर्भी आदि रीति र माधुर्यादि दस गुणहरूलाई काव्यको अपरिहार्य पक्ष बताएका छन् र तिनमा पनि शब्द र अर्थको साहचार्य अनिवार्य रूपले दर्शाइएको छ । दण्डीपछि वामनले त 'रीतिरात्माकाव्यस्य' भनेर रीतिलाई नै काव्यको आत्मा मानेका छन् । एघारौँ शताब्दीका कुन्तकले 'वक्रोक्तिः काव्यजीवितम्' भनेर वक्रोन्तिलाई नै काव्यको आत्मा मानेको पाइन्छ । यी सबै चिन्तकहरू काव्यको बहिरङ्ग सौन्दर्य र चमत्कारमै केन्द्रित भएर अघि बढेका थिए ।

ध्वनिप्रस्थानका प्रवर्तक आनन्दवर्धनको नयाँ उद्‌भावनालाई हृदयङ्गम गरेर अत्यधिक प्रभावित भएका लोचनटीकाकार अभिनवगुप्तपादद्वारा निर्देशित 'रसाभिव्यक्ति' सम्बन्धी परिपाटीबाट आह्लादित भएका काव्यप्राशकार आचार्य मम्मटले त ध्वनिसिद्धान्तलाई हार्दिक भावले स्वागतपूर्वक स्वीकार गर्दै निरूपण गरेका छन् । उनको आधिकारिक विशद् र गम्भीर विवेचनबाट प्रभावित भएका परवर्ती आचार्यहरूले मम्मटाचार्यलाई 'वाग्देवावतार' भन्ने पदवीसमेत प्रदान गरेर सम्मानित गरेका छन् ।

ध्वनिसिद्धान्तानुकूल प्रतीयमान अर्थको रसास्वादनबाट प्रफुल्ल भएका काव्य सौन्दर्यका पारखीहरूले त साहित्यिक क्षेत्रको गरिमा कवि र सहृदय गरी दुई फाँटमा विभाजित भएको मानेका छन् । ध्वनिसिद्धान्तका शीर्षपुरुष आचार्य अभिनवगुप्तले त सारस्वत तत्त्वकै रूपमा कवि र सहृदयलाई स्थापित गरेर आफ्नो 'लोचन' नामक अद्वितीय टीकाको मङ्गलाचरणमा 'सरस्वत्यास्तत्त्वं कविसहृदयाख्यं विजयते' भन्दै तिनको वन्दना नै गरेका छन् ।

वास्तवमा परवर्ती काव्यजगत्मा जहाँजहाँ ध्वनिमूलक सिर्जनाहरू भए, ध्वनिकाव्यप्रतिका त्यो प्रतीयमान अर्थको सौन्दर्यले दिएको आकर्षण नै प्रेरक रह्यो होला भन्न सकिन्छ। वाच्यर्थबोधमै समाप्त हुने ठाडा भनाइहरूभन्दा ध्वनिप्रधान व्यङ्ग्यार्थको माधुरीसमेत समेटेका रचनाहरूले नै साहित्यिक विकासको क्रममा बढी प्रश्रय पाउने गरेको देखिन्छ । गजलको क्षेत्रमा यो कुरा बढी नै लागू भएको छ। नेपाली साहित्यमा आधुनिक कविताको सिर्जनासँगसँगै पल्लवित हुँदै गएका छायावादी, आयामेली युगका रचनाहरूमा पनि बहुआयामिक ध्वन्यात्मक प्रतीतिहरूकै मुख्य मूमिका रहेको भान हुन्छ भन्दा अतिशयोक्ति होलाजस्तो लाग्दैन ।

कविका अभिव्यक्तिहरूले सामान्य रूपले हेर्दा आफू बाँचेको परिवेश, परिस्थिति र तात्कालिक जनमानसको प्रतिविम्बलाई नै समेटेर अघि बढेको भए पनि कविको क्रान्तदर्शी प्रतिभाले स्वरूपत: केही शाश्वत सन्देश पनि दिएकै हुन्छ। किनभने कविको नवनवोन्मेषशाली प्रतिभा 'अहिले के छ' भन्नेमै नथन्की 'के हुनुपर्छ' भन्ने पनि इङ्गित गर्न चुक्तैन । वस्तुत: काव्यसंसारका लागि कवि नै प्रजापति (सृष्टिकर्ता) हुन्छन् र उनले जस्तो चाहना गरेका हुन्छन् यो सम्पूर्ण विश्व त्यस्तै रूपमा परिणत हुन्छ । उनलाई आफू विश्वको निम्ति आफ्नो कृतित्वको शाश्वत सन्देश दूरगामी रूपमा छोड्ने रहर अन्तर्मनमा रहेकै हुन्छ ।

*अपारे काव्यसंसारे कविरेव प्रजापति: ।*
*यथास्मै रोचते विश्वं तथेदं परिवर्तते ॥*

धन्यालोक तृतीय उद्योत

त्यसैले जुनसुकै रचना पढ्दा पनि क्रान्तदर्शी स्रस्टाले छोडेको शाश्वत सन्देश बुझ्न पाइन्छ भने अर्कातिर त्यसबेलाको परिवेश, परिस्थिति र जनमानसबाट परिचित पनि हुन पाइन्छ । त्यसैले साहित्यको अनुशीलनबाट समाजको दर्पण हेरेको आनन्द सहृदयहरूले सजिलै प्राप्त गर्न सक्दछन् र साहित्यलाई समाजको प्रेरक निधि बन्ने सुयोग प्राप्त हुन्छ ।

# जीवनका घामछायाँमा मेरो साहित्यिक यात्रा

*– आनन्ददेव भट्ट*

## पाल्पा तानसेनमा वि. सं. १९९८–२००८ सम्म

मेरो साहित्यप्रतिको रुचिको प्रत्यक्ष परोक्ष चेतनाको आधार पाल्पा बसाइको समयमा खडा भएको ठान्दछु । त्यहाँको “धवल पुस्तकालय”ले मेरो मन एकातिर तानेको थियो भने अर्कोतिर अविस्मरणीय गुरु श्री माधवप्रसाद देवकोटासित पढ्दा र उहाँका छोरा कुलमणि देवकोटाले एकान्तस्थलमा बसी कविता लेखेको देख्दा कविता लेख्न यस्तो एकान्त चाहिने रहेछ भन्ने प्रभाव पाऱ्यो। अनि उहाँले नै कलम-कापी लिएर तानसेनको श्रीनगर डाँडोतिर जाँदै गरेको देख्दा प्रकृतिको बीचमा बसी कविता लेख्नुपर्ने रहेछ भन्ने लाग्दथ्यो । अनि स्वयं देवकोटा गुरुले पनि एकान्त ढुङ्गेधारोतिर गई कविता लेलेको देख्दा पनि म निकै आकर्षित र प्रभावित भएको थिएँ।

अनि एक दिन मैले अङ्ग्रेजी पढाउने एक बूढा शिक्षकज्यूलाई एउटा अङ्ग्रेजी निबन्ध लेखेर देखाएँ। त्यसको पहिलो हरफमै मैले यस्तो लेखेछु: आकाशमा झुन्डिरहेको देखिने आगाको डल्लो नै सूर्य हो । (The ball of fire that we see hanging on the sky is sun.)

यस हरफलाई उहाँले ‘तिमी आफैले लेखेका हौ ?’ भनी सोध्नुभयो । मैले हो भनेपछि उहाँले ‘बेस लेखेछौ’ भनी सराहना गर्नुभयो। अनि श्री देवकोटा गुरुले पनि मैले लेखेको नेपाली देखाउँदा आफनो तर्फबाट पुगनपुग लेखिदिनुहुन्थ्यो, जसमा साहित्यिकता हुन्थ्यो।

अनि हामी केटाकेटीहरू तानसेन बजारको उत्तरतिरको डाँडोमा घुम्न जान्थ्यौं। त्यस्तै बजारको पश्चिममा पर्ने हुलङ्दी भन्ने ठाउँमा ६/७ ओटा ढुङ्गेधारा थिए। त्यहाँ नुहाउन धेरै रमाउँथ्यौं। त्यसैको पल्लोपट्टि ‘पालेको वन’ भन्ने वन थियो । त्यहाँ जान पनि हामी धेरै रमाइलो मान्थ्यौं । अनि श्रीनगरडाँडाबाट तल दक्षिणतिर हेर्दा ठूलो न ठूलो लाग्ने माडीको फाँट र अझ तल पश्चिमतिर मस्याङको डाँडो देखिन्थ्यो। त्यस दृश्यलाई हेर्दा र परवासको मेलामा जाँदा अत्यन्त रमाइलो अनुभव गरिन्थ्यो ।

## काठमाडौँमा वि.सं. २००६ मार्ग असारसम्म

जब २००६ सालमा म पहिलोपल्ट काठमाडौँ आएँ। पहिले म पद्मोदयमा ८ कक्षामा भर्ना भएँ। त्यहाँका अङ्ग्रेजी शिक्षक प्रा.श्री कृष्णबहादुर मानन्धरले कविता पढाउनुहुन्थ्यो। सबै विद्यार्थी उहाँले पढाएकोमा मक्ख पर्थे। अनि २००७ सालमा म दरबार स्कूलमा भर्ना भएँ। त्यहाँ श्री गोपाल पाँडे गुरुले नेपाली पढाउनुहुँदा अत्यन्त बुझिने गरी रमाइलोसित पढाउनुहुन्थ्यो।

अर्को कुरो, काठमाडौँ आएपछि मैले नेपालीका किताबहरू किनी पढ्ने स्वस्फूर्त अभ्यास सुरु गरेँ। त्यसबेला कवि चक्रपाणि चालिसेका *रामायण* र *महाभारत*का किताब, लेखनाथ, देवकोटा, बालकृष्ण सम, सिद्धिचरण, भीमनिधी तिवारी आदिका कविताहरू पढिन्थे। 'मुनामदन' माथि त सबै साहित्यप्रेमीहरू झुत्तिन्थे नै। त्यसैले होला, मैले २००७ साल फागुन ७ गते सकिनासाथ २००८ सालतिर 'चारतारे झण्डा र प्रजातन्त्र' भन्ने अलि लामै कविता मुनामदनकै छन्दमा लेखेको थिएँ। तर त्यो रचना जतन गर्ने ज्ञानको अभावले त्यसै कता हरायो। यो नयाँ जन्मेको प्रजातान्त्रिक वातावरणमा नेपालका प्रतिष्ठित कवि र साहित्यकारहरू आम जनता माझ कविता सुनाउँथे। यस्ता गोष्ठीको सम्पर्कमा पुग्ने थुप्रै-थुप्रै शिक्षित, अशिक्षित, किशोर, किशोरी, युवायुवती र अन्य ठूला उमेरका मानिसले पनि त्यहाँ गरिने कविता पाठबाट गहिरो प्रभाव लिने गर्दथे। त्यतिबेला यस्ता कार्यत्रमहरू टोलटोलमा हुने गर्थे। त्यस्ता गोष्ठीमा त्यतिबेलाको जनसङ्ख्या जतिसुकै थोरै भए पनि श्रोताहरू अटाई नअटाई उपस्थित हुन्थे। त्यहाँ उपस्थित हुने निम्नमध्यम वर्गका मानिसमात्र होइन कृषक वर्गका मानिस पनि थुप्रै हुन्थे। मैले त्यस्ता कैयन् गोष्ठीहरूमा कवितावाचन सुनेको छु।

अर्कोतिर प्रजातन्त्र आएपछि पहिलेका राणापरिवारका मानिस र साधारण दुनियाँदारमा ठूलो भिन्नता देखा पर्दथ्यो। त्यसका साथै राजनैतिक क्षेत्रमा विभिन्न पार्टीहरू देखा परेकाले उनीहरूका बीचमा भिन्न विचार र दृष्टिकोण तुलनाबाट पनि सर्वसाधारण एकातिर सचेत हुँदै गएका थिए भने अर्कातिर जनतामा निकै अलमल पनि

जन्मँदै थियो। विशेष गरी २००७ साल अघि जेल परेका सर्वोच्चदेखि सामान्य नेता कार्यकर्तासमेत छुटी बाहिर आएकाले तिनको अभिनन्दन हुन्थ्यो र वक्तव्य / मन्तव्य सुन्न पाइन्थ्यो भने अर्कोतिर नयाँ राणा काङ्ग्रेस संयुक्त सरकारमा हिजोका राणा प्रधानमन्त्री मोहनशमशेरले नेतृत्व गरेकाले धेरैलाई यो परिवर्तनप्रति नै भ्रम र अनास्था पनि उत्पन्न हुने गरेको थियो ।

यसरी अनेक कुराको छ्यासमिसले गर्दा कैयन् मानिसलाई बोलूँ बोलूँ, लेखूँ लेखूँ, केही न केही आफूले जानेको कुरा गरूँ गरूँ लाग्दो हो । अनि अनेकथरी झन्डा, जुलुस, भाषण, नारा, उद्घोषण सुन्दा कैयन् नारी र पुरुषले पनि ठूलो-ठूलो स्वरमा हात र मुठी उचाली भाषण गरेको सुन्दा कैयन् मानिसमा एउटा जिज्ञासा, उत्सुकता, केही नयाँ कुराले घोचेजस्तो, चिमोटेजस्तो लाग्दथ्यो होला। यसरी हिजोको थुनिएको, जाम भएको , नेपाली जनजीवन अब बिस्तारै खुकुलिन थाल्दै थियो । यस्तो वातावरणले म एकातिर वाल्ल परेको हुन्थेँ भने अर्कातिर कुन्नि केले हो, दङ्ग परेको अनुभव गर्थे ।

अनि २००८ सालदेखि २०१३ सालका ४-५ वर्षभित्र ममा एक प्रकारले असामान्य परिवर्तन आएको अनुभव भयो । मैले एकातिर २००८ सालमा एस. एल. सी. पास गरी २००९ सालदेखि त्रिचन्द्र कलेजमा आई. ए. प्रथम वर्षको प्रवेश लिएको थिएँ। अर्कोतिर मैले जानी नजानी लेख्न सुरु गरी २००९ सालसम्ममा बाहिरका गोष्ठीमा गद्य कविता सुनाउन थालिसकेको थिएँ। मेरो आकाङ्क्षा मात्रै उठ्दै गएको होइन, आफ्नो अहं र अहङ्कारको पनि वृद्धि हुँदै थियो। पक्कै पनि म आफूलाई चाहिनेभन्दा धेरै जान्ने ठान्न थालिसकेको थिएँ । म पाल्पामा बस्दा जति दब्बू र कोर्काली स्वभावको थिएँ २००७ सालको परिवर्तनले मलाई विचित्रकै परिवर्तन गरेको अनुभव गर्न थालेँ । म एउटा मुक व्यक्तिबाट पर्याप्त बहिर्मुखी वाचाल व्यक्तिमा बदलिँदै गएँ। मानौँ अब मलाई छेक्ने, रोक्ने, अनुशासनमा राख्ने, संयमित हुन सिकाउने र कमभन्दा कम बकबक र बढीभन्दा बढी श्रम र साधना सिकाउने कोही भएन। लेखनाथ कविले भनेझैँ ममा "छोटो बढेपछि ठूलो फुर्ति ढाँचा बढाउँछ उर्लदो खहरे हेर, कत्तिको गडगडाउँछ" जस्ता कमजोरीले पनि टाउको उठाउँदै गए।

यसरी मेरो खहरे प्रवृत्तिले जुरो हल्लाएर हिँड्ने ठूलो अवसर भेट्टायो ।

म पहिलोपल्ट २००६ साल मङसिरदेखि २००८ सालको मध्यसम्म स्व. डा. श्री त्रैलोक्यनाथ उप्रेतीज्यूको घरमा बस्थेँ। घरको मूली हुनुहुन्थ्यो उहाँकी आमा। अत्यन्त नम्र र सेवाशील नारी। डा. उप्रेतीकी कान्छी बहिनी एकातिर मेरी साहिँली आमा हुनहुन्थ्यो भने अर्कोतिर श्रीमती भाग्यवती उप्रेती मेरो आदरणीय फुपू। एकातिर म भान्जो मानिन्थेँ अर्कातिर भदा । तर २००५ सालमा मेरो बुबाको पाल्पाबाट प्युठान अदालतमा सरुवा भएपछि म मेरो साहिलाबुबा श्री लवदेव भट्टसँगै पाल्पामा बसी २००४ सालमा पाल्पामा खुलेको पद्ममोदय पाल्पा पब्लिक हाइ स्कूलमा कक्षा ७ मा पढ्थेँ। उहाँ निकै कडा मिजासको, खरो र गल्ती गर्नासाथ ऐनमौकामै समातिहाल्ने स्वभावको तेज मानिस हुनुभएकाले म उहाँको निकै डर र अदब पनि राख्थेँ। तर काठमाडौँ आएपछि मलाई हप्काउनेसम्म कोही भएन। डा. उप्रेतीज्यूलाई मेरो पुच्छर लाग्ने के फुर्सद हुनु? उहाँका भाइ श्री सागरनाथ उप्रेती र म ८ कक्षामा सहपाठी नै थियौँ। उहाँकी आमा नौनी बज्यै भैहाल्नुभो। तर एक दिन गजबसित उहाँले नै मेरो मनमा डर र अदब पसाइदिनुभो । मैले बिजुलीको स्विच घरिघरि एक सुरले खेलाउँदै थिएँ । त्यै बेला उहाँले भन्नु भो: "आनन्द, त्यसो नगर । म त्रिलोकीलाई भनिदिउँला ।" त्यस वाक्यले मेरो काण्डै पुगिहाल्यो । म त्यसपछि उहाँका अगाडि सधैँ मुसो बनेँ । डा. उप्रेतीज्यू मलाई सधैँ "आनन्द बाबु" भनी सम्बोधन गर्नुहुन्थ्यो । उहाँले कहिल्यै एक वचनको ताडना पनि गर्नुपरेन ।

आदरणीय पाठकवर्ग! यहींनिर मैले त्यसबेलाको कालिकास्थानटोल र त्यहाँको सामाजिक, राजनैतिक परिवेशबारे केही उल्लेख गनुपर्ने अनुभव गर्दछु । यस टोलमा उप्रेती परिवारका दुई घर थिए– (१) सुप्रसिद्ध आदरणीय शिक्षक श्री नन्दराम उप्रेती (दिवङ्गत) को घर। उहाँका छोरा हुनुहुन्थ्यो– डा. त्रैलोक्यनाथ उप्रेती र सागरनाथ उप्रेती । अनि अर्को घर थियो (२) आदरणीय सुब्बा श्री मुरलीधर उप्रेती (दिवङ्गत) (कानुन विशेषज्ञ) जसका ५ मध्ये ४ छोरा हुनुहुन्थ्यो : सर्व श्री पुष्करनाथ उप्रेती (दिवङ्गत) प्रा. डा.

डिल्लीराज उप्रेती, प्रा. चन्द्रघर उप्रेती (दिवङ्गत) र कान्छा श्रीधर उप्रेती, जो मेरो सहपाठी साथी नै हुनुहुन्थ्यो ।

ती चार भाइ छोरामध्ये श्री पुष्करनाथ उप्रेती “नेपाल प्रजा परिषद” पार्टीमा सक्रिय रूपमा संलग्न हुनुभएकोले १९९७ सालमा राणाशाहीबाट पक्रिई १८ वर्षको निम्ति जेल पर्नुभएको थियो । तर प्रधानमन्त्री श्री ३ जुद्धले राजपाठ छोडी जाने बेलामा २००२ सालमा केही बन्दीहरूलाई माफी दिई छोड्दा उहाँलाई पनि छोडिदिएको थियो । उहाँको र नेपाली काङ्ग्रेसको राजनीतिमा कैयन् कुरामा धेरै मतभिन्नता भएकाले उहाँ २००७ साल फागुन ७ गते बनेको राणा-काङ्ग्रेस सरकारको घोर आलोचक हुनुहुन्थ्यो। मैले उहाँहरूबाट २००७ सालको क्रान्ति सुरु हुँदादेखि राणा-काङ्ग्रेस सरकार बन्दासम्म काङ्ग्रेसविरोधी धेरै कुरा सुनेको थिएँ । त्यसपछि २००८ सालमा उहाँका भाइ प्रा. चन्द्रधर उप्रेती काङ्ग्रेस सर्मथकबाट कम्युनिस्ट सर्मथक भई वाम राजनीतिमा लाग्नुभएकाले म पनि उहाँहरूकै प्रभावमा परेँ । त्यसबाहेक २००७ सालमा पहिले जेल परेका सबै नेताहरू छुटेपछि श्री टङ्कप्रसाद आचार्यज्यूहरूको पनि सामीप्य प्राप्त गरेँ । अन्य थप,२००८ सालमा “नेपाल कम्युनिस्ट पार्टी” र “नेपाल प्रजा परिषद्” पार्टीले मिली “जातीय जनतान्त्रिक संयुक्त मोर्चा” बनाएकोले म अझ बढी कम्युनिस्ट सर्मथक बनेँ। यसमा प्रा. चन्द्रधर उप्रेती र कालिकास्थानमै बस्नुहुने तात्कालिक उदयमान कम्युनिस्ट नेता श्री अरबिन्द रिमालसितको सङ्गतले बढी योगदान पुऱ्यायो । उहाँहरूले त्यति बेला पुतलीसडकमा प्रा. सरस्वती रिमालको घरमा स्टडी सर्किल (अध्ययन मण्डल) खोल्नुभएको थियो। त्यहाँ मार्क्सवादी साहित्यको नियमित अध्ययन, छलफल आदि हुन्थ्यो । त्यसमा म सक्रियरूपले सहभागी हुन्थेँ। अनि त म २००९ साल मङ्सिरसम्ममा एउटा प्रतिबद्ध कम्युनिस्ट नै बन्न पुगेँ ।

यसमा थप प्रगतिशील, प्रगतिवादी, कम्युनिस्ट जगत् भित्रबाट सर्व श्री गोविन्दप्रसाद लोहनीले विशेष किसिमबाट साहित्यिकदेखि दार्शनिक, वैज्ञानिक, राजनैतिक, आर्थिक, सामाजिक, सांस्कृतिक, क्षेत्र र विषयमा मजस्ता थुप्रै किशोर र युवाहरूलाई पर्याप्त बौद्धिक चेतना हुने खुला सम्बोधन र वार्तामा दिनदिनै सामेल गराउनुहुन्थ्यो ।

त्यसमा थप श्री कृष्णचन्दसिंह प्रधानज्यूसितको परिचय र सङ्गतले धेरै प्रभाव पाऱ्यो । उहाँ नेकपाको प्रतिबद्ध सदस्य नै हुनु भएकाले मेरो झन् घनिष्ठता भयो । अनि श्री श्यामप्रशाद शर्मा वीरगन्जबाट काठमाडौँ आउनु उहाँ र मदनमणि दीक्षित 'माडसाप', धनुषचन्द्र गौतम, डिपी अधिकारी, कहिलेकाहीँ शैलेन्द्रकुमार उपाध्यायले पनि प्रत्यक्ष तथा परोक्षरूपले त्यसबेलाका मजस्ता कम्युनिस्ट प्रभावभित्र आइपुगेका र जिज्ञासुहरूलाई धेरै नै गहिरो गरी राजनैतिक, साहित्यिक, बौद्धिक र दार्शनिक प्रभाव दिनुभयो । त्यस अवधिमा मेरो श्री रमेश विकलज्यू, भैरव अर्यालज्यूहरूसित पनि परिचय र घनिष्टता कायम हुन गयो । उहाँहरूको साहित्य-साधनाप्रतिको बेजोडको प्रतिबद्धताले मजस्ता सिकारुलाई अझ धेरै आकर्षण र प्रेरणा प्राप्त हुँदै गयो ।

यसरी म साहित्यतर्फ २००७-२०१३ सालभित्र त्यति बेलाका सुप्रसिद्ध लेखक-कविहरू सर्वश्री लेखनाथ पौडेल, लक्ष्मीप्रसाद देवकोटा, बालकृष्ण सम, सिद्धिचरण श्रेष्ठ, भीमनिधि तिवारी, केदारमान व्यथित, हृदयचन्द्रसिंह प्रधान, माधव घिमिरे, विजयबहादुर मल्ल आदिका घर-घरमा पुगी कविता सुनाउने भैसकेको थिएँ । उहाँहरू सबैले अझ राम्ररी मेहेनत गरी लेख्दै जाने सल्लाह दिनुभयो; हार्दिक शुभेच्छा र आशीर्वादका साथ प्रेरणा र प्रोत्साहन पनि दिनुभयो ।

अनि २०१३ सालमा प्रवेशिका परीक्षा (एस.एल.सी) दिई २००८ को सुरुमा पास गरेँ । २०१० सालमा म जेल परेकाले मैले त्रिचन्द्र कलेजको विद्यार्थीको हैसियतले नियमित परीक्षा दिन नपाई सप्लिमेन्टरी (पूरक) परीक्षा दिएँ । २०११ सालमा मैले आई.ए. परीक्षा पास गरेँ । त्यसपछि मैले कम्युनिस्ट पार्टीको पूर्णकालिक सदस्य बनी व्यावहारिक राजनीतिमा लागी झन्डै पढाइ नै छोड्न लागिसकेको थिएँ । त्यतिबेला म पार्टी सङ्गठनको साथै विशेष गरी किसान फ्रन्टलाई हेर्थें । त्यत्तिकैमा २०१३ सालको आधाआधीतिर हुनुपर्छ मेरा साहिँला बुबा श्री लवदेव भट्ट, तात्कालिक डोटी गौँडाका असिस्टेन्ट सुब्बा, डोटीबाट कुनै कामविशेषले काठमाडौँ आउनु भयो । उहाँले आफूसँगै मेरा माहिला भाइ भीमदेव भट्टलाई पनि काठमाडौँमा मसित राखी पढाउन ल्याउनुभएको थियो । उहाँले मलाई भक्तपुरबाट बोलाई अनेक किसिमले सम्झाउनुभयो र मैलै पुनः उच्च

शिक्षाको पढाइ चालू गरी बाँकी समय पार्टीको काम गर्ने निर्णय गरेँ। त्यसका निम्ति मैले तात्कालिक "नेपाल नेसनल कलेज" (हालको शङ्करदेव क्याम्पस) मा राती पढ्ने गरी भर्ना भएँ। अनि मैले २०१४ मा बी. ए. पास गरेँ र त्यही कलेजमा एम.ए. (अङ्ग्रेजी) को अध्ययन गरी पटना विश्वविद्यालय (भारत) मा परीक्षा दिन गई (सन् १९६० फेब्रुअरी) २०१६ साल माघमा एम.ए पास गरेँ। प्राध्यापक जर्ज जोनले पनि सँगै पास गर्नुभएको थियो। यसरी २०१३-२०१६ सालमा मेरो अध्ययन र वौद्धिकताले साहित्य-साधनालाई पनि क्रमशः बढाउँदै लगी केही अंशमा गुणात्मक उच्चता पनि देखाउँदै गयो।

व्यक्तिगत रूपमा मलाई काठमाडौँमा कवितालेखन र साहित्यतर्फ धेरै नै प्रोत्साहन र प्रेरणा दिने अनि निरन्तर हौस्याउने काम कविवर सिद्धिचरणबाट भएको हो। अनि २०१५ सालमा क्रमशः मेरा तीन ओटा कविताका कृतिहरू प्रकाशित भए। ती हुन् (१) अब हिमालय बोल्छ (कविता सङ्ग्रह) (२) ९७ साल (खण्डकाव्य) र (३) गुराँस (कविता सङ्ग्रह)। मलाई मेरी मितेनी आमा आदरणीय लक्ष्मीदेवी खाँडज्यूले किताब छाप्न रु.५००/- दिनुभएको थियो। त्यही पैसालाई मैले मूल पुँजी बनाई माथिका तीनओटा किताब छपाउन सकेको थिएँ। यसका पछाडिको एउटा खुला रहस्य के पनि थियो भने त्यति बेला काठमाडौँस्थित भारतीय राजदूताबासले प्रत्येक लेखकका कृतिको २०० दुई सयप्रति किताब किनिदिन्थ्यो र त्यसबाट आएको पैसामा केही थप-थाप गरी अर्को किताब छाप्न पुग्थ्यो। त्यसै गरी २०१६ सालमा मेरा अरू तीन किताब प्रकाशित भए। ती हुन्-(१) ओमरखैयामलाई जवाफ (काव्य) (२) जोबनकै थुम्कोबाट (काव्य) र (३) आमा बोलाउँछिन् (कविता सङ्ग्रह)। यसरी ममा मानौँ किताब प्रकाशनको एउटा असाधारण तीर्खा नै उत्पन्न हुन गयो।

अनि मैले २०१६ सालको अन्त र २०१७ सालको प्रारम्भदेखि कविताका साथै ससाना समीक्षात्मक लेखन पनि सुरु गरेँ। कवि द्वारिका श्रेष्ठले "शीतको थोपा" नामक कविता सङ्ग्रहमाथि लेखिएको मेरो सम्भवतः पहिलो समीक्षा २०१७ सालमा मार्गको *शारदा*मा छापियो। अनि श्री रोचक घिमिरेको सम्पादनमा २०१८

सालमा निस्केको "रचना" द्वैमासिकमा कवि श्री भैरव अर्यालको कविता सङ्ग्रहबारे लेखिएको समीक्षा पनि प्रकाशित भयो। यसरी म समीक्षा लेखनको क्षेत्रमा पनि ओर्लन पुगेँ। यसले मलाई केही चर्चामा ल्याउनु स्वभाविकै थियो । जस्तो २०१६ सालदेखि प्रकाशित हुन थालेको "रूपरेखा" पत्रिकाले २०१९ साल असारको (वर्ष ३,अङ्क १ मा) सम्पादकीय टिप्पणीमा लेख्यो:

"ती आलोचक आफूलाई मार्क्सवादी भनाएर आफ्नो साहित्यिक देनलाई बिटुल्याउँछन् यद्यपि उनीहरू मार्क्सवादकै घेराबाट हिँडिरहेका पाइन्नन्। यिनमा हामी प्रो. आनन्ददेव भट्टलाई लिन सक्छौँ। उहाँले यदि वादको आधारमा आलोचना नगरी साहित्यवादको आधारमा मात्र चल्नुभयो भने उहाँबाट पनि नेपाली साहित्यको अभाव-आलोचनाको केही मात्रामा भए पनि पूर्ति हुने थियो।"

"के नेपाली साहित्यले अब पनि स्वस्थ आलोचकहरू तयार गर्न सक्ने छैन? यो यस्तो प्रश्न छ, जसको जवाफ पाउन अझ केही वर्ष धैर्य गर्नै पर्ला?"

२०१६ सालको उत्तरार्द्धतिर पटना विश्वविद्यायबाट तारानाथ शर्मा, चैतन्य उपाध्याय, मञ्जु शर्मा (दिवङ्गत), जर्ज जोन र मैले एम.ए. (अङ्ग्रेजी) को परीक्षा दिएका थियौँ। सम्भवत: तारानाथ शर्मा पनि पुस-माघतिर काठमाडौँ आउनुभयो होला । त्यसबेलादेखि उहाँ काठमाडौँमा जमेर बस्नुभयो। मचाहिँ २०१७ साल साउनमा "धनकुटा डिग्री कलेज" मा अङ्ग्रेजी पढाउन गएँ। २०१६ सालमै प्रगतिशील लेखक सङ्घ" को (२००९ मा वीरगन्जम श्री श्यामप्रसाद शर्माज्यूको अध्यक्षतामा खुलेको) पुर्नगठन भयो। श्री धर्मराज थापा अध्यक्ष, ताना शर्मा सचिव र म उपसचिव भयौँ । श्री कमल दीक्षित पनि कार्यकारिणी सदस्य हुनुहुन्थ्यो । ताना शर्माज्यूको र मेरो परिचय २०१४ सालमा नेकपाको दोस्रो महाधिवेशनमा फोहरा दरबार, काठमाडौँमा भएको थियो । उहाँ पनि बनारसमा श्री भरतमोहन अधिकारीसमेत अधिवेशन प्रतिनिधि भई आउनुभएको थियो । अनि २०२२ सालमा ताना शर्माज्यू जेल पर्नुभएपछि (वास्तवमा राजा महेन्द्रको "उसैको लागि" भन्ने कविता सङ्ग्रहको कटु आलोचना गरेकोले हुनुपर्छ) उहाँले कम्युनिस्ट विचार नछोडुन्जेल मेरो र

उहाँको मित्रता धेरै गाढा थियो । मैले उहाँबाट साहित्यसम्बन्धी धेरै कुरा सिकेँ र जानेँ पनि। उहाँले मलाई कहिले-काहीँ "पारखी जी" भनी सम्बोधन गर्दै समीक्षा, समालोचना लेखन प्रोत्साहित गरिरहनुहुन्थ्यो । पछि विशेष गरी पञ्चायतकालमा उहाँको र मेरो राजनैतिक विचार क्रमश: निकै फाट्दै गएकाले मित्रता पनि टाढाटाढा हुँदै गयो । फेरि उहाँ पनि निकै कडा स्वभावको हुनुहुन्थ्यो । म पनि कम अहङ्कारी नभएकाले मैले उहाँका ठीक नलागेका कुरालाई स्वीकृति दिने त छाडौँ थोरै पनि महत्त्व दिने कुरै भएन। तर मैले २०१६-२०२२ सम्म भनौँ जेजति समीक्षात्मक लेखन गरेँ त्यसमा उहाँको मेरो लेखनप्रतिको प्रोत्साहनात्मक प्रशंसाभावलाई म कहिल्यै पनि बिर्सन सक्दिनँ। म ठान्छु मानव जीवनमा जुन बेला जसबाट हार्दिक व्यवहार हुन्छ, त्यसप्रति पूर्ण प्रशंसाशील र कृतज्ञ हुनुपर्छ र जब प्रतिकूल व्यवहार सुरु हुन्छ त्यसको प्रतिक्रियालाई पनि मानिसले कत्ति पनि बिर्सन सक्दैन। यसरी कुनै दुई मानिसका विचार मिल्नु र फाट्नुलाई हामीले स्वाभाविक प्राकृतिक किसिमबाट लिनुपर्छ; अनावश्यक कटुता उत्पन्न गरेर यर्थाथप्रति पनि न्याय हुन्न र सत्यको पनि दर्शन पाउन सकिन्न। साथै २०१६-२०१७ सालसम्म गोविन्द भट्टजी पनि काठमाडौँ भित्रिनुभो जस्तो लाग्छ । त्यसबेला यहाँसित जेजस्तो परिचय, सङ्गत र मित्रताको जग बस्यो, त्यसले उहाँ चीनमा २-३ पल्ट केही लामो अवधिका निम्ति जानुभएको समयबाहेक आजसम्मको मित्रतामा क्रमश: विकास भई त्यसमा गुणात्मकता पनि थपिँदै गएको छ। विशेष गरी उहाँको मार्क्सवादी दर्शनको समरूलाई नेपाली राष्ट्रियताको पक्षमा, सम्पूर्ण शोषित पीडित नेपाली जनताको पक्षमा र नेपाली चिन्तनलाई आधारभूत रूपले नै नेपाली हावा, पानी,माटो सुहाउँदो पार्दै विश्व श्रमजीवी वर्गको उदात्त मानवतावादसित हातेमालो गर्न जुन बौद्धिक, प्राज्ञिक कुशलता र सीपको प्रयोग गर्दै आउनुभएको छ त्यो नेपालको सुदूर भविष्यसम्म एउटा उल्लेख्य कीर्तिमान साबित हुनेछ भन्ने ठानेको छु ।

२०१६ साल माघ-फागुनसम्मको भारतको कालिङपोङ, दार्जिलिङदेखि पूर्वी नेपालको यात्रा :

२०१६ साल माघमा (सन् १९६० फेब्रुअरी) मैले भारतको पटना विश्वविद्यालयबाट अङ्ग्रेजी भाषासाहित्यमा एम. ए. पास गरेपछि मलाई भारतको कालिङपोङ र दार्जिलिङ हुँदै सुदूरपूर्वी नेपालका केही जिल्लाहरूको साहित्यिक वैचारिक भ्रमण गर्ने एउटा प्रबल विचार उत्पन्न भयो । त्यसबेला मेरा बुबा श्री जयदेव भट्ट झापा जिल्ला गोश्वाराको असिस्टेन्ट सुब्बाको पदमा सेवारत हुनुहुन्थ्यो। म पछिका दुई भाइहरू भीमदेव भट्ट (वर्ष १५) र अर्जुनदेव भट्ट (वर्ष १३) त्यतिबेला बुबासँगै भएकाले मैले उनीहरूलाई पनि भारतका ती दुई ठाउँ देखाउने उद्देश्यले सँगै लग्ने निधो गरेँ।

सर्वप्रथम, हामी तीनै जना कालिङपोङ गयौँ। त्यहाँका एक चर्चित कवि श्री नरबहादुर दाहालले हामीलाई कालिङपोङबजारमा त्यहाँका मुख्य ठाउँ देखाउने र केही साहित्यकारहरूसित भेटघाट गराउन सघाउनुभयो ।

अर्को दिन हामी त्यहाँबाट दार्जिलिङ गयौँ र त्यहाँको धर्मशालामा अडियौँ । त्यहाँ पनि कवि नरबहादुर दाहालज्यूले नै त्यहाँका स्वनामधन्य आदरणीय साहित्यकार सर्वश्री पारसमणि प्रधान, त्यहाँको जनसाधारणमा अत्यन्त लोकप्रिय कवि श्री अगमसिंह गिरी र साहित्यकार जगतक्षेत्री आदिसित व्यक्तिगत भेटघाट र परिचयको आदानप्रदान गराइदिनुभयो । श्री पारसमणिज्यूको भव्यता र आत्मविश्वासी अभिव्यक्तिबाट र गिरीज्यूको नम्रता र कोमलताबाट ममा विशेष छाप पर्‍यो । जगत क्षेत्रीजीको सहज मिलनसारिताले पनि म आनन्दित भएँ । त्यसबाहेक हामीले दार्जिलिङ बजारका विभिन्न स्थलहरूको भ्रमण गरेर केही परिचय पनि लियौँ।

दुई रात त्यहाँ बिताएपछि हामी तीन भाइ पशुपतिनगर हुँदै नेपालको सबभन्दा पूर्वी जिल्ला इलाम आइपुग्यौँ । इलामबजारमा त्यहाँका मेरो नाम सुनेका साहित्यकार मित्रहरूले हामीलाई बजारमै एक विद्यार्थीको परिवारमा बसाउनुभयो । त्यहाँ हामी श्याम श्रेष्ठ, विष्णु, नवीन र मदन प्रसाईंज्यूको घरमा पनि गयौँ। साथै एक दिन बजारका साहित्यकारहरूको साहित्यिक गोष्ठीको पनि आयोजना गरियो जसमा हाम्रो राम्रो आदानप्रदान हुनसक्यो। दार्जिलिङको धेरै नजिक

भएर होला इलाम बजारको चलपहल र खुलापन केही अंशमा दार्जिलिङको जनजीवनसित नजिक लाग्यो ।

अनि मेरा भाइहरूलाई फेरि झापा हुँदै अलिअलि चाँडै काठमाडौँ फर्कनुपर्ने हुनाले उनीहरू झापातिर लागे र म त्यहाँबाट अघिल्लो एक, दुई-तीन बासका मित्रहरूको नाम र परिचय लिई तेस्रो दिन एक्लै अपराह्नतिर इलामबाट ताप्लेजुङका निम्ति प्रस्थान गरेँ ।

त्यो दिन मेरो पहिलोबास साखेजुङमा श्री ज्ञानी भट्टराईज्यू कहाँ पर्‍यो । उहाँ वामपन्थी वुद्धिजीवी हुनुहुन्थ्यो । उहाँसितको आदानप्रदानले मलाई उहाँको सरलता, हार्दिकता र जनताका समस्याबारे अत्यन्त गहिरो ज्ञान भएको अनुभव भयो । उहाँसित फेरि मैले आजसम्म कहिल्यै भेट्न पाइनँ तापनि उहाँको स्मृति मेरो मनमा राम्ररी बसेको छ ।

अनि भोलिपल्ट भोजनपश्चात् त्यहाँबाट हिँडेपछि मेरो बास पाँचथरको एउटा भोजनघर (पसल) मा हुनगयो । अनि भोलिपल्ट त्यहाँबाट सबेरै हिँडेपछि म सम्भवत: ४-५ बजेतिर ताप्लेजुङ बजारमा श्री जगमोहन शाक्य, रुद्रकुमार शाक्य, दुई बहिनीहरूकहाँ भेट्न पुगेँ । शाक्यज्यूका बुबा-आमा पनि घरमै हुनुहुन्थ्यो । उहाँहरूको परम्परागत भाँडा बनाउने र बिक्री गर्ने पसल पनि घरैमा भएकाले उहाँहरू सधैँ व्यस्त रहनुहुन्थ्यो । मेरो र साहित्यकार शाक्य भाइहरू र बहिनीहरूको बीचको सम्बन्ध अनौठोसित एक्कै छिनबाट निक्कै घनिष्ठ हुनपुग्यो । म ठान्छु, म त्यहाँ झन्डै ४ दिननै बसेँ । हाम्रो दिनचर्यामा सबभन्दा पहिले त बिहान र बेलुकी, राती त हामी साहित्यिक, सांस्कृतिक, वैचारिक कुरामै घरमै आदानप्रदान गर्थ्यौँ । जगमोहनजीका दुई बहिनीमा ठूली बहिनी चित्रकारीको अभ्यास गर्नुहुन्थ्यो र सानी बहिनी साहित्य साधना । सानी बहिनीको साहित्य साधना म पछिसम्म पनि बेलाबेलामा कताकतै पत्रपत्रिकामा पढ्थेँ तर त्यसपछि के भएर हो मैले सो साहित्यिक सम्पर्क पाइनँ । जगमोहनजी र रुद्रजी त तुलनात्मकरूपले बढी फूर्तिला र फुर्सदिला (केटा भएकाले) हुनुभएकाले उहाँहरू र म बढी अन्तरक्रियामा हुन्थ्यौँ । त्यसबीच उहाँहरूले मलाई ताप्लेजुङबजार देखाउने र

त्यहाँको साहित्यिक गोष्ठीमा सहभागी गराउने कार्य पनि गर्नुभयो । त्यसबाट मलाई अनुभव भयो त्यो बजार पहाडको हिमालमुन्तिरको सानो क्षेत्रमा स्थित भए पनि शाक्य भाइ-बहिनीजस्ता जनताको साधनाप्रतिको उत्सुकता र जागरुकता धेरै नै प्रशंसनीय थियो । म धरानमा २०१८-२०२२ सम्म हुँदा एक पल्ट जगमोहन शाक्यजी मकहाँ एकरात बस्नु पनि भएको थियो तर त्यसपछि हाम्रो सम्पर्क भएन । तर उहाँ साहित्यसाधना मै हुनुहुन्छ भन्ने प्रस्ट छ । अनि उहाँका बुबा-आमाहरूसितको हार्दिकता पनि धेरै गहिरो गरी मभित्र समाहित भयो । यस्तो पारिवारिक एकताले गर्दा छुट्टिने दिन हामी दुवैथरीलाई धेरै-धेरै गाह्रो परेको थियो ।

त्यसपछि म तमोरखोलो तरी आठराई प्रवेश गरेँ र सबभन्दा पहिले म पोखरी भन्ने ठाउँमा गएँ । त्यहाँ एउटा हाई-स्कूल चल्दै थियो र समाजसेवी एवं शिक्षाप्रेमी श्री देवीप्रसाद उप्रेतीज्यूले (दिवङ्गत) शिक्षक वर्ग र विद्यार्थीहरूका निम्ति एउटा छात्रावास पनि बनाउनुभएको थियो । त्यसको गाह्रो बाँसमा माटाले लिपिएको थियो र छानोचाहिँ फुसको थियो । अनि श्री वल्लभमणि दाहाल त्यहाँ पढाउनुहुन्थ्यो । उहाँलाई मैले २०१० को दशकमा काठमाडौँमै राम्ररी चिनिसकेको थिएँ । उहाँको शैक्षिकका साथै सांस्कृतिक, सामाजिक र विशेष गरी राजनैतिक चेतना अत्यन्त विशिष्टताले युक्त थियो । उहाँको परिश्रमशीलता, वाचनशक्ति, तर्कशक्ति, अर्काको कुरा पर्याप्त सुनी त्यसलाई अधिकतम चित्तबुज्दा तर्क र शोचले सम्झाउने क्षमता, प्रवचन गर्दा पनि त्यस्तै प्रभावशाली ढङ्गले गर्ने, साथसाथै व्यङ्ग्य र हास्यको पुट पनि भर्दै जाने यस्ता अति सुन्दर गुणहरूले गर्दा र सेवा, सहयोग, विनम्रता र लगनशीलतामा श्रेष्ठभन्दा श्रेष्ठ मानिससित पनि जोडी लाग्ने जस्ता खुबीले गर्दा उहाँ सबैथरी जनतामा, त्यसमा पनि ग्रामीण जनता र सहरबजारका बौद्धिक मानिसमा अत्यन्त लोकप्रिय र प्रभावशाली हुनुहुन्थ्यो। उहाँका दिनदिनै जस्तो विकसित हुँदै गएका यी गुण र क्षमताबाट त म पो यहाँ झन्झन् परिचित र आकर्षित हुँदै गैरहेथेँ। त्यसमा थप श्री देवीप्रसाद उप्रेती अत्यन्त धीर, कम बोल्ने तर भनेजति भन्दा धेरै कुरा कामैले गरेर देखाइदिने व्यक्तित्व देखी म मनमनै झन् गदगद भएको थिएँ।

पछि एकपल्ट झापाको घैलाडुबामा र काठमाडौँमा समेत मैले उहाँलाई भेट्न र उहाँका गुणकारी गम्भीर विचारहरू सुन्न पाएको थिएँ तर उहाँसित त्यसभन्दा लामो सङ्गत गर्ने मौकाचाहिँ कहिल्यै परेन । पोखरीको त्यस स्कूलमा पनि साहित्यगोष्ठी राखियो र विचारको आदानप्रदान गरिएको थियो ।

त्यहाँ सम्भवतः दुईरात बिताएपछि म त्यहाँको अर्को महत्त्वपूर्ण ठाउँ चुहानडाँडामा पुगेँ । त्यहाँ भर्खरभर्खर "इन्टर कलेज" को स्थापना भएको थियो र दार्जिलिङका नामी साहित्यकार एवं विद्वान् श्री राजनारायण प्रधान त्यसको प्रिन्सिपल हुनुहुन्थ्यो । त्यहाँ म एकरात बसेँ र कलेजका शिक्षकगण र विद्यार्थीहरूबीच साहित्यिक-बौद्धिक आदानप्रदान गरी म त्यहाँबाट बिदा भई सङ्क्रन्ति मूलपानीनामक स्थानमा गएँ । त्यहाँ रानी जगदम्बाले दिएको आर्थिक अनुदानबाट धारापानीदेखि अरू कैयन् सामाजिक अनुष्ठान सुरु भएका थिए। त्यहीँ "शारदा विद्यालय" नामको हाई-स्कूल थियो जहाँ श्री गणेशबहादुर प्रसाईं प्रधानाध्यापक हुनुहुन्थ्यो । उहाँसित मेरो परिचय काठमाडौँमै भैसकेको थियो। उहाँको साहित्यिक प्रतिभासित राम्ररी नभए पनि म त्यसको आत्माबाट प्रभावित भैसकेको थिएँ । त्यसैले मैले उहाँसित विशेष साहित्यिक र वैचारिक आदानप्रदान गरेँ । थप, स्कूलमा आयोजित साहित्यगोष्ठीका माध्यमबाट म लाभान्वित भएँ र आफ्ना धारणासमेत व्यक्त गर्ने मौका पाएँ ।

यसरी मलाई पोखरी, चुहानडाँडा र सङ्क्रान्तिमूलपानीको बसाइले धेरै नै आनन्दित र आह्लादित मात्र पारेको होइन कि वैचारिक रूपमा पनि मलाई निक्कै ठूलो आर्जन भयो भन्ने लाग्यो । मेरो उत्साह र उमङ्ग पनि पहाडी यात्रासँगै अगिअगि बढ्दै गयोजैँ लाग्यो ।

आठराईबाट म तेह्रथुमबजार पुगेँ, आजको म्याङलुङ बजार । गएको भोलिपल्टै त्यहाँको हाई-स्कूलमा साहित्यिक कार्यक्रमको आयोजना गरियो । बजारका श्रेष्ठ परिवार र नजिकै गाउँका सुवेदी परिवारहरू मेरा बढी सुपरिचित परिवार हुनपुगे । त्यो बजार जतिसुकै सानो भए पनि र त्यसको शैक्षिक जनसङ्ख्या जतिसुकै

थोरै भए पनि त्यसको साहित्यिक, सांस्कृतिक, वैचारिक र प्रत्यक्षरूपमा राजनैतिक तैयारी भने निकै धारिलो थियो । तुम्बाहाम्फे परिवारबाट त्यसको नेतृत्व हुँदै थियो ।

त्यसपछि म चैनपुर पुगेँ । चैनपुरबजार मलाई पाल्पा तानसेनको ठूलो बजारको एक चिटिक्क परेको राम्रो टुक्रा बजारजस्तो अनुमान भयो । काठमाडौँका पूर्व विद्यार्थीनेता (लाल कम्युनिस्ट) विजयप्रसन्न प्रधान त्यहाँ स्थापित इन्टर कलेजका प्रिन्सिपल हुनुहुन्थ्यो । त्यहाँको साहित्यिक-सांस्कृतिक-बौद्धिक चेतना पनि राम्रो थियो । त्यसैले त्यहाँ पनि स्थानीय बौद्धिक साहित्यिक समुदायसित राम्रो आदानप्रदान भयो । मेरा आदरणीय मित्र श्री वल्लभमणि दाहालज्यूको घर चैनपुर बजारबाट पूर्वस्थित प्रसिद्ध मादीगाउँमा भएकाले एकरातको निम्ति मात्र भए पनि म त्यहाँ गएँ। स्वाभाविक रूपले दाहालज्यूकै अतिथि पनि बने । अनि भोलिपल्ट स्कूलमा साहित्यिक कार्यक्रम गरी बिदा भएँ ।

चैनपुरबाट सोझै अरूण नदी तरेर भोजपुर जान निकै नजिक पर्थ्यो तर मलाई दिङ्ला पनि पस्ने इच्छा भयो र दिङ्ला पुगेँ । दिङ्लाको संस्कृत पाठशाला सय वर्षभन्दा बढी समयदेखि प्रसिद्ध छँदै थियो तर त्यहाँको पाठशालाक्षेत्रले बजारको रूप लिइसकेको थिएन । खालि संस्कृत शिक्षाको प्रसिद्ध केन्द्र भएको र ब्राह्मण र क्षेत्रीहरूको विशेष बोलवाला भएकोले त्यो एक प्रकारले केही बाक्लो गाउँजस्तै लाग्दथ्यो । म त्यहाँ श्रीपञ्चमीको सांस्कृतिक-धार्मिक चुम्बकीय क्षेत्रभित्र प्रवेश गर्न पुगेछु । अरू ४ दिन पर्खनुपर्थ्यो त्यो पर्व मनाउन । तर मजस्तो नौलो भरखरको (काठमाडौँवासी) "नेपाले"युवकलाई उहाँहरू चाँडै किन फुत्किन दिनुहुन्थ्यो र ! मलाई भनियो– "सहरबजारको मान्छे । यति लामो बाटो हिँडेर आउनुभएछ । अलिक दिन आराम पनि गर्नोस् । हामी आफ्ना पाहुनालाई सकेसम्म कुनै दुःख हुन दिनेछैनौँ। हाम्रो संस्कृत पाठशालामा प्रतिवर्ष श्री पञ्चमीको उपलक्षमा सधैँ विशेष कार्यक्रम पनि हुन्छ । सो सकी जानुहोला ।" आखिर म त हिँडेको थिएँ, आफ्नै स्वेच्छिक भ्रमणमा जाडोको छुट्टी मिलाएर । त्यसैले म त्यो वनकुञ्जजस्तो ग्रामीण पर्यावरणमा केही गृहस्थहरूको पाहुना बन्दै र ग्रामीण प्रबुद्ध

पण्डितजीहरूको अनेकथरी पौराणिक र व्यावहारिक कुरा सुन्दै निक्कै रमाएर बसेँ। त्यसबेला दिङ्ला भोजपुर जिल्लाकै एक अंश थियो। त्यहाँ नेपाली काङ्ग्रेसका जिल्ला अध्यक्ष सापकोटाज्यूसित पनि मेरो अल्पकालिक मित्रता कायम भयो। अनि श्रीपञ्चमीका दिन म नवागन्तुक त्यहाँको समारोहको प्रमुख अतिथि बनाइएँ र स्कूलका र वरपरका साहित्यकारहरूका कविता सुन्दै, पुरस्कार बाँड्दै मैले प्रसन्न चित्तले आफ्ना समसामयिक भावना व्यक्त गरेँ। त्यतिबेला दिङ्लाको त्यो पाठशाला परिसरमा "चापागाईं"हरूको बाहुल्य थियो।

भोलिपल्ट म दिङ्लाबाट सजिलैसित भोजपुरबजार पुगेँ। भोजपुर र चैनपुर बजारमा साह्रै ठूलो फरक लागेन मलाई। भोजपुरका दुई टुक्रा बजार थिए। माथिको अंश ठूलो बजार र तलको अंश सानो टक्सार बजार। टक्सारमा तामा, पित्तल र काँसका भाँडाकुँडा बनाउने विशेष काम हुन्थ्यो। "भोजपुरे खुकुरी" जस्तै "भोजपुरे करुवा" विशष प्रसिद्ध थियो। त्यसैले भोजपुरबजार चैनपुरबजारभन्दा केही बढी विकसित र अलि ठूलो लाग्दथ्यो। भोजपुर हाई-स्कूलका प्रधानअध्यापकमा मेरा सुपरिचित आदरणीय साहित्यकार मित्र श्री शरदचन्द्र शर्मा भट्टराई हुनुहुन्थ्यो। उहाँले यहींको राई परिवारसित वैवाहिक सम्बन्ध जोडिसक्नुभएको थियो। स्कूलका विद्यार्थीहरूमा साहित्यिक जागरण राम्ररी विकसित हुँदै थियो। अनि त्यहाँ मेरा अर्का आदरणीय अग्रज मित्र श्री हर्कबहादुर श्रेष्ठको पनि घर थियो। उहाँसित पनि मेरो भेट भयो। उहाँसित म २०१०-२०११ सालमा भद्रगोल जेलमा थुनिँदा सँगै बसेको थिएँ। उहाँको व्यक्तित्वको ममा साह्रै गहिरो र अति हार्दिक प्रभाव परेको थियो। उहाँ एक सशक्त, त्यागी किसान नेता हुनुहुन्थ्यो। यसरी भोजपुरमा पनि ३ रातजति बसियो। एक दिन स्कूलको साहित्य गोष्ठीमा भाग लिई म धनकुटाका निम्ति बिदा भएँ। श्री परशुप्रधान र शैलेन्द्र साकारज्यूहरूसित मेरो मित्रता त्यहींको बसाइमा सुरु भएको थियो।

भोजपुरबाट धनकुटा पुग्न २०/२५ ठाउँमा लेउतीखोला र पछि अरूणनदी तर्नुपर्ने हुन्थ्यो। त्यसैले यस यात्राले मलाई पनि हैरानै पार्‍यो। तर रहरले हिँडेको यात्रुलाई जस्तै कर पर्दा नि त्यस

कष्टबाट हार्न र त्यहाँको दु:खलाई सराप्न मन लाग्दैन रैछ। त्यसैले लट्ठी टेक्दै ग्रामीण यात्रुहरूको जानीनजानी सिको गर्दै म पनि मज्जैले धनकुटाबजार उक्लिहालेँ।

पछि २०१७ साल श्रावण महिनामा धनकुटास्थित डिग्री कलेजमा म पढाउन आए पनि अहिले त म धनकुटाको निम्ति अपरिचित नै थिएँ। तर धनकुटा डिग्री कलेजका कामु प्रिन्सिपल श्री ज्ञानेन्द्रबहादुर कार्की (दिवङ्गत) र शिवकुमार श्रेष्ठ मेरा वाम विचारका मित्र हुनुभएकाले मलाई उहाँहरूसित ३/४ दिन बिताउन केही पनि गाह्रो भएन। फेरि थप, श्री कार्कीज्यू अत्यन्त दिलदार, उदार, खुलामनको, जसलाई पनि आफ्नो प्रेमले जिती साथी बनाइहाल्ने, साह्रै मीठो बोल्दै तर्क गर्ने, आफ्नो क्षमता, सीपयुक्त स्वभाव प्रदर्शन गर्दै अभिव्यक्ति दिन सक्ने व्यक्ति हुनुभएकोले म त अनायासै उहाँको प्रेममा सुरुमै बल्झिहालेँ। उहाँले बस्नलाई पनि आफ्नै डेरामा ठाउँ दिनुभो। हुँदाहुँदा गफको आनन्द आदानप्रदान गर्ने सिलसिलामा उहाँले आफ्नो निजी डायरीबाट केही महत्त्वपूर्ण अंशहरूसमेत सुनाउनुभो। त्यति छिट्टै उहाँलाई मेरासामु यति बिघ्न खुल्न के कुराले उमङ्गित पाऱ्यो म जान्दिनँ। तर मैले पनि उहाँलाई आफ्ना विचार र भावना खुलस्त राखेँ र उहाँले पनि आफ्नो सम्पूर्ण हार्दिकता मेरासामु खन्याइदिनुभो। उहाँको यही अति उच्च गुणले गर्दा नै हुनुपर्छ उहाँले मलाई पछि धनकुटा कलेजमा पढाउन आउने अनुरोध गर्दा जब मैले केही व्यावहारिक प्रश्न राखेँ, उहाँले अङ्ग्रेजीमा भन्नुभो– "Let us sing and swing together" (अर्थात् आउनोस् न मात्रै, हामी दुवै जुहारी गाउँदै सुख-दु:ख बाँडौँला) अनि त मेरो कवितात्मक मन उर्लिहाल्यो र भनेँ, “लौ हुन्छ। म पक्कै आउने भएँ।”

अनि श्री शिवकुमार श्रेष्ठज्यू पनि मेरा समवयस्कजस्तै हुनुभए पनि कुराकानीमा उहाँ निक्कै यथार्थवादी, परिपक्व, भावनामा नबग्ने, सोचीसम्झी बोल्ने, आफ्नो दृढ विश्वासलाई नि:शङ्कोच भन्न सक्ने हुनाले हाम्रो स्वभावमा र प्रकृतिमा कैयन् भिन्नता भए पनि मैले उहाँको इमानलाई सधैँ सराहना र सम्मान गरेँ।

धनकुटाबजारको के कुरा गर्नु? पहाडको ठाउँ भए पनि सुदूर पश्चिमको डोटीबजारजस्तै सुदूरपूर्वको प्रमुख प्रशासनिक केन्द्र

धनकुटा ! श्री ३ महाराज देवशमशेरलाई धपाएर केही दिन राखेको ठाउँ ! २००७ सालपछि त्यसभन्दा पहिलेहेरी प्रशासनिक अधिकारक्षेत्र केही सीमित भए पनि त्यसको ऐतिहासिकता र महत्त्व ठूलो थियो । शिक्षाको राम्रो सुदृढ र विकसित पृष्ठभूमिले गर्दा यसै पनि यो पहाडको क्षेत्र सबैको आँखाको तारोझैँ थियो । त्यसैले म २०१६ सालमै त्यहाँ पुगेको बेलामा पनि त्यस बजारको बौद्धिक एवं साहित्यिक समुदायसित राम्रै आदानप्रदान भयो । अरू २०१६ फागुन ७ गतेका दिनसम्म म त्यहाँ भएकाले मैले टुँडिखेलमा आयोजित प्रजातन्त्र दिवस समारोह पनि हेर्न पाएँ । सर्वश्री कविराज नरनाथ पोखरेल, प्रा. हेमचन्द्र पोखरेल, राजनीतिज्ञ विद्यानाथ पोखरेल, प्रसिद्ध कवि श्री खगेन्द्रकुमार प्रधानाङ्ग आदि साहित्यकारहरूसित त्यसैबेला मेरो साक्षात्कार भएको थियो ।

अनि भोलिपल्ट म धरान ओर्लें । त्यहाँ आदरणीय मित्रवर श्री विएकृष्णज्यूकहाँ अडिएँ । अनि जुट्न सम्भव स्थानीय साहित्यकारहरूसँग व्यक्तिगत भेटघाट गरी म तेस्रो दिन विराटनगरबाट जोगबनी हुँदै भारतीय रेलमार्गबाट वीरगन्ज पसी काठमाडौँ आइपुगेँ ।

यसरी मैले २००८ सालदेखि २०१६ सालको अन्तसम्ममा साहित्यिक-शैक्षिक र बौद्धिक क्षेत्रमा जसरी क्रमशः अग्रपङ्क्ति लिँदै थिएँ, त्यसैको परिणामस्वरूप मलाई सर्वप्रथम कालिङपोङ र दार्जिलिङको नेपाली जातीय, भाषिक एवं साहित्यिक चेतनामा अग्रगामी र वैचारिक क्षेत्रमा निक्कै सक्रिय समाजसित परिचित हुने मौका प्राप्त भयो । म पहिलोपल्ट नेपालको परम्परावादी समाजबाट बाहिर निस्केर कालिङपोङ र दार्जिलिङलाई देख्न पाएकोले अवश्य पनि मलाई प्रत्यक्षभन्दा परोक्षरूपमा धेरै गहिरो प्रभाव पारेको हुनुपर्छ भन्ने लाग्यो । त्यस्तै मैले सानैदेखि पाल्पा-तानसेन, प्युठानबजार, बैतडी र काठमाडौँ उपत्यकाको परम्परावादी समाज मात्र देख्न पाएकोमा अहिले भ्रमणले कालिङ्पोङ र दार्जिलिङसमेत धेरथोर प्रभाव ग्रहण गरेर पूर्वीनेपालको इलाम र धरानको समाजलाई देखेर आफ्नो जीवनमा केही न केही नूतनता र गतिशीलता थपिएको अनुभव गरेको थिएँ । त्यसैले यस भ्रमणले मलाई यी नयाँ ठाउँमा साहित्यिक-बौद्धिक

प्रतिभाहरूको सम्पर्कमा आउँदा एउटा नयाँ ऊर्जा प्राप्त भएको थियो । साथै मैले पनि आफ्नो केही सुस्पष्ट परिचय दिने मौका पाएको थिएँ ।

## २०१७ श्रावण– २०१८ मङ्सिरसम्म धनकुटामा

२०१७ श्रावण- २०१८ मङ्सिरसम्म म धनकुटा डिग्री कलेजमा पढाउन बस्दा पनि पढाउने र त्यसको तयारी गर्न लाग्ने समयबाहेक अन्य फुर्सदको समयमा मेरो काम स्वअध्ययन गर्ने र लेख्ने नै थियो । त्यसबाहेक मैले त्यति बेलासम्म लेखिसकेका सामग्री छाप्ने कुरामा पनि म सचेत नै थिएँ। त्यसैले मैले २०१६ सालमै लेखिसकेको काव्य “तिमीलाई देख्दा” २०१७ सालमा र काठमाडौँ बस्दै प्रथम मस्यौदा गरिसकेको र केही परिष्कार गर्न बाँकी खण्डकाव्य “साहिँली मैयाँ” २०१८ सालमा प्रकाशित भयो काठमाडौँबाट ।

धनकुटामा मेरो लेखनको प्रेरणास्रोत एक त त्यहाँको सल्लेर वन र त्यहाँबाट देखिने सम्पूर्ण प्राकृतिक सौन्दर्य नै हो। अनि मलाई बौद्धिक र भावनात्मक रूपले प्रभावित गर्ने मित्रहरूमा सर्वश्री ज्ञानेन्द्र कार्की (तात्कालिक कलेजका प्रिन्सिपल (दिवङ्गत), कथाकार बस्नेत (ज्ञानेन्द्रजीका भानिज दिवङ्गत), प्रा. हरिहरराज जोशी, रामनारायण श्रेष्ठ (दिवङ्गत), प्रा. हेमचन्द्र पोखरेल (दिवङ्गत) इत्यादि हुनुहुन्थ्यो। यहीँतिर प्रा. पोखरेलज्यूका विषयमा थप केही कुरा भन्नु जरुरी छ। उहाँमा काव्यलाई पारख गर्ने असाधारण शक्ति र क्षमता थियो। त्यसैले मैले उहाँलाई त्यतिबेला मात्र होइन, धरानमा २०२२ सालसम्म बस्दा र पछिपछिसम्म पनि अनुरोध गरेथैँ, “गुरु, तपाईंको प्रतिभा र विद्वत्ताको अधिकतम त छोड्नोस्, न्यूनतम उपयोग गर्न पनि तपाईंले काठमाडौँ जानुपर्छ र त्रि.वि.को केन्द्रीय नेपाली विभागमा पढाउनुपर्छ” तर गुरुलाई आफ्नै घर कचेँडेको गाईको दूध र बारीका सुन्तला, जुनार, अम्बा आदि फलफूल नै बढी प्रिय भए । मेरो अनुरोध काम लागेन । तैपनि मैले उहाँ काठमाडौँ आउँदा नेपाल भाषाका आदरणीय साधकज्यूहरूलाई बिन्ती गरी महाकवि श्री चित्तधर हृदयको महाकाव्य “सुगत सौरभ” माथि प्रवचन दिने व्यवस्था मिलाउन सकेँ । अनि उहाँहरूले गुरुको जेजस्तो सराहना र प्रशंसा

गर्नुभो मन मुटुदेखि नै, त्यो उहाँहरूलाई नै भेटेर सुन्दा मात्र अऴ बढी सजीव र रोचक लाग्नेछ ।

त्यसैले अहिले फर्केर हेर्दा र सम्झँदा मात्र पनि, धेरै खुसी र गौरव बोध हुन्छ। धनकुटाको माटो, पानी र हावाले र त्यहाँका त्यस समयका मेरो सम्पर्कमा आउनुभएका जनताले मलाई जे-जति माया र आशीर्वाद दिनुभो, त्यसबाट म आफू सक्दो किसिमले साहित्यिक अभियानमा लागी नै रहेँ। ... अँ २०१८ सालमा त्यहाँको बालिका मा.वि.को एउटा कविगोष्ठीको सम्झना पनि मलाई उल्लेख-योग्य लाग्दछ । त्यस दिनको कविगोष्ठीमा मैले एउटा सानो कविता सुनाएँ। पछि कवि तुलसी दिवसले मलाई भन्नुभयो– "म त भित्रभित्र जुरुक्कजुरुक्क उम्लिएँ, त्यो कविता सुनेर।"अनि त्यति बेला त्यहाँ उपस्थित धनकुटाका तात्कालिक डिएसपी महेन्द्र सिंहले भनेछन् रे– "भट्टले मौका छोपी स्कूलभित्र त्यस्तो आपत्तिजनक कविता सुनाए। बाहिर गोष्ठीमा पाठ गरेको भए मैले ठाडै पक्रेर थुनिदिने थिएँ।" त्यसबेलाको २४/२५ वर्षे म युवकमा पञ्चायती व्यवस्थाको विरुद्ध त्यत्तिको जोस आउनु सायद स्वाभाविकै ठान्नुपर्ला कि ।

त्यसबेला त्यस धनकुटाकलेजमा पढ्ने कैयन छात्रछात्रा निकै ओजस्वी थिए। हामी कलेजमा प्रत्येक शुक्रबार कलेज-कक्षा सिद्धिएपछि कविगोष्ठी गर्ने गर्थ्यौं र सबैले सप्रेम कविता सुनाउने गर्थ्यौं। ती ओजस्वी छात्रछात्रामध्ये केही नामहरू निम्न प्रकार छन्– सर्व श्री प्रा.डा. दयाराम श्रेष्ठ, योजनाविद् प्रा. डा. महेश्वरमान श्रेष्ठ, प्रसिद्ध कवि एवं लोकसंस्कृतिविद् एवं प्राज्ञ तुलसी दिवस, विदुषी षष्टिका श्रेष्ठ, प्रा. जमुना श्रेष्ठ, प्रा. इन्द्राणी (श्रेष्ठ) प्रसाईं, राजेन्द्र श्रेष्ठ आदि ।

## २०१८ साल मङ्सिर–२०२२ साल माघसम्म धरानमा

२०१८ साल मङ्सिरको आखिरतिर म धनकुटाबाट धरानस्थित महेन्द्र डिग्री कलेज (जहाँ "कला" र "व्यापार शास्त्र" का दुई सङ्काय स्नातक तहसम्म चल्थे) मा सरेँ। त्यसबेलासम्मको धरान आजजस्तै जताततै फिँजिएको र भरिएको नभए पनि पुरानो बजार र नयाँबजार गरी दुई लङमा विस्तारित थियो। कलेजमा भारतका र

नेपालका गरी कम्तीमा २०/२५ जना प्राध्यापकहरू थिए। त्यहाँको साहित्यिक, सांस्कृतिक र विशेषगरी राजनैतिक चेतना विशेष उन्नत थियो। धेरैजसो प्राध्यापकहरूले कलेजमा मात्र पढाई सुख पाउन्नथे र ट्युसन पनि पढाउनै पर्थ्यो। विशेषगरी विद्यार्थीको आवश्यकता पूरा गर्न र साथै आफ्नो आवश्यकतालाई ध्यानमा राखी भविष्यका लागि आफ्नो बलियो आर्थिक आधार खडा गर्न पनि। बिहान कलेज चालू हुने हुनाले धेरैजसो प्राध्यापकहरू साँझपख बजारमा चिया खान, गफ गर्न र साँझको भ्रमण गर्न निस्कन्थे। त्यसैबेला आ-आफ्ना चाख, जाँगर, चेतना, उत्साह, उमङ्ग र स्वभावअनुसार आदान-प्रदान हुन्थ्यो। तर धेरैजसोचाहिँ राजनैतिक, वैचारिक, बौद्धिक, सामाजिक, सांस्कृतिक, साहित्यिक कुरा हुन्थे। त्यसैले आपसमा कुनै एक वा अनेक विषय लिई जतिसुकै मतमतान्तर भए पनि, स्वभावका खासखास भिन्नतामा बाहेक, अत्यन्त हार्दिक र खुलस्त आदानप्रदान हुन्थ्यो। गोविन्द भट्टजीको ससुराली पनि धरानमै भएकाले एकपल्ट मैले त्यस ठाउँमा उहाँलाई पनि देखेको थिएँ।

व्यक्तिगतरूपमा चाहिँ मेरा केही अभिन्न मित्रहरूमा सर्वप्रथम हुनुहुन्थ्यो आदरणीय कृष्णप्रसाद श्रेष्ठ (बिए कृष्ण, धरान) र उहाँसित मेरो प्रथम परिचय २०१४ साल काठमाडौँ फोहरादरबारमा भएको नेपाल कम्युनिस्ट पार्टीको दोस्रो महाधिवेशनमा भएको थियो। त्यसपछि म २०१६ सालको माघ-फागुनतिर पूर्वी नेपालको स्वेच्छिक भ्रमण गर्न झापाबाट पहिले कालिङपोङ र दार्जिलिङ पसी इलाम, पाँचथर, ताप्लेजुङ, आठराई, तेह्रथुम, चैनपुर, दिङ्ला, भोजपुर र धनकुटा हुँदै धरान आइपुग्दा कृष्णजीसित प्रारम्भिक मित्रताको जग बसेझैँ लाग्छ। अनि त म धनकुटाबाट धरान आई "निनी-निवास" मा डेरा सुरु नगरुन्जेल १ महिना म कृष्णजीकहाँ पूरै निसङ्कोच पाहुनाको रूपमा बसेको थिएँ। त्यसअघि २०१७ साल साउनमा धनकुटा जाँदा पनि म धरानमा कृष्णजीकहाँ नै बास बसेको थिएँ। यसरी २०१४ देखि उहाँको र मेरो व्यक्तिगत सम्बन्ध बीचबीचमा जतिसुकै अन्तराल परे पनि अत्यन्त आत्मीय किसिमले विकसित हुँदै आएको देखिन्छ। अनि धरानमा ४/४ वर्षसँगै बस्दा हामी एकअर्काकहाँ पानी पँधेरो गर्दाझैँ निसङ्कोच आवत-जावत गर्ने गथ्यौँ। अनि सँगै

विराटनगर र धरानका कलेजमा अङ्ग्रेजीको प्राध्यापकको आवश्यकता पर्दा पनि कृष्णजीकै आग्रहले मैले विराटनगरको सट्टा धरानलाई रोजेको थिएँ ।

"निनी-निवास" मा मेरो डेरा हुन जानुमा पनि मेरो आफ्नो त कुनै विशेष अग्रसरता थिएन । यसलाई पनि कृष्णज्यूले नै खोज्ने र बन्दोबस्त मिलाइदिने काम गर्नुभएको हो। तर यस निवासको प्रमुख निनी (नेपाल भाषामा 'फुपू') हुनुभएकोले मेरो पाल्पाको बाल्यकालको सम्झनाले यहाँ मितेरी लाउन आइपुगेको छ। हामी सम्वत् २००० सालदेखि पाल्पा-तानसेनको सिलखानटोलमा एउटा ठूलो घर र अरू ठूलो बारी समेत भएको घरमा डेरा गरी बस्थ्यौं। त्यस टोलमा एकै घरका दुई बहिनीहरू (जसलाई निनी भनिन्थ्यो) अविवाहिता हुनुहुन्थ्यो। बिस्तारै बिस्तारै म त्यस घरमा विशेष स्वास्थ्यलाभ गर्न दिनदिनै कुखुराको फूल खाने बन्दोबस्तका साथ सम्पर्कित भएँ । किनभने त्यति बेलाको चलनअनुसार हाम्रो घरमा कुखुराको फुल भित्र्याउन हुन्नथ्यो। यसरी म पाल्पा तानसेनबाटै नेवार भाषा (नेपाल भाषा) र नेवार संस्कृतिसित ८-९ वर्षको उमेरदेखि नै राम्रैगरी सुपरिचित भए। जसरी पाल्पा-तानसेन नेवारहरूको घनाबस्ती भएको ठूलो बजार हो, धरान पनि त्यस्तै भएकाले हुनुपर्छ, म यहाँ कृष्णजी र निनीको परिवारसित अत्यन्त सहजताका साथ एकाकार भएर बसेँ। अनि २००६-२०१६ सम्मको समयमा पनि म काठमाडौँउपत्यकामा नेवार समुदायसितै एक भएँ । मैले पहिलोपल्ट नेवार भाषा बोल्न सिकेको पनि पाल्पा तानसेनमै हो। त्यसले मलाई काठमाडौँउपत्यकामा काम दियो ।

धरानमा ४ वर्ष बस्दा मैले जीवनमा अनेक नयाँ अनुभवहरू प्राप्त गरेँ । एक त म प्रत्येक जाडोको छुट्टीमा विराटनगर हुँदै बनारसमा आउजाउ गर्थें । त्यहाँका नेपाली कम्युनिस्ट र शिव भट्टराईसहितका अनेक साहित्यकारहरूसित पनि भेट हुन्थ्यो। बेलाबेलामा कविगोष्ठीमा पनि भाग लिइन्थ्यो । त्यहाँ मेरो सर्वश्री पुष्पलाल श्रेष्ठ, तुलसीलाल अमात्य, हिक्मतसिंह भण्डारी, डा. वल्लभमणि दाहाल, पुण्यप्रताप राणा, भरतराज जोशी आदि कम्युनिस्ट नेता-कायकर्ताहरूसित भेट हुन्थ्यो । अनि देशको राजनैतिक अवस्थाबारे अत्यन्त खुलस्त र

व्यापक एवं हार्दिक आदान-प्रदान हुन्थ्यो । २०१९ सालमा बनारसमै भएको नेकपाको तेस्रो महाधिवेशनपछि श्री तुलसीलाल अमात्य पार्टीको महासचिव भएपछि पार्टी एउटै साझा विचार र कार्यक्रम लिएर हिँडेको देखिन्नथ्यो । पार्टीका शीर्षस्थ नेताहरूबीचको मतभिन्नता स्वत: प्रस्टै अनुभव हुन्थ्यो । यसबाट कम्युनिस्ट पार्टीप्रति सहानुभूति राख्ने कुनै पनि व्यक्तिलाई कत्ति पनि सन्तोष हुँदैनथ्यो ।

बनारसको यात्राबाहेक म एकपल्ट स्वेच्छिक भ्रमणका निम्ति मद्रास हुँदै पण्डिचेरी सम्म पनि पुगेको छु । त्यहाँ दिवङ्गत विश्वप्रसिद्ध महात्मा अरविन्द घोषको आश्रम थियो । त्यहाँ दुई दिन बसी उहाँका केही गहकिला साहित्यिक र दार्शनिक कृतिहरू किनी फर्केको थिएँ । यस भ्रमणले मलाई जीवनमा पहिलोपल्ट समुद्रको दर्शन गरायो ।

धरान निनी-निवासमा बस्दा म सुत्ने कोठासित जोडिएको उत्तरपट्टिको कोठामा अर्थशास्त्रका प्राध्यापक श्री गणेशराज शर्मा बस्नुहुन्थ्यो । उहाँ अहिले नेपालको एउटा अत्यन्त ख्यातिप्राप्त वरिष्ठ अधिवक्ता हुनुहुन्छ । उहाँ एउटा सशक्त चिन्तक, बुद्धिजीवी र लेखकका रूपमा पनि प्रसिद्ध हुनुहुन्छ । अनि त्यतिबेला हामी धरानमा सँगै बस्दा र कलेजमा पढाउँदा पनि मैले उहाँलाई अत्यन्त अध्ययनशील, तर्कशील, उत्साहवर्द्धक र मृदुभाषी पाएथेँ । अक्सर हामी साँझ डुल्ने बेलामा अनेक विषयमा गफगाफ गर्थ्यौं । मैले आफूले लेखेको कविता र अन्य रचना सुनाउने गर्थें । उहाँसितको सङ्गतले मलाई पहिलेभन्दा बढी पढ्न मनपराउने बनाउँदै लग्यो । सुरुसुरुमा त उहाँका र मेरा कुरा, विचार, दृष्टिकोण धेरै नजिक छन् जस्तो लाग्थ्यो तर पछिपछि त्यो अनुभवमा फरक पर्दै गएको देखियो । तर हामीबीचको मतभिन्नताले हामीलाई कहिल्यै कटुताको उपहार बाँड्न सकेन । त्यसपछि सायद २ वर्षपछि उहाँले धरान छोड्नुभयो ।

अर्का मेरा घनिष्ठ मित्र हुनुभयो, यज्ञप्रसाद आचार्यज्यू । म सानैदेखि राजनैतिक रङ्ग चढेको र पार्टीकार्यकर्ताको नाताले किसानदेखि निम्न र मध्यम वर्गका मानिसहरूबीच सहजै नजिक हुन जाने बानीको मानिस भएकाले म आफ्नो सुपरिचित साथीको घरमा आउजाउ गर्न कत्ति पनि असजिलो मान्दिनथेँ । फेरि कृष्णजीका र

यज्ञप्रसादजीका बुबा-आमाका निम्ति त हामी उस्तै छोरासरह भएकाले उस्तै प्रेम बर्सिनु पनि स्वभाविकै थियो । आमाको जात त झन् हार्दिकतापूर्वक सबैमा कल्याण वर्षा गर्ने हुन्छ । यज्ञज्यूसितको मेरो मित्रतालाई २०१७ पुष १ गतेपछिको पञ्चायती राजनीतिले २०२१ साल चैत्रमा आएर अलग्याइदियो । म पञ्चायतको विरुद्ध धरानमा जुलुसै निकाल्न र भाषण ठोक्न अग्रसर भएँ। तर उहाँलाई लाग्यो– "भट्ट सन्क्यो ।" तर उहाँको मप्रतिको सद्भावना र कल्याण कामनामा कहिल्यै फरक परेन । हामी दुवै आआफ्ना बेग्ला बाटा हिँड्दै रह्यौँ ।

त्यसपछिका मेरा जिगरीदोस्त हुनुहुन्थ्यो– प्रा. यन. डी. पाण्डे हृदयदेखि नै अन्तर्राष्ट्रवादी । उहाँ अत्यन्त प्रबल किसिमले तर्क गर्न सक्ने, तर्क बढ्दै गएपछि निकै तात्ने र झन्डै थरथराउने गर्नुहुन्थ्यो । तर हृदयका साँच्चै नौली जस्ता, एकदमै भोलेबाबा । उहाँले मलाई सम्बोधन गर्दा बातैपिच्छे 'जी'का 'जी' लगाए पनि मलाई आफ्नै आमाको पेटबाट जन्मेको भाइजस्तो माया र विश्वास गर्नुहुन्थ्यो । तर उहाँलाई विमतिका कुरामा चित्त बुझाउन झन्डैझन्डै दाँतबाटै पसिना बगाउनुपर्थ्यो ।

२०२१ साल मङ्सिर २८ गतेका दिन कोसीनदीको किनार बराहक्षेत्रमा मेरो सुश्री सुशीला खरेलसित विवाह सम्पन्न भयो । मेरो तर्फबाट जन्ती जाने मित्रहरूमा सर्वश्री बिए कृष्ण, यज्ञप्रसाद आचार्य, यन.डी. पाण्डे र कृष्णनाथ शर्मा (घिमिरे) (तात्कालिक नेपाल बैङ्क धरानका प्रबन्धक) ४ जना हुनुहुन्थ्यो। अनि दुलहीपट्टिबाट उपस्थित हुनेहरूमा सर्वश्री रत्नप्रसाद खरेल (दिवङ्गत), (सुशीलाका काका एवं प्रसिद्ध राजनीतिज्ञ), केशवप्रसाद खरेल, मोहनकृष्ण खरेल, गीताकृष्ण खरेल, पुरुषोत्तम खरेल (दिवङ्गत) र सुशीलाका आदरणीय दिदी, भाउजूहरू (क्रमशः रुक्मिणी र सरिता) हुनुहुन्थ्यो ।

२०२२ साल चैत्र २९ गते धरानमा एउटा ठूलो राजनैतिक काण्ड उठ्यो। पञ्चायत व्यवस्थाका विरुद्ध धरानका ठूलादेखि ससाना विद्यार्थीले समेत ठूलो जुलुस निकाले। अञ्चल प्रशासनले लाठी चार्च गरी आतङ्क मच्चायो। प्रा. एन. डी. पाण्डेले मकहाँ आएको बेला

त्यसको सूचना दिनुभयो र हामी दुवै हेर्न गयौँ । त्यही टोलको प्रहरी चौकीमा तात्कालिक अञ्चलाधीश श्री वीरबहादुर शाहीलाई धरानका ५०/६० जना गण्यमान्य नागरिकले त्यस्तो अत्याचार नगर्न अनुरोध गरे । अञ्चलाधीशले उल्टो जवाफ दिए– "तपाईंहरू आफैँ बोक्सी, आफैँ झाँक्री। मलाई सब थाहा छ। आवश्यक परे यहाँ लास पनि पल्टला ।"

मलाई त्यो अन्तिम वाक्य सुन्नासाथ करेन्ट लागेझैँ भयो। मैले मनमनै भने– हेरौँला हामी पनि, कसरी लास पल्टँदो रहेछ । अनि अञ्चलाधीशमाथि सैनिक ब्यारेकतिर गएको एक घण्टाभित्र मैले प्रहरी शक्तिलाई अस्पतालक्षेत्र छोड्न बाध्य पारी पुरानो बजारदेखि नयाँ बजारसम्म अञ्चलाधीशविरुद्ध नाराजुलुस गरी छाताचोकमा उक्लेर भने– "गोलीचहिँ पहिलो गोली मलाई लाग्ला। तर धरानका जनता जिउँदै छन् ।" बस् प्रशासनलाई निहुँ भैहाल्यो। २०२२ साल वैशाख २ गते म कलेजमा हाजिर हुन गएँ। फर्कंदा मलाई पुलिसले पक्र्यो । पहिले यस.पी. अफिस धरानमै थुन्यो । अनि राजकाजमुद्दा लगाई विराटनगर जेलमा ३ महिना जति राख्यो । तर जनमतको दबाबले उसले मलाई छोड्न करै लाग्यो । यसरी मेरो धरान बसाइमा म धरानका जनतासित एक भएँ। धरान पनि मेरो मुटुभरि ढकमक्क फूल फुलेर बसेको छ । विवाह भएको ४ महिना ४ दिनमा सुशीला भट्टले भने विवाहको सर्वोच्च उपहार यही 'अचानो' भेट्टाइन् ।

धरान कलेजमा प्रत्येक साता कवितागोष्ठी हुन्थ्यो, जहाँ इच्छुक शिक्षक, विद्यार्थी सबैले कविता सुनाउँथ्यौँ र केही छलफल पनि गर्थ्यौं । त्यहाँ "साहित्य परिषद्, धरान" भन्ने संस्था खडा गरिएको थियो र त्यसद्वारा *प्रेरणा* नामक पत्रिका निकालिएको थियो । परिषद्का तर्फबाट वर्षका ४-६ साना-ठूला कार्यक्रम र गोष्ठीहरू हुन्थे । धरान सहरभित्रका सबै विचारका साना-ठूला साहित्यकारका बीचमा अनेक साहित्यिक आदानप्रदान र विचार-विमर्शहरू हुन्थे। कहिले पिण्डेश्वरस्थित संस्कृत विद्यापीठमा साहित्यसम्बन्धी कार्यक्रम हुन्थे, कहिले धरान बजारमै । त्यतिबेला प्रत्येक लेखकलाई लाग्थ्यो होला; हामीसित दिनमा चौबीसै घन्टा फुर्सद हुँदो हो त हामी

कति धेरै अघाउन्जेल लेख्दै रहने थियौँ। अनि मेरो प्रकाशन तथ्याङ्कले देखाउँछ २०१८ सालमा (१) *युरी एलेक्ससएमिच गागरिन* भन्ने काव्य र (२) *समालोचनाको बाटोतिर* भन्ने आलोचनाको पुस्तक छापिए। अनि त्यही वर्ष (३) *हाम्रा प्रतिभाहरू* शीर्षकमा जीवनीपरक समीक्षा सङ्ग्रह निस्क्यो। अनि २०२० सालमा गई सुप्रसिद्ध नर्वेली उपन्यासकार हेनरिक इब्सेनको नाटकको अनुवाद (४) *जनताको शत्रु* भन्ने निस्क्यो। तर कुन्नि किन र कसरी हो त्यसपछिका आउँदा २६ वर्षसम्म मेरो निम्ति पुस्तक प्रकाशनको ढोका बन्दै भएझैँ भयो।

## २०२२ माघ – २०३० असारसम्म चितवनमा

२०२२ जेठ महिनामा चितवनको सदरमुकाम भरतपुरमा "वीरेन्द्र इन्टर कलेज" नामले एउटा कलेज खुलेको थियो तर मङ्सिर महिनामा आइपुग्दा त्यस कलेजका प्रिन्सिपल श्री रामकुमार 'जीवनमित्र' जो भूमिसुधार अधिकारी पनि हुनुहुन्थ्यो, श्री ५ को सरकारको, वीरगन्ज, पर्सा सरुवा हुने निश्चित भएकाले त्यहाँ नयाँ प्रिन्सिपलको खाँचो परेछ। अनि त्यहाँबाट मेरा सुपरिचित मित्र पुण्यप्रताप राणाले काठमाडौँ गएको बेला सुशीलासित भेट हुँदा त्यो आवश्यकताको चर्चा गर्नुभएछ। सुशीला स्वयं पनि आफ्ना निम्ति कुनै एउटा कलेजमा पढाउने कामको खोजीमा भएकीले आफूलाई पनि त्यस कलेजमा पढाउने व्यवस्था गरेमा मलाईसमेत चितवन जान अनुरोध गर्ने कुरा भएछ। पुण्यप्रतापज्यूले त्यसको सम्भावनाको अड्कल गरी सकारात्मक कुरा गरेपछि सुशीलाबाट मैले चितवन जाने प्रस्ताव पाएँ। अनि मैले आफू कहिल्यै नगएको ठाउँमा बस्ने वातावरण नहेरी बचन दिनु ठीक हुन्न भनी म पहिलो पल्ट स्वयं चितवन गएँ। त्यसबेलाको भरतपुर सदरमुकाम र नारायणगढबजार एक प्रकारले जङ्गलको र नारायणीनदीको बीचमा बसेझैँ लागे पनि वीरेन्द्र कलेजमा आवश्यक २-३ जना नयाँ सक्षम प्राध्यापकको नियुक्ति गराउन सकेमा कलेज सुचारुरूपले चल्ने कुरामा म विश्वस्त भएँ। अनि त्यहाँ कलेज सञ्चालक समितिका सचिव मुक्तिलाल चुके र मेरा परिचित आदरणीय मित्र कृष्णबन्धु पिया (सञ्चालक समिति सदस्य), के.यल्. 'भूषण' (सञ्चालक समिति सदस्य), आदिसित

राम्ररी विचार आदान-प्रदान र सरसल्लाह गरी मैले चितवन आउने निर्णय गरेँ ।

त्यसपछि म धरान फर्की विधिवत् कलेजबाट बिदाबारी भई २०२२ साल माघको अन्तिम सातामा चितवन-नारायणगढमा दाखिल भएँ र कलेजमा माघ २६ गते प्रिन्सिपलको कार्यभार सम्हालेँ । त्यसपछि सुशीलालाई खबर गरेँ । उनी पनि ४ महिनाको प्रथम पुत्र 'निर्झर'लाई लिएर चितवन आइपुगिन् र मैले कलेज प्रवेश गरेको १ महिनापछि उनले नेपाली विषय पढाउने गरी कलेजको कार्यभार सम्हालिन् । यो कलेज दिउँसो चल्ने चितवन हाई-स्कूलको भवनमा राती पेट्रोम्याक्सको प्रकाशमा सञ्चालन हुने गर्दथ्यो ।

हामी चितवन बस्दा सुरुका एक-डेढ वर्ष जति श्रीकृष्णबन्धु पियाजीको घरमा डेरा गरी बस्यौँ । त्यसै डेरामा हाम्रो कान्छो छोरा 'सौरभ' जन्म्यो । अनि २०२४ साल श्रावण १ गतेदेखि देशका सम्पूर्ण प्राइभेट कलेजहरू राष्ट्रिय शिक्षा पद्धतिको योजनाअन्तर्गत त्रि.वि. का क्याम्पसमा परिणत हुने भएपछि म त्रि.वि.को पाठ्यक्रम विकास केन्द्रमा काजमा सरुवा गरिएँ । अनि प्रा. श्री झुलेन्द्रमान सिंहज्यूलाई श्रावण १ गतेका दिन वीरेन्द्र क्याम्पसको पहिलो क्याम्पस प्रमुखका रूपमा पदासीन गराई म काठमाडौँ गएँ । अनि २०३० सालको दसैँपछि काठमाडौँस्थित पद्मकन्या क्याम्पसमा प्राध्यापन गर्ने गरी श्रीमती सुशीला भट्ट पनि काठमाडौँ सरुवा भइन् ।

आठ वर्षको चितवन बसाइले मलाई धनकुटा र धरानमा प्राध्यपन गर्दाभन्दा धेरै नै अनुभवी, होसियार, संयमित, धीर, केही बढी परिश्रमी र आँटी पनि बनाएको अनुभव भयो । यहाँको जीवनयापन गर्न हामीलाई मुख्य गरी सर्वश्री कृष्णबन्धु पिया र श्रीमती विष्णु पियाजी, प्रसिद्ध प्रतिभाशाली वकिल श्री पुरेन्द्रकुमार मैनाली (दिवङ्गत) र श्रीमती उमा मैनाली जी (उमाजी सुशीला भट्टकी साहिँली दिदी पनि हुनुहुन्छ) व्यक्तिगत रूपले हाम्रा परम हितैषी र मार्गदर्शक समेत हुनुभएको म अनुभव गर्दछु । अनि श्रीमती रुक्मिणी उप्रेती (श्रीमती सुशीलाकी माहिली दिदी) पनि चितवनमै हुनुभएकोले घरायसी रूपले झन् धेरै सजिलो भयो । अनि श्री कृष्णबन्धु पिया र विष्णुजीले जुन सौम्यता, गाम्भीर्य, भित्रै हृदयदेखिको सद्भाव र सहयोगको उदार

भावले हाम्रो सुख-दुःखको ख्याल गर्नुभो, त्यो अनुभव हाम्रो जीवन पर्यन्तसम्म एउटा मोतीको माला बनी झुन्डिरहनेछ ।

२०१३ सालमा चितवन जिल्लामा सरकारकातर्फबाट जङ्गल फँडानी गरी, औलो उन्मूलनको कार्यक्रम सञ्चालन गर्दै नयाँ बस्ती बसाउने योजना सुरु भयो । त्यसबेला देखि २०१७ सालसम्ममा जे-जति मानिसहरू चितवन आइपुगे तिनमा धेरैजसो चितवनको उत्तरी क्षेत्रसित जोडिएका जिल्लाहरूबाट र केहीकेही नेपालका अन्य कतिपय जिल्लाबाट पनि आएका हुनाले ती मानिसमा धेरैजसो नेपाली काङ्ग्रेसको प्रभावभित्रका थिए। त्यसपछि बन्दीपुरक्षेत्र र काठमाडौँबाट पनि केही कम्युनिस्ट प्रभाव र विचारका मानिसहरू पनि त्यहाँ आइपुगेकाले नेपाली काङ्ग्रेसको विकल्पको विचार पनि त्यहाँ अति बिस्तारै भए पनि जरा गाड्दै गैरहेको थियो । त्यसैले त्यहाँका काङ्ग्रेसीहरूमा अति पुरातनपन्थी र अनुदारवादी सामन्ती विचारका मानिसहरूले चितवनमा कम्युनिस्ट विचारको उपस्थिति र त्यहाँका कैयन विद्यार्थीहरूमा कम्युनिस्ट विचारको गन्ध अनुभव गर्न थालेपछि ती अनुदार विचारकाहरू सम्पूर्ण कलेजलाई शङ्काको नजरले हेर्न थाले । २०२२ साल र त्यसउप्रान्तको पञ्चायतप्रशासन यसै पनि काङ्ग्रेस-कम्युनिस्ट विरोधी छँदै थियो। उसले विद्यार्थीबीच 'फुटाऊ र राज गर'को नीति लिँदै गयो भने अर्कोतिर उसले त्यो द्वन्द्वलाई आफूलाई मन नपर्ने व्यक्तिहरूविरुद्ध सोझ्याउनसमेत अग्रसर भयो। यो कुरो त्यहाँ प्रत्येक वर्ष हुने कलेज विद्यार्थी युनियनको निर्वाचनका बेला प्रस्टसित देखापर्दथ्यो । त्यस्तै स्वभावैले कलेजमा नवनियुक्त प्रध्यापकहरूमा पनि अनेक वैचारिक भिन्नता थियो । कलेजको सञ्चालक समिति सदस्यमा पनि केही अंशमा विचार भिन्नता देखिने नै भयो । सञ्चालक समितिका अध्यक्ष स्वयं अञ्चलाधीश नै हुने हुनाले उनी सबै विचारका सदस्यबीच खेल्ने प्रयत्न गर्थे। तर विशेष गरी अञ्चलाधीशद्वय श्री दामोदरशमशेर राणा र श्री लक्ष्मणबहादुर सिंहले भने अनेक हुने नहुने निउँ झिकी झमेला खडा गर्थे। मलाई एक पटक समातेर थुने पनि र मेरा रिसले सुशीला भट्टलाई पनि अनेक अप्ठेरो खडा गरी पीर पारिरहन्थे ।

चितवनमा आठ वर्ष बस्दाको मेरो एउटा अविस्मरणीय अवसर मैले २०२८ सालमा राजा महेन्द्रसित भेट पाउनु पनि हो। २०२८ साल माघमा राजा महेन्द्र दियालो बङ्गलामा बसेका अवसरमा एक दिन मलाई बिहान तात्कालिक का.मु सिडिओ पौडेलज्यूको सूचना आयो– मैले राजासित भेट पाउने कार्यक्रम भएकोले राष्ट्रिय पोसाकमा अमुक समयमा दियालो बङ्गलाको गेटमा हाजिर हुनुपर्नेछ। म ठीक समयमा त्यहाँ उपस्थित भएँ। अनि मलाई भित्र बोलाइयो। भेटको क्रममा राजाबाट मलाई स्वस्फूर्त रूपमा देशको अवस्थाबारे आफ्नो विचार प्रकट गर्न भनियो। त्यसपछि मैले आफ्ना विचार सविस्तार भनेपछि अन्तमा थपेँ– "सरकार ! कि त देश र गरिब जनताको हितमा नेतृत्व गरिबक्सियोस्। होइन भने जनताको नासो जनताकै हातमा फिर्ता गरिबक्सियोस्। यही चालाले शासन चलाउने हो भने म त सरकारको ताजमै खतरा देख्छु।" त्यति बेला राजा महेन्द्रलाई मैले कालो चस्माका पछाडि गम्भीरभन्दा गम्भीर नजरले एकनासले हेरिरहेको देखेको थिएँ।

यसरी समग्र चितौनका जनताको भावना र मेरो चेतना माछा पानी बनी सलबलाएको मैले अनुभव गरेको छु।

म चितवनमा बस्दा उन्मुक्तता, स्वच्छन्दता र स्वस्फूर्ततापूर्वक 'वीरेन्द्र इन्टर कलेज'को प्राध्यापन र शैक्षिक प्रशासन निक्कै सहज रूपमा क्रमश: गति लिँदै गएको अनुभव गरेथेँ। मेरा आफ्नै कैयन् निहित कमी-कमजोरी, गल्ती, अज्ञान र कहिलेकाहीँ मानिसमात्रबाट हुन जाने स्थितिको घटी वा बढी आकलन वा मूल्याङ्कनले गर्दा मलाई पनि त्यहाँ अनेक साना-ठूला कठिन समस्या र चिन्ताको भुमरीमा पर्नुपरेको थियो तर मैले २००९ सालमा नेपाल कम्युनिस्ट पार्टीको सदस्य बनेर जुन मार्क्सवादी आस्था प्राप्त गरेँथेँ र सम्पूर्ण विश्व र नेपालका श्रमजीवी जनताको पक्षमा आफ्नो चरित्रको जग बिस्तारै हाल्दै गएको थिएँ। मैले जाने-बुझे, सके-भ्याएसम्म कहिल्यै पनि त्यसका विरुद्ध गएझैँ लाग्दैन। त्यसैले मेरा स्वभावमा रहन गएका कैयन् गम्भीर त्रुटि, कमजोरीलाई छोडी मैले कहिल्यै पनि कसैको तुच्छ, घृणा र अपमानको सिकार हुनु परेन। २०२२ माघदेखि २०३० असारसम्ममा 'वीरेन्द्र इन्टरकलेज'ले त्रि.वि.बाट पूर्ण मान्यता

पायो । यसले श्री किशोरचन्द्र ढुङ्गाना (दिवङ्गत) जस्ता स्थानीय जनसेवी विचारका एक सुयोग्य राजनीतिज्ञबाट आफ्नो भावनाको शिलान्यास गरायो । २०२४ सालदेखि लगातार आई.ए.मा विद्यार्थी पास गराउँदै लग्यो । यसले अस्थाई रूपमा स्नातक कक्षा सञ्चालन गर्ने प्रारम्भ समेत गऱ्यो । महिला प्राध्यापकको हैसियतले सुशीला भट्टले त्यस रात्री कलेजमा पढाउन थालेपछि २०२३ साल देखि नै चितवनका नारीवर्गको उच्चशिक्षाप्रतिको आकाङ्क्षा पनि क्रमश: प्रतिवर्ष बढ्दै गयो । यसरी हामी सबै शिक्षक, विद्यार्थी, प्रशासनिक स्टाफहरू, सञ्चालक समिति सदस्यहरू र तिनका अभिभावकहरूले वीरेन्द्र कलेजको उत्थान र विकासमा गौरव र आनन्दबोध गर्दै रह्यौँ । साथै सामाजिक सेवाको कार्यक्रम अन्तर्गत २०२५ सालदेखि प्रतिवर्ष प्राध्यापक वर्गको अभिभावकत्वमा छात्रछात्रा दुवै थरीको संयुक्त टोलीले नेपालका विभिन्न जिल्लाको भ्रमण पनि चालू राख्यो ।

यस्तो आनन्दी पृष्ठभूमिमा मेरो साहित्य साधना पनि धेरै नभए पनि केही अंशचाहिँ एक प्रकारले निरन्तर नै चलिरह्यो । एक समयमा त म बिहान निरन्तर ३-४ घण्टा लेख्न बस्थेँ र एउटा रचना त तैयार भै नै हाल्थ्यो । लेखिसकेर दोहोराएपछि धेरै थपघट पनि पर्दैनथ्यो । मानौँ रचनासम्बन्धी विचार मस्तिष्क र हृदयमा कुलकुल कुलकुल बगीनै रहन्थे ।

अनि चितवनका, विशेषगरी नारायणगढ र भरतपुरका साहित्यप्रेमीहरूले *नौलो राँको* भन्ने वामपन्थी-विचार-प्रधान पत्रिका निकालेका थिए । उता बुर्जुवा-प्रजातन्त्रवादी विचारका साहित्यकारहरूले पनि त्यस्तै आफ्नो पत्रिका निकालेका थिए। सामन्ती परम्परावादी वा कट्टरपन्थीहरूको भने कुनै पत्रिका थिएन । नारायणगढबजारमा “नारायणी कला मन्दिर” नामको नाट्य प्रधान संस्था सक्रिय एवं त्यस्तै निक्कै लोकप्रिय पनि थियो। “वीरेन्द्र इन्टर कलेज” को पनि *प्रकाशपुञ्ज* भन्ने आफ्नो वार्षिक मुखपत्र निस्कने गरेको थियो । त्यतिबेला चितवन, मकवानपुर (हेटौँडा) र ती दुई जिल्लालाई केन्द्र बनाई अन्य वरपरका जिल्लाबाट निस्कने साहित्यिक पत्रपत्रिकाहरूमा पनि चितवनका साहित्यकारका रचनाहरू बेलाबेलामा

निस्कने गर्थे । यस्तो वातावरण र गतिविधिले चितवनका स्थापित कवि, साहित्यकार, बुद्धिजीवीमा सर्वश्री प्रेमविनोद 'नन्दन', मदनमोहन जोशी, साथै धेरै नयाँ उदीयमान र प्रतिभाउन्मुख पुरुष तथा महिला साहित्यकारहरू देखा पर्दै थिए । अनि आज राष्ट्रिय स्तरमा प्रसिद्धि पाउनुभएका साहित्यकारहरू सर्वश्री हरिहर खनाल, रविकिरण 'निर्जीव' र उहाँहरूका समकालिक साथीहरू प्रभात जोशी, इन्द्र रेग्मी, सोमनाथ घिमिरे, ईश्वरपिया जस्ता केही व्यक्तित्वहरूको नाम सहजै लिन सकिन्छ। स्वयं वीरेन्द्र कलेजमा प्रति साता शुक्रबारका दिन हुने कवि वा साहित्य गोष्ठी, कलेजको वार्षिक दिवस मनाउँदा गरिने नाटक मञ्चनहरू, व्यङ्ग्यात्मक कविता, गीतपाठ आदिलाई पनि साहित्यिक उत्साह र उमङ्गको स्रोतका रूपमा लिन सकिन्छ । स्वयं नारायणगढबजारमा हुने ठूला-साना गोष्ठी र भरतपुरमा हुने गोष्ठीलाई पनि बिर्सन सकिन्न ।

## २०३० श्रावणदेखि २०५० चैत्रसम्म फेरि काठमाडौँमा

२०३० श्रावण २ गतेका दिन म चितवनबाट काठमाडौँ आई त्रि.वि.को "पाठ्यक्रम विकास केन्द्र" (पाविके) मा काजमा सरुवा गरिएको उप-प्राध्यापकको हैसियतले काम गर्न थालेँ । त्यसपछि २०३५ मा पाविकेमा उप-निर्देशकको पद पनि रहने व्यवस्था भएपछि मलाई त्यस पदमा बहाल गरियो। सन् १९८१ (संवत् २०३८) मा मलाई 'पाविके' बाटै पाठ्यक्रमसम्बन्धी पोस्टग्रचाजुएट डिप्लोमा गर्न बेलायतको लिड्स विश्वविद्यालय पठाइयो र सो डिग्री प्राप्त गरेपछि फेरि एक वर्ष लन्डन विश्वविद्यालयबाट एम्.एड.को डिग्री पूरा गर्ने अवसर दिइयो । बेलायतबाट फर्केपछि म २०४०-२०४५ सम्म 'पाविके' मै कार्यरत थिएँ। त्यतिबेला मेरो पदस्थापन केन्द्रीय अङ्ग्रेजी शिक्षण विभाग, त्रि.वि. कीर्तिपुरमा भएको र विभागले पढाउन बोलाएकाले म २०४५ मार्गदेखि त्यस विभागमा पढाउन गएँ। अनि त्यहाँ ५ वर्ष सेवा गरेपछि मैले २०५० साल चैत्र ७ गते सहप्राध्यापकको पदबाट स्वेच्छिक अवकास प्राप्त गरी पेन्सनमा बसेँ । यसरी उच्चशिक्षाको मेरो सेवा अवधि जम्मा ३३ वर्षको भयो ।

२०३०-२०५० सालको मेरो काठमाडौँ बसाइका बीस वर्षमा सर्वप्रथम पञ्चायती व्यवस्थाले मप्रति देखाउने प्रतिशोधको भावना कहिल्यै बिर्सन्न । साथै देशको राजनैतिक परिस्थितिमा पनि कैयन् आधारभूत उथलपुथल आई नै रहे । मेरो घर-व्यवहारको विशेष परिस्थितिले पनि मेरो ध्यान तानिरह्यो । अन्तमा २०४६ साल चैत्र २६ गतेका दिन ३० वर्षे निरङ्कुश पञ्चायती व्यवस्थाले बहुदलीय प्रजातान्त्रिक संसदीय व्यवस्थाका सामु घुँडा टेकेपछि मेरो जीवन पनि बढी शान्तिपूर्ण बन्यो । मेरो साहित्यसाधनाको निरन्तरता पनि तिनै परिस्थितिका सापेक्षतामा अगि बढ्दै रह्यो । त्यही बीच २०३९ साल चैत्रमा मेरो बुबा सर्वोच्च अदालतका न्यायाधीश श्री जयदेव भट्टको अचानक निधन भयो । त्यसले गर्दा पनि मैले बेलायतमै बसी थप उच्चशिक्षा प्राप्त गर्नमा एउटा ठूलै मानसिक अवरोध उत्पन्न गरायो र म सन् १९८३ को अक्टोवरमा बेलायतबाट नेपाल फर्कें ।

मेरो काठमाडौँ बसाइको पछिल्लो बीस वर्षभित्रको केही उल्लेख्य वा स्मरणीय घटनाहरू निम्नप्रकारका छन्:-

सर्वप्रथम, २०३० साल चैत्र १० गतेका दिन पञ्चायती प्रशासनले मलाई राजद्रोहको झुट्टो मुद्दलगाई पर्सा जिल्लाको वीरगन्जस्थित एस.पी. अफिस र वीरगञ्ज जेलमा झन्डै दुई महिना थुन्यो । त्यसपछि काठमाडौँ ल्याई केही दिन भद्रगोलजेलमा र बाँकी दुई महिनाभन्दा बढी ललितपुरको नख्खु जेलमा बन्दी बनाई राख्यो । तर सौभाग्यवश मलाई वाग्मती अञ्चलस्थित पुनरावेदन अदालतले "थुनी कार्बाही गर्नु नपर्ने" भनी तारिखमा छाडेकाले म जेलमुक्त हुन पाएँ ।

संवत् २०३५ साल चैत्रको अन्ततिर पाकिस्तानका राष्ट्रपति जुल्फीकार अली भुट्टोलाई पाकिस्तानी तानाशाह जियाउल हकले जवरजस्ती अपदस्थ गरी बन्दी बनाई फाँसीसमेत दिएको विरुद्धमा नेपालमा विद्यार्थीहरूले जवरजस्त विरोध प्रदर्शन सुरु गरेपछि पञ्चायती व्यवस्थाले ती विद्यार्थीउपर असाधारण दमन गऱ्यो । तर त्यस आन्दोलनले नेपालव्यापी सङ्घर्षमा विकसित भई स्वयं निरङ्कुश पञ्चायती व्यवस्थाविरुद्धको देशव्यापी राजनैतिक आन्दोलनको रूप लियो । त्यसो भएकाले २०३६ साल जेठ १० गतेका दिन राजा

वीरेन्द्रले पञ्चायती व्यवस्थालाई नै "जनमत सङ्ग्रह" मा राख्ने घोषणा गर्नुपर्‍यो । यसले तात्कालिक देशको राजनीतिमा एउटा दूरगामी परिवर्तनको सूत्रपात भयो। राजाले पार्टीहरूमाथिको प्रतिबन्ध विधिवत् खारेज नगरे पनि व्यवहारमा सबै राजनैतिक पार्टी जनतामा गए र २०३७ मा जनमत सङ्ग्रह नै गराइयो । यद्यपि अनेक जालझेलका कारणबाट 'बहुदल' र 'पञ्चायती' व्यवस्थामा बहुदलले हारी पञ्चायतले जितेको परिणाम देखाइयो तर पनि वास्तवमा २०१७ पुस १ देखि २०३५ चैत्रसम्मको पञ्चायत व्यवस्था भित्रैबाट 'बहुदलीय' राजनीतिका अगाडि क्रमशः शिथिल हुँदै गयो। यसरी २०३६-२०४६ सम्मकै दशकलाई पञ्चायतको आत्मपतन विरुद्धको अन्तिम सङ्घर्षको दशक मान्नुपर्दछ ।

देशमा पञ्चायत विरुद्ध जनमत सङ्ग्रहको घोषणा भएको मौका छोपी नेपालका प्रगतिशील, प्रगतिवादी साहित्यकारहरूले २०१७ साल पुस २२ गतेउप्रान्त प्रतिबन्धित वा अन्तरध्यान भएको प्रगतिशील लेखक सङ्घ (प्रलेस) जसलाई श्री श्यामप्रसाद शर्माज्यूले २००९ सालमा वीरगन्जमा स्थापना गर्नुभएको थियो र २०१६ सालमा काठमाडौँमा त्यसलाई पुनर्गठनसमेत गरिएको थियो, पुनः जगाउने प्रयत्न गरे। २०३६ को मध्यतिर हुनुपर्छ, प्रसिद्ध प्रगतिवादी साहित्यकार श्री पारिजातको निवासमा एउटा अनौपचारिक प्रगतिशील भेलाको आयोजना गरियो । सौभाग्यवश त्यस भेलामा म पनि सामेल हुन पाएँ । त्यस भेलाले साहित्यकार श्री रघुजी पन्तको संयोजकत्वमा प्रगतिशील लेखक कलाकार सङ्घ (प्रलेकस) गठन गर्‍यो। पहिलेको प्रलेसमा कलाकार पनि सङ्गठित होऊन् भनेर "प्रलेस" मात्रै नाम नराखी "प्रलेकस" राखिएको थियो । त्यसपछि २०४५ मा "प्रलेकस" को राष्ट्रिय सम्मेलन काठमाडौँमै आयोजना गरियो। तर त्यस सम्मेलनले "प्रलेस" को इतिहास नमेटियोस् भनी सम्मेलन पछिको सङ्गठनको नाम "प्रगतिशील लेखक सङ्घ" (प्रलेस) नै राखियो। अनि कलाकारहरूको निम्ति प्रलेसकै अग्रसरतामा "प्रगतिशील कलाकार सङ्घ" (प्रकस) को गठन गर्न सहयोग गर्ने साझा सहमति खडा गरिएको थियो । तर खेदपूर्वक भन्नुपर्छ, अनेक प्रत्यक्ष परोक्ष कमी-कमजोरी, त्रुटि र केही अंशमा स्वयं प्रगतिशील

कलाकार क्षेत्रका मूर्धन्य कलाकारहरूको पनि अपेक्षित अग्रसरता र गतिशीलताको अभावमा सो सङ्घ अहिलेसम्म अस्तित्वमा आएको छैन तर "प्रलेस"ले चाहिँ २०४७ सालदेखि आफ्नो पूर्णशक्ति र गतिका साथ सम्पूर्ण नेपाली प्रगतिशील, प्रगतिवादी एवं विभिन्न कम्युनिस्ट समूहमै आबद्ध लेखकहरूको समेत साझा संस्थाको रूपमा काम गर्दै आएको छ । सबभन्दा पछिल्लो राष्ट्रिय अधिवेशन २०६२ चैत्रमा "सातौँ राष्ट्रिय सम्मेलन" सफलताका साथ सम्पन्न गरेर सबै प्रगतिशील लेखकवर्गलाई नेतृत्व दिँदै आएको छ । छैटौँ राष्ट्रिय सम्मेलनबाट मैले प्रलेसको अध्यक्षको कार्यभार सम्हाल्ने मौका पाएको थिएँ ।

२०२४ सालमा वरिष्ठ पत्रकार श्री हरिहर विरहीज्यूको 'विमर्श' साप्ताहिक पत्रिकाले मसित एउटा लामो अन्तरवार्ता लिई प्रकाशित गर्‍यो । त्यसमा सोधिएका अनेक प्रश्नहरूमध्ये एउटाको उत्तरस्वरूप मैले भने– "म अहिले पनि आफूलाई मार्क्सवादी नै ठान्छु ।" बस् निर्दलीय पञ्चायती व्यवस्थालाई निउँ भैहाल्यो । उसले त्रि.वि.लाई आदेश दिई मलाई पत्र काट्यो– "त्रि.वि.को आचारसंहिता विरुद्ध पत्रिकामा मन्तव्य दिएकाले विभागीय कार्वाही किन नगर्ने ? तीन दिनभित्र जवाफ दिनू ।" त्रि.वि.लाई मैले लिखित स्पष्टीकरण दिएँ । त्यसपछि त्यहाँ बढी झन्झट भएन । तर स्वयं पञ्चायती प्रशासनले पनि त्यही बेहोराको "प्रचलित कानुन विरुद्ध मन्तव्य दिएकाले" स्पष्टीकरण दिन ३ दिनभित्र बाग्मती अञ्चलाधीश कार्यालयमा हाजिर हुनू भन्ने आदेश दियो । अनि अञ्चलाधीश अफिसले मसित अनेक लामा प्रश्नहरू पनि गर्‍यो, जसको उन्मुक्त बनी जवाफ लेख्न मलाई पुरै ३ घण्टा लाग्यो । त्यसपछि त्यो अनिष्ट पनि स्वतः हट्यो । ...अनि त्यतिबेला मैले आफ्नो चितवन निवासका आठ वर्ष सम्झेँ, कसरी मसित भेटैपिच्छे सहायक अञ्चलाधीश, अञ्चलाधीश र सिडिओ पनि बिस्तारै घुमाएर मलाई "बढ्ता नबोल्न" "बढी चल्ने चटपटाउने नगर्न" अनेक धम्की र प्रलोभन दिइरहन्थे । तर मैले तिनका पत्रू ध्वाँसलाई कहिल्यै पनि महत्त्व दिइनँ ।

अनि २०४६ साल फागुन ७ गतेदेखि चैत्र २६ गतेसम्म चालू रहेको आन्दोलनमा त मैले पनि आफ्नो ठाउँबाट (लेखक/प्राध्यापक

बुद्धिजीवीको हैसियतले वा आजको भाषामा स्वतन्त्र नागरिक समाजको सदस्यको हैसियतले भनौँ) राम्रै सक्रियता जनाएँ। जस्तै २०४६ साल फागुन १६ गते सरस्वती सदन कम्पाउन्डमा नेपाल प्राध्यापक सङ्घको सानो सभामा आयोजक मित्रहरूबाट अनुरोध गरियो कि पोखरा क्याम्पसमा लक्ष्मी कार्कीलगायत छात्रावासका छात्राहरूमा गरिएको नृशंस प्रहरी दमनको सविस्तार विवरण दिन। त्यसको केही दिनअगाडि मात्र प्रा. वासुदेव मल्ल (दिवङ्गत), प्रा. कृष्ण खनाल र म पृथ्वीनारायण क्याम्पसमा एउटा शैक्षिक, बौद्धिक सेमिनारमा भाग लिन गएका थियौँ। बिहान पोखरा क्याम्पसमा पुग्दा हामीले प्रहरीको ताण्डव नृत्यको अनेक अवशेष देख्यौँ र प्राध्यापक र छात्रछात्राबाट यथार्थ वर्णन सुन्यौँ। त्यतिबेला राजा वीरेन्द्र र रानी ऐश्वर्य पोखराको दरबार "रत्न मन्दिर"मा थिए। अनि हामीले सेमिनार सुरु हुँदा नै पृथ्वीनारायण क्याम्पसमै राजारानीको उपस्थितिमा त्यस्तो अत्याचार हुनु घोर लाजमर्दो भएको कुरा पनि गरेका थियौँ। ती सबै विवरण सबै जस्ताको तस्तै बताउँदै अन्तमा मैले सरस्वतीसदनका श्रोतासमक्ष भनेँ– "त्यस्तो दमन गरिएको कुरो झुट्टो हो भन्ने प्रमाणित हुन्छ भने दामोदर पाण्डेको टाउको काटिएझैँ मेरो पनि टाउको काटे हुन्छ।" त्यहाँ धेरै ठूलो सनसनी मच्चियो।

कम्पाउन्ड बाहिर लाठी र टोपधारी प्रहरीको घेरा थियो। देशीविदेशी अनेक पत्रकार पनि थिए। अनि मलाई डा. मथुरा श्रेष्ठले सभास्थलबाट सरस्वती सदन उत्तरको कफी हाउसमा लैजानुभयो। विदेशी पत्रकारहरूले मसित अन्तरवार्ता लिए, जुन पछि विभिन्न पत्रिकामा छापियो पनि। यसै दिनको रिस फेर्न मलाई चैत्र ६ गते घरैमा डी.एस.पी. पठाएर पञ्चायत प्रशासनले २० दिनसम्म हनुमानढोकाखोरको पाहुना बनायो। साथै मलाई पोखरा काण्डबारे बोलेकोमा राजकाज मुद्दासमेत चलायो तर मलाई फेरि पनि काठमाडौँ अदालतले चैत्र २६ गतेका दिन साँझ ५ बजे छोडिदियो। अनि त्यसै राती त बहुदलीय व्यवस्था बहाल हुने शाही घोषणा पनि भैहाल्यो।

अनि त्यस्तै २०४६ साल चैत्र ३ गते त्यही सरस्वतीसदनको चौरमा काठमाडौँ उपत्यकाका वामपन्थी, बुर्जुवा प्रजातान्त्रिक र देशाभिमानी सम्पूर्ण लेखकहरूले कविवर युद्धप्रसाद मिश्रको अगुवाइ

र साहित्यकार पारिजातज्यूको सह-अगुवाइमा पञ्चायत व्यवस्थाविरुद्ध मुखमा कालोपट्टी बाँधी धर्ना दिएका थियौँ । त्यहाँ उपस्थित १०० जनाभन्दा बढी साहित्यकारहरूलाई पञ्चायती प्रशासनले सिंहदरबारको पश्चिमस्थित प्रहरी बग्गीखानामा थुन्ने काम समेत गरेको थियो । पहिले समातेर लैजादा सबैलाई जथाभावी ट्रकहरूमा कोचेर लगेको थियो तर पछि उसले लाचार भई बयान लिने नाटक गरी सबैलाई मुक्त गर्नुपरेको थियो । अनि कविवर मिश्रज्यूलाई चाहिँ स्वयं प्रहरीको मोटरमा इज्जतपूर्वक राखी उहाँको घर गठ्ठाघर (भक्तपुर) छोड्नुपरेको थियो ।

अनि मेरो साहित्य साधनातर्फ चाहिँ २०४६-२०४९ भित्रमा मेरा सातओटा कृतिहरू प्रकाशित भए, जुन निम्नप्रकारका छन्–

१. *जगत्‌को सृष्टि र सञ्चालन प्रक्रिया* (२०४६/सन् १९८९) दर्शन)
२. *प्रतिभा पहिचान* (२०४७) (जीवनीपरक समीक्षा सङ्ग्रह)
३. *स्वतन्त्रता र कम्युनिस्टहरू* (२०४८) (राजनैतिक लेखसङ्ग्रह)
४. *जनताको साहित्य* (२०४८) (सैद्धान्तिक साहित्य समीक्षा)
५. *दृष्टि विन्दु* (२०४८) (किशोर साहित्य) र
६. *केही आत्मपरक निबन्धहरू* (२०४९) (निबन्ध सङ्ग्रह)

यी किताबका अधिकांश सामग्रीहरू २०२१-२०४६ बीचमा लेखिई विभिन्न पत्रपत्रिकामा छापिइसकेका हुन् । अनि २०३५ देखि २०५० भित्र चाहिँ मेरा अनेक राजनैतिक र विचारप्रधान नयाँ लेखहरू छापिएका देखिन्छन् । त्यसबेला मैले कैयन् सहृदयी मित्रहरूबाट यति छिटोछिटो लेख प्रकाशन गर्नु सट्टा बढी समय अध्ययनमा लगाउने सल्लाहसमेत पाएको थिएँ। तर मैले उहाँहरूको सुझावलाई धेरै अंशमा लागू गर्न सकेँ हुँला जस्तोचाहिँ लाग्दैन ।

अँ, बरु मैले त्रि.वि.को पाठ्यक्रम विकास केन्द्रमा २०३०-२०४५ सम्मका १५ वर्ष काम गर्दा शिक्षाका क्षेत्रमा अध्ययन गर्ने काम मात्र नभई ४०/४५ ओटा शिक्षासम्बन्धी लेखहरू पनि लेखी पत्रिकामा प्रकाशित गर्ने काम गरेँ । यसले मलाई शिक्षा जगत्मा पनि केही परिचित गरायो। त्यस अवधिमा मेरो वैचारिक विकासका

क्रममा म सैद्धान्तिक र व्यावहारिक दुवै किसिमले राजनीति, इतिहास, दर्शन र शिक्षाबारे बढी आकर्षित हुँदै गएँ, जसको उपज मेरा ती विषयका लेखहरूमा पनि देखा पर्दै गयो ।

अन्तमा अब साररूपमा भन्नुपर्दा मैले २००८ सालदेखि २०६४ सालका ५६ वर्षभित्रको आफ्नो जीवनको साहित्यिक यात्राका बारेमा के अनुभव गर्छु भने मैले २००८-२०१५ सालसम्म काठमाडौँमा बसी आफ्नो प्रारम्भिक विद्यार्थीकाल बिताउँदा मेरो प्रारम्भिक लेखन कार्य सुरु भएछ । त्यतिबेला मैले कविता र कथा लेखनबाट साहित्यमा अग्रसर हुने प्रयास गरेँछु । तर २०१५ सालबाट २०२२ सालसम्म पुग्दा मैले आफ्नो कवितात्मक लेखनलाई एक चरणसम्म पुऱ्याई त्यसपछि म त्यस विधामा अरू सृजनशील हुन सकिनछु । त्यसपछि २०५५ सम्म मैले कुनै-कुनै बेला कविता लेख्दै गरे तापनि मैले त्यसमा थप उचाइ प्राप्त गर्न नसकेको अनुभव गरेँ ।

तर २०१६ सालदेखि मैले समीक्षात्मक लेखन पनि सुरु गरेँ र त्यसमा मलाई थोरै प्रोत्साहन प्राप्त भएको र आफ्नो रुचि पनि त्यसमा बढ्दै गएको अनुभव गर्दै गएँ। अनि त्यस विधामा मैले निकै मन्द गतिले भए पनि सङ्ख्यात्मक देखि केही गुणात्मक विकाससमेत गर्दै गएको अनुभव गरेँ। अनि त्यस समयको हाराहारीमा मैले निबन्ध लेखन पनि सुरु गरेँ र त्यसमा पनि मैले पाठकवर्गको प्रोत्साहन पाउँदै गएँ । २०१७ साल उप्रान्त २०५० सालसम्म मैले विशेष गरी उच्च शिक्षातर्फ प्राध्यापनको कार्यमा संलग्न भएकाले अपवादका रूपमा कहिलेकाहीँ तुलनात्मक रूपले छोटो लामो अवधिका निम्ति मलाई पञ्चायती प्रशासनले लखेट्दै गरे तापनि मूलत: मेरो जीवन अत्यन्त व्यवस्थित, नियमित, अध्ययन, चिन्तन, मनन, विचार, विमर्श र लेखनमा संलग्न भएकाले मैले स्वाध्ययन, साहित्यिक लेखन र औपचारिक अध्ययन तीनै क्षेत्रमा क्रमश: बिस्तारबिस्तारै प्रगति गर्दै गएँ र त्यस्तै मौका पनि पाएँ । २०२१ साल मङ्सिरमा मेरो श्री सुशीला खरेलसित विवाह भएपछि मेरो व्यक्तिगत मात्र होइन, पारिवारिक जीवन पनि आनन्दमय बन्दै अघि बढ्यो र दैनिक पठनपाठन र लेखनमा समेत गति बढ्दै गयो ।

अनि मलाई क्रमश: काठमाडौँको भद्रगोल जेलमा (२०१० र २०११ सालमा) भक्तपुरको खोर र काठमाडौँको भद्रगोल जेलमा (२०१२ सालमा) धरान-विराटनगरको प्रहरी थाना र विराटनगर जेलमा (२०२२ सालमा), वीरगन्जको एस.पी. अफिस र वीरगन्ज जेलमा (२०३० सालमा), फेरि काठमाडौको भद्रगोल जेलमा र ललितपुरको नख्खुजेलमा (२०३१ मा), चितवन भरतपुरको डि.एस.पी. कार्यालय र काठमाडौको भद्रगोल जेलमा (२०२५ सालमा) र अन्तमा काठमाडौँको हनुमानढोकाखोरमा (२०४६ सालमा) मलाई साहित्य साधना गर्ने मौका प्राप्त भयो । विशेष गरी त्यसरी जेल पर्दा बाहिरका साथीहरूबाट अध्ययनका निम्ति अनेक उपयोगी र चाखिला सामग्री पनि पाइन्थे। विशेष गरी २०१०, २०११ र २०१२ सालमा काठमाडौँको भद्रगोल जेलमा बस्दा, त्यस्तै २०२२ सालमा विराटनगर जेलमा बस्दा अनि २०३० सालमा वीरगन्जको एस.पी. अफिस र वीरगन्जजेलमा बस्दा, त्यस्तै २०३१ सालमा नख्खूजेलमा बस्दा (त्यसबेला श्री गङ्गा उप्रेती र रुद्र खरेल पनि त्यहीँ बन्दी हुनुहुन्थ्यो) मैले आफ्नो अध्ययन र लेखनलाई नियमितता दिने सुन्दर अवसर पाएको थिएँ । विराटनगरजेलका कविता बाहिर ल्याइसकेर पनि मेरै असावधानीका कारण कता हराएँ र वीगरगन्ज एस.पी. अफिसले मेरा केही मन परेका निबन्ध र कविता हेर्न मागेर गायबै पारिदियो ।

तर २०५१ को वैशाखदेखि नै म नेकपा (एमाले) पार्टीको राजनैतिक कार्यलाई पूर्णकालिक कर्मीका रूपमा सघाउन बैतडीमा गएकाले र २०५६ चैत्रमा मात्र विधिवत् आफ्नो साङ्गठनिक कार्य सकी काठमाडौँ फर्केकाले त्यस लामो अवधिभरि मैले आफूसित भएको सम्पूर्ण ऊर्जा, ध्यान, धारणा राजनैतिक गतिविधिमा नै एकाग्र गरेकाले मैले त्यसअवधिमा व्यवस्थित रूपले केही पनि अध्ययन गर्न सकिनँ र लेखन पनि ज्यादैज्यादै कम हुन गयो। अनि मैले लेखेका अधिकांश सामग्री पनि राजनीतिसित नै सम्बन्धित थिए र अन्य केही मात्र वैचारिकता र बौद्धिकतासित सम्बन्धित थिए । म ठान्छु, मसित शारीरिकदेखि मानसिक र भावनात्मक जे-जति शक्ति थियो, त्यो केवल एक कुरोमा खर्चनमात्र पर्याप्त थियो। अनि सधैँजसो सहरमा

बसेको जीवनपद्धतिलाई त्यहाँको पहाडी जीवनमा जोत्नुपर्दा त्यसले थप बौद्धिक र लेखनकार्यलाई पनि साथ दिनसक्ने देखिएन भन्ने अनुभव गरेँ ।

अनि मैले २०५७ र २०५८ का २ वर्ष नेपाल बुद्धिजीवी परिषद्का ५ उपाध्यक्षमध्ये एक उपाध्यक्षका हिसाबले कार्यरत रही बिताएँ। त्यस्तै २०५९ देखि २०६३ वैशाख सम्म ४-५ वर्षसम्म म नेकपा (एमाले) को संस्कृति विभागको सदस्य र २०५९-२०६२ सम्मका ३ वर्ष प्रगतिशील लेखक सङ्घको अध्यक्षको हैसियतले "प्रलेस"मा कार्यरत रहेँ । त्यतिबेला पनि म दुवै सङ्गठनहरूको साङ्गठनिक र वैचारिक काममा बढी अल्झिरहेँ। तर साहित्य सिर्जना र त्यससम्बन्धी गहन अध्ययन गर्न एकाग्र हुन सकिनँ ।

तर उपर्युक्त कमी-कमजोरी हुँदाहुँदै पनि एउटा आत्मगौरव र सन्तोषको कुरो के  थियो भने राजा ज्ञानेन्द्रको २०५९ असोज १८ गते सुरु भएको प्रतिगमन र २०६१ माघ १९ गते सुरु भएको निरङ्कुशतन्त्रको विरुद्ध मैले पनि २०६३ साल वैशाख ११ गतेसम्मै सङ्घर्षमा पूर्ण सहभागिता देखाउन पाएको थिएँ ।

✍

# आवाजविहीनहरूको धर्ती

– *आर.डी.'प्रभास' चटौत*

यो पङ्क्तिकार जन्मेको धर्ती सदियौँदेखिको आवाजविहीनहरूको धर्ती हो । त्यो धर्तीको आवाजविहीनताको निरन्तरता अघि बढ्दै गएको छ । प्रस्तुत हुन खोजेका पङ्क्तिहरू कुनै कहानी वा कथाका पङ्क्तिहरू होइनन्, न मिथक नै हुन् । जे छ त्यो यथार्थ हो ।

पङ्क्तिकारका शैशव-चित्तमा अङ्कित एउटा दृश्यको झल्को आज पनि आइरहन्छ, कि गाउँभरिमा एकाध घर हुनेखानेका देखिन्थे, तिनका केटाकेटीले दूधभात खान लाग्दा ती घरका वरपरका छाप्रोमा बस्ने केटाकेटीहरू टाढैबाट भए पनि दूधभात खाने बच्चालाई एकटकले हेरिरहन्थे, कोदोको रोटीको एउटा टुक्रा हातमा लिएर । जबकि ती पेटभरि कोदोकै रोटीसम्म खान धौ-धौ पर्ने केटाकेटीका आमाबाबु दूधभात खानेकै घरमा खेतीपाती गर्नेदेखि लिएर गाईबस्तुका लागि घाँसपातको जोहो गर्ने, भकारो सोह्रने आदि सबै काम गर्दथे । ममा त्यो भिन्नता जान्ने जिज्ञासा जागे पनि म अनुत्तरित नै रहन्थे । आज पनि ती घटनाको सम्झनाले मलाई उद्विग्न पार्दछ । हिजोमात्रै होइन आज पनि ती घटनाहरू तद्वत् घटिरहेका छन्, नघटून् पनि किन आवाजविहीनहरूको धर्तीमा ।

पङ्क्तिकार जन्मेको भूगोलका परिवेशको यो यथार्थ प्रस्तुति हो, यो प्रस्तुतिमा यस्ता विडम्बना वा पीडाका धेरै कुराहरू छुट्न सक्छन्, तर अतिशयोक्ति हुन सक्दैन । यो यथार्थ चित्रण सुदूर पश्चिमाञ्चलक्षेत्रको हो ।

वि.स. २०३० साल पूर्व महाकाली, सेती, राप्ती भेरी र कर्णाली गरी पाँच अञ्चल र २४ जिल्ला सुदूर पश्चिमको परिचय भित्र थिए । धार्मिक, सांस्कृतिक, सामाजिक, साहित्यिक, साङ्गितिक, आर्थिक, भाषिक बोधगम्यता आदिका आधारमा सामीप्य र सान्निध्यमा रहेको क्षेत्र हो यो ।

वि.स. २०३० सालमा राजनैतिक विभाजन हुँदा सुदूरपश्चिमको अर्थमा सेती र महाकालीलाई सूचीकृत गरियो । जहाँ तराईका दुई जिल्ला, पहाडका चार जिल्ला र हिमालका तीन जिल्ला गरी जम्मा

नौ जिल्लाले सबै किसिमको भौगोलिक क्षेत्र ओगटयो । राजनैतिक विभाजन जे जस्तो भए पनि सबै दृश्य र परिदृश्यले साबिकैको सुदूर पश्चिमलाई आवाजविहीनहरूको धर्तीका रूपमा आज पनि चिनाइरहेका छन् ।

आवाजविहीनहरूको धर्ती भने पनि धर्ती स्वयं नै वसुन्धरा हो, अर्थात् 'वसूनि धारयतीति वसुन्धरा', 'नाना रत्ना वसुन्धरा', 'रत्नगर्भा वसुन्धरा', यसरी स्वयं वसुन्धरा जीवनको आधार हो । यसै सन्दर्भमा भन्नुपर्दा सुदूर पश्चिमक्षेत्रमा के छैन ? विकासका प्रचुर सम्भावनाका आधारहरू छन् । जसलाई सङ्क्षिप्त रूपमा भए पनि यहाँ विवेचना गर्ने अनुमति माग्दछु ।

व्यास ऋषि हिमाल, नाम्पा हिमाल, अपि हिमाल, सैपाल हिमाल, गुराँस हिमाल, लिम्पियाधुराजस्ता विश्वलाई आकर्षित गर्ने अनेकौ हिमशिखरहरू छन् यहाँ, तिनैबाट अजस्ररूपमा प्रवाहित हुने महाकाली, सेती, राप्ती, चमेलिया, सोर्नाया, बूढीगङ्गाजस्ता अपार ऊर्जा शक्ति भएका अनेकौँ हिमनदी र नदीहरू आफैमा अपार जलसम्पदाका भण्डारका रूपमा रहेका छन् । राफ्टिङका निम्ति पनि मोहक जलाधारको प्रचुरता रहेको छ ।

यार्चागुम्बा, जटामसी, पाँचऔँले, कुमकुम, चिराइतो जस्ता अनेकौँ सञ्जीवनी वा जीवनदायिनी जडीबुटीले यो क्षेत्र भरिभराउ रहेको छ । शिलाजित अभ्रक, ब्राह्मी, बाक्कुचीजस्ता अमूल्य भैषज सम्पदा यहाँ प्रशस्त रहेका छन् ।

विविध वन्यसम्पदा यो क्षेत्रका उपहारका रूपमा छन्, कस्तूरीमृगलगायतका वन्यजन्तु, डाँफे, बाज, च्याखुरालगायतका विश्वलाई नै रोमाञ्चित पार्ने चराहरूको बासस्थान यहाँ रहेको छ । शुक्लाफाँट वन्यजन्तु आरक्षले पनि आफ्नै वैविध्य राख्दछ ।

प्रकृतिका स्वर्णिम उपहारले भरिएको, धर्तीको स्वर्ग नै मानिने खप्तड, रामारोसन, सुरमासरोवर, झिलमिल्याताल, ब्रह्मदह, रानीताल, भागवतताल, बेत्कोटताल, बगरकोटताल, आलिताल, घोडाघोडीताल आदि अनैकौँ तालहरू आफ्नै महत्त्वका छन् र पर्यटनका निम्ति आकर्षणका केन्द्र पनि ।

विकासका सम्भावनाका कुरा गर्दा घोडाघोडीताललाई एउटा उदाहरणका रूपमा लिन सकिन्छ । जो विश्वकै उत्कृष्ट सिमसार क्षेत्रमध्येमा पर्न गएको छ ।

विभिन्न सङ्घसंस्थामार्फत् विकासशील वा विकासोन्मुख क्षेत्रहरूलाई उठाउनेतर्फ आज विश्वको ध्यान गइरहेका छ र त्यस्तै विश्वका विशिष्ट सम्पदालाई विश्वसूचीमा राख्ने काम भैराखेको छ । राष्ट्रिय वन्यजन्तु संरक्षण विभागका अनुसार सन् १९७१ मा इरानको रामसार सहरमा भएको रामसार महासन्धिलाई नेपालले सन् १९८७ मा अनुमोदन गरेको थियो । रामसारमा विश्वका एक हजार तीन सय २८ भन्दा बढी सिमसार क्षेत्र सूचीकृत भइसकेका मध्ये नेपालका कोसीटप्पु वन्यजन्तु आरक्ष, कैलालीको घोडाघोडीताल, चितवनको बीस हजारी र कपिलवस्तुको जगदीशपुर जलाशयलाई सिमसार क्षेत्रका रूपमा स्विट्जरलैन्डको जेनेभास्थित रामसार सचिवालयद्वारा विश्वसम्पदा सूचीमा सूचीकृत गरिसकिएको छ । अब नेपाल पनि विश्वमै उत्कृष्ट सिमसार भएको देशको रूपमा चिनिन पुगेको छ ।

रामसारमा सूचीकृत भए पनि विश्वसम्पदा संरक्षण गर्ने निकायको ध्यान यो क्षेत्रमा केन्द्रित हुन्छ र स्थानीय बासिन्दाको आर्थिक, सांस्कृतिक, सामाजिक र धार्मिक महत्त्वलाई जगाउँदै उनीहरूको जीवन-स्तर सुधार्ने काममा दाताहरूले सहयोग गर्ने गर्छन् भन्ने सिद्धान्त छ ।

रामसार महासन्धिले विश्वकै अनुपम र विशिष्ट भौगोलिक अवस्था, दुर्लभ तथा लोपोन्मुख सूचीका वन्यजन्तु एवं वनस्पतिको वासस्थान, आश्रयस्थल, जीवन-चक्रको विषम परिस्थिति वा प्रतिकूल अवस्थामा आश्रय दिने सिमसार क्षेत्र र २० हजारभन्दा बढी जलपन्क्षीको आश्रयस्थललगायतको क्षेत्रलाई बढी प्राथमिकता दिइएको छ । यस अर्थमा यो क्षेत्रमा रहेको 'घोडाघोडीताल' विकासका सम्भावना डोऱ्याउनेमा उदाहरणीय नमुना हो । तर अहिलेसम्म यहाँ कुनै उल्लेखिनीय काम भएको छैन । घोडाघोडीताल आफ्नै स्थितिमा रहेको छ ।

प्रकृतिको साम्राज्य क्षेत्र मानिने खप्तड, रामरोसन, पाटन, जोरायलजस्ता दर्जनौँ फाँट पर्यटनका निम्ति रमणीय स्थल छन् । यहाँ गल्फजस्ता क्रीडास्थलका लागि नेपालमा अन्यत्र दुर्लभ भएका ठाउँहरू छन् ।

शुक्लाफाँट वन्यजन्तु आरक्ष हालसम्म एसियाकै सबैभन्दा ठूलो आरक्ष मानिन्छ । शरदऋतुको आगमनसँगै युरोप, स्पेनदेखि साइबेरियासम्मका हजारौँ-हजार आफ्नै वैशिष्टय राख्ने चराहरू यहाँ आएर यो क्षेत्रलाई जैविकविविधताको आकर्षक थलो बनाउँछन् । कञ्चनपुर जिल्लाका लालपानीताल, कालीकिचताल, रानीताल, सिकारीताल, ताराताल आदि थुप्रै आकर्षक तालहरू, जहाँ दुर्लभ जलजन्तुहरू रहने गर्दछन्, यसै आरक्षक्षेत्रमा पर्दछन् । यहाँबाट हेर्न सकिने सूर्योदय र सूर्यास्तको अनुपम छटाले जुनसुकै दर्शकलाई पनि कहिल्यै विर्सन नसकिने सम्झना गराइराख्दछ । विकासका लागि आधारभूत सम्भावनामा यस्ता विषयवस्तुको आफ्नै विशेषता रहने कुरामा कसैको भिन्न मत हुन सक्दैन । तथा बडीमालिका, उग्रतारा, शैलेश्वरी, त्रिपुरासुन्दरी, निगालासैनी, भागेश्वर, मल्लिकार्जुन, वैजनाथ, वैद्यनाथ, सिद्धनाथ, हुनैनाथ, मष्टो, गोकुलेश्वर, चन्दननाथ, परशुरामक्षेत्रजस्ता मनोरम तीर्थस्थल र जोलजीवीजस्ता ठाउँमा महिनौँ दिनसम्म लाग्ने प्रसिद्ध मेला पर्यटकीय दृष्टिले अत्यन्तै महत्त्वपूर्ण छन् । धर्मगुफा, व्यासगुफा, कोटयामीगुफा, छाङरू, तिङ्करजस्ता भन्ज्याङ् पनि यो क्षेत्रका आकर्षक पक्ष हुन् । अति सम्मानित र बहुचर्चित भूमि कैलाश मानसरोवरको प्रवेशद्वार पनि यसै क्षेत्रमा रहेका छन् ।

अछामको 'नौमुठे गाई' का नाउँले ख्याति पाएको गाईको एउटा विशेष नश्ल यहाँ पाइन्छ, जो अन्यत्र दुर्लभ छ । नौमुठी बराबरको अर्थात् ३ फिटजतिको उचाइ हुने सानो कदको दुधालु गाई पनि विकासको सम्भावनामा एउटा नमुना बन्न सक्छ ।

नेपाली भाषा, संस्कृति, सदाचार आदिको उद्गमस्थल मानिने सुदूरपश्चिम शिक्षा र समयानुकूल उन्नतिमा धेरै पछि परेको छ र आफैमा साँघुरिएर यथास्थितिमा बाँचेको छ । प्रचुर विकासका

सम्भावना छँदाछँदै पनि विपन्नताको घेराभित्रै समेटिएको छ । अन्धविश्वासका पर्खालहरू भत्कन सकेका छैनन् । जन्मदेखि मृत्युसम्म अन्धविश्वासले यसरी जकडेको छ कि बुवाले पितृश्राद्ध गर्दा बिघ्नबाधा गर्ला कि भनेर घरको बिरालोलाई बाँध्ने गरेको थियो । छोराले त्यसलाई नियमभित्र पर्ने कुरा सम्झी पछि आफ्नै बुवाको श्राद्ध गर्दा गाउँघरबाट खोजेरै भए पनि श्राद्धघरमा बिरालो ल्याई बाँध्नु नै पर्ने कुरा जरुरी सम्झने गर्दछ । योभन्दा ठूलो अन्धविश्वासको जन्जिर के होला ? यो प्रतीकात्मक उदाहरण हो, यथार्थमा यस्तै-यस्तै मनोविज्ञानले यो क्षेत्रलाई धराशायी बनाएको छ । अशिक्षा र गरिबीले यसलाई झन् सघाएको छ ।

यो समाजमा सबैभन्दा कहालीलाग्दो भनूँ वा अकल्पनीय भनूँ महिलाको अवस्था रहेको छ । विज्ञानले जतिसुकै चमत्कार गरे पनि अझै यो क्षेत्रमा 'ब्यान्तारो' अर्थात् बिहान उदाउने तारा वा सूर्यको गति हेरेर कामकाजी समय छुट्टयाइन्छ । त्यो गतिअनुसार चल्न नसके आफूभन्दा बूढाको खप्की खानुपर्ने हुँदा कामकाजी महिलाको रातिको निद्रा पनि निर्विघ्न हुन सक्दैन । बिहान चार बज्दा नबज्दै उठेदेखि दुई-तीन किलोमिटर टाढाबाट पानी बोकेर ल्याउने, गाईबस्तुको स्याहार-सम्भार, घरपरिवारको खानपिन, चुलोचौकौ, वनबेत, घाँसपात, गर्दागर्दै एकछिन फुर्सत नपाई झमक्क रात परेपछि फेरि प्राय: बिहानदेखिकै खानपिन, चुलोचौको आदि कुरा दोहोरिन्छन् र १२ बज्छ कि कति अन्दाजमै समय बुझ्नुपर्ने हुन्छ । सौभाग्यले यदि कसैको सौता रहेनछ र लोग्ने कुलतमा लागेको रहेनछ भने त्यस्ती महिलाले हाँसी-हाँसी आफ्ना यस्ता सबै कष्ट बिर्सन्छन् ।

अन्धविश्वासकै कारण परिवारनियोजनको प्रभाव पनि यो क्षेत्रमा न्यून रहेको पाइन्छ । भनिन्छ, लोग्नेमान्छेले परिवारनियोजन गरे त्यसले छोएको जल न पितृमा चढ्छ न देवतामा । साथै परिवार नियोजन गर्दा लोग्ने नपुंसक पनि बन्छ । आइमाईले परिवार नियोजन गरे ऊ गाह्रो काम गर्न कहिल्यै समर्थ हुन्न आदि । यस्ता कुतर्क र अर्थहीन कुराले यो क्षेत्रका महिला सन्तान उत्पन्न गर्ने संयन्त्र मात्र बनेका छन् भन्दा अत्युक्ति नहोला । यसले गर्दा असमयमै महिलाको स्वाथ्य बिग्रने, पाठेघर खस्नेजस्ता घातक रोगले ग्रसित गर्ने

कुरा सामान्य भैसकेको छ । कमजोरीकै कारण धेरैजसो महिलालाई रतन्धो अर्थात् रातमा नदेख्ने रोग लाग्छ, त्यसलाई मैते देवता वा मसानी देवता लागेको भनेर धामीको फैसला सुनेपछि एकदेखि पञ्चबलिसम्म दिएर सो देवताको स्थानमा पूजा गरिन्छ। सायद बलि दिएपछि प्रसादका रूपमा खाइने मासुले आँखामा केही समयका लागि रातमा हेर्न सकिने शक्ति आउँछ कि, त्यसबाट धामीका कुरामा झन् विश्वास बढ्न जान्छ र त्यसै कुराको प्रचार पनि हुन्छ। अन्धविश्वासले झन् बल पाउँछ । धेरै छोराछोरी जन्मेपछि भरणपोषणको भार बढ्दछ भने गरिबीले उचित भरणपोषण हुँदैन। फलतः परिवारले नै रोगग्रस्त भएर बस्नुपर्दा ऋणमा डुबिन्छ । साहूका निम्ति आफ्नो र आफ्ना परिवारको यहाँसम्म कि नाबालिग छोराछोरीको श्रम सित्तैंमा लगानी गर्नुपर्ने हुन्छ । जसले जेजस्ता नारा दिए पनि ऊ र उसको परिवार यस्तो विवशता र बाध्यताबाट उन्मुक्ति पाउन सक्दैन । घोडा बाघ देखेपछि बाघतिरै तानिन्छ रे । त्यस्तै उसको र उसका परिवारको भोको पेट साहूतिरै तानिन्छ । भनिन्छ, एक लिखितम्का अगाडि सय बकितम्को केही चल्दैन । सङ्कट आइपर्दा साहूकै सामु हात फैलाउने हो । साहूले सय रुपियाँको तमुसुक लेख्दा, शून्यले के फरक पार्छ हँ ! यसरी अशिक्षित ऋणीको मनोदशा अनुकूल पारी एउटा शून्य थपिदिई ऋणीको सहिछाप गराउने र हातमा मात्र सय रुपियाँ थमाइदिने । कालान्तरमा चक्रवृद्धि ब्याजसमेत गरी साहूले ताकेता गरेपछि हजार होइन, सय रुपियाँ मात्र लिएको कुरा उठान गर्दा एक लिखतम्का सामु ऋणीका हजार बकितम् निरर्थक भएर उसलाई बधुवा नोकर हुन विवशता आइलाग्छ । बहुलमा यस्तै छ यहाँको जीवन कहानी । परिणाममा ऋणीले छोरालाई ऋण बोकाएर मर्नुभन्दा अर्को उपाय बाँकी रहदैन । यसरी गरिबी र अशिक्षाको उपहार भनूँ वा उत्तराधिकार यो समाजले कतिञ्जेल आत्मसात् गर्नुपर्ने हो थाहा छैन ।

यो क्षेत्रको जीवनस्तर सुधार्न सक्ने आधारभूत हाम्रा सम्भावनाहरू बाहिरबाटै दोहन भैरहेका हुन्छन्, आवाजविहीनहरूले बोल्न सक्दैनन्, बोल्न सक्नेहरूले ती कहिल्यै नबोलून् भनेर चाहन्छन् । फेरि आफ्नै क्षेत्रका आफ्नै भनिने सम्पदा पनि पराया भएर जान्छन् । भनिने

गरिन्छ, घरमा काम गर्ने चलाख मान्छे राखेर बजार गर्न पठाए उसैले घरवालालाई ठगिदिन्छ, लाटो वा सोझो मान्छेलाई बजार गर्न पठाए बनियाले नै ठगिदिन्छ, जसले गर्दा निराकरण सधैँ अपूर्ण रहन्छ । यही स्थिति यो क्षेत्रका बासिन्दाको पनि छ ।

आफै अशिक्षित भएर तथा गरिबीले गर्दा अभिभावकले आफ्ना सन्तानलाई शिक्षा दिने कुरामा उपेक्षा भाव राखेको देखिन्छ । यहाँसम्म कि छोराले पाएको शिक्षा कतिसम्म र कुन स्तरसम्मको हो भनी सोध्ने क्षमतासम्म अभिभावकमा पाइँदैन । उदाहरणका लागि गाउँघरमा चर्चित भैराख्ने कुरामा 'मेरो छोराले सय रुपियाँसम्मको तमसुक लेख्न सक्छ एउटाले भन्दा अर्कोले त मेरो छोराले दुई सय रुपियाँको पनि तमसुक लेख्न सक्छ भन्ने कुरामा खुसी हुने अभिभावकको बुझाइको तात्त्विक धरातल कतिसम्म छ भन्ने कुरा स्पष्ट हुन्छ, यस्तो छ यहाँका सर्वसाधारणको शोचको स्तर । फेरि त्यस्तै चर्चामा सँगै बसेकोले भन्न थाल्छ हजुरहरूको छोरा यति जान्ने भएछन्, हाम्रो पनि कामकुरा आइपरे सघाइहाल्छन् नि ! हाम्रा त पितापुर्खाले हलो जोतेरै जिन्दगी गुजारेका हुन्, मेरो छोरोले हलो-विद्या हासिल गरिसकेको छ, यसैमा म खुसी छु । यी संवाद वा चर्चा कुनै कथाको सन्दर्भ होइन, त्यो ठाउँ वा त्यो थलो भित्र पसे आफ्नै आँखाका सामु आफ्नै कानले सुनेर प्रत्यक्षानुभूति गर्न सकिन्छ आज पनि । यो क्षेत्रका दराकन्दरामा यिनै अनुहार छन्, आँखामा तेज नभएका, अनुहारमा रस नभएका ।

यहाँ जीवन नै अमावस्याको पर्याय हो भने पनि हुन्छ । त्यहाँ जहाँ जतातिर खोतले पनि अन्धकारकै गह्वरसामु उभिन्छन् । उत्पादनबाट पाउनुपर्ने अभाव त खेपेकै छ तर आफ्नै जन्मेको माटोले दिनुपर्ने पानीको पनि त्यत्तिकै अभाव छ । मिलौँ टाढा पुगेर ढाड वा टाउकाको पीडाको वास्ता नगरी ल्याएको पानी काकाकुलको जलबिन्दुझैँ हुन्छ, सहाराविहीन बूढाबूढीलाई ता घाँटी रसाउनु पनि तर्सनुपर्ने हुन्छ । रातदिन खट्ने महिलाहरू श्रम र पसिनाले पनि लस्त हुन्छन्, जुन ठाउँमा पानी कल्पनाको वस्तु छ, त्यहाँ नुहाइ-धुवाइ गर्नु सपनाको कथा हो । फलत: महिला भन्नाले 'मैलो' अर्थात् फोहोरको पर्याय बन्ने बाध्यता छ । त्यहाँ कपालभित्रको जुम्राको गोलो र

लुगाभित्रका जुम्रा, उपियाँका राशले तर्साउनसम्म तर्साउँछन्, तर के गर्ने छालालाई पनि सहने बानी परिसकेको हुन्छ । बेलुकीपख शरीर यति थकित भइसकेको हुन्छ कि खाली भुइँ पाए पनि कसैले न पाएको निद्राको आशीर्वाद पाएजस्तो लाग्छ, यस्तो स्थितिमा यहाँको एउटा लोकगीत संस्मरण भएर आउँछ– 'माया बसिसक्यापछि भात न जातैन । थकित भैसक्यापछि निद्रालाई थातैन ।'

त्यहाँ पनि आम जनमानसझैँ केही वर्गलाई छोडेर छोरा र छोरीमा ठूलो विभेद पाइन्छ । छोरो जन्मँदा हर्षबढाइँ गर्ने, छोरी जन्मँदा अँधेरो अनुहार बनाउने, तर आधुनिकता नछोएको ती दराकन्दरामा छोरी पेटमा छ भनेर भ्रूण-हत्याले स्थान भने पाएको छैन । छोरी जन्माउने महिलाको जीवन भने लोग्ने र परिवारको कटाक्षले गर्दा नरक बन्न पुग्छ, न मर्न नै सक्छे न बाँच्न नै, यस्ता दुर्दिनले त्यहाँका अधिकाङ्श महिलालाई घेर्दछ । मात्र छोरीबाट फाइदाको आशा गर्ने वर्गले छोरी जन्मँदा खुसी मनाउँछ ।

पुत्र जन्मँदा हर्षबढाइँ गरे पनि प्रसूतिलाई भने कडा नियन्त्रणमा राखिन्छ, बच्चालाई असर पर्छ भनेर भुटेर नुन खान दिइन्छ, चिल्लो खान दिइँदैन, माछाका काँडा दूधद्वारा बच्चाको पेटमा पुग्छन् भनेर खान दिइँदैन, उसै पनि माछा-मासु खाने कुरा यहाँको जनजीवनमा दुर्लभै हुन्छ। पुष्ट खानापिना नपाए आमाको स्वास्थ्य कमजोर हुने र बच्चालाई खुवाउन आमाको दूध पर्याप्त नभएर बच्चा दुब्लाउँदै र सुक्दै जाने । पौष्टिक खानतिर ध्यानै नदिई बच्चालाई 'सुकेनाश' रोग लाग्यो भनेर झारफुकतिर लाग्ने। अन्नप्रासन नहुञ्जेल बच्चालाई पानीसम्म नखुवाउने परम्पराले बालकको अवस्था दिनानुदिन बिग्रँदै जाने कुरा साधारण नै हुन्छ यहाँ ।

गर्भमै बच्चा छँदा पनि छोरी भए मेरो छोरालाई दिनू भनी वचनबद्धता गराउने प्रचलन पनि पाइन्छ। गर्भको बच्चा छोरी जन्मे केटापट्टिकाले न्वारानकै दिन आएर बच्चीलाई बाला लगाएर आफ्नो माल पक्का गर्ने जस्ता परम्परा पनि केही वर्गमा पाइन्छन्, अनमेल विवाहको प्रारम्भ पनि यस्तै कुराबाट सुरु हुन्छ ।

प्रायः बालविवाहकै मानसिकतामा यहाँको समाज गाँजिएको पनि छ । ५-७ वर्षको उमेर नपुग्दै कन्या माग्नेले आग्रह गर्ने र

कन्या दिनेले छोरीको होइन, आफ्नो स्वार्थ अनुकूल हेरेर छोरी दिने वाचा गर्ने र केटापट्टिबाट कोसेली, नगदी, जिन्सी आदि उपहार ग्रहण गरेर आभारी वा कृतज्ञ हुने गरेको देखिन्छ। केटापट्टिका अभिभावकले केटीलाई कति पटक हेरिसकेको हुन्छ, तर केटीपट्टिकाले केटाको अवस्था कस्तो छ सायदै हेरेको हुन्छ, परिणामस्वरूप केटीको विवाह कहिले सुस्तमनस्थिति वा लाटा बहिरा, अपाङ्गजस्ता व्यक्तिसँग भैदिन्छ र यो दुर्घटनाको सिकारले केटीको जीवन अभिशप्त बन्न पुग्छ । यस्ता घटनाहरू पटक-पटक  घटे पनि यहाँ चेतना आएको पाइँदैन ।

छोरा जन्मेन भने प्राय: तीन चारओटी आइमाईसँग पनि विवाह गर्ने कुसंस्कार यहाँ छँदै छ । ५५-६० वर्षको उमेरमा पनि विधुर भए उसले प्राय: आफ्नै जातभातकी केटीसँग विवाह गर्न रुचाउँछ । जति खोजे पनि ८-१० वर्षभन्दा बढी उमेरको केटी पाइँदैन। पैसाको बलले उसले सानै उमेरको केटीसँग विवाह गर्छ। केटीको नारकीय जीवनको सुरुवात हुन्छ । जति प्रयास र खर्च गरे पनि केटीका आमा-बाबुलाई अनुकूल पार्न सकेन भने त्यो विधुरले चोरेर पनि कन्या भित्र्याई, सिउँदोमा सिन्दूर भरिदिएपछि त्यो कन्या अरूका निम्ति खोटो सिक्काझैँ हुने हुँदा यहाँ पनि त्यो केटीले रगतका आँसु पिएर पनि त्यै चोरको यातना सहनुबाहेक अर्को उपाय हुँदैन ।

नाबालिक कन्याको विवाह गर्ने परम्पराको आधार हाम्रा नीतिकारहरूको दोषपूर्ण निर्देश पनि हो भन्दा अत्युक्ति नहोला, जस्तो- 'सप्तवर्षा भवेद् गौरी दशवर्षा च रोहिणी, तत: ऊर्ध्वं रजस्वला ।' रजस्वलाको कन्यादान गर्दा महापातक लाग्छ भन्ने मानसिकताले पनि यो रूढिवादितालाई बल पुऱ्याएको छ ।

यस्ता असमान अवस्थामा पत्नीको नाममा एउटा नाबालिकाले सबै यातनाहरू भोग्नुपर्दा न घरबाट न माइतीतर्फबाट सहानुभति पाउँदा ऊ घरबाट निस्केर जङ्गललाई निरापद आश्रय सम्झेर भोक-भोकै कति दिन त्यतै बिताइदिन्छे । अन्तत: आफूलाई नचिन्ने गाउँठाउँतिर शरण लिन पुग्छे। त्यहाँ उरन्ठेउला केटाहरूको पन्जामा पुग्छे, त्यहीँ बलात्कृत हुन्छे। भारतीय वेश्यालयका दलालहरू यस्ता गाउँठाउँमा छद्मभेषमा घुमिराख्छन् र त्यस्ता विवश केटीहरूलाई

आफ्नो फन्दामा पारी सीधै मुम्बईका कोठीमा पुऱ्याउँछन्। न त्यहाँ माइती नेपालको दृष्टि पुग्छ न घर नेपालको नै।

कुनै केटीको उमेर पुग्दै गै घरअनुकूल भए पनि 'छुई' वा 'छाउपडी' यहाँको विकराल समस्या हो। यस्तो अवस्थामा त्यो महिलालाई कसैले पनि छुन हुँदैन र त्यो महिलालाई पनि गाईबस्तु बोटबिरुवासम्म छुने अधिकार हुँदैन। त्यो अवस्थामा त्यसले गाईबस्तुको गोठमा वा त्यसै उद्देश्यको निम्ति बनाएको घरभन्दा परको छाप्रोमा चार-पाँच दिनसम्म अनिर्वायरूपमा बस्नुपर्ने हुन्छ। त्यस्तो फोहोर र अस्वस्थ्यकर ठाउँमा पुस-माघको जाडो खेप्नुपर्छ, साउनको झरी बेहोर्नुपर्छ, जेठ-आषाढको गर्मीमा गुम्सिनुपर्छ। बस्ने छाप्रोसम्म नभए रूखको टोड्का खोजी त्यहाँ रात बिताउनुपर्ने हुन्छ, यस्तो स्थितिमा सर्पले टोकेर मृत्यु हुने, बलात्कृत हुने, मारिने कैयन् घटनाहरू घट्ने गरेका भए पनि त्यो समाजको घैँटोमा घाम लागेको भेटिँदैन। बरु त्यस्ता अवस्थालाई सुनको फुल पार्ने कुखुरा सम्झनेहरू राजधानीदेखि त्यहाँसम्म घुमिरहेकै हुन्छन्। यो आवाजविहीन नारीको अवस्थाले 'क्रूर हिंसा र बलात्कार' शीर्षकमा मिति २०६४ आषाढ ३० गते कान्तिपुरमा छापिएको तारा भट्टराईको लेख संस्मरण भएर आउँछ, २५ सय वर्षपूर्वका प्रसिद्ध दार्शनिक *कन्फ्युसियस*ले भनेको भाव- 'तिमीलाई कसैले बलात्कार गर्न खोज्यो भने अन्तसम्म त्यसको प्रतिकार गर्नु, तर जब तिमी आफूलाई बचाउन असमर्थ हुन्छचौ भने चुपचाप पल्टिदिनु' यही विवशता र बाध्यता यहाँको महिलाको पनि नियति बन्नपुगेको कुरा कसैले नकार्न सक्दैन।

सुत्केरी हुँदाको महिलाको झनै दयनीय दशा छ, गाई, भैँसी आदिका गोठमा गएर बच्चा जन्माउनुपर्ने र १० दिनसम्म त्यसै गोठको अँध्यारो फोहोर कोठाभित्र समय बिताउनु सुत्केरीको बाध्यता हुन्छ। त्यस्तो अवस्थामा आमा वा नवजात शिशुलाई टिटानस भएर अकाल-मृत्यु पनि हुन सक्छ। यसरी मरे पनि भूतप्रेतको बाधा हो भनेर चित्त बुझाउँछन्, यथार्थ खोज्ने प्रयास हुँदैन। कतै काहीँ सुत्केरीलाई घरको नजिक राखे देउता पितरहरू रिसाउँछन् भनेर सुत्केरीलाई जङ्गलमा रूखको टोड्कामा अनिवार्यरूपले राख्ने प्रचलन पनि पाइन्छ। रूखको टोड्कामा सुत्केरी र सद्योजात शिशुसहित १०

रात बिताउनुपर्ने कुरा सुन्दा मुटुको स्पन्दन पनि रुक्न सक्छ कि जस्तो लाग्छ तर यहाँ यसको खासै प्रभाव परेको पाइँदैन ।

बझाङ जिल्लाको उत्तरीपूर्वी काँडा र दातोला गाविसका सुत्केरी महिलालाई 'पाङर' तथा 'बाँझ' का रूखको टोडकोमा राख्ने गरेको कुराको जानकारी दिँदै 'सुत्केरीलाई रूखको टोड्कामा राख्नु पर्ने यो कुनै दन्त्यकथा होइन' भन्ने शीर्षकमा मिति २०६०।८।५ को गोरखापत्रमा छापिएका पङ्क्तिहरू यहाँ उल्लेख गर्नु सान्दर्भिक होला जस्तो लाग्छ मलाई - 'महिला सुत्केरी हुँदा एघार दिनसम्म अपवित्र हुने र छोइने स्थिति भए देवीदेवता रिसाउने, घरमा अनिष्ट हुने हुँदा घरभन्दा टाढा लगेर रूखको टोड्कामा राखिने गरिन्छ । समुद्री सतहदेखि तीन हजार मिटरसम्मको उचाइमा रहेका ती गाविसमा चिसो मौसममा पनि सुत्केरी बस्ने टोड्काको चारैतिर आगो बाली टोड्काको भित्री भागमा सुत्केरी र नवजात शिशुलाई राखी टोड्काको भित्री भागलाई सुखेको खर र छ्वालीले ढाक्ने गरिन्छ । सुत्केरी अवस्थामा त्यसै पनि सफा-सुग्घर र आरामदायी ठाउँको आवश्यकता पर्ने भए तापनि ठीक त्यसको उल्टा घरबाट जङ्गलमा लगी सबैतिरबाट अस्वस्थकर परिवेशमा राखिँदा आमा र बच्चाको स्वास्थ्यमा प्रतिकूल प्रभाव परी आमा र बच्चा टोड्कामै मरेका कैयन् घटनाहरू पाइन्छन् । केही चेतना भएका गाँउका समाजसेवीले यस्तो प्रथामा सुधार ल्याउने, गलत प्रथालाई हटाउने कुरा उठाए पनि यहाँका देवीदेवताका धामीको परम्पराको विचारको मेल नखाँदा सुधार खोज्नेहरूले अनेकौँपटक गाउँनिकाला हुनु परेको कुरा दातोलानिवासी बताउँछन् । सुरक्षित मातृत्व र परिवारनियोजनका कुरा कुनै भव्य होटलमा वा सभागृहभित्रै गुम्सिएर बस्छन् ।

सुत्केरी महिलालाई १० दिनसम्म दूध, दही, मही आदि खान दिन निषेध गरिन्छ । सुत्केरीले छोएको पानीलाई २२ दिनसम्म देवीदेवतामा चढाइँदैन र बूढाबूढीहरूले पनि खाँदैनन्। महिला गर्भवती भएको सातौँ महिनादेखि उसले छोएको पानी पूर्ववत् अग्राह्य हुन्छ, त्यतिमात्र नभएर उसको लोग्नेको प्रवेश पितृ र धार्मिक कार्यमा निषेध गरिन्छ, उसलाई मलामी जाने अधिकार हुँदैन ।

यहाँका पुरुषवर्ग रोटीरोजीको खोजीमा बिदेसिन्छन् र घर फर्कंदा एड्स लिएर फर्कन्छन् । एड्सका नाममा डलर कमाउने धेरै छन्, तर यहाँको सम्झना सायदै कसैलाई हुन्छ होला । यहाँ महिलाको सम्पत्तिमा कुनै अधिकार देखिँदैन । नेपालमा नागरिकता वितरण गर्ने सदावर्त लाग्यो । तर यहाँ दराकन्दरामा आएर सोध्यो भने कतिले नागरिकताको आहारा पायो, त्यहाँ त्यो स्वाद पाएको मान्छे बिरलै भेट्टिएला ।

यहाँ महिला भएर महिलाकै शत्रु पनि छन् । उद्धार गर्ने निहुँमा ठूलो स्वरमा कराउने तर सुटुक्क आफ्नै अर्थमा त्यो स्वर भजाउने र दुर्नियतिमा फसेका नारीहरूलाई यथास्थितिमै रहून् भन्ने अन्तर्मनले काम गर्ने, पारदर्शी कहिल्यै नहुने, पुरुषप्रधान अवस्था समाजको विकृति हो भन्ने तर पुरुषसँगै मिली सञ्जाल खडा गर्ने, च्याखे थाप्ने, शकुनिको पासा फ्याक्ने । यस्तो अवस्थामा कसरी अनकन्टारमा लुकेको यातना भोगिरहेको समाजले उन्मुक्ति पाउने ?

जारीप्रथा पनि यहाँको विषाद हो । यसबाट बहुविवाह, बालविवाह आदिले प्रश्रय पाएको छ । हिमालतिरको बहुपति प्रथाको प्रचलन पनि दाम्पत्य जीवनको अभिशापको रूपमा रहेको पाइन्छ ।

यहाँको अशिक्षा र गरिबीमा १० वर्षको द्वन्द्वले झनै अप्ठ्यारो अवस्था थपेको छ । भएका सानातिना स्कूलहरू पनि बन्द भए, पहिले पनि बालिकाहरूको उपस्थिति स्कूलहरूमा नगण्य थियो, अब ता एक-दुई कक्षासम्म पढाउने चाहना राखे पनि त्यो पनि रहेन । परिवारका भरण-पोषण गर्ने युवाशक्ति कोही त्यसै युद्धमा होमिए, कोही विदेशतिर पलायन भए घरदैलोमा भाइ-छोराहरू गुमेका बूढाबूढीहरू सिन्दूर गुमाएका एकल महिलाहरू, आमा-बाबु गुमाएका टुहुरा छोराछोरीहरूबाहेक कोही रहेन । कोही मर्दा लास डोकोमा बोकेर एकल महिलाले मशान घाटमा पुर्‍याइन्, कोदो, मकै छर्नुपर्दा एकल महिलाले नै हलो जोतिन्, नारीशक्ति जाहेर गरे पनि उनले कतैबाट आदर वा सम्मान पाइनन् ।

त्यो अनकन्टारमा बस्नेहरूका बीच झैझगडा परिआए अदालतको भन्दा धामीको निसाफ सबैलाई मान्य हुन्छ र धामीको निसाफमा

कसैले पनि प्रतिक्रिया जनाउँदैन, अन्धविश्वासको यो पनि बलियो स्तम्भजस्तो छ ।

अशिक्षित भए पनि एउटा कुरा उनीहरूले बुझेका छन् कि हामीले भोट दिएका नेताहरूका परिवारका प्रत्येक सदस्यले लाखौं रुपियाँ पर्ने चिल्ला गाडीहरू चढ्छन्, हामीहरू औषधिको नाउँमा एउटा सिटामोलसम्म पाउँदैनौं । एक किलो नुन किन्नसम्म हामीलाई सुन किने बराबर छ ।

अशिक्षा र गरिबीले गर्दा सम्पन्नता र विपन्नताका बीचमा झन्-झन् गहिरो खाडल बन्दै गएको छ । सहरिया सम्पन्नता र ग्रामीण बेरोजगारकै कारण फ्रान्सको राज्यक्रान्ति भएको थियो । तर यहाँ क्रान्ति हुन्छन् कुर्सीका लागि, पदका लागि, आफ्नो वैभवशाली र विलासी जीवनका लागि ।

यहाँका यी गरिब जनताले वि.स. २००७ सालको लडाइँ लडे, २०१७ साल विरुद्धको क्रान्तिमा होमिए, २०३६ सालको जनमतमा जोखिए, २०४६ सालको आन्दोलनमा आहुत भए, २०६० को दशकको द्वन्द्वमा आफ्नो सर्वस्व गुमाए, २०६२/६३ को क्रान्तिसागरमा साहदत दिए, तर यहाँको जनताका दुर्दिनले पछ्याउन कहिले छोडेन । यिनको भागमा यदि क्यै पर्‍यो भने भोक, रोग, अभाव, महँगी, दमन र शोषण मात्रै ।

नेताहरूले जति कुर्ले पनि, ऐननियमले जति बखाने पनि यहाँ दलितहरूको अवस्था झनै दयनीय छ । मन्दिरमा प्रवेश गरेको सन्दर्भ होस् वा होटलमा चिया खाएको सन्दर्भ होस्, त्यहाँका अन्धविश्वासी र धर्मान्धहरूबाट दलितहरू पीडित भएका समाचार नपढ्ने सायदै कोही होला । त्यस्ता दराकन्दरामा पनि अछूत भनिने वर्गकी छोरी बुहारीसँग रातभरि डच्योडा खेलेर बिताउने, तर तीमध्येबाट कुनै केटी घरमा लगे सामाजिक बहिष्कारको सिकार बन्नुपर्ने यो कस्तो विडम्बना !

उपर्युक्त सबै कुराको परिप्रेक्ष्यमा केही दिन अघिमात्रै कान्तिपुरमा प्रकाशित भएको विद्वान् व्यक्तित्व अभि सुवेदीका ती पङ्क्तिहरू सम्झिन मन लाग्छ - 'यस देशका नरनारीले अनेकौंपटक अनेकौं किसिमले

नयाँ समयका सकसक थाहा पाए। तर ती नयाँ-युग र समयका सपना त्यत्तिकै हराए। मानिसका दु:ख जहाँ थिए त्यहीँ रहे। जीवन उस्तै रह्यो। खडेरी फुटेर धाँजा परेका खेतका गराजस्ता खाली पाइतालाले यस देशका नरनारी तीन आँख्ले तारा मुनि, मध्यदिनको हपहप घाममुनि अनि झरी र चक्रवातमा आफ्ना दु:खका भारी बोकेर नित्य लम्किरहे। जीवनको गुणमा परिवर्तन आएन, आधी पेट खाएर सुत्नु एक मानवीय अस्मिता नै भयो। अर्को यथार्थ बुझिएन, उज्यालो खोज्न, कहीँ केही भएको छ, त्यो बुझ्न अनि जीवन धान्ने केही हुन्छ कि भनेर यस देशको नरनारीले भूगोलको सीमा तोडे। ती नित्य हिँडिरहदा सीमान्त बाँच्न बाध्य भए। जहाँ गए त्यही भूमि भेटियो। तिनै चरा कराए। भाले त्यसरी नै बास्यो। तारा बेमौसमी फलजस्तो त्यसरी नै वैलाए। यसरी धेरै मानिस देशबाहिर जाने क्रम धेरै वर्ष चलिरह्यो। चलिरहनेछ। तर यस देशको मानिसको बोली कसले कहिले सुने भन्ने प्रश्न एक अनुत्तरित प्रहेलिका हो।' यी शब्दहरू र वाक्यहरू मेरै अनकन्टार गाउँ र ठाउँका सुस्केरा हुन्। यसमा मेरा सुस्केरा र उच्छ्वास मिसिएका छन्। नबुझ्नेहरूसँग मैले गुनासो गरेर नै के अर्थ भो, भोग्नेले आफ्नो नियति भोगेकै छन्। अन्तमा भन्न मनलाग्छ, भूपीका ती शब्दहरू–

*मैले पिएकोमा रिसाएका साथीहरू*
*पिएर त हेर*
*पिउन झन् गाह्रो छ*
*मरेर सहिद हुनेहरू*
*जिएर त हेर जिउन झन् गाह्रो छ।*

यिनै हुन् आवाजविहीनहरूका धर्तीका क्रन्दन। युगौँयुगदेखि यसरी नै उच्छ्वास भित्रै गुम्सिएका छन्। कुनै दिन ज्वालामुखी भएर उफ्रिन सक्छन्।

# देवकोटाको सिद्धान्तः
# एकबाट एक झिक एकै बाँकी रहन्छ

*– इन्द्रनाथ अर्ज्याल*

त्रैमासिक पत्रिका *नेपाली*को प्रकाशन सुरु भएको ५० वर्ष पुगेको उपलक्ष्यमा त्यसको २०० औँ अङ्कको लागि १५००-२००० शब्दसम्मको लेख उपलब्ध गराई सहयोग गर्ने बारेको चिठीमा अङ्क ० मा जोडदिएको स्पष्ट देखिन्छ यो वाक्यमा पनि। परिमाण जनाउने नभए तापनि कुनै अङ्क पछाडि बसी त्यसको दसगुणा परिणाम जनाइदिने विशेष गुण छ अङ्क शून्यको। अङ्क ५ पाँचमा डल्लिने थियो शून्यले पछाडिबाट साथ नदिएको भए। त्यसरी नै दुई २० हुन्छ अनि बीस २००। *नेपाली* २००औँ अङ्क विशेषाङ्क हुन पुग्छ दुईओटा शून्यको विशेष गुण पाएर। त्यसको गरिमा अझ बढ्छ कारण महाकवि लक्ष्मीप्रसाद देवकोटाको शतवार्षिकीको साहित्यिक वातावरणको हाराहारीमा त्यसको प्रकाशन भएको हुन्छ। यिनी ती देवकोटा हुन् जसले आफ्नो 'झन्झा' वर्णन नामको खण्डकाव्यमा यो क्रन्दन

*"छोटो यो जिन्दगानी शतवरस पनि छैन यै काम गर्नु*
*लाँखा स्वप्ना कुहिन्छन् विफल सब बनी भाव आखिर मर्नु॥*

ईशको नजिक पुऱ्याउन वेरोका तुफानहस्ते पठाएका थिए। तर उनी ५० वर्ष (१९६६-२०१६) को उमेरमै संसारले बुझ्ने भाषा "शून्यमा शून्यसरी बिलाएँ" गीत गाउँदै बिदा भए। स्मृतिमा रहेको उनको अर्को ५० वर्ष (२०१६-२०६५) यही साल शतवार्षिकी मनाएर पूरा हुँदै छ। उनको शतवरसको आयु उनैले 'कुञ्जिनी' नामको खण्डकाव्यमा लेखेजस्तै "आधा यता इन्द्रेनी धनु, आधा सधैँ रहन्छ उस पारी" भयो। एउटा शून्य पछिलाग्दा खुसी, दुइटा शून्य पछिलाग्दा पनि खुसी नै भयो। अब तीनओटा शून्य पछि लाग्दा के हुन्छ त्यसको गणितीय दृष्टिकोणले खुल्दुली लाग्नु स्वाभाविक छ। विक्रम संवत् २००० साल सुरु हुने एक दिन अघिसम्म भोलि १९९० सालको भन्दा ठूलो भुइँचालो जाने, प्रलय हुने आदि ठूलाठूला अनिष्टको आशङ्काले त्रसित आज ६५ वर्ष नाघेका हामी नेपालीहरूमध्ये २००० साल सुरुभएको भोलिपल्ट आफू जहाँको त्यहीँ धरती नेपाल ज्यौँका-त्यौँ पाउँदा कुन नेपाली खुसी भएन। अझ नजिक आउँदा आठ वर्ष

अगाडिको कुरा हो ग्रिगोरियन संवत् २००० (त्यसताका Y2K भनेर चिनिन्थ्यो) ले त्यस्ते त्यस्तै त्रासतर कम्प्युटरसम्बधी थियो । संवत् फिर्नासाथ तलमाथि गरिरहने लिफ्ट टक्क अड्छ, उडिरहेको हवाईजहाज ठाडै तल खस्छ आदि। तर ती त्रास शब्दमै सीमित रह्यो। तीनओटा शून्य पछि लागे पनि उत्तर चाहिँ खुसी नै हुँदोरहेछ। त्यस्तै विक्रम संवत् १0,000 सालको कुरा गर्न मन लाग्छ तर लहरा तान्दा गोगोल्पेक्स (१ को पछाडि एक सय ओटा शून्य) नामको पहरा गर्जने हुनाले यहीँ अड्नु वेश नत्र डेस्टिनेसन २००० शब्द नपुगी बीचैमा तुहुन्छ ।

परिमाणको हिसाबले चरीनङ्गा भए पनि शून्यबिनाको गणित सरल हुँदैन न त अङ्क १ विनाको अङ्कगणित सृष्टि हुन्छ। हटाउनै नसकिने यी दुई तत्त्व आधुनिक कम्प्युटरको आधार हुन पुग्छ। तर कम्प्युटरभन्दा अघि बढेका महाकवि देवकोटाले अङ्क एकमात्र भएको गणित निर्माण गरेको उनको 'पागल' शीर्षकको कविताबाट थाहा हुन्छ। उनी लेख्छन्–

*"तिमी चतुर हौ वाचल*
*तिम्रो शुद्ध गणित-सूत्र हरहमेशा चलिरहेछ*
*मेरो गणितमा एकबाट एक झिके एकै बाँकी रहन्छ।"*

हरहमेशा प्रयोगमा आइरहने शुद्ध गणितको कार्यकर्ताको तयारीको सिलसिलामा उनकै 'शिक्षा' नामको प्रख्यात निबन्धबाट यो ठूलो अंश यहाँ सारिन्छ "पढाउनुमा केही कृत्रिमता छैन भन्न कोही सक्दैन। लडकालाई बागमतीमा पौडी खेल्न मन गइरहेछ तर शिक्षक कान निमोठेर भन्छ पढ्! पढ!! दुई तियाँ छ, दुई चौको आठ। वागीको आत्मा अनन्त च्याँठ अनुभव गरेर भन्दछ, यसमा के मोहनी! दोहोऱ्यायो दोहोऱ्यायो आखिर उत्तिकै। यी अङ्कका खुट्टा छैनन् दुई चौको आठै हुनुमा के मज्जा! कहिले दस, कहिले बाह्र होस् न अनि पो मज्जा। एकोहोरो ठाउँमा सधैँ उस्तैउस्तै टुङ्गिनुमा उसलाई मजा लाग्दैन। ऊ बन्धन चाहँदैन, कहिले खुर्र दगुरोस् न, दुई चौको दस, दुई पन्चे दुईसय होस् न अनि पो पौडीखेले जस्तो हुन्थ्यो।... । ...पौडिनुमा त्यहाँ डुब्नु छ, पानी खानु छ। अङ्कगणितमा पौडी खेल्दा वेञ्जमनिका खुट्टासम्म चाल्ने मौका रहन्छ। त्यसकारण मानवआत्मालाई

यो बन्धन अप्राकृत छ। बस। मास्टरजी कपाल दुख्यो। उँ। उँ। आँखा रसाए, म स्कूल जान्नभन्दा पनि ठग भनेर गाली गर्ने घरमा। यहीं मर्छु भनेको त हो नि। काल पनि आउन्न। बस। बिदा मिल्यो। हिँड खुट्टा। अहिले सुस्त, अनि कुनामा मोडिएपछि खुसीको उफरपाफर।"

माथिको कक्षामा शिक्षकले अपनाएको अप्राकृत मार्गको दाँजोमा "मेरो गणितमा एकबाट एक झिके एकै बाँकी रहन्छ" प्राकृत मार्गको एक ज्वलन्त उदाहरण हो। कविहरू फूलप्रति आकर्षित हुन्छन्, सुन्दर उपमा दिनुपर्‍यो भने फूल नै अगाडि ल्याउँछन्। प्रकाशवान् व्यक्तित्व महाकवि देवकोटाको हृदय र मस्तिष्कको सन्तुलित विकासको पैदावारीको रूपमा त्यो सूत्र चरितार्थ गर्न सेतो बेली फूल अगाडि ल्याउँछ। त्यो फूलको परिभाषा उनको कृति *कृषि-वाला* (गीति नाट्य)मा उषाकिरणले गाएको यो युगल गीतमा पाइन्छ "गाँसी दिलमा दिलको पाना/एउटै हाँसो, एउटै दाना/एउटै वास्ना तनमा/दुई फूल बनौला एउटै सिङ्गो/एउटै प्यारको सेतो थुँगो/मगमग हुँला वनमा/" गीतले सङ्केत गरेझैँ हलीकी छोरी उषा र किसानका नेता किरण एक आदर्श जोडी हुन्छन्। किरणको छोटो अनुपस्थितिमा तलसिं श्रीप्रसादकै बोलीमा "पहिलो पानी हीराको हारकी" उषालाई आफ्नो बनाउन के मात्र गरेन त्यो ठालुले। उसले उषालाई फकाएन कि, फकाउन अरूलाई पठाउन कि, टुना र मोहनी गरेन कि, अछेता र पैसा छरेन कि, मुकुण्डो लाएका भयङ्कर मूर्तिहरूले उषाको मुख थुनेर वलजफती उठाएर आफ्नो घरमा ल्याउन लगाएन कि, औषधि सुँघाई मुर्छा पारेर लुगामा लटपटाई पछिल्तिर प्वाल पारेर ठूलो सन्दुशमा राखी बन्द गरेन कि। के उपाय गर्न बाँकी राख्यो त्यो ठालुले उषालाई आफ्नो रखौटीहरूबीच राख्न। नेता किरणको उपस्थितिमा किसानहरूले शङ्का लागेको त्यो ठालुको खोपी, कोठा, चोटा, कुना, काप्चा, भान्सा, छिँडी, बारी, इनार, ढुकुटी, भँडार र त्यो सन्दुश पनि खोलेर हेरे तर उषा भेटिइएनन्। पछि मौका पारेर मुनित्रा नामकी केटीले उषालाई भाग्न मद्दत गरिन्। बाक्लो वन पुगेका किरणले त्यहीं उषालाई भेटेर "कठैवरी, छिर्के छन् केशझरी/ए देवी भैरवी भइछौ/करँग छन् कंकाली पंजर/के भीषण क्रोधले उठी छौ।" उषा भन्छिन् "ओ होहो उफ्रेर नाच्दछु/हो हो हो

खुसीको लाग्यो माद ⁄ स्वर्गैको साम्राज्य मिल्दा ⁄ जो सुख हो यल्लाई के गर्ला माथ ।" महाकवि देवकोटाको सिर्जनाअन्तर्गतको यस्तै युगल प्रेमको कथा चाहे त्यो महाकाव्य होस्, खण्डकाव्य होस्, काव्य होस्, कविता होस्, नाटक होस् चाहे त्यो निबन्ध नै किन नहोस् त्यसमा बेलीफूल फुलेको भेटिन्छ । अब बेलीफूलको रचनाबारे स्पष्ट गर्न उनैको 'लुनी' शीर्षकको गीति-काव्य अगाडि सर्छ । लुनीको विवाह गर्ने कुराबाट कथा सुरु हुन्छ । वैशाख पूर्णिमाको मारदोन नामको उत्सवमा आफ्नो छोरी लुनीको आँखा एकनाशले झुलिरहेको देख्छ सेर्पा साम्वासोङ्गो । बाबुले खवरदार गरिएकी लुनी आफ्नो मनको कुरा खोल्न सक्तिनन् । लुनीको तनको विवाह ल्हासाको धनी सेर्पाको छोरो ल्हानोसँग हुन्छ । ल्हासामा जताततै सुन त्यस्तै जताततै फूल देखिए पनि लुनीको मनमा बादल छाइरहन्छ, कपाल दुखिरहन्छ । लुनीलाई ल्हासा र ल्हानो कुनै कुरा पनि मन परेको छैन भन्ने कुरा धुप बाली ध्यान गरी थाहा पाउने ल्हामा ल्होसुंगोले लुनीलाई हेलम्बुमै पठाउने सुझाव दिन्छ । हेलम्बु फर्केकी लुनी आफ्नो बाबु सोङ्गो र उनले छानीदिएको ल्हानोको साथ केलिन्छी नदीको तिरमा रहेको गुम्बाभित्र "पस्दा पस्दै डाँको छोडेर सेर्पा चाङनालाई छोप्छिन् गएर ।" त्यस समयमा त्यो गुम्बाको ल्हामा म्हे म्हेले प्रकट गरेको यो वाक्य "विहा भन्ने मुटुमुटु बेलीफूल पारी एउटा भित्र अर्को गाँसिदिनु सिँगारी"ले त्यो फूलको बनौट स्पष्ट गर्छ । यहाँनिर माथि उषाकिरणले गाएको युगल गीतको अर्थ खुल्छ । बायाँ हातको दुई औँलाले च्यापिएको एक बेलीफूलको माथिल्लो एक पत्ती दायाँ हातका तिनै दुई औँलाले च्यापी त्यही हात बिस्तारै माथितिर लैजाँदा दुवै हातमा एक-एकओटा सेतो बेली फूल भई "एकबाट एक झिके एकै बाँकी रहन्छ" सूत्र चरितार्थ भएको पङ्तिकारको अनुभवको कुरा हो । त्यो क्रिया फाउन्टेनपेनबाट त्यसको क्याप निकालेजस्तै हो । दुई दिल मिली फुलेको बेली फूलमा त्यो सूत्र प्रमाणित भएपछि बाँकी रहन गएको एकको अवस्था *म्हेन्दु, मुनामदन* र *कुञ्जिनी*मा त्यस्तै त्यस्तै भेटिन्छ ।

काव्य *म्हेन्दु* परिचयमा महाकवि देवकोटा लेख्छन्– म्हेन्दु यो एउटा तामाङ लयको फूल हो । यसमा दोसाँधे मोहनी छ, जो गोसाइँथानतिरको उकालामा चम्कन्छ । किरात तथा आर्य-संस्कृतिको

मधु सम्मेलन भएको नेपाल यहाँ एक प्यारको काल्पनिक कहानीमा अमरत्वको सङ्केत दिलाएर वनचरी र भनोहरूको स्वरमा बोलेको सुनिएला भन्ने आशा गरिन्छ । 'हेलम्बुमा कान्तिपुरी छन्, कान्तिपुरीमा भोट भरी छन्' यस्तो अवस्थामा फूलरूपी शब्द प्रेम अथवा त्यस्तै भाव बताउने अर्को शब्दको अर्थ र माने खोजे त्यो फूल ओइलिन्छ तर यसले "गायक पंखी टोन विदेशी/साङ्ग्रा सीमा मनका खोसी/बाँध टुटाई साँध टुटाई/दिन्छन् सारा दिल दिल गाँसी ।" बताएझैँ त्यो शब्दको ध्वनि मासामासा बुझेका म्हेन्दु र गुम्बु एक अर्काप्रति आकर्षित हुन पुग्छ । म्हेन्दुको आमा-बाबुलाई यो कुरा मन पर्दैन यता-उता सेर्पा राङ्जा "छाती खोली कवोल्छ/मेरी म्हेन्दु को बोल्छ/खुकुरीको धारले/त्यसको गर्धन म मोल्छ।" म्हेन्दु तादीमा हामफाल्ने सुरले निस्किन्छिन्। "तादी नदी तीरमा /फूलको हाँगा शिरमा/कहालीको भीरमा/गुम्बु म्हेन्दुसँगमा छन् /भेट्टाएर राङ्जाले/हाँक्यो गुम्बु मजाले/म्हेन्दु ताक्ने भाङ्जाले/म्हेन्दु देखी तर्सिन्/आँखामा आँसु बर्सन्छन्/हरामीको डरले/मुटु कामी थर्कन्छन्/खुकुरी ली हातमा/नाङ्गो झलझल नातमा/उफ्रयो राङ्जा घाटमा/लौ अ भन्छ ठाँटमा/गुम्बु भयो अकमक्क/थाहा के र भो छक्क/हाँक लिनु कि चुप लाग्नु/टुलुटुलु आँखा पिलिक्क/म्हेन्दु छेकी बस्दछिन्/राङ्जा नाची आउँदा/जुँघा भए आ भन्छ/चुपचाप गुम्बु पाउँदा/रोइन् म्हेन्दु फूल झैँ/मेरो निंति नलड/पीर्ति दुइटै दिल पढ/यिनलाई मारे राङ्जाजी/मुखै हेर्दिन गन्धा पो/राङ्जा भन्छ छोड्दैन/आज यो मुख नै मोड्दैन/आ लड आ भिड, भिडदैन ?/अझ त चीसो रगतको/तेरो टाउको गिँड्दैन/थरथर सिङ् हे छेरुवा/कानलाई लाजले छेड्दैन ?/म्हेन्दु भन्छिन् रिसलाली/आँधिको रुँदी फूल डाली/लड्छौ अझ राङ्जाजी/शरम धरम फाली ?/शरम छैन के तेरो/माटो लान्छस् यो मेरो/मुटुमा मेरो चोटलाई ?/काटे काट् लौ राङ्जाजी/गर्दन मेरो छिनेर/लैजा बरु मलाई/लौ हेर ज्यान यो पर वन्दी/म झैँ आइमाइ वीर हुन्थी/सह्यानलाई जो रुन्थी/हेलिन्छु हेर तादीमा/पछि लाग्ने वीरलाई/राख्ने छु सधैँ गादीमा/यति भनी लमकोसे/हाम्फालिन् ती जलमा/यौटा बस्थ्यो गादीमा/एक झिमिक्मा कुदेर/हाम्फाल्यो त्यो भलमा/अर्को रह्यो थलमा/लहर बोल्छन् तादीका/म्हेन्दु-गुम्बु कहानी/सुनिन्छ भन्छन् तरमा/हेलम्बुकी

वनरानी।" यो हो भोट लयमा एक राम्रो भावपूर्ण गीति-काव्य खडा गर्ने देवकोटाको भावनाको सारांश उतार्न पङ्क्तिकारको क्षुद्र प्रयास। "स्यावास् गोरे, बहादुरलाई अप्सराको इनाम/कुञ्जिनी छन् ज्यूँदै अरू, बोकी लैजा फूलको ध्वजा/केको निम्ति मर्नु आखिर, केको तेरो विराम?" यी शब्द उनै देवकोटाको *कुञ्जिनी* नामको खण्डकाव्यमा पात्र ठालुसिङको हो जसको प्राणप्यारी छोरी पारी मावलीबाट फर्कंदा मुसलधारे पानी परी उर्लेको कोल्पुमा परेकी कुञ्जिनीलाई गोरे राउतले बचाउको थियो आफ्नै ज्यान खतरामा पारेर। त्यही कुञ्जिनीलाई माग्न जाँदा गोरेलाई ठालूसिङले "त्रिशूलीमा डुबी आइज, मेरी छोरी लिन/नत्र भीरको भालूलाई, जा, जा मैले दी न" भनी हकारेको थियो। घरमा बाबु एक्लै सानीमा सिन्धु पनि विधवा छिमेकी लख्खन लेप्टन पनि विधुर देखेर कुञ्जिनीले आफ्नो दिल चोखाको चोखै लगेर ईश्वरलाई अर्पिने विचार गरे पनि जीवनमा एकबाजी आउने वैंशको चाहाडमा गोरेसँग वेलीफूलझैं दिल-दिल मिली एउटै भइसकेकी थिइन्। विवाह हुने खुसियालीमा गोरे राउत यता "घंटी बजाऊ पहाड मेरा गुञ्ज गुफा-गुफा/जीवन चढाएको पीरती पाउँछ आज नफा/उफ्री मुटु उर्ली-उर्ली आज मनको बाढी/विहालाई धेरै छैन जीवनले छुनै लाग्यो/वन हरि यो किनी ल्याउँला, कान्तिपुरी सारी/मनका बाजा बज-बज दिन आउँछ भारी।" प्रकट गरिरहेछ भने उता कुञ्जिनी "लगाइदेउन सानीमा केवराको ट्वाक पानीमा/सिउर गुलाफ सानीमा कान्तिपुरी सारी धानीमा/आज मलाई सिँगार्नको रहर लाग्यो सारै/ नाच-नाच भन्छ वनको हावा कोट्याई तारन्तारै/कानेखुसी गर्न आयो लौन वतास आज/पात पातमा सुसेलेर, लाग्छ मलाई लाज।" तर मानिस ताक्छ मुढो वञ्चरो ताक्छ घुँडो भनेजस्तै "कालो बादल पश्चिमको सल्की गर्ज्यो सारा/जर्मनको लडाइँ उठ्यो पोख्न रगत धारा/सोह्र वर्ष नाघ्ने ठिटा देशले डाकिन् सारा/कुञ्जिनीलाई जरो आयो, ओछ्यानमा परिन्/आज राती गोरे बस्यो कुञ्जिनीको छेउ/रात गयो रुँदारुँदै मुटु गाँठो हुँदाहुँदै/भोली जानु पर्‍यो है ज्यानी, जानु पर्‍यो जर्मनको धावामा/नमाने चिन्ता, नमाने सुर्ता, मर्द लड्छ देशको लडाइँ/जितेमा हाम्रो वीरको नाउँ, मरेमा हाम्रो द्यौताको भाउ।" सानीमा सिन्धुले कुञ्जिनीको अरूसँग मन छँदै छैन भन्दाभन्दै ठालुसिङले

लख्खन लेप्टनको छोरो सेतेसँग विवाह गरिदिने पक्कापक्कि गऱ्यो । अष्टम थानमा शुक्रको दशा एउटा होम गरे टरिजाला ज्योतिषी पण्डितको सुझाव भयो । उता लडाइँमा रमन घुम्ने काम गर्दा "घेरी ल्यान पठानले सारा तीखाभाला नजीकै पारेर/गोरे उफ्रियो खुकुरी नचाई काली माईको नाउँले फारेर ।" कोखामा तीखो भाला घोपिएकोले गोरे वजिरिस्तानको अस्पतालमा मरणासन्न अवस्थामा पुग्छ । सँगीले केही कुरा भन्नु छ भनी सोद्धा गोरे भन्छ "घर मेरो कोल्पूमा सँगी, एक टुक्रा केश काटी राखेर/मेरो चिनो बगाईदेऊ भन्नु कुञ्जिनीलाई एकान्त डाकेर ।" यता जन्ती आयो अरू लागे दुलहा हेर्न कुञ्जिनी उठिन् "शिरदेखि पयरसम्म गहना र पोशाक लाएकी/सबै आँखा छलेर दगुरिन् अमर भावको स्वर्ग धाएकी/त्रिशूलीका डीलमा दुबार गुलाफवारी भएको झल्कियो/गोरेलाई झलक्क देखिन्, फूलथुँगे शरीर मिल्कियो/सिन्धु यसो फर्केर हेर्दा कुञ्जिनी देखिछन्/झट्ट पट्ट उठेर दगुरिन् ताइताप्के तेलको पोखिछन्/पोल्थ्यो किन पयरमा कठै कुञ्जिनीको दशा त्यो देखेर/लौन लौन चिच्याई दगुरिन काँढा ढुङ्गा दुवैमा टेकेर/ तर आयो ऱ्वाम्म आवाज विजुलीझैँ झिलिक्क गरेर/ छाती पिटी लडिन् है सिन्धु विरहको त्रिशूली परेर ।" उता वजिरिस्तानको अस्पतालमा गोरे अन्तिम सास फेर्छ ।

२०१६ सालमा आठौंवार ५००० प्रति प्रकाशमा आएको देवकोटाको प्रथम काव्य मुनामदनको वक्तव्यमा कवि भीमनिधि तिवारी (ने. भा. प्र. समिति) लेख्छन् "देवकोटाज्यूको नाम लिनासाथ हामीलाई *मुनामदन*को सम्झना हुन्छ ।" त्यस्तै म्हेन्दुले गुम्बा सम्झाउँछ अनि कुञ्जिनीले गोरे राउत । ती आदर्श जोडी हुन् एकअर्कोमा आश्रित । १९९२ सालमा लेखिएको मुनामदन काव्यमा "दुई दिल मिली फूलको बेली" वाक्यांश प्रयोग भएको छ । अतः पङ्क्तिकारलाई माथि उषाकिरणको युगल गीत सम्झेर देवकोटा र मुनामदनलाई एउटै डिको दिन मन लाग्छ । यस्तो बेलीफूल देवकोटामुनामदनबाट देवकोटा झिक्दा मुनामदन बाँकी रहन्छ जस्तो मदनको बूढी आमा, विधुर ठालुसिङ, विधवा सानीमा सिन्धु आदि त एकबाट एक झिके एकै बाँकी रहेको अवस्था हो। स्त्री-पुरुषको संसारमा देवकोटाको सिद्धान्त एभरग्रिन रहिरहन्छ ।

# नेपाली कथा अङ्ग्रेजी अनुवादमा

*– ईश्वरमान रञ्जितकार*

## पृष्ठभूमि

नेपाली कथा साहित्यको अङ्ग्रेजी अनुवादको इतिहास अवलोकन गर्दा सन् १९६८ तदनुसार २०२५ सालदेखि मात्र थालनी भएको देखिन्छ । ऐतिहासिक प्रमाणले के देखाउँछ भने यस विधामा अनुदित पहिलो कृति हो- Some Folktales of Nepal पी.पी. लामिछाने र एस.डी. वैष्णवद्वारा संयुक्त रूपमा सङ्कलित नेपालका केही लोककथाहरूलाई माथि उल्लिखित शीर्षकमा तीर्थराज तुलाधरद्वारा अनूदित यो पहिलो कृतिको प्रकाशन इ.सं. १९६८ वि.सं. २०२५ सालमा तात्कालिक श्री ५ को सरकार सूचना विभागद्वारा प्रकाशित भएको थियो ।

यसै पृष्ठभूमिलाई मध्यनजर राखेर यस लेखमा पत्रपत्रिकामा फुटकर रूपमा प्रकाशित भएकोबाहेक नेपाली कथा, लोककथाहरूको कालक्रमानुसार अनूदित ग्रन्थको विकासक्रम सङ्क्षिप्त रूपमा प्रस्तुत गर्ने प्रयास गरिएको छ ।

माथि उल्लिखित लोककथानुवादको केही समयपछि नेपाली र नेवारीका केही आधुनिक कथाहरूको सङ्कलन एवं सम्पादन गरी करुणाकर वैद्यद्वारा Nepalese Short Stories शीर्षकमा अनूदित सङ्ग्रह पूर्ण बुकस्टलद्वारा इ.सं. १९७१ (वि.सं. २०२८) मा प्रकाशित भएको थियो ।

उक्त सङ्ग्रहमा नेपाली साहित्यका कथाकारहरूमा वरिष्ठ तीन जना कथाकारहरू गुरुप्रसाद मैनाली, गोविन्दबहादुर 'गोठाले' र बी.पी. कोइराला चयन गरिएका छन्। आठ जना नेवारी कथा क्षेत्रका हस्तीहरू चयन गरी जम्मा ११ जना कथाकारहरू समावेश गरिएका छन् । समाविष्ट कथाकार र कथा यसप्रकार छ–

| | | |
|---|---|---|
| १ | एस. एम जोशी | The Picture |
| २ | धूस्वाँ सायमी | Bhagya Rekha |
| ३ | चित्तधर | The Hut of Hope |

| | | |
|---|---|---|
| ४ | प्रेमबहादुर कसा | The Wart |
| ५ | गुरुप्रसाद मैनाली | The Neighbour |
| ६ | गोविन्दबहादुर गोठाले | Sleepless Night |
| ७ | न्हूच्छे सुन्दर | The Tinikhya Misha |
| ८ | परमानन्द बज्राचार्य | The Portrait |
| ९ | पूर्ण 'पथिक' | Triumph |
| १० | सुश्री प्रकाश प्रधान | Expectation |
| ११ | बी.पी. कोइराला | The Colonel's Horse |

केही समयपछि उक्त कथासङ्ग्रहको अमेरिकी संस्करण पनि प्रकाशित भयो। सो संस्करणमा यल युनिभर्सिटिका अल्बर्ट रोथेनवर्गले कथासङ्ग्रहमा सङ्कलित नेपाली कथाहरूको विशेषताबारे सङ्क्षिप्तमा टिप्पणी लेखेका छन्। उक्त टिप्पणी यसप्रकारको छ–

The first publication in the west of modern Nepalese fiction deeply making tales of Nepalese life by eleven outstanding authors.

Why do people write stories ? The question comes to the fore with this remarkable collection of stories from the top of the world. For here is the first publication in this country of short stories from Nepal, a country with the highest mountains on earth and so remote and culturally removed from us that, despite our rapid communication and constant global interchange, our so-called shrinking world, these stories have marks of the storywriter's art: there is suspense, pathos, conflict, poegnancy, fantasy and symbolism. Some are tight knit little parables, others are long undulating and complex explorations of a human circumstance of feeling. Some are witty, many are sad, and there is a great deal of literary competence.

यस कथानुवादको ठीक २ दशकपछि नेपाली साहित्यका एक जना अमेरिकी अनुसन्धाता एवं अनुवादक माइकेल जेम्स हट्ले १६

जना नेपाली कथाकारहरूका २० ओटा कथाहरूको चयन तथा अनुवाद गरी Himalayan Voices: An Introduction to Moodern Nepali Literature शीर्षकको एउटा ग्रन्थ प्रकाशित गरेको देखिन्छ । उक्त ग्रन्थमा पहिलो खण्डमा आधुनिक नेपाली कथाको विकास तथा प्रवृत्तिको विशद विवेचनाको साथै समाविष्ट प्रत्येक कथाकारको सङ्क्षिप्त परिचयसहित सङ्ग्रहित कथाको मूल्याङ्कनसमेत गरिएको छ ।

समावेश गरिएका ती १६ जना कथाककारहरूमा विश्वेश्वरप्रसाद कोइराला, भवानी भिक्षु, विजय मल्ल तथा परशु प्रधानका भने २/२ ओटा कथा रहेका छन् ।

उक्त कथासङ्ग्रहमा समावेश कथाकार र कथा यसप्रकारका छन्–

| | |
|---|---|
| गुरुप्रसाद मैनाली | A Blaze in the Straw |
| विश्वेश्वरप्रसाद कोइराला | a. The Soldier<br>b. To the Low Lands |
| भवानी भिक्षु | a. Will He Ever Return?<br>b. Maujang Babu Saheb's Coat |
| शिवकुमार राई | The Murderer |
| दौलतविक्रम विष्ट | The Andhi Khola |
| विजय मल्ल | a. Sunglasses,<br>b. The Prisoner and the Dove |
| रमेश विकल | A Splendid Buffalo |
| शंकर लामिछाने | The Half-closed Eyes of the Buddha and the Slowly Setting Sun |
| इन्द्रबहादुर राई | Maina's Mother Is Just Like Us |
| पोषण पाण्डे | A Sweater for Brother-in-law |
| तारिणीप्रसाद कोइराला | It Depends Upon Your Point of View |

| | |
|---|---|
| प्रमा शाह | A Husband❀ |
| परशु प्रधान | a. The Telegram on the Table,<br>b. A relationship, |
| ध्रुवचन्द्र गौतम | The Fire |
| मनु ब्राजाकि | A Small Fish Squats by the Dhobikhola |
| किशोर पहाडी | A Living Death. |

उक्त सङ्ग्रह मोतीलाल बनारसीदास पब्लिसर्स प्रा.लि., दिल्लीद्वारा इ.सं. १९९१, वि.सं. २०४८ मा प्रकाशित भएको हो ।

यसपछि रमेश विकल (१९८५) का 'सात सूर्य एक फन्को' नामक ग्रन्थलाई In Search of Shangrila शीर्षकमा निरञ्जन बज्राचार्यद्वारा अनूदित ग्रन्थ रायल नेपाल एकेडेमीबाट सन् १९९७ (वि.सं. २०५४) मा प्रकाशित भयो ।

यसको लगत्तै नेपाल र भारतका गरी १६ जना कथाकारहरूका १६ ओटा आधुनिक नेपाली यौन कथाहरू सङ्कलन सम्पादन गरी Sheet of Snow : An Anthology of Modern Short Stories from Himalayas शीर्षकमा नगेन्द्र शर्माद्वारा अनूदित सङ्ग्रह भारतको निराला पब्लिकेसन न्यू दिल्लीबाट इ.सं. १९९७ (वि.सं. २०५४) मा प्रकाशित भयो । ती १६ जना कथाकार र कथा यसप्रकार छन्–

| | |
|---|---|
| लालबहादुर बस्नेत (सिक्किम) | The Gift of a Child |
| बी.पी. कोइराला | Shweta Bhairavi |
| लोकेन्द्रबहादुर चन्द | The Sheet of Snow |
| ग्याब्रियल राणा (दार्जीलिङ) | The Plum Tree Blossoms |
| तारिणीप्रसाद कोइराला | Rambha and Arun |

❀ *संयोगको कुरा कथाकार प्रेमा शाहको यही एउटै कथाको अनुवाद ३ जनाले गरेको पाइनुका साथै उक्त कथा ३ वटा सङ्ग्रहमा पनि समावेश हुन गएबाट कथाको उत्कृष्टता जनाउँदछ ।*

| | |
|---|---|
| पोषण पाण्डे | A Sweater for Bhinaaju |
| विजय मल्ल | A Cow in Heat |
| दौलतविक्रम विष्ट | A Game of Rateuli |
| देवकुमारी थापा | A train Jourey |
| मनबहादुर मुखिया | Pages from a Diary |
| सिंहध्वज खड्का | A Voice Rebellion |
| शिवकुमार राई (दार्जीलिङ) | The Hunt |
| बिन्दिया सुब्बा (दार्जीलिङ) | Generation Gap |
| सीता पाण्डे | With One's Own Question Mark |
| रमेश विकल | His Wife's Son |
| परशु प्रधान | A Living Corpse |

यसको लगत्तै विश्वेश्वरप्रसाद कोइराला (१९७१-२०३९) को कथासङ्ग्रह 'दोषी चश्मा'का १२ वटा कथाहरूको Faulty Glass and Other Stories शीर्षकमा केशरलालद्वारा अनूदित ग्रन्थ पिलग्रिम्स बुक हाउसबाट इ.सं. १९९८ (२०५५) मा प्रकाशनमा आयो ।

यसपछि शिवकुमार श्रेष्ठद्वारा 'किराती लोककथालाई Kirati Folktale शीर्षकमा लीलबहादुर बस्नेतद्वारा अनूदित भई गङ्गादेवी श्रेष्ठ धनकुटाद्वारा १९९९ (०४६)मा प्रकाशित भयो ।

यसपछि रमेश विकलका चुनिएका दसवटा कथा र A Leaf in Begging Bowl शीर्षकमा मञ्जूश्री थापाद्वारा अनूदित सङ्ग्रह मण्डल बुक प्वाइन्टबाट सन् २००० वि.सं. (२०५७) मा प्रकाशित भयो ।

इमानसिंह चेम्जोङद्वारा सङ्कलित 'किराँती दन्त्यकथा'को स्वयम्द्वारा सङ्कलन र अनूदित भई Kirati Folktales शीर्षकमा रोयल नेपाल एकेडेमीबाट (इ.सं. २००१) २०५८ मा प्रकाशित भयो ।

विनोद श्रेष्ठ र विश्व सुवेदीबाट संयुक्त रूपमा अनुवाद भई सोही वर्ष हरिहर खनाल (२००३-) का केही कथाहरू

the Voice of Mountain शीर्षकमा मास्के पुस्तक भण्डारद्वारा प्रकाशित भयो ।

अर्को वर्ष सीता पाण्डे (२०१६) को 'ज्वरो' शीर्षकको कथासङ्ग्रहलाई Fever नाममा आर.डी. युयुत्सु, योगेश उपाध्याय तथा एच.एम. अनसारीद्वारा अनूदित भई निराला पब्लिकेसन, न्यू दिल्लीबाट इ.सं. २००१ (२०५८) मा प्रकाशित भयो ।

यी प्रकाशनहरूपछि नौ जना भारतीय नेपाली कथाकारहरूका कथाहरू The Black Serpent : A Collection of Short Stories from India शीर्षकमा केशरलालद्वारा अनूदित नौवटा कथाको सङ्ग्रह आदर्श इन्टरप्राइजेज, दिल्लीबाट इ.सं. २००१ (२०५८) मा प्रकाशित भयो ।

यस सङ्ग्रहमा समाविष्ट कथाकार र कथाहरू यसप्रकार छन्–

| | |
|---|---|
| प्रेम प्रधान (सिक्किम) | The Black Serpent |
| सानु लामा (गान्तोक) | The Iceman |
| जया धमला (कालिम्पोङ) | Hunting for a House |
| दिनेश खाती (कालिम्पोङ) | Dhanamaya |
| चुनिलाल घिमिरे (गान्तोक) | The White Handkerchief |
| मीन लिवाङ्ग (कालिम्पोङ) | In Fairyland |
| शरद क्षेत्री (जोर बङ्ला) | A Piece of Green Bamboo |
| पूर्ण राई (कालिम्पोङ) | The Glasses Not Taken A way |
| इन्द्रबहादुर क्षत्री (कालिम्पोङ) | An Unspeakable Mystery |

सोही वर्ष रोयल नेपाल एकेडेमीबाट सङ्कलन गरिएको १० वटा बाललोककथाहरूको सङ्ग्रह केशरलालद्वारा पुनर्कथन र अनुवाद भई children's Book of Nepalese Folktales शीर्षकमा रोयल नेपाल एकेडेमीबाट प्रकाशित भयो ।

यसपछि सनत रेग्मीको प्रधान सम्पादकत्व तथा माधवलाल कर्माचार्य र फिलिप पियर्सको सम्पादकत्वमा ३८ जना विशिष्ट कथाकारहरूका कथाहरूको १५ जना अनुवादकहरूद्वारा अनूदित Stories

from Nepal शीर्षकको कथासङ्ग्रह रोयल नेपाल एकेडेमीबाट इ.सं. २००२ (२०५८) मा प्रकाशित भयो ।

उक्त कथासङ्ग्रहमा सङ्कलित कथाकार, कथाको शीर्षक र तिनका अनुवादक निम्नबमोजिमका छन् । कथाकारहरूका नाम अङ्ग्रेजीको वर्णक्रमानुसार राखिएका छन्–

| **कथाकार** | **कथा** | **अनुवादक** |
|---|---|---|
| मागीरथी श्रेष्ठ | Motherhood | लक्ष्मीप्रसाद श्रेष्ठ |
| भाउपन्थी | Death of a Bus Conductor | डा. तेजरत्न कंसाकार |
| भवानी भिक्षु | The Ears of the Almighty | हृषिकेश उपाध्याय |
| विश्वम्भर चञ्चल | Habitat of Beat | निरञ्जन बज्राचार्य |
| बी.पी. कोइराला | One Night | रमा लोहनी |
| दौलतविक्रम विष्ट | Threshing Floor | टीकाराम शर्मा |
| देवकुमारी थापा | Burning Fire | निरञ्जन बज्राचार्य |
| ध्रुवचन्द्र गौतम | I and me | दिवाकर देवकोटा |
| ध्रुव सापकोटा | A New Direction | डा. तेजरत्न कंसाकार |
| हरिहर खनाल | At the Bottom of the Lofty Hill | नवराज चौलागाईं |
| इन्द्रबहादुर राई | Black out Cashew Nuts, Son | प्रवीण मोक्तान |
| इस्माली | Naa-Na Na Na | ईश्वरीप्रसाद पाण्डे, भूपप्रसाद श्रेष्ठ |
| जगदीश घिमिरे | A Man Pup | लक्ष्मीप्रसाद श्रेष्ठ |
| जैनेन्द्रजीवन | A Modern King Midas | विजयकुमार रौनियार |
| कविताराम | Darling, I'm off to sleep | हृषिकेश उपाध्याय |
| खगेन्द्र संग्रौला | Sangram Bahadur Karki | रमा लोहनी |
| कुमार ज्ञवाली | An Audience | रमा लोहनी |
| लीलबहादुर क्षेत्री | My Intimate Ghost | अमराज जोशी |
| मदनमणि दीक्षित | The Mare of Lattu Miyan | हृषिकेश उपाध्याय |
| मञ्जु काँचुली | The Sombre Tree | डा. तेजरत्न कंसाकार |
| मनु ब्राजाकि | Solitude | डा. तेजरत्न कंसाकार |
| मोहनराज शर्मा | Manbir as He was | टीकाराम शर्मा |
| मुरारी अधिकारी | Water | निरञ्जन बज्राचार्य |
| नारायण ढकाल | The Shoes | लक्ष्मीप्रसाद श्रेष्ठ |

| | | |
|---|---|---|
| परशु प्रधान | The Dalle River2 | निरञ्जन बज्राचार्य |
| पारिजात | The Fourth Act of a Play | दिवाकर देवकोटा |
| पोषण पाण्डे | The Bicycle of Radheshyam | दिवाकर देवकोटा |
| प्रेमा शाह | Husband | डा. तेजरत्न कंसाकार |
| राजव | Half Casual Leave | हरि शर्मा |
| रमेश विकल | The Ministers of the Sidewalk | मञ्जुश्री थापा |
| सनत रेग्मी | Lachmania's Ritual Send off | टीकाराम शर्मा |
| सन्तोष भट्टराई | The Naked Man With The Earthen Bowl | हृषिकेश उपाध्याय |
| सानु लामा | A Woman | भूपप्रसाद धमला, ईश्वरीप्रसाद पाण्डे |
| सरुभक्त | Hello, Lhotse..Hello ? | |
| शैलेन्द्र साकार | The Substitute | रमा लोहनी |
| शंकर लामिछाने | Half closed Eyes and the Setting Sun | रमा लोहनी |
| सीता पाण्डे | The Ladder | लक्ष्मीप्रसाद श्रेष्ठ |
| विजय मल्ल | In Search of a Complete Man | दिवाकर देवकोटा |

यसरी नै सुधा बस्नेत का १४ वटा लघुकथाहरूको सङ्कलन डी.एन. शिवाकोटीद्वारा अनूदित The Door in Still Open शीर्षकमा भई आदर्श बुक्स, दिल्लीबाट इ.सं. २००३ (२०६०) मा प्रकाशित भयो ।

केहीपछि अर्थात् इ.सं. २००४ वि.सं. २०६१ मा २५ जना कथाकारहरूका उत्कृष्ट कथाहरू डा. गोविन्दराज भट्टराईद्वारा अनूदित भई Selected Stories from Nepal शीर्षकमा साझा प्रकाशनद्वारा प्रकाशनमा आयो । यस सङ्ग्रहको विशेषता के छ भने यसमा समावेश भएका २५ ओटै कथाको समुचित विवेचना अनुवादकद्वारा गरिएको छ ।

सङ्कलित कथाकार र कथा यसप्रकारका छन्–

| | |
|---|---|
| मदनमणि दीक्षित | Jenda |
| पारिजात | The Son that I Didn't Give Birth to |

| | |
|---|---|
| मोहनराज शर्मा | Manbir As He was |
| विश्वमभर चञ्चल | The Story of A Dumb girl |
| मनु ब्राजाकि | Annapurna's Feast |
| परशु प्रधान | The Dalle River |
| भाउपन्थी | Deathroned |
| ध्रुवचन्द्र गौतम | The rock |
| शैलेन्द्र साकार | Substitute |
| खगेन्द्र सङ्ग्रौला | Open Diary of an Unknown Labourer |
| प्रेमा शाह | The Yellow Rose |
| कविताराम | On the Context of Freedom |
| सनत रेग्मी | Phulmatiya |
| भुवन ढुंगाना | Identity |
| भागीरथी श्रेष्ठ | The Sting of Love |
| गोपाल पराजुली | The Road is Bifurcated |
| मञ्जु काँचुली | Viswamitra's Nuptial Night |
| सन्तोष भट्टराई | A Frangment of Time/A Coat |
| मधुवन पौडेल | A Forgotten Folk Tale |
| ध्रुव सापकोटा | Khukuri |
| नारायण ढकाल | In Which Town |
| राजव | Uncle Bhainsi |
| इस्माली | The Love of Village |
| किशोर पहाडी | Wife And Soldier |
| सीता पाण्डे | Nandabir |

यसै वर्षमा परशु प्रधानका २० वटा कथाहरू मुकुन्द दाहालको सम्पादन एवं ८ जना अनुवादकहरूद्वारा अनूदित कथासङ्ग्रह The Little Buddha in Tokyo को प्रकाशन महबूर रहमन बाबु, चिफ् एक्ज्युक्युटिभ, बी.जी.पी., बंगलादेशबाट इ.सं. २००४ (२०६१) मा प्रकाशित भयो ।

यी प्रकाशनबाहेक माधवलाल कर्माचार्यको प्रधान सम्पादकत्व तथा गोविन्दराज भट्टराईको सम्पादकत्वमा केही कविता, कथा, उपन्यासका उद्धृतांशको साथै एकाङ्की नाटक र निबन्धहरूको अनूदित सङ्ग्रह Nepalese Literature शीर्षकमा प्रकाशित सङ्ग्रहमा ८ जना कथाकारहरूका आठ ओटा कथा समावेश भएको छ । ती कथाकार, कथा र अनुवादक हुन्–

| कथाकार | कथा | अनुवादक |
|---|---|---|
| गुरुप्रसाद मैनाली | The Ward | जयराज आचार्य |
| पुष्करशमशेर | Circumstances | राजेश्वरप्रसाद अधिकारी |
| भवानी भिक्षु | Maiya Saheb | केशरलाल |
| गोविन्दबहादुर मल्ल गोठाले | Wedding | माधवलाल कर्माचार्य |
| विश्वेश्वरप्रसाद कोइराला | Pabitra | टी.पी. कोइराला |
| रमेश विकल | Bire's Mother | केशरलाल |
| परशु प्रधान | The Dalle River[2] | निरञ्जन बज्राचार्य |
| मनु ब्राजाकि | A Feudal State | केशरलाल |

यो सङ्ग्रह रोयल नेपाल एकेडेमीबाट इ.सं. २००५ (वि.सं. २०६२) मा प्रकाशित भयो ।

यसपछि पद्मावती सिंहको प्रधान समपादकत्व र उषा शेरचनको सम्पादकत्व तथा प्रा. डा. गोविन्दराज भट्टराईको अतिथि सम्पादकत्वमा १५ जना महिला कथाकारहरू प्रत्येक २ वटा गरी अनूदित ३० वटा कथाको अनूदित सङ्ग्रह Beyond the Frontiers : Women's Stories from Nepal शीर्षकमा प्रकाशित भयो । महिला कथाकारहरूद्वारा जीवनका विविध पक्षका बारेमा चित्रण गरिएको सो कथासङ्ग्रह महिला लेखिकाहरूको संस्था गुञ्जनद्वारा २०६२ सालमा प्रकाशित भयो । नेपाली साहित्यमा महिलाहरूको अमूल्य योगदानको बारेमा अतिथि सम्पादक प्रा.डा.

---

❀ *संयोगको कुरा कथाकार परशु प्रधानको यही एउटै कथाको अनुवाद चार जनाले गरेको पाइनुका साथै उक्त कथा चार ओटा सङ्ग्रहमा पनि समावेश हुन गएबाट कथाको उत्कृष्टता जनाउँदछ ।*

गोविन्दराज भट्टराईको विशद भूमिका समावेश भएको यो सङ्ग्रहमा समावेश कथाकारहरू र उनीहरूको अनूदित कथा र अनुवादकहरू यसप्रकार छन्–

| **कथाकार** | **कथा** | **अनुवादक** |
|---|---|---|
| देवकुमारी थापा | A waiting Doomsday | रेषु ढुंगाना अर्याल |
| | Burning Fire | निरञ्जन बज्राचार्य |
| प्रेमा शाह | The Yellow Rose | एन हन्किन्स |
| | Husband | डा. तेजरत्न कंसाकार |
| चन्द्रकला नेवार | Agnisnan | अनुराधा |
| | Hunger | रेषु |
| हिरण्यकुमारी पाठक | Her Husband Kalu | दामोदर शर्मा |
| गीताकेशरी | Support, The Look | रेषु |
| माया ठकुरी | R.K., It has Already Been Late | दामोदर शर्मा |
| पद्मावती सिं | Silent Submission | रेषु |
| | Is Women a Human Being ? | द्वारिका राजभण्डारी |
| भागीरथी श्रेष्ठ | The Silver Karuwa, Underground | दामोदर शर्मा |
| मञ्जू काँचुली | Fire | वेने एम्जिज र मञ्जु काँचुली |
| | Nausea | एन हन्किन्स |
| भुवन ढुंगाना | Simbol of Religion | मञ्जुश्री थापा र |
| | The Thousand Rupee Note | पि. रञ्जन |
| पीताम्बर उपाध्याय | Jubilation, Wounded Affection | रेषु |
| इल्या भट्टराई | A Life Caught in the Chakrabyuha Let him not have a Change of Hurt | रेषु |

| | | |
|---|---|---|
| लक्ष्मी उप्रेती | Kamali | दामोदर |
| | Thirst | अनुराधा |
| सृजना शर्मा | The Pet Price of Life | श्रद्धा घले |
| जलेश्वरी श्रेष्ठ | Broth of Nettle | |
| | Unmatta Bhairab | रेषु |

नेपाली महिला कथाकारहरूको हालसम्म सङ्कलित सर्वप्रथम सङ्ग्रह हो । यी कथाकारहरूका कथाहरू १२ जना अनुवादकहरूद्वारा अनूदित भएका छन् ।

यस कथानुवाद पछि डा. गोविन्दराज भट्टराई र विष्णुविभु घिमिरेको संयुक्त सम्पादनमा २५ जना कथाकारहरूका द्वन्द्वसम्बन्धी कथाहरूको सङ्ग्रह 'द्वन्द्व र युद्धका कथा'लाई डा. गोविन्दराज भट्टराई पी.एच.डी. को अनुवाद र सम्पादनमा Stories of Conflict and War शीर्षकमा प्रकाशित भयो । नेपाली साहित्यमा यस प्रकारको सङ्ग्रह बारेको विशद भूमिका रहेको उक्त ग्रन्थ २०६३ मा नेल्टाको तर्फबाट डा. भट्टराईद्वारा नै प्रकाशित भयो ।

यस सङ्ग्रहमा समाविष्ट कथाकार र कथा यसप्रकार छन्–

| | |
|---|---|
| रमेश विकल | A Pair a Inocent Eyes |
| मोहनराज शर्मा | A Ra and a Mo |
| परशु प्रधान | Sitas |
| ध्रुवचन्द्र गौतम | The Conclusion |
| राजेन्द्र विमल | The Lankuri Tree will Blossom Again |
| भुवन ढुंगाना | the Eyewitness |
| सनत रेग्मी | The Curfew |
| पद्मावती सिंह | The Silence of Violence |
| नरेन्द्रराज पौडेल | The Bullet |
| मधुवन पौडेल | Now You can return Home |
| ध्रुव सापकोटा | The Other Person |
| नारायण ढकाल | Mother and The Motherland |
| प्रदीप नेपाल | The Motherly Doctor |

| | |
|---|---|
| इल्या भट्टराई | Biplavi |
| अविनाश श्रेष्ठ | Monologues |
| किशोर पहाडी | The Tears of Terror |
| सिर्जना शर्मा | The Sky Was Still Overcast |
| गोविन्द गिरी प्रेरणा | Maoist |
| ध्रुव मधिकर्मी | The Meek |
| राजेन्द्र पराजुली | The Void |
| महेशविक्रम शाह | The Constable and the Statue |
| आमोद भट्टराई | I Heard the Cock Crow |
| रोशन थापा निरब | The Ambush |
| प्रदीप मेयाङ्बो | The Unknown Martyr |
| फूलमान बल | The Maiden With a Gun |

माथि उल्लिखित अनूदित ग्रन्थहरू सर्सर्ती नियाल्दा के देखिन्छ भने नेपाली कथाको अङ्ग्रेजी अनुवाद भएको ४ दशकको अवधिमा प्रकाशनमा केवल ६ जना कथाकारका एकल सङ्ग्रह ७ ओटा मात्र देखापर्दछ । त्यसमा रमेश विकलका भने दुइटा रहेका छन् ।

सङ्ग्रहको रूपमा भने १३ वटा रहेका छन् ।

प्रकाशित एकल सङ्ग्रहमा २ जना महिलाका १/१ ओटा ग्रन्थ रहेका छन् ।

जम्माजम्मीमा गोटा गन्ती गर्दा पुस्तकाकारमा केवल १८ ओटा मात्र प्रकाशनमा आएको देखिन्छ ।

निष्कर्षमा के भन्न सकिन्छ भने नेपाली कथाको अनुवाद ढिलो गतिमा भइरहेको हुँदा यसको प्रगति अत्यन्त न्यून अवस्थामा रहेको पाइन्छ ।

**परिशिष्ट– १**

## कथाकारका एकल सङ्ग्रह

| | |
|---|---|
| १ परशु प्रधान | The Little Buddha in Tokyo |
| २. बी.पी. कोइराला | Faulty Glass and Other Stories |

| | |
|---|---|
| ३. रमेश विकल | In Search of Sangrila |
| ४. ................ | A Leaf in a Begging Bowl |
| ५. सीता पाण्डे | Fever |
| ६. सुधा बस्नेत | The Door is still Open |
| ७. हरिहर खनाल | The Voice or Mountain |

| **परिशिष्ट– २** | **परिशिष्ट– ३** |
|---|---|
| **सङ्ग्रहका अनुवादक** | **सङ्कलित कथासङ्ग्रह** |
| १. इमानसिंह चेमजोङ | 1. Beyond The Frontiers Women's Stories from Nepal |
| २. करुणाकर वैद्य | 2. The Black Serpent : Collection of Short Stories from India. |
| ३. केशरलाल | 3. Children's Book of Nepalese Folk tales |
| ४. डा गोविन्दराज भट्टराई | 4. Himalayan Voices : An Introduction to Modrn Nepali Literature |
| ५. डी. एन. शिवाकोटी | 5. Kirati Folktales |
| ६. तीर्थराज तुलाधर | 6. Kirati Folktales |
| ७. नीलबहादुर बस्नेत | 7. Nepalese Literature |
| ८. नगेन्द्र शर्मा | 8. Nepalese Short Stories |
| ९. निरञ्जन बज्राचार्य | 9. Sheet of Snow : An Anthology of Modern Short Stories from Himalayas |
| १०. विनोद श्रेष्ठ | 10. Selected Stories from Nepal. |
| ११. मञ्जुश्री थापा | 11. Some Folktales of Nepal. |
| १२. मुकुन्द दहाल | 12. Stories of Conflict and War |
| १३. विश्व श्रेष्ठ | 13. Stories from Nepal. |

## सन्दर्भ सामग्री

कर्माचार्य, माधवलाल, रंजितकार, ईश्वरमान (सह सङ्कलन) अनुवाद ग्रन्थसूची, २०५८ नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

Basnet, Neel Bahadur, **Kirati Folktales**, 1999 gangadevi Shrestha.

Basnet, Sudha, **The Door is Still Open**, 2003 Adarsha Books, Delhi.

Bhattarai, Govinda Raj, (Ed.) **Selected Stories from Nepal**, 2003 Sajha Publication.

..............**Stories of Conflict and War** 2007 Dr. govinda Raj Bhattarai (Nelta).

Bikal, Ramesh (Tr) **A Leaf in a Begging Bowl**, 2000 Mandala Book Point.

............. (Tr) **In Search of Shangrila** 1997 royal Nepal Academy.

Chemjong, Eman Singh (Tr) **Kirati Folktales** 2001 Royal Nepal Academy.

Karmacharya, Madhav Lal (Ed) **Nepalese Literature** 2005 Royal Nepal Academy

Hutt, Michael James **Himalayan Voices, An Introduction to Modern Nepali Literature** 1991 Motilall Banarasidas Pvt. Ltd. Dellhi.

Khanal, Harihar **The Voice of Mountain** 2001 Maskey Pustak Bhandar.

Koirala, B.P., **Faulty glass and Other Stories** 1998 Pilgrims Book House.

Lall, Kesar, **The Black Serpent A Collection of Short Stories from India** 2001 Adarsa Enterprises, Delhi.

-**Children's Book of Nepalese Folktales** 2001 Royal Nepal Academy.

Lamichhane, P.P. Vaishnav S.D., **Some Folktales or Nepal,** 1969 Dept. of Information HMG/N.

Pandey, Sita, Fever, 2001 Nirala Publications.

Pradhan, Parashu, **The Little Buddha in Tokyo**. 2004 Mahbubur Rahman Babu Dhaka, Bangladesh.

Regmi, Sanat (Ed.) **Stories from Nepal**, 2000 Royal Nepal Academy.

Sharma, Nagendra, **Sheet of Snow, An Anthology of Modern Short Stories from Himalayas** 1997 Nirala Publications.

Singh, Padmavati (Ed.) **Beyod the Frontiers : Women's Stories from Nepal** 2006 Gunjan.

Vaidya, Kurunakar **Nepalese Short Stories,** 1971 Purna Book Stall.

# लघु मदन पुरस्कार

*– कमल दीक्षित*

पहिलेबाटै क्षमा माग्नुपर्छ मैले । यस लेखमा 'म'को प्रयोग अलि बढ्तै हुने छ। त्यसबाट ममा आत्मश्लाघाको दोष पनि लाग्न सक्छ । तर आफू कुनै प्रकारले संलग्न भएको विषयमा बोल्नु या लेख्नुपर्दा त्यो बाध्यता नै भैदिन्छ । त्यस्तोमा लेख्नुपर्दा धेरै जना विद्वान्हरू 'यस पङ्क्तिमा लेखक' इत्यादि लेखी त्यो दोषबाट उम्किन खोज्छन् । मलाई भने एउटा अक्षरले पुग्ने ठाउँमा आठ अक्षर खर्च गर्नु ठीक लाग्दैन र म 'म' नै लेख्न रुचाउँछु। भए पनि यसमा जस लिन त्यसो गरेको होइन भन्ने मेरो नम्र निवेदन छ ।

*नेपाली*ले पूर्णाङ्क १९९ पुऱ्याउँदा पनि कतै यो कुराको चर्चा भएको रहेनछ र मदन पुरस्कार गुठीका संस्थापिका रानी जगदम्बाले पाउनुपर्ने एउटा कार्यको श्रेय उहाँलाई टक्र्याउन यो लेख्न तम्सेको हुँ। तर यो मेरो खोजकार्य या आत्मसंस्मरण होइन। विशुद्ध एउटा निबन्ध हो यो अलि खल्लोखल्लो खालको ।

सन् १९६१ अर्थात् २०१८/१९ सालतिर होला । रानी जगदम्बाले आफ्नो सासू र ससुरा सम्झाउने एउटा गुठी खोल्नुभयो 'बालचन्द्र प्यालेस ट्रस्ट' भन्ने वाराणसीमा । यो बालचन्द्र प्यालेस भन्ने नामको दरबारको पहिले अर्को नाम थियो। बनारस सहरभन्दा ५ मिलपर पश्चिमतिर भुलनपुर भन्ने ठाउँमा एक सय एकर भूमिमा गिर्दा बाँधिएको विशाल परिसर थियो यो। डेढ सय वर्षजति अघि बनारसका कुनै धनाढ्य व्यक्तिले आफ्नो रसरंग गर्न निर्माण गराएका थिए यसलाई । उनैको नामबाट मान्छेले यसलाई चिन्थे फलाना 'मुन्सिको हवेली' भनेर। ती मुन्सी कुनै कारणले बिग्रे या के भयो उनले हवेली बेच्नुपऱ्यो। त्यो हवेली किन्न पुगिन् महाराज चन्द्रकी कान्छी महारानी बालकुमारीदेवीले सन् १९३५ मा। कान्छा छोरा मदनशमशेरको बिहे गरिदिएपछि महारानीले नेपाल छाडिन् र काशीवास गर्न हिँडिन् । सुरुमा महारानी केशरशमशेरको घर, वरुणाको किनारमा निर्मित केशर क्यासलमा बस्थिन् तर सौतेनी छोरासँग के कुरा नमिलेपछि उनले आफ्नो छुट्टै घर किन्ने निर्णय गरिन् र

भुलनपुरको त्यो हवेली किनेकी हुन् । आफ्ना पति स्वर्गीय चन्द्रशमशेरको नामबाट घरको नयाँ न्वारान गरियो "बालचन्द्र प्यालेस" भन्ने ।

यति लामो त्यो भवनको विवरण किन दिइरहनुपऱ्यो भन्ने पर्ला पाठकहरूलाई । त्यसको गहिरो र लामो सम्बन्ध छ । त्यो खुलस्त पार्नुपर्छ । २००९ सालमा महारानी बालकुमारीको र त्यसको एक वर्षपछि मदनशमशेरको स्वर्गवास भएपछि त्यो बालचन्द्र प्यालेस दर्बार रानी जगदम्बाको स्वामित्वमा आयो । रानी जगदम्बाको पनि काशीवासै गर्ने विचार थियो, बनारस छाड्ने इच्छा थिएन । तर ३६ वर्षीया रानीसाहेबले काशीवासी हुनु राम्रो होइन, यो उचित छैन भनेर सम्झाउने अभिभारा आइपऱ्यो मेरो पितामाता, केदारमणि आ.दी. र विद्यादेवी दीक्षितमा । मदनशमशेरका समेत गुरु र गार्जियन भैसकेका मेरा पिताजी र रानी जगदम्बाले आमासरह मानेको मेरो माताजीलाई पनि हम्मे परेको थियो रानीसाहेबलाई नेपाल फर्काउन । पैले उहाँलाई ककसले हो 'नेपालमा भर्खर सत्तामा आएका काङ्ग्रेसहरूले राणाजीहरूलाई खेद्छन्, नेपाल नजाऊ' भनेर तर्साइदिएका रहेछन् । त्यसैले रानीसाहेब भारतमै कतै बस्ने, तर नेपाल नजानेमा दृढ ! यस्तो अवस्थामा मेरा पितामाता र मसमेतले भएभरका तर्क दिनुपरेको थियो नेपाल फर्कने औचित्य प्रमाणित गर्न । अन्त्यमा हामी सफल भएका थियौँ र त्यो सफलता नेपालका लागि राम्रै भयो । नेपालले एक जना संवेदनशील नारीदाता पायो । मदन पुरस्कार जन्म्यो, मदन मेमोरियल गर्ल्स स्कूल बन्यो, मदनधारा बन्यो पूर्व आठराईमा । अरू दान-धर्मका अनेकौँ कार्य भए रानी जगदम्बाबाट नेपालमा ।

त्यसै बेलाको कुरो हो हामीले उहाँलाई भन्यौँ– "पतिका नामबाट यतिका काम भए अब सासू-ससुराका नामले पनि केही सेवाकार्य गर्ने होइन ?" रानीसाहेबलाई त्यो कुरा पनि जँचेछ र 'केही गरौँ न त' भन्ने आज्ञा भयो । त्यसपछि हो हामीले त्यो प्यालेसकै नामबाट एउटा गुठी ट्रस्ट, बनारसमा नै खोल्ने सुझाव दिएको । एक सय एकर फैलिएको त्यो परिसरको केही भाग र दरबार जोडेर एउटा ट्रस्ट बनाइयो सन् १९६२ मा । त्यसबाट नेपाली वृद्धवृद्धालाई भत्ता, विद्यार्थीलाई छात्रवृत्ति, नेपाली भाषासेवीहरूको सम्मान इत्यादि

गर्नेसमेत भन्ने त्यसको उद्देश्य जनाइएका थिए। त्यसको केही वर्षपछि त्यस ट्रस्टबाट 'मदन मेमोरियल लेक्चर्स' पनि वर्षैवर्ष गराउने भन्ने पनि कार्य थपिएको थियो । त्यो मदन मेमोरियल लेक्चर्सलाई नेपालीमा 'मदन स्मारक व्याख्यानमाला' भन्ने नाम दिइएको थियो । रानीसाहेबबाट पहिले नै निर्माण गरिएको काशीको दूधविनायकको जगदम्बा धर्मशालाको सञ्चालनार्थ विद्याधर्म प्रचरिणी नेपाली समितिलाई पनि प्यालेसपरिसरको १५ एकर जमिन दान गरिएको थियो । तर दुर्भाग्यको कुरो भयो, केही वर्षभित्र उत्तरप्रदेश सरकारका आँखा लाग्यो त्यो प्यालेसमा र सशस्त्र प्रहरीका लागि भनी त्यो पूरै घर जग्गा यु.पी. सरकारले अधिकरण गरिदियो नाम मात्रको मुआब्जा दिएर ।

मदन स्मारक व्याख्यानमालाको खर्चपर्च बालचन्द्र प्यालेस ट्रस्टले दिन्थ्यो । तर त्यसको सञ्चालनको पूरै अभिभारा विद्याधर्म प्रचारिणी समितिलाई दिइएको थियो। सबभन्दा पैलो व्याख्याता भएर पश्चिम बङ्गाल हाइकोर्टका न्यायमूर्ति रामकृष्ण शर्मा आउनुभएको थियो सन् १९८१ मा। उहाँको व्याख्यान मुद्रित रूपमा थियो। त्यो खचाखच भरिएको जगदम्बा धर्मशालाको प्राङ्गणमा भएको थियो । व्याख्यातालाई रकम दिने पनि रिवाज थियो। शर्माजीलाई पाँच हजार रुपियाँ मैले नै बुझाएको थिएँ त्यसबेला ।

यसरी केही वर्ष चल्यो यो व्याख्यानमालाको क्रम तर विद्याधर्म प्रचारिणी समितिमै अव्यवस्था आएकाले हाम्रो व्याख्यानको काम पनि अवरुद्ध भयो। निकै वर्षपछि त्यो समितिको अध्यक्ष भएर एक जना साहित्यिक व्यक्ति आउनुभयो, दुर्गाप्रसाद श्रेष्ठ 'उपेन्द्र'। अनि उहाँले यो व्याख्यान मालालाई पुनर्जीवन दिनुभयो । त्यसपछि सन् १९९५ देखि यो निरन्तर चलिराखेको छ । नागाल्यान्डका हरिप्रसाद गोर्खा राई, शिलाङका गोपीनारायण प्रधान, गान्तोकका सानु लामा, भाग्सुका मगन पथिक, दार्जिलिङका जययोञ्जन प्यासी, गुवाहाटीका लीलबहादुर छेत्री, डुवर्सका हायमनदास राई 'किरात', दिल्लीका कमला सांकृत्यायन जस्ता स्वनामधन्य नेपाली कविलेखकहरू यो सम्मानबाट विभूषित भैसकेका छन्। सम्मान भने मैले त्यो किनभने केही वर्ष अघिदेखि दुर्गाप्रसादजी र मेरो सल्लाह भएर 'मदन स्मारक व्याख्यानमाला'लाई

‘मदन स्मारक सम्मान’ भन्ने नामकरण गर्‍यौं। र यसको रकम पनि वृद्धि गरी १५ हजार पुर्‍याइएको छ। त्यस्तै पहिले अघोषित रूपमै गरिएको भए पनि अब चाहिँ लिखित नै गरी पारित गरिएको छ मदनस्मारक सम्मान नेपाली नागरिकलाई दिइँदैन। पछि बर्मा, भुटानका पनि कोही सम्मानित होलान्, तर ऐलेसम्म भने भारतभित्रकै मात्र नेपाली साहित्यकारहरूलाई हामीले सम्मान गर्न सकेका छौं। मदन पुरस्कार संस्थापिका रानी जगदम्बाले स्थापित गरिदिएको हुनाले यो सम्मानलाई भारतमा मान्छेहरूले ‘मिनी मदन पुरस्कार’ भन्न थाले अनि हामीले पनि अनौपचारिक हिसाबले यसलाई भन्न थाल्यौँ– लघु मदन पुरस्कार !

✍

# आशीर्वादका शब्दहरू खोज्दै जाँदा...

*- कालीप्रसाद रिजाल*

अग्रजहरूले दसैँको टीका लगाउँदा बारम्बार एउटै श्लोक दोहोऱ्याउनुहुन्थ्यो– आयु द्रोणसुते श्रीयम् च दशरथे शत्रुक्षयम् राघवे ... । मलाई भने यो श्लोक कहिले कण्ठस्थ भएन । कताकता के नमिलेको जस्तो लागिरह्यो । त्यसैले होला मैले यसको प्रयोग पनि गर्न सकिनँ । मेरो विचारमा कुनै पनि व्यक्ति सदाका लागि आदर्श भएर रहन सक्दैन । फेरि यो श्लोक त त्यसैबेलाको परिप्रेक्ष्यमा विचार गर्दा पनि चित्तबुझ्दो लाग्दैन । त्यसबेलाका एक से एक अरू कसैको नाम नलिएर रचनाकारले दुर्योधनको जस्तो मानसम्मान होस् भनेर कस्तो सन्देश दिन खोजेको हो मैले बुझ्न सकेको छैन । कान्छी स्वास्नीको वशमा परेर राजा दशरथले रामलाई हठात् बनवासको आदेश दिए । आखिर यही मानसिक आघातले गर्दा उनको मृत्यु पनि भयो । यस्तो अवस्थामा दशरथको श्रीय कसरी उच्च हुन पुग्यो त्यो पनि स्पष्ट छैन । त्यसबेलाको पुष्पक विमानको गतिबारे मलाई थाहा छैन । तर अहिले त ध्वनिभन्दा पनि छिटो हिँड्ने यान-विमानहरूको आविश्कार भइसकेको छ । त्यसैले गतिश्च पवने भन्ने उक्तिले पनि अब धेरै ठूलो महत्त्व राख्दैन । वास्तवमा मान्छेको नाम तोकेर आशीर्वाद दिने प्रचलन सर्वसम्मत र विवादरहित हुनै सक्दैन । कुनै एक कालखण्डमा एउटा दृष्टिकोणले महान् देखिने व्यक्ति अर्को कोणबाट हेर्दा घृणाको पात्र पनि हुनसक्दो रहेछ । त्यसैले भलो मनले कसैलाई फलानोजस्तो भएस् भनेर आशीर्वाद दिँदा पनि उल्टो पर्न सक्ने सम्भावना हुन्छ । भन्नुस् न कुनै बेला हिटलर पनि कतिको आँखामा महान् थिए होला । तर आज कसैले हिटलरजस्तो हुनु भनेर शिरमा हात राखिदियो भने सुन्नेलाई श्रापतुल्य लाग्न सक्छ । भारतलाई अहिंसाको मार्गबाट स्वतन्त्रता दिलाउने गान्धीजस्ता महापुरुष पनि पछि गएर विवादित हुन पुगे । गोड्सेका अनुयायीहरू आज पनि उनलाई महान् मान्न तयार छैनन् । कुनै बेला संसारले आदर्शपुरुष भनेर सराहना गरेका नेलसन मन्डेलालाई बिनी मन्डेलाका वन्धुवान्धवहरू आज असल मान्छे ठान्दैनन् । विनोवा भावेले आपदकालको कदमलाई

अनुशासन पर्व भनेर समर्थन गरेपछि धेरैको नजरमा उनी सन्त रहेनन् । खाँटी कुरा त के भने जस्तोसुकै महान् कहलिएका व्यक्ति पनि दोष मुक्त भने हुँदोरहेन छ। कोही पनि सर्वगुणसम्पन्न हुँदोरहेन छ। लोकले स्तुति गर्ने पूजा गर्ने, देवताहरूको चरित्र र कृत्यमा पनि प्रशस्त टीकाटिप्पणी गरेको सुनिन्छ । त्यसमा पनि गुणदोष भन्ने कुरा लक्षित व्यक्तिमा मात्र निर्भर हुँदैन। गुणदोष हेर्ने व्यक्तिको आँखा र लगाएको चस्मासित पनि सम्बन्धित हुन्छ । कृष्णलाई गान्धारीको आँखाले हेर्ने कि पाण्डवका आँखाले हेर्ने ? कुरा त्यसमा आउँछ । स्वयम् मर्यादापुरुष रामलाई बालीकी विधवाको आँखाले या भनौं घरबाट निकालिएकी गर्भवती सीताको आँखाले हेर्ने हो भने परिदृश्य बेग्लै देखिन सक्छ। फेरि कुन समय-विन्दुमा हेर्ने त्यसमा पनि निर्भर गर्छ । धाराप्रवाह रूपमा गीताको उद्घोष गरिरहेको समयमा कृष्णलाई हेर्दा देखिने छवि पछि गएर यदुवंशीको सर्वनासलाई विवश टुलुटुलु हेर्न वाध्य भएका कृष्णमा नदेखिन पनि सक्छ। सबै कुरा सापेक्ष हुने गर्छ शाश्वत कुनै कुरा हुँदैन। तलबाट माथि उक्लनेले जुन बाटोलाई उकालो भन्छ माथिबाट तल झर्नेहरूले त्यसैलाई ओरालो भनिरहेका हुन्छन् । बाटो आफैमा न त उकालो हुन्छ न ओरालो । हेर्ने र हिँड्नेहरूले बाटोलाई उकालो या ओरालो बनाइरहेका हुन्छन् । द्युतक्रीडा पछिको चीरहरण भैरहेको सभ्रान्त सभामा द्रौपदीका आँखाले हेर्ने हो भने धर्मराज युधिष्ठिरलगायत त्यसबेलाका नामचलेका बडेबडे ज्ञानी पुरुषहरू ढोँगी र आडम्बरी देखिन सक्छन् । उनीहरूको नामले गुणको भन्दा दोषको प्रतिनिधित्व गरिरहेको हुनेछ ।

आफ्नो प्रतिभा, कर्मठता र योगदानको कारण लोकको नजरमा माथि बढेका नामी हस्तीहरू कालान्तरमा आफ्नै कमजोरी र चुकका कारण एकाएक तल झरेको दृष्टान्त पनि हाम्रै सामु छ। मैले केटाकेटीमा एउटा कविता पढेको थिएँ– 'एन याथलेट डाइङ् यौंङ्' कविताको मर्म आफ्नो कीर्तिमान चरमउत्सर्गमा पुगेको बेला मर्नु श्रेयस्कर हुन्छ भन्ने थियो । अन्यथा खिइँदै खुम्चँदै गएर आफ्नो कीर्तिमानको सामु त्यो व्यक्ति निकृष्ट मत्युमा प्राप्त हुन्छ  कविताको सार यही थियो । हिजोआज खेलाडीले उपयुक्त समयमा खेलबाट

सन्न्यास लिने चलन चलेको त्यसैले होला । तर हाम्रो राजनैतिक वृत्तमा भने यस्तो चेतना पलाउन सकेको छैन । नेताको नामै किटेर कसैले अमुक नेता अमुक समयमा नमरेको कारण पछि पत्रु भएर गयो भनेर विश्लेषण गऱ्यो भने इन्कार गर्न कठिन पर्छ । कुनै समयमा जनताको मनमनमा बास गरेका कतिपय महान् नेताहरू पछि नराम्रोसित बदनाम भएको प्रशस्त उदाहरण पाउन सकिन्छ । सतीदेवीको लास पतन भएझैँ कोही नातागोतामा कोही लोभानी-पापानीमा, कोही सुरासुन्दरीमा कोही कुर्सीको मरिहत्तेमा पतन भएर शिवशक्ति स्वरूपले रहेको दृष्टान्त हाम्रो सामु प्रशस्त छन् । बेलामा शहीद नभएकोले ठूलै सङ्घर्ष गरेर आएको नेता सामान्य भएर हराउने र सामान्यसमेत पनि मौकामा शहीद भएकाले अमर हुन पुगेको उदाहरण पनि प्रशस्तै पाइन्छ ।

अर्को कुरा जुन मूल्य, मान्यता र आदर्शको कसीमा घोटेर व्यक्तिलाई महान् या तुच्छ भनिन्छ या भनौं कृत्यलाई 'सु' या 'कु' भनेर निरूपण गरिन्छ त्यो स्वयम् एकनास रहँदैन । देश, काल र परिस्थितिअनुसार बदलिरहन्छ । कुनै बेला बहुपत्नी एवम् बहुपति प्रथा पनि समाजमा स्वीकृत थियो । स्त्रीजातिलाई पनि धन सम्पत्तिकै रूपमा लिइन्थ्यो । आक्रमण गरेर अर्काको भूभाग आफूमा मिलाउने उपक्रमलाई वीरता र पुरुषार्थको दर्जा प्राप्त थियो । विजय हासिल गर्नेले पराजितहरूको पशुधन र स्त्रीहरू लुटेर लैजान्थे । जो जति धेरै पशुधन र स्त्रीहरूका मालिक हुन्थ्यो ऊ त्यतिकै सम्मृद्ध र पुरुषार्थी कहलिन्थ्यो । आज त्यो अवस्था छैन । धेरै धेरै दास, पशुधन र स्त्रीहरूको स्वामी भएछ भनेर दिइने आशीर्वाद आजको परिप्रेक्ष्यमा असान्दर्भिक र अनुपयुक्त हुन जान्छ । निष्कर्षमा के भन्न सकिन्छ भने सबैका लागि र सधैँका लागि न कुनै व्यक्ति पूर्णस्वरूपले आदर्श हुनु सक्छ न त कुनै मूल्य-मान्यता सदाका लागि सर्वमान्य । यसमा विचारणीय कुरा अर्को पनि छ । आफ्नो विचार र सिद्धान्तजस्तै आशीर्वाद पनि कसैमाथि जवर्जस्ती लाद्न या थोपर्न हुँदैन । दिने र लिनेको दृष्टिकोण मिल्यो भने मात्र आशीर्वादले सार्थकता पाउँछ । राजकुमार सिद्धार्थलाई राजा शुद्धोधनले शतशत वर्षसम्म राजसी सुख-सुविधा र वैभवको भोग गर्न समर्थक होऊ भनेर दिएको

आशीर्वाद निरर्थक र असान्दर्भिक हुने कुरा सहजै अनुमान गर्न सकिन्छ ।

यथार्थमा भन्ने हो भने आजको कालखण्डलाई द्विविधा र संशयको समय भन्न सकिन्छ। चारैतिर प्रश्नै-प्रश्न तेर्सिएका छन् र मान्छे किंकर्तव्यविमूढ भएको छ। परम्परागत आस्था र विश्वासहरू भत्किएका छन् नयाँ सत्यको प्राणप्रतिष्ठा हुन सकिरहेको छैन । पुराना मान्यताहरू दैवी शक्ति र आध्यात्मिकतामा आधारित थिए। आज रहेका कुरालाई वैज्ञानिकता र भौतिक प्रमाणको आधारमा निरूपण गरिन्छ । हिजो धेरै कुरा विश्वास र आस्थामा टिकेको थियो। आज प्रयोग परीक्षण र तार्किकता सर्वोपरी भएको छ। आज आपसको माया पनि प्रमाणित गर्नुपर्ने भएको छ । मनले माया गरेर पुग्दैन मुखले पनि भन्नुपर्ने भएको छ। आजको मान्छे कसैले सिलोक कथिदिएकै भरमा कसैलाई महान् मान्न तयार छैन। संशय र द्विविधाबाट गुज्रिरहेको आजको समयमा मान्छेका सामु कुनै आदर्शपुरुष (Role Model) नै छैन । त्यसैगरी परम्परागत रूपमा चल्दै आएका मूल्यमान्यता र आदर्शहरू विनिर्मित भैरहेको आजको कालखण्डमा विवादरहित उपदेश र आशीर्वचन पनि छैनन्। कुनै बेला सत्य बोल्नु, सत्यको पक्ष लिनु, नराम्रो वृत्तिबाट धनआर्जन नगर्नु, कसैको कुभलो नचिताउनु, स्वार्थी नहुनु, परसेवामा उद्यत रहनु भन्ने गरिन्थ्यो । तिनको अनुशरण गर्ने व्यक्ति नै महान् कहलाउँथ्यो। उच्च सम्मान पाउँथ्यो। आज यस्ता उपदेश प्रवचनका सामग्री हुन पुगेका छन्। व्यावहारिक जीवनमा उपादेयता न्यून हुँदै गइरहेको छ। अहिलेको परिस्थितिमा यिनको सही परिपालना सम्भव पनि छैन । कसैले हठपूर्वक व्यवहारमा उतार्न खोज्यो भने त्यो निरीह प्राणी नाना हन्डर दु:खको भागी भएर असफल सिद्ध हुने प्राय: निश्चित छ । कस्तो समय आएको होला ! हेर्नुस् त आजका मातापितासित आफ्ना सन्ततिलाई दिनका लागि न कुनै आदर्श चरित्र छ न उपदेशका लागि उपयुक्त शब्द ! कथ्न सकिन्छ। कविले आज पनि सिलोक कथ्न सक्छ – मानम् च कृष्ण सुते ... भनेर। तर त्यो पनि कति स्वीकार्य होला ? कति सार्थक ? आज त जो कम भन्दाकम भ्रष्टाचारी छ कम चरित्रहीन, कम स्वार्थी र कम पदलोलुप छ जसले

राष्ट्रका सामु झुठ बोलेको छ आजको Mr. Clean या स्वच्छ छवि त्यही हो। जो कम अवसरवादी छ, जसले कम अपराध गरेको छ, जसले राष्ट्रको ढुकुटीको कम दुरूपयोग गरेको छ आजको असल मान्छे त्यही हो। आजको सज्जन त्यही हो जो कम दुर्जन छ। सिद्धान्त, आदर्श र नैतिकताको पछि लाग्नेहरू हाम्रो आँखा अगाडि पाखा लाग्दै गइरहेका छन्। यस्तो अवस्थामा आशीर्वाद र उपदेशका लागि सही शब्द चयन गर्नु फलामको चिउरा चपाउनुसरह हो। आफूले मान्दै आएको मूल्यमान्यताको आधारमा शिक्षा दिऊँ भने त्यो काम लाग्दैन। रातारात अरबपति भएका ठूलो पदमा पुगेका बहुरूपीहरूको कृत्यहरूको आधारमा उपदेश दिऊँ भने मनले मान्दैन। त्यसैले अर्ती उपदेश दिनेभन्दा पनि मनमनै कामना गर्नुपर्ने अवस्था छ। आजका बालबालिकाहरूले पछाडि फर्केर आदर्शपुरुष (Role Model) खोज्नुभन्दा अघि सरेर आफै अनुकरणीय भएर देखाउन सक्नुपर्छ। पुराना सिलोकहरूमा नैतिक मूल्य र आदर्श खोज्नुभन्दा मूल्य, मान्यता र आदर्शको नयाँ उदाहरण प्रस्तुत गर्न सक्नुपर्छ। नयाँ परिभाषा र अर्थ दिन सक्नुपर्छ। म यसमानेमा अर्ति-उपदेश होइन शुभकामना दिन चाहन्छु। नयाँ पुस्तालाई यसमा सफलता मिलोस् ...।

✍

# एकाक्षरकोश : सर्वाधिक राष्ट्रिय महत्तावाहक

*– कुमारधर शर्मा 'ज्ञानी'*

तीसौँ वर्षअघिदेखि मैले एकाक्षरकोशमा आधृत भाषिक चर्चा चलाउँदै आएको थिएँ। ती चर्चा प्रकाशमा ल्याउनै पर्छ भनी धेरैले धेरै पटक मलाई अनुरोध गरेका हुन्। तथापि मैले ती चर्चा प्रकाशमा ल्याइनँ। मेरा पुर्खा महापण्डित श्री हरिवंश शर्मा गर्गाचार्यको 'एकाक्षरकोश' देखेपछि भने मैले यस चर्चाभित्र ठूलो राष्ट्रिय गौरवले युक्त चर्चा अघि बढाउन सकिने देखेँ। त्यसपछि मैले सिक्किमका मुख्य मन्त्री पवन चामलिङज्यूको सम्पादनमा निस्केको 'निर्माण' (संस्कृति-विशेषाङ्क) मा एउटा सानो चर्चा छेडेँ। लेख लग्नुभएको थियो साहित्यकार भाइ श्री अविनाश श्रेष्ठले। उहाँले सो लेख पाएर चामलिङ धेरै खुसी हुनुभएको कुरा गर्नुभएको थियो। उहाँले यस लेखमा राष्ट्रिय गौरव झल्काउने चर्चा रहेको छ भन्नुभएको थियो रे।

चामलिङज्यूले त्यस लेखलाई वर्गीकरणको क्रममा सैद्धान्तिक लेखहरूको अध्यायमा पार्नुभयो र छापिइसकेपछि सो अङ्कसहित रु. १०००/- (एक हजार) पुरस्कार पनि पठाउनुभयो। यसको लागि उहाँप्रति कृतज्ञता नगरी बस्न सक्दिनँ। त्यसमा भएका छुटपुटसमेत मिलाएर वैदिक प्रतिष्ठानको प्रकाशन 'अभिवादन' (मासिक, पूर्णाङ्क ८) मा पनि सो लेख छपाएँ।

तर यस विषयमा अनुसन्धानको क्रम कसैले पनि अघि बढाएन। त्यसो त मैले अनुसन्धानको लागि सानो भए पनि साधन पाऊन् भन्ने उद्देश्यले वैदिक प्रतिष्ठानको प्रकाशन 'अभिवादन' (मासिक, पूर्णाङ्क ६-७) मा पूर्वोक्त 'एकाक्षरकोश' सम्पादित रूपमा अनुवादसहित सानो टिप्पणी 'भाषिक अनुसन्धानको लागि उपयोगी हुने' समेत दिई प्रकाशमा ल्याएँ पनि। तर कसैले पनि यस विषयमा चुस्स छोइदिने कामसम्म पनि गरेनन् (जसका हातमा पुऱ्याउन भ्याएँ तिनले पनि)।

एउटा विचित्र संयोगको कुरो। तीन भट्टराईले मेरो जीवनमा गहिरो छाप छाडेका छन्। तीमध्ये एक हुन् श्री चूडानाथ भट्टराय। अरू दुई हुन् घटराज भट्टराई र शरद्चन्द्र भट्टराई। उहाँहरूका

सकारात्मक नकारात्मक सबै कुरालाई मैले सकारात्मकमा ढालेरै मात्र अङ्गीकार गरेको छु ।

विडम्बनाको कुरो । उहाँहरू तीनै जनाको महाप्रयण भइसकेको छ । भट्टरायज्यू सबभन्दा पहिले बित्नुभयो । उहाँ बाँच्नुभएको भए लिखितम् हुन्थ्यो कुन्नि तर बकितम्मा भने उहाँले अरूकै अगाडि पनि मलाई दृढतासाथ समर्थन गर्नुभयो र हाम्रो वंशका ब्राह्मणहरूको अकृत्रिम प्रशंसा पनि गर्नुभयो ।

अर्का दुई जना भट्टराईहरू शरच्चन्द्र शर्मा भट्टराई र घटराज भट्टराई (संजोग- तीनै जना प्राध्यापक) को भने कुरै अर्को छ- एउटै । उहाँहरूले चर्चा लिखितम् रूपमै अघि बढाउने उत्साह देखाउनुभएको थियो ।

विडम्बनाकै कुरो । उहाँहरूले त्यो देख्न त भ्याउनुभयो तर अनुसन्धानको क्रम अघि बढाउन नभ्याउँदै पहिले शरच्चन्द्रज्यूको र पछि घटराजज्यूको असामयिक निधन भयो । यस नियतिले मलाई नराम्रोसित स्तम्भित नै तुल्यायो । मलाई विश्वास थियो– उहाँहरूले अवश्यै यसको अनुसन्धानक्रम निरन्तर जारी राख्नुहुनेछ । तर नियतिले मलाई नराम्रो झट्का दियो– मेरा ती दुवै अति मिलनसार तथा गुणग्राही सहयात्रीहरूको दुःखद अन्त भयो अप्रत्याशित रूपमा असमयमै ।

अब म आफै अघि सर्नुबाहेक अरू विकल्प रहेन । मनमा अनेक ऊहापोह– तर्कवितर्क र अन्तर्द्वन्द्व चलिरहे । जोसँग कुराकानी हुँदा पनि एकाक्षर शब्दहरूको चर्चा गर्न भने मैले छाडिनँ । एक दिन मेरो जीवनमा बदली फोरेर झलमल्ल घाम लाग्दाको न्यानो अनुभव सलबलाउन थाल्यो । बानी नपरेकोले होला काउकुती पनि लाग्यो । तुलबुली अझै बढ्यो ।

नियतिले यसपालि सकारात्मक आह्वान गरेकै मान्नुपर्छ ।

एक दिनको कुरो । अनपेक्षित रूपमा एक जना महानुभाव मलाई घरमै भेट्न आउनुभयो । अपरिचित तर अपरिचिन नै भन्न भने नमिल्ने । बारम्बार बाटोघाटो र सभा-समारोहरूमा देखिइरहेकै व्यक्ति । बेग्लै खालको कदकाठी र आकार-प्रकार । सायद अरूलाई पनि यस्तै अनुभव हुँदो हो ।

परिचयको आदन-प्रदान भयो। उहाँ पनि लेखक नै हुनुहुँदो रहेछ र बहुधा नेपालभाषामै मात्र लेख्नुहुँदोरहेछ मौलिक पदहरूकै प्रयोग गरेर। उदाहरणार्थ भनौँ– म क्रमिक रूपमा अघि बढ्न दिनानुदिन प्रयासरत रहिरहेँ। नेपालभाषामा यसको सामान्य अनुवाद यस्तो हुन्छ– 'जिं छसिंकथं हन्याः वनेतः हिनयाहिनथं कुतः यानाच्वना।' तर उहाँको मौलिक अनुवाद यस्तो हुन्छ– 'जिन छसिनकथन ह्न्या वनेतव हिनयाहिनथन कुतल यानाव च्वना।'

यस्तै किसिमको भाषामा एउटा लेख लेखेर दिन उहाँले अनुरोध गर्नुभयो। म त्यसरी नै मूलपदको प्रयोग गर्न सक्छु भन्ने देखेर नै उहाँले यो माग प्रस्तुत गर्नुभएको थियो। मैले लेखेर दिएँ पनि। त्यसपछि उहाँ दिनहुँ भनेझैँ मकहाँ आइ अनेक प्रश्न गर्न थाल्नुभयो। प्रश्न नभए मेरा कुरा सुनिरहनुहुन्थ्यो। एक दिन उहाँले 'अभिवादन' मा प्रकाशित 'एकाक्षरकोश'को नेपालभाषामा पनि अर्थ लेखेर दिन अनुरोध गर्नुभयो। पछि यस्ता अन्य लेख पनि लेखेर दिन अनुरोध गर्नुभयो। मैले मौलिक नेपालभाषामै लेखेर दिने गरेँ।

त्यसपछि उहाँले मलाई परम गुरु नै घोषित गरी एकाक्षर वीजसंस्कृतलाई आधार मानेर नेपालभाषाका शब्दहरूको अनुसन्धान गर्न थाल्नुभयो। म सम्पादन गरिदिन्थेँ। उहाँले यस अनुसन्धानमा निरन्तर लाग्ने अठोट गर्नुभएको छ। उहाँ 'थौँकह्ने' पत्रिकाका सल्लाहकार हुनुहुँदो रहेछ। उहाँका अधिकांश लेखहरू त्यसमै प्रकाशित भइरहेका छन्। उहाँको नाम हो– आनन्दप्रसाद श्रेष्ठ।

यसबाट मलाई सन्तोष लाग्नु स्वाभाविक नै हो। अनुसन्धान आशातीत रूपमा अपेक्षानुरूप अगाडि बढिरहेकै छ।

मेरो स्थापित मान्यतालाई पुष्टि दिन पर्याप्त आधार भेट्टिँदै गएको छ भनी उहाँ निकै हौसिनुभएको छ। यसबाट साबित हुन्छ– कुनै पनि सैद्धान्तिक स्थापनाको पुष्टि गर्न अनुसन्धाताको हृदय सकारात्मक हुनुपर्छ, प्रवृत्ति सकारात्मक हुनुपर्दो रहेछ। त्यसपछिमात्र यथार्थ भेट्टाउन आवश्यक अनुसन्धानको क्रम अगाडि बढाउन सकिन्छ। प्रवृत्ति सकारात्मक भएपछि सकारात्मक पक्षबाट मात्र होइन नकारात्मक पक्षबाट गरिने अनुसन्धानबाट पनि सकारात्मक परिणाम प्राप्त

हुनसक्छ भन्ने कुरो What Civilization is not भनी गरिएको अनुसन्धानबाट 'सभ्यता यो हो' भन्ने यथार्थ पत्ता लागेबाट प्रमाणित हुन्छ ।

यहाँका अनुसन्धाताहरू कुनै पनि सैद्धान्तिक स्थापना ठूला व्यक्तित्वबाट भएको हो-होइन विचार गरेर अनुसन्धान अघि बढाउने प्रयास गरिटोपल्ने हुनाले धेरै यथार्थ गर्भमै तुहेर ओझेल परेका छन् । अर्को कुरो– हामी विदेशीले गरेको अनुसन्धानलाई मात्र मान्यता वा महत्त्व दिन्छौँ, आफै उत्खनन गरी नयाँनयाँ प्रमाणहरू भेट्टाउनुतिर रत्तीभर पनि हौसिएका छैनौँ । जुनसुकै अनुसन्धान पनि विदेशीको अनुदान र विदेशीकै सहभागितामा गर्छौँ । फेरि अर्को कुरो– विदेशी अनुसन्धातालाई बेपत्तासित सुविधा दिन्छौँ, नेपाली अनुसन्धातालाई भने पैसै छैन भनी कमभन्दाकम सुविधा दिएर पङ्गु बनाइदिन्छौँ । यसो भएसम्म नेपालको राष्ट्रिय गौरव बढाउने धेरै कुराहरू भूगर्भमै लुकिरहनेछन् र निस्केका पनि बेपत्ता भइरहनेछन् ।

मैले बीजसंस्कृतकै आधारमा भाषिक अनुसन्धान सुरु गर्दा देखेको कुरो के हो भने नेपाल भाषा वैदिक र लौकिक वा पूर्वप्राकृत भाषा अस्तित्वमा आउनुअगावै अस्तित्वमा आइसकेको हो। यसै क्रममा मैले अर्को के कुरो भेट्टाएको छु भने नेपालीभाषा कम्तीमा ऋग्वेदकालमै बन्न थालिसकेको थियो ।

भाषिक अनुसन्धानकै आधारमा नेपाल सृष्टिको आदिस्थल हो भन्ने पनि प्रमाणित हुन्छ । यसको लागि बीजसंस्कृत (एकाक्षर)कै अध्ययन गर्नुपर्ने हुन्छ। जति बढी एकाक्षरका अनेकार्थी शब्द भेट्टाउँदै जानेछौँ उति नै हामी थाहा पाउँदै जानेछौँ– वैदिक-लौकिक संस्कृतका पदहरू बीजसंस्कृतबाट नै बन्दै गएका रहेछन्। यथार्थमा बीजसंस्कृतका सङ्ज्ञा (Noun) हरूबाट नै संस्कृतधातुहरू (the root verbs of Sanskrit Lannguage) बनेका रहेछन् र ती धातुहरूबाट पछि गएर अनेक पदहरूका विभागहरू (parts of speech) खडा भएका रहेछन् । साथै तन्त्रवीज र वीजसंस्कृतको तुलनात्मक अध्ययन गर्दे प्रणवको अनुसन्धान गर्ने हो भने यथार्थ देववाणी बीजसंस्कृत (एकाक्षर) नै हो भन्ने प्रमाणित हुन्छ ।

यी सबै कुराको आधारमा के पनि भन्न सकिन्छ भने हिमालयका उच्चस्थली तथा अधित्यकाहरूमा उत्खनन गरेको खण्डमा त्यहाँ संसारका सबैभन्दा पुराना आदिमानवहरूका जीवाश्म भेट्टिनेछन् ।

बीजसंस्कृत (एकाक्षर)कै आधारमा नेपाल शब्दको यथार्थ व्युत्पत्ति भेट्टिएको छ। इतिहासमा लेखिएका अनेक अनुमानहरू अव्यावहारिक र अनुपादेय साबित हुन्छन् । 'एकाक्षरकोश'अनुसार न इति शिवः, ई इति उमा पर्वतनन्दिनी, नश्व ई च ने, ने इति शिवपार्वती, ताभ्यां पालितो वा नैवेद्याद्यर्पणपूर्वकं तौ पालितौ येन इति नेपालः (न+ई+पाल्+अ= नेपाल) भन्ने सिद्ध हुन्छ । यसबाट शिवपार्वतीलाई नैवेद्यादि चढाई पालन गर्ने वा शिवपार्वतीद्वारा पालित देश नेपाल भन्ने अर्थ दिने गरी सार्थक व्युत्पत्ति-प्रदर्शन हुन गएको छ । पशुपतिनाथद्वारा रक्षित, गुह्येश्वरी माताको मायामा हुर्किरहेको नेपालीमात्रको लागि *नेपाल* शब्दको यसभन्दा बढी व्यावहारिक र सहजस्वीकार्य व्युत्पत्ति अरू हुनै सक्दैन । *पार्वतीको पेवा वा दाइजो नेपाल* भन्ने प्रसिद्धि त व्यापक नै छ ।

यसबाट 'नेमुनिद्वारा पालित देश नेपाल' भन्ने व्युत्पत्तिलाई काट्नै पर्छ भन्ने त देखिएन तर त्यो व्युत्पत्ति अनावश्यकचाहिँ भएकै छ । यसबाट नै नेमुनिको नाम *ने* अर्थहीन नभई अर्थयुक्त साबित भएको छ। *लक्ष्मीनारायण* वा *हरिलक्ष्मी* नाम रहन सक्छ भने *ने* नाम किन रहन सक्दैन ? बीजसंस्कृत (देववाणी) बोलिने जमानामा यस्तो नामकरण हुनु शास्त्रसम्मत नै हो ।

बीजसंस्कृत र वेदको आधारमा अनुसन्धान गर्दै हिमालयका अधित्यकारहरूको उत्खनन गर्दै जाने हो भने नेपाल सृष्टिको आदिम स्थल हो भन्ने प्रमाण अवश्य भेट्टिने मात्र होइन विश्वका समस्त मानवजातिको पुर्ख्यौली थलो नेपाल हो र विश्वका सबै प्रकारका सबै भाषाहरू बीजसंस्कृत (एकाक्षर)बाट नै उद्भूत हुन् भन्ने व्यावहारिक र अनुमोद्य निष्कर्ष पनि निकाल्न सकिन्छ । यसको लागि हामीले अभिमान, दर्प, सेखी वा दम्भ गर्नु छैन, त्यति घमण्डी हामी नबनौँ। तर यस कुरामा गर्व वा गौरवको ईषत् अनुभूति हामी गर्छौं भने अकृत्य नठानिएला ।

अतः बढीभन्दा बढी अनुसन्धान एकाक्षर शब्दहरूकै हुनुपर्छ । यथार्थमा यो बीजसंस्कृत मात्र होइन भाषाबीज नै हो । मानिसले पहिलोपटक बोल्दा एकै अक्षर त निस्क्यो होला, पहिलै पल्ट अनेकाक्षर शब्द वा ध्वनि अवश्य पनि निस्केन होला ।

अतः एकाक्षर बीजसंस्कृत देववाणीको रूपमा स्थापित हुनु यथार्थ बाहिरको कुरो अवश्य होइन। त्यसैले त बीजमन्त्रले सर्वाधिक महत्ता पाएको छ ।

नेपाल तन्त्रप्रधान देश हो। तन्त्रमा बीजमन्त्रहरू छ्यापछ्यापती पाइन्छन् । यथार्थमा आदि मन्त्र बीजमन्त्र नै हुन् । बीजको (एकाक्षरको) प्रयोगबिना गरिने कुनै पनि मन्त्रसाधना कहिल्यै सफल नहुने मान्यता विश्वव्यापी नै छ । वैदिक ऋचाहरू मन्त्रको रूपमा प्रयुक्त हुन थाल्दा पनि मन्त्रबीजलाई नै प्राधान्य प्राप्त भएकै हो । त्यसैले आदिम सभ्यताको पहिलो प्रकाश नेपालभूमिले नै पाएको हो भन्ने कुरामा कुनै शङ्का छैन ।

वैदिक ऋचाहरू मन्त्र रूपमा प्रयुक्त हुँदा पहिले प्रणवको उच्चारण हुनु वा प्रणवपुटित हुनु अनिवार्य नै हुन्छ। देवदेवीका वैदिक मन्त्रहरूको अध्ययनबाट मैले के निष्कर्ष निकालेको छु भने ती मन्त्र प्रायः सम्बद्ध देवताको आह्वान वा चर्चा नगरी अरू नै देवताहरूको चर्चामा सीमित हुन्छन् र अन्तमा *ॐ सूर्याय नमः, ॐ हनुमते नमः* आदि तन्त्रबीजसहित वा तन्त्रबीजरहि रूपमा जोडिएका हुन्छन् । जुन देवताको आमन्त्रण गर्नु छ उनको वन्दना बीजसहित गरिएमा बढी प्रभावकारी हुन आउँछ। त्यसैले *आह्निक*मा नवग्रहको प्रकरणमा ती मन्त्र त्यसरी नै जप्न निर्देश गरिएको छ। आह्निक *शुक्लयजुर्वेद*को *पारस्कारगृह्यसूत्र*को अनुकूल छ ।

प्रणवको उच्चारणसहित मात्र वैदिक मन्त्रको अनुष्ठान गरिनुपर्ने विधान पनि बीजाक्षरसित नै सम्बद्ध छ । वास्तवमा प्रणवले नै वैदिक ऋचाहरूलाई मन्त्र रूपमा परिणत गरेको देखिन्छ । प्रणवोच्चारणको अभावमा ती साहित्य मात्र हुन्छन्, मन्त्र होइनन् ।

प्रणव वास्तवमा एकाक्षर बीजसित नै सम्बद्ध छ। अ, ऊ, म्– यी तीन अक्षरको समष्टि नै ॐ हो र यो ॐ नै प्रणव हो ।

"अकारो माधवः प्रोक्तः" वा "अकारो वासुदेवः स्यात्" को आधारमा 'अ' को अर्थ नारायण (विष्णु) हो भने "विधिरुकार उच्यते", ऊकारो ब्रह्मणि स्मृतः" तथा "ऊकारश्व वितामहः" अनुसार एको अर्थ ब्रह्मा हुन आउँछ । 'म' को अर्थचाहिँ "मः शिवः" र "मःशङ्करः" अनुसार महादेव हुन आउँछ । यसअनुसार तीन अक्षर एउटै अक्षरमा समाहित भई एकाक्षरबाटै त्रिदेव ब्रह्मा, विष्णु र महेश्वरको आह्वान हुन पुगेको छ । अतः प्रणव पनि मन्त्रबीज नै बन्न पुगी वैदिक ऋचाहरूलाई मन्त्ररूपमा परिणत गर्ने सामर्थ्यले युक्त बन्न पुगेको छ । यसबाट मन्त्रजगत्मा उकाक्षर बीजसंस्कृतले कति महत्त्वपूर्ण स्थान ओगटेको छ भन्ने स्पष्ट हुन्छ ।

"रश्च रामे", "शं···शङ्करश्च" र "इकार एव सम्प्रोक्तो देवी माता सरस्वती" बाट 'र' ले विष्णुशक्ति, 'श' ले महेश्वरको शक्ति र इकारले ब्रह्माको शक्ति वहन गरेको देखिन्छ। यसरी 'श्+र्+ई= श्री'ले त्रिमहाशक्ति देवी महाकाली, महालक्ष्मी र महासरस्वतीको प्रतिनिधित्व गरेको देखिन्छ । यहाँ स्मरणीय कुरो के छ भने "रश्च रामे"को राम विष्णुका अवतार हुन् भने महाशक्ति महाकाली महेश्वरी पार्वतीकै अर्को रूप हो ।

यसरी ॐ ले त्रिदेव र 'श्री' ले त्रिदेवीको प्रतिनिधित्व गरेको स्पष्ट हुन आउँछ ।

यसबाट एकाक्षर बीजसंस्कृतको प्रभावशाली महत्ता त प्रतिपन्न हुन्छ नै, साथै एकाक्षरकोशको भूमिका यसमा प्रभावशाली हुने कुरो पनि सुनिश्चित हुन्छ। अतः एकाक्षर शब्दका अनेक अर्थको खोजी हुनु नितान्त आवश्यक हुन आउँछ। एकाक्षरको अनुसन्धान राष्ट्रिय तथा अन्तर्राष्ट्रिय दृष्टिले पनि अनिवार्य नै देखिन्छ ।

मानौँ, करौडौँ वर्षसम्म यस भूमण्डलमा हिमयुगले अकण्टक राज चलाएको थियो भन्ने पाश्चात्य अनुसन्धानकर्ताहरूको स्थापनालाई पनि मानिहेरौँ। यथार्थ पत्ता लगाउन अनेक दृष्टिकोणले हेर्नुपर्छ र ती दृष्टिकोणलाई मान्यता दिएर पनि अनुसन्धान गर्नुपर्छ। आफूलाई मन नपर्देमा त्यसलाई पन्छाएर अनुसन्धानलाई आफूले चिनेकै बाटोबाट मात्र डोऱ्याउन मिल्दैन, किनभने यसबाट यथार्थ ओझेलमा पर्ने सम्भावना नै बढी हुन्छ ।

अब मानौँ– करोडौँ वर्षको हिमयुगले सम्पूर्ण जीवजगत् प्रलयग्रस्त हुन पुग्यो । यहाँ, यस भूमण्डलमा, विश्वभर नै जीवनको अवशेषसम्म पनि कतै देखिएन, देख्ने आँखा नै रहेन, अनुभव गर्ने/महसुस गर्ने मनमस्तिष्क नै रहेन । अर्थात् महाप्रलय नै भयो ।

त्यसपछि हिउँ पग्लन थाल्यो । सबभन्दा माथिल्लो भूभाग सबभन्दा पहिले देखापर्‍यो । त्यसपछिका अन्य तह देखिनुअघि त्यस भूभागको वरिपरि पानीमात्र देखियो होला । पानी अर्थात् महासागर– समुद्र ।

त्यो भूभाग होला ? कल्पना गर्नुस् । त्यो भाग सर्वोच्च शिखर सगरमाथा कैलाशबाहेक अरू हुनै सक्तैन । त्यसैले त्यस देशका बासिन्दाको लागि पानी भन्नु नै समुद्र थियो । गण्डकी पनि समुद्र थियो, सरोवर पनि समुद्र थियो । खोला-नाला, सरोवर-तलाउ त उनीहरूले देख्दै देखेनन्, देखे– केवल समुद्र ।

जहाँ सबभन्दा पहिले भूभाग देखियो त्यहाँबाट सृष्टि थालियो, भाषाको विस्तार हुन थाल्यो, सभ्यताको सूत्रपात भयो । त्यो भूमि नेपालको हिमवत्खण्डबाहेक अरू कुन हुन सक्छ ? सिन्धुघाटी, मेसोपोटामिया, ह्वाङ्हो, नीलनदी आदिका अनेक सभ्यता त धेरै पछिका हुन् र यहाँबाटै बसाइँ सरेर गएका सभ्यता हुन् । त्यसैले मन्त्रहरूमा बीजाक्षरहरूको प्रभाव विश्वभर नै रहेको पाइन्छ र भाषामा एकाक्षरको विशेष प्रभाव यहाँ पाइन्छ । मङ्गोल भाषाको प्रभाव यहाँको भाषामा परेको भन्न पनि मिल्दैन, सभ्यता विस्तारै सरेर नेपाल आइपुग्यो भन्न पनि मिल्दैन । नेपाल विश्वको पहिलो आबादी, नेपालको वीजसंस्कृत र त्यसपछि वैदिक र लौकिक संस्कृतसमेत विश्वकै पहिला भाषा हुन् र देववाणीचाहिँ एकाक्षर वीजसंस्कृत नै हो । त्यसैले त वेदका ऋचाहरूलाई देववाणी (मन्त्र)मा परिणत गर्न प्रणव (ॐ) को आवश्यकता पर्‍यो र शक्तियुक्त हुन श्रीको आवश्यकता आइपर्‍यो । अत: नेपालको पुरातन भाषा र मानिस अन्यत्रबाट बसाइँ सरेर यहाँ आएको भन्ने सम्भावनासम्म पनि झुल्कँदैन । बरु सम्पूर्ण भाषा, सभ्यता र जीवजगत् यहाँबाट बसाइँ सरी विश्वमा सर्वत्र पुगेको भन्ने कुरो चाहिँ सम्भव छ, शत्प्रतिशत नै तर्कसङ्गत हुन आउँछ ।

आ-आफ्नो महत्त्वको प्रतिपादन गर्नु साध्य होइन, साध्य त यथार्थ कुरो पत्ता लगाउनु हो। साध्यसाधनको लागि इमानदारीसाथ साधनको अनुसन्धान- अन्वेषण- गवेषण र निदिध्यासन हुनु नै आजको आवश्यकता हो। यस्तो दृष्टि लिएर अनुसन्धानरत हुन सके “वसुधैव कुटुम्बकम्” टाढाको कुरो होइन।

*अयं निजः परो वेति गणना लघुचेतसाम्।*
*उदारचरितानां तु वसुधैव कुटुम्बकम्॥*

[यो आफन्त, यो पराइ भन्ने गणना (धारणा) सानो चित्त भएकाहरूको हो, उदार हृदय भएकाहरूको लागि त समस्त पृथ्वी नै (आफ्नै) कुटुम्ब (जहान-परिवार/कुलकुटुम्ब) हो।]

हामी लघुचेता बन्ने कि उदारहृदय बन्ने ? – यो मानव-समाजमै निर्भर कुरो हो। यो पक्का कुरो हो– इमानदारीलाई स्वार्थको लागि त्याग्नुहुँदैन, सत्यलाई आफ्नो गौरव बढाउन त्याग्नुहुँदैन। यसो गर्दा उल्टो मानव-समाजकै विनाश हुन्छ। यता सत्य सप्रन वा हुर्कन पाउँदैन, उता आफ्नो विनाश पनि मुख बाई राक्षसी प्रवृत्ति लिएर हामीतिर नै दौडेर– हुर्रिएर आइरहेको हुन्छ हामीलाई– सम्पूर्ण मानव समाजलाई क्वाप्लाक्कै निल्न। सत्यको अनादर र असत्यको अङ्गीकार एवम् ईमानदारीको उपेक्षा र स्वार्थमय चाकरीको अपेक्षा सधैँभरि स्वार्थद्वारा हम्किएर मानवताकै निरन्तर भक्षण गरिरहेको हुन्छ। अतः अन्वेषणको परिणाम विश्वसमक्ष ल्याउँदा सधैँभरि इमानदारीलाई अँगालिराख्न सक्नै पर्छ र झूटो आत्मगौरवको अनुभूति पनि निरर्थक हुने निश्चित नै छ।

हामीले अरूको मत मात्र होइन हाम्रा सम्मतिलाई पनि तर्कसङ्गत छ भने त्यसको यथार्थता पत्ता लगाउन विदेशीलाई भन्दा पनि बढी सम्मान स्वदेशी अनुसन्धाताप्रति दर्शाएर अनुसन्धानको क्रम अघि बढाउन अन्वेषण-प्रक्रियालाई अघि बढाउनुपर्छ र यसलाई निरन्तरता दिइरहन यस्ता अन्वेषकहरूको अभिनन्दन गरी अनुसन्धानलाई प्रोत्साहित गर्नै पर्छ। अन्यथा सिकन्दर महान् राजा पुरुलाई कदर गरी इन्डियाबाट फर्के भन्ने जस्ता झूटा कुरा इतिहासमा अङ्कित हुन पुग्नु उदेकिलो कुरो हुनेछैन। पछि युनानी इतिहासकारकै लेखमा

देखियो– राजा पुरुबाट हार खाई आफू आएको बाटो छाडी अन्धाधुन्ध भागाभागमा पर्दा मरुभूमिको बाटोमा परेर सिकन्दर महान् मरुभूमिमै ज्वरग्रस्त भई मरेका थिए। सिकन्दर महान्का चाकरीबाज चाटुकार इतिहासकारहरूले त्यस्तो इतिहास प्रकाशमा ल्याएका रहेछन्। पछि यसको रहस्योद्घाटन भइसक्दा पनि त्यसको संशोधनतिर कसैले ध्यान दिएन, किन ? कसको स्वार्थले त्यसो गर्न दिएन ? कुनै यस्तो तत्त्व छ, जो त्यस लेखोटलाई दबाएर गलत इतिहासलाई नै कायम राख्नुमा आफ्नो गौरव सुरक्षित रहेको अनुभव गर्छ । नत्र सिकन्दर महान्कै समकालिक इतिहासकारको लेखोट आजसम्म पनि दबाइराख्नुको अर्थ के ? सायद त्यो लेखोट नष्ट नै भइसक्यो कि ! अनुसन्धानमा यस्तो बेइमानी हुनुहुँदैन, यथार्थ कुरो नै अगाडि आउनुपर्छ। अनुसन्धानको कुरो जसरी जुन पक्षले दबाए पनि बेइमानी नै हो ।

अर्को कुरो– सरकारले समेत विदेशीलाई नै अत्यधिक सहुलियत दिने र त्यसै समकक्षमा काम गर्ने नेपालीलाई नगण्य सहुलियत दिने प्रवृत्ति पनि अनुसन्धानमा बाधक तत्त्व हो । यसबाट स्वदेशी अनुसन्धाताहरूको मनोबल स्वत: घट्छ । यसबाट नेपालीहरूको स्वाभिमानमै धक्का लागेको छ। यस किसिमको परम्परालाई “अतिथिदेवो भव” भन्ने परम्परा कायम राख्न खोजिएको भन्न मिल्दैन । यो त दास-मनोवृत्ति कायम नै राखिराख्न गरिएको उच्चस्तरीय निकृष्ट षड्यन्त्र मात्र हो, पैसाको शक्तिलाई सधैँभरि ज्ञानभन्दा माथि राखी ज्ञानलाई सदैव-सदैव पराजित र निरीह बनाइराख्ने आत्मघाती षड्यन्त्र मात्र हो । साधनकै अभावले गर्दा, धनकै अभावले गर्दा अभावग्रस्त जीवन बिताउनुपर्दा नेपाली अनुसन्धाताहरूले सापेक्ष रूपमा आफ्नो सीपको मनमाफिक विकास गर्न पाइरहेका छैनन् । यसतिर नेपाली समाजले सङ्घटित भएर केही न केही गर्न सक्नै पर्छ, सधैँभरि पेटपालनमै व्यस्त रहनुपर्ने खालको निम्नतम आर्थिक उपलब्धिबाट नेपाली सीपको अपेक्षित विकास असम्भव छ । अनुसन्धानका कुरा थुत्नुतिर मात्र सीमित रहेर पनि नेपालको गौरव बढ्न सक्छ भन्ने सोचाइ छ भने त्यो साउँ गुमाई ब्याजमात्र असूल गरिरहने मूर्खतामात्र हो । ज्ञानका उपासकहरू आफै व्यापारी बन्नुपर्ने स्थितिले पाश्चात्य

विकृतिहरू सबै यहाँ भित्रिई यहाँका सबै सुसंस्कार हराई पौरस्त्य समाज पनि धनको दास बनी निष्ठुरता र कृतघ्नताको पराकाष्ठामा पुग्ने निश्चित छ। शिक्षाको र स्वास्थ्यको क्षेत्रमा आएको व्यापारिक प्रवृत्तिले ल्याएको विकृतिको पराकाष्ठाले नै यो साबित भइसकेको छ। प्रशासनमा तीव्र रूपले कुशासनको वृद्धि हुँदै जानुको मूलकारण शिक्षा र स्वास्थ्यको क्षेत्रमा ल्याइएको व्यापारीकरणको नीति नै हो। व्यापार केवल व्यापारीले गर्नुपर्छ, अरूले होइन। अरूले व्यापार गर्न थालेपछि विकासको नाममा समाज भाँड्ने विकृतिहरूको ओइरो नै लाग्छ। त्यसलाई रोक्ने सामर्थ्य सर्वशक्तिमान्मा पनि छैन। नेपाली समाज– पूर्वीय समाज समय छँदै नचेते अनुसन्धानको क्षेत्र पनि तीव्र गतिले विकारग्रस्त हुँदै जानु अवश्यम्भावी कुरो हो। यसतिर नेपाली समाजले तत्कालै सक्रिय कदम चाल्नु अनिवार्य भइसकेको छ, नत्र देश भड्खालोमा जाकिनु निश्चित नै भइसकेको छ। आज विकासको लहरको नाममा विकारको लहर मात्र भित्रिरहेको छ। अब पनि नचेत्ने हो भने यस देशको नैतिक र चारित्रिक पतनलाई स्वयं सर्वशक्तिमान्ले पनि रोक्न सक्तैन।

एकाक्षर बीजसंस्कृतको अनेकार्थपरक अनुसन्धानमा धेरै ढिलाइ भइसकेको छ। ती हराएर जालान् भन्ने डर भइसकेको छ। हराउन थालिसकेकै छन्। अब त खोजीखोजी भाषिक अनुसन्धानमा यसको प्रयोग गर्न सक्नुपरेको छ। यस खोजीमा तीव्रता आओस् र यसको लागि अनुसन्धाताहरूलाई पेटपालनमै बढी व्यस्त रहनुपर्ने कमजोर आर्थिक अवस्थाबाट उठाई पर्याप्त सुविधा दिन सकिए यस क्षेत्रमा जाँगर बढी देखिन थाल्ने कुरामा कुनै सन्देह छैन। अनुरोध हो, को कति तात्ने हो समयले देखाउला।

अहिलेलाई म अर्को एक ‘एकाक्षरकोश’ यहाँ प्रस्तुत गर्दै छु। यो कोश आनन्दप्रसाद श्रेष्ठज्यूले आशा-सफूकुथिबाट ल्याई मलाई दिनुभएको हो। यसमा नै त्रुटिहरू धेरै नै छन्। सर्वत्र पदच्छेदसम्म पनि नगरी लेखिएकोले दशरा-मशारा भई अर्थ्याउनै गाह्रो भएको ब र वको ठाउँमा व मात्र लेखिएको श् र ष् जोडिँदा ती पछिका अक्षर अस्पष्ट लेखिएको हुँदा पढ्नै गाह्रो भएकोले यथासम्भव शुद्ध सारी

शब्दार्थसमेत अनूदित रूपमा प्रस्तुत गरेको छु । यसमा लेखक र लिपिकारको नाम समेत दिइएको छैन ।

अथ एकाक्षरकोष :

अकारो वासुदेवः स्यादाकारस्तु पितामहः ।
इकार उच्यते कामो लक्ष्मी रीकार उच्यते ॥१ ॥

[अ= वासुदेव, विष्णु, नारायण । आ= पितामह, ब्रह्मा । इ= काम, कामदेव । ई= लक्ष्मी ।]

उकारः शङ्करः प्रोक्त ऊकारश्व पितामहः ।
ऋकारो देवमाता स्याद्दकारो दनुजप्रसूः ॥२ ॥

[उ= शङ्कर, महादेव । ऊ= पितामह, ब्रह्मा । ऋ= देवताहरूकी आमा, आदिति । ॠ= दानवहरूको आमा, दनु ।]

लट्टकारो देवजातीनां माता सद्भि प्रकीर्त्यते ।
लट्टकारः स्मर्यते पूर्वैर्जननी शब्दकोविदैः ॥३ ॥

[लट्ट= देवजातिकी आमा, अदिति । लट्ट= जननी, जन्माउने आमा ।]

एकार उच्यते विष्णुरैकारः स्यान्महेश्वरः ।
ओकारस्तु भवेद् ब्रह्मा औकारोऽनन्त उच्यते ॥४ ॥

[ए=विष्णु । ऐ= महेश्वर, महादेव, शिव । ओ= ब्रह्मा । औ= अनन्त; विष्णु, शेष ।]

अस्याच्च परमं ब्रह्म अः स्याच्चैव महेश्वर : ।
कः प्रजापतिरित्युक्तः को वायुरिति शब्दितः ॥५ ॥

[अं (अम्)= परब्रह्म, परमात्मा । अः= महेश्वर, महादेव, शिव । क= प्रजापति, ब्रह्मा । क= वायु, बतास, हावा ।]

कश्चाऽऽत्मनि समाख्यातः कः प्रकाश उदाहृतः ।
कं शिरोजलमाख्यातं कं सुखं च प्रकीर्तितम् ॥६ ॥

[क= आत्मा । क= प्रकाश, उज्यालो । कं (कम्)= शिरको जल । सुख ।]

पृथिवी कुः समाख्याता कुः शब्दोऽपि प्रकीर्तितः ।
खमिन्द्रिये खमाकाशे खं स्वर्गोऽपि प्रयुज्यते ॥७ ॥

[कुः= पृथिवी । शब्द, आबाज । खं (खम्)= इन्द्रिय । आकाश । स्वर्ग ।]

गो गणेशः समुद्दिष्टो गन्धर्वो ग प्रकीर्तित : ।
गं गीतं गाच गाथा स्याद् गौश्व धेनुः सरस्वती ॥८ ॥
[ग= गणेश । गन्धर्व । गं (गम्)= गीत, गाना । गा= गाथा, आख्यान, उपाख्यान, स्तुति, वर्णन, कृति । गौः= गाई । सरस्वती ।]
घो घण्टाऽथ समाख्याता घो घनश्व प्रकीर्तितः ।
ङकारो भैरवः ख्यातो ङकारो= भैरव । विषयस्पृहा ॥९ ॥
[घ=घण्टा । बादल । ङ=भैरव । भोग=लालसा ।]
चश्वन्द्रमा समाख्यातो भास्करश्च प्रकीर्तितः ।
निर्मलं छं समाख्यातं लाञ्छनं छं प्रकीर्तितम् ॥१० ॥
[च= चन्द्रमा । सूर्य । छं (छम्)= मलरहित, सफा । चिह्न । दोष, कलङ्क ।]
छेदके छः समाख्यातो विद्वद्भिः शब्दकोपिदैः ।
वेगिते जः समाख्यातो जयने जः प्रकीर्तितः ॥११ ॥
[छ= छेड्ने, प्वाल पार्ने । जोड्ने, टुक्राउने । ज=वेगवान्, वेगयुक्त बनाइएको । ज=जल, जित्नु ।]
जेता च जः प्रकथितः सूरिभिः शब्दशासने ।
खौ ऋकारः कथितो नष्टे ऋः समुदाहृतः ॥१२ ॥
[ज= विजयी, जित्ने । ऋ= सूर्य । नाश भएको ।]
ञकारो गोपकः प्रोक्तो ञकारो ऋर्ऋरध्वनौ ।
टो धरिञ्यां करङ्के च टो ध्वनौ च प्रकीर्तितः ॥१३ ॥
[ञ=रक्षक । गोठालो । ऋर्ऋर आबाज । ट= पृथिवी । कङ्काल । फोक्सो । नरिवल ढाकिराख्ने कडा आवरण । सन्दूक । कन्तुर । बट्टा । आबाज ।]
ठो महेशः समाख्यातष्ठश्च शून्यः प्रकीर्तितः ।
बृहद्धनौ च ठः प्रोक्तस्तथा चन्द्रस्य मण्डले ॥१४ ॥
[ठ= महेश, शिव । शून्य । आकाश । खाली, रित्तो । ठूलो च्यूडो भएको । चन्द्रमण्डल ।]
डकारः शङ्करे त्रासे डकारो ध्वनिरुच्यते ।
ढकारः कीर्तितो ढक्का निर्गुणो निर्धनोऽपि च ॥१५ ॥
[ड= शङ्कर, शिव । त्रास, डर । ध्वनि, आबाज । ढ= ढक्का

(बाजाविशेष) । गुणरहित । धनहीन ।]

णकार: कीर्तितो ज्ञाने निश्चयेऽपि प्रकीर्तित: ।
तकार: कीर्तितश्चौरे क्रोडपुच्छे प्रकीर्तित: ॥१६ ॥

[ण= ज्ञान । निश्चय, अठोट, निधो । त= चोर । सुँगुरको पुच्छर । वाराहीकन्द (गिडो) को मूलमा हुने लाम्चो भाग ।]

शिलोच्चये थकार: स्यात् थकारो नयरक्षणे ।
दं कलत्रं बुधै: प्रोक्तं छेदे दाने च दातरि ॥१७ ॥

[थ= पहाड, डाँडा, चट्टान । नीतिको रक्षा । दम्= स्वास्नी । छेदन गर्नु । प्वाल । दिनु, दान । दाता ।]

बन्धने साधने ध: स्याद् विधातरि मतावपि ।
नकार: स्वगते बन्धे सुतौ वृक्षेऽपि कीर्तित: ॥१८ ॥

[ध= बन्धन । साधन । सामग्री । सिद्धयर्थ गरिने क्रिया, साधना । विधान गर्ने । ब्रह्मा । मत ।]

न= आत्मबन्ध। आफैलाई बाँध्नु, आत्मानुशासन। स्तुति। आत्मस्तुति, आत्मप्रशंसा । रुख ।

नेतातोऽथ समाख्यातस्तरणे न: प्रकीर्तित: ।
पवने प: समाख्यात: प: स्यात् पाने च पातरि ॥१९ ॥

[न= नेता, नायक, नाइके । डुङ्गा, नाउ ।, प= बतास, वायु पिउनु । पिइने पदार्थ । रक्षा गर्ने ।]

कफे वाते फकार: स्यात् फ आह्वाने प्रकीर्तित: ।
फूकारोऽपि च फ: प्रोक्तस्तथा फ: परिभाषणे ॥२० ॥

[फ= कफ, वात । आह्वान, सम्बोधन, बोलाउनु, बोलावट । फूत्कार । परिभाषण, समूहभाषण ।]

बकारो वरुण: प्रोक्त: कलशो ब उदाहृत: ।
वक्ष:स्थले च ब: प्रोक्तो गदा च समुदाहृता ॥२१ ॥

[ब= वरुण । कलश । छाती ।गदा ।]

नक्षत्रं भं बुधा: प्रातुर्भवने भ: प्रकीर्तित: ।
दीप्तिर्भा भ: स्वभूर्भूमिर्भीर्भयं कथितं बुधै: ॥२२ ॥

[भ= नक्षत्र। घर। भा= प्रकाश। भ:= निजी जग्गा, स्वभूमि। भूमि,

जग्गा । भीः= भय, डर ।]

मः शिरश्चन्द्रमा वेधा मा लक्ष्मीश्च प्रकीर्तिताः ।
मा च मातरि माने च बन्धने मः प्रकीर्तितः ॥२३ ॥

[म= शिर, टाउको । ब्रह्मा । मा= लक्ष्मी । आमा । मान । अभिमान । परिमाण, मापन । मः= बन्धन ।]

यशो यः कथितः प्राज्ञैर्यो वायुरिति शब्दितः ।
याने यातरि यः स्त्याने कथितः शब्दवेदिभिः ॥२४ ॥

[य= यश, जस । कीर्ति । वायु । यात्रा । सबारी । यात्री । स्थूलता । विस्तार । ठोसपना । मृदु । चिल्लो । नरम । चिप्लो । मुखर, शब्दयुक्त । स्निग्धता । अमृत । शिथिलता । आलस्य, अल्क्षीपना । घन्काइ, प्रतिध्वनि, गूँज । सत्कर्ममा रहने मनको झुकाउ । निद्रा । योगसाधनका नौ विघ्नमध्ये एक ।]

रश्च रामेऽनिले वह्नौ रुः शब्दे च प्रकीर्तितः ।
धने रा री च भूमौ स्यादुर्वरे च प्रकीर्तितः ॥२५ ॥

[र= राम । वायु । अग्नि । रु= शब्द । रा= धन । री= भूमि । उपजाउ ।]

ल इन्द्रे लवणे लुश्च ला दाने च प्रकीर्तितः ।
दीप्तिर्लः स्याच्च लं भुर्मिर्लो भयं च प्रकीर्तितम् ॥२६ ॥

ल= इन्द्र । लु= नून । ला= दान, दिनु । ल= प्रकाश । लं(लम्)= जग्गा-जमिन, भूमि । लः= डर ।)

लो वाते लवणे लः स्याद् ह्लादने च प्रकीर्तितः ।
ली श्लेषे च लये चैव कथिता शब्दवेदिभिः ॥२७ ॥

[ल= वायु, बतास । नून । खुसी, आनन्द । ली= अँगालो । नाश, हराउनु ।]

मानसे वरुणे वाते वकारः परिकीर्तितः ।
शः शिवः शङ्करः श्रेयः शश्च सीम्नि निगाद्यते ॥२८)

[व= मन । वरुण । वतास, वायु । श=शिव, शङ्कर । श्रेय, कल्याण । सीमा, सिमाना ।]

शी शय्याशयने प्राहुर्हिंसायां शो नगिद्यते ।
षकारः कथितः श्रेष्ठः षे लक्ष्मीरिति गद्यते ॥२९ ॥

[शी= शय्या, ओछ्यान, बिछ्योना। सुत्नु, सुताइ। शः= हिंसा, मार्नु। ष= असल, उत्तम। लक्ष्मी, धन।]

सः कोपे वारणे शल्ये तथा शूलिनि कीर्तितः।
क्षः क्षेत्रे रक्षसि प्रोक्तो बुधैः क्षः शब्दशासने ॥३०॥

[स= रिस। हटाउनु। हात्ती। किला। शूलधारी। शिव। क्ष= खेत। इलाका। राक्षस।]

इति लिङ्गानुशासने एकाक्षरकोषः समाप्तः। शुभम्। श्रीकृष्णार्पणमस्तु।

अहिलेसम्ममा मैले देखेको र प्रकाशनमा ल्याएको एकाक्षरकोश तीनओटा हुन्। एउटा 'लिङ्गानुशासन' भनिएको 'अमरकोश'को अन्तमा छापिएको पुरुषोत्तमदेवप्रणीत हो भने अरू दुई मैले नै सम्पादनसहित प्रकाशनमा ल्याएको महापण्डित हरिवंश शर्मा गर्गाचार्यद्वारा प्रणीत र यस लेखमा प्रस्तुत एकाक्षरकोश हुन्।

यस लेखमार्फत प्रस्तुत कोशको अन्तमा प्रतिलिपिकारले 'लिङ्गानुशासने' लेखिदिनाले 'लिङ्गानुशासन' नामको अर्कै कोशको परिशिष्ट पो हो कि भन्ने अनुमान गर्न पनि सकिन्छ। किनभने पुरुषेत्तमदेवप्रणीत एकाक्षरकोशभन्दा यो अलि फरक नै छ। तर यसमा लेखकको नाम नदिइएको हुँदा प्रणेता को हो थाहा पाउन सकिएन।

भाषिक अनुसन्धानको क्षेत्रमा एकाक्षर संस्कृतको सर्वोपरि महत्त्व छ। हाम्रो देशका कैयौँ ठाउँहरूका नाम एकाक्षर शब्दहरूबाट रहेको अनुमान पनि गर्न सकिन्छ। मङ्गोली भाषाका शब्दहरू सीधै यसबाट नै बनेका पनि देखिएको हुनाले ती भाषासम्बन्धी अनुसन्धानमा समेत एकाक्षरकोशले निकै सघाउ पुऱ्याउने देखिन्छ। अर्को कुरो– अझै गम्भीरतापूर्वक अध्ययन-अनुसन्धान गर्दै जाने हो भने वैदिक लौकिक संस्कृतका शब्द एवं धातुहरूसमेत एकाक्षर सङ्ज्ञा शब्दहरूबाट नै बनेका समेत देखिएको छ। अतः एकाक्षर शब्दहरूका अनेकार्थको खोजी हुनु अत्यन्त आवश्यक भएको छ।

तन्त्रवीजहरू पनि एकाक्षरमै आधृत छन् र वैदिक प्रणव पनि एकाक्षरमै आधृत छ। यी बीजाक्षर नै बीजसंस्कृत र देववाणी हुन्।

बीजको प्रयोग नभए मन्त्रानुष्ठान सिद्ध हुँदैन भन्नुको तात्पर्य यही हुनुपर्छ ।

देववाणीको प्रयोग नभई देवताले बुझ्नु कसरी ? बीजाक्षरको प्रयोग भएको मन्त्र अर्थात् बीजमन्त्रको अगाडि प्रणवको प्रयोग नगरेरै पनि मन्त्रानुष्ठान गरिन्छ । तन्त्रानुष्ठानमा यस्तो चलन छ ।

वैदिक मन्त्रको अनुष्ठानमा भने मन्त्रको अगाडि प्रणवको प्रयोग गर्नै पर्ने र त्रिदेव र त्रिदेवीलाई समेत आह्वान गरी हुने कुने देवको पौराणिक नाम-नमस्कारयुक्त मन्त्रको अनुष्ठानमा प्रणवपछि 'श्री' युक्त नामद्वारा नमस्कार गरिएको मन्त्र नै जप्ने चलन पनि छ । यो आदिपुरुष र आद्या शक्तिको समष्टिगत उपासना हो, अर्को शब्दमा भन्ने हो भने शिवशक्त्यात्मक उपासनाको सूचक हो ।

एकाक्षर शब्दहरूको अध्ययनबाट बुझिएको कुरो के हो भने यी सब देववाणी र बीजसंस्कृत वा बीजमन्त्र अथवा मन्त्रबीज मात्र नभई संस्कृत र कैयौँ अन्य भाषाका बीजसमेत हुनसक्ने अवश्यंभावी सम्भावनाले युक्त छन् भन्ने प्रमाणित नै भइसकेको छ ।

अत: यस्ता एकाक्षरका अनेकार्थहरू अनेक स्रोतहरूबाट भए पनि खोजेर एकै ठाउँमा सङ्कलित गर्नु आवश्यक छ । यसबाट भाषिक अनुसन्धानलाई योगदान प्राप्त हुने कुरो त छँदै छ, साथै यसले सर्वाधिक प्रभावशाली राष्ट्रिय महत्ता बोकेको देखिन्छ । अत: एकाक्षर शब्दहरूका अनेकार्थहरू जतातत्तैबाट अलिअलि गर्दै भए पनि निरन्तर खोज्दै भेट्टाउँदै जाँदा हाम्रो राष्ट्रिय महिमाको समेत वृद्धि गर्न यसले निकै सघाउने निश्चित नै छ ।

# कवि ध्रुवकृष्ण 'दीप'को सम्झना

*– प्रा.डा. कुमारबहादुर जोशी*

*"मानिस एक्लै जन्मन्छ, एक्लै मर्दछ र*
*एक्लै आफ्नो पाप र पुण्य भोग्दछ ।"*

*श्रीमद्‌भागवत*को उपर्युल्लिखित उक्ति त्यसबेला मैले मनमनै खूब सम्झेको थिएँ, जुनबेला म आफ्नी पत्नी सरस्वतीका साथ पशुपति आर्यघाटमा ब्रह्मनालमाथिको ढुङ्गा छापिएको जमिनमा एक्लै सेतो कपडाले छोपेर सुताइराखिएको ध्रुवकृष्ण 'दीप'को मुहार हेर्न पुगेको थिएँ । त्यसबेला ध्रुवको मुहार मैले धेरै बेर हेर्न सकिनँ । हातमा लिएर गएको फूल चढाएर उनको अन्तिम दर्शन गरी त्यहाँबाट फर्किहालेँ । फर्कंदा बाटामा पर्ने नजिकैको सत्तलमा उनका दुई छोराहरू किरण र लिटिलस्टार गम्भीर मुद्रामा झोक्र्याएर बसिरहेका र छेवैका बेन्चमा मदनकृष्ण श्रेष्ठ (प्रसिद्ध हास्य कलाकार) सहित दुईचार अन्य सज्जनहरूलाई पनि हामीले देख्यौँ र भेट्यौँ अनि घर फर्क्यौँ। यो गत २०६३ साल वैशाख २३ गते बिहान ९-१० बजेतिरको कुरा हो। ध्रुवकृष्ण 'दीप' बितेको र उनलाई आर्यघाट लगिएको खबर आएकोले हामी यहाँ आएका थियौँ ।

तर ध्रुवकृष्ण 'दीप'को निधन त अघिल्लो दिन अर्थात् वैशाख २२ गते राती १०:२० बजे नै भइसकेको रहेछ ओम हस्पिटल, चाबहिलमा दमको व्यथाले, यो पछि थाहा भयो । ध्रुवलाई दमको रोग लागेको धेरै वर्ष भइसकेको थियो– क्रोनिक दमको रोग । अन्ततः त्यो दमको रोग नै उनको मृत्युको मूलकारण बन्यो। ओम हस्पिटलमा भर्ना गर्न ल्याएको ४-५ दिन भैसकेको रहेछ, मैले थाहा पाइनँ । चाबहिलमै बसेर चाबहिलकै हस्पिटलमा आफ्नो मन मिल्ने साहित्यिक साथीसँग भेट्न नपाएको खुट्‌को मनमा रहन गयो ।

ध्रुवकृष्ण 'दीप' आफ्नो त्यो पुरानो दमको रोगसँग सङ्घर्ष गर्दै थिए, महिनौँ अघिदेखि विभिन्न अस्पतालहरूमा उपचारार्थ धाउँदै थिए । तर त्यसरी औषधोपचार गराउँदा-गराउँदै पनि उनी केही अघिदेखि रोगले चापेर ल्याएपछि ओछ्यान परेका थिए। उनी मलाई

बीचबीचमा फोन गर्थे र म पनि गर्थें । हामी दुईका बीच सशरीर प्रत्यक्ष भेट नभए पनि फोनैमा भए पनि बराबर कुरा हुन्थ्यो । उनी आफ्ना कविता मलाई फोनैमा सुनाउँथे । उनीसँग परिचय भएदेखिको यो क्रम चल्दै नै आइरहेको थियो । उनी प्राय:जसो नेपाली कविता सुनाउँथे भने कहिलेकाहीँ नेवारी र कहिलेचाहिँ अङ्ग्रेजी कविता पनि सुनाउँथे । उनी यथार्थमा नेपाली, नेवारी र अङ्ग्रेजी तीनै भाषामा कविता लेख्न सिपालु थिए । उनका कविता प्राय: सरल-सुबोध, सुन्दर-मधुर, लयात्मक र कहिलेकाहीँचाहिँ हास्यव्यङ्ग्यात्मक हुन्थे भने उनका बाल-कविता अर्थात् बाल-बालिकाका लागि लेखिएका कविता पनि उत्तिकै राम्रा हुन्थे । उनको कविता वाचन-शैली पनि कविभाव- भङ्गिमामय हुन्थ्यो । यिनै सब कारणले गर्दा उनले फोनमा सुनाएका कविताले पनि मेरो मनमा निकै प्रभाव पार्दथे । म कहिलेकाहीँ तत्काल टिप्पणी पनि गरिहाल्थेँ, उनी दङ्ग पर्थे । पेसाले उनी टुरिस्ट गाइड भए पनि र नेपाली, नेवारी संस्कृतिका अध्येता-ज्ञाता बनेर उनले सांस्कृतिक लेखहरू लेखे पनि मूलत: चाहिँ उनी कवि हुन्, रोमान्टिक कवि, केही प्रगतिशील प्रवृत्तिहरूका साथ भन्ने कुरा उनका कविताकृतिहरूले मात्र होइन, उनको आनीबानी बोलीवचन र व्यवहार आदिबाट प्रकटिने उनको प्रकृति र प्रवृत्तिबाट पनि प्रमाणित हुन्थ्यो ।

२०६३ साल पौष महिनाको कुनै दिनको कुरा त हो, उनको आग्रह टार्न नसकी म, सरस्वतीका साथ उनको पाटन कृष्णमन्दिर भीमसेनस्थाननिरको नयाँ घरको चोकमा आयोजित उनको नयाँ नेवारी पुस्तक ‘योमरि’ (मचा-म्येमुना) अर्थात् ‘योमरि’ शीर्षक बालगीत सङ्ग्रहको विमोचन कार्यक्रममा सम्मिलित हुन गएको । त्यहाँ कृष्णचन्द्रसिंह प्रधान, डा. मोहनहिमांशु थापा, डा. सुन्दरकृष्ण जोशी तथा शान्तदास मानन्धरलगायतका विशिष्ट पाहुनाहरूका साथ ध्रुवकृष्णसँग मेरो भेट र भलाकुसारी भएको थियो । त्यतिबेला ध्रुवकृष्ण अक्सिजनको पोर्टेबल प्लान्ट आफ्नो साथमा लिएर मुखमा अक्सिजन मास्क लगाएर मौन मुद्रामा मेचमा बसेका थिए । यसबेला मैले उनीसँग हात मिलाएको उनीसँगको मेरो अन्तिम हातमिलाइ भयो ।

उक्त विमोचन कार्यक्रमको एक-डेढ हप्ता जतिपछि ध्रुवकृष्णले मसँग फोनमा कुरा गरेका थिए। त्यतिबेला उनले आफ्नो अन्तिम चरणका कविताहरूको एउटा सङ्ग्रह निकाल्ने भएको सुनाउँदै त्यसमा मलाई भूमिका लेखिदिन भनेका थिए। मैले त्यो स्विकारेको थिएँ। तर उनको त्यो कविता सङ्ग्रह निकाल्ने इच्छा पूरा हुन पाएन।

मेरो जीवनयात्रामा ध्रुवकृष्ण 'दीप'सँग सम्बन्धित तीन विशेष प्रसङ्गहरू म कहिल्यै बिर्सन सक्तिनँ। यिनमा पहिलो प्रसङ्ग हो– वि.सं. २०५३ सालको जेठ-असार महिनातिरको कुरा। म त्यतिबेला मधुमेह रोगले दुवै मिर्गौला काम नलाग्ने भई हिँड्डुल पनि गर्न नसक्ने अवस्थामा पुगेको थिएँ। भारतको भेल्लोर अस्पतालमा स्वास्थ्य परीक्षण गराउँदा त्यहाँका चिकित्सकहरूले मलाई छ महिनाभित्र मिर्गौला प्रत्यारोपण गराउनुपर्ने भएको र त्यसको लागि कम्तीमा ६ लाख भा.रु. लाग्ने जानकारी गराएको अनि मेरो आर्थिक स्थिति कमजोर भएको हुँदा आर्थिक सहयोग जुटाउने उद्देश्यले मप्रति स्नेह-सद्भाव राख्ने साहित्यकार, पत्रकार, प्राध्यापक, विद्यार्थी तथा हितैषीहरूद्वारा सरकारलगायत सङ्घ-संस्था सबैसित सहयोगको अपिल गर्दै हस्ताक्षर सङ्कलन, सहयोग समितिको गठन आदि अभियान सञ्चालन गरिएका खबर काठमाडौँमा विभिन्न पत्रपत्रिकाहरूमा व्यापक रूपमा आउन थालेका थिए। (साँच्चै भन्ने हो भने म मूलतः यिनै मित्रहरूका स्नेह-सद्भावका प्रयासले नै अहिलेसम्म बाँच्न सकेको हुँ।) त्यतिबेला नेपाल सरकारका तर्फबाट काशी हिन्दू विश्वविद्यालयमा नेपाल चेयरमा नेपाली पढाउन काज खटिएको म गर्मीको बिदामा काठमाडौँ आई बसेको थिएँ। यस्तैमा एक दिन मेरा मित्र ध्रुवकृष्ण 'दीप' मोटरसाइकलमा एक जना महिलासहित मकहाँ आएका र मेरो स्वास्थ्यस्थिति देखेर निकै गम्भीर र चिन्तित बने। (ध्रुवकृष्णले साथमा ल्याएकी महिला मङ्गललक्ष्मी भाउज्यू–ध्रुवकृष्णकी दोस्री वा कान्छी पत्नी (लिटिलस्टारकी आमा) भनेर मैले चिनेको यसैबेला हो, नत्र ध्रुवकी पत्नीका रूपमा किरणकी आमा चन्देश्वरीलाई मात्र म चिन्दथेँ।) केही बेरको बसाइ र भलाकुसारीपछि ध्रुवकृष्णले मकहाँबाट फर्कने बेलामा 'यो मेरो शुभेच्छा तपाईंको स्वास्थ्यलाभका लागि'

भनेर एउटा खाम मेरो हातमा राखिदिएका थिए। उनी फर्किसकेपछि खाम खोलेर हेर्दा त्यसमा सहयोगको रकम रु. दुई हजार पाँच सय थियो। यहाँ म रकमको होइन, बरु मप्रतिको उनको स्नेह-सद्भाव र शुभेच्छाको प्रसङ्ग प्रस्तुत गर्दै छु, जसका लागि उनीप्रति म सदा आभारी छु।

दोस्रो प्रसङ्ग हो– भारतको मद्रासमा २६ भाद्र २०५३ मा मिर्गौला प्रत्यारोपण गराई बाँचेर काठमाडौं फर्केर आएपछिको कुरा। त्यसरी बाँचेर म काठमाडौं फर्केको समाचार यहाँका पत्रपत्रिकाहरूमा प्रकाशित भएपछि मित्र ध्रुवकृष्ण 'दीप' र मङ्गललक्ष्मी भाउज्यू दुवै जना सँगै मकहाँ आएर नेवारी, संस्कृतिअनुसार मेरो सुस्वास्थ्यको कामना गर्दै स्नेहपूर्वक मलाई 'खेँ सगँ' (फुलसहितको सगुन) दिएको म कहिल्यै बिर्सन सक्तिनँ। त्यसरी सगुन दिएको क्षणलाई मैले क्यामेरामा कैद गर्न लगाएको थिएँ र त्यो फोटो पछि २०५४ सालमा प्रकाशित मेरो 'मृत्युशय्याबाट बिउँझेर' नामक पुस्तकमा "कवि ध्रुवकृष्ण 'दीप' तथा मलाई सगुन दिँदै गरेकी मङ्गललक्ष्मी भाउज्यू" भन्ने क्याप्सनका साथ मैले छपाएको थिएँ। यसरी मेरो पुस्तकमा छापिएको ध्रुवकृष्ण 'दीप' र मङ्गललक्ष्मी भाउज्यूको फोटोले त ठूलो काम गरेछ, खासगरी मङ्गललक्ष्मी भाउज्यूको जीवनमा भन्ने कुरा मैले पछि थाहा पाएँ। कुरा के रहेछ भने मङ्गललक्ष्मीसँग ध्रुवकृष्णको सुटुक्क विवाह धेरै अघि भएको र उनीहरूको छोरा लिटिलस्टारको जन्म २०३१/२०३२ सालमा नै भैसकेको रहेछ। तर धेरै पछिसम्म पनि अथवा भनूँ २०५२ सालमा ध्रुवकृष्णका पिताजीले नाति लिटिलस्टार (लिटिलस्टार यतिबेला २०/२१ वर्ष पुगिसकेका थिए) को व्रतबन्ध गरिदासम्म पनि ध्रुवकृष्णको घरमा खास गरेर उनकी जेठी पत्नी (किरणकी आमा) ले गर्दा र अरू मङ्गललक्ष्मी वज्राचार्य थरकी हुनाले गर्दा पनि हो क्यारे मङ्गललक्ष्मी र तिनका छोरा लिटिलस्टारलाई नभित्र्याइएको र उनीहरूको आपसी सम्बन्धलाई गुपचुपै गरी राखिएको रहेछ। ध्रुवकृष्ण र मङ्गललक्ष्मीको यो परिवार जोडीलाई मेरो पुस्तकमा प्रकाशित क्याप्सनसहितको उपर्युक्त फोटोले प्रथमपटक सार्वजनिक गरिदिएको र त्यसले मङ्गललक्ष्मीलाई टोलछिमेकमा खुलेर हिँड्न पनि सजिलो तुल्याइदिएको रहेछ। यी सब

कुरा थाहा भएपछि मलाई लिटिलस्टार छोरा त्यत्रो जवान भैसक्दासम्म पनि त्यसरी गुपचुप बस्नुपर्दाखेरिको लामो समयसम्मको कठोर भुक्तमान, सकस र अन्तर्यातना सहन सक्ने मङ्गललक्ष्मी भाउज्यू साँच्चि नै सहनशील हुनुहुँदोरहेछ भन्ने लाग्यो ।

मेरो जीवनयात्रामा ध्रुवकृष्ण 'दीप' सँग सम्बन्धित तेस्रो उल्लेख्य प्रसङ्ग हो– मेरो आग्रहमा ध्रुवकृष्णले मलाई पाटनमा बिक्रीमा रहेको घर खोजिदिएको प्रसङ्ग। प्रत्यारोपणपश्चात् काठमाडौँ फर्केपछि त्रिभुवन विश्वविद्यालयले मलाई स्वास्थ्य ठीक नभएसम्मका लागि भनेर कीर्तिपुर त्रि.वि. छापाखानानिर एउटा सानो आवासको व्यवस्था मिलाइदिएको थियो र म यहीँ बसेर स्वास्थ्यलाभ गर्दै थिएँ। स्वास्थ्य अलि ठीक भएपछि आफूले पढाउने गरेको नेपाली केन्द्रीय विभाग यहाँबाट नजिकै पर्ने हुनाले मैले कक्षा पनि लिन थालिसकेको थिएँ । यस्तैमा, मैले आफ्नो चाबहिलको घरमा गृहकलहको कारण शान्तिसित बस्न सक्ने स्थिति नदेखेकोले मित्र ध्रुवकृष्ण 'दीप' पूर्वोक्त प्रकार मङ्गललक्ष्मीका साथ मकहाँ आएका बेला पाटनमा उनको घर वरपर एउटा सानो पुरानो घर बिक्रीमा भए किन्ने कुरा गरेको थिएँ। एक दिन उनले मलाई त्यस्तो घर भेटिएकोले देखाउन पाटन लिएर गए। पाटन कृष्णमन्दिरको मोमदुगल्लीटोलमा उनको घर थियो भने उनले देखाउन लगेको यो घरचाहिँ पाटन दरबारचोक छेवैमा थियो। घर पुरानो एकनाले तीनतले थियो। घर हेर्न जाँदा ध्रुवले मङ्गललक्ष्मी भाउज्यूलाई पनि साथैमा ल्याएका थिए । यो त्यस्तै २०५४/५५ सालतिरको कुरा हो। घरको मोल ९/१० लाख भनेको र त्यो बेला आफूसित त्यति पैसा नभएको हुनाले मैले नलिने भएपछि मङ्गललक्ष्मी भाउज्यूले माइतीले दिएको आफ्नो नाउँको जग्गा के-कति हो क्यारे बेचेर र नपुगेको ऋण गरेर त्यो घर आफ्नो नाउँमा पास गरी लिएको मैले पछि थाहा पाएँ। यसको एकाध वर्षपछि यो घर जीर्णोद्धार गरी राम्रोसँग बनाई-तुल्याई गरिसकेपछि ध्रुवकृष्ण र मङ्गललक्ष्मी भाउज्यूले हामी (म र पत्नी सरस्वती) दुवैलाई बोलाएर भोज पनि खुवाएका थिए । मङ्गललक्ष्मी भाउज्यूले त यो घर जुटाइदिएकोमा खुसी हुँदै त्यसको श्रेय मलाई नै दिनुहुन्छ, तर मचाहिँ भन्छु– यो उहाँकै भाग र भोग लेखेको हो र म निमित्त मात्र बन्न

पुगेको हुँ । ध्रुवकृष्ण बितेको डेढ-दुई महिनापछि अस्ति कुरा हुँदा मङ्गललक्ष्मी भाउज्यू भन्दै हुनुहुन्थ्यो– त्यो घर किनेको ऋण मैले भर्खर गएको महिनामा मात्र चुक्ता गर्न सकेँ ।

आफ्नो जीवनका अन्तिम वर्षहरूमा ध्रुवकृष्ण खासगरी बिरामी हुन थालेपछि यही नयाँ घरमा आफ्नी कान्छी पत्नी मङ्गललक्ष्मीसँग बस्ने गर्थे र कहिलेकाहीँ मात्र मोमदुगल्लीको पुरानो घरमा जेठीकहाँ बस्न जान्थे भन्ने कुरा मैले बेलाबेलामा फोन गर्ने गर्दा थाहा पाएको थिएँ । गत दुई-तीन वर्षदेखि यता बीचबीचमा निकै बिरामी पर्न थालेपछि चाहिँ उनी मङ्गललक्ष्मीकहाँ नै बस्दै आएका र विशेषगरी मङ्गललक्ष्मी र छोरा लिटिलस्टारले नै उनको हेरबिचार र स्वास्थ्योपचार गर्दै गराउँदै आइरहेको भन्ने थाहा पाएको थिएँ। माथि यस लेखको आरम्भमा उल्लिखित ध्रुवकृष्णको ‘योमरि’ पुस्तकको विमोचन कार्यक्रमको आयोजनमा पनि मङ्गललक्ष्मी र छोरा लिटिलस्टारले नै गराएका रहेछन् भन्ने मैले पछि थाहा पाएँ । जे होस्, आफ्नो जीवनयात्राका अन्तिम वर्षहरूमा ध्रुवकृष्णले कान्छी पत्नी मङ्गललक्ष्मी र छोरा लिटिलस्टारबाट प्राप्त गरेका सेवाशुश्रुषाबारे मैले जे-जे सुन्दै, देख्दै र अनुभव गर्दै आइरहेको छु, त्यसलाई म औधि प्रशंसनीय सम्झन्छु ।

ध्रुवकृष्ण ‘दीप’सँग मेरो चिनाजानी मलाई, जहाँसम्म लाग्छ २०३५ सालपछि भएको हो कवि वासु शशीमार्फत। वासुदाइकहाँ म बराबर जाने-आउने गर्थें । २०३५ सालमा मैले विस्तृत भूमिका लेखनका साथ सम्पादन गरेको ‘वासु शशीका कविता’ साझा प्रकाशनबाट प्रकाशित भएकै बेलातिर हो क्यारे एक दिन वासुदाइकहाँ म पुगेको बेला ध्रुवकृष्ण पनि आइपुगे र वासुदाइले हामी दुईका बीच चिनापर्ची गराइदिनुभयो । पछि बराबर फोनवार्ता र भेटघाट हुँदै जाँदा कवि ध्रुवकृष्ण ‘दीप’ र कवि वासुशशीका प्रकृति र प्रवृत्तिमा मैले धेरै समानताको अनुभव गर्न थालेँ अनि स्वभावत: कवि वासुशशीलाई जत्तिकै म कवि ध्रुवकृष्णलाई पनि मन पराउन थालेँ । त्यसपछि कवि ध्रुवकृष्णका पत्रपत्रिकामा प्रकाशित फुटकर कृतिहरूका साथै उनका पाएजति पुस्तकाकार कृतिहरू पनि पढ्दै गएँ– ‘घामछायाँ’, ‘आरम्भ आवाज: अन्त आवाज’, ‘बासीभात’,

'बत्तीस कुलच्छिन' 'भुक्तमान चालिसा', 'सर्वजात जिन्दावाद', 'लालभोग', 'मनभोग', 'भजनमञ्जरी' आदि । यस्तैमा २०४४ सालमा नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान (हाल नेपाल प्रज्ञा-प्रतिष्ठान) बाट ध्रुवकृष्णका एक सयवटा कविताहरूको सङ्ग्रह 'पानीको सङ्कलन' प्रकाशित भयो । यो लिएर ध्रुवकृष्ण मकहाँ आए । ध्रुवकृष्णको यो कृति मलाई निकै गहकिलो लाग्यो र मैले यसलाई मनोयोगपूर्वक पढेर "ध्रुवकृष्ण 'दीप' र उनको पानीको सङ्कलन" समीक्षा लेखेँ । मेरो यो समीक्षा 'साप्ताहिक विमर्श'को ७ असोज २०४५ को अङ्कमा प्रकाशित भयो । यो समीक्षालाई पछि मैले साझा प्रकाशनबाट प्रकाशित आफ्नो 'सिर्जना र विवेचना' नामक सङ्ग्रह (२०५८) मा समावेश गरेँ । मेरो यो समीक्षा पढेपछि ध्रुवकृष्णले मलाई माया र आदर गर्न थालेका र एक दिन घरमा बोलाई खानपीनका साथ हाम्रो सम्बन्धमा प्रगाढता थपेका थिए । त्यस अवसरमा कृष्णचन्द्रदाइ पनि हामीसँगै आमन्त्रित हुनुहुन्थ्यो । हामीलाई ध्रुवकृष्ण, उनकी जेठी पत्नी चन्द्रेश्वरी, छोरा किरण सबै मिलेर मोमदुगल्लीमा रहेको उनको घरको बुइँगलमा लगी भोजै जोडी खुवाएका थिए ।

कवि ध्रुवकृष्ण र उनका कवितासम्बन्धी आफ्नो उपर्युक्त समीक्षालाई मैले ध्रुवकृष्णकै 'मेरो परिचय' शीर्षक कविताका जुन पङ्क्तिबाट उनको परिचय प्रस्तुत गर्दै आरम्भ गरेको थिएँ ती कविता पङ्क्ति यस्ता थिएः–

*जागिरे छउन्जेल*
*हाकिमहरूको आदेश खाएर*
*पेट पालेँ*
*त्यसपछि ढाक्रे भएँ–*
*नेताहरूको भाषण खाएर*
*छाक टारेँ*
*अहिले केही काम नपाएर*
*कवि बनेको छुः*
*दिनको एक छाक*
*स्वास्नीको घुर्की र*

*एक छाक*
*आफ्नै कविता खाएर*
*बँचेको छु ।*

नौ वर्षजति 'यति ट्राभल्स'मा र नौ महिनाजति 'काठमाडौँ ट्राभल्स'मा जागिर खाएर ढाक्रे बनेपछिका कवि ध्रुवककृष्णको जीवनका अनुभव र अनुभूतिहरू हास्यव्यङ्ग्यात्मक पारामा अभिव्यक्त गर्ने उपर्युक्त कविता पङ्क्तिहरूमा उनको भाषाको सरलता-सुबोधता, लयात्मकताको मिठास, शैलीको व्यङ्ग्यात्मकता, अभिव्यक्तिको सहजता र भावको हृदयस्पर्शिताजस्ता अनेक प्रमुख प्रवृत्तिहरू प्रकटिएका पाइने हुनाले यिनलाई मैले यहा पनि उद्धृत गरेको हुँ ।

कवि ध्रुवकृष्ण 'दीप'को जीवनको एक महत्त्वपूर्ण खण्ड वा भागतर्फ सङ्केत गर्ने उनको उपर्युल्लिखित "मेरो परिचय" कविताजस्तै उनले आफ्नो जीवनका अन्तिम-अन्तिम कविताका रूपमा रहेको "आगोपानीको एउटा गीत" शीर्षक कविताका पङ्क्तिहरू पनि म यहाँ उद्धृत गर्न चाहन्छु, जसमा उनले आफ्नो रोगार्त्त जीवनको अन्तर्पीडा अत्यन्त मार्मिक पारामा प्रकट गरेका छन् । जस्तै :

*जीवन माग्दा आगो पाएँ*
*अखण्ड आगो भोग्दै छु ।*
*दमको रोगी म आगो खोक्दै*
*पानी निरन्तर सोच्दै छु ।*

*खाँचो टार्न म पानीको अब*
*आँशु खूब सँगाल्दै छु ।*
*एक मुट्ठी सास बाँच्न यहाँ*
*जीवन सिँगै बाल्दै छु ।*

*आगो धेरै पानी थोरै*
*जीवन यस्तै जिउँदै छु ।*
*पिउने पानी अझै नपाई–*
*आफ्नै आँशु पिउँदै छु ।*

अन्तमा, यस संसारमा ७३ वर्ष (१९९०–२०६३ वि.सं.) सम्मको जीवनको सुखदुःख भोगेर दिवङ्गत बनेका कवि ध्रुवकृष्ण 'दीप' को पञ्चभौतिक शरीर आज हामीमाझ नभए पनि उनको यशः– शरीरमा उनी सदा जीवित रहनेछन् भन्दै र उनको दिवङ्गत आत्माको चिरशान्तिको कामना गर्दै उनीप्रतिको शब्द-श्रद्धाञ्जलिस्वरूप यो सानो लेख यहीँ बिसाउने अनुमति माग्दछु ।

✍

# देश हराउँदै गरेको याम र डायस्पोराहरूको बस्ती

*कृष्णचन्द्रसिंह प्रधान*

फुच्चे लाग्ने हिजोको त्रैमासिक *नेपाली* आज ५० वर्षको भइसकेछ ! साहित्यिक पत्रिकाले स्वर्णजयन्ती मनाउनु कठिन सम्झिने हाम्रो सन्दर्भमा यसलाई अहोभाग्य भन्दा हुन्छ । उपलब्धि मानेर मलाई पहिले दीर्घायु कामना गर्न देऊ !

तर आयोजकहरूले स्वर्णजयन्ती विशेषाङ्क भनेनन् । विशेष अङ्कबाटै अलङ्कृत गरेर स्वर्णजयन्तीलाई उपमित गर्ने विनम्रताको सराहना गर्छु । फेरि पनि यतिको कन्चुस्याइँ नगर्नु पर्ने हो कि ?

*नेपाली* त्रैमासिकसँग म सुरुदेखि नै जोडिएको रहेछु । अन्यथा अर्थ नलागेमा यसरी पनि बुझ्दा हुन्छ । उकालो लाग्दाको खुड्किलोमै दुवैले दुवैलाई अङ्गिकार गरेछौँ । मैले पाएको मदन पुरस्कार र त्रैमासिक *नेपाली*को अर्थात् त्यसको आगमन र मलाई पुरस्कार प्रदान गर्दाको साल, महिना एउटै-एउटै परेको दिनलाई संयोग मात्रै भनिन् । यो सुखद संयोग *नेपाली*को पानामा र अक्षरहरूमा अभिलेख भई अङ्कित छ ।

हामी त इतिहास भइसकेछौँ । एकादेशको कथा लाग्ने यामको संस्मरण जस्तो विचित्र बिम्ब सम्प्रेषित गर्छ यसले ।

२०० औँ अङ्कको यात्रा टेकेर *नेपाली*ले विगतको पुनर्लेखनदेखि वर्तमानलाई सँगाल्दै, पुरातात्त्विक पुँजीलाई अघि लाएर भोलिको निर्माणमा सहभागी रहेको साक्ष्य लाग्यो *नेपाली* पत्रिका । सुलक्षित गर्ने यस संवादलाई अहिले पनि निरन्तरता दिइरहेको छ । मचाहिँ त्यसपछिका दिनहरूमा सिर्जनारत रहेँ । त्यसैमा केन्द्रित हुन्छु, त्यसैद्वारा विस्तारित र त्यसैमा समर्पित म स्पन्दित जीवनका उन्मुक्तिमा शून्य फोड्दै हिँडिरहेँ । थाहा छ यो मेरो दुस्साहस थियो– मात्रै सपना । सपना त आकाङ्क्षाहरूको परिकल्पित दिनलाई न भन्छौँ ? अनेकौँ आशा मनमा साँचेर क्यै गरिरहेका हुन्छौँ, बोलिरहेका हुन्छौँ, भिडिरहेका हुन्छौँ । यी सबै हामी मानिस, उनीहरूको जीवन, विगत र

आगतसित सरोकार राख्ने निर्माणका प्रक्रियाहरू हुन् । अभ्यर्थनामा आगामी दिनमा उज्यालाहरू टिप्दै, उज्यालाहरू बाँड्दै हिँड्ने सिर्जना कति वाचाल देख्छु !

निचोड के भने इतिहास लाग्ने साक्ष्यलाई हामी मर्न दिँदैनौँ । यसलाई साँचिराख्ने पत्रिका आफैमा अभिलेख भइदिन्छ । यसले समयको अभिलेखन गर्छ, घटनाहरूको अभिलेखन गर्छ, इतिहासको अभिलेखन गर्छ, इतिहास बदल्ने र बाँच्ने प्रक्रियामा उत्सर्गित प्रयासहरू र सिर्जनाहरूको अभिलेखन गर्छ ।

सम्पादकले त्यसबेला भनेका रहेछन्- वर्षको डेढ सय पेजभन्दा बढी दिन मुस्किल पर्छ । फुच्चे पत्रिका भन्नाको मेरो आशयलाई यसले अर्थ्याउँछ । अगाडि भनेका छन् –

यतिभित्र अरनिको (वलबाहु) सँग न्युटन बात मार्न बसेको देखिने छन् भने कतै भानुभक्तसँग भास्कराचार्यले कुरा जोरेको फेला पर्नेछ । जङ्गबहादुरको साथी म्याडम क्युरी र कुलचन्द्रका साथमा कार्लमार्क्सलाई देख्दा धेरैलाई अचम्म लाग्नेछ ।

– २०१६ **कात्तिक, मङ्सिर र पुसको अङ्क**

यी अघिका विराट व्यक्तित्व हुन् । अबका अरनिको, न्युटन, भानुभक्त भास्कराचार्य, कुलचन्द्र, कार्लमार्क्सहरू हामीभित्रैबाट अवतरित हुनेछन् । तिनै र त्यस्तै भएर होइन अहिलेका भएर अविर्भूत हुने मनीषीहरूका एकाइसौँ शताब्दीका अनुहार देख्नेछौँ । अविष्यलाई यसरी पनि अभिलेख गर्छन् ।

त्यसको जिन्दगीमा एकफेरा त्यस्तै सानोतिनो हुरीबतास नआएको होइन । आशङ्कित भुमरीमा परेर मर्ने-बाँच्ने स्थिति खेप्नु पर्‍यो । त्यो सङ्कट टरेर गयो ।नत्र २०० औँ अङ्कको सँघारमा आइपुग्ने थिएनौँ । जिन्दगी सायद यसैको नाउँ हो । यो हेर्दा त्रैमासिक *नेपाली* र हामी एउटै रोगका बिरामी रहेछौँ भन्ने लाग्यो ।

अर्को शब्दमा भनूँ । *नेपाली* पत्रिका, नेपाली मानिस, नेपाली भेशभूषा, नेपाली देवी-देवताहरूभित्र देश, राष्ट्रियता विद्यमान नहुँदो हो त अरूबाट हामीले आफूलाई अलग्याउन सक्तैनथ्यौँ जस्तो अरू देश हामीभन्दा बेग्लै देखिन्छन् । त्यसकारण भिन्नै राष्ट्रियताको

परिचायक त हरएकको आफ्नो देश रहेछ नेपालीजस्तै भारतीय, अफ्रिकाली, चिनिया, बेलायती आदिले विशेषित भएर चिनिँदा रहेछौँ । अब त यो पनि कतिन्जेल रहने हो थाहा छैन ।

नेपालभित्रै नेपाल छ कि छैन खोज्नुपर्ने भइसक्यो । पहाड हेरेर खै, कहाँ नेपाल देख्न सक्छौँ ? जङ्गल हेरेर पनि नेपाल ठम्याउन सक्तैनौँ, तराई टेकेर पनि नेपाल यही हो भन्न सक्तैनौँ । यो पहाड, वन-जङ्गल, मधेसको समतल भूमि कहाँ छैन ? सबै उस्तै छन् । त्यही बोट-बिरुवा, त्यही मुस्कान, त्यही वागबगैंचा, बाढी-पहिरो, तिनै मान्छे, त्यस्तै हावापानी, जाडो जान्छ, गर्मी आउँछ, स्कूल जानेहरूको घुइँचो र अफिस धाउनेहरूको भ्याइ-नभ्याइ छ । सबै उस्तै । के हेरेर नेपाल भन्ने ? अफ्रिका वा पाकिस्तान भनेर छुट्याउने ?

हामी जापानमा छौँ– तिनीहरू कति प्रतिशत नेपाली हुन् थाहा छैन । नेपालमा भारतीय मूलकाहरू छन् । उनीहरू कति प्रतिशत नेपाली हुन्, कति प्रतिशत भारतीय कसले भन्ने ? यसरी कोही अमेरिकामा छौँ, कोही क्यानडामा छौँ, कोही बेलायतमा भने कति अस्ट्रेलियामा छौँ । त्यस्तै कोही कतारमा छौँ, कुवेतमा छौँ, मलेसिया, इराक, इरान, कोरिया, तिब्बत, साउदी अरेविया, हङकङ कहाँ छैनौँ ? त्यहाँ नेपाली भएर गएका हौँ कि कुल्ली, मजदुर, शिक्षक, ज्यामी विद्यार्थी भएर ? साँच्चि, नेपाली हुनाको अभिमान बोकेर जाने हो भने सायद कतै टिक्दैनौँ । भुटानबाट नेपालीहरू लखेटिएका हुन् त्यहाँका नागरिक होइन । असामबाट पनि नेपालीहरू निस्कासित भए, गोठालाहरू होइन ।

लाग्छ हामी सबै डायस्पोरा हौँ । संसारका सबै बासिन्दाहरू डायस्पोरा भइसके ।

हामी नेपाली भएर विदेशिएका हुन्छौँ । तर विदेशमा नेपाली भई बस्ने हो भने नेपालमै बसे भैगो, किन विदेशिने ? कसैले तर्क गर्न सक्छ स्वदेशमै पनि अङ्ग्रेज हुन सक्छौँ (भइदिएका छन्) भने अङ्ग्रेजको मुलुकमा नेपाली भई किन बस्न सक्तैनौँ ? यसो भन्नेहरू पनि होलान् । तर्क जति गर्दा पनि हुन्छ । म तर्कातीत कुराको व्यावहारिक निदान खोज्दै छु । यो नेपालको समस्या मात्रै होइन,

नेपालीहरूसँग गाँसिएको प्रश्न मात्रै पनि होइन । संसारभरि देश फैलिएजस्तो देशभरि विश्व नभएको कुनै देश छैन । जसलाई हामी राजधानी भन्छौँ, यो काठमाडौँलाई हेर, यो त १४ अञ्चल, ७५ वटै जिल्लाको सिङ्गो नेपाल भइसक्यो ।

तर कुरा यही होइन, यति मात्रै पनि होइन । हामी त भोक बोकेर कुवेत जान्छौँ, कोरिया जान्छौँ । इराक जान्छौँ, इरान जान्छौँ । जापान जान्छौँ, अमेरिका, बेलायत, क्यानाडा जान्छौँ । थाहा छ त्यहाँ जानेहरूको आफ्नै पीडा होला, केही उनीहरूका अभाव बोल्दो हो, केही बेरोजगारी, असुविधाहरूको चर्को आग्रह हुँदो हो । अथवा कोही महत्त्वाकाङ्क्षी होलान्, केही सुखद भविष्य, केही सुन्दर सपना देखिरहेका होलान् । मिल्दो हावापानीको अभावमा यहाँ तिनीहरू हुर्कनै सकेनन् होलान् । यहाँ तिनीहरूलाई मौलाउने अनुकूल वातावरण छैन होला, चाहिने मलजल, अलिकता पसिना बगाउने ठाउँ, अलिकता काम गर्ने मेलोमेसो, पढ्ने सुविधा क्यै पनि त छैन। यहाँ सपना देख्नै हुन्न गेहेन्द्रशमशेरले जस्तो । यहाँ भविष्य अटाउने आकाशै छैन म्यानमारमा जस्तो । जापानमा जाने भुइँचालो वा पाकिस्तानमा भइरहने कूजस्तो बाटाभरि छ्यापछ्याप्ती दासढुङ्गा छन् । अनि अनुकूलको ठाउँ खोज्दै विदेश नगएर के गरून् ? अब त जो जान्छन् केवल उनीहरूको विवशता भइरहेको छैन । (विवशता त कसको आ-आफ्नो छैन ?) जागिरेहरू गइरहेका छन्, हुनेखानेहरू गइरहेका छन्, विद्वान्-विदुषीहरू गइरहेका छन् एक ठाउँबाट अर्को ठाउँ, एक देशबाट अर्को देश, एउटा महाद्वीपबाट अर्को महाद्वीप । मानौँ सबै उसकै देश हो, उनीहरूकै रैथाने भूमि । सुरक्षित स्थानको खोजीमा आजका हामीहरू पनि डायस्पोरा भएछौँ – त्यसरी नै हिँडेका छौँ, त्यहीँ बसिदिएका छौँ ।

भनौँ प्रत्येक देशभित्र अरू देश बसालेर हामी एउटा अर्के संसार रचिरहेका छौँ । देशहरूको कोलाज लाग्ने देश र सहरहरू डायस्पोरियनहरूको बस्तीजस्तो छ । बेग्लै रङ्ग, अनेक अनुहार, भिन्न भिन्नै भाषा बोल्ने मानिसहरूको बाक्लो उपस्थितिमा उनीहरूको देश हराउँदै छ, हामी हराउँदै छौँ । बेग्लै जाति, धर्म, देश, संस्कृतिका हामी मानिस तिनीहरूकै विराट सरोवरीय विम्बमा तिमीले

आफूलाई देख्नुपर्ने छ, मैले आफूलाई देख्नुपर्ने छ, मैले आफूलाई देख्नुपर्ने छ ।

देश सम्झेर रूनेहरू त अघाएकाहरू हुन्। कहिले पो उनीहरूलाई देश दुख्छ, अभाव दुख्छ। भोकाहरूले त देश कहिल्यै देख्दैनन्। कहाँ राष्ट्रियता, स्वाभिमानका कुरा गरी हिँडोस् ? नत्र कोही विदेशिने थिएनन्, हामी विदेशिने थिएनौँ । जब देश दुख्न थाल्छ आगो भइदिन्छौँ। डढेलो भई फैलिन्छौँ। मानौँ एउटा उल्कापात आइलाग्दै छ । क्रान्ति, विद्रोह यसैलाई त भनेका हुन् ।

पछि त देश दुखेर रुनेहरू पनि हुने छैनन् । मेरो देश भन्ने हामी अन्यत्र लागिसकेका हुन्छौँ । विदेशीहरू आफ्नो मुलुकमा छिरिसकेका हुन्छन् । बसाइँ सर्नेहरूको यस भीडभाडमा देशहरू त डायस्पोराहरूको बस्ती भइसक्छ । अनि को, कसका निम्ति, किन रुने ? केका निम्ति रुने ?

लाग्छ देशको अवधारणा बदलिँदै छ। यसको सीमा अब त्यही रहिरहँदैन। त्यहाँका मानिसलाई त्यहींको देशले चिन्ने छैनन्। जहाँका हामी हौँ त्यस देशका पनि हुने छैनौँ । त्यसैतिर प्रस्थान गर्दै छौँ सायद हामी, मानिसहरू पनि, देशहरू पनि ।

एउटा कुरा । यो अभाव, बेरोजगारीहरू भए अथवा आजका युवाहरूको इच्छा र मानिसहरूको विदेश पलायनसित त्रैमासिक *नेपाली*को के सम्बन्ध छ र किन यो अप्रासङ्गिक अनर्थ गर्दै छु? होइन प्रसङ्ग छ। यसले वर्तमान अन्योलको स्थितिलाई निर्देशित गर्छ। अरू भन्छु कति सङ्गीन छ? कसैसित कसैको सम्बन्ध नरहेजस्तो अनावद्ध छौँ । आफ्नै विरोधमा अराजक भइदिएका छौँ र देशविहीन देश अनुहारभरि पोतेर देशान्तर छरिएका छौँ । बाँच्नुभन्दा विकल्प नरहेको निरर्थकता बाँचेर पनि यसैलाई प्राप्ति ठान्नुपर्ने समयका हामी कति असुरक्षित छौँ र गैर लाग्छौँ मानिसकै बस्तीमा हामी मानिस भएर पनि ?

मर्यादाको अर्थ रहेन मूल्य खोजेर अरू अपमानित हुनु पनि चाहेनौँ । इतिहास जे-जस्तो रहे पनि आफैबाट परास्त हामी मानिसहरू विना प्रतिशोध बाँच्ने रहरमा झुन्डिएर थालेको यो जीवन

र पछिका दिनलाई यतिकै साँचिराख्न सके पनि पुग्यो, सन्तोष गर्ने भइसक्यौँ ।

वर्तमान जीवनलाई अल्झाइराख्ने मानिसहरूको यो यथार्थ हो । त्रैमासिक *नेपाली* यसप्रति उदासीन नै नरहेको कारण त्यो सुरक्षा खोजिरहेछ, सङ्ग्रहणीय विगत, संस्कृति र त्यसका टिपोटहरूको जगेर्ना खोजिरहेछ, अद्भुत लाग्ने विद्वत्ता, प्रतिभाहरूको पुनर्निर्माणको अपेक्षा गर्छ । बिथोलिएको वर्तमान होइन, भविष्य रच्न आतुर छ । भिन्नै विधा र विषयहरूलाई आफूभित्र अनुबन्धित गरेर एउटा कोलाज सिर्जना गरेको छ यसले । जस्तो इतिहास, शोधखोज समीक्षकीय रचना, सङ्ग्रहणीय विगत, सिर्जनात्मकता, वैज्ञानिक, गणीतीय सन्धान इत्यादि । शालीन समाज, स्वस्थ जीवन, स्थिरताका लागि अनपेक्षित नहुनेहरूको कोलाजभित्र कसैका प्रति प्रतिबद्ध छैन। अनाबद्ध विविधतामा यसले आफूलाई विशेषित गरेको छ । त्यसैले यो साहित्य नै होइन, इतिहास पनि होइन, विज्ञानको पछि पनि लाग्दैन। विगतमा झुन्डिएर पनि बसेन । आगतकै पछि पनि लागि रहेन । एउटा कोलाज भइदिएको छ– सङ्ग्रहणीय, अनुसन्धेय, ऐतिहासिक सिर्जनात्मक र सूचनाकेन्द्री पनि । नेपाली भएर बाँच्ने निष्ठा र जीवनको मोहले यसलाई गैर नेपाली हुन दिँदैन ।

आफ्नै मुलुकमा डायस्पोरा भई उनीहरूको जिन्दगी जिउनु परेको विडम्बना *नेपाली*को छैन। देश क्रमश: हराउँदै गइरहेको यामममा हामीभित्रको मानिसको अन्त्य नभइदिए पनि कम्ती सन्तोष लाग्ने छैन ।

# हाम्रा पुर्खा पराजुली र हामी

*– कृष्णप्रसाद पराजुली*

जुनसुकै जाति तथा थरहरूका निम्ति पुर्खाहरूको खोजी गर्नु र तिनको नालीबेली पहिल्याउनु राम्रो, रमाइलो र चासोपर्दो हुन्छ। नत्र बाबुबाजेलाई नै बिर्सँदै जाने छोराछोरी र नातिनातिनाहरू थपिँदै जान्छन्। आफ्नै तीनपुस्ते पनि नसम्झिने वा हेक्कै नरहने स्थिति आउँछ। त्यसैले पुर्खा कोको थिए, कहाँबाट आए, कहाँकहाँ बसे आदि कुराको खोजीनीति सबैका निम्ति महत्त्वपूर्ण पक्ष हो।

मानवसमूहमा हुन त जुनसुकै पुर्खाहरू सबै आफ्ना हुन्, पराई कोही छैनन्– **नसम्झ अरूलाई हुन् पराई/सम्झे पराई कोही छैन।** नेपाली हाम्रा पुर्खा हुन्; अझ चिन्न सके मानवजातिको एक-एक समुदाय नै पुर्खा हो। तैपनि वंशवृक्ष वा पुर्ख्यौली सन्तानको लहरो त हुँदो रहेछ नै। यस परिप्रेक्ष्यमा म हाम्रा पुर्खा पराजुलीलाई नियाल्ने प्रयास गर्दै आफ्ना केही अनुभव पोख्न लागिरहेछु।

पराजुली थरको गोत्र हो कौडिन्य (सं. कौण्डिन्य) अर्थात् परम्परागत मान्यताअनुसार पराजुली कौडिन्य ऋषिका सन्तति रहेछन्। यस गोत्रका कौडिण्य, वशिष्ठ र मैत्रावरुण तीन प्रवर छन्। कौण्डिण्य गोत्रीय ब्राह्मण बन्धु वि. सं. १२४८ देखि १३२७ का बीचमा खसभूमिमा प्रवेश गरेको उल्लेख पाइन्छ। (डा. व्रतराज आचार्य, 'कौण्डिन्य महावंश : केही सम्भावना, केही चुनौती', प्रारम्भ : *पराजुली यज्ञान्त स्मारिका,* २.५७-६२, पृ. ८५)।

कौडिण्य गोत्र हुने थर हुन्– आचार्य (गर्ग गोत्रका पनि हुन्छन्), पराजुली, न्यौपाने, पनेरू, प्याकुरेल, बन्जारा, बाँस्कोटा, सत्याल, सापकोटा, गैरीपिप्ली, त्रिताल, मरासिनी, हमाल आदि। वाग्ले थापा र लकाईं खड्काहरूको गोत्र पनि कौडिण्य नै हो। अहिले पराजुलीहरू नेपालभित्र छरिएका मात्र होइनन्, भारतीय भूभागमा पश्चिम बङ्गालका पार्वत्य क्षेत्र, सिक्किम, आसाम, मेघालय आदि भेगसम्म र अझ उता बर्मा, हङकङ र ब्रुनाइसम्मको बस्तीहरूमा समेत पुगेर घुमेका-बसेका छन्। तर जहाँ पुगे पनि खसबाहुनका

अरू कतिपय थरजस्तै पहिले पराजुली थर नेपालमै पश्चिमी भेगमा उब्जेको अनुमान प्रामाणिक रूपमा सिद्ध हुन्छ ।

## पुर्ख्यौली थलो खोज्दै

अहिले नेपालका हरेक थरको पुर्ख्यौलीको खोजबिन भइरहेको छ । विभिन्न थरका व्यक्ति आआफ्ना वंशावली तयार गर्ने सिलसिलामा लागेका छन् र लाग्दै पनि छन् । पराजुली वंश र त्यसका लहराको पनि खोजी हुँदै छ । त्यस क्रममा पराजुली थर कसरी बन्यो भन्नेबारे विभिन्न दृष्टिकोण पाइन्छन् । तिनको उल्लेख गरिहालूँ ।

(१) रमापति पराजुलीद्वारा जनाइएअनुसार जुम्लाको पाराञ्जली वा पाराञ्जल भन्ने ठाउँमा बसोबास गर्ने हुनाले ती ठाउँको नामबाट वा जुम्लाकै पारा गाउँमा बसोबास गरेका हुनाले पाराजुम्ली पाराका जुम्लेली भन्दाभन्दै पराजुली थर बनेको हो भन्ने मत पनि रहिआएको छ ।

***–रमापति पराजुली***

*'पराजुली थर– एक संक्षिप्त परिचय',*

*प्रारम्भ : पराजुली समाज– नेपाल, पृ. ११*

(२) प्रा. ठाकुर पराजुलीले उल्लेख गरेअनुसार बुद्धिसागर पराजुलीको कथनमा 'परा' को अर्थ पराशङ्कर र तिनको 'जुटी' जुरो अर्थात् भगवान् शङ्करको जटाबाट बनेको मुकुटजस्तो जुरो भन्ने अर्थमा 'पराजुली' भन्ने नाम रहेको पाइन्छ । अपभ्रंश हुँदै जुली भएर 'पराजुली' हुन आएको हो ।

*प्रा. ठाकुर पराजुली*

*'जनश्रुति', प्रयास : १/१, २०५५ असार, पृ. २४*

(३) त्यस्तै डा. विष्णुराज आत्रेयले पराजुली थर बनेको सम्बन्धमा चर्चा गर्दा न्यायशास्त्रका विशिष्ट विद्वान् पं. गङ्गाधर पराजुलीले व्यक्त गरेको मतको उल्लेख गरेका छन् । सोअनुसार कौडिण्य गोत्रका एक जना पुर्खा अत्यन्त दानी थिए । यिनको अँजुली पर अर्थात् अर्कालाई दिने भनेपछि सधैँ खुला हुन्थे । सधैँ मुक्त अँजुली अर्थात्

> पराईका निम्ति सधैँ अञ्जली खोल्ने भएकाले पर+अञ्जलीमा दीर्घ सन्धि भई पराञ्जली भयो र त्यही रूप पराजुली भई पराजुली थर बनेको हो ।
>
> *–रमापति पराजुली*
> *पूर्ववत्, पृ. ३*

प्राचीन भइसकेका कुरालाई अहिलेका आँखाले हेरेर यसै हो भनी ठोकुवा गर्न गाऱ्हो पर्छ । हुन त मैले नै पनि भारतको प्रवासकालमा पराजुलीको अर्थ सोध्दा अरूका लागि अँजुली खोल्ने हो भनेर बुज्रुक्याइँ छाँटेको छु । 'पाराजुली' जस्ता शब्दसँग पनि पराजुलीको सम्बन्ध नहोला भन्न सकिन्न, तर अन्य थरहरूको अध्ययन गर्दा थातबासबाटै थर रहेको बढी मिल्दोजुल्दो देखिएको छ । थातबासकै कारण त्यही ठाउँकै नामबाट चिनाउने गरी उपनाम चलाइएको मैले देखेको छु । कलकत्तामा बसेर आएकोलाई 'कलकत्ते' र सापिङबाट बसाइँ सर्नेलाई 'सापिङ्गे', कानपुरबाट आउनेलाई 'कानपुरे' भनेको सुन्ने कान आफ्नै हुन् । बनारसमा बसेर आउनेलाई 'बनारसीबाबू' भनिने चलन पनि नयाँ होइन । विद्वान्हरूको तर्कको तराजु पनि यतैपट्टि ढल्केको पाइन्छ ।

हुन पनि नेपालीहरूका धेरै थर ठाम र कामका आधारमा रहँदै आएका छन् । खास गरी खसबाहुनहरूमा जुन ठाउँमा बस्यो त्यही ठाउँअनुसार थर हुने प्रचलन निकै भएको देखिन्छ, अथवा यसो भनूँ– यी धेरै थर निवासी वा बासिन्दाका अर्थमा रहेका पाइन्छन् । तल अङ्कित उदाहरणले यस कुरालाई अझै पुष्टि गर्छन्–

| | |
|---|---|
| पौडी (गढवाल) | = पौडयालय > पौडयाल > पौडेल |
| सती (कैलाली) | = सत्याल > सत्तेल |
| अर्जी (अर्जेलबाडा) | = अर्ज्याल > अर्जेल |
| बड > बर | = बडाल/बराल |
| बाँसी | = बस्याल |
| भुर्ते (खोला/गाउँ) | = भुत्र्याल > भुर्तेल |
| मैदी | = मैदाली > मैनाली |
| देवकोट | = देवकोटा |

प्याकुरी (प्याकुरी बाडा) = प्याकुऱ्याल > प्याकुरेल

पराजुल (स्थान, खोला) = पराजुली

यस्ता थरहरू केही वर्तमान नेपालभन्दा बाहिरदेखि नै रहेको पाइन्छ भने केही नेपालभित्रकै स्थानबाट रहेको देखिन्छ; जस्तै पौडी (गढवाल), पराजुल (दैलेख), सती (कैलाली) आदि यसका उदाहरण हुन् । तिनमा कुनै सन्धिप्रक्रिया-द्वारा आलय (घर) 'आल > ऐल' आदि जोडिँदै र जोल्टिँदै पौडचाल/पौडेल, अर्ज्याल/अर्जेल, सत्याल/सत्तेल*, प्याकुऱ्याल/प्याकुरेल थर बनेका छन् भने कुनैचाहिँ 'आ/ई/ए' प्रत्यय गाँसिएर (देवकोटा, पराजुली, न्यौपाने आदि थर) भएका देखिन्छन् । यसै क्रममा 'पराजुली' थरबारे केही विस्तारमा चर्चा गर्नु प्रासङ्गिक हुन्छ ।

धेरै अघि खसराज्यका शासनकालमा कालीकोट (हाल मध्य-पश्चिमाञ्चलको कर्णाली अञ्चलमा पर्ने जिल्ला) मा कौडिण्यगोत्री चार भाइ आचार्य ब्राह्मण रहेछन्– आलु, कोलु, दिलु र तिलु । यी चार भाइका सन्ततिमा आलुका आचार्य नै रहे, कोलुका न्यौपाने, दिलुका पराजुली र तिलुका पराजुलीमा रूपान्तरित भएका बुझिन्छन् । उनीहरूले दैलेख (हाल मध्यपश्चिमाञ्चलकै भेरी अञ्चलमा पर्ने जिल्ला) मा जग्गा बिर्ता पाए । सो बिर्ता पाएपछि बसोबास हुँदै जाँदा ती ठाउँ तलीपराजुल, मलीपराजुल, लेकपराजुल, डाँडापराजुल र औलपराजुलका नामले चिनिन थाले । यी पाँचवटा पराजुलमध्ये अहिले डाँडापराजुल र औलपराजुल सुर्खेत जिल्लामा पर्छन् भने बाँकी दैलेख जिल्लामै रहेका छन् । उल्लिखित सबै स्थानमा कमबेसी पराजुलीहरूको बसोबास छँदै छ (साहित्यकारहरू पूर्णप्रकाश नेपाल 'यात्री' र जीवेन्द्रदेव गिरीबाट प्राप्त जानकारीका आधारमा) । दैलेखमा नै 'पराजुल' नाउँको खोला रहेको र त्यही खोलाका दायाँबायाँ खेतीपाती गर्ने गरेको पनि थाहा हुन्छ । यसरी बस्तुभाउ पालेर घरजम धान्दै लेकबेसी गर्ने, पराजुलस्थलमा बस्ने र पराजुल खोलानजिकै खेतीपाती पनि गर्ने कौडिण्य गोत्रका एक थरी पुर्खाहरू 'पराजुली' थरले परिचित हुँदै आएको तथ्य छर्लङ्गिन्छ ।

---

* *'सत्यपाल'बाट 'सत्याल, सत्तेल' भएको पनि बताइन्छ ।*

दैलेख रमाइलो थियो, सुन्दर थियो। पूर्णप्रकाश यात्री भन्छन्– "…. तेस्रो मैले बिर्सन नसकेको ठाउँ दैलेख हो। दैलेखको वनजङ्गल, हरियालीको मादकताले ज्यादै लट्ठ्याउँछ। सधैँभरि हरियाली हुने हुँदा कोइलीको को हो, को हो पनि सधैँ सुन्न पाइन्छ; एउटै जङ्गल सल्ला, साल, बाँझ र गुराँस भएपछि जङ्गल कहिल्यै सिक्रो नहुँदो रहेछ। दैलेखमा कोइलीलाई दैलेखी केटी पनि भनिन्छ" (वार्तिक पारायण : २०५७ : १७)। वि. सं. १४०० तिर दैलेखबाट केही वा कुनै भाइ पराजुली कास्की पोखरा (हालको गण्डकी अञ्चल) मा आएको र यता पनि तिनले बिर्ता पाएको बुझिन्छ, तर कास्की पोखरा आउने पराजुली को हुन्? तिनको नामनामेसी थाहा पाउन सकिएको छैन। वि. सं. १६०० तिर ती पराजुलीका रागीनासमा बस्ने सात भाइ छोराचाहिँ निम्न प्रकार रहेछन्–

१. परशुराम पाध्या (जेठा)

२. जसु पाध्या (माहिला)

३. जैमनि (जयमनि) पाध्या (साहिँला)

४. जैभद्र (जयभद्र) पाध्या (काहिँला)

५. श्रीमन्त/समन्त पाध्या (ठाहिँला)

६. सन्तकुमार पाध्या (ठूलो कान्छा)

७. रामप्रसाद पाध्या (सानो कान्छा)

## ज्याम्दीको बसोबास

माथि दिइएका सात भाइमध्ये ठाहिँला भाइ समन्त पाध्याले (श्रीमन्त पनि भनिन्छ, तर बढी 'समन्त' नै वा सेवन्तसमेत सुनिएको तथा तपसमन्त नाम पनि रहेको) वि. सं. १६९१ मा काठमाडौँका राजा सदाशिव मल्लबाट मकर सङ्क्रान्ति (माघेसङ्क्रान्ति) का अवसरमा इन्द्रावती र सुनकोसीको सङ्गममा अवस्थित दोलालघाटमा स्नान गर्न आउँदा रामपुर ज्याम्दी बिर्ता पाएका रहेछन्। वंशजबाट प्राप्त जानकारीका आधारमा ज्याम्दीको जग्गा ठीकै हुनाले त्यसपछि फेरि पाँचखाल उपत्यकाको दक्षिणी भेग (भमरकोटको एक खण्ड बेसी) मा पनि कृषियोग्य जमिन बिर्ता पाएको ज्ञात हुन्छ।

के पनि सुनिन्छ भने समन्त पाध्याले निकै वर्ष विवाह नगरी ब्रह्मचारी जीवन बिताएका थिए। उनी दोलालघाटमा बसेर नित्य इन्द्रावती र सुनकोसीको सङ्गममा स्नान गरी दोलालेश्वर महादेवको दर्शन, आराधना गर्दा रहेछन्। राजाबाट सत्कर्मी ब्राह्मणको खोजी गराउँदा उनै फेला परे। राजाले बिर्तादान दिई दुई जना बलिया भरियालाई बोक्न लगाएर पराजुली समन्त पाध्यालाई दोलालघाटबाट ज्याम्दी पुऱ्याइदिएका थिए भनिन्छ।

मल्ल राजाबाट बिर्ता दिँदा ब्राह्मणको उमेर निकै भइसकेको थियो (कोही साठी वर्ष भन्छन्, कोही असी वर्ष पनि भन्छन्)। जे होस्, तपस्वी ब्राह्मण खाइलाग्दा, हृष्टपुष्ट थिए। त्यसपछि उनले विवाह गरे। उनका सन्तान एक भाइ छोरा दुर्गादास भए। दुर्गादासका पनि एक भाइ नै छोरा सन्तनु भए। उनै सन्तनुदेखि ज्याम्दीका पराजुलीको वंश फैलिन थाल्यो र कालान्तरमा त्यसले निकै ठूलो फेट ओगट्न पुग्यो।

समन्त पाध्याका नाति सन्तनुका पाँच भाइ छोरा भएछन्– गङ्गाराम, विश्वेश्वर, शिवराम, मनहरि र कमलापति। यसपछि पराजुलीहरू ज्याम्दीमा मात्र नबसी पूर्वी भेग र मध्यभेगतिर बसाइँ सर्दै, फैलँदै गएका हुन्। कान्छा भाइ कमलापतिका छोरा शर्मानन्द हुन्।* शर्मानन्दका चार भाइ छोरा भए– जगन्नाथ, कलानन्द, धरणीधर र बालकृष्ण। यहाँदेखि खोजीपस्ता वंशावलीको धेरथोर हाँगो फेला पनि पर्छ। हामी यसै लहराका हौँ।

उपर्युक्त लहराकै पराजुलीमध्ये एक भाइ ज्याम्दीबाट भमरकोट आई बसेका हुन्। ज्याम्दीबाट आएकाले भमरकोटे पराजुलीलाई 'ज्याम्देल/ज्याम्देली' भनेको पाइन्छ भने अन्यत्र (मकवानपुर आदि र अरू भेगमा) जानेलाई पनि 'ज्याम्देली' भन्ने गरिएको सुनिन्छ। ज्याम्दी रामपुरमा हाम्रो भागको जग्गाजमिन पछिसम्म छँदै थियो। पारि भनूँ वा अलि टाढै (बिहानभरिको बाटो) भएकाले बाबुका पालामा बेचिएको हो।

---

* *'कसैकसैले शर्मानन्दलाई मनहरिका छोरा हुन् भनेको पनि सुनिन्छ।*

## हाम्रो वंशरेखा

मैले जानेको, सोधपुछ गरेको र आफूसँग गाँसिएको पराजुलीको वंशवृक्ष निम्नाङ्कित तालिकाअनुसार छ–



पूर्वतिर लाग्ने जति पनि पराजुलीहरू धेरैजसो ज्याम्दीबाटै पूर्वतिर गएका देखिन्छन्। उनीहरू वि. सं. लगभग १८०० देखि नै बसाइँ सर्दै पूर्वतिर खोटाङ, भोजपुर, तेऱ्हथुम, ताप्लेजुङ उत्तरतिर सिपा, सिन्धु; दक्षिणतिर मकवानपुर र पश्चिमतिर काठमाडौँ, नाला आदि स्थानमा गएको बुझिन्छ। कुन-कुन भाइ ज्याम्दीमा बसे, कुन-कुन भाइ बसाइँ सर्दै अन्यत्र गए– केही थाहा पाइन्छ, केही अझै थाहा पाउन सकिएको छैन। सन्तनुका पाँच भाइमध्ये हाल जेठा गङ्गारामका सन्तान भोजपुर र साहिँला पशुरामका सन्तान मोरङमा रहेको थाहा हुन्छ। आफू पनि गाँसिएको र भमरकोटे पराजुलीका विषयमा जानेको केही विवरण माथिको तालिकामा दिइसकिएकै छ। यसबाहेक प्रामाणिक अन्वेषण नभएसम्म केही भनिहाल्न सकिने स्थिति छैन।

## भमरकोटे पराजुली

हामी भमरकोटका पराजुली हौँ। भमरकोट धुलिखेलदेखि पर र पाँचखाल उपत्यका माथि पर्ने प्रसिद्ध बस्ती हो। कुनै समय यो ठाउँ गाउँले सानो राज्य पनि रहेछ। गोरखामा चेपेबाट दौडेर जो लिगलिगमा पहिले पुग्यो उही राजा हुन्थ्यो, यहाँचाहिँ मैदानमा जसले सबैलाई पछार्न सक्थ्यो उही राजा हुन्थ्यो रे। पुराना र नयाँ लोकगीतमा समेत भमरकोटको प्रसङ्ग आउँछन्। अहिले भमरकोट उत्तर-पूर्व ठूलो फाँट भएको सुन्दर स्थलका रूपमा प्रसिद्ध छ परिचित पनि छ।

ज्याम्दी रामपुरचाहिँ भमरकोटबाट उत्तर अर्को प्रमुख बस्ती मण्डनको शृङ्खलामा छ। म सानैमा (बाऱ्ह-तेऱ्ह वर्षको छँदा) ज्याम्दी रामपुर गएको हुँ। ज्याम्दी रामपुरमा पछिसम्म हाम्रो भागको जग्गा छँदै थियो र त्यताबाट आयस्ता पनि आउने गर्थ्यो। म ज्याम्दीमा पुग्दा केश पाकिसकेका वृद्धहरू मलाई 'नाति' भन्थे र अत्यन्त माया देखाउँथे। उनीहरूसँग धेरै अनुभव थियो, ज्ञान थियो। तर त्यसबेला खोजीनीति गर्ने आफ्नो चेतना नै पलाएन। बाबु, कान्छा हजुरबा आदिबाट पनि केही थाहा पाउन सक्थेँ। त्यो चासो पनि त्यत्तिकै रह्यो। मैले एउटा वंशसूची दाजुमार्फत प्राप्त गरेको

थिएँ। आफ्ना अनेक अलमल्याई, खटाई र झ्याउला-झमेलाका चापमा सो टुक्रे कागत कहाँ हरायो कहाँ, फेलै पार्न सकिनँ। अहिले मलाई थकथकी लागिरहेछ।

ज्याम्दीबाट भमरकोट आउने पराजुलीहरूमा हाम्रो लहराको कुलदेउताको पूजाआजा मैले जानेदेखि भमरकोटमा नै हुँदै आएको देखेको छु। काठमाडौँमा कोपुन्डोल, रामशाहपथ (पुतलीसडक) सुनगाभाबस्ती, बाँसबारी, सानेपा, इन्द्राणी, शान्तिबस्ती (ढुङ्गाखानी) आदि ठाउँमा बस्ने हाम्रा दाजुभाइहरू पनि सो पूजाआजामा उतै जान्छन्। हाम्रा पितापुर्खा को थिए र के थिए केही अंशमा मात्र खोजबिन भएको छ, अरू छैन। पछि अरू विस्तृत रूपमा प्रकाशमा आउला नै।

अहिले हामी निकै बाक्ला भइसकेका छौँ। यस लहरामा साहित्यकार तथा प्राध्यापनरत व्यक्तित्व छन्, डाक्टर छन्, न्यायाधीश छन् र आआफ्ना क्षेत्रमा प्रतिष्ठित तहमा पुगेका छन्। अस्तिका दैलेखे र पोखरेली पराजुली आज काठमाडौँलीसमेत हुँदै चर्चाका शिखरमा पुगिरहेका छन्। उनीहरूले राष्ट्रिय एवं अन्तर्देशीय र अन्तर्राष्ट्रिय क्षेत्रसम्म पुगेर पनि आफ्ना छवि फिँजाइरहेको देख्ता, सुन्दा अनुभव गर्दा भेरी सुसाएजस्तै लाग्छ, गण्डकी छङछङिएजस्तै लाग्छ र कोसी लहरिएजस्तै लाग्छ।

पराजुली थरबारे मेरा एकाध रमाइला प्रसङ्ग पनि सम्झनामा आउँछन्। पहिले-पहिले जात मात्र हुँदा पराजुलीहरू पनि उपाध्याय वा त्यसको सट्टा उपाध्या/पाध्या आदि भन्ने-लेख्ने गर्थे र 'पराजुली' चाहिँ गौण नै रहने गर्थ्यो। नेपालमा पछि (खास गरी २००७ सालयता) थर नै प्रयोगमा ल्याइने र जातको उपाधि नजनाइने गरिएपछि थर प्रशस्त प्रचलित हुँदै आएको हो। यसरी नै 'कृष्णप्रसाद उपाध्याय/उपाध्या' पनि 'कृष्णप्रसाद पराजुली' भएको थियो। बनारस, दिल्लीतिर बस्ता मलाई त्यहाँका बासिन्दा धेरैले 'पराजुली' नै भने, कसै-कसैले चाहिँ पराञ्जुली, प्राञ्जली, प्राजुली' आदि पनि भन्ने-लेख्ने गर्थे। एकपल्ट मलाई बनारसमा विवाहको निमन्त्रणापत्र आउँदा 'पतञ्जलि' सम्म पनि लेखिएर आएको थियो।

वास्तवमा कतिवटा भारतीय मित्रलाई नेपालभित्र उब्जेको थर अनौठो-नौलो लाग्दो रहेछ। उनीहरूमा पराजुली थरबारे उत्सुकता र जिज्ञासा रहेको मैले पाएको छु। दुई-चार जनाले त “सुनने मैं अच्छा लगता है। ये पराजुली कौन है, क्या होता है?” भनेर सोध्ने पनि गर्थे। म आफूले जाने-बुझेसम्मको जवाफ दिन्थेँ। आफ्नो वंशको नालीबेली त्यस वंशका सन्ततिहरूको थाहा पाउने कुरा त छँदै छ, देशभित्र र देशबाहिरका व्यक्तिहरूमा पनि यस्ता कुरालाई अवगत गराउनु र सामग्री उपलब्ध गराउनु आवश्यक भएको कुरा यस सन्दर्भमा स्मरणीय हुन्छ।

हिजोआज वंशावली तयार पार्ने एककिसिमले होड नै चलेको छ। कतिपय थरका वंशावली प्रकाशित पनि भइसकेका छन्। यस सन्दर्भमा पराजुलीहरूको वंशावली तयार होस् र ऐतिहासिक महत्त्वपूर्ण कुरादेखि वर्तमानकालिक गौरवमय वैशिष्टचसम्मको परम्परा जोडियोस् भन्ने चासो म आफूमा पनि छ। आफ्नै खलकलाई पनि चिन्न नसक्ने स्थिति नहोस् र एउटा ठूलो परिवार ओझेल नपरोस् भन्ने दृष्टिले पनि मैले काभ्रेपलान्चोकमा भमरकोटका र काठमाडौँका पराजुली दाजुभाइसँग कुराकानी गर्दै आएको हुँ। वंशावली तयार गर्ने पृष्ठभूमिका निम्ति विराटनगर मोरङका गोविन्दप्रसाद पराजुली काठमाडौँ आउँदा ज्याम्देली पराजुलीलाई एउटा चिठी लेखेको थिएँ र यो गौरवपूर्ण कुरा हो, सहयोग गर्नुपर्छ भनेको थिएँ। त्यसरी नै यसप्रति निकै चासो लिने भोजपुरे भाइ कुलप्रसाद पराजुलीसँग कुराकानी, सम्पर्क भइरहेको छ। बर्सातमा सुनसरीका देवीप्रसाद पराजुली पनि तल्लीनता लिएर काठमाडौँ आएका थिए। निकै अघिदेखि मैले आफ्ना दाजुभाइ, काठमाडौँ कोटेश्वरतिरका केही पराजुली बन्धु आदिसँग कुरा चलाउँदै आएको हुँ। पूर्वमा मोरङ, सुनसरी, झापा र पश्चिममा दैलेखतिर पनि यो चासो छ भन्ने सुनिन्छ-बुझिन्छ, तर कतैबाट सक्रियतासाथ लाग्ने आधारभूत अङ्ग देखिएको थिएन। अहिले राष्ट्रिय पराजुली सेवासमाज तयारी समिति बन्यो र पराजुली समाज– नेपालको गठन भइसकेको छ। त्यसमा म पनि सल्लाहकार छु। यस्तै सक्षम समितिद्वारा काम गरिएपछि केही त होला नै (काम भइरहेकै पनि छ।) कुनै पनि अनुष्ठान कटिबद्धता, निरन्तरता र लगनशीलताले नै पूर्ण हुन्छ।

मेरो आफ्नै व्यस्तता, शारीरिक स्थिति र स्वास्थ्यका कारणले पहिलेजस्तो खट्न सक्तिनँ, तर सल्लाह दिन सक्छु। केही सहयोग दिन र जुटाउन सक्छु। त्यसैले अन्तमा के भन्न चाहन्छु भने पराजुलीबन्धु हो, पराजुलीहरूको एउटा आधिकारिक वंशावली ग्रन्थ आउनुपर्छ। आफ्नो गरिमा कायम गर्न तयार हुनुहोस्।

## आचार्यसँगको शृङ्खला

पराजुलीका वंशको खोज गर्दै र आफ्नो प्रसङ्ग पनि कोटयाउँदै थिएँ। फेरि अर्को शृङ्खला जोडियो। म त्यस सन्दर्भलाई पनि अक्षरमा उन्दै छु।

साहित्यकारको नातामा काठमाडौँमा कति व्यस्त हुनुपर्छ त्यसको लेखै छैन। प्रत्येक साता दिनै नबिराई भनेजस्तो कार्यक्रमहरू परिरहन्छन्। शनिबारको त झन् कुरै नगरूँ– तीन-चारवटासम्म कार्यक्रम खप्टिन्छन्। यो एक दिन घरैमा बसेर आराम गर्न पाए हुन्थ्यो भन्ने लाग्छ। साँच्ची भनूँ भने शनिबारलाई मैले 'माइतीबार' भन्ने गरेको छु। हुन त अवकाशप्राप्त जीवन बिताउँदा जुनसुकै बार शनिबारजस्तै हुँदो रहेछ, तैपनि पुरानो झल्का त छँदै छ। त्यसमाथि आफन्तहरूसँग भेटघाट, कुराकानी गर्न उनीहरूलाई पनि त फुर्सद हुनुपऱ्यो। त्यसैले शनिबार मेरा निम्ति अहिले पनि महत्त्वकै छ, तर कहिलेकाहीँ त यही बारले उल्टो हाराबारा नै खेलाउँछ।

त्यो दिन (२०५७) पनि शनिबार नै थियो। मैले दुई-तीन दिन अगाडि नै 'आचार्य वंशावली' विमोचनको कार्यक्रममा आउने वचन दिएको थिएँ। कार्यक्रम थियो तीन बजे। म अढाई बजे घरबाट निस्की डा. ओमवीरसिंह बस्न्यातसँगै पाटनढोका बग्गीखानातर्फ लागेँ। कार्यक्रम छोटो थियो। सरसर्ती हेर्नका निम्ति समारोहमा वितरित पर्चाबाट टिप्ता हुन्छ–

१. स्वागत मन्तव्य : श्री अर्जुनमणि दीक्षितबाट ।
२. पुस्तक बिक्री-वितरण आरम्भ : श्री मदनमणि दीक्षितबाट मदन पुरस्कार पुस्तकालयलाई, तत्पश्चात् मन्तव्य ।
३. धन्यवादज्ञापन : डा. व्रतराज आचार्यबाट ।

४. सभापति श्री कृष्णप्रसाद पराजुलीबाट मन्तव्य तथा सभा विर्सजन ।

५. चियापान तथा पुस्तकबिक्री ।

कार्यक्रम माथि लेखिएअनुसार नै सञ्चालित भयो। त्यस दिन मदनमणि दीक्षित र डा. व्रतराज आचार्यद्वारा इतिहास र अनुसन्धानका विषयमा महत्त्वपूर्ण कुरा बोलिए। सभापतिका रूपमा मैले बोलेका कुरा पनि राम्रो भयो भने सबैले। मलाई थाहा छैन कस्तो भयो ! समारोहका ठाकुर पराजुली, रोचक घिमिरे, नगेन्द्रराज शर्मा, देवीप्रसाद सुवेदी आदि धेरैले चियापानका बेला उत्फुल्ल तुल्याए मलाई। कमलबाबुले त यसो पनि भने– "साऱ्है राम्रो भयो। यसलाई लेख्नुहोस्, नेपालीमा छाप्छु।"

मैले भनें– "अहिले अलि व्यस्त छु। अलि दिन पछि जोडेर लेखुँला।"

त्यही आग्रह, आफ्नो वचनबद्धता र रहरलाई पनि सँगेटेर त्यस दिनको संस्मरण वा विवृत्ति यहाँ दिँदै छु। मैले समारोहमा बोलेका केही कुरा हेक्कामा आएसम्म यसप्रकार थिए :

आचार्य वंशावलीको विमोचन (घुम्टीखोली) कार्यक्रममा सभापतित्व गर्न पाउँदा अहिले मलाई एउटा पुनीत कार्यक्रममा संलग्न भएको तृप्तिबोध भइरहेछ। वास्तवमा म यतिखेर पराजुली होइन, आचार्य भएर उभिएको छु। म भन्दै आएको छु– हुन त पुर्खा सबै आफ्ना हुन्, पराई कोही छैनन्, तैपनि वंशवृक्ष वा पुर्ख्यौली लहरो महत्त्वपूर्ण हुँदो रहेछ। पुर्खाहरूको खोजीनीति गर्नु र नालीबेली पहिल्याउनु साह्रै ठूलो कुरा हो। यही आधारले होला मलाई आफ्ना गीतिपङ्क्तिमा भन्न मन लाग्छ–

*गुराँस जहाँ फुले पनि माया आफ्नै दिन्छ*
*चौतारीमा सुस्ताउँदा छाया साथै हुन्छ !*

मलाई सबभन्दा पहिले कमलबाबु (क. दी.) को फोन आएको थियो– "शनिबार कस्तो छ? 'आचार्य वंशावली' को विमोचन कार्यक्रममा तपाईं सभापति भइदिनुपऱ्यो। सभापतिका लागि सगोत्री नै खोजेको।"

मैले नाइँ भन्न सकिनँ, स्वीकृति जनाएँ। बिहान कुरा भयो, दिउँसो सुजीत दीक्षितद्वारा बोल्नुपर्ने होला भनी पठाइएको एकप्रति ग्रन्थ हातमा पर्‍यो– 'आचार्य वंशावली'। ग्रन्थ जब म पल्टाउँदै गएँ अचम्मित भएँ, विस्मित भएँ।

यस गन्थ्रको मूल संस्कृतमा रहेछ– गङ्गाधर शास्त्रीद्वारा रचित र सदाशिव शर्माद्वारा सम्पादित, तर आजको होइन झन्डै सय वर्षअघिको– १९५८ सालमा निस्केको। अहिले चक्रपाणि चालिसेको नेपाली अनुवाद, मूल संस्कृत र आचार्य वंशावलीको नामावलीसमेत गाभेर केशरमणि आचार्य दीक्षितको सम्पादनमा यो ग्रन्थ प्रकाशित भएको छ।

वंशावलीमा देखिएअनुसार आचार्यकुलका मूल पुरुष र शिरोमणिका मूल पुरुष सच्चिदानन्द हुन्। सच्चिदानन्दका राम आचार्य र कृष्ण आचार्य दुई भाइ छोरा भए। जेठा राम आचार्यका पाँच भाइ छोरामा माहिला विष्णु आचार्य विद्वान् रहेछन्। उनै विष्णु आचार्यले आफ्ना विद्याबुद्धिले प्रभावित पारी डोटीका राजा श्रीबहादुरसिंहबाट पराजुली गाउँ बकस पाएछन्। हिमाल प्रान्तको त्यसै गाउँमा बस्ने आचार्य पराजुली भए। यो श्लोक त्यसै सन्दर्भको हो–

*ततः प्रभृति तद्वंश्या : पराजुल्युपनामकाः*
*प्रथन्त्ते हिमवत्भागे ज्ञेयास्ते विष्णु शर्मजाः।*

आचार्यवंशबाट हाँगो फाटेका पराजुलीका अरू सगोत्री थर केही निम्न प्रकारका भएको पनि पुष्टि हुन्छ, जस्तै–

| | | |
|---|---|---|
| नवपानीय > निपानी | = | न्यौपाने |
| प्याकु | = | प्याकुर्‍याल > प्याकुरेल |
| बाँस्कोटे | = | बाँस्कोटा |
| सत्यपाल | = | सत्याल |
| पन्यारु | = | पनेरु |
| लम्जी | = | लम्जेल |

मैले पराजुलीका आफ्ना पुर्खाको थातथलो खोज्दा तलीपराजुल, मलीपराजुल, लेकपराजुल, डाँडापराजुल, औलपराजुल र पराजुल खोलासम्म पुऱ्याएको थिएँ। आचार्य वंशावलीले त हामीलाई पनि डोटी नै पुऱ्यायो। यसरी आचार्य कुलका तेस्रो पुस्ताका माहिला विष्णु आचार्यसँग नाता जोडेर यो माहिलो कृष्णप्रसाद पराजुली सभापतिको आसनबाट बोल्दै छु। त्यसैले सुरुमै मैले म आचार्य हुँ भनेँ र यो कुरा सत्य हो। आचार्य वंशावलीको यसलाई स्पष्ट प्रमाणित गरेको छ।

आचार्य कुलमा धेरै ठूलठूला कवि, विद्वान्, नेताहरू भएका छन्। आदिकवि भानुभक्त आचार्य यसै कुलमा जन्मे, टङ्कप्रसाद आचार्यजस्ता नेता यसै कुलका हुन्। मणिखलकका विद्वान् आचार्य दीक्षितहरू यसै कुलमा उत्पन्न भएका छन्। 'भानुभक्त' चलचित्रमा भानुभक्तका बाजेको भूमिका खेल्ने कमलमणि दीक्षित पनि त आचार्य नै हुन्।

मैले 'भानुको उमङ्ग : कृष्णको तरङ्ग' शीर्षक कवितामा उनीप्रति श्रद्धा र सम्झना व्यक्त गरेको छु। त्यसमा भानुभक्तलाई बाजे बनाई आफूलाई 'नाति' को सङ्ज्ञा दिएको रहेछु। त्यो उक्ति सार्थक भयो। त्यसै कविताका पङ्क्ति हुन्–

*भानु ! मेरा तिमीलाई प्रणाम छ सधैँभरि*
*यौटा पीर छ छातीमा स्वप्न झर्दै गएसरि*

*असारमा तिमी जन्म्यौ असारे फूल मैपनि*
*उमङ्गैमा डुबूँ भन्थे बाग्मतीतटमा घुमी*

*तिम्रो कान्तिपुरी आज मेरो गन्धपुरी बन्यो*
*नातिलाई छकायौ कि सिर्जनाको स्वरै गुम्यो !*

कौडिण्यगोत्रीय आचार्यबाट फाटेका पराजुलीहरू अहिले कहाँकहाँ, कुनकुन स्थानमा बसेका छन् त ? मैले थाहा पाएका र पराजुलीहरूसँग भेटघाट भएका केही मुख्य-मुख्य ठाउँको नाम लिनु पनि सान्दर्भिक होला।

(क) **नेपालभित्र**

| | |
|---|---|
| पश्चिम | : जुम्ला, दैलेख क्षेत्र |
| कास्की | : पोखरा (विन्ध्यवासिनीवरपर), रागीनास |
| गुल्मी | : फोक्सिङ |
| म्याग्दी | : पातलेखेत |
| अर्घाखाँची | : वरपर |
| स्याङ्जा | : वरपर |
| लमजुङ | : वरपर |
| काभ्रे | : ज्याम्दी, मण्डन, भमरकोट, नालाछाप, दाप्चा-फूलबारी भेक, धुलिखेल चङ्खुगाउँ |
| सिन्धु | : साँगाचोक, फुलपिङ |
| काठमाडौँ | : कोटेश्वर, बानेश्वर, चाबहिल, ताहाचल |
| ललितपुर | : कोपुन्डोल, सानेपा, नयाँ बाटो– शान्तिबस्ती |
| भक्तपुर | : लोकन्थली, गट्ठाघर |
| धादिङ | : धादिङबेसी, नौबीसे |
| उदयपुर | : सिद्धे |
| खोटाङ | : चुइचुम्बा, कटहरे |
| ओखलढुङ्गा | : कटुन्जे, वलखु, ज्यामिरे |
| भोजपुर | : चरम्बी, पितौँला, श्यामसिला, थाक्ले, वालङ्खा, वासिङ थर्पु, हतुवा– सल्ले, दुङमाना– ओदाने, पाचाङओताङ, साँगापोक, हेलौँचा |
| मोरङ | : विराटनगर |
| सुनसरी | : चक्रघट्टी, इटहरी, इनरुवा |
| झापा | : चन्द्रगढी, भद्रपुर |
| इलाम | : फिक्कल (गैरीगाउँ) |
| नारायणी अञ्चल | : मकवानपुर, वीरगन्ज, गौर आदि । |

(ख) **नेपालबाहिर**

पार्वत्य प्रदेश : सिक्किम, आसाम– शोणितपुर आदि ।

यसरी पराजुलीहरू नेपालको कालीमेची सिमानाभित्र त छँदै छन्, नेपालबाहिर छिमेकी देश भारतका विभिन्न प्रान्त खास गरी पार्वत्य प्रदेशमा फैलिएर बसेका पाइन्छन् । त्यसबाहेक केही पराजुलीले बर्मा, हङकङ र ब्रुनाईसम्म पनि पुगेर कामकाज वा बसोबास गरेको सुनिन्छ । पराजुलीहरू ठूलठूला क्षेत्रमा पनि पुगेका छन् । बौद्धिक क्षेत्रमा साहित्यकार, प्राध्यापक, शिक्षाविद्, डाक्टर आदि भएका छन् भने राजनीतिमा लाग्नेहरू क्रान्तिकारी र शहीद हुनाका साथै पदीय रूपमा मन्त्रीसम्म पनि भएका छन् ।

✍

# नन्दिनीको आँखामा आँसु

*– डा. केशवप्रसाद उपाध्याय*

यो नन्दिनी नामकी कुनै नारीको कथा होइन, यो नन्दिनी नामकी गाईको कथा हो । यो कामधेनुकी छोरी नन्दिनीको कथा पनि होइन । यो कलैया भवानीपुरमा सिद्धेश्वर संस्कृत विद्यालय, ब्रह्मचर्याश्रमको स्थापना गर्ने महात्मा गोपाल ब्रह्मचारीले आफू बस्ने गरेको लँगडामठमा निकै मायाममता साथ पालीताली हुर्काउनुभएको र आफैँले नन्दिनी नाम दिनुभएको एक गाईको कथा हो ।

लँगडामठ हाम्रो टोलबाट पूर्वोत्तर दिशामा पर्थ्यो । हाम्रो घरबाट खेतैखेतको छोटो बाटो भएर जाँदा त्यस्तै २०-२५ मिनेटमा पुगिन्थ्यो । म सानैदेखि आफ्ना पिताका साथ बेलाबेला त्यहाँ जाने गर्थें । ब्रह्मचारीलाई हाम्रो घटगाउँ र बजारमा सबै महाराजजी भन्थे । र उहाँको दर्शन गर्न स्थानीय महिला पुरुष र बालबालिका सबै बेलाबेला लँगडामठ जान्थे ।

महाराजजी त्यतिखेर ४५-४६ को हुनुहुँदो हो । उहाँको व्यक्तित्व भव्य र आकर्षक थियो । उहाँको कद न अग्लो न होचो ठिक्कको थियो । जीउ पनि न मोटो न पातलो ठिक्कको थियो । उहाँ गोरो हुनुहुन्थ्यो । उहाँको मुखाकृति लाम्चिलो थियो । निधार चौडा थियो, आँखा ठूला थिए र सफा सेता थिए, आँखिभुइँ बाक्ला थिए, नाक लामो थियो, कान ठूलाठूला थिए र कानका प्वालमा लामालामा रौँ देखिन्थे, उहाँको खाने मुख ठूलो थियो, उहाँका ओठ सदैव पानले रङ्गिएका हुन्थे, उहाँको टाउको मुडुलो थियो र दाह्री-जुँघा मसिना थिए, दाह्री बाक्लो थियो र त्यसैले दुवै गाला ढाकिएका हुन्थे । कपाल, दाह्री र जुँघा सबै तिलचामले थिए र उहाँका पाखुरामा लामालामा रौँ थिए । उहाँको अनुहारबाट सुन्तला रङको आभास बर्सन्थ्यो । उहाँको जीउ सुन्तला रङकै अलखाले घाँटीदेखि गोलीगाँठासम्म ढाकिएको हुन्थ्यो । उहाँ मुसुमुसु हाँसिरहनुहुन्थ्यो र ठहर पनि गर्नुहुन्थ्यो । मेरा पितामह दण्डी स्वामी हुनुहुन्थ्यो र बनारस बस्नुहुन्थ्यो । उहाँको पनि रङरूप उस्तै थियो र पोसाक पनि लगभग उस्तै थियो तर महाराजजीको अलखा सिलाइएको हुन्थ्यो र

दण्डी स्वामी नसिइएको गेरुवा वस्त्रले जीउ ढाकेर बस्नुहुन्थ्यो । मैले उहाँलाई सानैमा देखेको थिएँ र मलाई महाराजजी आफ्नै पितामहजीजस्तो लाग्नुहुन्थ्यो । त्यसैले पनि मलाई त्यहाँ जान मन लाग्थ्यो ।

मलाई मात्र होइन, जसलाई पनि त्यहाँ गइरहन मन लाग्दथ्यो । मन किन नलाग्नू ? त्यहाँ पोखरी थियो, मुक्तेश्वर महादेवको मन्दिर थियो र मठको मास्तिर दक्षिणपट्टि उखुको झ्याँग थियो भने आँप, लिच्ची, अम्बा र कागतीको ठूलो बगैँचा पनि थियो । दर्शन गर्न जाँदा महाराजजी केटाकेटीहरूलाई आफ्नो थौलाबाट झिकेर कहिले नरिबल र कहिले मिश्री दिनुहुन्थ्यो र खेल्न जाओ भन्नुहुन्थ्यो । हामी केटाकेटी पोखरीको पानीमा नुहाउँथ्यौँ, त्यसको किनारमा उफ्रन्थ्यौँ ।

महाराजजी सूर्यको उज्यालोमा बाहिर निस्कनुहुन्नथ्यो । उहाँ चर्को उज्यालो सहन सक्नुहुन्नथ्यो भने चर्को आवाज पनि सहन सक्नुहुन्नथ्यो । उहाँ आफू ठूलो स्वरमा बोल्नुहुन्नथ्यो, हा हा हा गरेर उच्च स्वरमा हाँस्नु पनि हुन्नथ्यो । त्यसैले अरूले उहाँका सामु दबिएको मसिनु स्वरमा बोल्नुपर्दथ्यो । कडा आवाज कानभित्र नपरोस् भनी उहाँ दुवै कानमा रुवा कोचेर बस्नुहुन्थ्यो । योगसाधना गर्दा गडबडी भएर उहाँको अवस्था त्यस्तो भएको हो भन्ने गाउँघरमा बूढापाकाहरूले गरेको चर्चाबाट मैले थाहा पाएको थिएँ । उहाँ हाम्रो गाउँकै हुनुहुन्थ्यो । उहाँ १७-१८ को उमेरमा तपस्या गर्न भनेर घरमा विधवा आमा, एउटी दिदी र एउटी बहिनीलाई छाडेर जङ्गलतिर लाग्नुभएको थियो र दस-पन्ध्र वर्षपछि योगीका रूपमा फर्कनुभएको थियो । गाउँ र बजारका श्रद्धालुहरूले लँगडागाउँमा मठ, मन्दिर र पोखरीको निर्माण गरेर उहाँलाई राखिदिएका थिए र त्यहाँ बगैँचा पनि लगाइदिएका थिए ।

महाराजजीले सिद्धेश्वर विद्यालय ब्रह्मचर्याश्रमको स्थापना वि.सं. १९९६ मा गर्नुभएको थियो, म त्यतिखेर ६ वर्षको थिएँ र त्यतिखेर देखि नै विद्यालयमा पढ्दै थिएँ । पहिले त्यहाँ व्याकरण, अमरकोश र रुद्री, वेद पढाइन्थ्यो, पछि ज्योतिष थपियो । पहिले व्याकरण पढाउने प्रधानाध्यापक र ज्योतिष पढाउने ज्योतिषी गुरु विद्यालयमा बस्नुहुन्थ्यो । पछि व्याकरण, साहित्य पढाउने सहायक गुरु र वैदिक

गुरुका लागि पनि वासको प्रबन्ध मिलाइयो । विद्यार्थी दुई थरीका थिए– ब्रह्मचारी र कर्मचारी । भर्खर व्रतबन्ध भएका वटुकदेखि लिएर बाह्र वर्षसम्मका कुमारहरूलाई ब्रह्मचारीमा भर्ना गरिन्थ्यो । त्यहाँभन्दा माथिका अविवाहित वा विवाहित किशोर नवयुवक र युवक कर्मचारीमा भर्ना गरिन्थे । ब्रह्मचारी सोह्र वर्षको उमेर नपुगेसम्म घर जान पाउँदैनथे र विद्यालयको हाता नाघेर बाहिर निस्कन पनि पाउँदैनथे। उनीहरू गुरुका नेतृत्वमा समूहगत रूपमा विशेष प्रयोजनले मात्र बाहिर निस्कन पाउँथे । त्यस्तै उनीहरू कर्मचारी विद्यार्थीहरूसँगै गुरुहरूका नेतृत्वमा महाराजजीको दर्शन गर्न अष्टमी र प्रतिपदाका दिन नियमितरूपले लँगडामठ जान पाउँथे र त्यो दिन उनीहरू ज्यालखानाबाट बाहिर निस्कन पाएका कैदीहरूझैँ निकै रमाउँथे । तिनको पोसाक महाराजजीले लगाउने किसिमको अलखा र लँगोटी थियो तर त्यो सुन्तला रङको नभएर पहेँलो रङको हुन्थ्यो। उनीहरू जुत्ता लगाउन पाउँदैनथे र काठका खराउ लगाउँथे । उनीहरूका हातमा कमण्डलु हुन्थ्यो । उनीहरू कपाल पाल्न पाउँदैनथे, तिनले महिना-महिनामा कपाल खौराउनुपर्थ्यो । त्यसो त त्यस जमानामा कपाल पाल्ने र बाबरी छाँट्ने चलन कमै थियो र ब्राह्मण समाजमा प्रायः छँदै थिएन । कर्मचारी विद्यार्थीहरू कपाल ठूलो पारे पनि बाबरी छाँट्न पाउँदैनथे । ब्रह्मचारी ११ जना थिए । ती छात्रवृत्ति पाउँथे र पाठशालमा भान्से बाहुनले पकाएको खान्थे । कर्मचारीहरूको सङ्ख्या निश्चित थिएन, तीमध्ये सात जनाले छात्रवृत्ति पाउँथे र ब्रह्मचारीहरू सबै पाठशालामा खान्थे। यीबाहेक अन्य दुई थरी कर्मचारी विद्यार्थी थिए, तिनमा एक थरी घरबाट दालचामल ल्याएर पाठशालमा बुझाई त्यहीँ खान्थे र अर्का थरी आफूले दालचामल ल्याई आफैँ पकाएर खान्थे। विद्यालयले तिनलाई दाउरा मट्टीतेल उपलब्ध गराउँथ्यो । विद्यालयले त्यहाँ बस्न सबैलाई सुत्न खाट उपलब्ध गराउँथ्यो भने छात्रवृत्ति पाउनेहरूलाई सामान राख्ने अढाई फिट अग्लो सानो-सानो चारपाटे बाकसजस्तो डेस्क पनि उपलब्ध गराउँथ्यो ।

अहिले जहाँ पठनपाठन हुने पक्की मठ छ, त्यसको बीच भागमा अग्लो ढिस्कोमा चारपाटे ठूलो घर थियो, त्यसको छानो

खरको थियो र भित्ता माटाका थिए । त्यसको मध्यभागमा गुरु बस्नुहुन्थ्यो र त्यको चारतिरका पाखामा विद्यार्थी बस्थे। त्यस घरको उत्तरतिर सानो भान्साघर थियो र गुरुको भान्सा त्यसैमा हुन्थ्यो । त्यसै घरको पूर्वपट्टिको दलानमा प्रधानाध्यापकको कथा चल्थ्यो। गुरु दक्षिणतिरको भित्तामा टाँसिएको खाटमा ओछ्याइएको डसनामा बालिस्टमा अडेस लागेर बस्नुहुन्थ्यो र विद्यार्थी उहाँको सम्मुख रहेको नाङ्गो खाटमाथि बसेर पाठ लिन्थे। यसरी त्यो मठको आकारको घर गुरु र छात्रहरूको आवास पनि थियो र पाठशाला पनि थियो । त्यस घरको पूर्वतर्फ केही दूरीमा इनार थियो, इनार नजिकै पूर्वतिर काठको दुईतले घर थियो, त्यसलाई टौवा भन्थे, टौवाको मास्तिर म्यानेजर बस्थे र तल्तिर ३-४ जना विद्यार्थी बस्थे। टौवाको केही पूर्वतिर पश्चिम मुखको भान्सा घर थियो र त्यो खण्डाले छाइएको थियो, त्यसका भित्ता माटाकै थिए। टौवाको उत्तरतिर भान्साघरसम्म एक लामो टहरो थियो, त्यो खरले छाइएको थियो र त्यसका भित्ता माटाका थिए। त्यो दक्षिण मुखको थियो। त्यसमा पहिले बाह्र जना विद्यार्थी बस्थे र तिनलाई द्वादशादित्य भनिन्थ्यो । तिनको सम्बन्धले त्यस घरको नामै द्वादशादित्य थियो । त्यस घरको पूर्वतिर गोठ थियो। त्यसमा गाडा तान्ने दुई जोर गोरु बाँधिएका हुन्थे। टौवाको पूर्व र भान्साको पश्चिमतिर दक्षिणतर्फ लहरै ठूलाठूला चारओटा भकारी थिए, तिनमा धान राखिन्थ्यो । द्वादशादित्यको पूर्वतिरको एक खण्डमा दुईओटा ढिकी थिए, तिनमा धान कुटाएर चामल बनाइन्थ्यो। टौवाघरको सोझै दक्षिणतर्फ वरिपरि फूलबारी भएको र बार लगाएर घेरिएको सिद्धेश्वर महादेवको मन्दिर थियो। मन्दिरको पश्चिमतिर खरको छानो भएको विशाल यज्ञशाला थियो। आरम्भमा यसैमा व्याकरण र कोशको पढाइ हुन्थ्यो । त्यतिखेर वर्णमाला सिकाउने र अमरकोश पढाउने गुरु धर्मदत्त हुनुहुन्थ्यो र व्याकरण पढाउने गुरु पोस्टाचार्य अच्युतानन्द बाजपेयी हुनुहुन्थ्यो। म धर्मदत्त गुरुसँग अमरकोश पढ्थेँ ।

पछि व्याकरणको पठनपाठनमाथि बयान गरिएको मठियाघरमा हुन थाल्यो। सेठ सत्यनारायणसँग तलबमा खटपट पर्दा पोस्टाचार्य गुरु विद्यालय छाडेर गइसक्नुभएको थियो। उहाँपछि अन्य दुई-तीन

विद्वान् आएर गइसकेका थिए र फेरि पोस्टाचार्य गुरुलाई उहाँले मागेजति तलबमा ल्याइएको थियो । म पनि केही वर्ष सरकारी पाठशालामा पढेर फर्किसकेको थिएँ। मठियाघर महाराजजीका लागि बनेको थियो। त्यसमा बस्ता आफूलाई गाह्रो भएकोले उहाँ लँगडामठ फर्कनुभयो र उहाँको आज्ञाअनुसार त्यस मठमा विद्यार्थीहरूका अभिभावकका रूपमा प्रधानाध्यापक बस्न थाल्नुभयो ।

प्रधानाध्यापकको पाठशाला पनि त्यहीं सऱ्यो। त्यहाँको पठनपाठन सिद्धेश्वरमहादेवका मन्दिरको गर्भगृह बाहिरको परिसरमा हुन्थ्यो र ज्योतिषको पठनपाठन मन्दिरदेखि दक्षिणपट्टिको बगैँचाको अन्तिम छेउमा पर्खालमा टाँसेर बनाइएको कच्ची घरमा हुन्थ्यो । ज्योतिषी गुरु केही विद्यार्थीहरूका साथ त्यसै घरमा बस्नुहुन्थ्यो ।

मन्दिरवरिपरि गुलाफ, जाई, बेली, मोतिया, नेवारीजस्ता अनेक थरी फूलको सुन्दर बगैँचा थियो र उत्तरपट्टि कागतीको बगैँचा पनि थियो । घेराबाहिर उत्तरतिर पनि आँपको सानो बगैँचा थियो । मन्दिरको दक्षिण-पश्चिम यहाँदेखि त्यहाँसम्म आँप र लिच्चीका ठूला बगैँचा थियो र बगैँचामा बेल, नरिवल, कटहर, अम्बा, सुपारी आदिका रूख पनि थिए । फल केही बाँडिन्थे र धेरै बेचिन्थे । विद्यालयका अगाडि, पछाडि र उत्तरतिरका भागमा चउर थियो र पूर्व-पश्चिम, उत्तर-दक्षिण जता जान पनि चौडाचौडा सडक थिए। पछि मन्दिर अगाडि ठूलो पोखरी पनि बन्यो ।

गुरुहरूको नेतृत्वमा हुने लँगडामठसम्मको हाम्रो यात्रा गाउँ बजारका नरनारीहरूका लागि दर्शनीय हुन्थ्यो। अघिअघि सेता थोती, कुर्ता लगाएका गुरुहरू, उहाँहरूका पछि पहेँला अलखा लगाएका र हातमा कमण्डु लिएका ब्रह्मचारी र उनीहरूका पछि धोती-कमिज वा कुर्ता लगाएका कर्मचारी विद्यार्थी हुन्थे र सबै पङ्क्तिबद्ध भएर हिँड्थे। त्यसरी घुमाउरो बाटोबाट सडकैसडक जाँदा चालीस-पैँतीस मिनेट लाग्दथ्यो। म न ब्रह्मचारी थिएँ न कर्मचारी। म घरबाट पढ्न जान्थेँ र घर विद्यालयको पूर्वपट्टि नजिकै भएकाले म त्यहाँ हुने प्रत्येक क्रियाकलापमा संलग्न रहन्थेँ। पिताजीको निधनपछि म पनि विद्यार्थीहरूकै साथ लँगडा जान्थेँ ।

महाराजजी हामीलाई देखेर खुसी हुनुहुन्थ्यो। कहिले भिजाएको काँचो चना र कहिले घिउमा तारेको चना खुवाएर पठाउनुहुन्थ्यो। उहाँको मठको वास्तुकला विशेष प्रकारको थियो। त्यो उहाँको आफ्नै परिकल्पना थियो। त्यसको पश्चिम भागमा खुला दलान थियो र त्यसमा पाँच-छ जना दर्शनार्थी प्रतीक्षामा बसेका हुन्थे। त्यसको प्रवेशद्वार पूर्वपट्टि थियो। त्यसमा पस्तापस्तै एउटा कोठा देखिन्थ्यो र त्यसमा उज्यालो छिरेको हुन्थ्यो। त्यसको देब्रेपट्टि कुनामा भित्र पस्ने अर्को द्वार थियो र त्यो खुला थियो, त्यसको बाटाबाट एक जना मान्छे जान वा आउन सक्थ्यो। दुईतिरको भित्ता छाम्दै कुनै अँध्यारो गुफामा पसेझैँ बिस्तारै अघि बढ्नुपर्थ्यो दुइटा मोड पार गरेपछि मुस्किलले पन्ध्र जनाजति अटाउने कोठा आइपुग्दथ्यो, त्यसमा दक्षिणतिरको भित्तामा टाँसिएको सिसाबाट धमिलो उज्यालो छिरेको हुन्थ्यो। त्यस कोठाको पूर्वपट्टिको भित्ताको बीचमा दुई फिट जतिको उचाइमा अढाइ फिट लम्बाइ-चौडाइको खुला झ्याल थियो। त्यसबाट हेर्दा भित्रपट्टि महाराजजी पलेटी कसेर टुलुटुलु हेर्दै बसिरहेको देखिनुहुन्थ्यो। उहाँको शय्या त्यहीँ थियो र आसन पनि त्यहीँ थियो। त्यस कोठरीको दक्षिणतिरको भित्तामा पनि सिसा जडिएको थियो र त्यसबाट उहाँ बगैँचातिरको दृश्य हेर्न सक्नुहुन्थ्यो। त्यो घर एकप्रकारको भुलभुलैयाजस्तै थियो। उहाँले कोलाहल र तीव्र प्रकाशबाट बच्न आफ्नो मठको निर्माण त्यसरी गराउनुभएको थियो।

उहाँले नन्दिनीलाई त्यसै मठको प्रवेशद्वारभित्रको कोठामा राख्नुभएको थियो। तिनलाई पानीमा पखालेर दुबो खुवाइन्थ्यो, कुँडो पनि खुवाइन्थ्यो र पौष्टिकताका लागि छोकडा र काजु, किसमिस पनि खुवाइन्थ्यो। तिनलाई बेलाबेला नुहाइन्थ्यो र झिँगा र मच्छडले दु:ख दिन्छन् भनेर झूलभित्र राखिन्थ्यो। नन्दिनी बस्ने ठाउँ सफा रहन्थ्यो, त्यहाँ गोबर र गउत रहन पाउँदैनथ्यो। नन्दिनी सुत्केरी भएपछि उनको र उनकी बाच्छीको स्याहारसुसार कति होसियारीका साथ गरिन्थ्यो त्यसको बयान गरेर साध्यै छैन। तिनै नन्दिनीलाई सुत्केरी भएको महिना दिनपछि सिद्धेश्वरमहादेवलाई नित्य गाईका दूधले स्नान गराउने र केही दूध गुरुहरूलाई खानदिने इच्छाले विद्यालयमा पठाइदिनुभएको थियो। त्यतिखेर पोस्टाचार्य गुरु प्रधानध्यापक

हुनुहुन्थ्यो । नन्दिनीलाई बनच्छीसहित गोरु राख्ने गोठमा एकातिर बाँधेर राखियो । उनका लागि लँगडामठमा गरिएको जस्तो व्यवस्था त के हुन्थ्यो र उनलाई दुबो पखालेर दिने र काजु किसमिस खुवाउने पनि को हुन्थ्यो ?

त्यहाँ गाडा तान्ने गोरुहरूलाई घाँस र पराल गँडासीले टुक्र्याएर त्यसमा ढुटो र पिनासमेत मिसाई पानीमा घोलेर खुवाइन्थ्यो। त्यसलाई 'सानीपानी' भनिन्थ्यो। त्यो सानीपानी सिमन्टीले बनेको अग्लो नादमा हालेर खुवाइने गरिन्थ्यो । त्यो नाद टौवाको उत्तरतिर थियो । नन्दिनीलाई त्यही सानीपानी र पराल खुवाउने व्यवस्था गरियो र उनका लागि सिमन्टीको ढुँड सानो नाद बनाई भुँइमा गोठमा नै राखियो ।

नन्दिनीको जीउडाल ठूलो थियो तिनको शरीरको रौँ खरानी रङको थियो। सिङ मोटामोटा र केही घुमेका थिए। कल्चौँडो ठूलो थियो । बाच्छीलाई खुवाएर तिनले दुई साँझ गरी ८ लिटर दूध दिन्थिन् ।

त्यतिखेर म प्रथमामा पढ्दै थिएँ। मैले रघुवंशमा नन्दिनीको वर्णन पढिसकेको थिएँ र दिलीपले नन्दिनीको सेवा कसरी गर्थे त्यो पनि पढेकै थिएँ। त्यसैले ममात्र होइन कि मेरा सहपाठीहरू पनि महाराजजीको नन्दिनीमा वशिष्ठकी नन्दिनीको झलक पाउँथ्यौँ र यी पङ्क्ति गुनगुनाउँथ्यौँ:

*ललाटोदयया भुग्नं पल्लवस्निग्ध पाटला ।*
*विभ्रती श्वेतरोमाङ्कं सन्ध्येव शशिनं मन्था ॥*
*भुवं कोष्णेन कुण्डोघ्नी मेध्येनावभृथादपि ।*
*प्रस्न वेनाभिवर्षन्ती वत्सालोक प्रवर्त्तिना ॥*

*– प्रथम सर्ग: श्लोक ८३-८४*

*अस्वादवद्‌भि: कवलै स्तृणानां कण्डूयनै र्दंश निवारणैश्च ।*
*अव्याहतै: श्वेरेगतै: स तस्या: सम्राट समाराधन तत्परोऽभूत् ॥*

*– द्वितीय सर्ग: श्लोक ५*

पहिले नन्दिनीलाई बाँधेर राखियो र केही महिनापछि फुकाएर केही बेत गोठालाको रेखदेखमा चउरमा चराउने र डुलाउने गरियो। दूध दिन छाडेपछि उनलाई छाडा छाड्न थालियो। बाच्छी हुर्किएपछि र उसलाई छाडेर हिँड्न माउ तयार भएपछि लैनो भए पनि त्यसलाई चर्न पठाउने हाम्रो गाउँघरतिरको सामान्य प्रचलन नै थियो। हो, लैनो गाईलाई घर फर्केपछि केही घाँस-पराल र कुँडो वा सानीपानी दिइन्थ्यो भने थारो गाईलाई कुँडो वा सानीपानी नभए पनि घाँस पराल र पानी चाहिँ दिइन्थ्यो। छाडा भएपछि नन्दिनीलाई केही दिइँदैनथ्यो र उनी पेट भर्न चउर र बगैँचातिर भौँतारिइरहन्थिन्। तिनको बाच्छी के-कसो भएर मरेपछि ती एक्ली भइन् र शोक र भोकले तिनलाई गाल्दै लग्यो। दिभरि चरे पनि तिनको पेट सेप्रै हुन्थ्यो र तिनको जीउका करङ देखिन्थे भने तिनका आँखाबाट आँसु बगिरहन्थ्यो। तर चर्दाचर्दै कहिलेकाहीँ फूलबारीभित्र पसेर जुही, जाई, मोतिया आदि फूलका पातमा मुख हाल्न थाल्थिन् र त्यो देख्नासाथ मालीले तिनलाई लाठाले हिर्काएर धपाइदिन्थ्यो। त्यताबाट फर्केर उनी गोरुहरूले सानीपानी खाँदै गरेको नादमा एकातिरबाट मुख घुसार्थिन्, त्यसो गरेको देखेपछि गाडीवान् तिनलाई लौराले ठटाएर धपाउँथ्यो। म आफ्ना सहपाठीहरूका साथ टौवाको खुला दलानमा खाटमाथि बसेर पढ्ने गर्थें। हामी त्यहाँ पढिरहेका बेला गाडीवान्ले नन्दिनीलाई खान नदिएर धपाउन खोजे उसलाई रोक्थ्यौँ र एकछिन खान दिन लगाउँथ्यौँ। त्यतिमात्र कहाँ हो र ? नन्दिनीलाई बाहिर राखेको परालको पूजौल (कुन्यु) मा मुख हाल्न समेत दिइँदैनथ्यो र त्यसको निम्ति पनि हामीले जुध्नुपर्थ्यो। विचरी गौमाता धापिएर आउँदा तिनलाई भाँडामा पानी पनि दिइँदैनथ्यो र ती इनारनेरको खाल्डाबाट पानी पिउँथिन्। हामीलाई नन्दिनीको साह्रै माया लाग्थ्यो। हामी लँगडामठमा त्यस्तो सोखमा पालिएकी नन्दिनीले दुःख पाएको देखेर दुःखी हुन्थ्यौँ।

हामीले गाडीवान्सँग नन्दिनीलाई खान-पिउन नदिएकामा विरोध गर्दा ऊ भन्थ्यो– “का करी ? सेठजी के ऐसने हुकुम बाटे।” सेठजी भनेका सत्यनारायण मारवाडी हुन्। उनी पनि एक दाता नै थिए। उनले सिद्धेश्वरमहादेवको मन्दिर बनाएर मन्दिरसहितको

फूलबारी र बगैँचा सिद्धेश्वरका नाममा दान गरेका थिए र महाराजजीलाई अर्पित गरेका थिए। उनी सञ्चालक समितिमा थिए र महाराजजीबाट विद्यालयको देखरेखका लागि उनलाई विशेष अधिकार प्राप्त थियो। विद्यालयको कामकाज हेर्ने म्यानेजर थिए, अरू कामदार पनि थिए । म्यानेजर वेतनभोगी थिए र विद्यालयमा बसेर काम गर्थे । सेठजी अवैधानिक सुपर म्यानेजर थिए र विद्यालयका यावत् दैनिक क्रियाकलाप उनकै हुकुममा चल्थ्यो र सारा खटनपटन उनकै हुन्थ्यो । नन्दिनी विद्यालयमा आएको उनलाई पटक्कै मनपरेको थिएन । उनी व्यापारी थिए र उनलाई महाराजजीको भावनाको त वास्ता थिएन भने हाम्रो नन्दिनीसित गाँसिएको भावनाको के वास्ता हुन्थ्यो ? उनी मानवीय व्यवहारलाई पनि प्रत्यक्ष लाभहानिको दृष्टिले हेर्थे र नन्दिनीले व्यर्थै खर्च बढाइदिएको ठानेर उनको रिस गर्थे । उनले गाडीवान् र अन्य कामदारलाई भनेका रहेछन्– 'गोरुहरूले गाडा तान्छन् जङ्गलबाट दाउरा ल्याउँछन्, गाउँबाट धान ल्याउँछन् । नन्दिनीबाट के फाइदा छ ?' त्यसै दृष्टिकोणले गर्दा उनी गोरुहरूको माया गर्थे र ती सदैव हृष्टपुष्ट रहून् भन्ने चाहन्थे । त्यसैले गोरुहरूको खानपान र स्याहारसुसारमा कुनै त्रुटि नहोस् भन्ने उनको उपदेश थियो । दूध दिन पनि छाडिसकेकी नन्दिनी त सेठजीका नजरमा बेकारकी पशु भएकी थिइन् र उनले तिनलाई केही नदिन छाडा छाडिदिने उर्दी गरेका रहेछन् । हामीलाई नन्दिनीको दु:ख र दु:खान्तमा सेठजीले खलनायककै काम गरेको छर्लङ्ग भयो ।

आखिर नन्दिनीको दुर्गति र दु:ख कथाको खबर महाराजजीकहाँ पुग्यो र उहाँले ती गाईलाई झिकाउनुभयो । त्यतिमात्र भएन । विद्यालयका म्यानेजरदेखि लिएर गुरु र विद्यार्थीहरूमाथि पनि अनावश्यक र अनुचित हैकम चलाउन अघिसर्ने सेठजीका अन्य अर्घेल्याइँ पनि महाराजजीका कानसम्म पुगेकाले उहाँले सेठजीलाई सञ्चालक समितिबाट हटाइदिनुभयो र आफ्नो दर्शनका लागि लँगडामठ आउन पनि निषेध गरिदिनुभयो । उहाँले उनलाई सिद्धेश्वरमन्दिर र फूलबारीसम्म सीमित रहने र विद्यालय परिसरतिर नजाने आदेश पनि उनीसम्म पठाइदिनुभयो ।

# पुड्का कदका अग्ला लेखकहरू

*– कोषराज न्यौपाने*

मान्छेको आकारको बुद्धिसित के कस्तो सम्बन्ध छ त्यो त थाहा छैन तर मानव जीवनमा ज्यादै होचादेखि ज्यादै अग्ला र ज्यादै मसिनादेखि ज्यादै मोटा मान्छे पाइन्छन् । ज्यादै होचालाई 'बाउन्ने' भनिन्छ । यो 'बाउन्ने' शब्दको वास्तविक शब्दार्थ बाउन्न इन्चमात्र अग्लो भन्ने हो वा 'वामन' शब्दको तद्भव स्वरूप हो मैले खुट्याउन सकेको छैन । 'बाउन्ने' शब्दको अर्थ दुईतिर लाग्छ । भगवान्का दशावतारको सूक्ष्म विश्लेषण गर्ने हो भने पनि मानव इतिहासको विकासमा थोर-बहुत चिन्तन गर्न सकिन्छ । पहिलो अवतार छ 'माछो' जो जलमा मात्र बाँच्तछ । दोस्रो 'कछुवा' जल र थलमा दुवैतिर रहन र बाँच्न सक्छ। तेस्रो 'बनेल' थलचर जीव हो। चौथो 'नृसिंह'को अवतारले मानवत्व र पशुत्वको संयोजन गरेको छ। पाँचौं अवतारमा आएर बल्ल मानवाकृति भेटिन्छ; सग्लो मानवत्वका रूपमा, तसर्थ संसारको पहिलो पुड्को मान्छे हुनुपर्छ भगवान् 'वामन' । उनी पछि क्रोधावतारका रूपमा 'परशुराम' देखिन्छन् भने सौम्यावतारका रूपमा 'श्रीराम'को अभ्युदय भएको छ । वाल्मीकिले श्रीरामको शारीरिक वयान रामायणको पहिलो सर्गमा नै गरेका छन्। 'आजानुवाहु' शब्द राखेर रामचन्द्रका हात घुँडासम्म छुन पुग्ने कुरा उल्लेख गरेका छन् महर्षि वाल्मीकिले । रामचन्द्रको सौन्दर्यको बयान पनि भलीभाँती छ *रामायण*मा । त्यसपछिका कृष्ण र बुद्धका पनि सौन्दर्यपरक शालीन बयान छन् पौराणिक ग्रन्थहरूमा । बुद्धका लामा कान र लामा हात भाग्यशाली सङ्केतक हुन् । सायद यी दशावतारबाट सिङ्गो जीवमात्रको मूल्याङ्कन गर्न पर्याप्त खुराक पाइन्छ तापनि म मान्छेमा त्यसमा पनि लेखकहरूमा पाइने आकारगत प्रभावमा केन्द्रित हुन लागेको छु। सन्दर्भमा अन्य क्षेत्रका केही व्यक्ति पनि परेका भने छन्। आफूले नदेखेका मानिसहरू को कति होचा र अग्ला थिए भन्न सकिन्न । तर इतिहासप्रसिद्ध पुरुष 'जङ्गबहादुरको बेलाइतयात्रा' पढेपछि जङ्गबहादुरलाई लेखक नमाने पनि लेखन-नायक त मान्नैपर्छ । किनभने उनको नामसित सम्बन्धित पुस्तक नेपाली निबन्ध साहित्यमा महत्त्वपूर्ण रूपमा रहेको छ ।

मैले देखेका केही पुड्का साहित्यकारहरू यस्ता छन् जसको साहित्यिक उचाइलाई कयौँ आकृतिगत अग्लाइले भेट्न सक्तैनन् । पुड्का मात्र होइन पातला मान्छेमा पनि बौद्धिक विलक्षणता हुन्छ भन्ने ठमाइ छ मेरो । होचा र पातला मान्छेका तुलनामा अग्ला र मोटाहरूमा बौद्धिक तीक्ष्णता कमी नै हुन्छ भन्ने मेरो 'सिम्बोलिक' परीक्षणगत अनुमान छ नेपालका सन्दर्भमा । म जति पनि मोटा र भद्दा ज्यानका मान्छे भेट्छु बहुधा तिनमा बौद्धिक रूपमा स्वाँठपन नै अग्रसर भएको देख्छु । आफ्नो कुरै नगरौँ । मोटा भईकन केही बाठा साहित्यकार देखेको छु उषा शेरचन, धुस्वाँ सायमी, सी.के. लाल, चट्याङमास्टर, धनुषचन्द्र गौतम, ध्रुवचन्द्र गौतम, मोहनराज शर्मा, भुवनहरि सिग्देल आदि । कदको कुनै कुरा नगरी सम्झनुपर्ने तीक्ष्ण प्रतिभा हुन् डा. माधव पोखेल र कमलमणि दीक्षित ।

हुन त बी.पी. कोइरालाले भैँसीको दूध खानेहरूभन्दा गाईको दूध खानेहरू बढी तीक्ष्ण बुद्धिका हुन्छन् भनेका छन् । यो खानपानसँग सम्बन्धित कुरो भयो । मासु खानेको भन्दा नखानेको बुद्धि तेजी देखिन्छ नेपालका सन्दर्भमा । सायद भारतमा पनि त्यही होला ? विदेशतिर शाकाहारी मानिसको ज्यादा अभाव हुने ठाउँमा जो तीक्ष्णता देखिएको छ त्यसमा के करामत छ त्यो खोजीको विषय हो । हुन त नेपालकै संस्कृतका एक होनहार विद्वान् पं. पद्मप्रसाद भट्टराई एक धार्नीसम्म मासु खान र पचाउन सक्थे रे । भारत र नेपालमा त्यस जमानामा उनीभन्दा ठूलो विद्वान् कोही थिएन । पं. नयराज पन्तको मासु ख्वाइ पनि बेजोडको थियो । शारीरिक पुड्कोपनभित्र बौद्धिक तेजीपन भएका मेरा आफ्नै ठूला बा पं. खगेश्वर न्यौपानेको पनि आफ्नै गुरु पं. नयराजको जस्तै बेजोड छ मासुसितको प्रेम । यी एक-दुई अपवाद हुन सक्छन् । पातलो र छरितो ज्यान भएका बी.पी. कोइराला आफू गाईको दूध नै खान्थे र उनी जत्तिको तीक्ष्ण बुद्धिको नेपाली मैले अर्को देखेको छैन । उनका सामु नेपालका जम्मै राजनेताहरू 'देख्नका डाल ढिँडाका काल' जस्तै लाग्छन् । मोटा मदन भण्डारीको बौद्धिकता अढाई वर्षमै टुङ्गिएकाले पूरा नाप्नै पाइएन । लिखुरे शरीरका अग्ला गिरिजाप्रसाद नै केही अघिसम्मको नेपालका 'लाटा देशका गाँडा तन्देरी' थिए । तिगडममा

उनलाई उछिन्ने कोही भएनन्। तर उनी पनि अर्काको सरकार ढाल्न जति तेजी छन् आफ्नो सरकार पाल्न त्यति नै लुरा छन्। प्रचण्डको शरीरको मोटोपनले उनको पनि बौद्धिक बुद्धूपन प्रकट गर्दै छ। सिकुटे र पुड्का बाबुराममा बौद्धिक तीक्ष्णता त छ तर पनि हुनपर्ने विलक्षणता देखिँदै छैन। गल्ती गर्दै आत्मालोचना गर्दै जीवन बिताएका र धोका दिन माहिर एमालेका नेताहरूको कुरै नगरौँ जुन रोग कम्युनिस्टहरूकै स्थायी रोग हो र अहिले त्यो रोग माओवादीहरूमा पनि सरेको छ। पुड्का कदका तर उच्च वाक्पटुत्व क्षमता भएका परशुनारायण चौधरीलाई पनि यही सम्झनु ठीक हुन्छ। बी.पी. कोइरालाजस्ता राजनीति र लेखनमा लागेका व्यक्तिको सन्दर्भमा मात्र यी अन्य क्षेत्रका नाम आएका हुन्। उनको प्रसङ्गमा आएका राजनेताको चर्चा यत्ति।

मैले यहाँ मुख्य रूपमा उठाउन खोजेको विषयचाहिँ नेपाली साहित्यका पुड्का लेखकहरूको आफूले जानेसम्मको नामावली दिनु नै हो। भानुभक्त, मोतीराम, लेखनाथ, देवकोटा आदिको शारीरिक कद कस्तो थियो त्यो देख्नेले बताउलान् नदेख्नेका लागि उनीहरूको शारीरिक उचाइ लुप्त भयो। तसर्थ अब लेखकहरूको इतिहास लेख्दा उनीहरूको होचाइ/अग्लाइ पनि हेर्ने कि ? भन्ने शोच पलाएको छ मेरो। जस्तो– कि नेपालभरिमा कलेजस्तरमा नेपाली विषय पढाउने प्राध्यापकहरूमा मैले बुझेसम्म सबैभन्दा अग्ला प्राध्यापकहरू थिए– बलदेव जुजु (सरस्वती क्याम्पस) र जगन्नाथ शर्मा त्रिपाठी (पद्मकन्या क्याम्पस) अहिले यी दुवै साहित्यकार सेवानिवृत्त भइसके। त्रि-चन्द्र क्याम्पसमा स्नातकोत्तर नेपाली विभागका संयोजक वासुदेव घिमिरेको ६ फिट १ इन्चको अग्लोपन पनि हेर्न लायकको छ। अग्ला भईकन ज्यादै सुन्दर र आकर्षक व्यक्तित्व थिए कवि दैवज्ञराज न्यौपाने, तर उनमा समयको तुसारोले छिर्का मारेर अहिले अस्वस्थ छन्। उनको स्वास्थ्यलाभ होस् यही कामना गरौँ। नेपालीकै प्राध्यापकद्वय भुवनहरि कोइराला र कुमार कोइरालाको अग्लाइ र मोटाइ पनि हेर्न लायक छ। त्यसो त अङ्ग्रेजीका ख्यातनामा प्राध्यापक अभि सुवेदीको ज्यान पनि हेर्न लायक अग्लो छ। उनलाई ज्ञट्ट हेर्दा अमेरिकन हुन् कि भन्ने भान पनि पर्छ। तर डा. श्रीधर लोहनी, डा. मोहन लोहनी, अर्को

ठाउँमा पनि चर्चा गरिएका डा. दुर्गा भण्डारी, हृषिकेश उपाध्याय लगायत थुप्रै अङ्ग्रेजी प्राध्यापकको पनि शारीरिक पुड्कोपनभित्र बौद्धिक अग्लोपन देखिएको छ ।

सायद नेपालका शारीरिक कदमा सबभन्दा होचा प्राचार्य थिए पं. छविलाल पोखेल । उनीभन्दा होचा विद्वान् संस्कृत क्षेत्रमा कोही थिएन र उनको बौद्धिक उचाइ भने देशव्यापी थियो । होचा भईकन उनी बलिया यति थिए कि धनकुटामा एउटा अत्यन्त बलिष्ठ मान्छेसँग लाप्पा खेल्दा उनैले पछ्नारे रे । दैनिक १ तोला घिउ र एक मानु गाईको दूध नित्य सेवन गर्ने छविलाल गुरुको शरीर होचो र खिरिलो भए पनि बल, उत्साह र सक्रियता भने बेजोडको थियो । नेपाली र संस्कृतमा अनेकौं कृति लेख्ने छविलाल पोखेल नमुनालायक बौद्धिक उचाइ बोकेका पुड्का व्यक्तित्व थिए । २००७ सालको क्रान्तिका योद्धा छविलाल गुरुले गरेका राजनीतिक, सामाजिक र धार्मिक क्रान्तिकारिता पनि त्यत्तिकै महत्त्वपूर्ण छन् । उनका क्रान्तिकारी शिष्य स्व. हीरालाल विश्वकर्मा पनि होचा बौद्धिक नै थिए । प्यूठानको खैरामा जन्मेर दाङ बसोवास गर्ने र दाङ नै कर्मथलो भएका प्रा. हरिप्रसाद आचार्य पनि होचा कदका अग्ला संस्कृतज्ञ हुन् । अहिलेका संस्कृत विश्वविद्यालयका उपकुलपति प्रा. विदुर पौडेलको पनि कद निकै होचो छ । विद्वत्ताचाहिँ अग्लै हो तर त्यसको सदुपयोग भने उनको राजनीतिक मोहले खाइदियो । त्यस्तै होचा प्राध्यापकहरूमा पर्छन् टङ्क न्यौपाने (धरान), कुमार आचार्य (विराटनगर), रमेश झा (त्रिचन्द्र), चूडामणि खनाल (पोखरा) र पौने पी.एच.डी. मा ख्याति कमाएका भानुभक्त पोखेल (विराटनगर) । यस्तै होचा प्राध्यापक अरू पनि होलान् तर यीभन्दा होचा प्राध्यापक पाउनु मुस्किल छ । टङ्क नयौपाने र चूडामणि खनाल भने राष्ट्रिय स्तरकै लेखकमा पनि पर्छन् ।

मैले जानेसम्म लेखकहरूमा सबभन्दा होचो कद भईकन सबभन्दा अग्लो बौद्धिक उचाइ बोकेका जीवित व्यक्तित्व हुन् इन्द्रबहादुर राई । उनका कृतिहरू धेरै पहिले पढेको भए पनि उनलाई मैले नजिकबाट देख्ने मौका पाएँ २०५५ सालको साउनमा दार्जिलिङमा । उनको कृतिगत उचाइ नापिनसक्नु छ तर शारीरिक होचाइ भने

नमुनालायक छ अर्थात् ज्यादै पुड्को कदका छन् उनी। उनको यो कद देखेपछि नै मैले केटाकेटीमै पढेको 'मोटो लामु भएर के छ र सखे ! चाहिन्छ तेजस्विता' भन्ने 'गुणरत्नमाला' को पद्यको वास्तविक तात्पर्य ठम्याएँ। नेपाल बाहिरका अन्य साहित्यकारहरूको शारीरिक पुड्कोपनसित म अपरिचित छु। तसर्थ सबैजसो नेपालभित्रकै व्यक्तित्वहरूको मात्र यहाँ चर्चा गर्छु।

अर्का होचा लेखक हुन् राजेश्वर देवकोटा। जो निकै चतुर राजनीतिक खेलाडी पनि हुन्। उनको होचो कद बारे त राष्ट्रिय पञ्चायतको अध्यक्ष हुँदाको एउटा मीठो जोक नै छ उनी एउटा गाडीमा झन्डा हल्लाउँदै सिंहदरबारतिर जाँदै थिए रे। विनासवारीको गाडीमा झन्डा फर्फराएको भनी ट्राफिकले रोकेर ड्राइभरको लाइसेन्स माग्दा पो पछाडि गाडीमा नदेखिने गरी बसेका राजेश्वरले जुरुक्क उठेर म यहीँ छु भनेपछि ट्राफिकले हत्त न पत्त सलाम ठोक्यो रे।

राजेश्वरको यति बयान गरेपछि लेखक तथा राजनीतिक क्षेत्रमा होचो कद बोकेका लोकन्द्रबहादुर चन्दलाई पनि यहीँ सम्झनु बेश होला ? अर्का होचा लेखक हुन् भुवनलाल प्रधान। उनी यति होचा छन् कि इन्द्रबहादुरलाई पनि उनका सामु निकै अग्ला मान्नुपर्छ। टङ्क न्यौपाने र भुवनलाल प्रधान को होचा छन् भन्न धौधौ पर्छ फित्तै लिएर ननापिकन। अहिले त कदमा पुड्का साहित्यकारहरू थुप्रै जन्मेका छन् थरेन्द्र बरालदेखि लक्ष्मण गाम्नागेंसम्म। त्यसो त देवेन्द्र भट्टराई र जयदेव भट्टराई के अग्ला छन् र ? पत्रकार राजेन्द्र दाहाल र पेशल पोखेलको पनि कद के पो ठूलो छ र ! तर यी दुई जनाको चातुर्यको अग्लाइसित म केही परिचित छु। हेर्दै र सम्झँदै जाने हो भने खगेन्द्र सङ्ग्रौला भन्दा लिखुरे र होचो दुवै बनोट नमुनालायक अरू कसको होला र ! तर जिरे खोर्सानी जत्तिकै पिरो छ बुद्धि भने। नेपालमा सबभन्दा दुब्ला प्राध्यापकचाहिँ रामप्रसाद भट्टराई र फणीन्द्र काफ्ले नै हुनुपर्छ। यस सन्दर्भमा नेपालकै दुई प्रखर बौद्धिक व्यक्तित्वहरू पुरुषोत्तम भट्टराई र दीर्घराज घिमिरेलाई नसम्झी हुँदैन। किनभने यी दुई विद्वान्हरू पनि ज्यादै दुब्लापातला र होचा छन् र त्यसको तुलनामा उनीहरूको विद्वता अतुलनीय छ। तर आफ्नो प्रतिभा चिनाउनै नखोज्ने उनीहरूलाई चिन्न निकै मेहनत गर्नुपर्छ।

विद्वत्ताका धनी यी दुई व्यक्तित्वलाई के नेपालले चिन्ने कोसिस गर्ला ?

भाषाशास्त्री बालकृष्ण पोखेल, डा. वासुदेव त्रिपाठी र मोदनाथ प्रश्रित पो कहाँ अग्ला छन् ? काला र मोटा भने हेर्न लायक छन् । २०४७ सालपूर्व मैले मोदनाथलाई देखेको थिइनँ । एक जना वामपन्थी मित्रसँग मैले यो कुरा गर्दा उनले भनेका थिए– तपाईं अलिकति होचिनुस् र कालिनुस् न; तपाईं आफैँ ठ्याक्कै मोदनाथ बन्नुहुन्छ । प्रशासनमा पसेका व्यङ्ग्यकार नरेन्द्रराज पौडेल हुन् वा बितिसकेका भैरव अर्याल हुन् सबैको कद छोटै; बुद्धि चौपट्टै । आरूबारीका रमेश विकल हुन् वा टङ्गालका रोचक घिमिरे हुन् अथवा दाङका बलदेव मजगैयाँ यी सबै लेखकहरू पुड्कैमा त पर्छन् । बरु ध्रुवचन्द्र गौतम न होचा न अग्ला छन् कदमा तर उपन्यासमा उनको अग्लाइ नापिनसक्नु छ । बूढा डायमनशमशेर पनि त होचै छन् उपन्यासका ठेली अग्ला भए पनि । दीक्षित परिवारमा मदनमणि पनि यही आकारभित्र अटाउँछन् । लेखक कम राजनीतिक बढीमा कमलराजको नाउँ पनि होचैमा पर्छ । नेपाली छन्द कविताका उज्ज्वल प्रतिभाहरू भरतराज द्वय (पन्त र मन्थलीय) पनि होचा उचाइमा नै पर्छन् ।

इन्द्रबहादुर राई जत्ति बौद्धिक उचाइ नभए पनि तीखो लेखनका धनी र मार्क्सवादी नेपाली साहित्यकारहरूले रत्न मान्ने श्यामप्रसाद शर्माको पनि शारीरिक होचाइ कम हेर्न लायक छैन । त्यसो त पोखराका विजय वजिमय पनि होचै छन् कदमा; त्यसमा भगवान्ले उनलाई अरू होचो पारिदिएको छ । उनको सुस्वास्थ्य र सुदीर्घ जीवन रहोस् नेपाली साहित्यको उन्नतिका लागि । डा. दुर्गा भण्डारी र डा. दुर्गा अर्यालको नाम मैले यहाँ छुटाउनुहुन्न । उनीहरू होचा भईकन मोटा छन् र मोटा भईकन तीखो बुद्धिका छन् । उनीहरू आफूले नजानेकै कुरा पनि अन्दाजका भरमा ठोकर जानेको जस्तो पार्न सिपालु पुड्का छन् । बौद्धिकतापूर्ण र मिठासपूर्ण व्यङ्ग्य उनीहरूको लेखनको उच्चता हो । पुड्काहरूको चर्चा गर्दा प्रसिद्ध समालोचक तथा प्राध्यापक केशवप्रसाद उपाध्याय र कृष्ण गौतमको बौद्धिक उच्चता चाहिँ बिर्सिनसक्नु छ । प्रा.डा. हरिप्रसाद पराजुलीको

कद पनि त्यस्तो अग्लामा पर्दैन । त्यस्तै पुड्का राधेश्याम भट्टराई, लालगोपाल सुवेदी, युवराज नयाँघरे, श्रीहरि फुँयाल, श्रीहरि रुपाखेती, रामबाबु सुवेदी र कृष्ण धरावासीलाई म कसरी बिर्सूँ र । अर्का पुड्का हुन् प्रा. मधुसूदन गिरी जो छुपेरुस्तम पारामा अफ्नो बौद्धिक उचाइ बढाउँदै छन् । डा. राजेश गौतम र डा. रामदयाल राकेश पनि यही मेलोमा आउँछन् ।

यत्रोविधि पुड्का लेखकहरूको चर्चा गरेपछि मैले नेपालका नारी-लेखिकाहरूलाई पनि छुटाउनुहुन्न। सामान्यतया नारीहरू पुरुषभन्दा होचै हुन्छन् तापनि कयौँ नारीहरूको शारीरिक उचाइ हेर्न लायक हुन्छ । कतिपय होचा पुरुषका अग्ला भनिएका श्रीमतीहरू पनि पुरुषभन्दा होचा पाइएका छन् । ज्यादै पुड्का श्रीमान्का श्रीमती भने महिलाको 'स्टेन्डर्ड साइज' मा छन् भने ती होचा पुरुषभन्दा त्यस्ता नारीहरू अग्ला नै हुन्छन् । महिलाहरूको सामान्य साइज भनेको ५ फिट ४ इन्च हो त्यसभन्दा होचालाई यहाँ राख्न खोजेको छु । हुन त मैले महिलाको शारीरिक उचाइ वा पुड्काइलाई फित्ता लगाएर नापेको छैन । तैपनि मनको फित्ताले हेर्ने कोसिससम्म गरेको हुँ । जसरी होचा पुरुषको चर्चा गर्नेबित्तिकै मेरा मनमा सर्वप्रथम पं. छविलाल पोखेल, डा. स्वामी प्रपन्नाचार्य, इन्द्रबहादुर राई, राजेश्वर देवकोटा, श्यामप्रसाद शर्मा, भुवनलाल प्रधान, टङ्क न्यौपाने आदिका अनुहार आइपुग्छन् भने होचा महिलाको चर्चा गर्नुपर्दा भने सर्वप्रथम मेरा मनमा आइपुगिन् साहित्यकार रमा शर्मा । उनको स्मरण हुनासाथ माथि पुरुष पुड्कामा छुटेका गोपाल पाण्डे असीम पो मनभित्र झल्के । उनको मैले धेरै वर्ष सङ्गत गरेँ, हामी दुवैको दोहोरो चिनजान मात्र होइन असीमज्यूको मप्रति अपार स्नेह पनि थियो । मेरो एम.ए.को शोधपत्र लेख्ने सन्दर्भमा असीमज्यूले लगाएको गुन अविस्मरणीय छ । उनी पनि होचा कदका अग्ला बौद्धिक साहित्यकार थिए । बाबुको त्यो पुड्काइ उनका अरू छोरीमा भन्दा बढी रमा शर्मामै सरेको छ । मेरो नजरमा दोस्री पुड्की नारी आउँछिन् तोया गुरुङ । उनको कवित्वको उचाइका सामु शारीरिक होचाइ भने हेर्न लायक छ । त्यसो त नेपालमा महिला साहित्यकारहरूको सङ्ख्या अझै थोरै नै छ । तसर्थ फटाफट पुरुष

पुड्काजस्तो गरी महिला पुड्कीहरू मेरा दिमागमा आउन सक्तैनन् । देवकुमारी थापा, अन्जु दीक्षित, ओमी शर्मा, प्रभा भट्टराई, कुन्ता शर्मा, मञ्जु काँचुली, सुधा त्रिपाठी आदि साहित्यकारहरू महिलाको ठीक साइजमै छन् । बरु मञ्जु काँचुली भन्दा वेन्जु शर्मा होची छिन् । वानिरा गिरीलाई न होची न अग्ली मान्नुपर्छ । पुराना साहित्यकारमा स्वर्गीय गोमा शर्माको पनि कवित्वको उचाइका सामु शरीरको उचाइ कमै थियो । शारदा शर्मा, इन्दिरा प्रसाईं आदि लेखिकाहरू आफ्ना साइजमा छन् न होचा न ज्यादै अग्ला ।

यत्राविधि पुड्का बौद्धिकहरूको चर्चा गरिसकेपछि मलाई के लाग्छ भने साहित्यकारहरूको इतिहासलेखन, तिनीहरूको इतिवृत्त दिँदा उनीहरूको उचाइ, होचाइ, मोटाइ र दुब्लाइ पनि उल्लेख हुनुपर्छ अबदेखि । हुन त मैले एकचोटि राजनीतिक सन्दर्भमा मन्त्रीहरूको सम्पत्ति विवरण दिँदा तौल विवरण पनि राख्नुपर्छ भनेको थिएँ । तर कि मन्त्री हुनुपूर्व उसको तौल र मन्त्री भएको वर्षदिन पछि उसको तौल वृद्धिले उसको भ्रष्टाचारको नापो लिन सकिन्छ भनेर । तर यहाँ साहित्यकारहरूको त्यो नापोचाहिँ इतिहासको अध्ययन र अनुसन्धानमै काम लाग्ने देखिन्छ । उदाहरणार्थ श्री सत्य साइबाबाको तौल १६ वर्षमा पनि ५४ के.जी. थियो रे र ७६ वर्षको हुँदा पनि त्यति नै थियो । त्यसबीचमा उनको तौल सधैँ यथावतै रह्यो रे । अहिले हामीसँग भानुभक्त, पृथ्वीनारायण, बाबुराम आचार्य आदिको नापोको अभिलेख हुँदो हो त त्यसको अनुसन्धानको मजा अर्कै हुन्थ्यो । ५.५ इन्चको आफू भएकाले मैले आफूभन्दा होचा कदकालाई पुड्का र आफूभन्दा अग्लालाई अग्ला भनी फिता लगाएकोमा क्षमा हुने नै छ । ज-जसको नाम कलमी फित्ता लगाएर यहाँ नापियो तथा ज-जसको नाम विस्मृतिका कारण यस लेखबाट धपियो ती सबैले आ-आफ्नो साइजमा आफैँ एकएक ओटा लेख तयार पार्नुभएमा 'पुड्का लेखकहरूको अग्लो बुद्धि' शीर्षकको एउटा ग्रन्थ नै तयार हुन्छ नि होइन र !

ज्योतिषीहरू हात हेरेर मान्छेको भविष्य बताउँछन् तर भोजपुर दिल्पाका परशुराम राई आँखा हेरेर मान्छेको भविष्य बताउँथे । हिँडाइ, बोलीचाली, दाँतका छिद्र, पैतालाको बनोट, औँलाको बनोट,

नङको आकार, केशको लम्बाइ आदि थुप्रै छन् मान्छेको विश्लेषण गर्न सकिने कुराहरू । तीमध्ये एउटा नाकको बनोट पनि हो । पाठकहरूले इतिहासकार ज्ञानमणि नेपाल, प्रा.शिवराज आचार्य र कवि रमेश खकुरेहरूको नाक हेर्नुभयो भने अवश्य विलक्षणताको चमत्कार पाउनुहुनेछ– सुगानाकेहरूमा विद्वत्ताको बाढी आउँछ भनेर । त्यसैगरी अग्ला र ठिक्क कदकाहरूमा भन्दा पुड्काहरूमा बौद्धिक अग्लाइ हुन्छ भन्ने करिब-करिब प्रमाणित भएको छ । साहित्यकार ध्रुव मधिकर्मी, गीतकार गणेश रसिक, भूगोलवेत्ता स्व. हर्क गुरुङ, धरानका काङ्ग्रेस नेता र साहित्यकार गिरिराज आचार्य, धरानकै पत्रकार हर्ष सुब्बा, इलामका तिखा कवि श्यामकृष्ण श्रेष्ठ आदिहरू आ-आफ्नै ढङ्गका पुड्के शरीरका अग्ला व्यक्तित्व हुन् ।

अन्तमा छविलाल पोखेल र इन्द्रबहादुर राईको शारीरिक पुड्काइ र बौद्धिक अग्लाइबाट प्रभावित भई दिमागी दौडका कुदेको मेरो कलमले यहाँ धेरै महिला र पुरुषहरूको शारीरिक पुड्कोपनमाथि चर्चा गर्नुपरेकोमा मेरो कलमबाट कसैको मस्तिष्कमा रोषको दोष नआओस् बरु साहित्यिक उचाइ अरू थप्ने जोस आओस् भन्ने कामना गर्दछु । स्वर्गीय भइसकेका लेखकहरू स्वर्गमा लेखन चमत्कार देखाउन सकून् र जीवितहरू मर्त्यमा चमत्कार देखाउन सकून् यही हार्दिक शुभ-कामना ।

# नेपाली पत्रपत्रिकाको इतिहासमा साहित्यिक पत्रकारिता : एक चर्चा

*– डा. खेमनाथ कोइराला*

## १. विषय प्रवेश

नेपाली साहित्यिक पत्रकारिताको इतिहास नेपाली पत्रकारिताको इतिहासभन्दा पुरानो छ । यसै क्रममा प्रस्तुत लेखमा नेपाली साहित्यिक पत्रकारिताको प्रारम्भ र विकासको सङ्क्षिप्त चर्चा गरिएको छ । एक सय दस वर्षको इतिहासमा नेपाली साहित्यिक पत्रकारिता अहिले पनि आर्थिक सङ्कटले गुज्रिरहेको तथ्य स्पष्ट छ । यसै क्रममा नेपाली साहित्यिक पत्रकारिताको चर्चा गर्दै यसको सुखद भविष्यका लागि साहित्यिक पत्रकारहरूको अथक परिश्रम र सरकारको उदारतापूर्ण सहयोग जरुरी रहेको कुरा उल्लेख गर्नु यहाँ सान्दर्भिक हुन्छ ।

## २. साहित्यिक पत्रकारिता प्रारम्भ

नेपाली पत्रकारिताको प्रारम्भ नेपाली साहित्यका कवि मोतीराम भट्ट र उनका सहयोगीहरूको सुप्रयासको फलस्वरूप भारतको बनारसबाट रामकृष्ण बर्माको सम्पादकत्वमा १९५० (१९४४ ? सं.) मा प्रकाशित *गोरखा भारत जीवन* नामक मासिक पत्रिकाबाट भएको हो । हास्य, ठट्टा र बुद्धिचातुर्यका कुराका अतिरिक्त साहित्यको सेवा गर्ने उद्देश्यले यो पत्रिका प्रकाशित भएको थियो । नेपाली भाषामा निस्केको मात्र नभएर नेपाली पत्रकारिताको इतिहासमा नै यो पत्रिका ब्रह्ममुहूर्त भएको कुरा आजसम्मका हाम्रा खोजीले बताउँदछन् तर यो जन्मनेबित्तिकै यसलाई आर्थिक सङ्कटले छोप्यो अनि यो धेरै दिन बाँच्न सकेन । सञ्चालनमा आर्थिक कठिनाइले कसरी भाँजो हालेको रहेछ र तात्कालिक स्थिति कस्तो रहेछ भन्नेसमेत तलको भनाइले स्पष्टत: थाहा पाउन सकिन्छ :

*“यो बडो खुसीको बात भयाको छ कि हाम्रा गोर्खा भाषामा पनि ५५ साल श्रावण मैना देखिन् ‘सुधा सागर’ भन्या मासिक पत्र*

*निस्क्याको छ । जस्मा अनेक तरहका विघ्न आनन्द दिन्या श्लोकहरू हाली प्रकाश हुन्छ । यसमा हाम्रो गोर्खाली सज्जन महाशयहरूले आफ्नो देश अफ्नो भाषाको उन्नतिका निमित्त अवश्य दृष्टि गर्नु हुन्येछ । मधिसेहरूका हजारौं पत्र निस्कन्छन् तापनि एक दो अखबारका दश हजार वार हजार ग्राहक छन्- भन्या हाम्रा गोर्खामा फगत एक मात्र छ रून् यसमा ता सबै हाम्रा स्वदेशीय महासयहरू सबैले जाबो कम पनि १ ॥ रूपैयाँ मात्र देशोन्नति भाषाको उन्नति गर्नाका निमित्त ग्राहक श्रेणीमा अवश्य नाम लेखाउनुपर्छ किन भन्या यो मासिक पत्र तपाईंहरूबाट मद्दत नगर्दिनाले कथं कदाचित् बन्द भयो ग्राहक कम भया भन्या मेरो मात्र नोक्सान पार्न्या होवैन कि तापाईंहरूलाई पनि केही सरम होला ।"*

यसरी सर्वप्रथम कविता कथा प्रकाशित नेपाली पत्रकारिताको ब्रह्ममुहूर्तमा आर्थिक सङ्कटको चोट पर्छ अनि यो बन्द नै हुन्छ केही अङ्क प्रकाशित भएर । अशिक्षित र ज्ञानको लागि कृतघ्न नेपाली समाजमा अरण्यरोदन गरेर यो पत्रिका मरे पनि १९५५ सालमा काठमाडौं पशुपति छापाखानाबाट मोतीराम भट्टकै सत्प्रेरणाको फलस्वरूप पं. नरदेव मोतिकृष्ण कपिलदेवको परिश्रममा निस्क्यो तर यो मासिक पत्रिका पनि चिरञ्जीवी बन्न सकेन- आर्थिक कठिनाइको कारणले। नेपाली पत्रकारिताको इतिहासमा गौरवमय रूपमा नेपालबाट नै निस्केको यो पहिलो पत्रिका हो ।

यसपछि नेपाली पत्रकारितामा तेस्रो र नेपालबाट दोस्रो पत्रिका भएर १९५८ मा जन्मने सौभाग्य *गोरखापत्र*ले पायो । प्रारम्भदेखि नै समाचार पत्रको रूपमा प्रकाशित भएकोले नेपाली पत्रकारितामा प्रथम हुने यही पत्रिका हो । प्रथम साप्ताहिक भएर जन्मने *गोरखापत्र* २००० असोज २९ देखि अर्ध साप्ताहिकको रूपमा, २००३ पौष ८ देखि हप्तामा तीन पटके भई २०१७ साल फागुन ७ गतेदेखि राष्ट्रिय दैनिक पत्रको रूपमा प्रकाशित हुन थाल्यो । नेपाली पत्रकारिताको इतिहासमा *गोर्खापत्र* नै यस्तो पत्रिका हो जो प्रारम्भदेखि नै आजसम्म निरन्तर निस्की नेपाली समाजको सेवा गर्दै छ । गोर्खापत्र नै यस्तो पत्रिका हो जो नेपालबाट आजसम्म निस्कने कुनै पनि पत्रपत्रिकाभन्दा लामो आयु भएका बढी बिक्री हुने गर्दछ । *गोरखापत्र*

नै यस्तो प्रथम अखबार हो जसले सरकारी प्रकाशनका रूपमा निस्कने मौका पायो ।

'जुन देशमा राजा र प्रजाहरूका मनको आशय झल्काई देशमा भएको सुख दु:ख, धर्म, कर्म, व्यापारी, चाकरी खेतीजस्ताको तस्तो लेखी थाहा दिने अखबार छैन त्यस देशको बेठ बढ्ती कहिल्यै हुन सक्दैन' भनी (१९५८ ज्येष्ठ १०) प्रकाशित गोरखापत्र सरकारी प्रकाशन भएर पनि आफ्नो लामो जीवनमा बाँच्नको लागि सङ्घर्ष गर्दै विभिन्न मुद्रित-अमुद्रित सम्पादकहरू फेर्दै र साहित्य, कला, राजनीतिजस्ता विषय दिँदै आज गोरखापत्र कर्पोरेसन नेपाली समाज र नेपाली जनताको निम्ति व्यापक विषय प्रदान गर्न लागेको छ ।

भारत प्रवास सन् १९०१ मा *गोर्खे खबर कागज* भाषासेवी पादरी गङ्गाप्रसाद प्रधानको सम्पादकत्वमा मासिक पत्रिका निस्क्यो । क्रिश्चियन धर्मको प्रचार गर्ने उद्देश्यले यो पत्रिका प्रकाशित भए पनि भाषा प्रचारको दृष्टिले ठीकै मान्नुपर्दछ, यद्यपि यसको भाषा परिष्कृत छैन । यसैबेला काशीबाट पं. एस.एस. शर्मा (सदाशिव शर्मा ? ले.) को सम्पादकत्वमा *उपन्यास तरिङ्गणी* (१९५९) मासिक पत्रिका निस्क्यो । प्रति महिना निस्कने 'नाना तरहका उपन्यास प्रकाशित गर्न्या' यस पत्रिकाले पनि आवश्यक ग्राहक पाउन नसकी आफ्नो दोस्रो अङ्कमै 'आज हामी मातृ (गोरखा) भाषा जगतमा आधार नपाई रुँदी छुँदी घर-घर शरण माग्दै फिर्दछिन् तापनि श्रीमान्बाट यिनको एक नागरीलाई सर्वगुण नै आ गरी तरुण कामिनीका तुल्य आनन्द दायिनी जानी-सेवन गर्न लाग्नु भयाको देखी त्राहि ! त्राहि ! भगवान् भन्दी- आफ्ना दुई हात आकाशतिर उठाई तपोवनका वायुमा लीन हुन आँटेकी छुँदी कौरवका सभामा द्रुपद राजाले उस परम ब्रह्म परमात्माको स्मरण गरी विलाप गरेझैं गरी यी पनि प्रभुको स्मरण गरी विलाप गर्दै छुँदी प्रभुका चरणमा शरण परेकी छन् प्रभु जो दया' भनी अरण्य रोदन गरेको कसैले नसुनेकोले बन्द भयो । यसै क्रममा यो बन्द भएपछि १९६१ मा बनारसबाट नै *सुक्तिसुधा* नाम पत्रिका निस्क्यो । यो पत्रिका संस्कृतमा नेपालीहरूद्वारा प्रकाशित प्रथम

पत्रिका भएकोले नेपाली पत्रकारिताको इतिहासमा यसको आफ्नै प्रकारको गौरवपूर्ण स्थान रहेको छ ।

१९६३ असार र १९६५ कात्तिकदेखि क्रमश: *सुन्दरी* र *माधवी* मासिक पत्रिकाहरू प्रकाशित हुन्छन् । यी दुवै पत्रिका नेपाली साहित्यिहरूले निकालेका हुनाले नेपाली साहित्य र भाषा दुवैको इतिहासमा यी दुवैको महत्त्वपूर्ण स्थान छ । झन् भाषासम्बन्धी यी दुवैको वादविवाद त रोचक छ। नेपाली पत्रकारिताको इतिहासमा यो शायद पहिलो वादविवाद भएकोले झन् उल्लेखनीय बनेको छ। प्रथम पत्रिका सोमनाथ, चक्रपाणि र देवीदत्तको सम्पादनमा निस्क्यो भने दोस्रो मातृकाप्रसादको उपनाममा राममणिको सम्पादनमा । दोस्रोको भाषा- "हामरी नेपाली भाषामा न कोई वेश व्याकरण छ, न कोई वेश कोश छ, न कोई विशेष उपयोगी विषयका पुस्तकहरू छापिएका छन् । ती सब अभावको पनि यथासम्भव पूर्ति गर्ने विचार गर्दछु" भन्ने यस पत्रिकामा गद्य र पद्य दुवैको स्थान समानरूपमा सुरक्षित रहेको थियो । वनारसबाटै सं. १९७१ मा माधवप्रसादको सम्पादनमा *चन्द्र* मासिक निस्क्यो । यसले जन्मकालमा नै– "नेपाली भाषा सबैभन्दा पछि छ। यद्यपि यो भाषा बोल्नेहरूको सङ्ख्या लाखौँ छ, अङ्ग्रेज, फ्रेन्च, जर्मन इत्यादि जो अन्य देशमा बस्नेहरू छन् तिनको उन्नतिको कारण तिनको देशी भाषा हो" भनेको छ तर आर्थिक कठिनाइले १२ अङ्कको शैशवावस्थामा यो मृत्यु शय्यामा पुग्यो । १९७५ मा खर्साङबाट पारसमणि प्रधानको सम्पादकत्वमा *चन्द्रिका* (मासिक) भाषा र साहित्य सेवाको उद्देश्यले प्रकाशित भयो । यसै क्रममा यसभन्दा अघि नै सूर्यविक्रम ज्ञवालीको सम्पादनमा 'गोर्खाली' (१९७२) मा साप्ताहिक प्रकाशित भयो । प्रवासबाट सर्वप्रथम प्रकाशित यस साप्ताहिक पत्रिकाले 'हिमालय प्रेस' नामक आफ्नै छापाखाना खोली पत्रिका प्रकाशित गरे पनि नेपाली भाषाको महत्तालाई गणना गराई कलकत्ता विश्वविद्यालयमा नलागेकोमा दु:खी बनी यसका प्रचार र प्रसारको महान् उद्देश्य रहे पनि ४८ अङ्कको प्रकाशन ३०० सम्म पनि ग्राहक नभई अर्थाभावले बन्द भयो। यही पत्रिका श्री एल.पी. शर्माको सम्पादनमा केही दिन प्रकाशित भयो । १९७६ मा *गोर्खाली* नामबाट नै मणिसिंह गुरुङको सम्पादनमा केही

महिना निस्केपछि यो सदाको लागि बन्द भयो। १९७९ मा ज्ञवालीको सम्पादकत्वमा नै *जन्मभूमि* को प्रकाशनले नेपालीहरूमा एकता, जागृति र आह्वानमा सघाउ मात्र पुऱ्याएन अपितु भाषा र साहित्यको विकासमा पनि टेवा दियो ।

१९८३ मा देहरादुनबाट अङ्ग्रेजीमा *हिमालयन टाइम्स* र नेपालीमा *गोरखा संसार* प्रकाशित भए । साहेब नरेन्द्र र ठाकुर चन्दनसिंहद्वारा सम्पादित यी पत्रिकामध्ये नेपालीहरूद्वारा सम्पादित प्रथम नेपाली पत्रिका थियो भने दोस्रोचाहिँ भाषा र साहित्यको सेवामा ज्यादै बेजोडदार थियो । २ वर्ष कलिलो उमेरमा *गोर्खा संसार* रोकिएको *तरुण गोर्खा* (१९८५) साप्ताहिक प्रकाशित गरियो । यसभन्दा अघि नै १९८४ मा जगतमानको सम्पादनमा कलकत्ताबाट *बौद्धिक इन्डिया* नामक पत्रिका निस्क्यो। यसभन्दा केही अघि नै कवि शम्भुप्रसाद ढुङ्गेलको सम्पादकत्वमा *राजभक्ति* (साप्ताहिक, १९८३) प्रकाशित भइसकेको भए पनि यो १९८५ सम्म मात्र चल्छ। १९८७ मा शेषमणि प्रधानको सम्पादकत्वमा *आदर्श* (मासिक), १९८९ मा पद्मप्रधान दार्जीलिङद्वारा *नेपाली साहित्य सम्मेलन,* के.डी. प्रधानको सम्पादकत्वमा ‘आदर्श’ र ‘परिवर्तन’ (मासिक) १९९१ मा र शिलाङ्गबाट *गोरखा सेवक* (१९९२) प्रकाशित हुन्छन् । यसै क्रममा कलकत्ताबाट १९८२ मा *बुद्ध धर्म* नामक नेवारीमा प्रकाशित पत्रिकाको उल्लेख नगर्नु विविधताको दृष्टिले अन्याय हुन्छ। माथिका पत्रपत्रिकामध्ये सेवाको उल्लेख नगर्नु विविधताको दृष्टिले अन्याय पर्छ । माथिका पत्रपत्रिकामध्ये सेवाको खास भावना भइभई पनि मर्नेहरूमा *आदर्श, नेबुला* हुन् । *गोर्खा संसार, तरुण गोर्खा, ‘राजभक्ति* जस्ता पत्रिकालाई राजनैतिक नै मान्नुपर्छ। यस लेखकको विचारमा *गोर्खा संसार* नै यस्तो पत्रिका हो जो नेपाली पत्रकारितामा पार्टी वा सङ्घसंस्थाको प्रथम पत्रिका मात्र होइन, प्रथम राजनैतिक पत्रिका पनि हो । अऊ त्यतिमात्र नभएर राणाको निरङ्कुशताको आलोचना गर्ने प्रथम पत्रिका यही हो ।

वि.सं. १९९१ मा सुब्बा ऋद्धिबहादुर मल्लको सम्पादनमा ‘शारदा’ मासिकको प्रकाशन भयो । यसैदेखि नेपाली साहित्यको विकासको क्षेत्रमा ठूलो काम भयो । *शारदा* नै यस्तो साहित्यक

पत्रिका हो, जो २०/२२ वर्षसम्म बाँचेर सयौँ साहित्यिकहरूलाई हुर्काउन, बढाउन र अरू जन्माउनसमेत सफल भयो। यसले भाषा र साहित्यको क्षेत्रमा नयाँ हलचल ल्यायो। नेपालबाट तेस्रो भई जन्मने पत्रिकाको श्रेय पनि यसैले पायो। यसपछि शिलाङ्गबाट १९९२ पौषमा मणिसिंह गुरुङको सम्पादनमा भाषा र साहित्यको सेवाको दृष्टिले *गोर्खासेवक* साप्ताहिक निस्क्यो, यो ३ वर्ष, सङ्ख्या ३७ निस्केपछि आफैँ अल्प्यो । यसपछि काठमाडौँबाट चौथो भएर *उद्योग* पाक्षिक (१९९२) सूर्यभक्तको सम्पादकत्वमा प्रकाशित हुन्छ । *उद्योग* नै नेपाली प्रथम पाक्षिक पत्रिका हो। यसले निकै समयसम्म भाषा र साहित्यको सेवा गऱ्यो । यसै सन्दर्भमा १९९३ मा काशीबहादुर श्रेष्ठको सम्पादनमा प्रकाशित *उदय* लाई निकै महत्त्वपूर्ण मान्न कर लाग्छ। *शारदा* २० वर्ष चलेर ठम्म सुत्यो भने *उदय* १४ वर्षे लाठे बनेर चुप बस्यो । आफ्नो सेवाका सन्दर्भमा *शारदा*ले 'लेखक विशेषाङ्क' निकालेर सर्वप्रम नयाँ परम्पराको प्रादुर्भाव गऱ्यो भने *उद्योग*ले 'उद्योग' अङ्क निकालेर नवीन प्रवृत्तिलाई नेपाली पत्रकारितामा हुल्यो। (यसै क्रममा १९९३ मा काशीबहादुर श्रेष्ठको सम्पादकत्वमा 'उद्योग' मासिक प्रकाशित भयो, जसको साहित्य सेवामा निकै महत्त्वपूर्ण स्थान छ ।) यसपछि शेषमणि प्रधानको सम्पादकत्वमा प्रकाशित *गाउँ सुधार* १९९६ कालिम्पोङबाट, तेजबहादुर र छविकान्तको सम्पादनमा *सर्वहितैषी* १९९७ बनारसबाट, भीमनिधि तिवारीको सम्पादनमा *घरेलु इलम पत्रिका* (२००४) काठमाडौँबाट तथा एस.पी. प्रधानको सम्पादकत्वमा कलकत्ताबाट *उत्थान* पाक्षिक (२००४), भिक्षु अनिरुद्रको सम्पादनमा *धर्मोदय* (मासिक) प्रकाशित भए।

हृदयचन्द्रसिंहको सम्पादकत्वमा काठमाडौँबाट *साहित्य स्रोत* (२००५), बुद्धिसागर, ऋषभदेव, शेषराजको सम्पादकत्वमा *आँखा* (२००६), दार्जीलिङबाट नरेन्द्रकुमार प्रधान सम्पादित *पुकार* (मासिक), *गोर्खा समाचार* (२००३), कलकत्ताबाट बी.लाल, श्रीभद्र शर्मा, राजेश्वर देवकोटा, रामराज पौड्याल, शंकरप्रसादको सम्पादनमा *नेपाल पुकार* (२००५) र कालिम्पोङबाट *गोर्खा* (२००६), दार्जीलिङबाट *कथा* (मासिक) २००६ र पारसमणिको सम्पादनमा *भारती* र टी. मेननको सम्पादकत्वमा *साथी* (साप्ताहिक) तथा कलकत्ताबाट टी.

सत्यनारायणको सम्पादनमा प्रकाशित *नेपाल टुडे* जस्ता धेरै पत्रपत्रिका प्रकाशित भए । यसरी प्रकाशित हुने यी पत्रिकाहरूमध्ये महाकवि देवकोटाजीको सम्पादनमा निस्केको *युगवाणी* (२००४) क्रान्तिकारी विद्रोहपूर्ण देखापर्छ भने *उदय* विशुद्ध साहित्यको सेवामा संलग्न देखापर्छ । यस्तै *साहित्य स्रोत* पनि साहित्य सेवा र चेतनाको दृष्टिले कम देखिँदैन ।

प्रथम नेपाली पत्रिका *गोर्खा भारत जीवन* मासिक हो भने सर्वप्रथम समाचारपत्र *गोरखापत्र* साप्ताहिक नै हो । *गोर्खा भारत जीवनी* बनारसबाट प्रकाशित भएकोले प्रथम नेपाली पत्रिका हुने श्रेय *सुधासागर*ले प्राप्त गर्‍यो । तर प्रथम दैनिक हुने श्रेय चाहिँ २००७ सालको क्रान्तिसँगै आवाज निकाल्न पुग्ने सिद्धिचरण र गोविन्द गोठालेको सम्पादनमा निस्कने *आवाज*ले पायो । नेपालको प्रथम हस्तलिखित पत्रिका भने विराटनगरबाट प्रकाशित *चन्द्रोदय* (१९८८) (कृष्णप्रसाद कोइरालाद्वारा सम्पादित) हो र यस लेखकको विचारमा राजधानी बाहिरबाट निस्कने यो प्रथम पत्रिका हो। नेपाली बुलेटिनको प्रारम्भ भने नेपाल सोसलिस्ट सोसाइटीको प्रकाशकत्वमा निस्केको २००७-११-७ मा *हाम्रो बुलेटीन* देखि नै हो । सम्मिलित भाषाको पत्रिकाको रूपमा प्रवासबाट *नेबुला* निस्के तापनि *जनचेतना* (२००८) काठमाडौँबाट प्रकाशित नेपाली-नेवारी मिश्रित पत्रिका नै सर्वप्रथम हो । महिलासम्बन्धी प्रतिनिधित्व गर्ने पत्रिकाको रूपमा २०१५ सालतिर प्रकाशित *महिला* पत्रिका हो। राजनैतिक संस्थाबाट प्रकाशित प्रथम पत्रिका भने नेपाली काङ्ग्रेसको मुखपत्र *नेपाल पुकार* नै प्रथम हो । शिक्षण संस्थाबाट प्रकाशित प्रथम पत्रिका *प्रौढ शिक्षा* हो भने मित्रराष्ट्रहरूबाट नेपाली प्रकाशित प्रथम पत्रिका भारतद्वारा प्रकाशित *गोरखा समाचार* नामक नेपाली रोमन साप्ताहिक नै हो। काठमाडौँबाहिरबाट मुद्रितरूपमा प्रकाशित पत्रिका यही हो ।

नेपाली पत्रपत्रिकाको इतिहासमा दर्ता राख्ने चलन *शारदा* साहित्यिक मासिकबाट भएको हो, जसको दर्ता नं. १९९४ मा १ थियो भने सरकारी प्रकाशन *गोरखापत्र* को द.नं. २ रहेको थियो ।

## ३. साहित्यिक पत्रकारिताको विकासमा चुनौती

*गोरखा भारत जीवन* (१८४३) नामक प्रवासमा प्रकाशित पत्रिकादेखि लिएर आजसम्मको यात्रामा नेपाली पत्रकारिताको विकासको चुनौतीमा साहित्यिक पत्रिका सङ्कटपूर्णरूपमा गुज्रिरहेको वस्तुस्थिति छ । *प्रगति* (२०१०), *रूपरेखा* (२०१८), *रचना* (२०१८), *मुकुट* (२०१९), *हिमानी* (२०१९), *भानु* (२०२०), *रत्नश्री* (२०२०), जस्ता पत्रिका या त मरे या थला परेर बेलाबेलामा अलिअलि हिँडिरहेछन् । *अभिव्यक्ति, जनमत, दायित्व, मिर्मिरे, उन्नयन, बगर, तन्नेरी,* 'जुही', *सुगन्ध, सगर, प्रलोक, सांग्रीला, कविता, प्रज्ञा, समकालीन साहित्य, समष्टि, गरिमा, मधुपर्क* आदि पत्रिका कुनै न कुनै सञ्चालित भए पनि ती सबैको आयुको बारे किटानी गर्न सक्ने स्थिति छैन । नेपालमा हाल २०६१ को रेकर्डअनुसार दर्ता भएका ३७३७ विभिन्न दैनिक, साप्ताहिक पत्रिकाहरूमध्ये कतिकति जीवित छन् ? भन्ने प्रश्न उठ्न सक्छ। यीमध्ये कति पूर्ण साहित्यिक छन् र कति अर्धसाहित्यिक र कति विविध मनोरञ्जनात्मक वा विभिन्न विषयगत छन् भन्ने पनि अध्ययन हुन सकेको छैन। संस्थागत प्रकाशित गोप, साझा, प्रज्ञा र राष्ट्र बैंक अन्यका प्रकाशनहरूलाई दिगो बनाउनुपर्ने आवश्यकता छ। यहाँनेर उल्लेख्य कुरा साहित्यिक लेखरचनाको प्रकाशन दैनिक र साप्ताहिक संस्थाको मुखपत्र र सामयिक सङ्कलनले पनि प्रकाशन गर्ने भएकाले साहित्यिक पत्रकारिता विकास हुन नसकेको भान हुन्छ ।

साहित्यिक पत्रकारिताको विकासमा २०२८ मार्ग १ गते खेम कोइरालाको सभापतित्व, रामचन्द्र भट्टराईको उपसभापतित्व र नृपेन्द्रपुरुष यादीको सचिवत्वमा बनेको साहित्यिक पत्रकार समितिले साहित्यिक पत्रपत्रिकालाई रजिस्टर्ड दर्ता गर्ने क्रममा महत्त्वपूर्ण योगदान गऱ्यो । राजनैतिक र व्यक्तित्वको रोगको कारण त्यो एक वर्ष नपुग्दै बन्द हुन पुग्यो। २०२९ असोजमा भवानी घिमिरेको अध्यक्षतामा साहित्यिक पत्रकार सङ्घ बन्यो, जसमा अच्युतरमण अधिकारीलगायतले यसको विकासमा प्रयास गरे । नेपाली साहित्यिक पत्रकारिताको विकासमा आफ्नै प्रकारको योगदान दिँदै आएको छ तर साहित्यिक पत्रपत्रिकाको विकासको लागि सरकारी स्तरको दृढता सबभन्दा जरुरी छ किनभने

साहित्यिक पत्रकारिताको विकास नेपालको सन्दर्भमा निकै कठिन छ। त्यसै पनि साहित्य पत्रकारितामा आज मानवीय मूल्य, मान्यता, सभ्यता र इतिहासको परिधिभित्र रहेर चेतना जगाउनु, समाज र राष्ट्रलाई समुचित रूपमा शालीन बनाउनु, स्निघ्नता प्रदान गर्नु, राष्ट्रिय गौरव, जातीय पहिचान, सभ्यता, सु-संस्कृतिजस्ता कुराको तयार गर्नु जरुरी छ। वास्तवमा साहित्य अन्तर्हृदय र मस्तिष्कसँग सम्बन्धित हुन्छ। साहित्य रुचिका लागि संवेदना वैशिष्ट्य हुनुपर्छ।

नेपालको सन्दर्भमा साहित्यलाई अनुत्पादक मानिन्छ। वाङ्मय राष्ट्र विकासमा अभिन्न अङ्गको रूपमा रहेको छ। त्यति भएर पनि यसलाई नाफामूलक नभएकाले अनुत्पादक भएकाले यो त्यति उपयोगी मानेको छैन। यस सन्दर्भमा विज्ञापन नपाउनु, राम्रो वितरक नहुनु, विश्वासिलो बिक्रेता नपाउनु र बिक्रेताले बिक्रीको रकम उपलब्ध नगराउनु, शासनसत्ताको सुदृष्टि नपर्नु, पत्रिका स्तरीय हुन नसक्नु, स्तरीय रचना प्राप्त गर्न नसक्नु, लेखकलाई पारिश्रमिक दिन नसक्नु, प्रकाशन नियमित हुन नसक्नुजस्ता कुराका अतिरिक्त पत्रिका सञ्चालनमा आर्थिक सहयोग प्राप्त नहुनु, साहित्यिक पत्रकारको खास प्रतिष्ठा हुन नसक्नु, व्यक्ति वा परिवारले कम पुँजी र सीमित लगानीमा पत्रिका चलाउनुजस्ता कुराले ठूलो चुनौती देखा परेको छ। साहित्यिक पत्रकारितालाई उत्थान गर्ने हो भने यसलाई राष्ट्रको अभिन्न अङ्गको रूपमा लिनुपर्ने हुन्छ र यसका लागि एउटा छुट्टै नीति तयार गरी अल्पकालिक, मध्यकालिक र दीर्घकालिक योजना तयार गर्नुपर्दछ। साहित्यिक पत्रकारिताको निम्ति अलग्ग प्रेस काउन्सिल बन्नुपर्दछ र सरकारले यस पत्रकारितालाई राष्ट्रिय उत्पादनशालाको रूपमा लिने साहसिक, जाँगरिलो, इमान्दारीपूर्ण प्रयास गर्नुपर्दछ।

## ४. उपसंहार

नेपाली साहित्यिक पत्रकारिताको प्रारम्भ *गोरखा भारत जीवन* (१९४३) देखि प्रारम्भ भई प्रवासी विभिन्न पत्रिकाहरू हुँदै आजसम्म आफ्नो कलेवर विस्तार गरिआएको छ। यस क्रममा *शारदा* जस्ता विशिष्ट पत्रिकाले एक सय अङ्क प्रकाशित भएर बन्द हुनुपर्ने अवस्था आएको छ भने *मधुपर्क* जस्ता पत्रिकाहरू ४३१ अङ्क प्रकाशित गरेर

गौरवपूर्ण स्थान हासिल गरिरहेका छन् यसै क्रममा साहित्यिक पत्रपत्रिका मर्नु, बाँच्नुको दोसाँधमा रहेर आज बढीमा १०/१५ ओटा पत्रिकामात्र नियमित रूपमा प्रकाशित भइराखेको कुराले निश्चित रूपमा साहित्यिक पत्रपत्रिका सञ्चालन गर्न कठिनाइ भएको कुरा स्वत: अभिव्यक्त हुन्छ । यसै सन्दर्भमा साहित्यिक पत्रिकालाई उदार रूपमा आर्थिक सहयोग दिने, पुरस्कृत गर्ने, विज्ञापन दिने, पुस्तकालयमा अनिवार्य गर्ने, पाठ्यपुस्तकमा समावेश गर्ने जस्ता कार्य गरी यसको विकास गर्न सकिन्छ । यस्तै साहित्यिक पत्रकारहरूले पनि साहित्यिक पत्रपत्रिकाको स्तरीयता निर्वाह गरी बढी भन्दाबढी पाठक तयार गर्नुपर्ने आवश्यकता छ । *नेपाली बृहत् शब्दकोश* २०४० देखि *प्रयोगात्मक नेपाली शब्दकोश* २०६१ सम्ममा पनि आफ्नो स्थान नपाउने साहित्यिक पत्रकारिता पदावलीले साहित्यिक पत्रकारितालाई विकास गर्न दह्रो पाइला चलाउनुपर्ने आवश्यकता छ ।

## सन्दर्भसूची

१. कोइराला, खेमनाथ– *नेपाली पत्रकारिता* (१८५-२१४) ज्ञान विज्ञानको दिशा, वाराणसी २०३३, दुर्गा तिमल्सिना ।

२. कोइराला, खेमनाथ– सम्पादक विशेषाङ्क *चित्कार,* काठमाडौँ २०३२ ।

३. कोइराला, खेमनाथ– *नेपाली प्रेस कानुन र पत्रपत्रिकाहरू* त्रि.वि.वि. कानुन सङ्कायमा प्रस्तुत शोधपत्र २०३६ ।

४. कोइराला, पीताम्बर– *नेपाली साहित्यमा 'नौलो नेपाली' को योगदान,* काठमाडौँ, त्रि.वि.वि. २०५६ ।

५. देवकोटा, ग्रीष्मबहादुर– *नेपालको छापाखाना र पत्रपत्रिकाको इतिहास,* केशव लम्साल २०३२ ।

६. नेपाल प्रेस काउन्सिल– *वार्षिक प्रगति रिपोर्ट,* काठमाडौँ २०६१ ।

७. पौडेल, रामराजा– *नेपाली पत्रकारिता,* काठमाडौँ, लुनकरण चौधरी २०३५ ।

८. शर्मा, इन्द्रकान्त (र अन्य)- *पत्रकारिता स्मारिका,* काठमाडौँ २०३६ ।

# मदन पुरस्कार गुठीको विवरण

*– गजेन्द्रनाथ रेग्मी*

*कार्यालय सचिव, म.पु.पु. गुठी*

**(क)**

**मदन पुरस्कार गुठीका सदस्यहरूको नामावली**

२०१२ साल मङ्सिर २८ गते गुठी खडा हुँदा गुठियारहरू हुनुहुन्थ्यो ।

१. रानी श्री जगदम्बाकुमारीदेवी

२. श्री केदारमणि आचार्य दीक्षित

३. राजगुरु श्रीभोगेन्द्रराज पण्डितज्यू

४. श्री कमलमणि दीक्षित

५. मे.ज. श्री ब्रह्मशमशेर ज.ब.राणा (संवत् २०१३/९/१/१ मा थपिएको)

वि.सं. २०१२ साल स्थापनाकालमा गुठियार भनी ४ जना र सल्लाहकार भनी जम्मा निम्नलिखित ९ जना हुनुहुन्थ्यो ।

| | |
|---|---|
| का.ई. गुच्चाटोल बस्ने श्री खड्गमान मल्ल | १ |
| का.ई. गैरीधारा बस्ने सर्दार श्री नरेन्द्रमणि आचार्य दीक्षित | १ |
| का.ई. डिल्लीबजार बस्ने प्रो. श्री फणीन्द्रप्रसाद लोहनी | १ |
| का.ई. कालधारा बस्ने प्रो. श्री यदुनाथ खनाल | १ |
| कालिम्पोङ (पश्चिम बंगाल) बस्ने श्री रामकृष्ण शर्मा | १ |
| का.ई. प्यूखा बस्ने सर्दार श्री रुद्रराज पाण्डेय | १ |
| जिल्लै बुटबल तौलिहवा बस्ने सुब्बा श्री शम्भुप्रसाद ज्ञवाली | १ |
| दार्जिलिङ (पश्चिम बंगाल) बस्ने श्री सूर्यविक्रम ज्ञवाली | १ |
| का.ई. कालिकास्थान बस्ने प्रिन्सिपल श्री सोमनाथ सिग्द्याल | १ |

त्यसपछि २०१६ सालमा रजिस्ट्रेसन पास हुँदा निम्नलिखित १४ जना रहनुभयो ।

रानी श्री जगदम्बाकुमारीदेवी अध्यक्ष
श्री कमलमणि आचार्य दीक्षित (सदस्य-सचिव)
श्री केदारमणि आचार्य दीक्षित
श्री खड्मान मल्ल
प्रो. श्री गोकुलचन्द मलहोत्रा
राजगुरु श्री नयनराज पाण्डे
सरदार श्री नरेन्द्रमणि आचार्य दीक्षित
प्रि. श्री पद्मप्रसाद भट्टराई
श्री फणीन्द्रप्रसाद लोहनी
श्री बालकृष्ण सम
मे.ज. श्री ब्रह्मशमशेर ज.ब.रा.
श्री रामकृष्ण शर्मा
श्री शम्भुप्रसाद ज्ञवाली
श्री सूर्यविक्रम ज्ञवाली

२०१३ सालदेखि २०६१ सालसम्म पटकपटक पुनः मनोनीत र नयाँ नियुक्ति हुनुभएका सदस्यहरूको नामावली यसप्रकार छ :–

रानी श्री जगदम्बाकुमारीदेवी
श्रीमती अञ्जु दीक्षित (२०४५)
श्री उत्तम कुँवर (२०२८)
श्री कनक दीक्षित (२०४९)
श्री कमल दीक्षित
श्री कुन्द दीक्षित (२०५७)
श्री केदारमणि आ.दी.
श्री खड्गमान मल्ल
श्री गोकुल चन्द
डा. श्री गोविन्द टण्डन (२०५४)
श्री चित्तरञ्जन नेपाली (२०४९)
श्री चूडानाथ भट्टराय (२०४०)
डा. श्री चूडामणि बन्धु (२०६०)

श्री चेतबहादुर कुँवर (२०६०)
डा. श्री छविलाल गजुरेल (२०३८)
श्री जगदीशशमशेर राणा (२०४९)
श्री ठाकुरप्रसाद पराजुली (२०५८)
श्री डोरबहादुर विष्ट (२०४०)
डा. श्री तारानाथ शर्मा (२०३०)
डा. श्री त्रैलोक्यनाथ उप्रेती (२०२८)
श्री नयराज पाण्डे (२०२१)
डा. श्री नोबेलकिशोर राई (२०४९)
प्रि. श्री पद्मप्रसाद भट्टराई (२०२१)
श्री फणिन्द्रप्रसाद लोहनी (२०१२)
मे.ज. श्री ब्रह्मशमशेर ज.ब.रा. (२०१३)
डा. श्री बाबुराम शर्मा पोखरेल (२०५४)
श्री बालकृष्ण सम
डा. श्री बासुदेव त्रिपाठी (२०२३+२०३८)
श्री विष्णुप्रसाद धिताल (२०२४/२०४८)
डा. श्री विष्णुराज आत्रेय (२०४९)
श्री माधवप्रसाद घिमिरे (२०४९)
श्री माधवलाल कर्माचार्य (२०५५)
श्री यदुनाथ खनाल (२०२४)
स.र. श्री यज्ञविक्रम राणा # (२०५२)
श्री रामकृष्ण शर्मा
श्री रुद्रराज पाण्डे
श्री शम्भुप्रसाद ज्ञवाली
श्री श्रीकृष्ण मिश्र (२०३०)
श्री श्रीधरशमशेर ज.ब.रा. # (२०४४)
श्री सिद्धिचरण श्रेष्ठ (२०३८)
श्री सुर्यविक्रम ज्ञवाली
श्री सुलोचना मानन्धर (२०६४)
डा. श्री हेमाङ्गमणि दीक्षित (२०२४)

## (ख)

मदन पुरस्कार वितरण हुँदाका बेलामा पुरस्कार विजेतालाई अध्यक्षज्यूसमक्ष परिचय गराउनको लागि प्रत्येक वर्ष २ जनाले ओल्क्याउने व्यवस्था गरिएको हुँदा २०१३ सालदेखि २०४५ सालसम्म मदन पुरस्कार पाउने र पुरस्कार जगदम्बा-श्री पाउने दुवै जनालाई २ जनाले मात्र ओल्क्याउँदै आएकोमा उक्त कार्यका लागि सहयोग गर्नुहुने महानुभावहरू र २०५५ (सालदेखि पुरस्कार जगदम्बा-श्री प्राप्त व्यक्तिका लागि पनि छुट्टै २ जनाले परिचय गराउने परम्परा थालिएको छ ।)

| **पुरस्कार पाउने** | **ओल्क्याउने** |
| --- | --- |
| १. २०१३ **सालमा** | |
| १. श्री सत्यमोहन जोशी | कवि श्री शिरोमणि लेखनाथ |
| २. श्री चित्तरञ्जन नेपाली | र |
| ३. डा. श्री बलराम जोशी | पण्डितराज श्री सोमनाथ |
| (वेलाइतमा) पछि आमालाई | |
| २. २०१४ **सालमा** | |
| १. श्री लीलाध्वज थापा | राजगुरु श्री भोगेन्द्रराज पाण्डे र |
| २. श्री करूणाकर वैद्य | श्री सोमनाथ सिग्देल |
| ३. २०१५ **सालमा** | |
| १. श्री कृष्णचन्द्रसिंह प्रधान | सरदार श्री नरेन्द्रमणि दीक्षित र |
| २. श्री गंगाविक्रम सिजापति | श्री सूर्यविक्रम ज्ञवाली |
| ४. २०१६ **सालमा** | |
| १. श्री नित्यराज पाण्डे | पण्डितराज श्री सोमनाथ सिग्देल र |
| | श्री नरेन्द्रमणि आ.दी. |
| ५. २०१७ **सालमा** | |
| १. श्री भीमनिधी तिवारि | पंडितराज श्री सोमनाथ सिग्देल |
| २. श्री सत्यमोहन जोशी | र |
| | सरदार श्री नरेन्द्रमणि आ.दी. |
| ६. २०१८ **सालमा** | |
| १. श्री रमेश विकल | श्री बालकृष्ण सम |

७. २०१९ **सालमा**

१. श्री गोपालप्रसाद रिमाल उपस्थित नभएको (पछि श्रीमतीलाई)

८. २०२० **सालमा**

| | |
|---|---|
| १. श्री कोमलनाथ अधिकारी | श्री नरेन्द्रमणि र |
| २. श्री जनकलाल शर्मा | श्री फणिन्द्रप्रसाद लोहनी |

९. २०२१ **सालमा**

| | |
|---|---|
| १. श्री बालकृष्ण पोखरेल | प्रि. पद्मप्रसाद भट्टराई |
| २. श्री मुकुन्दशरण उपाध्याय | र |
| ३. श्री नवराज चालिसे | श्री चित्तधर हृदय |
| ४. श्री लक्ष्मीबहादुर श्रेष्ठ | |

१०. २०२२ **सालमा**

| | |
|---|---|
| १. सुश्री पारिजात | श्री रुद्रराज पाण्डे र |
| | श्री चित्तधर हृदय |

११. २०२३ **सालमा**

| | |
|---|---|
| १. श्री उत्तम कुँवर | श्री बालकृष्ण सम र |
| २. श्री मोदनाथ प्रश्रित | श्री चित्तधर हृदय |

१२. २०२४ **सालमा**

| | |
|---|---|
| १. श्री शंकर लामिछाने | श्री सिद्धिचरण श्रेष्ठ र |
| २. श्री गृष्मबहादुर देवकोटा | श्री रामकृष्ण शर्मा |

१३. २०२५ **सालमा**

१. श्री पारसमणि प्रधान (दार्जिलिङमा भयो) (ओल्क्याइएन)

२. श्री धर्मराज थापा (पछिबाट भयो)

१४. २०२६ **सालमा**

| | |
|---|---|
| १. श्री ताना शर्मा | श्री नरेन्द्रमणि आ.दी. र |
| | श्री चित्तधर हृदय |

१५. २०२७ **सालमा**

| | |
|---|---|
| १. श्री महानन्द सापकोटा | श्री बालकृष्ण सम र |
| | श्री चित्तधर हृदय |

१६. २०२८ **सालमा**

१. श्री सत्यमोहन जोशी

२. श्री स्थिरजंगबहादुर सिंह

| | |
|---|---|
| ३. श्री विहारीकृष्ण श्रेष्ठ | श्री नरेन्द्रमणि आ.दी. |
| ४. श्री चूणामणि बन्धु | र |
| ५. श्री प्रदीप रिमाल | श्री रुद्रराज पाण्डे |

१७. २०२९ **सालमा**

| | |
|---|---|
| १. श्री ईश्वरवल्लभ | श्री नरेन्द्रमणि आ.दी. र श्री सूर्यविक्रम ज्ञवाली |

१८. २०३० **सालमा**

| | |
|---|---|
| १. श्री धनवज्र वज्रचार्य | श्री नरेन्द्रमणि आ.दी. र श्री चूडानाथ भट्टराय |

१९. २०३१ **सालमा**

दिइएन

२०. २०३२ **सालमा**

| | |
|---|---|
| १.श्री भवानी भिक्षु | श्री बालकृष्ण सम र श्री सूर्यविक्रम ज्ञवाली |

२१. २०३३ **सालमा**

दिइएन

२२. २०३४ **सालमा**

| | |
|---|---|
| १. डा. श्री वासुदेव त्रिपाठी | श्री बालकृष्ण सम र श्री चित्तधर हृदय |

२३. २०३५ **सालमा**

| | |
|---|---|
| १. श्री ध.च. गोतामे | श्री सूर्यविक्रम ज्ञवाली र श्री सिद्धिचरण श्रेष्ठ |

२४. २०३६ **सालमा**

| | |
|---|---|
| १. श्री छविलाल गजुरेल | श्री सूर्यविक्रम ज्ञवाली र |
| २. श्री करूणाकर वैद्य | श्री चित्तधर हृदय |

२५. २०३७ **सालमा**

| | |
|---|---|
| १. श्री जगदीशशमशेर राणा | श्री सूर्यविक्रम ज्ञवाली र श्री नरेन्द्रमणि आ.दी. |

२६. २०३८ **सालमा**

| | |
|---|---|
| १. श्री मोहन कोइराला | श्री नरेन्द्रमणि आ.दी. र श्री सूर्यविक्रम ज्ञवाली |

**२७. २०३९ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री मदनमणि दीक्षित | | श्री सिद्धिचरण श्रेष्ठ र<br>श्री केदारमणि आ.दी. |

**२८. २०४० सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री ध्रुवचन्द्र गौतम | | श्री सिद्धिचरण श्रेष्ठ र<br>श्री केदारमान व्यथित |

**२९. २०४१ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री कञ्चन पुडासैनी | | श्री केदारमान व्यथित र<br>श्री केदारमणि आ.दी. |

**३०. २०४२ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री मोहनराज शर्मा | | श्री सिद्धिचरण श्रेष्ठ र<br>श्री केदारमान व्यथित |

**३१. २०४३ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री नयराज पन्त | | श्री केदारमान व्यथित र<br>श्री माधव घिमिरे |

**३२. २०४४ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री राजेश्वर देवकोटा | | श्री सिद्धिचरण श्रेष्ठ र<br>श्री नयराज पाण्डे |

**३३. २०४५ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री दौलतविक्रम विष्ट | म.पु. | श्री डोरबहादुर विष्ट |
| २. | श्री नारायण गोपाल | ज.श्री | प्रा.डा. श्री वासुदेव त्रिपाठी |

**३४. २०४६ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री राजेश गौतम | म.पु. | श्री चूडानाथ भट्टराय र श्री हृषिकेश शाह |
| २. | श्री मदनकृष्ण-हरिवंश | ज.श्री | श्री यदुनाथ खनाल र डा. श्री ईश्वर बराल |

**३५. २०४७ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री भानुभक्त पोखरेल | म.पु. | श्री चूडानाथ भट्टराय र |
| २. | श्री नरबहादुर भण्डारी | ज.श्री | श्री ईश्वर बराल |

**३६. २०४८ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री सरुभक्त | म.पु. | वडागुरुज्यू श्री अम्बिकाप्रसाद अधिकारी |
| २. | श्री केदारमान व्यथित | ज.श्री | र श्री खड्गमान मल्ल (फोटो) |

**३७. २०४९ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री भवेश्वर पंगेनी | म.पु. | श्री केदारमान व्यथित र |
| २. | नेपाली साहित्य सम्मेलन (लक्खिदेवी सुन्दास) | ज.श्री | श्री खड्गमान मल्ल |

**३८. २०५० सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री शरद्चन्द्र शर्मा भट्टराई | म.पु. | श्री ईश्वर बराल र श्री सत्यमोहन जोशी |
| २. | श्रीमती तारादेवी | ज.श्री | श्री केदारमान व्यथित र श्री चूडानाथ भट्टराय |

**३९. २०५१ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री फादर विलियम बर्क | म.पु. | श्री खड्गमान मल्ल र श्री केदारमान व्यथित |
| २. | श्री ईन्द्रबहादुर राई | ज.श्री | श्री केदारमान व्यथित र प्रा.श्री चूडानाथ भट्टराय |

**४०. २०५२ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री विनोदप्रसाद धिताल | म.पु. | श्री खड्गमान मल्ल र श्री केदारमान व्यथित |
| २. | श्री हरिप्रसाद गोर्खाराई | ज.श्री | श्री राजेश्वर देवकोटा र श्री शेषराज दली |

**४१. २०५३ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री दयाराम श्रेष्ठ | म.पु. | श्री त्रैलोक्यमान उप्रेती र |
| २. | श्री ठाकुरप्रसाद गुरागाईं | ज.श्री | श्री भुवनलाल प्रधान |

**४२. २०५४ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री लोकेन्द्रबहादुर चन्द | म.पु. | वडागुरु श्री नयनराज पाण्डे र डा. श्री बाबुराम पोखरेल |
| २. | श्री अम्बर गुरुङ | ज.श्री | अनुपस्थित (पछिबाट भयो) |

**४३. २०५५ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री केशवप्रसाद उपाध्याय | म.पु. | श्री नयनराज पाण्डे र श्री हर्षबहादुर बूढामगर |
| २. | श्री गोविन्दबहादुर मल्ल गोठाले | ज.श्री | श्री मदनमणि दीक्षित र श्री सत्यमोहन जोशी |

**४४. २०५६ सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री दिनेश अधिकारी | म.पु. | श्री नयनराज पाण्डे र श्री हर्षबहादुर बूढामगर |
| २. | नेपाली शिक्षा परिषद् | ज.श्री | श्रीमती अंगुरबाबा जोशी र श्री बैरागी काइँला |

४५. २०५७ **सालमा**

| | | |
|---|---|---|
| १. श्री वृद्धिनारायण श्रेष्ठ | म.पु. | श्री कुलशेखर शर्मा र श्री सत्यमोहन जोशी |
| २. श्री धर्मराज थापा | ज.श्री | श्री भुवनलाल प्रधान र श्री बैरागी काइँला |

४६. २०५८ **सालमा**

| | | |
|---|---|---|
| १. श्री हरिराम जोशी | म.पु. | श्री मदनमणि दीक्षित र श्री शेषराज दली |
| २. श्री डायमनशमशेर राणा | ज.श्री | श्री धर्मराज थापा र श्री सत्यमोहन जोशी |

४७. २०५९ **सालमा**

| | | |
|---|---|---|
| १. श्री रेवतीरमण खनाल | म.पु. | श्री सुन्दरप्रसाद शाह र श्री चित्तरञ्जन नेपाली |
| २. श्री कृष्णप्रकाश श्रेष्ठ | ज.श्री | श्री धर्मराज थापा र श्री सत्यमोहन जोशी |

४८. २०६० **सालमा**

| | | |
|---|---|---|
| १. श्री गोपाल पराजुली | म.पु. | श्री धर्मराज थापा र श्री सत्यमोहन जोशी |
| २. श्री लोककवि अलिमियाँ | ज.श्री | डा. श्री वासुदेव त्रिपाठी र श्री वैरागी काइँला |

४९. २०६१ **सालमा**

| | | |
|---|---|---|
| १. श्री नारायण वाग्ले | म.पु. | डा.श्री वासुदेव त्रिपाठी र श्री चित्तरञ्जन नेपाली |
| २. श्री फणिन्द्रराज खेताला | ज.श्री | श्री सत्यमोहन जोशी र श्री धर्मराज थापा |

५०. २०६२ **सालमा**

| | | |
|---|---|---|
| १. श्री कृष्ण धारावासी | म.पु. | डा.श्री माधवप्रसाद भट्टराई र श्री केदारभक्त माथेमा |
| २. श्री भैरव रिसाल | ज.श्री | श्री सत्यमोहन जोशी र डा.श्री वासुदेव त्रिपाठी |

५१. २०६३ **सालमा**

| | | |
|---|---|---|
| १. श्री महेशविक्रम शाह | म.पु. | श्री चित्तरञ्जन नेपाली र डा.श्री माधवप्रसाद भट्टराई |
| २. डा.श्री तीर्थबहादुर श्रेष्ठ | ज.श्री | श्री सत्यमोहन जोशी र डा.श्री वासुदेव त्रिपाठी |

५२. २०६४ **सालमा**

| | | |
|---|---|---|
| १. श्री जगदीश घिमिरे | म.पु. | श्री वासुदेव त्रिपाठी र श्री कृष्णचन्द्र सिंह |
| २. श्री कृष्णप्रसाद पराजुली | ज.श्री | डा.श्री केदारभक्त माथेमा र श्री केशवमणि आ.दी. |

५३. २०६५ **सालमा**

| | | | |
|---|---|---|---|
| १. | श्री युवराज नयाँघरे | म.पु. | श्री माधवलाल कर्माचार्य र डा. श्री हर्षबहादुर बूढामगर |
| २. | श्री रामशरण दर्नाल | ज.श्री | डा. श्री गोविन्द टन्डन र डा. श्री दयाराम श्रेष्ठ |

(**ग**)

मदन पुरस्कार गुठीको नियमावलीअनुसार प्रत्येक वर्ष पुरस्कार जगदम्बा-श्रीका लागि एउटा छुट्टै छनौट समिति बनाउनुपर्ने प्रावधान भएअनुसार २०४५ सालदेखि २०६४ सालसम्म जगदम्बा-श्री छनौट समितिमा रहनुभएका सदस्यहरू–

पुरस्कार 'जगदम्बा-श्री' छनौट समितिका सदस्यहरुको नामावली: २०४५ सालदेखि २०६५ सालसम्मको

श्रीमती अङ्गुरबाबा जोशी, २०४५, ४७

श्री अच्युतरमण अधिकारी, २०५२

डा. अभि सुवेदी, २०५१

श्री अमर गुरुङ, २०६४

श्री अमृत गुरुङ, २०६३

श्री अविनाश श्रेष्ठ, २०५२

श्री आङछिरिङ शेर्पा, २०५९

श्रीमती इन्दिरा प्रसाईं, २०५१, ६०

श्री उज्ज्वल जिसी, २०५८

श्री उद्धव उपाध्याय, २०६२

श्रीमती उषा शेरचन, २०५९

श्री ऋषि शाह, ५०

श्री ओमकारप्रसाद गौचन, २०४६, ४८, ५७

श्री ओमविक्रमसिंह बस्नेत, २०५७

श्री कनक दीक्षित, २०६०, ६३, ६४, ६५

श्री कमलमणि दीक्षित, २०४६, ४७, ४८, ४९, ५०

श्री किरणकृष्ण श्रेष्ठ, २०६५

श्री किरण खरेल, २०४५

श्री कुन्द दीक्षित, २०६१, ६२, ६३, ६४, ६५

श्री कुन्दन अर्याल, २०६४

श्री कृष्णप्रसाद पराजुली, २०५०

श्री केदार शर्मा, २०५२, ६३

डा. केदारभक्त माथेमा, २०५२

डा. केदारलाल श्रेष्ठ २०४९

डा. केशवप्रसाद उपाध्याय, २०५५

डा. खगेन्द्र भट्टराई, २०५७

श्री खड्गमान मल्ल, २०४८

श्री गणेश रसिक, २०४७

श्रीमती गीताकेशरी, २०५९, ६२

श्री गोविन्द गोठाले, २०४८

डा. गोविन्द टण्डन, २०५४, ६३

श्री चित्तरञ्जन नेपाली, २०४९, ५३, ५६

श्री चूडानाथ भट्टराय, २०४६

श्री चेतन कार्की २०६०

डा. चेतबहादुर कुँवर, २०६०

श्री जगमान गुरुङ, २०६१

श्री जीवन आले, २०६५

श्री जीवनलाल सत्याल, २०५५, ६१

डा. टीकाराम पन्थी, २०५७

श्री डोरबहादुर विष्ट, २०४५

श्री तपानाथ शुक्ला, २०५९

डा. तुलसी भट्टराई, २०४९, ५३, ५६

श्री तेजेश्वरबाबु ग्वंग, २०५१ (अनु.), ५४

श्री विष्णुप्रसाद धिताल, २०४८, ४९, ५१, ५२, ५३, ५४, ५५, ५७, ५८, ५९

डा. विष्णुराज आत्रेय, २०६१

डा. व्रतराज आचार्य, २०६५

श्रीमती शकुन्तला शर्मा, २०५८

श्री शम्भुप्रसाद ज्ञवाली, २०५२

श्रीमती शान्ति मिश्र, २०५७, ६३

प्रा. शिवगोपाल रिसाल, २०५३

श्री शिव गाउँले, २०६३

स.र. श्री शुभबहादुर सुनाम, २०६०

श्री श्याम खड्गी, २०५७

श्री श्रीधरशमशेर राणा, २०५९

श्री श्रीप्रसाद गौतम, २०४७

श्रीमती शारदा शर्मा, २०५०

श्री सत्यमोहन जोशी, २०४५, ६३

श्री सन्तोष शर्मा, २०६४

श्री सी.के. लाल, २०५७, ६१

श्री सुन्दरप्रसाद शाह, २०५६

श्री स्नेह सायमी, २०६३

श्रीमती सुलोचना जोशी, २०४९

श्रीमती सुलोचना मानन्धर, २०५५

श्री हरिवंश आचार्य, २०६५

श्री हरिहर शर्मा, २०५४

डा. श्री हर्षबहादुर बूढामगर, २०५५

श्री हेमराज ज्ञवाली, २०५५

# म.पु.पु.को पानाका अभिलेखहरू

*– सं. गजेन्द्रनाथ रेग्मी*
*चिरञ्जीवी शर्मा चालिसे*

मदन पुरस्कार गुठीको मुखपत्र त्रैमासिक नेपालीको पूर्णाङ्क ५, ६, ७, ९, ११, २२, २३ र २५ लगायत पूर्णाङ्क २०० सम्ममा मपुपुको पानामा प्रकाशित भएका विभिन्न शीर्षकहरूमध्ये पूर्णाङ्क ५, ६, ७, ९, ११, १५, १८, २१, २२, २३ र २५ देखि १२५ सम्म २०४८ सालमा नै मपुपुको पाना भन्ने पुस्तकको रूपमा प्रकाशित भइसकेका छन्। तापनि ती र बाँकी १२६ देखि पूर्णाङ्क २०० तकका मपुपुका पानामा प्रकाशित विभिन्न शीर्षकहरू जम्मा पार्दा जम्माजम्मी तपसिलका यी देखिन्छन्–

| **पूर्णाङ्क** | **मपुपुको पाना** | **मिति** |
|---|---|---|
| ५ | म.पु.पु. पुस्ततकालयको परिचय | २०१७ का.मं. र पु. |
| ६ | पुस्तक समीक्षा नेपाली भाषाको | २०१७ मा.फा. र चै. |
| ७ | लडाइँको कुरा (एउटा वंशावलीबाट) | २०१८ वै.जे. र अ. |
| ८ | x | x |
| ९ | यक्षमाला | २०१८ का.मं. र पु. |
| १० | x | x |
| ११ | वंशावलीबाट | २०१९ वै.जे. र अ. |
| १२. | x | x |
| १३ | x | x |
| १४ | x | x |
| १५ | थाहा भएसम्म पुराना | २०२० वै.जे. र अ. |
| १६ | x | x |
| १७ | x | x |
| १८ | तीन अनुवाद | २०२० मा.फा. र चै. |
| १९ | पुस्तकालयमा आइपुगेका नेपाली... | २०२१ वै.जे. र अ. |
| २० | x | x |
| २१ | नेपाली पत्रपत्रिका | २०२१ का.मं. र पु. |

| | | |
|---|---|---|
| २२ | गोर्खापत्रबारे 'गोर्खाली' | २०२१ मा.फा. र चै. |
| २३ | शकुन्तला नाटक | २०२२ वै.जे र अ. |
| २४ | विज्ञापनको एउटा नमुना | २०२२ सा.भ. र अ. |
| २५ | कृषि व्यापार सम्मति कार्यालय | २०२२ का.मं. र पु. |
| २६ | मेगजिन | २०२२ मा.फा. र चै. (कै. वंशावलीबाट) |
| २७ | त्राहि ! त्राहि ! ! त्राहि ! ! ! | २०२३ वै.जे. र अ. |
| २८ | 'पशुपति प्रेस' | २०२३ सा.भ. र अ. |
| २९ | "बहत्र सुगा"बाट एउटा कथा | २०२३ का.मं. र पु |
| ३० | धाराको जीर्णोद्धार | २०२३ मा.फा. र चै. |
| ३१ | सृष्टि | २०२४ वै.जे. र अ. |
| ३२ | x | x |
| ३३ | पुलहरू | २०२४ का.मं. र पु. |
| ३४ | "भूमिका" | २०२४ मा.फा. र चै. |
| ३५ | राजाहरू | २०२५ वै.जे. र अ. |
| ३६ | एउटा विज्ञान | २०२५ सा.भ. र अ. |
| ३७ | 'केके देख्ने छु' | २०२५ का.मं. र पु. |
| ३८ | x | x |
| ३९ | x | x |
| ४० | पानीको बिन्तीपत्र | २०२६ सा.भ. र अ. |
| ४१ | 'भूचन्द्र चन्द्रिका आरम्भ र अन्त्य | २०२६ का.मं. र पु. |
| ४२ | विज्ञापन | २०२६ मा.फा. र चै. |
| ४३ | सम्पादकीय | २०२७ वै.जे. र अ. |
| ४४ | x | x |
| ४५ | विज्ञापन | २०२७ का.मं. र पु. (कै. आयुर्वेदीय औषधालय) |
| ४६ | "बारुद ठिक भयाको छ कि छैन तेस्को जाच" | २०२७ मा.फा. र चै. |
| ४७ | एटनको "रूप" | २०२८ वै.जे र अ. |
| ४८ | जारी बुझेको भर्पाइ | २०२८ सा.भ. र अ. |
| ४९ | सिरा जेडको कथाहा | २०२८ का.मं. र पु. |

| | | |
|---|---|---|
| ५० | प्रार्थना १९७२ र १९८२ को | २०२८ मा.फा. र चै. |
| ५१ | विज्ञापन | २०२९ वै.जे. र अ. |
| ५२ | अर्को विज्ञापन | २०२९ सा.भ. र अ. |
| ५३ | नयाँ ! विल्कुल्नयाँ ! ! एकदम नयाँ ! ! ! (प्रेमसागर) हेर्नुहोस जनिगरी दि दृष्टी | २०२९ का.मं. र पु. |
| ५४ | कान्तिपुर विजय | २०२९ मा.फा. र चै. |
| ५५ | 'विल्व मंगल' नमुना | २०३० वै.जे. र अ. |
| ५६ | नेपाल राष्ट्र-सङ्गीत | २०३० सा.भ. र अ. |
| ५७ | छोटकरी कुरा | २०३० का.मं. र पु. |
| ५८ | कथाहा एक रिस गर्न्याको र एक सेषको | २०३० मा.फा. र चै. |
| ५९ | खर्साङको हिमध्वनि | २०३१ वै.जे. र अ. |
| ६० | अलङ्कार | २०३१ सा.भ. र अ. |
| ६१ | जमघट | २०३१ का.मं. र पु. |
| ६२ | देश समाचार श्री ३ महाराजदेव-शमशेर जंग राणाबहादुरको राज्याभिषेक | २०३१ मा.फा. र चै. |
| ६३ | कलकत्ताको बङ्गाली भन्ने अङ्ग्रेजी अखबारमा लेखियाको | २०३२ वै.जे. र अ. |
| ६४ | साँखुको सडक | २०३२ सा.भ. र अ. |
| ६५ | विरक्त | २०३२ का.मं. र पु. |
| ६६ | येनाटमी | २०३२ मा.फा. र चै. |
| ६७ | प्रलाप | २०३३ वै.जे. र अ. |
| ६८ | ठगको कुरो | २०३३ सा.भ. र अ. |
| ६९ | नेपालमा फेसनको झल्को | २०३३ का.मं. र पु. |
| ७० | वंशावली-स्वकीय | २०३३ मा.फा. र चै. |
| ७१ | सिन्दवादको कथा | २०३४ वै.जे. र अ. |
| ७२ | सर जङ्गबहादुरका रानीहरू पद्मजङ्गको लगत | २०३४ सा.भ. र अ. |
| ७३ | पद्म जङ्गको बैठक | २०३४ का.मं. र पु. |
| ७४ | फेरि, जङ्ग पत्नीहरू | २०३४ मा.फा. र चै. |
| ७५ | डंडवत् गरीवक्सीयो | २०३५ वै.जे. र अ. |
| ७६ | वंशावली | २०३५ सा.भ. र अ. |

| | | |
|---|---|---|
| ७७ | सूच्म महाभारत | २०३५ का.मं. र पु. |
| ७८ | गुठी जगेरा ढुकुटीको किताव | २०३५ मा.फा. र चै. |
| ७९ | बन्धीकी र तिर्जा | २०३६ वै.जे. र अ. |
| ८० | कालीको छाल | २०३६ सा.भ. र अ. |
| ८१ | थापाका वंशावली | २०३६ का.मं. र पु. |
| ८२ | नेपालको मुटु | २०३६ मा.फा. र चै. |
| ८३ | चाँदीको गाता | २०३७ वै.जे. र अ. |
| ८४ | दुई विन्तिपत्र | २०३७ सा.भ. र अ. |
| ८५ | महाराज चन्द्रशमशेरको अभिनन्दन | २०३७ का.मं. र पु. |
| ८६ | "यो दिदीले गरदाखेरीमा भिनाजुलाई पीर्पऱ्यो तेरीमा" | २०३७ मा.फा. र चै. |
| ८७ | सवारी मेरो रेलैमा | २०३८ वै.जे. र अ. |
| ८८ | तिवारी साहित्य र बाह्रखरी | २०३८ सा.भ. र अ. |
| ८९ | अम्मली लहरी | २०३८ का.मं. र पु. |
| ९० | 'सती सान्त्वना' | २०३८ मा.फा. र चै. |
| ९१ | 'निर्दलीय कविता क्रान्ति' | २०३९ वै.जे र अ. |
| ९२ | 'विवेषको गीत' | २०३९ सा.भ. र अ. |
| ९३ | 'मोहरु १४३९।≡ ' | २०३९ का.मं. र पु. |
| ९४ | "फोकल्याण्डको लडाइँ" | २०३९ मा.फा. र चै. |
| ९५ | मदन पौरख | २०४० वै.जे. र अ. |
| ९६ | "बत्तीको लालमोहर" | २०४० सा.भ. र अ. |
| ९७ | "कथा सुनेपछि...." | २०४० का.मं. र पु. |
| ९८ | नरहरि-स्तुति | २०४० मा.फा. र चै. |
| ९९ | उन्नतिशीलर मेरो रामायण | २०४१ वै.जे. र अ. |
| १०० | पुस्तक नम्बर १०६८८२ | २०४१ सा.भ. र अ. |
| १०१ | "खर्च विवरण" | २०४१ का.मं. र पु. |
| १०२ | रूपावासीको दराज | २०४१ मा.फा. र चै. |
| १०३ | "गोरखापत्र" | २०४२ वै.जे. र अ. |
| १०४ | अंडमिल्दो | २०४२ सा.भ. र अ. |
| १०५ | कर्कप्याट्रिकको कोश | २०४२ का.मं. र पु. |
| १०६ | प्रथम साधारण सभा | २०४२ मा.फा. र चै. |
| १०७ | तिब्र बुद्धिका कुरा | २०४३ वै.जे. र अ. |

| | | |
|---|---|---|
| १०८ | मल्लको कुर्णेश कुर्णेश कुर्णेश | २०४३ सा.भ. र अ. |
| १०९ | आक्रोश | २०४३ का.मं. र पु. |
| ११० | प्रिय प्राण | २०४३ मा.फा. र चै. |
| १११ | बाबुराम आचार्य र गुठी | २०४४ वै.जे. र अ. |
| ११२ | अनेक पण्डित रचित | २०४४ सा.भ. र अ. |
| ११३ | भागवत कुञ्ज | २०४४ का.मं. र पु. |
| ११४ | नेपाली:संचित निर्देशिका २०१६-२०४२ | २०४४ मा.फा. र चै. |
| ११५ | "म पनि बोलाउँछु"लाई इतिहासमा ठाउँ ? | २०४५ वै.जे. र अ. |
| ११६ | गो.द.वा. | २०४५ सा.भ. र अ. |
| ११७ | दुई 'विधान'हरू | २०४५ का.मं. र पु. |
| ११८ | ढुकुटी खोल्न्या कुरो | २०४५ मा.फा. र चै. |
| ११९ | 'बिष्ट र भावो' | २०४६ वै.जे. र अ. |
| १२० | जोर गणेशको दर्खास्त | २०४६ सा.भ. र अ. |
| १२१ | चाँदीको हिसाब | २०४६ का.मं. र पु. |
| १२२ | भादगाउको अम्बल | २०४६ मा.फा. र चै. |
| १२३ | समर्पण– १२१९६ | २०४७ वै.जे. र अ. |
| १२४ | हेर्नुहोला– १२१९७ | २०४७ सा.भ. र अ. |
| १२५ | मेरो द्वितीय देश | २०४७ का.मं. र पु. |
| १२६ | 'माधवी'का सुभाषितहरू | २०४७ मा.फा. र चै. |
| १२७ | "ब्रह्मज्ञान" १२६८६ | २०४८ वै.जे. र अ. |
| १२८ | 'छैठौं साधारणसभा' | २०४८ सा.भ. र अ. |
| १२९ | दुलालको गीत | २०४८ का.मं. र पु. |
| १३० | तामाङ भाषा श्लोक | २०४८ मा.फा. र चै. |
| १३१ | अड्डा अदालतका कुरा | २०४९ वै.जे. र अ. |
| १३२ | नौरङ्गे साहित्य | २०४९ सा.भ. र अ. |
| १३३ | "जग्गा अंशवण्डाको लिखित" | २०४९ का.मं. र पु. |
| १३४ | बाइङ एजेन्सीको पूर्जी | २०४९ मा.फा. र चै. |
| १३५ | 'सहयोग र समर्पण' | २०५० वै.जे. र अ. |
| १३६ | 'न्यायको खोजी' | २०५० सा.भ. र अ. |
| १३७ | नाम छनोट | २०५० का.मं. र पु. |
| १३८ | घटना र रसरङ्ग | २०५० मा.फा. र चै. |
| १३९ | मन्त्रीको लरी | २०५१ वै.जे. र अ. |

| | | |
|---|---|---|
| १४० | 'पत्रिका नं. २९९४' | २०५१ सा.भ. र अ. |
| १४१ | काशीनाथको चिठी | २०५१ का.मं. र पु. |
| १४२ | स्नातकहरू | २०५१ मा.फा. र चै. |
| १४३ | सामान्य ज्ञान दर्पण | २०५२ वै.जे. र अ. |
| १४४ | अध्यावधिक व्याख्या | २०५२ सा.भ. र अ. |
| १४५ | सरस्वती वन्दना | २०५२ का.मं. र पु. |
| १४६ | 'पत्रिकाहरू के कहाँ कैले ?' | २०५२ मा.फा. र चै. |
| १४७ | 'मर्यादा' | २०५३ वै.जे. र अ. |
| १४८ | बीसौँ वार्षिक प्रतिवेदन | २०५३ सा.भ. र अ. |
| १४९ | भुसालको एउटा पुस्तिका | २०५३ का.मं. र पु. |
| १५० | एउटा खाम | २०५३ मा.फा. र चै. |
| १५१ | अथ युरोपयात्रा | २०५४ वै.जे. र अ. |
| १५२ | देवीप्रसादको सृजना | २०५४ सा.भ. र अ. |
| १५३ | 'मान्छेको कविता' | २०५४ का.मं. र पु. |
| १५४ | कवि/प्रकाशक/कम्पोजिटर | २०५४ मा.फा. र चै. |
| १५५ | वेगवती | २०५५ वै.जे. र अ. |
| १५६ | मानव अधिकारको विश्वव्यापी... | २०५५ सा.भ. र अ. |
| १५७ | 'धनराज काफ्लेबारे' | २०५५ का.मं. र पु. |
| १५८ | 'मेरो देश नेपाल' | २०५५ मा.फा. र चै. |
| १५९ | पुस्तक नम्बर १५९२० | २०५६ वै.जे. र अ. |
| १६० | एउटा पीडित आत्मा | २०५६ सा.भ. र अ. |
| १६१ | 'खोज', 'रेडियो' र 'छापामा महिला' | २०५६ का.मं. र पु. |
| १६२ | "ढोकासिधा" | २०५६ मा.फा. र चै. |
| १६३ | "भ्रमको काव्य (१६४०८)" | २०५७ वै.जे. र अ. |
| १६४ | 'एउटा अर्को लालीगुराँस' | २०५७ सा.भ. र अ. |
| १६५ | शुभकामना | २०५७ का.मं. र पु. |
| १६६ | तीन चिर्कटा | २०५७ मा.फा. र चै. |
| १६७ | याङरूप साँगदीनको निवेदन | २०५८ वै.जे. र अ. |
| १६८ | पुस्तक नं. १७७९० | २०५८ सा.भ. र अ. |
| १६९ | राष्ट्रिय सम्पदाको | २०५८ का.मं. र पु. |
| १७० | मोहन-निममाया प्रकरण | २०५८ मा.फा. र चै. |
| १७१ | 'हस्ताक्षर' अटोग्राफ | २०५९ वै.जे. र अ. |

| | | |
|---|---|---|
| १७२ | लामालामा शीर्षक | २०५९ सा.भ. र अ. |
| १७३ | ‘बाँसुरीका धुन’ | २०५९ का.मं. र पु. |
| १७४ | अतिरुद्री कोटीहोम पितृ कल्याण महायज्ञ | २०५९ मा.फा. र चै. |
| १७५ | नं. २८०९२ देखि १८०९९ सम्म | २०६० वै.जे. र अ. |
| १७६ | नयाँ नेपाल निर्माणको बाटो | २०६० सा.भ. र अ. |
| १७७ | सिपाहीको कविता | २०६० का.मं. र पु. |
| १७८ | नं. १७७५५-५७ तीन पुस्तिका | २०६० मा.फा. र चै. |
| १७९ | स्तुतिको श्रद्धाञ्जली | २०६१ वै.जे. र अ. |
| १८० | “श्री ३ बडामहारानीका खर्चको किताब” | २०६१ सा.भ. र अ. |
| १८१ | अल्पविराम | २०६१ का.मं. र पु. |
| १८२ | भोलेबाबाको सन्देश | २०६१ मा.फा. र चै. |
| १८३ | (श्री ३) बडामहारानीको खर्च | २०६२ वै.जे. र अ. |
| १८४ | ‘आईएस विएन’ | २०६२ सा.भ. र अ. |
| १८५ | सि.सा.प. | २०६२ का.मं. र पु. |
| १८६ | कालीभक्त पन्त | २०६२ मा.फा. र चै. |
| १८७ | सुशील देवकोटाका | २०६३ वै.जे. र अ. |
| १८८ | गोर्खाली-नेपाली-अङ्ग्रेजी कोश | २०६३ सा.भ. र अ. |
| १८९ | पुस्तक नं. ७४०४ | २०६३ का.मं. र पु. |
| १९० | पुस्तक नं. २२३५५ | २०६३ मा.फा. र चै. |
| १९१ | नेपालको षेलषाल | २०६४ वै.जे. र अ. |
| १९२ | कमला आँसु विजय बान्तवा | २०६४ सा.भ. र अ. |
| १९३ | पुस्तक नं. २५०४१ | २०६४ का.मं. र पु. |
| १९४ | साहित्यिक पत्रिका २००७ | २०६४ मा.फा. र चै. |
| १९५ | मदन स्मारक विद्यालय | २०६५ वै.जे. र अ. |
| १९६ | नभदिक पञ्चाङ्ग | २०६५ सा.भ. र अ. |
| १९७ | एउटा मन्तव्य | २०६५ का.मं. र पु. |
| १९८ | श्री ५ को सरकार गृहमन्त्रालय | २०६५ मा.फा. र चै. |
| १९९ | प्रेमपत्र | २०६६ वै.जे. र अ. |
| २०० | मे.ज. कृष्णशमशेरको व्रतबन्ध र विवाह | २०६६ सा.भ. र अ. |

# अमृतानन्द बाँडा एवं सुन्दरानन्द बाँडासम्बन्धी थप कुरा

*– डा. गोविन्द टण्डन*

नेपाली वाङ्मयको श्रीवृद्धिको लागि अतीतमा कैयन् साधकहरू लागिपरेका थिए । तीमध्ये केही साधकहरूको कृति एवं व्यक्तित्त्वको सम्बन्धमा नेपाली साहित्यका विद्वान्, पारखी तथा अन्वेषकहरूको अथक परिश्रमबाट समय-समयमा पुस्तक, पुस्तिका एवं पत्र-पत्रिकाहरूको माध्यमबाट जनसमक्ष विभिन्न जानकारीहरू आइरहेका छन् तर अझै कति अन्धकारमा लुकेका छन्, तिनको खोजखबर हुँदै रहला । अन्वेषकहरूको सूक्ष्म आँखा र मेहनतले भविष्यमा यससम्बन्धी नयाँ-नयाँ जानकारीहरू प्राप्त भइरहनेछन् भन्ने आशा गरौँ ।

नेपाली वाङ्मयमा सुन्दरानन्द बाँडाको नाम *त्रिरत्नसौन्दर्यगाथा*को प्रकाशन वि.सं. २०१८मा भएपछि परिचित बन्न पुग्यो। बौद्ध धर्मका अनुयायी पण्डित सुन्दरानन्दले बौद्ध धर्ममा प्रसिद्ध भएको 'त्रिरत्न', आफ्नो नाउँको सुन्दर शब्दबाट बनेको 'सौन्दर्य' शब्द र बौद्ध धर्मसँग विशेष सम्बन्ध राख्ने पद्यात्मक वर्णनको अर्थ दिने 'गाथा' शब्दको संयोजन गरी 'त्रिरत्नसौन्दर्यगाथा' नामक संस्कृत भाषामा रचिएको काव्य तथा नेपाली भाषामा अर्थ दिइएको ऐतिहासिक इतिवृत्तसहितको ग्रन्थको रचना गरेका थिए। यस ग्रन्थको विषयवस्तुतिर नजाऔँ तर यति अवश्यै हो कि नेपाली साहित्य जगत्मा यसै रचनाबाट उनी प्रसिद्ध हुन पुगे । यिनको रामायणले अझ यिनलाई प्रारम्भिक कालको नेपाली काव्यजगत्मा उच्च शिखरमा पुऱ्याउन मद्दत पुऱ्याएको मान्नुपर्छ । नेपाली भाषाको श्रीवृद्धिमा यिनले गरेको योगदान कम महत्त्वपूर्ण छैन । त्यसमा पनि नेवारी भाषा आफ्नो मातृभाषा भएको व्यक्तिले नेपाली भाषाको साहित्य सृजनामा अर्पेको समय र परिश्रमको कदर गर्नै पर्छ । पं. नयराज पन्तज्यूले ठहऱ्याउनुभए जस्तै नेपाली भाषामा कलम चलाउन सक्ने ग्रन्थकारका रूपमा उत्रेका नेवारी भाषाभाषी व्यक्तिमा अहिलेसम्म सुन्दरानन्दलाई उछिन्ने व्यक्ति फेला परेको छैन ।[1] नेपाली भाषालाई राष्ट्रभाषाको रूपमा नेपाली समाजले स्वीकार गर्दै लगेको परिवेशको ज्वलन्त नमुना

हो यो । सुन्दरानन्दकृत *त्रिरत्नसौन्दर्यगाथा*को परिशीलनबाट उनी संस्कृतका कोश, काव्य पढेका; तन्त्र, पुराण, ज्यौतिषहरू हेरेका; कर्मकाण्ड गर्न जान्ने, पुराण भन्न सक्ने, संस्कृत, नेपाली, नेवारी यी तीनै भाषामा कलम चलाउन सक्ने, हिन्दीमा पनि कलम चलाउन उत्सुक, वंशावली तथा काव्यका रसिक तात्कालिक भारादारहरूकहाँ आवत-जावत भएका, व्यवहारचतुर व्यक्तिको रूपमा सुन्दरानन्द देखिन्छन् ।[२] *त्रिरत्नसौन्दर्यगाथा*को उपोद्घातमा सुन्दरानन्दको परिचय दिँदै जाँदा पं.श्रीनयराज पन्तज्यूले– "सुन्दरानन्दले पाटनको मछिन्द्रजात्राको विस्तार पूर्वक बयान गरेका छन् । तर भादगाउँको बिस्केटको नामै लिएका छैनन्, काठमाडौँको इन्द्रजात्राको नामसम्म गोरखालीराजवंशको वर्णनको प्रसङ्गमा लिएका छन् । पाटनको मल्लकालको अन्त्यको इतिहासलाई विस्तारपूर्वक लेख्न खोजेका सुन्दरानन्दले भक्तपुर तथा कान्तिपुरको विषयमा त्यस्तो लेख्न उद्योग गरेका छैनन् । यी कुराबाट सुन्दरानन्द पाटनसँग विशेष परिचित थिए भन्ने स्पष्ट छ" भनी लेख्नुभएको छ । हुन पनि मछिन्द्रनाथ (मत्स्येन्द्रनाथ) पाटनको अधिष्ठाता देव हुन् । पाटननिवासीले मछिन्द्रनाथलाई अत्यधिक श्रद्धा-विश्वाससाथ पुज्दछन्, चाहे वैदिक हुन् चाहे बौद्ध। सुन्दरानन्द बाँडाले मच्छिन्द्रनाथको विशेष उल्लेख गर्नुमा अर्को पनि कारण रहेको कुरा वि.सं. १८८४ वैशाखको तात्कालिक श्री ५ राजेन्द्रविक्रम शाहले अमृतानन्द र सुन्दरानन्दलाई गरिदिएको लालमोहरबाट थाहा हुन आएको छ। उनी मच्छिन्द्रनाथको रथको गुठीसँग सम्बन्धित गुठियार थिए ।

उक्त लालमोहरमा उल्लेख गरिएअनुसार अमृतानन्द तथा सुन्दरानन्द पाटन ओकुबहाल महाबौद्धका बासिन्दा थिए। उनीहरूका पुर्खाको नाम जीवराज बाँडा थियो । उनले मछिन्द्रनाथको रथमा सुनको विमान चढाई गुठी राखेका थिए। पछि उक्त गुठी इजारा (ठेक्का)मा दिइयो। निजी गुठी ठेक्कामा चलाउन किन दिइयो थाहा छैन। राजगुठीहरू ठेक्कामा चलाउन दिने चलनले एकताका ग्राह्यता पाएको त प्रशस्त प्रमाणहरू पाइन्छन् ।[३] साथै त्यस गुठीको परपजनी गर्ने अधिकार पनि मङ्गल भट्टलाई दिइयो। त्यसपछि वि.सं. १८५८ मा भाजुधन नामका एक व्यक्तिले उक्त सुनको विमान गुठी अर्थात् लुंथागुठी इजारामा दिइनाले लुंका र विमान सबै बिग्रयो, ठेक्कामा

गुठी चलाउनेले बनाएन भनी श्री ५ गीर्वाणयुद्धविक्रम शाहमा बिन्ती गर्दा उक्त गुठीको कार्यहरू ठेक्कामा गर्न दिने अघिको चलन बन्द गरी जाहेरवाला भाजुधन जैसीको नाउमा लालमोहर गरी उनैले गुठी चलाउन पाउने भए । पछि त्यो कुरा थाहा पाई अमृतानन्द तथा सुन्दरानन्द बाँडाका बाबु रामानन्दले श्री ५ गीर्वाणयुद्धविक्रम शाहमा उक्त गुठी आफ्ना पुर्खाले राखेको हुनाले त्यसको उनीहरूले पाउनुपर्ने कुराको बिन्तीजाहेर गरेपछि यस विषयमा पाटनका जानिफकार बूढापाकाहरूसँग बुझ्दा रामानन्दका पुर्खाले नै सो गुठी राखेको ठहर भई वि.सं. १८६० मा रामानन्दकै नाउमा लालमोहर भयो । उक्त गुठीको अख्तियारी पाएपछि रामानन्दले गुठीको तिर्नुपर्ने पोता तिरेनछन् । त्यसले गर्दा सो गुठी जफत भएछ । त्यसको केही समयपछि उनले पोता तिरिदिए र वि.सं. १८६२ मा लालमोहर भई पुनः सो गुठीको अधिकार पाए। त्यसपछि गुठीबाट गर्नुपर्ने कामहरू हुँदै गए तर फेरि त्यसको २१ वर्षपछि अर्थात् वि.सं. १८८३ सालमा हाक्या कटुवाल भन्ने एक जना व्यक्तिले रामानन्द बाँडाको नाउँको उक्त गुठी निजी गुठी होइन, राजगुठी हो भन्ने जिकिर गरी उनले चलाउने अख्तियार पाएको लालमोहर रद्द गराई आफ्नो नाउँमा लालमोहर गराउन सफल भएछन् । त्यस कुराको जाहेरी श्री ५ राजेन्द्रविक्रम शाहमा अमृतानन्द र सुन्दरानन्दले गरेको चर्चा त्यस लालमोहरमा आएको छ । यस विषयमा श्री ५ बाट दफदरखाना श्रीकुमारीचोकलाई के-कसो भएको भनी बुझ्न लगाउँदा राजगुठी भन्ने ठहर नभई तिनै बाँडाका पुर्खाले राखेको भन्ने सदर भएकोले सो गुठी सञ्चालनको लागि राखिएको ५० रोपनी १२ आना जग्गाको आम्दानीले उक्त गुठीअन्तर्गत मछिन्द्रनाथको रथको सुनको विमान, तोरण, लुंथा, बिग्रे-नासिए सालबसाल बनाउने तथा वार्षिक २७ रुपियाँ ८ आनाको पोता तिर्नुपर्ने गरी श्री ५ राजेन्द्रविक्रम शाहबाट वि.सं. १८८४ वैशाखशुक्ल पूर्णिमाको दिन लालमोहर भएको यसबाट बुझिन्छ ।

यस लालमोहरले सुन्दरानन्द बाँडाको विषयमा केही थप जानकारी दिएको उल्लेख्य छ । जीवराज बाँडा सुन्दरानन्द बाँडाका बाजे-जिजुबाजे को हुन् अहिले स्पष्ट भन्न नसकिए पनि उनका पूर्वज थिए भन्ने कुरा थाहा हुन आएको छ। त्यसै गरी सुन्दरानन्दका बाबु

रामानन्द थिए भन्ने कुराको थप पुष्टि भएको छ । अमृतानन्द र सुन्दरानन्द दाजुभाइ रहेछन् भन्ने कुराको साथै मछिन्द्रनाथगुठीसँगको सम्बन्धको बारेमा पनि प्रकाश पारेको छ । सुन्दरानन्दका दाजु अमृतानन्दको नेपाली वाङ्मयमा *पच्चीस वेताल*बाहेक अरू कृति पाइएको थाहा छैन । यिनी पनि धर्म-संस्कृतिमा रुचि राख्ने व्यक्तिको रूपमा देखा पर्छन् ।

अमृतानन्दको विषयमा रुचि जगाउने काम मेरो लागि बी. भट्टाचार्यको पुस्तक *द इन्डियन बुद्धिस्ट आइकोनोग्राफी*ले गर्न सघाउ पुऱ्यायो । त्यसैले उनलाई म धन्यवाद दिन्छु । वि.सं. २०४० ज्येष्ठको कुरा हो, अहिले गतेचाहिँ बिर्सें, मेरा गुरु प्रो.डा. मुकुन्दराज अर्यालज्यू र म विश्वविद्यालयको अध्यापन कार्य सकेर घर फर्कने क्रममा बसबाट आफ्नो गन्तव्य शहीदढोकातिर आउँदै थियौँ । उहाँको रुचिको विषय प्रतिमालक्षण भएको हुनाले कुराको सिलसिलामा मैले बी. भट्टाचार्यको उक्त पुस्तकको परिचयखण्डमा चर्चा गरिएका प्रसङ्ग र अमृतानन्दको बौद्ध प्रतिमालक्षणसम्बन्धी *धर्मकोषसङ्ग्रह*को विषयमा त्यहाँ उल्लेख भएका कुराहरू सुनाएँ । उक्त पुस्तक मैले भर्खरै खरिद गरेर ल्याएको थिएँ । राम्रो भनौँ वा के भनौँ, मेरो बानी ल्याएको पुस्तक-पुस्तिका जति नै समय लागोस्, सुरुदेखि अन्तसम्मको विषयवस्तुलाई सरसरती हेर्ने छ । त्यसमा रुचि लागेको विषयमा राम्ररी नै पढ्ने, नलागे कमसेकम शीर्षक, उपशीर्षकहरूमात्र भए पनि पढेर सन्तोष लिने गरेको छु । यसो गर्दा फाइदै भएको छ । चाहिएको बखत आफूलाई आवश्यक परेको विषयमा खोजखबर गर्न गाह्रो पर्दैन, सजिलै विषयवस्तु पत्ता लगाउन सकिन्छ ।

बी. भट्टाचार्यको पुस्तकको परिचय पढ्दा अमृतानन्दले रचना गरेको धर्मकोषसङ्ग्रह बौद्ध प्रतिमालक्षणको लागि महत्त्वपूर्ण ग्रन्थ भएको तथा त्यो ग्रन्थको हस्तलिखितप्रति दुइटामध्ये एउटा नेपालको तात्कालिक दरबार लाइब्रेरीमा तथा अर्कोप्रति रोयल एसियाटिक सोसाइटी बङ्गालमा छ भन्ने जुन जानकारी त्यहाँ दिइएको छ, त्यसले मेरो मस्तिष्कमा छाप परिरहेको थियो । मैले अर्यालज्यूसँग उक्त ग्रन्थको प्रकाशन हुन सके बौद्ध प्रतिमालक्षणको अध्ययन-अध्यापनमा सहयोग पुग्ने धारणा पनि राखेँ र सो पुस्तक दरबार लाइब्रेरीका

सम्पूर्ण हस्तलिखितग्रन्थहरू वीर पुस्तकालय हुँदै राष्ट्रिय अभिलेखालयमा आइसकेकाले जरुर पनि सो अभिलेखालयमा सङ्गृहीत हुनुपर्ने आशय प्रकट गरेँ। केही दिनपछि नै उहाँले त्यसको प्रतिलिपि ल्याउनुभयो र त्यसलाई राम्ररी बुझिने गरी सफा र स्पष्टसँग लेख्ने काममा संस्कृतभाषासमेत जान्ने आवश्यक सहयोगी जुटाउने काममा मैले श्रीचिन्तामणि योगी (हाल प्रधानाध्यापक, हिन्दु विद्यापीठ) लाई उहाँसँग परिचय गराइदिएँ । योगीज्यूले उक्त काम समयमा नै पूरा गरिदिनुभयो। अर्यालज्यूले त्यसमा अथक परिश्रम गर्नुभयो र पुस्तकाकार रूपमा प्रकाशन गर्ने अवस्थामा पुऱ्याउनुभयो । अमृतानन्दद्वारा तयार पारिएको *धर्मकोषसङ्ग्रह* अर्यालज्यूको सम्पादनमा नेपाल प्रज्ञा-प्रतिष्ठानबाट हालै प्रकाशित भयो भन्ने सुनेको छु। यसरी त्यसैबेलादेखि 'अमृतानन्द' नाम र उनको कृतिको बारेमा मलाई अझ रुचि बढ्दै गयो । सायद त्यसैले होला, एक जना विद्वान्लाई घचघच्याउन पाएँ । अप्रकाशित कृति जनसमक्ष आउन सक्यो । अमृतानन्द ब्रिटिस रेजिडेन्ट बी. हड्सनका सहयोगी पण्डित थिए ।[४]

अमृतानन्दको विषयमा रुचि बढाउने अर्को घटना नै भनौँ, वि.सं. २०४१ सालतिर गुठीलगत तथा तहबिल कार्यालयमा पशुपतिमन्दिर एवं त्यस क्षेत्रसँग सम्बन्धित अभिलेख सङ्कलनको क्रममा झन्डै डेढ वर्षजति नियमितरूपले त्यहाँ जाने-आउने सिलसिला बन्यो । त्यसबेला त्यहाँ रहेका विभिन्न अभिलेखहरू हेर्दै-सार्दै जाँदा अमृतानन्द र सुन्दरानन्दको नाम एकसाथ उल्लेख भएको वि.सं. १८८४ को लालमोहर प्राप्त भएकोले त्यसलाई सारेर ल्याएको थिएँ। कुनै लेखमा यसलाई उपयोग गरूँला भनी त्यसबेला थन्काएको थिएँ । त्यसको झन्डै दस वर्षपछि त्यसलाई छपाउने सुयोग मिल्यो ।[५] त्यत्तिखेरै एउटा सानो लेख छपाई सुन्दरानन्दबारे केही थप कुरा जानकारी गराउनुपर्ला भन्ने लागेको थियो तर तारतम्य भन्ने अहिले मिल्यो ।

पाटन ओकुबहालको रुद्रवर्णमहाविहारसँग अमृतानन्द र सुन्दरानन्द बाँडा सम्बन्धित थिए भन्ने जानकारी लिपिविशेषज्ञ वयोवृद्ध श्रीहेमराज शाक्यले मलाई गराउनुभयो । धनवज्र वज्राचार्यले पनि यस कुराको जानकारी यज्ञानन्द वज्राचार्यबाट थाहा पाएको कुरा पं. नयराज पन्तज्यूले *त्रिरत्नसौन्दर्यगाथा*को ग्रन्थकार-परिचय शीर्षकमा लेख्नुभएको

छ ।[६] रुद्रवर्णमहाविहारले सम्भवत: नेपाललाई मध्यकालमा प्रसिद्ध कलाकार अरनिको दियो, आधुनिक कालमा अमृतानन्द र सुन्दरानन्द बाँडा दियो। वर्तमान कालका प्रसिद्ध बौद्ध भिक्षुहरूमा स्वर्गीय अमृतानन्द महास्थवीर, भिक्षु सुदर्शन, भिक्षु ज्ञानपुन्हिक आदि यसै महाविहारका उपजहरू हुन् । उहिले बौद्ध विहारहरू ज्ञानार्जन गर्ने प्रमुख स्थलको रूपमा समाजमा विद्यमान थिए। बौद्ध धर्मलगायत कलाकौशलका विभिन्न विधाहरूको अध्ययन-अध्यापन गर्ने केन्द्र नै बौद्ध विहारहरू थिए । यसउसले ऐतिहासिक महत्त्वयुक्त बौद्ध विहारहरूको राम्ररी अध्ययन-अनुसन्धान हुन सके धेरै कुराहरू जानकारीमा आउने कुरा निश्चित छ।

अभयराजले शिल्पकलामा लाग्ने पाँच जना छोराहरूलाई आफ्नी श्रीमतीको एवं शास्त्रज्ञ दुई जना छोराहरूलाई आफ्नो श्राद्ध गर्नुपर्ने थिति बसालिदिएअनुरूप अहिलेसम्म पनि श्रीमतीको पौषकृष्ण तृतीया एवं अभयराजको पौषकृष्ण द्वितीयाको दिन आगममा पूजा गरी सम्झना गर्ने परिपाटी छँदै छ ।

अमृतानन्द, सुन्दरानन्द शाक्य पाटनको महाबौद्ध निर्माण गर्ने अभयराजका वंशज हुन् भन्ने परम्परा अझै ओकुबहालका शाक्यहरूमा छ ।[७] भनिन्छ, अभयराजका सात जना छोराहरू थिए। तिनका पाँच जना छोराहरूलाई महाबौद्ध तथा दुई जना छोराहरूलाई ओकुबहालको जिम्मा दिएका थिए । ती पाँच जना छोराहरूलाई ललितशास्त्रको विविध ज्ञानमा निपुण गराइएको थियो भने दुई जनालाई चाहिँ शास्त्रीय ज्ञानको अध्ययन-अध्यापनको जिम्मा दिइएको थियो । तिनै अभयराजको वंशमा जीवराज, जयमुनि आदि भएका थिए। जयमुनि जीवराजको नाति थिए। राष्ट्रिय अभिलेखालयमा रहेको सुगरावदाननामक हस्तलिखितग्रन्थको पुष्पिकावाक्यमा उनलाई 'महापण्डित' भनिएको छ । यसबाट उनी ठूला विद्वान् थिए भन्ने बुझिन्छ । जीवराजले मत्स्येन्द्रनाथको रथको विमानलाई सुनले बनाई निर्माण गरेका थिए भन्ने कुराको चर्चा माथि गरिसकिएको छ। उक्त विमानको चारैतर्फको काठको बार बनाउने काम भने राज्यप्रकाश मल्लले ने.सं. ८६६ (वि.सं. १८०३) वैशाखमा गरेका थिए ।[८]

यही वंशमा रामानन्द, अमृतानन्द, सुन्दरानन्दजस्ता विद्वान्हरूको जन्म भएको थियो । अमृतानन्दको बौद्ध धर्मकोषसङ्ग्रह, नेवारी

व्याकरण प्रसिद्ध मानिन्छ ।[९] बौद्ध धर्मकोषसङ्ग्रहको रचना ने.सं. ९४६ (वि.सं.१८८३) मा गरेका थिए। उक्त दुवै ग्रन्थ बी. हड्सनको अनुरोधमा तयार पारेका थिए। ब्रिटिस रेजिडेन्ट हड्सनको सहयोगी पण्डितको रूपमा उनको प्रवेश भएकाले त्यतिखेरका पण्डितहरूमा खुलदुली मच्चिनु स्वाभाविकै हो । त्यो उनको परिवारमा पनि घट्यो। उनका भाइ सुन्दरानन्दलाई पनि मनमा केही ईर्ष्या पैदा भयो र त्यसैबाट केही गर्नुपर्ने जाँगर आई *त्रिरत्नसौन्दर्यगाथा* तयार गरी श्री ५ राजेन्द्रविक्रम शाहलाई खुसी तुल्याई आफूले पनि केही पारितोषिक प्राप्त गर्ने उद्देश्यले रचना गरेका हुन् भन्ने भनाइ परम्परागत रूपमा अझै जीवन्त रहेको कुरा श्रीहेमराज शाक्यले मलाई जानकारी गराउनुभएको थियो ।

अमृतानन्द व्युत्पन्न व्यक्ति थिए। उनले अश्वघोषरचित सत्र सर्गको *बुद्धचरित* महाकाव्य केवल १४ सर्गमात्र प्राप्त भएकोमा बाँकी ३ सर्ग अश्वघोषकै शैली र छन्दमा रची पूर्ण गरिदिएको कुरा आचार्य नरेन्द्रदेवले बौद्ध दर्शनको भूमिकामा उल्लेख गरेका छन् ।[१०] उनले रचेको *पञ्चविंशतिकल्याणकारिकास्तुति, हनुमान्नाटक* आदि संस्कृत भाषामा लेखिएका हस्तलिखितग्रन्थहरू राष्ट्रिय अभिलेखालयमा छन्। उनले नेपाली भाषामा पनि कलम चलाएका छन्। *पच्चीस वेताल* उनैको कृति हो। यसको रचना उनले वि.सं. १८६८ मा गरेका थिए ।[११]

वि.सं. १८९३ सालको तन्त्राख्यानसँग सम्बन्ध जोडिएर रहेको *वेताल पञ्चदिंशति कथा* र अमृतानन्दको *पच्चीस वेताल* एकै रूपका देखिएका हुँदा तन्त्राख्यान पनि उनैको कृति हो कि भन्ने अनुमान शरद्चन्द्र भट्टराईको छ[१२] तर यसमा विचारै गर्नुपर्ला किनभने अमृतानन्दको मृत्यु कहिले भयो त्यो निश्चित गरी बताउन नसके पनि ने.सं. ९५५ (वि.सं. १८९२) मा उनी दिवङ्गत भएको स्मृतिमा ओकुबहालमा एउटा पाटी बनाएको शिलालेख पाइएकोले उनी त्यही साल वा त्यसभन्दा केही अगाडि नै दिवङ्गत भइसकेको अनुमान हुन्छ।

अमृतानन्दले पालपाली राजा पृथ्वीपाल सेनलाई काठमाडौँ आउँदा नेवारी भाषा सिकाएका थिए। उनले ज्यापू-ज्यापुनीहरूसँग कुरा गर्ने शैली र तरिकासम्म पनि काव्यात्मक ढङ्गले लेखी राखेको

हस्तलिखितग्रन्थ ललितपुरका ललितराज जोशीसँग थियो । अहिले उनको मृत्यु भइसक्यो । अहिले उक्त रचना कोसँग छ थाहा छैन । ललितराज जोशी सत्यमोहन जोशीका 'फुकि' हुन् ।

अमृतानन्दले ने.सं. ९३५ (वि.सं. १८७२) मा आफ्नो मार्गदर्शनमा केही बौद्ध उपासक उपासिकाहरूलाई बौद्धगयाको यात्रामा लगेका थिए । तीर्थयात्रामा सहभागी हुनेमध्ये सबैभन्दा वृद्धले आफ्नो श्राद्ध गर्दा अमृतानन्दको पनि शेषपछि श्राद्ध गर्नको लागि गुठी राखिदिएका थिए। त्यही परम्पराअनुसार आजसम्म पनि श्राद्धको दिन अमृतानन्दका वंशजमध्ये एक जना साक्षीका लागि उपस्थित भइदिनुपर्ने प्रचलन छ। अमृतानन्द बौद्धगयामा गएको सम्झनामा तयार पारेको पौवाचित्र पनि छ। त्यो पाटननिवासी एक जना महानुभावहरूको सङ्ग्रहमा छ।[१३]

डेनियल राइटले सम्पादन गरी प्रकाशित गरेको वंशावली तयार गर्न सहयोग गर्ने पं. श्रीगुणानन्द पनि अभयराजकै वंशज हुन्। उनको विषयमा परिचय दिँदै राइटरले लेखेका छन्-"He was assisted, when necessary, by Pandit Shri Gunananda, Who is a native of Nepal, residing at Patan, and whose ancestors, for many generations, have been the Empiless of this history" [१४] राजकीय पुस्तकालयको स्थापनाकालदेखि नै ओकुबहालको विद्वद्परम्परामा हुर्केका गुभाजू तथा बाँडाहरूको योगदान रहेको पाइन्छ । वि.सं. १९०९ मा अमृतानन्द सुन्दरानन्दका बाबु रामानन्द राजकीय पुस्तकालयका हाकिम थिए । राष्ट्रिय अभिलेखालयमा पछिसम्म पनि यज्ञानन्द वज्राचार्य कार्यरत थिए। त्यस्तै गरी उनका बाबु जितेन्द्रानन्द तथा बाजे तोढरानन्द पनि वीरपुस्तकालयमा काम गर्दथे। पुराना लिपिहरू पढ्ने, अनुवाद गर्ने तथा आवश्यक परे लिपिबद्ध गर्ने काम उनीहरूको थियो । पहिले जुन राजकीय पुस्तकालय थियो, त्यही पछि वीर पुस्तकालय भयो। त्यही वीरपुस्तकालय अहिले केही परिवर्तनहरूसहित राष्ट्रिय अभिलेखालय भएको छ ।

अमृतानन्दका वंशज हुँ भन्ने पाटन ओकुबहालका वयोवृद्ध यज्ञानन्द आफ्नो नामपछाडि वज्राचार्य लेख्छन् । अमृतानन्द, सुन्दरानन्द आफूलाई बाँडा अर्थात् शाक्य भन्थे। यसो किन भएको

भनी जिज्ञासा हुनु स्वाभाविक छ। यस सम्बन्धमा श्रुतिपरम्परा के छ भने जयस्थिति मल्लको समयभन्दा अगाडिसम्म आवश्यक साधना एवं दीक्षा लिएको खण्डमा शाक्य पनि वज्राचार्य हुन सक्ने परम्परा थियो। जयस्थिति मल्लको समयदेखि भने वज्राचार्यहरू वज्राचार्य रहने, शाक्य शाक्यै रहने वज्राचार्य हुन नपाउने चलन चलाए। यो परम्परा पाटनका राजा विष्णु मल्ल (वि.सं. १७८३-१८०२) को समयसम्म पनि थियो। एकपटक काठमाडौँ खाल्डोमा अनावृष्टि भयो। पानी पर्दै परेन। पण्डित सर्वानन्द शाक्यले आफूले मन्त्रसाधना गरी पानी पार्न सक्ने कुरा राजा विष्णु मल्लसमक्ष पुऱ्याए। राजाले उनलाई आवश्यक बन्दोबस्त मिलाई साधना गर्ने आज्ञा दिए। उनले साधना गरेको प्रभावस्वरूप केही समयपछि नै घनघोरसँग वृष्टि भयो। उनको साधना देखी राजा अत्यन्त प्रभावित भए। उनले पण्डित सर्वानन्द बाँडालाई खुसीयालीमा के चाहन्छौ भनी सोद्धा उनले आफ्ना पुर्खाहरू वज्राचार्य हुन पाउँथे म पनि पाऊँ भनेछन्। त्यही घटनाले गर्दा यज्ञानन्दले आफूलाई वज्राचार्य भनेका हुन् भन्ने भनाइ छ।

शिल्पशास्त्र एवं विद्यावंशको परिपाटीमा ओकुबहालको महत्त्वपूर्ण भूमिका छ। यसले धेरै सपूतहरूलाई जन्मायो। पाटनमा प्रमुख विहारहरू १८ ओटा छन्। तिनमा ओकुबहाल (श्रीरुद्रवर्णमहाविहार), क्वावहाल (श्रीहिरण्यवर्णमहाविहार), र बुबहाल (श्रीयशोधरामहाविहार) को अग्रणी स्थान छ। मत्स्येन्द्रनाथको यात्राको अवसरमा प्रत्येक वर्ष चैत्रशुक्ल पूर्णिमाका भोलिपल्ट हुने महास्नानमा यिनै तीन बहालबाट पञ्चताल बाजा बजाउन जानुपर्ने परम्परा रहिआएको छ। त्यसबेला चर्यागीत पनि गाउनुपर्छ। त्यस्तै गरी पाटनमा दसैँताका हुने मातृकागणको नागको जिम्मा आलोपालो गरी यिनै तीन विहारको पर्छ।

अमृतानन्द र सुन्दरानन्दको विषयमा अझै जान्नुपर्ने धेरै विषयहरू बाँकी छन्। विद्वान्, अन्वेषक एवं पारखीहरूबाट भविष्यमा अरू नालीबेलीहरू पत्ता लाग्दै जानेछन्। यो विषय रूखोसुखो भए पनि मलजल थप्ने काम समाज र राष्ट्रले गर्दै जानुपर्छ भन्ने अपेक्षा गर्दै आजलाई विश्राम लिन्छु।

## परिशिष्ट – १

तात्कालिक श्री ५ राजेन्द्रवीरविक्रम शाहले अमृतानन्द एवं सुन्दरानन्द बाँडालाई गरिदिएको लालमोहर

यो लालमोहरको नक्कलप्रति गुठीलगत तथा तहबिल कार्यालयमा, लालमोहर नक्कल पोका नं ८, सङ्ख्या २२४ मा छ। यहाँ वि.सं. १८८४ वैशाख दिइएको छ। यो अभिलेख नेपालमा गुठीव्यवस्था, १४६ पृष्ठमा छपाएको छ।

**प्रशास्ति**

१. आगे सहर पाटं ओकुवहाल महाबुध घरको अमृतानंद सुन्दरानंद
२. बाडाके तेरा पुर्षा जीवराज बाडाले श्रीमछीन्द्रनाथका रथमा सुनको वी-
३. मान चढाऊदा राष्याको गुठी पछी बीचमा ईजारा गरी मंगलभटबाट
४. पजनी हुन्दो रहेछ ५८ सालमा भाजुधन जैसीले लुंथा गुठी ईजारा
५. हुदा देवताको लुथा र रथको वीमान सबै विग्र्या ईजारादारले बनायेन
६. भनी वीन्ती गर्दा ईजारा मेटी भाजुधन जैसीका नाऊमा मोहर भयाको रहेछ
७. सर्कारवाट ईजारा मेटी वक्स्या पछी मेरा पुर्षाका गुठी मैले षानु पाऊन्या
८. हो भनी तीमीहरुको बाबा रमानन्द बाडाले श्री ५ बुबाज्यूका हजूरमा
९. वींन्ती गर्दा चौवीस हजारका जानकार बुढाबुढाहरुसित जाचदा तीमे-
१०. हरुका पुर्षाले राष्याको रहेछ र ६० सालमा रमानंद बाडालाई मोहर
११. गरी थामी बक्सनु भयको रहेछ रमानंद हालका जाचमा पोता
१२. नतीर्‍याको भनी जफत गर्दा फेरी ६२ सालमा मोहर गरी थामी बक्स-
१३. नु भयाको रहेछ ८३ सालमा हाक्या कटुवालले रमानंद बाडाका नाऊ-

१४. को मोहर हानी आफ्ना नाऊको मोहर गराई लुथां गुठीमा बहाली ग-
१५. र्दा तीमीहरुले हाम्रा हजुरमा वीन्ती गर्दा दफदरषाना श्रीकुमारीचोक
१६. बाट जचाऊदा राजगुठी हो भन्या मानीस नठहर्दा हीजोका जाचमा रहना-
१७. को जीउती बुढाबुढाहरुसीत सोद्धा ईनै बाडाका पुर्षाले राष्याको हो भ-
१८. न्या सुन्याथ्युं भँदा हीजो पनी श्री ५ बुबाज्यूबाट तीमीहरुका बाबुका नाऊ-
१९. मा मोहर गरी बक्सनु भयाको रहेछ आज हामीले पनी तपसील बमो-
२०. जींका षेत रोपनी ५० ॥। को पोता रुपैया २७ ॥ सालवसाल तीरी श्री-
२१. मछीन्द्रनाथका रथका सुनको विमान तोरन लुंथा बिग्र्या टुट्याको सा-
२२. लवसाल बनाई परापुर्व देषी चली आयाको गुठी चलाई सेष रह्या-
२३. को षानु भनी थामी बक्स्यौ आफ्ना षातीरज्मासीत पुर्षाको गुठी जा-
२४. नी भोग्य गर ...................

**तपसील**

| आसामी | षेत रोपनी | दर | रुपैया |
|---|---|---|---|
| ङषु | ६ | ।। | ३ |
| पाको | ६ | ।।। | ४।। |
| पतीपा | ६ | ।।। | ४।। |
| भेलुया | ६ | ।।। | ४।। |
| लानीवु | ७ | । | २।। |
| कुसुंती | ८ | ।। | ४ |
| थदे | १ | । | । |
| ढुषुवगर | १ | । | । |
| लानीवु | १।। | ।। | ।।। |
| धोपो | ३ | । | १ |

टेफना ५ । १॥।

ईती सम्वत १८८४ साल वैसाषसुदी १५ रोज ६ सुभम्

## पाद टिप्पणी

१. धनवज्र वज्राचार्य (सम्पा.), *त्रिरत्नसौन्दर्यगाथा,* (काठमाडौं : नेपाल सांस्कृतिक परिषद्, वि.सं. २०१९) को श्री नयराज पन्तज्यूको उपोद्‌घातको ८ पृष्ठ।

२. *ऐजन।*

३. डा. गोविन्द टण्डन, *नेपालमा गुठी व्यवस्था,* (काठमाडौं : नेपाल अध्ययन संस्थान, वि.सं. २०५२), ६१ पृष्ठ।

४. Benoytosh Bhattacharya, The Indian Buddhist Iconography, Second Edition, (Calcutta: Firma K.L. Mukhopadhyay, 1968 A.D.), p.2.

"Many of the later developments are found Incorporated in the work entitled the Dharmakosasangraha of amrtananda who was the Residency pandit when B. Hodgsan was the Resident of Nepal. A manuscript of this work is preserved in the Durbar Library of Nepal, and there is also a copy of the original, Preserved in the Royal Asiatic Society of Bengal in the Govermment collection. Amitananda's work is not published."

५. डा. गोविन्द टण्डन, *पूर्ववत्,* पादटिप्पणी ३ सङ्ख्या, १४४-१४६ पृष्ठ।

६. धनवज्र वज्राचार्य (सम्पा.), *पूर्ववत्,* पादटिप्पणी १ सङ्ख्या, ६ पृष्ठ।

पाटनको ओकुवहाल (रुद्रवर्णमहाविहार) मा सुन्दरानन्द बस्तथे तथा उनको पाँचौं पुस्तामा म जन्मेको हुँ भन्ने पण्डित यज्ञानन्द वज्राचार्यको भनाइ छ।

७. यो कुराको जानकारी मलाई पं. हेमराज शाक्यले दिनुभएको हो।

८. Hemaraj Shakya and T.R. Vaidya, *Medieval Nepal,* (Kathmandu: T.r. Vaidya, 1970 AD).

९. Kamal P. Malla, "Amrittananda's Grammer A.D. 1831", *Nepalese Linguistics* Vol.1, Nov. 1980), p. 226.

१०.

११. शरद्‌चन्द्र शर्मा भट्टराई, “अमृतानन्दः नेपालीका पुराना लेखक”, *पारिजात,* वर्ष ५ अङ्क ४ (पूर्णाङ्क २४, वि.सं. २०४१)।

१२.

१३. यो कुराको जानकारी पं. हेमराज शाक्यले दिनुभएको हो।

१४. Daniel wright, History of Nepal, Second Indian Edition, (Calcutta: Susil Gupta (India) Private LTD. 1958), p. v.

## टयाङ्लादेखि बाङ्लासम्मको साहित्यिकयात्राका सम्झना

*- डा. गोविन्दराज भट्टराई*

### अर्घाखाँचीले बोलायो

तिनाउनदी तरेपछि उँभोतिर पाल्पा डाँडा र उँधोतिर पवित्र लुम्बिनीको बीच धर्को पारेर महापथ कुद्यो; हामी त्यही कालो धर्केधर्का पश्चिम उड्यौँ । उत्तरतिरको चुरे पर्वतमाला र दक्षिणको मैदान, बीचको जङ्गल बुट्यान र पातलो बस्ती, पानी नपरेको मध्य वैशाखको मधेस– तिरिमिरि-तिरिमिरि टाढाको पातलो तुवाँलोले हल्का छोपेजस्तो । गोरुसिँगे सुनेको मात्र हो– केही पश्चिम चन्द्रौटाले इतिहासको एउटा त्रासद टीका निधारमा लगाएर उभिएको निकै पर होला । त्यता लागेनौँ; अझै पर भालुबाङ होला, अझै पर दाङ । ती नामहरू भयले सम्झिँदै हामी उत्तर लाग्यौँ । मेरो निम्ति आजै हो पहिलोपल्ट, त्यहाँबाट उत्तर लाग्यौँ अर्घाखाँची ताकेर ।

निकै लामो मधेस कटेपछि तातो हावा र सालका कलिला पात, डढेलोले खाएका भुइँ छोड्दै हामी चुरे प्रवेश गऱ्यौँ । अलि फस्के जमिन, अलि गेग्रचानी, पातला जङ्गलबुटाले ढाकेको चुरे निकै माथि पुगेपछि हावा चिसियो । ठ्याक्कै सुर्खेतको जस्तै बिस्तारै उकालिने मार्ग, सरल घुम्ती, साँघुरो सिङ्गल ट्रयाक तर आनन्दकर मार्ग। एकान्त र निर्जन, खोल्साखोल्सी बेगरको। भर्खर पाइलो हाल्दै गरेको जङ्गल र पतकरमा अनि भीरको खरघारीमा डढेलो सल्केर खरानी कालै देखिने माटो। तर सबै आनन्दकारी! एउटा चिरपरिचित अतीत जस्तै ।

बिस्तारै चुरेको उचाइमा पुग्यौँ; बजार, विद्यालय अनि रमणीय भन्ज्याङमा पर्खिरहेको ठाडा । त्यो ठाडा पोखरीको अवस्थिति अति आकर्षक थियो । त्यसपछिका मार्गहरू तीरको टुप्पाबाट कुध्ने, आङ सिरिङ्ग पनि पार्ने थिए । तर परपर छरिएका सेता-राता घरहरू, डाँडापाखा खोस्रेर कुदेका धुले मार्गहरू, जङ्गलभित्रभित्रै सिर्सिराएको बतास, सुसाइरहेका सल्ला, पाउलिएका चिलाउने, डाँडापाखा खोस्रेर कुदेका धुले मार्गहरू, जङ्गलभित्रभित्रै सिर्सिराएको बतास, सुसाइरहेका सल्ला, पाउलिएका चिलाउने, कलिला पातभित्र लुकेका सेता फूल र

थुँगाहरू, अब चरा कराउने बेला । हामीलाई अधिक आनन्द लाग्यो । अलिक तल झरेपछि एउटा सेपिलो ठाउँमा जङ्गलको शिरमा रोकिएर एकछिन ऐँसेलु झ्याङतिर पस्यौँ, गुराँस फुलेको नदेखेको पनि धेरै भयो । काली अँगेरी नुहेको नदेखेको पनि धेरै भयो । शकुन्तला आनन्दले उचालिएर सिरसिरे बतास चल्ने पाखामा ऐँसेलु झ्याङ्भित्र हराउँला जस्तो गरिन् । त्यो कटेर झरेपछि टाढैबाट तलको बजार देखियो, धेरै परको वाङ्ला देखियो । चन्द्रकान्तजीको गाउँ वाङ्ला । चन्द्रकान्तजी अत्यधिक सुखी देखिए । टाढैबाट हल्का तुवाँलो, अपराह्ण नाघेका घाममा विचित्रको भौगोलिक अवस्थिति देखियो । तर गाडीभित्र सबै ठहर गर्न नसक्तै घुम्ती र मोड देखिए, छेलिए । एउटा सुन्दर फाँट आयो । डिलडिलमा बैँसका रूखले छेकेको सानो खाँची खोला, बिस्तारै उठेका वारिपारिका गाउँ र पहाड ।

खोलाकिनार, बैँस पाउलिएर झपक्क नुहेको बेला कति सुन्दर ! बैँसले उर्लेको बाढी छेक्ला ? तर यहाँ छेकेकै थियो । सानो खाँची डिलडिलका बैँसलाई मानेर कुदिरहेको थियो ।

सन्धिखर्क बजार पुग्दा घाम टुप्लुक्क डाँडैमा पुगे । आधुनिक शैलीका घर, सफा सडक, खोलातटबाट विस्तारै उठेको समथर धेरै सुन्दर देखियो । खोला किनारको फाँटमा ससाना मकै सागसब्जी अत्यन्तै उर्बर लाग्ने फाँट, निकै अघिदेखि खोला किनार-किनार वारि र पारि हुँदै बाटो कुदेको थियो । वारिपरि गालाका गाउँ दम्स्याइला पाखामा बसेका, थुम्कीमा बसेका, पातला वृक्षले छेलिएर रातमाटे भूभागमा ।

बजारको बीच हुनुपर्छ एउटा चोकको नजिकै रोकियौँ; डाँडामा पहेँला घाम देखिए । हामी ओर्लेर 'सरिता पुस्तकालय' लेखिएको घरमा पस्यौँ । ससानो पुस्तकालय प्रेमबहादुर कार्कीले आफ्नी स्वर्गीय सरिताको नाममा स्थापना गरेको– त्यो हाम्रो भेटघाट केन्द्र भयो । त्यहीँ पाणिनीका चार अङ्क बोकेर माधवराज चुँदाली आए, त्रिवेणीका तीन अङ्क लिएर तिलकराज चुँदाली । यी प्रकाशन क्रमशः 'पाणिनी साहित्य प्रतिष्ठान' र 'अष्टदीप साहित्य समाज' का उपहार थिए । जिल्लाको साहित्य-संस्कृतिको उत्थान परिचयमा समर्पित ती राम्रा प्रकाशन थिए । एकैछिनमा अर्घाखाँचीमा सक्रिय केही साहित्यकार,

टाढा नजिकका मित्रजन हाम्रो स्वागतमा भेला भए। त्यो सुरम्य साँझ आतिथेयका केही योजना र केही जिज्ञासामा बोलेर हल्का जलपानपश्चात् हामी बजार सिरानको भण्डारी लजतिर चढ्यौँ।

भण्डारी लजमा पहिलो रात मच्छडसँग लड्दालड्दै छर्लङ्ग उज्यालो हुने बेला भयो। बल्लबल्ल बिहानखेरिको चिसो बतासमा सुतिरहेकै थिएँ, टाढाटाढा कोइलीहरूको आवाज आउन थाल्यो; वरिपरिका धारा धुरुरु कराउन थाले। हिजो सुत्ने बेलामा भण्डार्नीले सचेत गराएकी थिइन्– बिहान उठेर नुहाउँदा साबुन दलिन्जेल धारा बन्द गर्दिनुहोला, हिजोदेखि एक टचाममात्रै छोड्न थालेको छ पानी। आज बिहानको टचाममात्रै दिएछ। मैले मनमनै सोचेँ– अब नुहाउन नपाइने भएछ क्यारे। भुकभुके उज्यालो खस्तै थियो। बाहिर निस्केर सुनेँ– देब्रे-दाहिने दुवैतिरबाट गाडीका तिखा हर्न लाग्न थाले। उता पारिपट्टि दम्स्याइलो उकालामा राता आँखा बालेर एउटा साधन चढ्न थाल्यो। थुम्की ताकेर। कुनै गाउँ लागेको हो कि काठमाडौँ ? यो दुर्गम प्रदेशमा मानिसभन्दा यन्त्र अघि छन्, मानिस सुतिरहेकै छन्, यहाँ पनि यन्त्रले अरूलाई जितिसक्यो।

## प्रातः भ्रमणको एक झल्को

एउटा लामो ऐतिहासिक उचाइ बोकेर उभिएको होचाहोचा पर्वत र पेटमा डाँडा थुम्का अलि पातलो वनजङ्गल भएको, केही सुक्खा प्रतीत हुने तर सुन्दर प्राचीन गाउँहरू बोकेको भूभाग। यसको सदरमुकाम सन्धिखर्कमा रात बिताएर विहानै परिभ्रमणका पाइला चाल्यौँ। बजारमा भारतका स्याउ, अङ्गुर, केरा र आँप झुन्डिएका थिए, तराइका गोलभैँडा र आलु-प्याज, बन्दा, खुर्सानी र मूला बिक्न बसेका थिए। स्थानीय केही छ कि ? मैले सोधेँ। तर कतै केही छैन। सारा कुरा तलबाट आउनुपर्छ। यो दूरत्व र विकटमा, यो परिनिर्भरता र आफ्नो असहायपन– नेपालका धेरै पहाडी जिल्लाको कथा उस्तै-उस्तै छ। रामेछापमा त्यही बिक्थ्यो, फिदिममा त्यही, सुर्खेतमा वा स्याङ्जामा त्यही। धादिङ, नुवाकोट, काभ्रे जस्ता राजधानी परिवृत्तका जिल्लामा देखिएजस्तो उद्यमशीलताको अभावले हो कि, यो अकर्मण्यता हो कि, अज्ञानता हो कि ? दुःख र सरम पनि

लाग्छ। यी रूखापाखा खेतबारी र पातलो वन्यताप्रेमले अनादिकालदेखि आकर्षित नेपालीहरू, यिनै भूभागमा आफ्ना कर्म र भाग्य देखेर प्रतीक्षा गरिरहेका, केही नाजुक सपना पाल्दै पर्खिरहेका।

अतीतका संस्कृतिहरू निरवच्छिन्न भई आएको अनेक सभ्यता बन्दै भत्किँदै रहेको विविध इतिहास खण्ड रच्तै भेट्तै गरेको यो ढुङ्गेनी मुलुकमा माथितिरका बारीका पाटा फुस्रा थिए, तलतल खेतका गरामा हरियो उठ्तै थियो। बजारमा मानिसहरू अत्यन्तै सभ्य देखिन्थे– तिनीहरूका वस्त्र कति टाढाका मुलुकमा निर्मित, तिनीहरूका खाद्य अन्यत्र उत्पादित, तिनीहरूका सोखहरू टाढाटाढाका देशबाट सञ्चालित, अरबको पेट्रोल महँगा मोटरसाइकलमा भरेर युवाहरू धुले बाटाहरू कुइरीमण्डल पार्दै हुत्तिएको देख्ता कम रमाइलो लागेन। बाटा मुनिमाथि हेर्दै गयौँ– वर्ल्ड भिजन कम्प्युटर छ, सकिरा वस्त्रालय, जरिना स्टोर्स, सन्तोषी मोटरसाइकल रिपेयर, जय सन्तोषी माँ चलचित्र, न्यु वेस्टर्न मिडिया, पोखेल सपिङ सेन्टर, अल्फा सु सेन्टर, ए-वन मोवाइल सेन्टर, रुक्सा फेन्सी स्टोर, साझा एक्स्प्रेस कुरिअर, सुष्मा फ्रेस हाउस ... सबै फ्लेक्स प्रिन्टिङमा। यी सूचनापाटीहरूले अर्घाखाँचीको वर्तमान बोल्दै भविष्यतिर पनि हेरिरहेका थिए। यहाँका उपभोक्तामा र काठमाडौँमा फरक रहेन; साइबर जगत्सँग यी पनि त्यसरी नै जोडिएका छन्। यी बजारले यिनीहरूको सांस्कृतिक चेतना र चाहना प्रस्तुत गर्दछन्। अब आफ्नो केही छैन, एउटा फ्युजन, विलयन र सम्मिश्रण मात्रै। विश्वसँग अभिन्न भएको चित्र।

धूलाले पुरिएका जिपभरि मान्छे बसेका। गाउँबाट आएका। गाउँ जाने। उनीहरूले सगौरव भने– हेर्नोस्, हाम्रोमा कुनै गाविस छैन, मोटरबाटो नपुगेको। आज सन्धिखर्कबाट १४२ वटा कमान्डर चल्छन् ती गाउँगाउँ पुग्न। अघि सिक्किम दार्जिलिङमा ओरालो-उकालो खेल्ने कमान्डर आज नेपालका दुर्गम डाँडामा गुडेको देख्छौँ। यो खुसीको कुरा हो। त्यहाँ टाढाको पेट्रोल उड्छ, गाउँको धूलोसँग मिसिएर, चराचुरु तर्छाउँदै कमान्डर उकालिन्छ, ओरालिन्छ, तेर्सै उड्छ पनि।

त्यहाँ के ओसार्नुहुन्छ ? मैले सोधेँ । दालचामल, नुनतेल, मरमसला, लत्ताकपडा, वस्त्र र जीवनका यावत् सामान । आज हरेक गाउँमा फलामको डन्डी र सिमेन्ट पुगेको छ ।

त्यहाँबाट के आउँछ यो सदरमुकाममा ? मेरो जिज्ञासा अशान्त थियो । केही नाइँ । अलि बूढाखाडा बिरामीहरू अस्पताल गर्न आउँछन् : युवतीहरू कलेज गर्न पनि आउँछन्, भुराभुरी सहर हेर्न आउँछन् । अलिअलि अड्डा माालपोतहरू... ।

त्यहाँका युवा ?

ती ता गाउँमा कोही नाइँ । एसएलसी पास गरोस् वा फएल, ऊ त अरब जान्छ, नसके इन्डिया । बचेका काठमान्डू झर्छन् अथवा मधेस । यहाँ गर्ने काम के छ र ? कोइ नाइँ ।

## सभ्यताको अर्को चित्र

मलाई उदेक लाग्यो । बिहानीको सिरसिरे बतासमा घाम झुल्केको बेला, बिस्तारै हिँड्दै हामी बिस्तारै चुत्रोबेसीतिर लाग्यौँ । माधवराज चुँदाली हाम्रा पथप्रदर्शक थिए ।ससानो खोलामाथिको लामो फलामे पुल तरेर पारि पुग्यौँ । बजारको सहयोगले होला, त्यो सानो खोला अलि धमिलिएको, तर नहारी दुर्गन्ध बोकेर छिपछिपे पानी बगिरहेको थियो । तल बसेर लहरै ट्रक, टचाक्टर र टिपर वरिपरि बालुवा, गिटी, रोडा उधिनिरहेका, भारी हालिरहेका, पाङ्ग्रा पखालिरहेका । सयौँ जना ती यन्त्रको अघिपछि लागेर हजारौँ हातहरू खन्दै, बोक्दै, निहुरिँदै, उठ्तै, खोक्दै, बस्दै मास्तिर बजारको लागि जो अर्धनिर्मित छ । पिलर छन् निर्माणाधीन घडेरीहरूमा । एक जनाले खुसी हुँदै भने आज गाउँगाउँमा पक्की घर बन्न थाले । पक्की घर बनाइ धुले ट्रयाकहरू छेउ भित्ताका जरा उत्तानो पारेर भित्रभित्रै गाउँतिर कुँदेका थिए । बाटाभरि गलेर थाकेका, भत्केका उत्तानो परेका डोजरका पाङ्ग्रा र टिपरका डाला सर्वत्र पल्टिरहेका थिए उमेर नपुगी बिमारले गलेका व्यक्ति जस्तै । अस्पतालबाहिर काल पर्खिरहेका बिरामीजस्तै । बिस्तारै अघि बढ्यौँ, 'दलित उत्थान केन्द्र' का साइनबोर्ड अङ्ग्रेजी भाषमा झुन्डिएका, धेरै ठाउँमा युरोपियन युनियनका फोरम फर पिपुल्स लिवलेसन' का बोर्डहरू टाँगिएका ।

सिरानमा अङ्ग्रेजी भाषामा त्यसपछि नेपालीमा। यी सूचनापाटीहरूमा नेपालीभन्दा अङ्ग्रेजी भाषाले बढी महत्त्व पाएको रहेछ । मलाई लाग्यो- तब न देशले विकास गरेको कुरा अन्तर्राष्ट्रिय जगत्सम्म पुग्दछ। ती साइनबोर्डका वरिपरि पिलिक्क हेरेँ- केही अधबसेँहरू तल बसेर तातो चिया र सिङ्गडा सेवन गरिरहेका । ती उत्थानकार हुनुपर्छ । यहाँ महिला छैनन् कि ? यसो निहुरेर हेरेँ- ती होटलको कुनामा प्याज काट्तै थिए, डिलमा बसेर भाँडा मस्काउँदै थिए । खोलाबगरमा केही रित्ता गाग्री उभ्याएर चापाकल खिच्तै थिए ।

अलि पर पुगेपछि एउटा ससानो मस्जिद देखियो– पाखाको फेदमा, बाटोमुन्तिर बनिएको भित्तैमा टाँसिएको घरका छानाबाट आकाशतिर उठेका सेता बुर्जा, सेतै चुना दलेको ससानो घर, प्रवेशद्वारमै लेखिएको थियो- मदर्सा इस्लामिया अहले सन्नत जामे मस्जिद, सन्धीखर्क-८, अर्घाखाँची । अरबी लिपि पनि थिए तर चिनिएन । एकमात्र प्रवेशद्वार बाँकी राखेर वरिपरि पर्खालले घेरेको घरभित्र पसेर हेर्‍यौँ- कलिला उमेरका पच्चीस-तीस जना नानीहरू भुइँमा बोराहरू ओछ्याएर बसेका थिए । तखतामाथि अरबी लिपि भएका किताप तेर्स्याएर कण्ठ गरिरहेका। तिनीहरू छ-सात देखि १२ वर्षभित्रका थिए। एक जना भर्खर जुङ्गारेखी भएका मौलाना कोठे लुङ्गी, सेतो कुर्ता, जालीदार मुस्लिम टोपी धारण गरेर ती नानीहरू पढाइरहेका। तिनको हातमा एउटम नाजुक सिर्कनो पनि थियो। ती हिन्दीभाषी गुरु भारतदेखि ल्याइएका रहेछन् । नेपाल सरकारको मातृभाषामा शिक्षाअन्तर्गत आफ्नो भाषाद्वारा मातृबोली, धर्म र संस्कृतिको संरक्षणमा समर्पित यो समुदाय। दुर्गम पहाडको यो भित्री पत्रमा, कति खुसीको कुरा, कत्रो विविधता। हामीले रक्षा गर्ने यिनै कुरा हुन् वास्तवमा। आज जनता पनि सचेत हुन थालेका छन्, यस्ता मार्जिनल समुदायमाहरू ! यो देशमा अब प्रत्येक समुदायले आफ्नै अस्तित्वकेन्द्र निर्माण गर्ने दिन आएको छ त्यसको संरक्षण्मा आफैँ जुट्ने दिन आएको छ ।

भित्रै पसेर ती नानीहरूलाई सोधेँ– तिमीहरूलाई यो पढ्न आउँछ ?

दुई जना उठेर देखाए– हामीलाई यो आउँछ, यो किताप यसरी यता उल्टोदेखि पढ्नुपर्छ ।

कति मीठो बोलेका !

अर्किले थपी– हामीलाई नेपाली पनि आउँछ, इङ्लिस पनि ।

कसरी ?

दिउँसो हामी अर्को स्कूलमा पढ्न जान्छौँ, यहाँ त बिहानभरि मात्रै पढ्ने ।

ससाना बालबालिका थिए, गरिबीको रेखैमा टेकेर बसेका ।

किताब अत्यन्तै सस्तो न्युजप्रिन्टमा थिए । ती च्यातिएर जाने बेलाका थिए । तर पनि त्यहाँ सहअस्तित्वका पाठहरू लेखिएको देखेर आफूलाई हर्ष लाग्यो । झ्यालबेगरको ससानो, भित्तामा टाँसिएको त्यो घरभित्र मौलाना प्रसन्न थिए, बाहिर पेटीमा निस्केर विद्यालयसँगै जोडिएको अर्को घरतिर औँल्याउँदै बोले- वह मस्जिद है, यह कमरा । कमरा विद्यालयाको पेटीमै थियो, नानीहरू खेल्ने कुनै प्राङ्गण थिएन । सायद त्यो कमरा पनि उनैका थियो कि ? त्यो अत्यन्तै सानो, ढुङ्गामाटाको होचो एककाठे घर, च्यादरको छानो, भाटाले, बोराले पर्दा र ढोका बारिएको तर त्यो कति ठूलो विश्वास र भावनाको केन्द्र थियो । हामी मस्जिद भित्र पसेनौँ । पेटीमा बसेर अन्तिम शब्द बोल्यौँ- फिर मिलेंगें । अनि हात जोडेर बाटो लाग्यौँ ।

अलि अघि बढेपछि चुत्राबेँसी बजारको बीचैमा देखियो त्यहाँ अतीतमा एउटा खोला बग्थ्यो हो, अनुमान गरियो । तर सभ्यताले निल्न लागेका ती बगर सुक्खा थिए । त्रिवेणी र सतीढुङ्गा किंबदन्तीले पुरिएका नाममात्रका बगरहरू पानीबेगरका- बाइबलका खोल, मिनरलवाटरका बोतल, काला प्लास्टिक र झुम्राले भरिएका र सभ्यता नाच्ने आँगन साँगुरो होला कि भनी छेउ लागेर पाखा भित्तामा टाँसिएका कुमाल बस्तीहरू । भन्छन्, यही भूमिमा कुमालहरूको प्रथम राष्ट्रिय सम्मेलन सम्पन्न भएको थियो । हाम्रा भाषाविज्ञानका कति विद्यार्थी त्यो लोपोन्मुख वाणीको अध्ययनमा त्यहाँ पनि पुगेका छन् ।

## कुरुक्षेत्र उठेको त्यो ठाउँमा

सन्धिखर्क र चुत्राबेँसी, वारि र पारि । प्रतिस्पर्धाले उचालिन थालेका घरहरू कुनै त ठूला डिपार्टमेन्टल स्टोर्सकै हाराहारीमा

अकासिँदै। निकै बेर डुलेर फेरि पनि समयले खरानी पारेका एकाउन्न झ्याले भवनको भग्नावशेष कुल्चिँदै फर्केर आयौँ। उही सुन्दर, भव्य शान्ति बगैँचा निर्माता पिता-पुत्रको प्रतिमा श्रद्धापूर्वक अर्धकदमा देखियो ।

दुईपल्ट कुरुक्षेत्र उठेको सन्धीखर्कमा डुलिरहेछौँ। पहिलोपल्ट २०५८ सालको भदौ २३ गते, तीजको दरखाने बेलामा। राती नौ बजे यताबाट उठेर, उताबाट झरेर सारा नाकाबन्दी, विजुली निभेपछि, टेलिफोन चुँडिएपछिको अन्धकारमा बन्दाबन्दी, गोली चलेका, बम पड्केका, मानिस रोएका, कराएका आकाश थर्केको, राँकाहरू आगाको मुस्लो, होइन अनेकौँ मुस्ला। चारैतिर चीत्कार भागाभाग, सन्देह र मृत्यु। चारैतिर मकैश्शार जङ्गल र मकैघारी भदौको पट्टेर छ, राति आकाश नीलो कालो। हामीलाई आज रात उज्यालो होलाजस्तो लागेन। यसरी बाँचेर फेरि तपाईहरूसँग बोल्न पाइएला जस्तो लागेन। लुकेर घस्रेर भागेका। पाँचपाँच मिनेटमा पिसाब आउँछ, र पनि वरिपरिकालाई सान्त्वना दिँदै, लुक्तै-लुकाउँदै छर्लङ्ग रात अनिँदै गयो। बिहानपख यसो झ्यालबाट चियाएर हेऱ्यौँ। यी बाटाभरि लास मात्रै थिए, रगतमा सुतेका, कोही त छटपटाइरहेका ऐया ! आत्था ! मरेँ नि ! मात्रै। यी सम्पूर्ण बाटाहरू रक्ताम्मे थिए। सत्तरी-सत्तरी जना, दुवैतिर गरी, उनीहरूले मरेकाहरू तल खोलाको बगरमा खाडल खनेर गाडे, जिउँदा र मरणासन्नहरू चिच्याइरहेका थिए। हाम्रा कोठेबारीका घोचाघारा एउटै बाँकी रहेन। तल डिलका सारा बाँस र बोटहरू समाप्त भए, तिनीहरूमा बोक्तै, झुन्डयाउँदै जताबाट आएका थिए उतै लगे।

कति डरलाग्दो कथा। त्यो त्रासदी भोगेर बाँचेकाहरूले यतिखेर नयाँ समय निर्माण गर्न संविधानसभाको भोट खसालिसकेका थिए। समयले कोल्टे फेरेको हेर्ने आँखाहरू प्रतीक्षारत थिए। यो चैत्र १८ गतेको कुरा थियो, दस दिन पछि संविधानसभाको चुनाव आइरहेको थियो।

फर्केर हामी शान्ति बगैँचामा आयौँ। अत्यन्तै ठूलो आम्रबगैँचा। ती कुन जातका थिए चिन्न सकिनँ, ससाना टिकुलाहरू पाउलाले छोपिएका थिए। वरिपरि पर्खाल, प्रवेशद्वार भित्रपट्टि मन्दिर

र पुराना संरचानाहरू । पारिको जामेमस्जिद जतिकै पुरानो, एउटा अध्यारो कोठा थियो 'आलोक पुस्तकालय' नामको । एउटा ससानो टोड्काबाट चियाएर हेरेँ- केही पत्रपत्रिका तालाबन्दी थिए । यो बगैँचा, चुत्राबेँसी, यो परिवेशका बारेमा भाइ देवेन्द्रले तीन वर्षअघिको ***कान्तिपुर***मा प्रकाशित गरेका एउटा आर्टिकल सम्झेँ- मलाई दुरुस्त भयो । छर्लङ्ग त्यो वर्णन आउन थाल्यो । यो औलो, गर्मी, खोला गढतिरको प्रदेश खर्क कसरी भयो होला ? त्यो सन्धि कहाँ थियो, धेरै माथि डाँडामा बसेका अर्घा र खाँचीको ऐतिहासिक महत्ता के थियो ?

बजार डुल्दै गयौँ । ती दोकान, पसल र अनेक कार्यालयहरू तिनको नाम सूचनाले साइनबोर्डले देखाउँछ । यो काठमाडौँजस्तो छ, कुनै ठूलो सहरले जस्तै नयाँ वस्त्र लगाएर उभिएको छ । प्राचीनता मेटेर, अतीत बेगर । पुरानोको कुनै नाम निसान बेगर । कङ्क्रिटमा पिच सडकभरि, रङ्गीन घरमा, सुन्दरमा बार्दलीमा, एउटा नयाँ टाउन प्लानिङजस्तै, फिदिमजस्तै ।

एकपल्ट खरानी भएका भवनहरू, लास लडेका ढुङ्ग्यानीहरू सबै फन्को लगायौँ । माथि टुँडिखेलभन्दा उता, मिलनकेन्द्रभन्दा पर । ससाना सिल्भरका क्यानमा दूध बोक्नेहरू बजारतिर पस्तै थिए ।

## हाम्रो यात्रा साहित्यिक थियो

हामी काठमाडौँदेखि विष्णुबहादुर सिंह र चन्द्रकान्त आचार्यको उत्साहले बाँधिएका थियौँ । एक जना स्थानीय काका पनि हुनुहुन्थ्यो ध्रुवराज भट्टराई । लामो यात्रामा चितवनमा टिपिएका धनराज गिरी र बुटवलमा भेटिएकी शकुन्तला जोशी । हामी एकै गाडीमा थियौँ, चालक बलराम ।

त्यसो त मलाई चन्द्रकान्तजीले अर्घाखाँचीको साहित्यिक भ्रमणको निम्ता दिएको सात-आठ महिना अघिदेखि हो । प्रत्येक नयाँ ठाउँ मेरा निम्ति विशेष आकर्षणको कुरा लाग्दछ । सम्झेर ल्याएँ, विगतका वर्षहरूमा मैले साहित्यिक यात्रा गरेका जिल्लाको सङ्ख्या १८ नाघेछ । ती ठाउँका साहित्यिक महोत्सवमा भाग लिएँ । यो वर्षभित्रै कहिल्यै नटेकेको रामेछाप पुगेँ, गुल्मी पुगेँ, धित मर्ने गरी

फिदिममा रमाएँ भने यस्तै शृङ्खलाको नयाँ बिसौनी अर्घाखाँची थियो । वैशाखको महिना नयाँ वर्षले छोएको बेला । देशमा ठूला राजनैतिक परिवर्तनपश्चात् ठूलो संवैधानिक अभ्यासपश्चात्, जेठ १५ पर्खिरहेको दिनमा ।

हाम्रो यात्रा साहित्यिक थियो । आज वैशाख १८ गते; त्यो दिनको कार्यक्रम कर्मचारीमिलनकेन्द्रमा थियो । सरिता पुस्तकालय, आकाशदीप साहित्यिसमाज र पाणिनी साहित्यिक प्रतिष्ठान मिलेर आयोजना गरिएको यो कार्यक्रम एक ऐतिहासिक अवसर थियो। ठूलो उत्साहसाथ कार्यक्रम चल्यो। बेलुकासम्मा अड्चालीस जना सर्जकले आफ्ना रचना वाचन गरे।धेरै कविता, केही गजल र विचारहरू प्रकट भए ।

त्यो दिनको रचनाले देखायो- टाढा दुर्गम गाउँका सर्जकहरूले पनि उही सपना सजाएका छन्- आमूल परिवर्तनको, शान्तिको, नयाँ दिनको, न्यायको र समानताको । देशले ऐतिहासिक फड्को मार्दै थियो । निकै सर्जक विद्यार्थी थिए अनि नारी सहभागिता राम्रो थियो। यसबेलाका कवितामा एउटा नयाँ आवाज सुनियो। म केही उदाहरण प्रस्तुत गर्दछु । रञ्जना पाण्डेयको **नयाँ नेपाल**मा त्यो कामना छ-

*नेपाल र नेपालीको एउटै सुनौलो आवाज*
*लोकतन्त्रले शान्ति छायो सबै गाउँ र समाज*

लोकतन्त्रले एउटा उमङ्ग ल्याएको छ, अर्कातिर अस्पष्टता अन्योल र यथास्थितिका पनि अनुभूति भइरहेको छ । लक्ष्मीनारायण पौडेल 'वर्षात्' को **लोकतन्त्र** शीर्षक कवितामा यही मनिस्थिति प्रतिबिम्बित छ-

*लोकतन्त्र आयो भन्छन् कता आयो कता*
छैन चयन जनतामा यता हो कि उता

भर्खर भएको चुनाव र त्यसपछिको नयाँ दिनको आशा रीमा अधिकारीका **देशको स्थिति** शीर्षक कवितामा छ-

*भत्किएको मन्दिर अब विश्वासले टाल्नै पर्छ*
*भयो चुनाव अहिले कालो मैला त्याग्नै पर्छ*

अरू धेरै कविता छन्, तर आज गीता गैरेको एक कवितासँगै अन्त्यमा ओर्लिन चाहन्छु–

*परिवर्तनका दिनहरू आउँदै छन् आमा*
*अँध्यारा ती अन्धकारलाई गर्दै सामना*
*बस्ने छैनन् यहाँ कालरात्रि खोल ओढेर*
*त्यसैले त नरोऊ आमा तिमी छाती* चिरेर(**नरोऊ आमा छाती चिरेर**)

यसरी यी सरल र सामान्य सिर्जना थिए, आभ्यासिकहरूका प्रयत्न थिए, तर यिनैभित्र देशको वर्तमान बोलेको थियो। यी सर्जकले देशप्रति आफ्नो गहिरो जिम्मेदारी लिएको देख्ता सन्धिखर्क नयाँ कलामा बोलिरहेझैं लाग्यो। यताबाट जाने विष्णुबहादुर सिंह, धनराज गिरी, चन्द्रकान्त आचार्य, शकुन्तला जोशी प्रत्येकले एकएक रचना सुनाएका थिए। साहित्यिक चेतना भर्खरै जुर्मुराइरहको अर्घाखाँची, एउटा शक्तिशाली अतीत बोकेको, अनेक ऐतिहासिक गाथासँगको बलिदानी कथाले छोपिएको अर्घाखाँचीमा धेरै थियो, तर वर्तमान लामो पीडाको निद्राबाट ब्युँझेर आज कलिला वाणीमा देश बोलिरहेको थियो।

गर्दागर्दै झमक्कै साँझ पऱ्यो। बिजुलीको लाइन नआएपछि, कर्मचारी मिलनकेन्द्रबाट बिस्तारै ससाना बत्ती बालेर हामी बजारतिर झऱ्यौँ। आज गलेका थियौँ। त्यसैले कतै नहेरी भण्डारी लजमै पस्यौँ।

## जिउँदो शहीदको घरैमा पुग्यौँ

अर्घाखाँचीमा अर्को कार्यक्रम बाँकी थियो। सन्धिखर्कमा होइन, अलि टाढाको वाङ्लामा। भोलिपल्ट बिहानै वाङ्लामा जाने कार्यक्रम थियो। सुन्दा वाङ्लाजस्तो लाग्ने। सिन्धुपाल्चोक जिल्लामा एउटा 'हिन्दी' भन्ने गाउँछ त्यसले हिन्दुस्तान सम्झाएझैं वाङ्ला सुन्दा बङ्लादेशको सङ्क्षेप हो कि जस्तो भ्रम हुने रहेछ। हाम्रो अन्तिम गन्तव्य वाङ्ला भएकाले यो पल्टको साहित्यिकयात्रालाई टच्याङ्लादेखि वाङ्लासम्म भनेर सम्झिरहेछु।

त्यो चन्द्रकान्त आचार्यको गाउँ- साहित्यकार चन्द्रकान्त आचार्य । उनका *ज्वाला, मित्रता, दासता मुक्ति* जस्ता उपन्यास बहुपठित छन् । उनको *सम्झनाका क्षितिजबाट* शीर्षक यात्रासाहित्य धेरै सुन्दर छ ।

बिहानै उठेर विष्णुबहादुरको सुन्दर गाडीमा बिस्तारै एकपल्ट फेरी चुत्राबेँसीको फन्को मार्‍यौँ अनि हामी वाङ्ला हिँड्यौँ । क्याम्पस नाघेर, ब्यारेक नाघेर बिस्तारै चढ्ने उकालो । धूलैधूलो, पीठोजस्तो, नसजस्तो । सेतो नस छुँदा बुङ्ग उढेर पर पुग्ने । रातमाटे बाटामा गाडी ट्र्याक्स, ट्र्याक्टर र मोटरसाइकलको दोहोरिलत्ताले खाँदिएर, ढुट्टिएर, पिठिएर भुइँमा टेक्ता भ्वास्स गरेर जुत्ता डुब्ने, आधि पाङ्ग्रा डुबाएर मोटर चल्दा उठेको कुइरीमण्डलले वरिपरिका बोटबिरुवा, ढुङ्गा, बाँसझाङ, घरका छाना सबै कुरा टाढा-टाढासम्म हेरिनसक्नु थिए । तिनका पछिपछि कुद्ने मोटरसाइकलको आवाज मात्र सुनिन्थ्यो, धूलाले पुरिएको ।

बिस्तारै-बिस्तारै उकालो चढ्दै तेर्छिएर एउटा उज्यालो डाँडामा पुग्यौँ । उनीहरूले सुनाए- यो डा. होमनाथ भट्टराईको घर हो । त्यहाँबाट डाँडैडाँडाबाट मोटरबाटो कुदेको, निकै चढ्यौँ, बाँसझ्याङहरू कटे अनि मात्र त्यो मार्गसम्म तेर्छियो । त्यहाँ पुग्दा देख्यौँ- पानी थाप्ने गाग्राहरू लहरै उभिएका, डिलडिलमा पानी पाइप कुदेका, डाँडाको दुईतिर भ्यालीजस्ता फैलेका विस्तृति परपरसम्म । अर्घाखाँची जिल्ला नै होचा डाँडाले घेरिएर भ्यालीजस्तो तल पनि थुम्काथुम्की, बाक्ला, बस्ती खोलानाला कम्ती, जङ्गल कम्ती भएको अलिक सुक्खा प्रदेश लाग्यो ।

मुसलमानहरूको प्राचीन बस्ती नाघेर वाङ्लाडाँडामा पुगी रोकियौँ । सुन्दर उचाइ, भञ्ज्याङजस्तो लामो विस्तृति । सुक्खा, जोतेका फुस्रा बारीहरू । पातला बोटवृक्षले, बाँसझ्याङले ढाकेका ठाउँहरू । देब्रे- दाहिने दुवै तिर पानी ढलो । धेरै तलको खोला किनारलाई छोडेपछि कतै खेत छैन बारी मात्रै । हामी आज जिउँदो शहीदको घरमा पुगेर बिसायौँ ।'जिउँदो शहीद' अर्थात् यज्ञप्रसाद आचार्यको घरमा । पुरानो शैलीको सम्पन्नताको द्योतक घरमा शहीद परिवार र आफन्तहरू थिए । चन्द्रकान्त स्वयम् एक जना भाइ ।

उनैको सम्पादनमा भर्खरै प्रकाशित ***जिउँदो शहीद : स्मृतिका पानामा*** प्राप्त भयो ।

पढेर थाहा भयो २०१७ सालमा राजा महेन्द्रले उठाएको असंवैधानिक कदमको विरुद्धमा तात्कालिक गुल्मी जिल्लाले अग्रणी भूमिका खेलेको थियो । यता बिपी कोइरालालगायत धेरैलाई बन्दी बनाइएको थियो । उता कलकत्ताका सुवर्णशमशेरको सम्पर्कमा रहेर कति युवाले पञ्चायती सत्ता विरुद्ध सशस्त्र आन्दोलनमा भाग लिएका थिए । ढुण्डिराज शास्त्री, काशीनाथ गौतम आदि यो देशका अनेक आन्दोलनको प्रेरणास्रोत भएका थिए । उक्त कृतिको सम्पादकीयमा चन्द्रकान्तले उल्लेख गरेका छन्– त्यसरी विक्रम संवत् २०१८-१९ सालको गुल्मी अर्घाखाँचीमा सञ्चालित सशस्त्र आन्दोलन देशमा प्रजातन्त्र प्राप्तिका लागि गरिएका सम्पूर्ण आन्दोलनहरूको प्रेरणा स्रोतको रूपमा रहेको देखिन्छ । त्यस सङ्घर्षमा अत्यन्त सक्रियरूपले भाग लिएर शहीद भएका शम्शेरबहादुर खत्री, मोती भुसाल, टीकाराम घिमिरे र जिउँदो शहीदको रूपमा बाँच्न सफल भएका यज्ञप्रसाद आचार्य, मोहनसिंह थापा आदि युवाहरूको अत्यन्त ठूलो योगदान रहेका पुष्टि भएको छ ।

हामी यिनै जिउँदो शहीदको घरमा पुगेका थियौँ । यज्ञराज आचार्य परलोकगमन भएको वर्ष दिन नाघिसकेको थियो । उनी थिएनन् तर उनले दिएको योगदान र गरेको बलिदानको गाथाले त्यो भूमि सिञ्चित थियो । उनका परिवारका सदस्य थिए, श्रीमती, छोरा, बुहारी अनि दुई जना विद्वान् भाइहरू ।

वाङ्लाका प्रत्येक घरका बलिदानी कथा, सिङ्गो गाउँ नै निरङ्कुशताविरुद्ध नेपाली काङ्ग्रेसको पक्षमा लडेको कथा, जिल्ला आक्रमणका योजना र विफलताका कथा । कति मारिएका, कति भागेका, त्यो क्रान्ति अधुरै रहे पनि वर्षैपछि त्यो सपना साकार भएका कुरा। आजको दिन ती वीरका सम्झनाले सबै अभिभूत भएका कुरा । ठूला सपना लिएर लड्ने योद्धाहरू समाप्त भएको भूमिमा यज्ञप्रसाद उम्केर बाँचेका थिए । हामीले आज यज्ञप्रसादको घरमा बसेर धेरै बेर उनैका कुरा गर्‍यौँ। उनैलाई सम्झियौँ। चन्द्रकान्तले भनेझैँ- जिउँदो शहीद यज्ञ दाइलाई सम्झनु भनेको २०१८-१९

साललाई सम्झनु हो र त्यस सशक्त आन्दोलनमा समर्पित ती महान् योद्धाहरूको स्मरण गर्नु हो, जसको अत्यन्त ठूलो त्याग तपस्या र बलिदानको प्रेरणाले आज हामी लोकतान्त्रिक नेपाल निर्माणको सङ्घारमा उभिन पुगिरहेका छौँ। नेपाल आमाका असल सन्तति ती महान् योद्धाहरू अमर छन्  र हामी सदैव तिनीहरूप्रति नतमस्तक छौँ। हामी पनि एकपल्ट नतमस्तक भयौँ। आचार्य परिवार शिक्षामा, राजनीतिमा, सामाजिक प्रतिष्ठामा गनिएको ।

आज तिनै जिउँदा शहीदको घरमा बीसपच्चीस जना भेला भयौँ। स्वादिष्ट भोजन खायौँ र डाँडैडाँडा नजिक अर्को गाउँ नाङ्गे ठाँटीतिर लाग्यौँ ।

**अमर शहीद मोतीका सम्झनामा**

वाङ्लाडाँडामा नाङ्गेठाँटी एउटा ऐतिहासिक भूमि थियो । हामी काठमाडौँदेखि त्यसैलाई ताकेर हिँडेका थियौँ । चन्द्रकान्तजीले मेरो एउटा महत्त्वपूर्ण गन्तव्य त्यही बनाइदिएका थिए। त्यही अर्थात् वाङ्ला (नाङ्गे ठाँटीको) को मोती पुस्तकालय । शहीद मोतीप्रसाद भुसालको नाममा स्थापित मोती पुस्तकालय । चन्द्रकान्तजीले धेरै महिना अघिदेखि मोतीको कुरा राखेका थिए, मोती पुस्तकालयको, *मोती* (शहीदको सम्झनामा प्रकाशित) विशेषाङ्कको। मैले सो प्रवेशाङ्क लागि एक रचना पनि दिएको थिएँ ''शहिदमाथि आज एक निबन्ध'' । त्यसै बेला उनले बाचा गराएका थिए- तपाईंले हाम्रो अर्घाखाँची जानुपर्छ, वाङ्ला पुग्नुपर्छ । मैले सहर्ष स्विकारेको थिएँ- हुन्छ, म तपाईंसित त्यो भूमिमा पुग्न चाहन्छु ।

एघार बजेको थियो । आचार्य निवासबाट तेर्छैतेर्छे, डाँडैडाँडा अलि पर पुगेपछि हाम्रो गन्तव्य आयो । एउटा ठाडो पाखाका टुप्पामा मूलबाटोलाई छोएर बनेको भवन "मोती पुस्तकालय पुग्यौँ" । डाँडाका टुप्पामा बनेको नयाँ भवन यद्यपि पुस्तकालयको स्थापना २०२२ सालमै भएको थियो। झन्डै तीन दशक बन्द भएर पुनर्जीवन प्राप्त भएको हो । उसैबेला यो भित्री गाउँमा पुस्तकालय खोल्ने भनेपछि यहाँका जनतामा चेतनाको स्तर कति रहेछ त्यसको अनुमान गर्न सकिन्छ। त्यसै क्रान्तिका अगुवाइ गरेका होइन रहेछन्,

त्यसै यत्रो दुःख-सास्ती भोगेका होइन रहेछन् यहाँका जनताले । चेतनाले गर्दा उनीहरूले दुःख भोग्नुपरेको थियो ।

आज त्यही मोती पुस्तकालयको निरीक्षण गऱ्यौँ । एउटा बतासे डाँडामा रहेको राम्रो र पक्की भवन । ठूला कोठा, थोरै तर व्यवस्थित पुस्तक र वाचनालय । सँगै जोडिएको पुरानो विद्यालय भवनको आडमा फराकिलो चौतारो । त्यसलाई ढाक्ने विशाल शमीको बोट । त्यो प्राचीन वृक्ष एउटा भन्ज्याङमा उभिएको । वैशाख १८ गते, भर्खर पाउलिएका पात झ्याम्मै भरिएका, हजार जना अट्ने गरि छायाँ पारेको । त्यसैको छेउमा एउटा सुकेको पोखरी मौलो गाडेर निदाइरहेको थियो । डाँडामा उभिएर हेर्दा दुवैतिर फैलेका गाउँ आँखैमा आउँछन् । हावा चल्छ, अत्यन्तै ठूलो फुइँकी पाखामा उभिएको सिक्रो सिमलको बोट भाँचिएलाझैँ हावामा नाचिरहेछ भुमरी परेर । धूलो उड्छ, मान्छे लडाउने फुँइकी, वरिपरि छर्लङ्ग देखिएको छ । धेरै माथिको अर्घातोसकोट, मारूकोट र उलुक क्षेत्रकोट । अर्घा र खाँचीका प्राचीन दरबार क्षेत्रहरू भग्नावशेष भै लडेका होलान् । बीचका मसिना पहाडहरू । अरू पारीको अलिकति देखिने अर्जुन र रेसुङ्गा ।

भवनको आडमा उभिएका कुर्सीमाथि अतिथि भएर बस्यौँ । बीचमा राखिएका शहीद मोतीको तस्विरमा माल्यार्पण गऱ्यौं । आज मलाई एक अपूर्व क्षणको सामुन्ने उभिएझैँ लाग्न थाल्यो । आज मोतीको स्मरण, मोती पुस्तकालयको अवलोकन र *मोती* विशेषाङ्कको लोकार्पण कमलप्रसाद भट्टराईको सभापतित्वमा हामी लहरै बसेका थियौँ– विष्णुबहादुर सिंह, चन्द्रकान्त आचार्य, ध्रुव भट्टराई, धनराज गिरी, सविता ज्ञवाली, शकुन्तला जोशी, स्थानीय गन्यमान्यजन । सबैका बीचमा बसेकी थिइन् गङ्गा भुसाल- शहीद पत्नी । वृद्ध अवस्थामा पुगेकी तर अझै आँखामा केही जोस र निष्ठा बाँकी राखेर एउटा भयावह अतीत सम्झी बसेकी वीराङ्गना । शहीद मोतीप्रसाद भुसालको भर्भराउँदो अनुहार बोकेको बीस-बाइसको तस्विर छ टेबलमा त्यसकै छेउमा अनुहारको छाला खुम्चिसकेको, फुलेकी, वृद्धा छन् बसेकी शहीद पत्नी । कत्रो व्यङ्ग्य, विधिले गरेको कत्रो उपहास ! पति सधैँको लागि अल्पिए भए, उमेर त्यहीँ रोकियो उनी

सदाको त्यस्तै युवक रहे । बाँचेका भए, आज ती पनि गङ्गाजस्तै भइसकेका हुन्थे होलान् । उनको अमरत्वले र स्थिरत्वले मलाई छोयो । गङ्गाको दीर्घ तपस्या र साहसले छोयो । २०१८ सालदेखि आजसम्मका आधा शताब्दी कसरी बिते होलान् । पति शहीद हुँदा उनी एक्काइस बर्षकी थिइन् । छोरी राधिका २ वर्षकी र शान्ता १ वर्षका थिए । आज हाम्रै छेउमा राधिका थिइन् । उनी पनि सेतै फुलिसकेकी एउटा सपनाजस्तो क्रम ।

आज अनेक कर्महरू जोडिएका थिए- *मोती*को विमोचन, मोतीको स्मरण र वाङ्लालीले प्रकट गरेको भावपूर्ण श्रद्धाको अवलोकन । चौतारैभरि विशाल जनसमूहले अपूर्व सहभागिता जनाइरहेथ्यो । त्यो उपस्थितिमा प्रमुख अतिथिको आसनबाट *मोती*को लोकार्पण गर्ने अवसर पाउँदा आफूलाई धन्य ठानेँ । दिवङ्गत भएको ४७ वर्षपछि कलिला युवक मोती आज पनि पत्रिकाको अग्रभागको तस्विरमा त्यस्तै देखिए । पाश्र्वभागमा उनकी श्रीमती गङ्गा भुसाल र ९२ वर्षिया आमाको तस्बीर भएको *मोती* सम्पूर्ण रूपले मोतीमै समर्पित प्रकाशन, सम्पूर्णरूपले निरङ्कुश विरुद्धको लडाइँमा सर्मपितहरूको श्रद्धाञ्जलि प्रकाशन त्यसैका दुर्दान्त कथाहरूको अभिलेखन । यो मोती विषयक हो, तथापि धर्मभक्त, दशरथ चन्द, गंगालाल, शुक्रराज शास्त्री, सरोज कोइरालाजस्ता शहीदको बारेमा लेखरचना रहेका छन् । अर्घाखाँचीका मोतीप्रसाद भुसाल, समशेरबहादुर खत्री, पं. खिमानन्द पौडेलजस्ता शहीदका वीरगाथाहरू छन्, बलिदानी कष्टका क्षणहरू चित्रित छन् । त्यस्तै महत्त्वको कुरा जनआन्दोलन-२ का सम्पूर्ण शहीदका सचित्र परिचय प्रस्तुत छ यहाँ ।

*मोती* एउटा उत्कृष्ट र सङ्ग्रहणीय कृति हो । काठमाडौँ केन्द्रबाटै पनि यति स्तरीय कृति हत्तपत्त आउँदैन, मोफसलबाट त त्यो असम्भव लाग्दछ ।

आज सम्पूर्ण भावना शहीद मोतीप्रति अर्पित थियो । मोती कसरी निरङ्कुशताविरुद्ध होमिएका थिए, कसरी २०१९ सालको भदौमा गुल्मीको अमरपुरमा कति निर्ममतासाथ उनको हत्या गरियो भन्ने कुराका कति प्रत्यक्षदर्शीहरू आज त्यहीं थिए । मोती हत्याको

श्रीमती र आमासमक्ष पुऱ्याउने ध्रुवराज भट्टराई हामीसँगै थिए । त्यो मोती मण्डलीका जिउँदा शहीद यज्ञराजका परिवार र आत्मीयजन त्यहीँ थिए । मोतीको विषयमा बोल्दाबोल्दै ध्रुवराजको गला अवरुद्ध भएको थियो । तिनै ध्रुवराजको शहीद मोतीप्रसाद भुसाल शीर्षक एक रचना *मोती*मा प्रकाशित छ । यसमा लेखिएको छ– *२०१८ साल जेठ १५ गते धुर्कोटस्थित अमरपुर स्कूलको पोखरीको मौलोमा बाँधेर आततायीद्वारा मोतीको नृशंसतापूर्ण हत्या गरिएको थियो ।*

कत्रो बेदनाको पर्वत बोकेर जीवन बिताएकी गंगा भुसालले उठेर बोलिन्– *तिनीहरूले ठूलो कष्ट दिएर उहाँलाई मारे । मौलोमा बाँधेर, नाक काटेर, कान काटेर, हातखुट्टा गिँडेर त्यसको वयान गरिनसक्नु छ । उहाँ आँटी हुनुहुन्थ्यो, जवानीमा हुनुहुन्थ्यो । म डराउँथेँ- के हुने हो । छोरीहरू ससाना दूधे बालक थिए । तर भन्नुहुन्थ्यो एक बारको जुनीमा डराउने होइन, प्रजातन्त्रको लागि मर्ने हो । काशीनाथ बाले सबैलाई त्यही कुरा सिकाउनुभयो । तीस वर्षपछि मात्र शहीद पत्नी भनेर चिने- नत्र म दुःखमा थिएँ । यहाँ विकास गर्नुपर्छ भन्नुहुन्थ्यो । त्यसबेला केही थाहा थिएन, जीवनभरि घाँस र परालका, धान र मकैका भारी बोक्ताबोक्ता थाकियो । आज मात्रै टचाक्टरले पराल ओसारेर आएकी । विकास यही हो उहाँले देख्न पाउनुभएन, म पनि बूढी भइसकेँ । तपाईंहरूले उहाँको, एउटा सालिक स्थापना गरेको हेर्न चाहन्छु ।*

सबैका आँखा रसाए । यो अपूर्व क्षण थियो- त्यस्ती जीवन्त शहीद पत्नीलाई छोएर छेउमै बस्न पाउनु ।हाम्रा कुनै दुःख उनकासित तुलनीय छैनन् । शहीदपुत्रीले पनि अलिकति बोलिन् । उनले पितालाई तस्विरमा मात्रै चिनेकी थिइन् ।

वाङ्ला चेतनाको धनी रहेछ । समयभन्दा अघि रहेछ । ती बलिदानी कथा ती ढुङ्गामाटाले सुनिरहेको थियो– बिपीको आह्वान, सुवर्णको आह्वान, काशीराज र ढुण्डिराजका आह्वान । गुप्त सम्मेलन, वनवास, अनेक योजना- मानिसहरू अशिक्षित भएको बेला, बाटाघाटा, सञ्चार र जीवनका अन्य आधार शून्य भएको बेला कुन उज्यालो सम्झेर ती लडे होलान् । त्यही बलिदानीको आज पूजा हुँदै थियो, त्यसप्रति श्रद्धा अभिव्यक्त हुँदै थियो ।

पारिदेखि सिरसिरे बतास चल्यो । त्यो बढ्दै फुँइकीमा परिणत भयो, स-सानो हुरी जत्रै । शमीका हाँगा भाँचिने हो कि, घरका छाना उड्ने हुन् कि ! वैशाखको दिनमा आकाश छ्याङ्ग छ । धुलोको भुमरी पर्छ, नाङ्गे ठाँटीका पाखाको सिमल भाँचिन खोज्छ । एउटा ठूलो, ऐतिहासिक क्षणमा उभिन पाएको अनुभव भयो । तीन घन्टासम्म कार्यक्रम चलिरह्यो । विचारहरू, वक्तव्यहरू, अतीतका स्मरणहरू भविष्यका योजनाहरू प्रस्तुत भए । पुस्तकालय अरू बढाउने, मोतीको प्रकाशन निरन्तर गर्ने र मोतीको सालिक स्थापना गर्ने प्रस्ताव भए । शमीका बोटमुनि घामको छायाँ पातभित्रबाट छिरेर आज टाटेपाटे हुन्छ, त्यो छमछम नाचिरहन्छ । हुरी झन् बढ्दै थियो, भुमरी थपिँदै थिए । तर सङ्लो आकाशमुनि कार्यक्रम सम्पन्न भइसकेको थियो । दिन ढल्किन लागेपछि हाम्रो अनुष्ठान पूरा भयो अनि हामीले उपस्थित ठूलो जनसमुदायसमक्ष हात जोडेर अन्तिम बिदा माग्यौँ ।

अनि हामी सन्धिखर्कतिर झऱ्यौँ । आजै रूपन्देहीको वाणगङ्गा साहित्य प्रतिष्ठानमा बास बस्न पुग्नु थियो । ऋषिराम कँडेलको एउटा मित्रमण्डलीले त्यहाँ हाम्रो प्रतीक्षा गरिरहेको थियो ।

# मेरा पुर्खाहरू : सोचेर हेर्दा, सम्झेर ल्याउँदा

*– घनश्याम राजकर्णिकार*

आफ्ना पुर्खाहरूबारे जान्ने-सुन्ने तथा थाहा पाउने चाहना अक्सर सबैलाई हुन्छ । निश्चय पनि आफ्ना पूर्वजहरूबारे थप विवरण प्राप्त हुँदा हामीलाई बढी कौतूहल र उत्सुकताको साथै ज्ञान र चैतन्य प्राप्त हुन्छ । पुर्खाहरूबारेका अतीतको गर्भमा लुकेका कुराहरू खोजखाज गरी पत्ता लगाउनमा मानिसहरू लागिपर्ने कारण पनि यही नै हो । अत: मैले पनि आफ्ना पूर्वजहरूबारे थाहा हुन आएका तथ्यहरू प्रस्तुत गर्दा धृष्टता गरेको नठहरिएला । साथै यसबाट आउँदा पिँढीलाई केही ज्ञान दिन सकेमा म आफ्नो प्रयास सफल भएको ठान्छु ।

आफ्ना वंशका विगतका तथा वर्तमानका सदस्यहरू कोसँग, कसको, के सम्बन्ध थियो वा छ थाहा पाउन आजभन्दा २९ वर्ष पहिले अर्थात् वि.सं. २०३५ सालतिर खोजखाज, सोधपुछ गरी मैले एउटा वंशतालिका बनाएको थिएँ । ६ पुस्ता अघिका जिज्यूबाजे रत्नेश्वर राजकर्णिकारबाट सुरु भएको त्यो तालिकामा २०३५ सालसम्मका मभन्दा दुई पुस्ता पछिका अनुजहरूकानामावली समाविष्ट छन् । यसलाई रत्नेश्वर राजकर्णिकारको वंशतालिका भनी नामकरण गरी आफन्तहरूलाई बाँडिदिएको थिएँ । यस कार्यबाट स्वान्तसुखाय हुनु स्वाभाविकै थियो । कालक्रमानुसार यसमा थपिन आएका अरू पुस्ताहरूको नामावली राखी समकालिक बनाउनु वाञ्छनीय थियो तर त्यसो गर्न ममा जाँगर चलेन । त्यसैले मनको इच्छा मनमै राखी त्यसै बसिरहेको थिएँ । संयोगको कुरा हो, हालसालै "नेपाल संस्कृति" (नेपाल संवत् ११२०, वर्ष १०, अङ्क ८) नामक पत्रिकामा हौगलटोल र यहाँको अभिलेखबारे छत्रबहादुर कायस्थको नेपाल भाषामा लेखिएको एक अनुसन्धानात्मक लेखमा आँखा पर्दा आफ्ना पूर्वजहरूबारे अरू थप कुराहरू जानकारी लिई प्रकाशित गर्न मलाई कुतकुती लाग्यो ।

छत्रबहादुर कायस्थको उपर्युक्त लेखअनुसार ललितपुरको हौगलटोलमा रहेको हौगलबहाललाई नेपाल संवत् ७२५ को

अभिलेखअनुसार "हतिग्ल बहाल" भनिन्थ्यो त नेपाल संवत् ८२५ को शिलापत्रअनुसार "हतग्लबहाल" वा "हात्तिगल धलसि" भनिन्थ्यो । साथै यो बहाल बनाउनेहरू हौगल टोलका राजकर्णिकारहरूका पुर्खाहरू हुन् भन्ने देखिन्छ। यही 'हतग्ल बहाल" (हालको हौगल बहाल) भित्र दायाँतिर अर्थात् पूर्व-उत्तरतिर रहेको घरको भित्तामा टाँसिएको नेपाल संवत् ८२५ को नेपाल भाषाको एउटा शिलापत्र यथावत् छ। यस शिलापत्रमा सर्वप्रथम हतग्लबहालको 'यौताछें' अर्थात् पश्चिमतिरको घर अर्थात् राजकर्णिकारहरूको कुलघर बिग्रेको भत्केको हुँदा यसलाई हौगलबहालको पूर्वतिर बस्ने रत्नेश्वर राजकर्णिकार र जीवनरसिंह राजकर्णिकार दुई दाजुभाइ मिली जिर्णोद्धार र पुनर्निर्माण गरेका हुन भनी लेखिएको छ ।

यस शिलापत्रमा रत्नेश्वर राजकर्णिकारसहित अरूहरूका नामहरू देख्ता स्वभावत: ममा उत्सुकता प्रस्फुरण भयो। किनभने हौगलबहालको शिलापत्रमा कुँदिएका रत्नेश्वर र उनका सहोदर भाइ जीवनरसिंह-सहित २३ जना परिवार-सदस्यको नामहरूमा मैले तयार गरेको वंश-तालिका र हाम्रो सोह्र-श्राद्धमा पिण्डदान दिनुपर्ने पुर्खाहरूको नामावली भएको हस्तलिखित पुस्तकमा लेखिएका नामहरूसँग मिल्ने नामहरू धेरै छन् जुन यसप्रकार छन्– रत्नेश्वर, चिकति, धनमै, विनरसिं, कृष्णेश्वर, फिकुँ, रछिमिन्दसिं, चिधिभाजु, कृतिमान सिंह । यसबाट राजकर्णिकारहरूको 'आगं छँ' भनिने गरेको हौगलबहालको कुलघरलाई पहिलेजस्तै गरी जीर्णोद्धार र पुनर्निर्माण गर्ने मेरा हजुरबाको जिजुबाजे अर्थात् मेरा छ पुस्ते जिजुबाजे रत्नेश्वर र उनका भाइ जविनरसिंह हुन भन्ने कुरा स्पष्ट हुन आउँछ। त्यस्तै उपर्युक्त शिलापत्रमा कुँदिएका २३ जना परिवार सदस्यको नाममा माता सिद्धिलक्ष्मी र पिता मिल्लम्ह भनी प्रस्टसँग लेखिएको छ । यसबाट मैले पहिले तयार गरेको रत्नेश्वर राजकर्णिकारको वंशतालिकालाई मिल्लम्ह राजकर्णिकारको वंशतालिका भनी हाल संशोधन गर्ने अवसर पाएको छु । यसरी आफ्नो पुर्खाको अतीतको गर्भमा लुकिरहेको तथ्यलाई पत्ता लगाउनु एउटा सार्थक कार्य हो जस्तो लागिरहेछ र यसबाट मलाई खुसी लाग्नु स्वाभाविकै हो ।

अर्को कुरा, हौगलबहालको उक्त घरको निर्माण गर्ने पनि यसलाई जीर्णोद्धारा तथा पुन: निर्माण गर्ने रत्नेश्वर र जीवनरसिंहका पुर्खा नै थिए भन्ने कुरा छत्रबहादुर कायस्थको उक्त लेखबाट देखिएको छ । यसरी हौगलबहालमा रहेको राजकर्णिकारहरूको साझा कुल-घर “आगं छुँलाई” सुरुमा निर्माण गर्ने र पछि गएर जीर्णोद्धार र पुनर्निर्माण गर्ने मेरा आफ्नै पूर्वजहरू हुन् भन्ने कुरा स्पष्ट हुन आउँछ । यसबाट मिल्लम्हको सन्तती हामी सबैलाई गौरवको अनुभूति हुनु स्वाभाविकै हो ।

यसरी आफ्नो पुर्खाबारे सोधखोज गर्ने क्रममा हौगलबहालको शिलापत्रानुसार मिल्लम्ह र सिद्धिलक्ष्मी मेरा ७ पुस्ते जिजुबाजे र जिजुबज्यै हुन् भन्ने तथ्य छर्लङ्गिन्छ । त्यस्तै ६ पुस्ते जिजुबाजे रत्नेश्वर र उनका भाइ जीवनरसिंहले हौगलबहालको ‘अगँ छे’ (कुलघर) जीर्णोद्धार गरेको पनि प्रस्टिन्छ । यही क्रममा ५ पुस्ते जिजुबाजे चिकधिको विषयमा भने थप जानकारी पत्ता लगाउन नसकेको हुँदा उहाँबारे यहाँ केही चर्चा गर्न उपयुक्त देखिँदैन । तर मेरा चार पुस्ते जिजुबाजे गजराजको बारेमा भने रमाइलो तथ्य सङ्कलन हुन सकेको छ । जुन यसप्रकार छ– पाटन टंगलटोल निवासी जिजुबाजे गजराजले जङ्गबहादुर राणाको दरबारमा मिठाईरोटी ठेक्कामा आपूर्ति गर्नुहुन्थ्यो । त्यसैले आफ्नो कारोबारको सिलसिलामा स-परिवार जङ्गबहादुर राणाको थापाथलीदरबार छेउमा घरबार गरी मिठाई पसल सञ्चालन गर्नुभएको थियो । यसप्रकार जङ्गबहादुर राणाको दरबारमा विभिन्न थरीका मिठाईरोटीहरू ठेक्कामा दिनदिनै पुऱ्याउनुपर्ने हुँदा त्यसबेला नै उद्योगको रूपमा कामदारहरूबाट कारोबार सञ्चालन गर्नुहुने उहाँलाई खानदानी साहूका रूपमा लिइन्थ्यो। प्राइममिनिस्टर जङ्गबहादुरले उहाँलाई आफ्नो निजी हलवाईमा नियुक्त गरेका थिए। त्यसैले जिजुबाजे गजराजको सामाजिक मानमर्यादा त्यसबेला राम्रो थियो । तर धार्मिक भावना राम्ररी जमेको हुँदा उहाँमा दरबारिया प्रभावअनुसारको रवाफको छनक थिएन । उहाँको धार्मिक भावना कति थियो भन्ने कुरा उहाँले हौगलबहालस्थित राजकर्णिकारहरूको कुलदेवता भएको कुलघरमाथि अद्यापि कायम

रहेको सुन्दर मूल्यवान् तामाको गजुर देवलमा सुनेसुनले जलप लगाइदिएको भन्ने अभिलेखबाट प्रस्टिन्छ ।

यही क्रममा मेरा पुर्खाहरू तात्कालिक राणापरिवारहरूसँग कसरी घुलमिल हुँदै गए भन्ने कुराको चर्चा गर्नु प्रासङ्गिक हुन आउँछ । मेरा जिजुबाजे गजराजले श्री ३ जङ्गबहादुरको दरबारमा नियमित मिठाईरोटीहरू आपूर्ति गनुहुन्थ्यो भन्ने कुरा माथि उल्लेख भैसक्यो। त्यसैले उहाँको थापाथली दरबारमा विनारोकतोक आवतजावत तथा बसउठ हुनु स्वभाविकै थियो । त्यही क्रममा त्यहाँ पालिएका वीरशमशेर आफ्नो किशोरावस्थादेखि यौवनावस्थासम्म जिजुबाजे गजराजको कृपापात्र बनेका थिए । भनिन्छ मूलनक्षत्रमा जन्मेका वीरशमशेरलाई आमा-बाबुबाट अलग्ग छुटचाई जङ्गबहादुरले आफ्नो थापाथली दरबारमा ल्याएर राखेका थिए । सानैदेखि चकचके र छुकछुके वीरशमशेरलाई थापाथली दरबारमा सबैले नकारात्मक व्यवहार गर्थे। त्यसैले त्यहाँ उनको राम्ररी हेरचाह वा पालन-पोषण भएको थिएन । उद्दण्ड र अल्लारे हुँदै गएका वीरशमशेरले त्यहाँ राम्ररी खानलाउन पनि पाउँदैनथे। त्यसैले उनी दिनहुँ मेरा जिजुबाजे गजराजकहाँ आई गुलिया मिठाईहरू विशेष गरी जिलेबी-स्वारी सित्तैमा खाने गर्थे । यसरी आफ्नो इच्छानुसार सित्तेमा मिठाईहरू खान वीरशमशेर मेरा जिजुबाजेको कृपापात्र बन्नुपर्थ्यो । यस्तो दैनिक प्रक्रियाबाट यदाकदा मेरा जिजुबज्यै मनलक्ष्मी वीरशमशेरदेखि झर्किनुहुन्थ्यो, रिसाउनुहुन्थ्यो र बेला-मौकामा गाली पनि गर्ने गर्नुहुन्थ्यो । वीरशमशेरप्रति जिजुबज्यैको यस्तो व्यवहार जिजुबाजेलाई निको लागेनछ । एक दिन जिजुबज्यैलाई सम्झाउँदै उहाँले भन्नुभएछ– “वीरेलाई त्यसरी गाली नगर्नू, उनले जे माग्छ खान दिनू, यो मान्छे पछि ठूलो हुनेछ ।” जिजुबाजे गजराजले वीरशमशेरमा के देख्नुभएछ कुन्नि, उहाँको र वीरशमशेरको सम्बन्ध एवंरीतले बित्दै गएको थियो।

नभन्दै समयको पाङ्ग्रो घुम्दै जाँदा नेपालको इतिहासमा वि.सं. १९४२ मा एउटा ठूलो काण्ड हुन्छ जसमा प्राइममिनिस्टर रणोद्वीपको हत्या हुन्छ र वीरशमशेर नेपाल अधिराज्यको श्री ३ महाराज बन्न पुग्छन् । त्यसबेला जिजुबाजे गजराजको सायद निधन भैसकेको थियो । तर वीरशमशेरले पितातुल्य गजराजको गुन बिर्सेका

रहेनछन् । उनले गजराजको जेठो छोरा (अर्थात् किशोरावस्थामा थापाथलीमा उनको खेल्ने साथी) मेरा हजुरबा हीरामानसिंहलाई बोलाई आफ्नो निजी हलुवाईमा नियुक्त गरे। यसप्रकार वीरशमशेरको दरबारमा हाम्रा पुर्खाहरूको प्रवेश भएको हो ।

सबैलाई थाहा भएकै कुरा हो त्यसबेलाको समयमा श्री ३ महाराजको दरबारमा पस्न पाउनु भनेको ठूलो धाक, धक्कु र घमन्डको कुरा हुन्थ्यो। तसर्थ मेरा हजुरबा हीरामानसिंहमा पनि केही रवाफ, केही रौनक सवार हुनुमा आश्चर्य छैन। यसले गर्दा उहाँको दुई जना भाइहरूमा ईर्ष्या र द्वेष भावना जाग्नु स्वाभाविकै थियो। भाइहरूलाई चित्त बुझाउन नसक्दा सबै त्यागी ती भाइहरूलाई नै सुम्पी काठमाडौँ आई वीरशमशेरको दरबारमा रहे। वीरशमशेरको मृत्युपश्चात् हजुरबा हीरामानसिंह वीरशमशेरको प्यारो कान्छो छोरा तेजशमशेरको लालदरबारमा सरे ।

वीरशमशेरको शेषपछि तेजशमशेरको पनि प्रिय पात्र बन्न सफल हजुरबा हीरामानसिंहमा क्रमशः दरबारिया रौनक बढ्न गई राम्रा-राम्रा मूल्यवान् लुगाफाटा लगाउने, सौखिन भै हिँड्ने व्यक्ति बनेको कुरा मैले किशोरावस्थामा सुनेको थिएँ। राणा बाबुसाहेबहरूझैँ छाँटकाँट र रवाफमा सोखिन मेरा हजुरबाको जस्तो आनीबानी मेरा जिजुबाजे गजराजमा थिएन न मेरा बुबा कृष्णबहादुरमा नै थियो न त म आफैमा पनि छ। तैपनि पुर्खाहरूको जीवन शैली सुन्न मात्र पनि रमाइलोचाहिँ हुँदो रहेछ ।

यही सिलसिलामा पिता श्री कृष्णबहादुर राजकर्णिकारबारे छोटकरीमा केही चर्चा गर्नु सान्दर्भिक ठान्दछु। उहाँको ठूलो योगदान वा उपलब्धिको कुरा गर्ने हो भने त्यो हालसम्म हामीले धान्दै आएको व्यवसाय कृष्ण पाउरोटीको शुभारम्भलाई लिन सकिन्छ। आजभन्दा ५६ वर्ष पहिलै अर्थात् वि.सं. २००५ सालतिर जब काठमाडौँमा उद्योगव्यवसाय शून्य प्रायः थियो त्यस्तो बेलामा पनि नेपालमा कसैले सुरु नगरेको पाउरोटीजस्तो पश्चिमी खाद्य पदार्थ उद्योगको रूपमा उहाँले बनाउन सुरु गर्नुभएको थियो। उहाँको त्यो प्रयासबाट आज नेपालमा पाउरोटीको प्रचलन देशव्यापी भएको छ। हजारौँ हजार नेपाली दाजुभाइ दिदीबहिनीको जीवननिर्वाह यसैमा निर्भर छ तथा

उहाँका सन्तति हाम्रो जीवन पनि उहाँले शुभारम्भ गर्नुभएको कृष्ण पाउरोटी भण्डार (हाल कृष्ण पाउरोटी प्रा.लि.) मा नै समर्पित छ। त्यसो त केही वर्ष पहिले हाम्रो परिवारबीच बन्डा हुँदा कृष्ण पाउरोटीको साख बचाउन र पिताजीको बिँडो थाम्न हामीलाई अनावश्यक ठूलो आर्थिक बोझ परी हम्मे परेको थियो। त्यसबेला पैसाभन्दा भावनालाई प्रमुखता दिई कृष्ण पाउरोटीको इतिहास नमरोस् भन्ने चाहनाले हामीले यसलाई बचाउन ठूलो प्रयत्न गर्न परेको थियो। आज कृष्ण पाउरोटीको इतिहास र ख्याति यथास्थानमा छँदै छ र त्यसैमा हामी सन्तुष्ट छौँ।

प्राइममिनिस्टर जङ्गबहादुर, श्री ३ वीरशमशेर र उनका छोरा तेजशमशेरका दरबारमा मेरा जिजुबाजे र हजुरबाहरूको पहुँच भएको विवरण माथि उल्लेख गरिसकेँ। यही सिलसिलामा पिताजी कृष्णबहादुर वीरशमशेरको छोरा तेजशमशेरको लालदरबारमा र पछि तेजशमशेरको जेठा छोरा इन्दुशमशेरको लालदरबारमा कार्यरत हुन पुगे। त्यसपछि वि.सं. २००० सालतिर इन्दुशमशेर बडाहाकिम भएर इलाम गए। त्यसबेला अधिकांश सेवकहरू मालिकको पछिपछि लाग्नु स्वाभाविकै थियो। यही क्रममा बुबा कृष्णबहादुर पनि इन्दुशमशेर सँगसँगै इलामतिर लाग्नुभयो। इलाममा गएका सेवकहरूमध्ये एक जनाले इन्दुशमशेरको बहुमूल्य हीराजवाहरात भएको एउटा कन्तुर चोरेर त्यतैतिरका एउटा गोठमा लुकाइराखेको रहस्य बुबाले थाहा पाई सो कन्तुर फेला पारी आफ्नो मालिककहाँ पुऱ्याइदिए। बुबाको इमानदारी र स्वामीभक्तको त्यहाँ प्रशंसा मात्र भएन कदरस्वरूप उहाँलाई इन्दुशमशेरले तराई रौतहट-पर्सातिरका ५० बिघा जमिन बकस पनि दिए। यसबाट बुबा प्रफुल्लित हुनु स्वाभाविकै थियो। तर केही समयपछि बकस पाएको जग्गा आफ्नो स्वामित्वमा रहन सकेन र त्यो घटनाले बुबालाई साह्रै चोट पऱ्यो र फलस्वरूप मालिकको सेवा गर्न छाडेर भाग्यको खोजीमा तत्कालै इलामबाट कलकत्ता (हाल कोलकता) तिर नाङ्गो हात झर्नुभयो।

कोलकतामा बुबा एक दिन दक्षिणतिर रहेको कालीघाटको कालीमन्दिरमा दर्शन गर्न जानुभएको थियो। त्यसबेला त्यहाँ भक्तजनहरूको

ठूलो भीड लागेको थियो। त्यहाँको हूलमूलमा एउटी १०-११ वर्षकी बालिकालाई च्यापिएको बुबाले देख्नुभएछ र भएभरको बल निकाली उनलाई बोकेर संरक्षण गरी उद्धार गरिदिनुभएछ। आफ्नी छोरीको यसरी बचाउ गरिदिएको देखेका बाबुचाहिँले साह्रै खुसी भएर पिताजीलाई सँगै लगी आफ्नो घरमा केही दिनसम्म पाहुनाको रूपमा राखेछन्। बुबा कृष्णबहादुरलाई पाहुना गरेर राख्ने ती व्यक्ति कोलकताको त्यसबेलाको प्रख्यात अङ्ग्रेजी बेकरी कम्पनी 'फर्पोज' (Firpo's) मा कार्यरत पाउरोटी बनाउने मुख्य मिस्त्री रहेछन्। पिताजीको इच्छा मुताबिक उनले आफ्ना कम्पनीमा राम्ररी सिकी बुबा सोझै काठमाडौँ फर्कनुभयो। त्यसपछि वि.सं. २००५ सालमा आफ्नै निवासमा बुबाले नेपालमा पहिलोपटक पाउरोटी बनाउन सुरु गर्नुभयो। इन्दुशमशेरको स्वइच्छाले बक्सिस दिएको ५० बिघा जमिन पछि हरण नभएको भए बुबाले नेपालमा पाउरोटी उद्योगको श्रीगणेश गर्ने ऐतिहासिक श्रेय पाउनुहुन्थेन होला। जेहोस् नेपालमा सर्वप्रथम पाउरोटी बनाई नेपाली जनमानसलाई पाउरोटी खान सिकाउने बुबा कृष्णबहादुर राजकर्णिकार नेपालको उद्योगक्षेत्रमा एक अविष्मरणीय व्यक्तित्व बन्न पुग्नुभयो।

यसप्रकार नेपालको औद्योगिक क्षेत्रमा अगुवाको भूमिका खेल्ने कृष्णबहादुरले धार्मिक क्षेत्रमा पनि अविष्मरणीय योगदान गर्नुभएको छ। आफ्ना नातेदारहरूबाट असहयोग र आलोचना तथा आफ्नै सन्तानबाट विरोध खेप्नु पर्दापर्दै पाटनको हौगलबहालमा वि.सं. २०१० सालमा बुद्धमन्दिर भवनको निर्माण गरी त्यहाँ आराम गरिरहेको सुन्दर बुद्धप्रतिमा, धर्मधातु र चैत्यहरू प्रतिस्थापना गर्नुभयो। आराम गरिहेको त्यसकिसिमको बुद्धप्रतिमा नेपालमा सर्वप्रथम निर्माण भएको त्यही हो र सायद नेपालमा हालसम्म त्यही एउटा मात्रै छ। यसरी कृष्णबहादुर राजकर्णिकार नेपालको औद्योगिक र धार्मिक दुई छुट्टाछुट्टै क्षेत्रका पहिलो नेपाली बनेका छन्। त्यसैले कृष्णबहादुर राजकर्णिकार भन्ने नाउँ नेपाली समाजले बिर्सन नसकिने नामको पर्याय बनिसकेको छ। उहाँले स्थापना गर्नुभएको कृष्णपाउरोटी भण्डार (हाल कृष्ण पाउरोटी प्रा.लि.) अहिले ५८ वर्षको भैसकेको छ र आराम गरिरहेको अद्वीतिय बुद्धप्रतिमा स्थापना भएको ५४ वर्ष

पार गरिसकेको छ । यी दुवैले कृष्णबहादुरको छविलाई उज्ज्वल बनाइरहेको छ ।

अर्को कुरा पिताजी कृष्णबहादुर राजकर्णिकार बेलाबखत सजातीय उत्थानमा पनि लागिरहन्थे। आर्थिक सङ्कटमा परी जीवननिर्वाह गर्न मुस्किल परेका एक जना सजातीय बन्धुलाई उहाँले कसरी काठमाडौंमा बसोबास र काम गर्ने चाँजोपाँजो मिलाई दिनुभयो भन्ने कुरा आफैमा एउटा अनुकरणीय पाठ थियो। त्यस्तै सजातीय विधि-व्यवहारमा हुने फजुल खर्चलाई कटौती गराउने अभियान पनि उहाँले चलाउनु भएको थियो। यसको प्रारम्भ आफ्नो गुठीबाट गर्नुभएको थियो। सनातनदेखि चल्दै आएको गुठीको भोजमा अनावश्यक खर्चहरू धेरै हुने गर्थ्यो। उहाँको सक्रियतामा गुठीको भोजमा अनावश्यक खर्च घटाई मितव्ययिता अपनाइयो। यसबाट सबै गुठियारहरू उहाँदेखि सन्तुष्ट थिए। बुबाको यस्ता सुकर्महरू बेलामौकामा मलाई सम्झना हुनेगर्थ्यो र उहाँको यस्तो बानीको छाप ममा पनि परेको हुनुपर्छ। त्यसैले होला आफ्नो जातिको भलो हुने केही काम गर्नुपर्छ भन्ने भावना ममा कताकता सलबलाउन थाल्यो। यही क्रममा आफ्नो जातीय विधि-व्यवहारमा पहिलेको मितव्ययिता लोप हुँदै तडकभडक र फजुल खर्चहरू आकासिँदै गइरहेको अनुभूत गर्दै थिएँ। यत्तिकैमा काठमाडौंका तुलाधर र मानन्धर मित्रहरूसँगको कुराकानीमा तिनीहरूले आ-आफ्ना समाजहरू स्थापना गरी विधि-व्यवहारमा मितव्ययिता लागू गरेको थाहा पाउँदा मलाई उत्सुकता जागेको थियो। हामीले पनि एउटा यस्तै सजातीय समाज स्थापना गरी सुधारका कार्यहरू किन नगर्ने भन्ने भावनाले मलाई कुतकुत्याउन थाल्यो। त्यसैले सजातीय आफन्तहरूलाई संलग्न गराई "राजकर्णिकार समाज" स्थापना गर्नमा जुटेँ। यस कार्यमा संस्थापक सदस्य भई सर्वप्रथम सहयोग गर्नेहरू ललितपुर थसिखेलका श्री नारायणगोविन्द, काठमाडौं ठमेलका श्री रत्नबहादुर, ललितपुर थंगालटोलका श्री पुष्पलाल, काठमाडौं थापाथलीका स्वर्गीय श्री लक्ष्मीराज तथा ललितपुर हात्तीवनका श्री शक्तलाल राजकर्णिकार सबैलाई जति साधुवाद दिए पनि कमै हुनेछ। उनीहरू सबैको सहयोग र सद्भावना पाई विक्रम संवत् २०५७ साल भाद्र २४ गतेका दिन हौगलवहालको आनन्द बुद्धमन्दिर को बैठककोठामा राजकर्णिकार

समाजको स्थापना भएको हो । अहिले यो समाजले आफ्ना घोषित उद्देश्यअनुरूपका कार्यहरू गरिरहेको छ । साथै यस समाजप्रति सम्पूर्ण राजकर्णिकार बन्धुहरूको सद्भावना र सहयोग राम्ररी विकसित भइरहेको छ । यसरी आफ्नो पुर्खाको संस्मरण लेख्ने क्रममा आफूले स्थापित राजकर्णिकार समाजको चर्चा पनि स्वतः आइपुग्यो । यसबारे अरू थप लेख्न खोज्दा धृष्टता गरेको नठहरिएला भन्न सकिन्न । त्यसैले यस प्रसङ्गलाई अहिले यहीँ टुङ्ग्याउँछु ।

अन्तमा, पुर्खाहरूबारे सुनेका, पढेका तथा सोधखोज गरी थाहा पाइएका केही कुराहरूलाई यसरी प्रस्तुत गर्न पाउनु एकातिर उहाँहरूको ऋण चुकाउन खोजेको जस्तो भइरहेको छ भने अर्कोतिर यसो गर्नु मेरो कर्तव्य पनि हो जस्तो लागिरहेछ । पुर्खाहरूलाई सम्झेर गरिने जुनसुकै किसिमको धार्मिक, सामाजिक वा साहित्यिक क्रियालाई एउटा सार्थक प्रयत्न भन्नुपर्छ र यसले हामीलाई आफ्नो अस्तित्वबोध राम्ररी गराइरहेको हुन्छ– सोचेर हेर्दा मलाई यस्तै लागिरहेछ ।

✍

# एक चर्चाः मि.सु.रामभक्तको टिपोटमाथि

– *चित्तरञ्जन नेपाली*

संवत् २०३५ साल साउन, भदौ र असोजको पूर्णाङ्क ७६ को *नेपाली (त्रैमासिक)* पत्रिकामा राणाशासनका संस्थापक प्रधानमन्त्री श्री ३ महाराज जङ्गबहादुर राणाको चरित्रको सम्बन्धमा विभिन्न व्यक्तिहरूद्वारा व्यक्त गरिएका टिपोटहरू (अर्थात् टिप्पणीहरू) प्रकाशित भएका थिए । यी टिपोटहरू आफ्नो समयका अत्यन्त शक्तिशाली अर्का राणा प्रधानमन्त्री श्री ३ महाराज चन्द्रशमशेर जङ्गबहादुर राणालाई 'जङ्गबहादुरलाई नजिकैबाट देख्नेहरूले उनलाई कस्तो देखेथे' भन्ने जान्ने इच्छा भएबाट उनले 'जङ्गबहादुरलाई देखेजानेका मान्छेहरूबाट उनीहरूको इम्प्रेसन (भनाइ) जम्मा गर्न लगाएको परिप्रेक्ष्यमा यस प्रकारका पाँच जना व्यक्तिहरूको मन्तव्य प्राप्त भएको भन्ने पत्रिकाका सम्पादक एवं प्रसिद्ध साहित्यकार कमल दीक्षितको भनाइ रहेको छ । र यी व्यक्तिहरू थिए– पुरोहित शिवराज, जीनारानी, बबरजङ्गकी रानी, मे.क. खड्गसिं गुरुङ र मि.सु. राम भक्त ।[1] यी टिपोटहरूमध्ये पनि सम्पादक महोदयले मिर सुब्बा रामभक्तको टिपोटलाई बढी महत्त्व दिएका थिए भन्ने उनका निम्नलिखित अभिव्यक्तिबाट स्पष्ट हुन्छ–

"यी ५ जनाका ४ टिपोटहरू पढ्दा जङ्गबहादुरलाई महाराज हुनेभन्दा पहिलेदेखि देख्ने एक जना रामभक्त मात्रै हुन् कि जस्तो लाग्छ । तर त्यही पनि '...कोतपर्व भयाको हो' भनी आफैले देखेजाने जस्तो गरी लेखेकोले र त्यसभन्दा अघिको कुरामा चाहिँ 'भन्थ्या', 'भन्छन्', 'रे', 'भन्ने सुनेको' इत्यादि लेखेको देखेर मात्र अन्दाज गरिएको हो । भए पनि यी चार थरीको भनाइमा सबभन्दा बढी ऐतिहासिक तथ्य र प्रामाणिकता यिनैकोमा देखिनछ ।"[2] तर यिनै मि.सु. रामभक्तको परिचयात्मक हुलियाको सम्बन्धमा भने सम्पादक महोदयको भनाइ यस्तो रहेको छ– "त्यो देख्ता यी मि.सु. रामभक्त जङ्गबहादुरका निकै पुराना विश्वासी कारबारी रहेछन् भन्नुपर्छ, तर यिनको बारेमा अरू केही कुरा– यिनको थर वतन केही ज्ञान छैन ।"[3] यसको साथै उपर्युक्त ५ व्यक्तिहरूमध्ये चार जनाका तीन टिपोटहरू (जीना रानी र बबर जङ्गकी रानीको टिपोट एउटै हुँदा)लाई

एउटा लेखको रूपमा तथा मि.सु. रामभक्तको टिपोटलाई छुट्टै लेखको रूपमा प्रस्तुत गर्नुबाट पनि सम्पादकले यसलाई अरू टिपोटहरूभन्दा बढी महत्त्व दिएका थिए भन्ने स्पष्ट हुन्छ ।[४]

मि.सु. रामभक्तले आफ्नो जाहेरी टिपोटलाई विभिन्न १६ दफामा विभाजित गरी प्रत्येक दफामा विभिन्न विषयहरू उल्लेख गरेका छन् । यी विषयहरू मध्ये १, २ र ३ दफाहरूमा जङ्गबहादुरका पिता एवं पुर्खासित सम्बन्धित विषयहरू छन् भने दफा ४ को विषयचाहिँ माथवरसिंह थापासित सम्बन्धित छ । अनि दफा ५ मा वर्णित विषयमा चाहिँ भीमसेन थापाको अवसानपछि देशमा राजनैतिक अस्तव्यस्तता छाएको देखाउन खोज्नुको साथै देवीबहादुरको कारणमा माथवरसिंह थापा र जङ्गबहादुरको बीच भएको भनिएको प्रख्यात 'भनाभन' लाई समेत उल्लेख गरिएको छ । रामभक्तले यी विषयहरू प्रस्तुत गर्दा सम्पादक महोदय कमल दीक्षितको टिप्पणीअनुरूप कुनै विषय बडो चलाखीपूर्वक प्रस्तुत गरेको देखिएकोले 'उनी चानचुन मान्छे थिएनन्' भन्ने सम्पादकको टिप्पणी समीचीन छ ।[५]

तर यस्ता 'चानचुन' नभएका व्यक्ति– रामभक्त पनि कुनैकुनै विषयहरूमा चुकेका देखिन्छन् । ६२ हरणको (अर्थात् संवत् १८६२ सालमा भएको बिर्ताहरणको) प्रसङ्गमा तात्कालिक मुख्तियार रणबहादुर शाहले आफ्ना बेमातृ भाइ 'सेरबहादुरलाई पोडेको हात सौंपि देन्छु भंन्या हुकुं हुँदा सेरबहादुर रिसाई (रणबहादुर) शाहमाथि) तलवार चलाएको'[६] भन्ने विवरण त्यसै घटनास्थलमा उपस्थित रहेका एवं त्यहीं तत्कालै शेरबहादुर शाहलाई कलनसामा खुकुरीले रोपी मार्ने तात्कालिक काजी बालनरसिंह कुँवरले उक्त घटनाको विस्तृत विवरण उल्लेख गरी तात्कालिक महाराजाधिराजमा प्रस्तुत गरेको अर्जीमा उल्लिखित बेहोराबाट सही भन्न मिल्दैन ।[७] यसरी नै संवत् १९०१ साल फागुन वदी ४ का दिन तात्कालिक महाराजाधिराज श्री ५ राजेन्द्रविक्रम शाह (एवं तात्कालिक नानी महाराजाधिराज अर्थात् युवराजाधिराज श्री ५ सुरेन्द्रविक्रम शाहसमेत) ले तात्कालिक प्राइममिनिस्टर माथवरसिंह थापालाई प्रदान गरेको 'कलाबहादुर' भन्ने खिताबसहितको तक्मालाई[८] रामभक्तले आफ्नो टिपोटमा '...मातवरसिंले ...लाहुर गै रंजित सिंलाई खुसी तुल्याई

कलाबहादुर षिताव पायाका थिया'[९] भनी लेखेका थिए, त्यो पनि सही देखिदैन ।

मि.सु. रामभक्तको उक्त टिपोटको दफा ५ मा देवीबहादुरको कुरालाई लिएर मामा-भान्जा अर्थात् माथवरसिंह थापा र जङ्गबहादुरको बीच भएको भनाभनको अतिरिक्त यी बेहोराहरू पनि लेखिएको थियो– 'ञाहा पाँडे मुख्तार बहुलाइ केही काम नचल्याको देखि रजिडेन्ट लारेन्स साहेब आई पर्दा बाहिर बसि महारानीसंग कुरा गर्ने र इटाचपलीमा गै नालिससमेत सुंन्या हुँदा महारानीले जे भन्यो सोही हुन्या... (आदि)।'[१०] यसरी नै उनले दफा ७ मा यस्तो पनि लेखेका थिए– 'जङ्गबहादुरले महारानीलाई खुसी तुल्याई तिन्हेरूले साहेवज्यूलाई (अर्थात् रणेन्द्रविक्रम शाहलाई) गद्दिमा राख्दैन म राखि दिन्छु भनि मातवसिंलाई डाक्न पठाई खेपिमा गोली चलाई मारी सकेपछि साहि बद्दनसिंलाई पठाई गगनसिंलाई मारी महारानिलाई चलाइ (अर्थात् सवारिचलाइ ?) महारानिका तलवार म चलाउँछु भनी ली ३ सालमा कोतपर्व भयाको हो।'[११] यीबाहेक अन्य दफहरूमा विभिन्न किसिमबाट जङ्गबहादुरको प्रशंसा गरिएका विवरणहरू रहेका छन् ।

रामभक्तको टिपोटको उपर्युक्त दफा ५ र ७ मा मुख्यतया निम्न पाँच कुराहरू उल्लेखनीय छन्– (१) पाँडे मुख्तार (अर्थात् तात्कालिक मुख्तियार रणजङ्ग पाांडे) बहुलाएको, (२) रजिडेन्ट लारेन्सले आएर पर्दा बाहिर बसेर महारानीसँग कुरा गर्ने गरेको, (३) उनले (अर्थात् रजिडेन्ट लारेन्सले) इटाचपलीमा गै नालिससमेत सुन्ने गरेको, (४) जङ्गबहादुरले माथवरसिंह थापालाई गोली हानी मारेको र (५) उनले (अर्थात् जङ्गबहादुरले) साहि बद्रीनसिंङलाई पठाएर गगनसिंहको हत्या गराएपछि महारानीको तरवार (अर्थात् हुकुम) लिई कोतपर्व गराएको। यी कुराहरूमध्ये माथवरसिंहको हत्या सुरुमा राजा राजेन्द्रविक्रम शाहले आफैले गरेको भनिए तापनि पछि गएर यो हत्या जङ्गबहादुरले गरेका हुन् भन्ने कुरामा उनी आफैले पनि सकारेको हुनाले यस विषयमा सबैजसो इतिहासहरूको एकमत रहेको छ तापनि अन्य कुराहरूमा तिनीहरूको बीच मतैक्य कायम हुन सकेको छैन । यिनै मतैक्य कायम भैनसकेका चार कुराहरूमध्ये

(१) रजिडेन्ट लारेन्सले महारानीसित कुरा गर्थे र (२) (उनले) इटाचपलीमा गै नालेस समेत सुन्ने गर्थे भन्ने कुराहरूको सम्बन्धमा पछि छुट्टै अर्को लेखमा चर्चा गर्ने गरी यहाँ (१) रणजङ्ग पाँडे बहुलाए भन्ने एवं (२) (जङ्गबहादुरले) साही बद्रीनरसिंहलाई पठाएर गगनसिंहको हत्या गराएर कोतपर्व गराए भन्ने दुई कुराको सम्बन्धमा चर्चा गर्ने प्रयास गरिएको छ ।

मि.सु. रामभक्तले आफ्नो टिपोटमा मुख्तियार रणजङ्ग पाँडे बहुलाएको भनी लेखेको सम्बन्धमा *नेपाली* पत्रिकाका सम्पादक महोदय कमल दीक्षितको भनाइ यस्तो रहेको छ– "...पाँडे मुख्तियार (रणजङ्ग)लाई 'बहुलाइ' भन्ने शब्द उनले प्रयोग गरेका छन् । 'बहुला'लाई शाब्दिक अर्थमा नलिएर लाक्षणिक अर्थमै लिए पनि यस्ता कुरा अरू कुनै इतिहासकारले लेख्न सकेका छैनन् ।"[१२] किन्तु संवत् २०३५ सालमा *नेपाली* (त्रैमासिक) पत्रिकामा सम्पादक महोदयको उक्त टिप्पणीसहित मि.सु. रामभक्तको 'टिपोट' प्रकाशित हुनुभन्दा सोह्र वर्ष अगाडि नै इतिहास शिरोमणि बाबुराम आचार्यले रणजङ्ग पाँडे लाक्षणिकरूपमा मात्र हैन शाब्दिकरूपमा नै 'बहुलाए' भनी लेखेका थिए । संवत् २०१९ साल असोजमा *रूपरेखा* पत्रिकामा प्रकाशित 'भीमसेन थापाको पतनदेखि जङ्गबहादुर राणाको उत्थान नभएसम्म' शीर्षकको लेखमा उनले यस्तो लेखेका थिए– "...भीमसेन थापाको मरणको हल्लाले नेपाल राज्यभर अशान्ति फैलिएर लूटखसोट र भ्रष्टाचारका बाढी चल्दा रोक्न नसकी १८४० का मार्चमा रणजङ्ग पाँडे विक्षिप्त भए ।"[१३] त्यतिमात्र हैन, रणजङ्ग पाँडेको मृत्युको सम्बन्धमा उनको भनाइ यस्तो रहेको थियो– "...माथवरसिंहले बडो निर्दयता देखाएर पागल भएका रणजङ्ग पाँडेलाई बेरूप गराई गल्लीगल्ली घुमाएर विष दिई उनका घरैमा मारे ।"[१४] अनि यही घटनालाई नीरविक्रम 'प्यासी'ले आफ्नो एउटा लेखमा यस प्रकार प्रस्तुत गरे– "...यसपछि पहिलेदेखि विक्षिप्त भई होश नभएका उन्मद व्यथाका रोगी रणजङ्ग पाँडेलाई त्यहीँ नाङ्गो पारेर लँगौटीमात्र बाँकी राखी टाउकोदेखि पैतालासम्म कालो पोती सिक्रीले कम्मरमा बाँधी विष खुवाई सहर घुमाई उनको घरको मसलाको रूखमा फुन्ड्याउन लगे बाँकी बचेका उनका जहान बच्चाले देखून् भनेर ।"[१५] तर सन्

१८५० (तदनुसार संवत् १९०७) सालतिर[१६] नेपालमा आई यस घटना सम्बन्धमा सबभन्दा पहिले कलम चलाउने तात्कालिक बृटिस रेजिडेन्सीका शल्य चिकित्सक एच.ए. ओल्डफिल्डको भनाइचाहिँ यस्तो थियो– "...रणजङ्ग पाँडेलाई हत्यास्थलमा (अर्थात् उनका अन्य सहयोगी बन्धुहरूलाई हत्या गरिएको स्थलमा) ल्याइएको थियो तर उनी आफै मरणासन्न अवस्थामा हुँदा उनलाई (मारिएका) व्यक्तिहरू मात्रै देखाएर उनकै घरमा लगिए जहाँ केही घण्टापछि उनी कालगतिले मरे।"[१७] र सरदार भीमबहादुर पाँडे क्षेत्रीले पनि रणजङ्ग पाँडेको मृत्युको सम्बन्धमा ओल्डफिल्डकै भनाइप्रति सहमति जनाएका छन्।[१८] यसरी नै यस घटनामा सम्बन्धमा तात्कालिक महाराजाधिराज राजेन्द्रविक्रम शाहले जनरल रणवीरसिंह थापा, जनरल माथवरसिंह थापा, काजी त्रिविक्रमसिंह थापा, कम्यान्डर कर्णेल सेरजङ्गबहादुर थापासमेत तिनीहरूका सम्पूर्ण बिरादरीको नाममा गरिदिएको (बेमितिको) खितापत्रको लालमोहरमा यस्तो लेखिएको थियो– "...यो जाल्साजी उठाउन्या अषतियार (मुखतियार ?) रणजंग्या हो, यसलाई काटि मार्नु पर्न्या हो साह्रो असाध्य विराम भयाको रहेछ यसलाई चाण्डाल हो भनी सुनाई सहर डुलाई निकालि दिनु भंन्या ठहर्‍यो, सो माफिक भै रणजंग्या कालैले मर्‍यो।"[१९] अनि यसमा विक्रमजित हसरतको भनाइचाहिँ यस्तो थियो– "... यो समूहका नेता रणजङ्ग पाँडे मृत्यु शय्यामा हुँदा उनलाई शान्तिपूर्वक मर्न दिइयो र मातवरसिंहको उदारताले गर्दा उनको शवलाई रीतपूर्वक दाहसंस्कार गर्न दिइयो।"[२०]

अब माथि उल्लिखित मि.सु. रामभक्तको टिपोटको दफा ७ मा उल्लिखित विवरणबारे चर्चा गरौँ। यो विवरण मुख्यतया संवत् १९०३ सालमा भएको कोतको हत्याकाण्ड एवं त्यस हत्याकाण्डको कारण बन्न पुगेको गगनसिंहको हत्यासित सम्बन्धित छ। नेपालमा एक शताब्दीसम्म कायम रहेको राणाशासनका संस्थापक एवं प्रथम राणा प्रधानमन्त्री श्री ३ महाराज जङ्गबहादुर राणाको प्रादुर्भाव हुनमा सहयोगी घटनाको रूपमा लिइने तथा नेपालको इतिहासमा कोतपर्वको नामले प्रसिद्ध 'हत्याकाण्ड' हुनुको एक मात्र कारण त्यस बखत राज्यसञ्चालनको अख्तियार पाएकी महारानी राज्यलक्ष्मीदेवी शाहका

प्रिय पात्र एवं अत्यन्त शक्तिशाली मन्त्री बन्न पुगेका जनरल गगनसिंहको हत्या हो भन्ने कुरामा नेपालको इतिहासमाथि कलम चलाउने सबैजसो इतिहासकारहरूको समान धारणा रहेको छ । तर गगनसिंहको हत्या कसले, किन गरे तथा त्यस हत्याको योजनाकार को थिए भन्ने कुरामा भने इतिहासकारहरूको बीचमा एक मत हुन सकेको छैन भन्न सकिन्छ । तर पनि सन् १८४६ सेप्टेम्बर १४ (तदनुसार संवत् १९०३ आश्विन वदि ९) को राती १० बजेतिर आफ्नो घरको पूजाकोठामा पूजा गर्नमा व्यस्त रहेका गगनसिंहलाई उनैका घर सँगैका नामुद हुल्याहा 'लाल झा' भन्ने व्यक्तिले छानाबाट गै गोली प्रहार गरी हत्या गरेका थिए भन्ने अधिकांश इतिहासकारहरूको भनाइ रहेको देखिन्छ ।

गगनसिंहको हत्यालाई लिएर पनि सम्भवत: सबभन्दा पहिले कलम चलाउने इतिहासकार एच. ए. ओल्डफिल्डको भनाइ यस्तो थियो– 'राजाले (अर्थात् तात्कालिक महाराजाधिराज राजेन्द्रविक्रम शाहले) आफ्ना दुई छोराहरू (अर्थात् तात्कालिक युवराजाधिराज सुरेन्द्रविक्रम शाह एवं माहिला साहेबज्यू उपेन्द्रविक्रम शाह)लाई महारानी (अर्थात् तात्कालिक बडामहारानी राज्यलक्ष्मीदेवी शाह) र उनका प्रियपात्र एवं मन्त्री (अर्थात् जनरल गगनसिंह) बीचको कुख्यात सम्बन्धको कारण राजपरिवारको प्रतिष्ठामा आघात पुगेको कुरा गोप्यरूपमा बताउनुको साथै उनको सामु आफू शक्तिहीन हुँदा तिमीहरू दुई भाइले नै पारिवारिक प्रतिष्ठाको निम्ति गगनसिंहको विनाश गर्ने उपाय गर भनी भने । कनिष्ठ राजकुमार (माहिला साहेबज्यू) किशोरावस्थामा नै हुँदा उनलाई विना कुनै अवरोध र आशङ्का यताउता जान खुला थियो र (यसैकारण) फत्यजङ्ग (तात्कालिक प्राइममिनिस्टर) को परिवारसित उनको निकै घनिष्ठता हुन गएको थियो । उनले फत्यजङ्गलाई आफ्नो योजना बताएपछि उनको सहयोगमा लाल झा नामका व्यक्तिलाई हातमा लिए, जसले जनरल (अर्थात् गगनसिंह)लाई मार्ने जिम्मा लिए ।[२१] साथै यस योजनामा फत्यजङ्गको अतिरिक्त जनरल अभिमान सिंह, काजी दलभञ्जन पाँडे र वीर किशोर पाँडेहरू पनि सम्मिलित थिए तर महारानी पक्षको भनी ठानिएको हुनाले जङ्गबहादुरलाई यसबारे कुनै जानकारी

दिइएको थिएन भन्ने पनि ओल्डफिल्डको भनाइ थियो। योजनाअनुसार इस्वी सन् १८४६ साल सेप्टेम्बर १४ का दिन राती १० बजेतिर पूजाकोठामा पूजा गर्न बसेका जनरल गगनसिंहलाई सँगै जोडिएको घरको छानाबाट लाल झाले गोली हानी हत्या गरे र यस घटनाको परिणामबाट अन्योलमा परी कुनै रूपमा सहरबाट भाग्न सफल भै लाल झा सकुशल बेतिया पुगे। बेतियामा उनको जगत बम पाँडेसित भेट भयो। पछि यिनै जगतबम पाँडेले जङ्गसित भेट भयो। पछि यिनै जगतबम पाँडेले जङ्गबहादुरको हत्या गर्न भनी लाल झालाई पुन: काठमाडौँ पठाए र काठमाडौँतर्फ आउँदाआउँदै बाटोमा उनका सहयोगीहरूसहित उनलाई औलो ज्वरले समात्यो। तर पनि उनीहरू कुनै रूपमा काठमाडौँ पुगे, जहाँ उनीहरू समातिए। औलो ज्वरोले ग्रस्त भै मरणासन्न भएपछि लाल झाले अगाडि गगनसिंहलाई आफूले नै मारेको र अहिले पनि बढुवा गरी पुरस्कार समेत, दिन्छु भनी जगत बमले प्रतिज्ञा गरेको हुँदा उनकै भनाइबमोजिम जङ्गबहादुरलाई मार्न भनी आएको हुँ भनी सबैको अगाडि स्वीकार गरेको कुरा पनि ओल्डफिल्डले उल्लेख गरेका छन्।[२२]

त्यसपछि जति पनि लेखकहरूले नेपालको इतिहासमा कलम चलाए तीमध्ये अधिकांश लेखकहरूले 'गगन सिंहको हत्यालाई' यसै परिप्रेक्ष्यमा प्रस्तुत गरेका छन्। त्यसमा कुनै-कुनैले एकाध कुरा नयाँ थप्नु बेग्लै हो। यस घटनालाई यसै परिप्रेक्ष्यमा प्रस्तुत गरेर पनि पद्मजङ्गले कार्य फत्य भएमा लालझालाई ३००० स्वर्णमुद्रा दिइने प्रलोभन पनि दिइएको बेहोरा उल्लेख गरेका छन्।[२३] यसरी नै विक्रमजित हसरतले पनि यस घटनासम्बन्धी विवरण प्रस्तुत गर्दा ओल्डफिल्डकै प्रस्तुतिसित मिलान हुने गरी प्रस्तुत गरे तापनि यो कुरा सुरेन्द्रविक्रम शाहले आफू राजा भएपछि बताएका थिए, जसको संपुष्टि पछि मृत्यु शय्यामा रहेका लाल झाको स्वीकृतिबाट भएको थियो भनी लेखेका छन्।[२४]

यही गगन सिंहको हत्यासम्बन्धी विवरण प्रस्तुत गर्ने प्रसङ्गमा बालचन्द्र शर्माले चाहिँ ओल्डफिल्डको उक्त भनाइ एवं पद्मजङ्गको ३००० स्वर्णमुद्रासम्बन्धी भनाइसमेत उल्लेख गर्नुको साथै संवत् १९८३ सालमा राणाशासनको विरोधमा भएको असफल विद्रोहमा

मारिएका व्यक्तिहरूमध्येका एक जना सङ्ग्रामसुर विष्टकी वृद्धा बहिनीबाट आफूले बाल्यकालमा सुनेअनुसार 'जङ्गबहादुरले नै स्त्रीको छद्मभेषमा गगनसिंहको छिमेकको छानामा उक्ली आँखी झ्यालबाट गोली ठोकी उनको हत्या गरेका हुन्' भन्ने पनि लेखेका छन् ।[२५] (स्मरणीय छ, गगनसिंहको हत्याराले स्त्रीको भेषधारण गरेको कुरा पद्मजङ्गले पनि उल्लेख गरेका थिए, तर त्यो भेष (जङ्गबहादुरले हैन, अपितु) लाल झाले धारण गरेका थिए भन्ने उनको भनाइ थियो ।[२६] (तर लाल झाले पछि गगन सिंहलाई आफूले मारेको हुँ भनी कायेल हुँदा स्त्रीभेषमा गएको कुराको उल्लेख गरेको देखिएन ।)

गगन सिंहको हत्याको सम्बन्धमा इतिहास-शिरोमणि बाबुराम आचार्यको भनाइ किञ्चित् भिन्न खालको रहेको पाइन्छ । लेख्न त उनले पनि गगनसिंहको हत्या छुल्याहा प्रवृत्तिका युवक लाल झाले नै गरेका थिए भनी लेखेका छन् । तर हत्या गर्नुपर्ने कारणको सम्बन्धमा भने उनको भनाइ यस्तो थियो– "...गगन सिंहले नै यिनलाई पहिले महारानी राज्यलक्ष्मीका छोरा राजकुमार रणेन्द्रको सेवामा पनि नियुक्त गराइदिएका थिए । मन्त्री बनेपछि गगनसिंहका छिमेकमा रहेका उदासहरूको उकबहाल नै उठाइदिएका थिए र पटाङ्गिनीको निम्ति अझै ठाउँ अपुग हुँदा झा ब्राह्मणहरूको केही थप घरहरू पनि उठाइदिने योजना गरिरहेका थिए । यसै सन्दर्भमा छिमेकी झा ब्राह्मणहरूसँग यिनको विरोध परिरहेको थियो र यसै विरोधले गर्दा यिनले लाल झालाई पनि रणेन्द्रको सेवाबाट निकालिदिएका थिए । यसै रिसिबिबाट लाल झा यिनको हत्याको निम्ति उद्यत भएका देखिन्छन् ।"[२७] यससम्बन्धमा बाबुराम आचार्यको थप अभिमत यस्तो पनि रहेको छ– 'यस हत्याकाण्ड (अर्थात् गगनसिंहको हत्याकाण्ड)को लगत्तै पछि रातमा घटेका घटनाहरूबाट पनि जङ्गबहादुरले नै बन्दुक र आवश्यक गोली-गट्ठाहरू उपलब्ध गराई लाल झालाई लगाएर गगनसिंहको हत्या गराएको झलक पाइन्छ ।[२८] गगनसिंहको हत्याको सम्बन्धमा यस्तो अभिमत व्यक्त गर्ने बाबुराम आचार्य यसभन्दा अगाडि यसै हत्याकाण्डलाई लिएर त्यसबखत प्रचलित अनुश्रुतिहरूलाई उल्लेख गर्न पनि भुल्दैनन् । एउटा अनुश्रुतिअनुसार 'जङ्गबहादुर कुँवर स्वयंले नै गुप्तभेषमा गएर गगनसिंहलाई गोली हानेका हुन्' भने अर्को

अनुश्रुतिअनुसार 'जङ्गबहादुर कुँवरले आफ्ना भाइ बद्रीनरसिंहलाई यस कामको निम्ति खटाएका थिए' भन्ने उनको भनाइ रहेको छ ।[२९] यसप्रकार माथि उल्लिखित बालचन्द्र शर्माको भनाइबमोजिम गगनसिंहको हत्यामा जङ्गबहादुरको सक्रिय संलग्नता थियो भनी आशङ्का गर्ने पहिलो व्यक्ति संग्रामसुर विष्टकी बहिनी देखिइन् भने अर्को व्यक्ति इतिहास-शिरोमणि बाबुराम आचार्य देखिए– चाहे त्यो हत्या जङ्गबहादुरले लाल झालाई गोली गट्ठा दिएर गरेका हुन् वा आफै गुप्तभेषमा गएर गरेका हुन् वा भाइ बद्रीनरसिंहलाई पठाएर गरेका हुन् । त्यसो त कोतको हत्याकाण्डमा घाइते भई मर्न लागेका अभिमानसिंह रानाले पनि 'गगनसिंहको हत्या जङ्गबहादुरले गरेका हुन्'भनी भनेका थिए भनी सबैजसो इतिहासहरूमा लेखिएको छ, त्यो बेग्लै कुरा भयो ।

अनि पसिर्भल ल्यान्डनले चाहिँ गगनसिंहको हत्या 'सुरेन्द्रविक्रम शाहहरूद्वारा प्रयुक्त हत्याराद्वारा नै भएको थियो' भनी उल्लिखित ओल्डफिल्डको भनाइप्रति नै आफ्नो सहमति जनाउनुको साथै 'यो हत्या गुप्तरूपमा जङ्गबहादुरले नै गरेका थिए' भन्ने अनुश्रुतिलाई भने अभिमानसिंहद्वारा निर्मित रमाइलो तर विश्वास गर्न नसकिने कथाको रूपमा लिएका थिए ।[३०] यस सम्बन्धमा पुरुषोत्तमशमशेरको निम्न भनाइ माथि उल्लिखित विभिन्न अभिमतहरूको एक प्रकारको सम्मिश्रण स्वरूपको भएर पनि किञ्चित् भिन्नै प्रकारको रहेको छ– "...वास्तवमा वि.सं. १९०३ भदौ २९ गते तदनुसार सन् १८४६ सेप्टेम्बर १२ तारिखका दिन प्रधानमन्त्री फत्यजङ्ग शाह र जनरल अभिमानसिंहले गगनसिंहको हत्या नै गर्नु पर्ने ठहराई जनरल जङ्गबहादुरलाई हत्या गर्ने जिम्मा सुम्पेको हुँदा जङ्गबहादुरले आफ्ना साहिंला भाइ कर्णेल बद्रीनरसिंहलाई गगनसिंहको हत्या गर्न लगाए ।"[३१]

यसप्रकार नेपालको इतिहासमा गगनसिंहको हत्याराको रूपमा तीन व्यक्तिहरूको नाम उल्लेख हुँदै आएको थियो र ती हुन्– (१) लाल झा, (२) बद्रीनरसिंह कुँवर र (३) जङ्गबहादुर कुँवर । मि.सु. रामभक्तको उक्त टिपोटअनुसार अब यो सूचीमा अर्को एउटा नाम पनि थप्नु पर्ने भयो ती हुन्– साही बद्रीनर्सिङ् । यी व्यक्तिहरूमध्ये जङ्गबहादुरको नाम उक्त हत्याका योजनाकारको रूपमा पनि प्रस्तुत

नभएको होइन । जहाँसम्म लाल झाको प्रश्न छ, गगनसिंहको हत्याराको रूपमा उनको नाम तात्कालिक चिठीपत्रहरूमा पनि उल्लेख भएको पाइन्छ जब कि जङ्गबहादुर एवं बद्रीनरसिंह कुँवरहरूको नाम अनुश्रुतिको रूपमा नै बढी प्रचलित रहेको पाइन्छ। कुनै पत्रमा भने साङ्केतिक रूपमा गगनसिंहको हत्या जङ्गबहादुरले गरेको भनी दोषारोपण गरेको पनि पाइएको छ। मि.सु. रामभक्तले भने आफ्नो रिपोटमा जङ्गबहादुरले साही बद्रीनर्सिङलाई पठाएर मार्न लगाए भनी स्पष्ट नै उल्लेख गरेका छन्।

काशीमा रहेका तात्कालिक महाराजाधिराज राजेन्द्रविक्रम शाहलाई तात्कालिक प्राइममिनिस्टर जङ्गबहादुर कुँवरले (संवत् १९०४) वैशाख सुदी १२ रोज ३ मा चढाएको अर्जीपत्रको प्रत्युत्तरको रूपमा राजाले संवत् १९०४ साल प्र.जेष्ठवदिको दिन सुगौलीबाट जङ्गबहादुरलाई लेखेको पत्रमा लाल झाको सम्बन्धमा यस्तो उल्लेख भएको छ– 'काजी जगद्‌वम पाँडेले लाल्या झा असवारिलाई जनरल गगनसिंहलाई मार्न्या काम वेस गरिछस् अब जंगबहादुरलाई दगा गरि आ भनि पठाउँदा ज्रांहा लाल्या झा आइ लाल्या झाको काएलनामा भई सर्वश्व संम भयाको तेरो अर्जि म (काशि) राजगर्दा आइपुगि जाहेर भएथ्यो । लाल्या झालाई कएद गरि कायल गराइ सर्वश्व हुन्या काम बहुतै ठिक निसाफ् भए छ भनि म खुषि भयाथ्याँ... ।'[३२] जङ्गबहादुरले यसरी लाल झा कायल भएको बेहोरा उल्लेख गरे तापनि कायलनामाको प्रतिलिपि भने पठाएको देखिँदैन, जबकि यसरी नै जङ्गबहादुरलाई मार्न भनी गुरुप्रसाद शाहले पठाएका चन्द्रवीर पुतवार अमल्दार बटलसिं गुरुङ् र सिपाही गम्भीर गुरुङ्हरूलाई ज्यानको बदला ज्यान सजाय दिएको बेहोरा लेखी पठाई पुनः अर्को अर्जीपत्रमा तिनीहरूले गरिदिएको कायलनामाको प्रतिलिपि पठाएको थिए भन्ने कुरा राजेन्द्रविक्रम शाहको उपर्युक्त पत्रबाट नै स्पष्ट हुन्छ। सायद यसैले होला लाल झाको सम्बन्धमा पहिले बहुतै ठीक निसाफ भएछ, खुसी भएँ भनी लेख्ने राजाले त्यसैको तलतिर त्यसै पत्रमा आफूले सोद्धा काजी जगद्‌वम पाँडेले "...मैले जनरल गगनसिंहलाई पनि दगा गर्न पठायाको छैन श्री जनरल जङ्गबहादुर कुँवरलाई पनि पठायाको छैन यस कुरामा लाल्या झा र दत्तुपाध्या जो आउँछ म जोरिन तयार

छु...”[३३] भनी भनेको कुरा लेखी जङ्गबहादुरको उक्त भनाइप्रति आशङ्का व्यक्त गरेको छ। गगनसिंहको हत्या लाल झाले गरे भन्ने कुरामा राजेन्द्रविक्रम शाहले यसरी घुमाउरो पाराले आशङ्का व्यक्त गरे तापनि महारानी राज्यलक्ष्मीदेवी शाहले भने त्यस कुरालाई स्पष्ट रूपमा नै अस्वीकार गरेकी थिइन्।

राजा राजेन्द्रविक्रम शाहले महारानी राज्यलक्ष्मीदेवी शाहलाई सुगौलीबाट (संवत् १९०४) वैशाख सुदी ६ रोज ३ का दिन लेखेको पत्रको प्रत्युत्तरमा महारानीले बनारसबाट संवत् १९०४ जेष्ठ वदी ५ रोज  मा लेखेकी पत्रमा उक्त कुरालाई यसप्रकार व्यक्त गरेकी थिइन्– '...जनरल गगनसिंलाई मार्न्या लाल झा ठहऱ्यो कायलनामा लेषि ३।४ दिन पछि आफ्ना कालले मऱ्यो भनि नेपालबाट षवर आयेछ भनि हजूर त्राहा राज हुँदै हजुरबाट हुकुम हुँदा लाल्या पाजिले मारी गगनसिं मर्छ (?) साना मानिसले मार्न सक्छन् गगनसिं (?) हुकुमले मारियाको हो भन्या जसका हुकुमले गगनसिं मारियो उसैका हुकुमले कोतमा भाइ-भारदार मारिया गगनसिंलाई विना हुकुम आफ्ना मौवसिले माऱ्याको हो भन्या जसले गगनसिंलाई आफ्ना मौवासिले माऱ्या कोतमा भाइ-भारदारलाई पनि मौवासिले उसैले माऱ्या हो भनी हजुरमा मैले विंति चह्लायाको पनि जाहेरै होला।'[३४] यहाँ मननीय कुरा के छ भने, महारानी राज्यलक्ष्मीदेवी शाहले एकातिर गगनसिंहको हत्या लाल झाले गरेका थिए भन्ने कुरा स्पष्ट रूपमा अस्वीकार गरेकी थिइन् भने अर्कोतर्फ, गगनसिंहको हत्या एवं कोतको हत्याकाण्डको निम्ति या त राजा राजेन्द्रविक्रम शाह जिम्मेदार छन् या जङ्गबहादुर भनी घुमाउरो पाराले तिनीहरूमाथि दोषारोपण पनि गर्न खोजेकी थिइन्। तर गगनसिंहको हत्यामा राजेन्द्रविक्रम शाहको सक्रिय संलग्नता थियो वा थिएन भन्ने कुरा अझै विवादग्रस्त भए तापनि उनको (अर्थात् गगनसिंहको) अवसान कुनै रूपमा भए हुन्थ्यो भन्ने राजाको आकाङ्क्षाचाहिँ थियो भन्ने कुरा नेपालको इतिहासहरूमा वर्णित तत्सम्बन्धी विवरणहरूबाट अनुमानसम्म गर्न सकिन्छ तापनि कोतको हत्याकाण्डको हकमा भने आजसम्म प्रकाशित तत्सम्बन्धी घटनावृत्तबाट राजेन्द्रविक्रम शाहलाई जिम्मेवार ठहराउन मिल्ने देखिँदैन। बरु आफ्ना प्रियपात्र जनरल गगनसिंहको आकस्मिक

हत्याको खबर सुन्नासाथै आवेशपूर्ण संवेदनाबाट अभिप्रेरित भै तत्कालै राती नै सारा भाइ भारादारलाई कोतमा जम्मा भै हत्यारा पत्ता लगाउनू भनी आदेश दिई कोतको हत्याकाण्डको निम्ति सम्भाव्य उपयुक्त वातावरणको सृजना गरिदिएबाट यस घटनाको निम्ति महारानी राज्यलक्ष्मीदेवी नै बढी जिम्मेवार थिइन् भन्न सकिन्छ ।

महारानी राज्यलक्ष्मीदेवी शाहको उक्त पत्रबाट गगनसिंहको विरोधमा षड्यन्त्र भइरहेको छ भन्ने विषयमा लाल झा पूर्णतया अनभिज्ञ भने थिएनन् भन्ने कुराको पनि उद्घाटन हुनगएको छ । महारानीले पत्रमा लेखेकी थिइन्– "...मातवर सिंकी आमा र विरकेशर पाँडेको दाह्निषडावामनको नाउँ मैले लियाको अर्थलाई र [श्री माहिला साहेबज्यू (अर्थात् उपेन्द्रविक्रम शाह)] का पोसाक कोठामा बसी रनध्वज ददाले र विरकेशर पाँडेले गगनसिंलाई भोट पुऱ्याउनु [श्री ५ कान्छा बडामहारानी (अर्थात् राज्यलक्ष्मी शाह)] लाई भोट पुऱ्याउनु [श्री साहिँला साहेबज्यू (अर्थात् रणेन्द्रविक्रम शाह)] र [श्री काँहिला साहेवज्यू (अर्थात् वीरेन्द्रविक्रम शाह)] लाई आंषा झिक्नु तेति भया मात्र समालिन्या छ भंन्या तवरले धेरै कुरा गर्छन् तेस सल्लाहमा दारिषडग वामन र मातवरसिंकि आमा पनि छन् भंन्या व्यहोराका लाल झाले भन्याका कुरा हजुरमा जाहेरै छ अकस्मात् जनरल गगनसिं मारियाको देषदा इनैका मतलवले हो कि भन्न्या चित्तमा शंका पर्दा ई चार जनालाई पक्रि पुर्पक्ष गरि ठहऱ्यो भन्या काट्नु मुड्नु नाक काट्नु भनि मैले भन्याको हो ।"[३५]

महारानी राज्यलक्ष्मीदेवीको उपर्युक्त बेहोराअनुसार यो प्रतीत हुन्छ– गगनसिंहको हत्याको प्रसङ्गमा लाल झालाई प्रयोग नै नगरिएको त होइन रहेछ, तर त्यो प्रयोग उनको हत्या गर्नमा होइन अपितु (भविष्यमा हुनसकिने) गगनसिंहको सम्भाव्य हत्याको सम्बन्धमा महारानीको ध्यान अरूतिरै मोड्नको निम्ति कर्ण-प्रदूषण गर्ने काममा प्रयोग गरिएको रहेछ । गगनसिंहको हत्यापश्चात् हत्यारा पत्ता लगाउने बहानामा महारानीमार्फत कोतमा हाजिर हुन डाकिएका मन्त्री, काजी एवं भाइ-भारादारहरू कोतमा जम्मा भएपछि महारानी राज्यलक्ष्मीदेवीले वीरकेशर पाँडेलाई तत्काल गिरफ्तार गर्नको निम्ति अभिमानसिंह रानााई आदेश दिनुमा लाल झाद्वारा गरिएको यही कर्ण-

प्रदूषणले कार्य गरेको थियो भन्ने स्पष्ट हुन्छ । साथै उक्त विवरणबाट यो पनि प्रश्न उठ्न सक्छ– यसरी राजदरबारभित्र माहिला साहेबज्यूको पोसाक-कोठासम्म पुग्न सक्ने र त्यहाँ भएगरेको भनी यस्तो गोप्य कुरा महारानीको कानसम्म पुराउन सक्ने क्षमता भएको व्यक्ति– लाल झालाई विभिन्न इतिहासहरूमा उल्लेख भएजस्तै 'एक नम्बरको फटाहा, हुल्याहा वा कुख्यात बदमाश' भनी भन्न मिल्ला र ? बरु यस सम्बन्धमा सबभन्दा पहिले कलम चलाउने एच्.ए. ओल्डफिल्डले उनीमाथि प्रयोग गरेको विशेषणअनुरूप उनी एक जना 'प्रख्यात षड्यन्त्रकारी एवं छुल्याहा प्रवृत्तिका धूर्त दुष्ट ब्राह्मण' थिए भनी मान्नु उपयुक्त हुन्छ कि ?[३६]

जहाँसम्म गगनसिंहको हत्यामा राजा राजेन्द्रविक्रम शाहको आदेश पाएर वा नपाईकनै (आफ्नो शक्ति वृद्धि हुन्छ भन्ने विश्वासमा) तात्कालिक मुख्तियार फत्यजङ्ग शाहले आफैले वा मन्त्रिमण्डलका सहयोगी मन्त्रीहरूको सहमतिमा लाल झालाई प्रयोग गरेका थिए भन्ने कुरा छ, यदि त्यो सही हुँदो हो त काम फत्य भएपछि उनले किन भाग्नुपरेको थियो ? कतै स्पष्ट छैन । न त पद्मजङ्गले लेखेजस्तै उनले ३००० स्वर्ण मुद्रा पाएको कतैबाट खुल्न आउँछ । अनि गगनसिंहले घरको पटाङ्गिनी बढाउन केही झा ब्राह्मणहरूको घरजग्गा लिने योजना बनाइरहेको भन्ने कुराको भरमा मात्र उनको हत्या गर्नमा लाल झा उद्यत भए भन्ने भनाइ पनि कतिको विश्वासनीय छ, गगनसिंहको शक्ति अक्कासिएको त्यस जमानामा ? त्यसरी नै बेतिया पुगेका लाल झा जगतबम पाँडेबाट पदोन्नति गरिदिने प्रतिबद्धता पाएर जङ्गबहादुरको हत्या गर्न आएको भन्ने भनाइ पनि सहजै विश्वास गर्न सकिने खालको देखिँदैन, किनभने आफै भागेर निर्वासनमा रहेका जगतबमबाट के-कस्तो पदोन्नतिको आशा गरेर उनी आए होलान्– त्यो पनि कोतपर्व र भण्डारखालपर्वसमेत सम्पन्नभै राजा रानी दुवै काशी प्रस्थान गरिसकेपछि जङ्गबहादुर सर्वेसर्वा भैसकेको अवस्थामा ? विचारणीय छ, यद्यपि यो कुरा जङ्गबहादुरले आफ्नो पत्रमा उल्लेख गरेकै किन नहोस् !

अर्को विचारणीय कुरा के छ भने आफ्नो हत्या गर्न भनी गुरुप्रसाद शाहले पठाएका बदलसिं गुरुङ्हरूलाई ज्यानको बदला ज्यान

भनी राजालाई (अर्थात् सुरेन्द्रविक्रम शाहलाई) बिन्ती गरी ज्यान मार्ने जङ्गबहादुरले जगतबम पाँडेले आफूलाई मार्न भनी पठाएका भनिएका लाल झालाई केवल सर्वश्वहरणसम्म गरी राख्नुको अर्थ के होला ? उनी कायल भएको ३।४ दिनमै मरेको हुनाले उनलाई सजाय गर्न भ्याएन वा परेन भनी एकक्षणलाई मानूँ भने पनि उनका मतियार भनिएका सिद्ध दत्तु पाध्याहरूलाई पछि के-कस्तो सजाय गरियो थाहा हुन सकेन । राजा राजेन्दंविक्रमलाई जङ्गबहादुरले लेखेको उपर्युक्त पत्रमा उनले लाल झा आफूलाई मार्न भनी आएको बेहोरा उल्लेख गरे तापनि त्यसैताका उनले गगनसिंहका छोरा जनरल वजिरसिंहलाई लेखेको पत्रमा भने लाल झा आफूलाई मार्न आएको भन्ने कुराको केही उल्लेख नगरी केवल गगनसिंहको हत्यामा उनी कायल भएको र त्यसको ३।४ दिनपछि आफ्नै कालगतिले मरेको कुरासम्म उल्लेख गरेका थिए । जङ्गबहादुरले वजिरसिंहलाई (संवत् १९०३) चैत्रसुदि २ रोज ५ का दिन लेखेको पत्रको प्रत्युत्तरमा वजिरसिंहले जङ्गबहादुरलाई संवत् १९०४ वैशाख सुदि ११ रोज १ का दिन लेखेको पत्रमा यस्तो उल्लेख भएको छ– '...तिम्रा बाबालाई मार्न्या लाल झा सवारि रहेछ उसलाई पक्रन पठाई षारषेर गर्दा उसै कुरा कहेन र (श्री ५ सर्कार) मा विन्ती पारी कुँभेदानि दि फुल्याइ सोधपुछ गर्दा मैले ३ जना मानिससँगमा ली आफु छ्यानामा गै बन्दुक चल्याई मार्न्या म हुँ भनि कायेल भै उस्का ३।४ दिन पछि आफ्ना कालले मर्‍यो उसको धनमाल सर्वस्व भयो...(आदि) ।[३७]

यहाँ लाल झालाई कायल गराउन 'कुम्भेदानी' पद प्रदान गरेको बेहोरा पनि मननीय छ । यसभन्दा अगाडि कुनै पनि व्यक्तिलाई अपराध स्वीकार गराउन यसरी पद प्रदान गरेको सुनिएको थिएन । यसकारण, गगनसिंहको (सम्भाव्य) हत्याको प्रसङ्गमा महारानी राज्यलक्ष्मीदेवीको ध्यान अरूतिर मोड्नको लागि लाल झाले खेलेको माथि उल्लिखित 'कर्णप्रदूषण' सम्बन्धी भूमिकाको लागि घुमाउरो पाराले दिइएको पारितोषिक त होइन यो ? अनि लाल झा काठमाडौँबाट गएको सम्बन्धमा पनि इतिहासकारहरूको भनाइमा समानता पाइँदैन । यस सम्बन्धमा ओल्डफिल्डको भनाइ लाल झा गगनसिंहको हत्याको परिणामबाट अन्योलमा परी भागे भन्ने थियो[३८]

भने पद्मजङ्गको भनाइचाहिँ उनी हत्या भएकै रात तल मूलढोकानिर तयार राखिएको घोडा चढी भागे भन्ने थियो ।[३९] तर कोतको हत्याकान्डको करिब छ महिनापछि अर्थात् सन् १८४७ साल मार्च १८ तारेखका दिन तात्कालिक बृटिश रेजिडेन्ट मेजर थोर्सवीले आफ्नो सरकारलाई पठाएको पत्रको साथ कोतपर्वको सम्बन्धमा कुनै अज्ञात व्यक्तिले नेपाली भाषामा तयार पारेको विवरणको अङ्ग्रेजी अनुवाद पनि संलग्न गरी पठाएका थिए, जसमा लाल झा विदेसिएको सम्बन्धमा यस्तो लेखिएको थियो– 'कोतको हत्याकाण्डको भोलिपल्ट विहान जनरलले (अर्थात् जङ्गबहादुरले) महारानीलाई हनुमानढोका दरबारतर्फ लिएर गए । उनीहरू अदालतनिर पुग्दा त्यसका सरदार कनकसिंह महतले 'राती गस्ती गरिरहेका सुरक्षाकर्मीहरूले शङ्कास्पद ठानी २२ जना व्यक्तिहरू पक्रेका थिए, तीमध्ये एक जना लाल झा पनि छन् भनी रिपोर्ट गरे । महारानीको हुकुमबमोजिम जङ्गबहादुरले तिनीहरूलाई नगरबाट निष्कासन गर्नू भनी आदेश दिए ।[४०] यस विवरणबाट लाल झा आफै भागेका हुन् वा केही उद्देश्यवश भगाइएका हुन् ? प्रश्न उठ्न नसक्ने हैन । विपक्षी क्याम्पमा घुसाउन आफ्नो मानिसलाई आरोप लगाएर निष्कासन गरिएका घटनाहरू विश्व-इतिहासमा प्रशस्त छन् ।

यसप्रकार गगनसिंहको हत्याको आरोप लगाइएका लाल झाको सम्बन्धमा विभिन्न कुराहरू प्रकाशमा आएको र उनको छिट्टै मृत्यु भयो भनी भनिएको परिप्रेक्ष्यमा 'लाल झा पहिलेदेखि नै बदनाम भएकाले गगनसिंहको हत्याको अपराध पनि उसैको थाप्लोमा हालियो' भन्ने बालचन्द्र शर्माको भनाइ विचारणीय देखिन्छ ।[४१] यसरी नै कोतको हत्याकाण्डपछि जङ्गबहादुरको स्थिति मजबुत हुनुको साथै महारानी राज्यलक्ष्मीको इच्छाअनुरूप उनका छोरा रणेन्द्रविक्रम शाहलाई राजगद्दी दिलाउने कार्य गर्नमा जङ्गबहादुरले आलटाल गर्दै गरेको र यसबाट महारानीको मनमा उनीप्रति आशङ्का हुन थालेको परिस्थितिको विश्लेषणको प्रसङ्गमा व्यक्त गरिएको इतिहास-शिरोमणि बाबुराम आचार्यको यो भनाइ पनि मननीय छ– 'जनरल गगनसिंह भण्डारीको हत्या जङ्गबहादुर कुँवरले नै गराएका हुन् भन्ने कुरा अब घामजस्तै छर्लङ्ग भैसकेको थियो ।'[४२]

हुन त त्यस बखतको नेपालको राजनैतिक (अरु भनूँ उच्च प्रशासनिक) ध्रुवीकरणअनुसार तात्कालिक मुख्तियार फत्यजङ्ग शाह, अभिमानसिंहहरू आदि राजा राजेन्द्रविक्रम शाह (एवं युवराज सुरेन्द्रविक्रम शाह) को पक्षमा तथा गगनसिंह र जङ्गबहादुर कुँवर महारानी राज्यलक्ष्मीदेवी शाहको पक्षमा रहेको त्यस परिस्थितिमा जङ्गबहादुरले गगनसिंहको हत्या गरेर (वा गराएर) फत्यजङ्ग शाहहरूको गुटलाई बलियो बनाउने कार्य कसरी गरे होलान् भन्ने कुनै कुनै इतिहासकारको भनाइ नरहेको हैन । किन्तु जङ्गबहादुर कुँवरको चरित्र, स्वभाव एवं गतिविधिको सूक्ष्म अध्ययनबाट यस सम्बन्धमा बेग्लै चित्रण पस्तुत हुन आउँछ । जङ्गबहादुर कुँवर महत्त्वाकाङ्क्षी हुनुका साथै उनी अत्यन्त चतुर पनि थिए । उनी महारानीलाई सुरक्षित संरक्षिका होइनन् भनी सोच्तथे, तथा महारानीको संरक्षकत्वलाई कुनै विशेष परिमित प्रयोजनको निम्ति प्रयोग गर्न त सकिन्छ तर तिनीलाई नै शक्तिको एकमात्र आधार मान्नु खतरापूर्ण हुनेछ भन्ने उनले बुझेका थिए भनी उनको चरित्रको सम्बन्धमा नेपालमा आफ्नो कार्यकाल बिताइसकेका त्यस बखतका तीन जना बृटिस रेजिडेन्टहरूको धारणा एवं रेजिडेन्सीमा प्राप्त तत्सम्बन्धी विभिन्न चिठी-पत्र आदिको आधारमा लुड्विग स्टोरले गरेको विश्लेषण समीचीन देखिन्छ। साथै उनी (राज्य) लक्ष्मीदेवी एवं गगनसिंहले आफ्नो लागि के-कति गर्न सक्छन् त्यो गराउनचाहिँ सक्नुपर्छ तर उनीहरूको खेलमा आफू फस्नु भने हुँदैन भन्ने सोचाइ राख्तथे भन्ने पनि लुड्विगको भनाइ रहेको छ र यसलाई अतिशयोक्ति भन्न मिल्दैन।[४३]

यस प्रकारको तात्कालिक राजनैतिक परिदृश्यमा अत्यन्त गोप्य रूपमा गगनसिंहलाई राजनैतिक मञ्चबाट पन्छाउन सकेमा त्यसबाट उत्पन्न हुने अप्रत्याशित परिस्थितिबाट आफूले राजनैतिक फाइदा लिने अवसर प्राप्त गर्न सकिन्छ होला भनी जङ्गबहादुरले दीर्घकालिक युद्ध-नीतिको तर्जुमा गरेका थिए भनी अनुमान गर्नु अस्वाभाविक हुने छैन। यस पृष्ठभूमिमा गगनसिंहको हत्यामा जङ्गबहादुरको भूमिकालाई नकार्न सकिँदैन । साथै उनले त्यस्तो काम लाल झालाई सुम्पँदैनथे भन्ने इतिहासकार त्रिरत्न मानन्धरको टिप्पणी समीचीन देखिन्छ।[४४] किन्तु प्रधानमन्त्री फत्यजङ्ग शाह र जनरल अभिमान सिंहले गगनसिंहको

हत्या नै गर्नुपर्ने ठहराई जनरल जङ्गबहादुरलाई हत्या गर्ने कार्य सुम्पेको भन्ने माथि उल्लिखित अर्का इतिहासकार पुरुषोत्तमशमशेरको भनाइचाहिँ समीचीन देखिँदैन, कारण पहिलो कुरा, यस्तो अह्रौटे कार्य गर्नाले जङ्गबहादुरको व्यक्तित्वको अवमूल्यन हुने देखिँदा उनीहरूले अह्राएकै भरमा जङ्गबहादुरले त्यो काम किन गर्थे ? अर्को कुरा त्यसबखत महारानी राज्यलक्ष्मीदेवी र गगनसिंहको गुटको व्यक्ति भनी चर्चित जङ्गबहादुरलाई उनीहरूले यस्तो कुरा गर्न कसरी सक्थे ? त्यसो भए तापनि 'जङ्गबहादुरले आफ्ना साहिँला भाइ कर्णेल बद्रीनरसिंहलाई गगनसिंहको हत्या गर्न लगाए' भन्ने उनको भनाइलाई त्यसबेला नै प्रचारमा आएको जनश्रुतिअनुसार सकारात्मक रूपमा लिन सकिन्छ भने अहिले आएर मि.सु. रामभक्तको टिपोटअनुसार यसलाई सत्यको समीप पुगेको मान्न सकिन्छ । जहाँसम्म माथि उल्लिखित 'यी ५ जनाका ४ टिपोटहरू पढ्दा जङ्गबहादुरलाई महाराज हुनेभन्दा पहिले देख्ने एक जना रामभक्त मात्रै हुन् कि जस्तो लाग्छ' भन्ने कमल दीक्षितको भनाइ छ। त्यसलाई मेरा पिताज्यू स्व. सर्दार मेदिनीप्रसाद राजभण्डारीको संकलनमा रहेको एउटा अप्रकाशित पत्रबाट सम्पुष्टि गर्ने काम गरेको छ । भण्डारखालपर्वपछि निष्कासनमा परेकी महारानी राज्यलक्ष्मीदेवी शाहसित काशी गएका तात्कालिक महाराजाधिराज राजेन्द्रविक्रम शाह आफूले फर्कन्छु भनी वाचा गरेको अवधिभित्र नेपाल नफर्कनुको साथै निमकहलाल प्राइममिनिस्टर जङ्गबहादुरको हत्या गर्न हत्याराहरू पठाएको भन्ने विभिन्न कारणहरू दर्साई उनलाई गद्दीच्यूत गरी संवत् १९०४ साल प्रथम ज्येष्ठवदि १३ रोज ४ का दिन तात्कालिक युवराज सुरेन्द्रविक्रम शाहलाई गद्दीमा आरोहण गराएको बेहोरा उल्लेख गरी राजेन्द्रविक्रम शाहसमक्ष पठाइएको अर्जीपत्रमा त्यसबखतका गुरु-प्रोहित भाइभारादार एवं अन्य सकल दर्जाका गरी ५२३ जना राष्ट्रसेवकहरूले दस्तखत गरी पठाएका थिए ।[४५]

यसरी पठाइएको नामावलीको नं १६१ मा 'षरदार रामभक्त पंडित' भनी लेखिएको हुनाले यसबाट उपर्युक्त कमल दीक्षितको भनाइको सम्पुष्टि हुनुको साथै त्यसबखत उनी खरदार जस्तो पदमा पुगेको व्यक्ति हुँदा उनी एक जना समकालिक घटनावलिका ज्ञाता

थिए भन्ने कुरामा आशङ्का गर्न मिल्दैन। (स्मरणीय छ, त्यसबखत खरदारको पद कुनै अदालत वा कार्यालयको कार्यालय-प्रमुख हुने गरेबाट त्यो पदलाई वर्तमान प्रशासनिक तहको आधारमा हेर्न उपयुक्त हुँदैन)। यस परिप्रक्ष्यमा रामभक्तले माथि उल्लिखित आफ्नो टिपोटमा गगनसिंहको हत्या बद्रीनरसिंहद्वारा गराइएको भनी स्पष्टरूपमा उल्लेख गरेबाट अब उक्त घटनालाई अनुश्रुतिको रूपमा मात्र हैन, तथ्यपूर्ण रूपमा नै मान्नुपर्ने देखिन आउँछ।

तर, *नेपाली* (त्रैमासिक) पत्रिकामा प्रकाशित रामभक्तको टिपोटमा गगनसिंहको हत्या गर्न जङ्गबहादुरले पठाएको व्यक्तिको नाम 'साही बद्रनर्सिङ्' भनी उल्लेख भएबाट केही भ्रम उत्पन्न हुन गएको छ। प्रचलित एउटा अनुश्रुतिअनुसार (एवं पुरुषोत्तमशमशेरको भनाइ अनुसार पनि) त्यस व्यक्तिको नाम 'जङ्गबहादुरको भाइ बद्रीनरसिंह' थियो भने यहाँ रामभक्तको टिपोटमा 'साही बद्रनर्सिङ्' भनिएको छ। अब त्यसबखत 'साही बद्रीनरसिंह (वा बद्रीनरसिंह शाही) नामका कुनै व्यक्ति थिए कि थिएनन् भनी खोजी हेर्दा माथि उल्लिखित सुरेन्द्रविक्रम शाहलाई गद्दी आरोहण गराएको सम्बन्धको अर्जीपत्रमा सही गर्ने ५२३ व्यक्तिहरूमा यो नामको व्यक्ति कोही देखिएन तर काजी बद्रीनरसिंह कुँवर भन्ने नामचाहिँ थियो। त्यसरी नै कोतपर्व एवं भण्डारखाल-पर्वमा मारिएका वा ती घटनाहरूमा प्रकाशित नामावलीमा पनि यो नामको व्यक्ति देखिएन।[४६] कोतपर्व हुनुभन्दा करिब ६ वर्ष अगाडि संवत् १८९७ सालमा नेपाल एवं बृटिस कम्पनी सरकारको मैत्री सम्बन्धलाई लिएर नेपालका तात्कालिक गुरु-प्रोहित भाइभारादारहरूले सही गरेर बृटिस रेजिडेन्टको नाममा पठाएको पत्रमा उल्लिखित ७३ जना व्यक्तिहरूको नामावलीमा पनि यो नामको व्यक्ति देखिएन।[४७] त्यतिमात्र हैन, उपर्युक्त सम्पूर्ण नामावलीमा उल्लिखित व्यक्तिहरूको नाममा कसैको नाममा पनि रामभक्तको टिपोटमा 'साही बद्री नर्सिङ्' लेखेजस्तै नामको अगाडि थर लेखिएको देखिएन, अपितु सबै व्यक्तिहरूको आ-आफ्नो थर नामको पछाडि नै लेखिएको पाइयो। अतः उक्त टिपोटमा मात्र थर अगाडि पर्ने गरी कसरी 'साही वद्री नर्सिङ्' लेखिन गयो होला भनी विचार गर्दा उक्त टिपोटहरू *नेपाली* पत्रिकाका सम्पादक महोदयलाई प्राप्त हुँदा तिनीहरूको सकलप्रतिहरू नै प्राप्त

भएको हो वा होइन, थाहा पाउनु आवश्यक हुन आउँछ। अनि यस सम्बन्धमा सम्पादकको भनाइ "...सारिएका कुनै न कुनै रूपमा आज हामीलाई यस्ता पाँच जनाको मन्तव्य प्राप्त छ"[४८] भन्ने भएबाट स्पष्ट हुन्छ उनलाई प्राप्त भएका टिपोटहरू सकलप्रति नभै तिनीहरूका प्रतिलिपिहरू मात्र हुन्। अतः उक्त टिपोट सार्ने व्यक्तिले रामभक्तको टिपोटमा रहेको वाक्यांश सार्दा '...भाइ वद्री नर्सिङ्' भनी सार्नुपर्छ। माथि उल्लिखित विभिन्न समयका सयौँ भाइभारादारहरूको नामावलीमा साही बद्रीनरसिंह (वा बद्रीनरसिंह शाही) भन्ने नामको व्यक्ति नभेटिएको मात्र हैन यी नामावलीमा उल्लिखित व्यक्तिहरू कुनैको पनि 'थर' नामको अगाडि नलेखिएको परिप्रेक्ष्यमा समेत विचार गर्दा रामभक्तले 'भाइ वद्री नर्सिङ्लाई पठाइ' भनी लेखेकोमा प्रतिलिपि सार्ने व्यक्तिले गल्तीले 'साही वद्री नर्सिङ्लाई पठाई' सारेको भन्ने कुरा पुष्टि भै यससम्बन्धी भ्रमको निवारण हुन आउँछ।

अब गगनसिंहको हत्याको प्रकरणमा जङ्गबहादुर र उनका भाइ बद्रीनरसिंहको संलग्नतासम्बन्धमा इतिहासकार डा. त्रिरत्न मानन्धरको असहमतिको सम्बन्धमा सङ्क्षिप्त चर्चा गरौँ। उनले लेखेका छन्– "माथवरसिंहको हत्या आफूले गरेको कुरा जङ्गबहादुरले कैयन्पल्ट स्वीकार गरेका थिए। तर गगनसिंहको हत्याको जिम्मेवारी जङ्गबहादुरले कहिल्यै आफूमाथि लिएनन्। यदि जङ्गबहादुरले नै गगनसिंहको हत्या गरेको भए आफू शक्तिमा आइसकेपछि उनले सो कुरालाई सजिलै स्वीकार गर्न सक्तथे।"[४९] यसरी नै बद्री नरसिंहको संलग्नतासम्बन्धमा उनको मत यस्तो रहेको छ– "...बद्रीनरसिंहको हातबाट गगनसिंहको हत्या गराए भन्ने बाबुराम आचार्यको तर्कलाई पनि मान्न सकिँदैन किनकि वि.सं. १९०७ मा आफूमाथि षड्यन्त्र गरेको आरोपमा जङ्गबहादुरले बद्रीनरसिंहलाई कैद गर्न भारत पठाएका थिए। त्यसबेला बद्रीनरसिंहले पोल अवश्य खोल्थे।"[५०]

जहाँसम्म माथवरसिंह थापाको हत्याको प्रश्न छ, त्यो काम जङ्गबहादुरले राजाको हुकुमबमोजिम गरेको हुनाले उनले यो कार्यलाई आफ्नो 'राजभक्ति एवं राजाप्रतिको बफादारी'को प्रमाणको रूपमा प्रयोग गरेका थिए। हुन त कतिपय इतिहासकारले जङ्गबहादुर यो

कुरा आफू पूर्णरूपमा शक्तिशाली भैसकेपछि एवं बेलायतबाट फर्केपछि मात्र स्वीकार गरेका थिए भनी लेखेका छन् ।[५१] तर यो सही देखिँदैन । संवत् १९०४ प्रं जेष्ठवदि १३ रोज ४ का दिन सुरेन्द्रविक्रम शाहलाई राज्यारोहण गराएको सम्बन्धमा गद्दीच्यूत गरिएका राजा राजेन्द्रविक्रम शाहलाई पठाएको अर्जीपत्रमा यो घटनाबारे यस्तो उल्लेख गरिएको थियो (जुन पत्रको उल्लेख माथि पनि भइसकेको छ):– "...छाउनीमा हजुरलाई कैद गरि थुन्छु भन्या कुरामा र ७ षुन माफ दियाका १६ मानिस काट्याका कुरामा (श्री माहिला साहेवज्यू अर्थात् उपेन्द्रविक्रम शाह) जस्ता राजा म जस्ता बजीर भया गर्दा हूं भन्या कुरामा तवेलामा माथवरिसिं थापाले ई भनि संधिमा हात लगाइ देषायो येसलाई मारिदे भंन्या हुकुम हुँदा हुकुमबमोजिम आफ्ना मामा हो भनी भन्दामा पसेनन् मार्‍या येसमा पनि यिनको (अर्थात् जङ्गबहादुरको) निमक हलालै देषियो... ।"[५२]

तर गगनसिंहको हत्याको सम्बन्धमा भने यसरी सीधै स्वीकार गर्न जङ्गबहादुरलाई विभिन्न कारणवश सजिलो थिएन । पहिलो कुरा त गगनसिंहको हत्या गर्नू भनी उनलाई तात्कालिक राजा राजेन्द्रविक्रमले सीधै हुकुम दिएको देखिँदैन भने महारानी राज्यलक्ष्मीदेवीले दिने कुरै भएन । दोस्रो कुरा, बाह्यरूपमा मात्रै किन नहोस्, त्यसबखत जङ्गबहादुर महारानी एवं गगनसिंहका पक्षका व्यक्ति भनी चर्चित व्यक्ति हुनाले त्यस अवस्थामा उनले गगनसिंहको हत्या आफूले गरेको भनी उद्घोष गर्नु कृतघ्नतापूर्ण कार्य हुन जाने थियो । त्यतिमात्र हैन, त्यसबखत जङ्गबहादुर र गगनसिंहको बीचमा आपसमा द्रोह गर्नेछैनौँ भनी धर्मपत्र पनि भएको रहेछ (जङ्गबहादुरको धूर्त स्वभावप्रति सशङ्कितभै कतै गगनसिंहले नै धर्मपुत्र गर्न प्रेरित गरेका त हैनन् ? असम्भव छैन) । जेहोस् तिनीहरूको बीचमा यस्तो धर्मपुत्र भएको रहेछ र यस विषयमा (संवत् १९०३ साल) चैत्रसुदि २ रोज ५ का दिन जङ्गबहादुरले आफूलाई लेखेको पत्रको प्रत्युत्तरको रूपमा संवत् १९०४ साल वैशाखवदि ११ रोज १ का दिन गगनसिंहका छोरा जनरल वजिरसिंहले जङ्गबहादुरलाई लेखेको पत्रमा पूर्व पत्रमा उल्लिखित उनको भनाइलाई यसप्रकार उद्धृत गरिएको पाइएको छ– "...अघि तिम्रा बाबा र मेरो बहुतै दोस्ती प्रीतिभै तिम्रा जीय धनमा

मैले नलाग्नु मेरो जीयधनमा तिमीले नलाग्नु भंन्या हामी २ को धर्मपत्र भयाको हो सो धर्मपुत्र हुनाले तिम्रो धन-दौलथ सबै जोगाइ दियाको हो सो तिमिहरूलाई थाहा होला तिम्हेरु नभाग्याका भया तिम्रा जागिर पनि थामिन्नै थियो भागनाले गयो त पनि तिमिले कौनै कुराको सन्देह मान्नु पर्दैन... भनि लेषनु भयाको अर्थलाई बहुत बढिया लेषि पठाउनु भयेछ... ।"[५३] यस्तो परिस्थिति रहेको त्यसबेलामा जङ्गबहादुरले सार्वजनिकरूपमा गगनसिंहको हत्या आफूले गरेको वा गराएको भनी स्वीकार गर्ने प्रश्न नै उठ्दैन, कारण यसबाट सबको दृष्टिमा उनी धर्मपत्रमा नअड्ने पातकी एवं विश्वासघाती ठहरिने थियो । अतः आफ्नो चरित्रमाथि त्यसप्रकारको आक्षेप लाग्ने गरीकन उनलाई त्यस हत्याको आफूले जिम्मेवारी लिनै किन नपरेको थियो, जबकि त्यसप्रकारको स्वीकृतिविना नै आफ्नो स्वार्थपूर्तिमा कुनै अवरोध आएको छैन भने ?

बद्रीनरसिंहको हकमा पनि यस विषयमा मुख खोलेर जङ्गबहादुरको बदनाम गर्न त्यस्तै प्राविधिक कारणबाट अपठ्यारो पर्न गएको देखिन्छ । कुनै (अज्ञात) कारणवश जङ्गबहादुरले आफ्ना भाइ बद्रीनरसिंहलाई जागिर खोस्ने र थुन्नेजस्तो सजाय गरे तापनि उनको परिवारको पालन-पोषणमा जङ्गबहादुर सकारात्मक थिए भनी मान्नुपर्छ, बद्रीनरसिंहका दस वर्षका नाबालक छोरा केदारनरसिंहलाई पाल्पाको गभर्नर बनाएर पठाएको देख्ता ।[५४] यसर्थ आफ्ना जहान-छोराछोरीको बिचल्ली नहोस् भनेर पनि बद्रीनरसिंह यस विषयमा मौन रहन सायद बाध्य थिए। उनको यसै मौनताले गर्दा नै होला संवत् १९११ सालमा जङ्गबहादुरले आफ्ना माहिला भाइ बमबहादुरलाई 'मिनिष्टर'को उपाधि तथा अन्य भाइहरू कृष्णबहादुर र रणेद्दीपसिंहलाई 'कम्याण्डर इन्चीफ'को दर्जा दिँदा छोरासित पाल्पा गएका बद्रीनरसिंहलाई पनि कम्याण्डर इन्चीफको दर्जा दिएका थिए।[५५] यसरी नै पछि गएर राणाशासनमा रोलप्रथाको प्रारम्भ भएपछि जङ्गबहादुरले बद्रीनरसिंहलाई रोलमा समावेश नगरे तापनि उनका छोराहरू केदारनरसिंह ध्वजनरसिंह, आदिलाई रोलमा समावेश गरेका थिए।[५६] यसबाहेक आफ्नो पारिवारिक कलह नहोस् भन्ने कारणबाट पनि यससम्बन्धमा बद्रीनरसिंह मौन रहन बाध्य थिए भन्न सकिन्छ, कारण संवत् १९०३ सालतिर उनी

गगनसिंहकी छोरीसित प्रणय-कार्यमा लागेका थिए भने पछि तिनैसित बिहै भै. तिनीबाट कुमारनरसिंह किशोरनरसिंह नामका छोराहरू जन्मेका थिए ।[५७]

यसरी नै कोतको हत्याकाण्डको सम्बन्धमा पनि जङ्गबहादुको भूमिकालाई नकार्न सकिँदैन । यस विषयमा 'कोतको हत्याकाण्ड गराउने जङ्गबहादुर हुन् । यसको लागि उनलाई धेरै पटक आरोप लगाइएको र उनले यसको खण्डन कहिल्यै गरेनन्, उनले अस्वीकार गरेको भनेका, त्यो पनि बारम्बार, हत्याको जिम्मेवारी सम्बन्धमा हो । त्यो जिम्मेवारी उनले दृढतापूर्वक नै महारानीतर्फ पन्छाएका थिए' भन्ने लुडविग स्कोलरको भनाइ सकारात्मक देखिन्छ ।[५८] यही जिम्मेवारी पन्छाउने कुरा जङ्गबहादुरले (संवत् १९०४) प्रथम ज्येष्ठ वदि ४ रोज ३ का दिन तात्कालिक महाराजधिराज राजेन्द्रविक्रम शाहलाई पठाएको पत्रमा लेखेका थिए, जुन कुरा त्यस पत्रको प्रत्युत्तरस्वरूप संवत् १९०४ साल प्रथम ज्येष्ठवदि १२ रोज ३ का दिन सुगौलीबाट राजा राजेन्द्रविक्रम शाहले जङ्गबहादुरलाई पठाएको पत्रमा यसप्रकार उल्लेख गरिएको छ– "...जङ्गबहादुरले कोतपर्वमा भारादारहरूलाई मरायो भन्ने हुकुम हुन्छ अरे (श्री ५ वडाकान्छा महारानी)को हुकुमबमोजिम गर्नु भंन्या हजुरबाट र (श्री ५ महाराजधिराज) बाट हुकुम बक्स्याको हुनाले (श्री ५ वडामहारानी) का हुकुमबमोजिम कोतपर्वमा भारादार मऱ्याका हुन् ।"[५९] जङ्गबहादुरको यस भनाइबाट स्पष्ट सङ्केत मिल्दछ– मार्ने काम मैले गरेको भए पनि हुकुम दिने काम महारानीले गरेको हो, जसको हुकुम मान्नू भनी यहाँहरूले (अर्थात् राजा राजेन्द्र तात्कालिक युवराज सुरेन्द्रले) नै आदेश दिएका थिए । अत: यसको प्रत्यक्ष जिम्मेवारी महारानी राज्यलक्ष्मी शाहको हो भने परोक्ष जिम्मेवारी उनको हुकुम मान्नू भनी हुकुम दिनेहरूको हो (तर मेरो अर्थात् जङ्गबहादुरको होइन)

अन्तमा, आफ्ना भाइ बद्रीनरसिंहलाई पठाएर गगनसिंहको हत्या गराएर त्यसको परिणामस्वरूप हुनगएको कोतको हत्या काण्डमा आफ्ना सबैजसो प्रतिद्वन्द्वी विरोधीहरूलाई समाप्त गरेर जङ्गबहादुरले नेपालको मुख्तियारी हत्याएका हुन् भन्ने त्यसैबेलादेखि प्रचलनमा आएको जनश्रुतिलाई समकालिक व्यक्ति (त्यसबखत खरदारपछि मि.सु.)

रामभक्तको टिपोटको आधारमा सही हुन सकिने किसिमबाट घटनाको विश्लेषण गरिए पनि उनको मन्तव्य नै यसको निम्ति ठोस प्रमाणको रूपमा मान्न मिल्दैन, तर पनि कहिलेकाहीँ कुनै कुनै कुराको निर्णय अप्रत्यक्ष प्रमाण वा अनुमान-प्रमाणको भरमा पनि गर्नुपर्ने स्थितिलाई भने नकार्न सकिँदैन । अतः– "...इतिहासको अदालतमा कतिपय कुराहरू केवल अप्रत्यक्ष प्रमाणको आधारमा पनि निर्णय हुने गरेको छ..."[६०] भन्ने इतिहासकार लुड्विग स्टीलरको भनाइ समीचीन देखिन्छ ।

## टिप्पणी

१ *नेपाली* (त्रैमासिक) अङ्क ७६, पृष्ठ ४३

२ *नेपाली* (त्रैमासिक) अङ्क ७६, पृष्ठ ४४

३ *नेपाली* (त्रैमासिक) अङ्क ७६, पृष्ठ ४४

४ *नेपाली* (त्रैमासिक) अङ्क ७६, पृष्ठ ५८

५ *नेपाली* (त्रैमासिक) अङ्क ७६, पृष्ठ ५८ र ६५ पनि

६ *नेपाली* (त्रैमासिक) अङ्क ७६, पृष्ठ ६५

७ चित्तरञ्जन नेपाली, *श्री ५ रणबहादुर शाह* (प.सं.) पृष्ठ १४२-१४७

८ चित्तरञ्जन नेपाली, *केही ऐतिहासिक निबन्धहरू*, पृष्ठ २३१-२३१

९ *नेपाली* (त्रैमासिक) अङ्क ७६, पृष्ठ ६५

१० *नेपाली* (त्रैमासिक) अङ्क ७६, पृष्ठ ६६

११ *नेपाली* (त्रैमासिक) अङ्क ७६, पृष्ठ ६६

१२ *नेपाली* (त्रैमासिक) अङ्क ७६, पृष्ठ ६१

१३ *रूपरेखा* मासिक, वर्ष ३, अङ्क ५, पृष्ठ ११

१४ *रूपरेखा* मासिक, वर्ष ३, अङ्क ५, पृष्ठ १४

१५ *प्यासी-माटोका केही बुँदाहरू*, पृष्ठ ४२

१६ पर्सिभल लायन्डन-नेपाल, भाग १, पृष्ठ २५८

१७ एच.ए. ओल्डफिल्ड, *स्केचस् फ्रम नेपाल*, भाग १, पृष्ठ ३३६

१८ सर्दार भीमबहादुर पाण्डे, *राष्ट्रभक्तिको झलक,* पृष्ठ १८७
१९ *इतिहास प्रकाश,* अङ्क १, पृष्ठ ४५
२० विक्रमजित हसरत, *हिस्ट्री अफ नेपाल,* पृष्ठ ३१६
२१ एच.ए. ओल्डफिलड, *स्केचस् फ्रम नेपाल,* भाग १, पृष्ठ ३५५
२२ एच.ए. ओल्डफिलड, *स्केचस् फ्रम नेपाल,* भाग २, पृष्ठ ३५५ (टिप्पणीसहित) र पृष्ठ ३५६
२३ जनरल पदम जङ्गबहादुर, *लाइफ अफ जङ्गबहादुर* (प.सं) पृष्ठ ६७
२४ विक्रमजित हसरत, *हिस्ट्री अफ नेपाल,* पृष्ठ ३२२
२५ बालचन्द्र शर्मा, *नेपालको ऐतिहासिक रूपरेखा,* पृष्ठ ३००
२६ पद्मजङ्गबहादुर, *लाइफ अफ जङ्गबहादुर,* पृष्ठ ६७
२७ बाबुराम आचार्य, *अब कहिल्यै यस्तो नहोस्,* पृष्ठ ९६
२८ बाबुराम आचार्य, *अब कहिल्यै यस्तो नहोस्,* पृष्ठ ९६
२९ बाबुराम आचार्य, *अब कहिल्यै यस्तो नहोस्,* पृष्ठ ९६
३० पर्सिभल लायण्डन-*नेपाल,* भाग १, पृष्ठ १२१
३१ पुरुषोत्तमशमशेर, *श्री ३ हरूको तथ्य वृत्तान्त,* भाग १, पृष्ठ ३५
३२ ज्ञानमणि नेपाल, *नेपालको महाभारत,* पृष्ठ ३१०-३११
३३ ज्ञानमणि नेपाल, *नेपालको महाभारत,* पृष्ठ ३११
३४ त्रिरत्न मानन्धर, *नेपालको इतिहासमा जङ्गबहादुर,* पृष्ठ ४२
३५ त्रिरत्न मानन्धर, *नेपालको इतिहासमा जङ्गबहादुर,* पृष्ठ ४२
३६ एच.ए. ओल्डफिलड, *स्केचस् फ्रम नेपाल,* भाग १, पृष्ठ ३५५
३७ ज्ञानमणि नेपाल, *नेपालको महाभारत,* पृष्ठ २९३
३८ एच.ए. ओल्डफिल्ड, *स्केचस् फ्रम नेपाल,* भाग १, पृष्ठ ३५६
३९ पद्मजङ्गबहादुर, *लाइफ अफ जङ्गबहादुर,* (प्र.सं) पृष्ठ ६७
४० लुड्विग् एफ् स्टीलर, *द कोत मास्साकर,* पृष्ठ ३१४
४१ बालचन्द्र शर्मा, *नेपालको ऐतिहासिक रूपरेखा,* पृष्ठ ३००
४२ बाबुराम आचार्य, *अब कहिल्यै यस्तो नहोस्,* पृष्ठ ११३

४३ लुड्विग् एफ् स्टीलर, *द कोत मास्साकर,* पृष्ठ ३७१

४४ त्रिरत्न मानन्धर, *नेपालको इतिहासमा जङ्गबहादुर,* पृष्ठ ९

४५ एक अप्रकाशित ऐतिहासिक पत्रबाट

४६ (क) ज्ञानमणि नेपाल, *नेपालको महाभारत,* पृष्ठ २५८-२८९

(ख) पुरुषोत्तमशमशेर, *श्री ३हरूको तथ्यवृत्तान्त,* भाग १, पृष्ठ ३२-३४-४४

४७ चित्तरञ्जन नेपाली, *पारिवारिक षड्यन्त्रका कथाहरू,* पृष्ठ १५८-१६०

४८ *नेपाली* (त्रैमासिक) अङ्क ७६, पृष्ठ ४३

४९ त्रिरत्न मानन्धर, *नेपालको इतिहासमा जङ्गबहादुर,* पृष्ठ ९

५० त्रिरत्न मानन्धर, *नेपालको इतिहासमा जङ्गबहादुर,* पृष्ठ ९

५१ बालचन्द्र शर्मा, *नेपालको ऐतिहासिक रूपरेखा,* पृष्ठ २९५

५२ माथि टिप्पणी नं. ४५ मा उल्लिखित पत्रबाट

५३ ज्ञानमणि नेपाल, *नेपालको महाभारत,* पृष्ठ २९२-२९३

५४ त्रिरत्न मानन्धर, *नेपालको इतिहासमा जङ्गबहादुर,* पृष्ठ १३९

५५ चित्तरञ्जन नेपाली, *पारिवारिक षड्यन्त्रका कथाहरू,* पृष्ठ ३१-३२

५६ चित्तरञ्जन नेपाली, *पारिवारिक षड्यन्त्रका कथाहरू,* पृष्ठ ३१-३२

५७ पुरुषोत्तमशमशेर, *श्री ३ हरूको तथ्य वृत्तान्त,* भाग १, पृष्ठ ३५

५८ लुड्विग् एफ् स्टीलर, *द कोत मास्साकर,* पृष्ठ ३६९

५९ ज्ञानमणि नेपाल, *नेपालको महाभारत,* पृष्ठ ३०५

६० लुड्विग् एफ् स्टीलर, *द कोत मास्साकर,* पृष्ठ ३६९

**स्रोतसामग्रीहरू**


१ बालचन्द्र शर्मा, *नेपालको ऐतिहासिक रूपरेखा,* (प्र.सं.)

२ बाबुराम आचार्य, *अब कहिल्यै यस्तो नहोस्,* (पाँचौं सं.)

३ सर्दार भीमबहादुर पाँडे, *राष्ट्र भक्तिको झलक,* (प्र.सं.)

४ ज्ञानमणि नेपाल, *नेपालको महाभारत,* (प्र.सं.)

५ त्रिरत्न मानन्धर, *नेपालको इतिहासमा जङ्गबहादुर,* (प्र.सं.)

६ पुरुषोत्तमशमशेर, *श्री ३ हरूको तथ्य वृत्तान्त,* (द्वि.सं.)

७ चित्तरञ्जन नेपाली, *श्री ५ रणबहादुर शाह,* (प्र.सं.)

८ चित्तरञ्जन नेपाली, *पारिवारिक षड्यन्त्रका कथाहरू* (प्र.सं.)

९ चित्तरञ्जन नेपाली, *केही ऐतिहासिक निबन्धहरू* (प्र.सं.)

१० प्यासी-माटोका बुँदाहरू, (प्र.सं.)

११ H. AMBROSE ULDFIELD- *SKETCHES FROM NEPAL* (VOLI)Retrited

१२ GENERAL PUDMA JUNG BAHADUR- *LIFF OF MAHA-RAJA SIR JUNG BAHADUR, GCB, GCST OF NEPAL.*

१३ PERCEVAL LANDON- *NEPAL*-VOLI- (F.E)

१४ Bikrama Jit Hasrat- *History of Nepal* (F.E.)

१५ Ludwigf. Stillr S. J. *The Kot massacre*- (F.E.)

१६ *रूपरेखा* मासिक पत्रिका, वर्ष ३ अङ्क ५

१७ *नेपाली* त्रैमासिक पत्रिका, अङ्क ७६

१८ *इतिहास प्रकाश,* अङ्क १

१९ अप्रकाशित ऐतिहासिक पत्र एक

# मदन पुरस्कार गुठी र भाषाविज्ञानतिरको मेरो यात्रा

*– चूडामणि बन्धु*

मेरो जीवनको एउटा महत्त्वपूर्ण मोडमा म मदन पुरस्कार गुठीसँग सम्बन्धित हुन पुगेँ। म कसरी भाषाका क्षेत्रमा लागेँ त्यसको कारण पनि यसैसँग जोडिएको छ । २०१७ सालमा भैरहवाको हाईस्कूलमा पढाउन छाडेर स्नातकोत्तरमा पढ्नका निम्ति काठमाडौँ आएको थिएँ। तर के पढ्ने? सुरुमा अङ्ग्रेजीको एम्. ए. मा भर्ना भएँ त्रिभुवन विश्वविद्यालयमा । नेपाल साहित्यमा रुचि थियो र पढ्ने धोको पनि थियो । त्यसैबेला नेपाली एम्. ए. मा पढिरहेका शिवगोपाल रिसालसँग भेट भयो । उनको प्रेरणाले मैले फेरि नेपालीमा नाम लेखाएँ। उनी दोस्रो वर्षमा र म पहिला वर्षमा भए पनि केही कक्षा सँगै हुन्थे। बल्लबल्ल पहिलो वर्षको कक्षामा चार जना भयौँ । भर्खरै खुलेको नेपाली विषयलाई प्रोत्साहित गर्न मदन पुरस्कार गुठीले मेरो र शरच्चन्द्र शर्माको शैक्षिक शुल्क तिरिदिने व्यवस्था भएको थियो । त्यसै समयदेखि म मदन पुरस्कार गुठीसँग जोडिएको थिएँ ।

नेपालीको एम्. ए.मा पढ्दा प्राध्यापक बालकृष्ण पोखरेल अति नै रोचक र ज्ञानवर्धक शैलीमा पढाउँथे। ममा साहित्यको रुचि छँदै थियो, तर भारतमा स्नातक स्तरसम्म पढेकाले त्यसबेलासम्मको नेपाली इतिहास र साहित्यको ज्ञानको भने कमी नै थियो । त्यसै कारणले नेपाली भाषाका कृतिहरूको अध्ययन गर्न मदन पुरस्कार पुस्तकालय जाने गर्थेँ । बजारमा पाठ्यपुस्तकहरू कमै पाइन्थे, बाहिरका पुस्तक त निकै कम। २०११ सालमा नेपालीमा एम्. ए. गरेपछि २०२० सालदेखि मैले भक्तपुर कलेजमा नेपाली पढाउन थालेँ । २०२१ सालमा "नेपाली भाषाको उत्पत्ति" का विषयमा अनुसन्धान गर्न मैले मदन पुरस्कार विद्वद्वृत्ति पाएँ। २०२१ सालको मङ्सिर १३ गतेको गोरखापत्रमा मेरो छनोट भएको खबर पनि छापिएको थियो। त्यसबेला अनुसन्धानको वातावरण नेपालमा बनिसकेको थिएन तापनि यस विषयको आवश्यकता र औचित्यबारे गोरखापत्रले

सम्पादकीय नै लेखेको थियो। यस विद्वद्वृत्तिले मलाई भाषाबारे गहन अध्ययन गर्न प्रेरित गऱ्यो। यसभन्दा अघि मैले केही साहित्यिक रचना लेखेको थिएँ तर भाषाविज्ञानमा गहिरिनु मेरा लागि नितान्त नयाँ अनुभव थियो। त्यसबेला नेपालमा भएका भाषाविज्ञानसम्बन्धी किताबहरू खोजीखोजी पढ्न थालेँ। त्रिभुवन विश्वविद्यालयको पुस्तकालय, केशर पुस्तकालय र राष्ट्रिय पुस्तकालय पनि धाएँ। आधुनिक भाषाविज्ञानका पुस्तक त्यसताक पाइन्नथे। ऐतिहासिक भाषाविज्ञानका केही किताबमात्र उपलब्ध थिए। नेपालीका किताब र पत्रिका मदन पुरस्कार पुस्तकालयमा नै पाइने हुनाले मेरो धेरै समय त्यहीँ बित्थ्यो।

त्यसताक गुठीमा आउँदा भेटिने व्यक्तिहरूमा कमल बाबु, बासुदेव लुईंटेल र गजेन्द्र रेग्मी थिए। कमल बाबु सधैँ व्यस्त, भेट्नै गाह्रो हुन्थ्यो। उनका अनुसन्धानात्मक निबन्धहरू म रुचिका साथ पढ्थेँ। सरल नेपालीमा गहिरा कुरा कसरी लेख्न सकेको होला भनी म विचार गर्थें र सरल भाषामा शोधखोजका कुरा प्रस्तुत गर्ने उनको शैलीबाट प्रभावित पनि भएको थिएँ। त्यस समयमा जगदम्बा प्रेस पनि यहीँ थियो र भूतको भिनाजु उपनाम भएका वासुदेव लुइँटेल त्यसका प्रबन्धक थिए, उनका कुरा सुन्न साहित्यकार र लेखकहरू जम्मा हुन्थे। साथीहरू भन्थे– उनले त्यहाँ आउने धेरैका नाम राखेका छन्, तिम्रो पनि नाम होला नि ? मलाई त्यो थाहा छैन, तर मलाई के थाहा छ भने उनी स्पष्टवक्ता थिए र हार्दिक पनि। आज उनी यस संसारमा छैनन्। गजेन्द्र रेग्मी मदन पुरस्कार पुस्तकालय र गुठीमा त्यसताक सधैँ भेटिन्थे र अहिले पनि भेटिन्छन् तर गुठीको कार्यालयमा। आफूलाई चाहिने पुस्तकहरू प्राप्त गर्न अघिल्लै दिन उनलाई लेखेर दिनुपर्थ्यो, अर्का दिनका लागि। उनको सकारात्मक सहयोगले मलाई त्यसबेला काम गर्न निकै सजिलो भयो। उनीसँगको स्नेह र बन्धुत्व यथावत् छ। त्यसताक पत्रिकाहरू पनि पढ्न दिइन्थ्यो। त्यसमा पनि म त त्यहाँको पहिलो विद्वद्वृत्ति प्राप्त गर्ने व्यक्ति थिएँ। त्यहाँका पुस्तकहरूमा मैले 'कमलको सङ्ग्रह' भनी स्ट्याम्प लगाएको देखेँ। कमल दीक्षितका यिनै सङ्कलनहरूबाट मदन पुरस्कार पुस्तकालय स्थापना भएको कुरा पनि मैले सुनेँ। मैले पनि आफ्नो एउटा छापा बनाइहालेँ– 'बन्धुको सङ्ग्रह'। अनि थालेँ तलब

पाएका दिनमा पुस्तक पसलमा पसेर किताब किन्न र घरमा ल्याएर त्यसमा त्यो स्ट्याम्प लगाउन। नेपाली भाषाका पुस्तक र पत्रिकाको सङ्कलन गर्न त थालेँ तर त्यो अभियान अहिले असफल भएको छ, किनभने अब त महँगीले किताब किन्न सक्ने अवस्था छैन।

सुरुका दिनमा मैले नेपाली भाषाको उत्पत्तिका विषयमा अनुसन्धान गर्दा मदन पुरस्कार गुठीका निकै पुस्तक र पत्रिकाहरू हेरेँ। नेपाली भाषाको उत्पत्तिबारे अनुसन्धान गरेर एक वर्षपछि नै एउटा किताब तयार गरेर बुझाएँ। त्यो किताप २०२५ सालमा छापिएर आयो। त्यसरी आउला भनेर मैले सोचेकै थिइन। त्यस समयमा म त्रिभुवन विश्वविद्यालयको नेपाली विभागमा नेपाली भाषाविज्ञान पढाउन पुगिसकेको थिएँ। मेरो किताबमा सूर्यविक्रम ज्ञवालीको भूमिका पनि थियो। त्यसमा उनले मेरो कार्यलाई प्रशंसा गरेर भनेका थिए– “नेपाली भाषाका उत्पत्तिको सरल र वैज्ञानिक विवेचना जसरी यो पुस्तकमा गरिएको छ, उसैगरी यो पुस्तकको नेपाली गद्य शैलीले गहन विषयलाई सरलतापूर्वक बुझाउने काममा सफलता प्राप्त गरेको छ।” नेपाली भाषाको उत्पत्तिका विषयमा यसरी अध्ययन नगरेको भए म त्यसबेला त्रिभुवन विश्वविद्यालय जान पाउन्नथेँ, भाषाविज्ञान पढाउन पनि पाउन्नथेँ र मेरो क्षेत्र पनि भाषाविज्ञान हुँदैनथ्यो।

२०२७ सालमा नेपाल प्रज्ञा-प्रतिष्ठानका आयोजनामा कर्णाली लोक संस्कृतिको अध्ययन टोलीमा म पनि सहभागी भएँ। सत्यमोहन जोशीको नेतृत्वमा गएको त्यस टोलीमा विहारीकृष्ण श्रेष्ठ, स्थिर जङ्गबहादुर सिंह, प्रदीप रिमाल र म गरी जम्मा पाँच जना थियौँ। यस अध्ययनको प्रतिवेदनका रूपमा कर्णाली लोक संस्कृतिका पाँच भाग तयार भए र पाँच जनाले संयुक्त रूपमा २०२८ सालको मदन पुरस्कार पाउँदा म पनि परेँ। अहिलेसम्म कुनै एउटा पुरस्कार एकैसाथ यसरी पाँच जनाले पाएको उदाहरण मैले देखेको छैन।

मदन पुरस्कार गुठी र मदन पुरस्कार पुस्तकालयसँग त्यस पछिका वर्षहरूमा मेरो सम्पर्क र सम्बन्ध रहिरह्यो। नेपाली भाषाको निम्ति काम गर्ने मदन पुरस्कार गुठी र मदन पुरस्कार पुस्तकालयबाट

विगत वर्षहरूमा नेपाली भाषालाई कम्प्युटर युगमा प्रवेश गराउने काममा उल्लेखनीय योगदान पुगेको छ । नेपाली युनिकोडको प्रयोग र मदन पुरस्कार पुस्तकालयले नेपाली भाषाको विकासका निम्ति तयार गरिरहेको विद्युतीय पाठसङ्ग्रहबारे जानकारी दिन केदार शर्मा र म पूर्वोत्तर भारतका आसाम, मेघालय, दार्जिलिङ र सिक्किम पुगेका थियौँ । त्यसबेला उनी सञ्चारका कुरा गर्थे र म भाषाका कुरा गर्थें । कुरा एउटै हो, भाषा पनि सञ्चारै हो । नेपाली भाषाले समयसँगै गति लिनुपर्छ, अरू भाषाभन्दा पछि पर्नुहुन्न । हामीले नेपाली भाषी जगतलाई निवेदन गरेका थियौँ– मदन पुरस्कार गुठी र मदन पुरस्कार पुस्तकालयबाट नेपाली भाषाको समय सुहाउँदो सेवा गच्छेअनुसार निरन्तर भइरहने छ ।

✍

# कमल दीक्षितको छन्दप्रेम

*– चूडामणि रेग्मी*

'चूडामणिका कलममा कमलमणि' (२०६५) मेरा दृष्टिमा मेरो निकै राम्रो पुस्तक हो, तर शोधखोजका दृष्टिले भने निकै अपूर्ण, म आफैँ भन्छु । लेखक्यौलीमै पनि यस्तै भावना पोखेको हुँ । पोखरामा (२०६५ जेठ ३२ गते) म, चूडामणि खनाल र डा. रविलाल अधिकारीका समेत कमलमणि विषयका तीनओटा समालोचनात्मक पुस्तकको लोकार्पण समारोहमा मैले छानेर बोल्दा पनि 'समुद्रबाट रत्न झिक्न गाह्रो हुन्छ, त्यस्तै समुद्र हुन् कमलमणि' भन्ने कुरा भनेको थिएँ । नभन्दै काठमाडौँबाट पोखरा, पोखराबाट काठमाडौँ जाँदा-फिर्दा क.दी.को मोटरका सहयात्री कोषराज न्यौपाने, (साथमा म पनि) र क.दी.का बीचमा धेरै कुराकानी भए। त्यो सन्दर्भभित्र 'छन्द' पनि पसेको थियो। क.दी.लाई केमा घमन्ड थियो भने छन्दका मर्मज्ञ, तुरुन्त छन्दमा कविता लेख्न सक्ने कोषराज आज साथमा थिए । कोषराजलाई केमा गर्व थियो भने एउटा पुस्तकालय नै जस्तो, वयोवृद्ध ज्ञानी, साथी क.दी.सँगको यात्रा थियो । कट्टर काङ्ग्रेस कोषराजका दृष्टिमा कम्युनिस्ट भए पनि भान्दाइ, नेपालीको विद्वान् साहित्यकार, आदरणीय म पनि सँगै थिएँ। क.दी. अरू गर्वित थिए– उनीविषयक तीन समालोचनात्मक पुस्तक प्रकाशित भएका थिए । सायद अर्को अचम्म ! ती तीनमध्येको एक पुस्तक भने नपत्याउँदो पाराले चूडामणि रेग्मीले लेखेको थियो ।

भैगयो, हामी तीन सहयात्री थियौँ– ड्राइभरबाहेक। जब छन्द गफभित्र पस्थ्यो, तब मलाई एउटा कुराले कोपर्थ्यो– मलाई क.दी.को छन्दप्रेम थाहा थियो, तर त्यसमा म त्यति भिजेको रहेनछु। क.दी.को छन्दप्रेम थाहा नभएकै त होइन, चन्द्रगढीमा अञ्जना न्यौपानेले मेरो लघुकाव्य 'मेरी दिदी' गएर क.दी.लाई सुनाउँदा उनले राम्ररी सुनेका थिए, भावुक भएका थिए, तर आज मलाई थाहा भयो, मेरो छन्दलेखाइको 'त्रुटि' उनलाई मन परेको रहेनछ । अहिले छ्याङ्ग बुझेँ । कुनै बेलाको कुरा हो– माधव घिमिरेको 'देवीस्तुति'का छन्दसम्बन्धी निकै खोट मैले क.दी.समक्ष सुनाउँदा क.दी.ले मलाई कुटुँलाझैँ गरी छोपेथे– 'माधव घिमिरे त माधव घिमिरे हुन् !' छन्दका

प्रेममा उनी कति डुबेका छन् भन्ने कुरा उनका धेरै निबन्ध पढेर तिनको सार झिक्दा मात्र छ्याङ्ग हुन्छ । भानुभक्तदेखि (अझ पहिलेदेखि) बढेको क.दी.को छन्दप्रेम लेखनाथ, सम, देवकोटा, माधव घिमिरे हुँदै कोषराज न्यौपानेसम्म झरेको छ– झर्ना समुद्रतिर झरेझैँ ।

कुनै गोष्ठी भयो– तिनको सार छन्दकवितामा खिच्दा रहेछन् कोषराज न्यौपाने–तुरुन्त । क.दी.लाई कोषराजबाट सधैँ चित्त बुझ्ने ! अति बुझ्ने। छन्दको र व्याकरणको प्रयोगशील मसँग उनको सहमति रहेनछ । तर उनी मसँग निन्दा-स्तुति-तटस्थता केही देखाउँदैनन् ।

मदन पुरस्कार गुठीमा कोठे कविगोष्ठी हुँदो रहेछ– समयसमयमा। यसको छोटो नाम 'कोकगोष्ठी' रहेछ। यसका चर्तिकलामध्येको एउटा नमुना घरमा आएर पुस्तक खोज्दा भेटेँ– 'अव्यावहारिक भयौ किन ?' (२०५४) । सम्पादक कपुरश, यसका भूमिकाकार स्वयम् क.दी.- शीर्षक– 'म को हुँ ?' । यो भूमिकाबाट र यो पुस्तकका कविहरूका कविताबाट 'कोकगोष्ठी' को विशेषता र चर्तिकला थाहा पाइन्छ । पाएँ । यसका दुई वरिष्ठ सदस्य भरतराज पन्त र भरतराज 'मन्थलीय' बिते। क.दी. मुख्य मान्छे। अरू सदस्यमा वरिष्ठ कोषराज न्यौपानेका साथै पुरुषोत्तम सुवेदी, रमेश खकुरेल, शरदकुमार भट्टराई, प्रयागराज वाशिष्ठ, प्रह्लाद पोखरेल, अच्युतरमण अधिकारीहरू रहेछन् ।

केही सदस्यता शुल्क लिने गरेको यो कोकगोष्ठी सानै रूपमा हुँदो रहेछ । त्यसमा कैयौँपटक कोषराज न्यौपानेले आशुकवित्व देखाएका रहेछन् (रमेश खकुरेल त आँशुकवि नै भइगए) न्यौपानेले नेपाली गद्यलेखक परिषद्ले आयोजना गरेको पोखराको पुस्तक लोकार्पण समारोहमा पनि त्यो आशुकवि रूप छर्लङ्ग्याएर स्रोताहरूलाई चकित तुल्याए ।

टुङ्ग्याउनीमा, श्रेष्ठ नेपाली कविहरूको परम्परामा प्रगाढ छन्दप्रेम साँच्ने *नेपाली* त्रैमासिकका सम्पादक, मदन पुरस्कार गुठीका आदरणीय अध्यक्ष कमलमणि दीक्षित आफ्नो रातो बङ्गला स्कूलमा छन्दको कक्षा पनि लिन्छन् । यसबाट उनको छन्दप्रेम घामजत्तिकै छ्याङ्ग देखिन्छ। क.दी.को विशिष्ट ढङ्गको यो छन्दप्रेम अध्ययनीय पक्ष हो– मेरो निष्कर्ष ।

# मदन पुरस्कार : प्रवचनहरू– केही साहित्यिक तथा केही बौद्धिक धारणाका प्रसङ्गमा

– *डा चेतबहादुर कुँवर*

*मदन पुरस्कार : प्रवचनहरू* नामक ग्रन्थ मदन पुरस्कार गुठीको स्वर्ण वर्षको अवसरमा वरिष्ठ लेखक श्री चित्तरञ्जन नेपालीद्वारा सङ्गृहीत तथा सम्पादित र २०६२ सालमा प्रकाशित पाँच सय बयालीस पृष्ठको एक महत्त्वपूर्ण ग्रन्थ हो। प्रत्येक वर्षजस्तो मदन पुरस्कार र जगदम्बाश्री पुरस्कार अर्पण गरिने समारोहमा प्रस्तुत हुने प्रवचनको यो बहुमूल्य सङ्ग्रह हो, जसभित्र २०६१ सालमा व्यक्त गरिएको करिब ३२ ओटा प्रवचनहरू सङ्कलित छन् । तिनै प्रवचनमध्ये पहिलो नौओटामा अभिव्यक्त बौद्धिक तथा साहित्यिक धारणाको प्रसङ्ग यहाँ सङ्क्षेपमा उल्लेख गर्ने प्रयास गरिएको छ ।

नेपालको सबभन्दा पहिलो र आफ्नो समयको सबभन्दा ठूलो साहित्यिक पुरस्कारको रूपमा गनिएको गरिमामय पुरस्कार हो यो मदन पुरस्कार । सर्वप्रथम यसबारे सङ्क्षिप्तमा परिचितमा परिचित हुनु सान्दर्भिक नै ठान्दछु । ज. मदनशमशेरको सम्झनालाई सदैव जगाउन श्रीमती रानी जगदम्बाद्वारा स्थापित महत्त्वपूर्ण पुरस्कार हो यो। स्वनामधन्य रानी जगदम्बा यसको प्रमुख संस्थापिका मात्र होइन, आफ्नो जीवन छँदासम्म संरक्षकको भूमिकासमेत उनले निर्वाह गरेको कुरा कसैबाट छिपेको छैन । यी मदन पुरस्कार[1] र जगदम्बा-श्री[2]

---

१. *"नेपाली भाषामा उच्चकोटीका ग्रन्थहरूको सिर्जना भई भाषा भण्डार उत्तरोत्तर बढ्दै जाओस् । त्यसको लागि लेखकवर्गलाई प्रोत्साहन मिलोस् र उपर्युक्त किसिमका छपाउन नसक्ने विद्वान्हरूको कृतिको समादरसमेत होस् ।" चित्तरञ्जन नेपाली सं.* ***मदन पुरस्कार : प्रवचनहरू*** *मदन पुरस्कार स्वर्णवर्ष समिति, ललितपुर, २०६२, पृ. ख ।*

२. *"श्रव्य दृश्य वा अरू किसिमका कृतित्वहरूबाट नेपाली वाङ्मयको श्रीवृद्धिमा उल्लेख्य योगदान गर्ने व्यक्ति र शैक्षिक, सामाजिक वा सांस्कृतिकमध्येबाट नेपाली भाषाको समुन्नतिमा उल्लेख्य योगदान गर्ने व्यक्तित्वहरू मध्येबाट छनौट गरी सम्मानयोग्य ठहरिएका व्यक्तिलाई 'जगदम्बा-श्री' नामले मदन पुरस्कारसरहको अर्को पुरस्कार प्रदान गर्ने ।"*

पुरस्कारहरू प्रदान गर्नुको उद्देश्य पुरस्कारहरू स्थापना गरिँदा तोकिएका नियमले स्पष्ट पार्दछन् । २०१२ साल असोज १० गतेका दिन पहिलोपटक मदन पुरस्कारको घोषणा भएको थियो तर यससम्बन्धी दानपत्रमा असोज २८ गतेको दिन मात्र सहीछाप भएको थियो भन्ने कुरा अभिलेखमा देखिन्छ । प्रारम्भमा यस पुरस्कारको राशि रु ४000/– बाट सुरु भई स्वर्ण जन्मोत्सवको अवसर २०६२ सालदेखि रु. २,00000/– हुन गएको छ । २०६१ सालसम्ममा मदन पुरस्कार पाउने ६४ जनामध्ये २ जना विद्वान्हरू दुईपटक र १ जना जगदम्बा-श्री पुरस्कारसमेत प्राप्त गर्नेमा परेका देखिन्छन् । रानी जगदम्बाको अकस्मात् स्वर्गारोहण भएपछि उनको पुण्य स्मृतिमा २०४५ सालदेखि जगदम्बा-श्री पुरस्कार अर्पण गर्ने व्यवस्था भयो । प्रारम्भमा यस पुरस्कारको राशि पनि रु. ५0000/– र २०५२ देखि रु. १00000/– थियो भने २०६२ सालदेखि यो पनि रु. २00000/– राशिको पुरस्कार भएको छ र यसैअनुरूप अहिलेसम्म यी पुरस्कारहरू अर्पण गरिँदै आएका छन् । २०६१ सालसम्म जगदम्बा-श्री पुरस्कार पाउने १८ जनामध्ये १ जना जनकविकेशरी धर्मराज थापाले मदन पुरस्कार पनि प्राप्त गरेका देखिन्छन् ।

मदन पुरस्कार र जगदम्बा-श्री पुरस्कारहरू प्रदान गर्ने समारोहमा स्वदेश वा विदेशका साहित्यकार र बुद्धिजीविलाई आमन्त्रण गर्ने परम्परा पनि सुरुदेखि नै रहेको देखिन्छ। प्रारम्भमा विद्वत्जनहरूमात्र प्रकट गर्ने परम्परा रहेको थियो भने २०२८ सालको पुरस्कार अर्पण गरिने समारोहदेखि प्रवचन दिन प्रारम्भ भएको हो भन्ने कुरा देखिन्छ। पहिलो प्रवचनकर्ता थिए युगकवि सिद्धिचरण श्रेष्ठ। हुन त लेखक चित्तरन्जनको भनाइमा यो प्रवचन पनि उनले बोलेको टेपबाट उतार गरेर लिखित रूपमा अभिलेख राखिएको हो भन्ने भनाइ छ।[३] माथि भनिएझैँ २०६१ सालसम्म व्यक्त गरिएका करिब ३२ ओटा प्रवचनहरू यस ग्रन्थमा सङ्गृहीत छन् । कार्यक्रमका अन्य विवरणहरूसमेत समावेश गरिएको सो ग्रन्थको पहिलो खण्डमा नै यी

३. *चित्तरञ्जन नेपाली (सं.),* ***मदन पुरस्कार : प्रवचनहरू****, मदन पुरस्कार स्वर्णवर्ष समिति, ललितपुर, २०६२, पृ. २ ।*

प्रवचनहरूलाई समायोजन गरिएका छन् । त्यसमा विशेष गरेर प्रवचनकर्ता र पुरस्कृत व्यक्तित्वहरूका नेपाली साहित्य, संस्कृति र विज्ञान आदि विषयका धारणाबारे माथि भनिएझैँ लेखमा सङ्क्षेपमा चर्चा गरिएको छ ।

मदन पुरस्कार गुठीका शब्दमा पुरस्कार समर्पण समारोहमा पहिलो प्रवचनकर्ता युगकवि सिद्धिचरण श्रेष्ठ थिए । उनले २०२८ सालको मदन पुरस्कार प्राप्त गर्ने कवि ईश्वरवल्लभलाई समर्पण गरिएको पुरस्कार वितरण समारोहमा आफ्ना धारणा व्यक्त गरेका थिए। पुरस्कृत पद्य ग्रन्थ हो– *आगोका फूलहरू हुन् आगोका फूलहरू होइनन्*। शिष्टाचारका शब्दहरूका अतिरिक्त कवि श्रेष्ठ पुरस्कृत कवि वल्लभले साहित्य र भाषाको समृद्धिको लागि पुऱ्याएको योगदानको चर्चामा बढी केन्द्रित देखिन्थे। युगकविका शब्दमा आफ्नी आमाको आत्महत्या पछिको अनुभूतिले घचघच्याइएका कवि वल्लभ संसारमा जति कुरा छन्, आगोका फूलहरू हुन् भन्नुबाहेक आर्के भन्ने हो ... उहाँको दृष्टिमा... हृदयमा आगो बलेको मानिसका निम्ति संसारमा जति भएका छन्, जति घटनाहरू छन्, ती सबै आगोका फूलहरू मात्रै होइनन् भन्ने अभिव्यक्ति प्रवचनमा व्यक्त गरेको पाइन्छ । तर उनलाई (वल्लभ) यो संसार बढो रमाइलो रहेको र यहाँ केही गर्नु रहेछ, यहाँ माया, ममता, करुणाजस्ता कुरा पनि छन्, त्यसकारण आधा शीर्षकमा आगोका फूलहरू होइनन् भनेर आफूलाई नियन्त्रित गरेको कुरा विद्वत् कवि श्रेष्ठ अगाडि बताउँछन्। युगकविका दृष्टिमा जे भए तापनि, जस्तै दुःख परे तापनि जस्तै आपत् परे तापनि बाँचिरहनुपर्ने यो संसार छ, त्यसैमा उहाँ (वल्लभ) बाँचिरहनु भएको छ र त्यही वल्लभजी हो भन्ने अनुभव श्री श्रेष्ठले गरेका कुरा आफ्नो प्रवचनमा स्पष्ट पारेका छन् । आयामेली कवि ईश्वरवल्लभको यो ग्रन्थ सांसारिक परिस्थितिको यथार्थपरक चित्रण हो भन्ने मानवीय संवेदनशीलताको वास्तविकता पनि हो भन्न सकिन्छ। कविता, कथा, निबन्धका साथै गीत रचनामा पनि उत्तिकै कलम चलाउने प्राज्ञ ईश्वरवल्लभले कविताको क्षेत्रमा बढी प्रसिद्धि कमाएको देखिन्छ ।

दोस्रो प्रवचनकर्ता थिए त्रि.वि.वि.का तात्कालिक उपकुलपति सूर्यबहादुर शाक्य। *लिच्छविकालका अभिलेख* भन्ने ग्रन्थका लेखक श्री

धनवज्र वज्राचार्यलाई २०३१ साल कात्तिक ३१ गतेका दिन आयोजित मदन पुरस्कार समर्पण समारोहमा उनी उपस्थित भएका थिए । आफ्नो प्रवचनमा नेपाली इतिहास सामग्रीलाई पुरस्कार प्रदान गरिएकोमा खुसी प्रकट गर्दै नेपाली ऐतिहासिक-सामग्रीको गरिमालाई प्रकाश पार्नमा उनी बढी उद्यत देखिन्थे । राष्ट्रिय गौरवको उन्नत गरिमालाई सदैव प्रज्वल पारिरहने देशको सांस्कृतिक वा साहित्यिक इतिहास नै वरिष्ठ आधार हो भन्दै त्यस आधारको अभावमा कुनै पनि देशको सभ्यता कलात्मकतामा लुप्त भएर यदाकदा किंवदन्तीको रूपमा मात्र रहने हुन्छ भन्ने कुरा उनले आफ्नो भनाइमा छर्लङ्ग पारेका छन् । यो देशको सामाजिक, सांस्कृतिक, राजनैतिक तथा आर्थिक प्रवाहको रूपमा प्राप्त हुन आएको गौरवमय राष्ट्रिय परम्पराको अक्षुण्णरूप हो भन्दछन् । त्यसैले उनी राष्ट्रिय जीवन र राष्ट्रिय आकाङ्क्षाको मार्गदर्शनको महत्त्व प्रदर्शन गर्न सक्ने दृष्टिकोणले यसको अध्ययन हुन सकेमा हाम्रा पूर्वजहरूले अमूल्य सम्पत्तिको रूपमा छोडेर गएका ऐतिहासिक तथा सांस्कृतिक अवशेषहरूको व्यापक अन्वेषण-अनुसन्धानद्वारा निष्पक्ष इतिहासको सृष्टि भई राष्ट्रिय माग पूर्ण हुने कुरामा विश्वास लिन सक्ने कुराको धारणा उनको रहेको देखिन्छ, जो सत्य र तथ्य हो भनी हामी भन्न सक्दछौँ । इतिहासका अनुसन्धाता तथा विशेषज्ञ श्री वज्राचार्यका महत्ताका सन्दर्भमा उल्लिखित विषय यथार्थ र अनुसरणयोग्य पनि छ भन्न सकिन्छ ।

नेपाली भाषाका मूर्धन्य साहित्यकार भवानी भिक्षुलाई २०३२ सालको साहित्यतर्फको मदन पुरस्कार समर्पण गरिएको थियो । उक्त समारोहमा अतिथि भएका तात्कालिक प्रधानन्यायाधीश श्री नयनबहादुर खत्रीले सभासमक्ष आफ्नो तेस्रो प्रवचन प्रस्तुत गरेका थिए । उनको भनाइमा नेपाली भाषाले गहकिलो साहित्य सिर्जना गर्ने काम गोरखाका शाह नृपतिहरूद्वारा संरक्षण-संवर्द्धन पाएपछि मात्र हुन सकेको हो भन्ने कुरा इतिहासले मानेको कुरा प्रस्ट पारेका छन् । पुरस्कृत वरिष्ठ कवि भवानी भिक्षुको नेपाली साहित्य क्षेत्रको योगदानलाई उल्लेख गर्दै उनले आफ्नो जीवनको अमूल्य समय राष्ट्र भाषाको लागि समर्पण गरेको कुरा व्यक्त गरेका छन् भने १९९० सालदेखि नेपाली भाषाको लागि जे-जति योगदान उनले गरे, त्यो इतिहास भइसकेको

कुरा पनि प्रस्ट पारेका छन् । अवधि भाषाभाषीको क्षेत्र कपिलवस्तुमा जन्म लिएका नेपाली भाषा-साहित्यका अमर प्राज्ञ हुन् भवानी भिक्षु । आधुनिक नेपाली गद्य कविता र कथाका फाँटमा मात्र नभई उपन्यासका क्षेत्रमा पनि उनको योगदान स्मरणीय रहेको कुरा निर्विवाद रहेको छ ।

२०३४ सालको मदन पुरस्कार वरिष्ठ विद्वान् डा. वासुदेव त्रिपाठीलाई उनीद्वारा लिखित *लेखनाथ पौड्यालको कवित्वको विश्लेषण तथा मूल्याङ्कन* भन्ने ग्रन्थको लागि समर्पण गरिएको थियो । त्यस समारोहमा त्रि.वि.वि.का तात्कालिक उपकुलपति जगतमोहन अधिकारीले चौथो प्रवचनकर्ताको रूपमा प्रवचन दिएका थिए । उनको कथनमा राष्ट्रको गौरव र व्यक्तित्वलाई कुनै खास कालखण्ड र भूखण्डभन्दा पनि अरू परपरसम्म प्रोज्वल तुल्याउनमा त्यस देशको वाङ्मय विकासले प्रमुख भूमिका खेलेको हुन्छ भनेका छन् । अनुभूति र विशेषताहरू रहने हुनाले ती सबैलाई सामाजिक तथा राष्ट्रिय परिवेश र भावभूमिको आधारमा अभिव्यक्ति प्रदान गर्ने भाषा, संस्कृति र साहित्य नै हो भन्ने भनाइ उनको रहेको देखिन्छ। नेपाली समालोचनाको क्षेत्रमा उपयोगी ठहरिने उक्त ग्रन्थ उच्चशिक्षाका अतिरिक्त अन्य साहित्यिक व्यक्तिहरूलाई समेत कविशिरोमणि लेखनाथलाई बुझ्न र बुझाउन सुगम हुने कुरा उनले ठानेका छन् । डा. त्रिपाठीको प्रसिद्धिको क्षेत्रमा नेपाली कविता, निबन्ध र समालोचना विधा नै हुन् । साहित्यिक संस्था तथा सामाजिक संस्थासँग पनि सम्बद्ध उनको व्यक्तित्व उदाहरणीय छ ।

विशिष्ट साहित्यकार श्री ध.च. गोतामेका *घामका पाइलाहरू* भन्ने ग्रन्थका लागि २०३५ सालको मदन पुरस्कार समर्पण गरिएको समारोहमा प्रमुख अतिथि तात्कालिक ने.रा.प्र.प्र.का कुलपति लैनसिंह वाङ्देलबाट पाँचौं प्रवचन प्रस्तुत गरिएको थियो । देश भन्नु माटो मात्र होइन, मुटु पनि हो भन्दै फेरि साहित्य, कला र संस्कृतिको विकासले राष्ट्रको चिन्तन र बौद्धिक परम्परालाई मात्र होइन, राष्ट्रको समग्र गरिमालाई नै गौरवमय तुल्याउँछ भन्ने धारणा श्री वाङ्देलले राखेको देखिन्छ । यसलाई स्पष्ट पार्दै उनी अगाडि भन्छन्– “यिनको विकासले जनमानसको अभिव्यक्तिलाई प्रदर्शित गर्दछ किनभने ती

मुटुका स्पन्दनहरू हुन् ।" कुनै पनि राष्ट्र ठूलो वा सानोको महत्ताको कसी त्यसका साहित्य, कला र संस्कृतिमा हुन्छन् भन्ने विश्वास उनमा भएको देखिन्छ । त्यसैले क्षेत्रफलको दृष्टिले नेपाल सानो होला तर अरू विशाल राष्ट्रभन्दा कला र संस्कृतिको क्षेत्रमा यो अत्यन्त समृद्ध छ र यसको भाषा, कला र संस्कृतिको इतिहास पुरानो छ भन्ने विचार उनको देखिन्छ । नेपाली साहित्यमा विहङ्गम दृष्टि लगाउँदा गद्यभन्दा पद्यकै बाहुल्यता उनी देख्दछन् । उनलाई ता गद्य क्षेत्रमा उपन्यास विधा नै पछि परेको महसुस हुन्छ । उनका भनाइमा त्यसका लागि यहाँका सामाजिक विचित्रता तथा राष्ट्रिय एकताभित्र पाइने अनेक रमाइला र अनौठाका चित्रको कमी छैन । यस्ता विषयलाई लिएर उपन्यास लेख्न सकिन्थ्यो तर हुन सकेको छैन भन्ने सोचाइ उनको रहेको देखिन्छ। नयाँ प्रयोग र नयाँ मोड नै कला र साहित्यको विकासमा नयाँ गोरेटाहरू हुन् भन्दै यस्तै नयाँ विचार र चिन्तनबाट प्रभावित भएका उपन्यासकार श्री ध.च. गोतामेले साहित्यको नयाँ गोरेटोमा नयाँ पाइला थपिदिएको स्वीकारोक्ति वाङ्देलले दिएका छन्। नेपाली साहित्यको सन्दर्भमा यो यथार्थ र सत्य पनि हो भन्न सकिन्छ । उपन्यास, कथा, नाटक आदि विधाका लेखक श्री गोतामेले उपन्यास र कथाका क्षेत्रका बढी नाम आर्जन गरेका छन् ।

२०३६ सालको मदन पुरस्कार 'नेपालका प्रविधि' भन्ने ग्रन्थको लागि डा. छविलाल गजुरेल र करुणाकर वैद्यलाई समर्पण गरिएको थियो । सो समारोहमा लोकसेवा आयोगका तात्कालिक अध्यक्ष श्री कृष्णबम मल्लले छैटौं पटकको प्रवचन दिएका थिए। उनले प्रारम्भमा मदन पुरस्कारको महत्ता र रानी जगदम्बाबाट साहित्यका क्षेत्रमा मदन पुरस्कार गुठी स्थापना गरी उनले पुऱ्याएको योगदानको सराहना गर्दै पुरस्कृतलाई हाम्रो परम्पराको खोजी गरी हामीलाई तिनको योग्यतासँग परिचित गराएको कुरा इङ्गित गरेका थिए । देशको उन्नतिको क्रममा शिक्षा र साहित्य नै अग्रगामी विषय हुन् भन्ने भनाइ राख्दै श्रीमल्ल नेपालको वास्तुकला, मूर्तिकारिता र चित्रकारिताले पनि विश्वमा ख्याति प्राप्त गरेको कुरा आफ्नो प्रवचनमा स्विकार्दछन् । हाम्रो समाजमा बहुजनले बुझ्ने उनीहरूको

मस्तिष्कको विकास गर्न सक्ने र मनोरञ्जन गर्ने साहित्यले नै लाभदायक लक्ष्य प्राप्त गर्न सक्नेछ भन्ने धारणा उनको रहेको देखिन्छ । साथै साहित्यले नै ज्ञान र विज्ञानको बीचमा समन्वय ल्याएर समाजलाई बढी सुखी र सम्पन्न बनाउन सक्दछ भन्ने विश्वास उनमा छ । उनका यी धारणाहरू निश्चय नै समसामयिक पनि हुन सक्दछन् । परम्परागत प्रविधि र दन्त्यकथाको लेखनमा श्री करुणाकर वैद्यले राम्रो नाम कमाएका छन् भने विज्ञान-प्रविधि विषयको अनुसन्धान तथा लेखनमा विशिष्ठ शिक्षाविद्का रूपमा श्री गजुरेल नेपाली वाङ्मयमा एक सुपरिचित नाउँ हो ।

*नरसिंह अवतार* भन्ने ग्रन्थका लागि श्री जगदीशशमशेर राणालाई २०३७ सालको मदन पुरस्कार २०३८ सालमा समर्पण गरिएको थियो । उक्त समारोहमा सातौँ प्रवचनकर्ताको रूपमा पूर्व शिक्षा मन्त्री श्री रणधीर सुब्बा थिए । प्रवचनको सन्दर्भमा मदन पुरस्कार गुठीअन्तर्गत सञ्चालित मदन पुरस्कार पुस्तकालयको उद्देश्यको प्रशंसा गर्दै सय, दुई सय, हजार वर्षपछिका नेपालीहरूले यस सङ्ग्रहालयमा भएका २००७ सालदेखिका, पत्रपत्रिका, पुस्तक-पुस्तिका पढ्दा नेपाली वाङ्मयको इतिहासको खुड्किला पैल्याउन सक्नेछन् भन्ने आशा उनले व्यक्त गरेका थिए । उनका राजनीतिक मित्र श्री जगदीशशमशेरसँगको प्रतिभाप्रतिको अभिरुचि भएको कुरा गर्ने फुर्सद नमिले तापनि उनलाई थाहा भएका कुरा छर्लङ्ग्याएका थिए । मदन पुरस्कार पुस्तकालयको महत्त्व र यसबाट नेपाली वाङ्मयले पाउने बहुमूल्य उपयोगको सन्दर्भ सम्झनयोग्य नै छ । श्री राणा नेपाली साहित्यका क्षेत्रमा कवि, उपन्यासकार, निबन्धकार तथा समीक्षकका रूपमा परिचित छन् ।

२०३८ सालको मदन पुरस्कार प्राप्त गर्ने कवि मोहन कोइरालालाई उनको ग्रन्थ *नदी किनाराका माझी*को लागि २०३८ साल कात्तिक ४ गते आयोजित पुरस्कार अर्पण समारोहमा वरिष्ठ कवि केदारमान 'व्यथित'ले आठौँपटकको प्रवचन प्रस्तुत गरेका थिए । उनले नेपाली साहित्यको विधागत विकासको लागि मदन पुरस्कार गुठीले प्रस्तुत गरेको पुरस्कारको आधारभूमि झन्झन् मलिलो हुँदै गइरहेको कुरा बताउँदै यस्ता प्रोत्साहनबाट अधिकाधिक उर्वर हुँदै

गइरहेको नेपाली साहित्यको धरातलमा अङ्कुरित पल्लवित तथा पुष्पित भएका हाम्रा प्रतिभाहरू निश्चय पनि राष्ट्रकै कीर्तिस्तम्भ हुन् भन्ने भनाइ उनले राखेका थिए । उनले अगाडि थपेका थिए– पृथ्वीलाई ईश्वरबाट प्राप्त भएको सर्वोत्कृष्ट वरदान नै मनुष्यहरू भएकाले आजका साहित्यकारहरूले आआफ्ना रससिद्ध रचनाहरूमा सार्वभौम मानवतावादी युगकै मन्त्रद्वारको रूपमा स्वयम् आ-आफूलाई प्रतिष्ठा प्रदान गर्न सक्नुपरेको छ । साहित्यकारको लेखनधर्मप्रति इङ्गित गर्दै उनले अगाडि भनेका थिए– "दिगभ्रमित विश्वलाई रचनात्मकताको ध्रुवतर्फ उन्मुख हुन प्रेरणा प्रदान गर्ने साहित्यको निर्माण गर्नु नै आजका साहित्यकारहरूकै सबैभन्दा ठूलो धर्म नै हो भन्ने लाग्छ । कवि व्यथितले कवि कोइराला रससिद्ध शब्द-शिल्पी कवि कोइरालालाई सबैको र आफ्नो तर्फबाट बधाई दिँदै *नदी किनारका माझी* मा प्राप्त भएको सिद्धिले नेपाली नूतन काव्य-शैलीको इतिहासमा उनलाई केन्द्रीय सन् प्रदान गर्नेछ भन्ने आशा र विश्वास पनि लिएका थिए । कवि व्यथितबाट व्यक्त साहित्यिक भनाइहरू नेपाली साहित्यको विकासका लागि मदन पुरस्कार गुठीबाट प्राप्त प्रोत्साहनले खेलेको महत्त्वपूर्ण भूमिका नकार्न सकिँदैन भने अर्कोतिर साहित्य र साहित्यकारलाई दिएको सुझाव उपयुक्त र समसामयिक नै देखिन आउँछ । वरिष्ठ कवि मोहन कोइराला कविका रूपमा बढी परिचित छन् तथापि कविता, काव्य, निबन्ध र समीक्षा आदि विधामा पनि उनले कलम चलाएको देखिन्छ ।

*माधवी* भन्ने ग्रन्थका लागि वरिष्ठ लेखक श्री मदनमणि दीक्षितलाई २०३९ सालको मदन पुरस्कार समर्पण गर्न २०४० आश्विन २५ गते आयोजित समारोहमा श्री भूपालमानसिंह कार्कीले नवौँपटकको प्रवचन प्रस्तुत गरेका थिए । साधारणतः साहित्य क्षेत्र हामीहरूको जीवनबाट केही टाढा छ भन्दै उनले साहित्यले व्याप्त नगरेको कुन ठाउँ छ र ? भन्ने प्रश्न गरेका थिए। राजनीतिमा होस् कि सामान्य दैनिक जीवन साहित्यबाट अछूतो रहेर बस्न सक्दैन भन्ने भनाइ उनको थियो। धर्म चर्चा उनको एउटा रुचिको विषय भएकोले आफूलाई मन पर्ने ग्रन्थ *महाभारत*को एउटा प्रसङ्गलाई लिएर लेखिएको विद्वान् श्री मदनमणि दीक्षितको *माधवी* उपन्यास आफूलाई

राम्रो लागेको प्रसङ्ग पनि बताएका थिए । पौराणिक कुरालाई वैज्ञानिक यथार्थ प्रदान गरेर लेख्नु साँच्चै नै गाह्रो काम हो भन्दै त्यसमा दीक्षितलाई सफलता मिलेको र पुराणलाई समाज-सापेक्षरूपमा प्रस्तुत गरेको कुरा स्पष्ट पारेका थिए। सिंहको भनाइमा यथार्थता र सत्यताको अंश रहेको छ भन्न सकिन्छ । अक्षुण्ण पत्रकार तथा साहित्यकारका रूपमा परिचित श्री दीक्षितले उपन्यासका क्षेत्रमा विशेष प्रसिद्धि कमाएका छन्। हुनता उनको कलम कथा, उपन्यास, निबन्ध, स्वजीवनी र पौराणिक साहित्य र पत्रकारिता क्षेत्रका निबन्धमा पनि चलेको देखिन्छ ।

यसरी मदन पुरस्कार समर्पण समारोहमा उपस्थित विशिष्ट अतिथिहरू, विद्वान्हरू र साहित्यकारहरूद्वारा प्रस्तुत माथि लेखिएका र अन्य प्रवचनहरूमा प्रस्तुत अभिव्यक्तिहरूमा उल्लिखित नेपाली भाषा-साहित्य, इतिहास, विज्ञान आदि विविध विषय र तिनमा संलग्न पुरस्कृत व्यक्तित्वका धारणा र विचारहरू समष्टिगत रूपमा ज्ञानका बहुमूल्य स्रोतहरू हुन् भन्ने कुरा प्रमाणित हुन जान्छन् । नेपाली भाषा-साहित्य आदि विषयबारे रुचि लिने र त्यसबारे अध्ययन-अनुसन्धान गर्न चाहने सबैका लागि यी अभिव्यक्ति र धारणाहरूले भाषा, साहित्य, संस्कृति, विज्ञान आदि विषयको विकासमा महत्त्वपूर्ण भूमिका खेल्न सक्दछन् भन्न सकिन्छ ।

अस्तु !

# भानुभक्त र उत्तरआधुनिक जमाना

*– जगदीशशमशेर राणा*

पाण्डुलिपि र जनजिब्रोमा मात्र लुकामारी खेलेर बसेको भानुसाहित्यलाई करिब १२० वर्षअघि प्रकाशनमा ल्याउने मोतीराम भट्टदेखि आज भानुभक्त आचार्यसम्बन्धी अनुसन्धानको अभिलेख टङ्कण गरी प्रकाशमा ल्याउने डा. व्रतराज आचार्यसम्म 'भानु' सम्बन्धमा प्रशस्त लेखियो, मञ्च, चलचित्रदेखि जनकण्ठ गौरवको क्यासेट बन्धनसम्म भयो । यो हिमाल भेकका एक मुट्ठी साहित्य अनुरागीहरूले पुऱ्याएको सानू अनुदान होइन तर अब त नेपाली भाषा बोल्ने पढ्नेहरू पनि धेरै जान्ने भइसके, गाउँघर कुना-काप्चाकाले पनि स्तरीय विद्या प्राप्त गर्न थालिसके। मोतीराम भट्टले, विवाहहरूमा भटचाएको सुनेर बटुलेको भानु साहित्य स्नातक, स्नातकोत्तर, शोधपत्र र विद्यावारिधिको विषय बन्न पुगिसक्यो । यस अवस्थामा पुग्न भानुसाहित्यले कुन बाटो पार गऱ्यो भन्ने सङ्क्षिप्त टिपोट गरेर प्रस्तुत गर्न चाहन्छु, 'अब कुन कदम चाल्ने ?' भन्ने कुराको । सन् २०४४ को, गान्तोक भानुजयन्तीको स्मारिकामा यही प्रस्ताव सुमन चढाउन कलम चलाएको छु ।

- ☛ मोतीराम भट्टले भानुलाई पहिल्याए, परखे । अनि सके जति प्रचार र प्रसार गर्नमा पनि लागिपरे। १८९१ मा 'कवि भानुभक्त आचार्यको जीवन'को प्रकाशन गरे । भानुभक्तको जीवनी र कृति माथिको यो पुस्तिका, धेरै समयसम्म, धेरैले भानुभक्तमाथिको चिन्तन, मनन, खण्डन र टिप्पणीको आधार बनाए ।
- ☛ १८८४ मा भानुभक्तको रामायणको सुन्दरकाण्ड प्रकाशित भएपछि विद्वान्हरूबाट भानुभक्तीय रामायणको अध्ययन सुरु भयो । रूप-रसिकले रामायण पढ्न, सुन्न र भटचाउन लागे। नेपालभित्र र बाहिर चारैतिर छरिएर बसेका नेपालीभाषीहरूले पनि रामायणको स्वाद लिन र मर्म बुझ्न थाले ।

- नेपालकाले भानुभक्तको रामायणलाई आफ्नो भाषाको कविको काव्य मानेर बसे । दार्जिलिङमा भने बीसौँ शताब्दीको दोस्रो दशकदेखि भानुभक्तको रामायणले नयाँ जमर्को ल्यायो। यहाँका बासिन्दा र विद्वान्हरूमा नेपाली भाषाप्रति अत्यन्त अनुराग थियो । त्यसैले जागृतिको विगुल फुक्ने धरणीधर कोइराला, पठनपाठन र प्रकाशनका अग्रदूत पारसमणि प्रधान, भानुमा पनि प्रकाश थप्ने सूर्यविक्रम ज्ञवाली र नेपाली भाषामा अनन्य प्रेम र सेवामा सजग छिमलकाले भानुभक्तको जीवनीमात्र होइन, भानु साहित्यका विभिन्न पक्षलाई पनि समीक्षात्मक दृष्टिले मथ्न थाले ।
- यही मन्थनको छिटो उछिट्टिएर काठमाडौँ पनि पुग्यो । यसैको प्रसादस्वरूप, मैले पनि नौ वर्षकै उमेरमा, मेरा कान्छा बुबा ब्रह्मशमशेर ज.ब.रा. ले लेखेर प्रकाशित गरेको 'कवि भानुभक्त एउटा आलोचनात्मक निबन्ध', पुस्तकको रूपमा पढ्न पाएँ । यो अङ्ग्रेजी पाराको टीकाटिप्पणीको पुस्तक प्रकाशित भएको थियो । पढ्ने विद्वद्वर्गले 'दृष्टिकोण' थप्न पाए । त्यसबेलाको लागि यो नयाँ जमर्को थियो ।
- यसैबेला तिर, १९३९ मा, भानुकै सन्तान विष्णुमायाको *भानुभक्त मणिमाला* छापियो । एउटा अर्को आयाम ।
- एकातिर भानुभक्तको रामायण, नेपालीको सर्वप्रिय पुस्तक बनिसकेको थियो र यसले प्रकाशन र वितरणको हिसाबले सबै लेखकका पुस्तकलाई उछिनिसकेको थियो ।
- अर्कोतिर दार्जिलिङमा १९२४ मा 'नेपाली साहित्य सम्मेलन'को स्थापना भएपछि त भानु साहित्यको सबै पक्ष, चर्चा मनन र अध्ययनको केन्द्र बनेको थियो। यस संस्थामा, श्री सूर्यविक्रम ज्ञवाली, १९२४ देखि १९५४ सम्म सचिव रहनुभयो । उहाँ भानुभक्तका भक्त, कर्मठ प्रकाशक र दरिलो लेखक हुनुहुन्थ्यो ।

- १९४० मा दार्जिलिङबाटै *भानुभक्त स्मारक ग्रन्थ* प्रकाशित भयो। भानुभक्तमाथिको लेखन र अनुसन्धानको इतिहासमा यो ग्रन्थको विशेष स्थान छ। चारैतिर छरिएका भानु अनुरागी साहित्यकारहरूको भानुभक्तप्रतिको श्रद्धाञ्जलि, उद्गार, टिप्पणी, समीक्षाको यो ठूलै सँगालो थियो। 'भानुभक्त कवि तथा आदर्श पद्यानुवादक' र 'रामायण लेख्नाको भानुको उद्देश्य' बारे पुष्करशमशेरले, यस स्मारक ग्रन्थमा गरेको सूत्रात्मक टिप्पणी, अत्यन्त सारगर्भित छ। प्रकाशक मण्डलीको अथक सामूहिक प्रयास भए पनि यस ग्रन्थका लेखहरू व्यक्तिव्यक्तिका आफ्नै विचारहरूको सँगालो थियो।
- यो ग्रन्थ प्रकाशित भएको दुई वर्षपछि नै १९४२ को *शारदा* पत्रिकामा रामकृष्ण शर्माले 'टाक्सिएको..? नेपाली कविता' भन्ने चिन्तनपूर्ण लेख छपाए। अङ्ग्रेजीबाजको दृष्टिकोणले लेखिएको यो लेखले भानुभक्त र नेपाली साहित्यलाई नै 'हीनता भावको माला' लगाइदियो। राय फुटाउनु, मतमतान्तरको मन्थन प्रक्रिया सुरु गर्नु हो र यो गहन र गहकिलो अध्ययनलाई प्रेरणा दिने छुच्चो मन्त्र पनि हो।
- यसैको दुई वर्षपछि १९४५ मा नेपाल, खास गरी नेपालको शिक्षा विभागमा एउटा खलबली नै मच्चियो। नेपालले त्रिचन्द्र कलेज (पटना विश्वविद्यालयको मातहतमा रहेको त्यसबेलाको नेपालको एउटै क्याम्पस) मा नेपाली साहित्यमा 'अनर्स' को पढाइ सुरु गर्न, नेपालको शिक्षा विभागले प्रस्तुत गरेको माग पटना विश्वविद्यालयले मात्र होइन, यस प्रश्नको पुर्पक्ष गर्न आएको कलकत्ताको टोलीले समेत 'अनर्स स्तरलाई सुहाउँदो पुस्तक नेपालीमा लेखिएको छैन, यो खाँचो पहिले पूरा हुनुपर्छ' भन्ने निर्णय दियो। नेपालका सबै अग्रगण्य लेखक र अध्यापकले यो चुनौती स्विकारेर स्नातकोत्तरसम्मलाई भ्याउने ग्रन्थ लेख्न कम्मर कसे। शिक्षा विभागमा ('९७' साल

काण्डमा खोस्सिएर खार खाएका डाइरेक्टर जनरल मृगन्द्रशमशेर) पुन: बहाल भएका थिए। उनले दिलो ज्यान लगाएर होस्टेमा हैँसे थपे। यसै सामूहिक अभियानमा देवकोटाका *शाकुन्तल* महाकाव्यलगायतका ग्रन्थ, समका *भक्त भानुभक्त* र अन्य नाटक, रुद्रराज पाण्डेका उपन्यासहरू, पुष्करशमशेरका भाषा र व्याकरणसम्बन्धी पुस्तक आदि र पं. बाबुराम आचार्यको *पुराना कवि र कविता* लेखिए। बाबुराम आचार्यको यो अनुसन्धान र अन्वेषणको अमूल्य पुस्तक र पछि, यसैको पूरक पुस्तक *तुलनात्मक सुन्दरकाण्ड रामायण*ले, भानुभक्त र उनको कवित्व माथि अमूल्य दृष्टिकोण थप्यो। मोतीरामको *भानुभक्तको जीवनी* जस्तै बाबुराम आचार्यका यी पुस्तक पनि, पछिका लेखकहरूका लागि खण्डन, मण्डन, टीका-टिप्पणीको मूलाधार बन्यो।

आजसम्म नेपालकालाई 'भानु'सम्बन्धी कोसेली दिइराख्ने, दार्जिलिङका साहित्यकारहरूलाई नेपालबाट पनि गहकिलो 'भानु' कोसेली पठाइयो।

- ☛ जुहारी, जम्यो दार्जिलिङमा भानुप्रति एकलव्य भक्ति र अनगिन्ती लेखमाला प्रकाशन गरिरहने भाइचन्द्र प्रधानले *आदिकवि भानुभक्त आचार्यको आलोचनात्मक ग्रन्थ*को प्रकाशन गरेर १९९२ मा भानुभक्तको व्यक्तित्व र कृतित्वमाथि धेरै मार्मिक कुरा थपे।
- ☛ भाइचन्द्र जस्तै लागिपर्ने, दार्जिलिङकै अर्का कर्मठ नेपाली भाषा र साहित्यका अथक सेवक पारसमणि प्रधानले पनि *भानुभक्त ग्रन्थावली* र *भारती* पत्रिकाको वर्ष ३ अङ्क १ लाई भानुभक्त अङ्क प्रकाशित गरेर, भानु साहित्यको अध्ययनलाई ठूलो सघाउ पुऱ्याए।
- ☛ १९५६ मा हृदयचन्द्रसिंह प्रधानले नेपालमा छपाएको *भानुभक्त : एक समीक्षा*ले भानुभक्तको व्यक्तित्व र कवित्वमाथि अनेकौँ मुद्दा उठायो। सतही आलोचना

र बेटुङ्गोका तर्कहरू भए पनि यस पुस्तकले धेरैलाई कुतकुत्यायो ।

- यसको एकदम विपरीत, प्रकाशनमा आयो बालचन्द्र शर्माको *भानुभक्त* । चौडा घेरा बाँधेर गरेको यो भानुभक्त र उनका कवित्वमाथिको टिप्पणी गहन, गम्भीर र अध्ययनयोग्य छ। एक्लो लेखकको यो प्रयासले धेरैको मन र बुद्धिलाई छोए पनि, आफू प्रज्ञा-प्रतिष्ठानको उपकुलपति भएको बेला धेरैलाई बुटुलेर यी एक जना योग्य चिन्तकले सामूहिक लेखनको जमर्को लिएको भए अरु कुरा अर्कै हुने थियो ।
- १९६१ मा भानु साहित्यको विस्तारको क्षेत्रमा भानुभक्तकै कुलका नरनाथ आचार्यको *आदिकवि भानुभक्त आचार्यको सच्चा जीवनचरित्र*को प्रकाशनले आदिकविको जीवनी तथा काव्यकृतिको बारे विभिन्न नयाँ पक्ष थप्नुको साथसाथै, भानुबारे नयाँ दृष्टिकोण पनि पाठकसमक्ष प्रस्तुत गर्‍यो ।
- भानुभक्तसम्बन्धी अध्ययनहरूको उल्लेख गर्दा १९६९ मा भानु शतवार्षिकी प्रकाशनको उपलक्ष्यमा नेपाली साहित्य परिषद् दार्जिलिङद्वारा प्रकाशित ग्रन्थ *भानुभक्तका कृति : अध्ययनहरू*लाई बिर्सन सकिन्न । यो ग्रन्थ धेरे कुराले अत्यन्त महत्त्वपूर्ण लाग्छ । पहिलो कुरा त, यो ग्रन्थ, भानुभक्तकै अध्ययन, प्रकाशन र प्रसारमा वर्षौंदेखि लागेको संस्थाले गरेको शतवार्षिक प्रकाशन, दोस्रो कुरा, यस प्रकाशनमा, भानुभक्तकै विषयमा गम्भीर अध्ययन र मौलिक चिन्तन गरेर जिन्दगी बिताएका विद्वान् : १. मच्छिन्द्र प्रधान (भानुभक्तीय समालोचना) २. तारा गुरुङ (स्फुट रचना) ३. इन्द्रबहादुर राई (प्रश्नोत्तर) ४. अगमसिंह गिरी (भक्तमाला) ५. राजनारायण प्रधान (वधूशिक्षा) ६. कुमार प्रधान (रामायण) । यी सबैको अनुदान, यस ग्रन्थमा छ । यसरी प्रखर समालोचकहरू

मिलेर प्रस्तुत गरेको यस्तो उच्चकोटिको सङ्ग्रह, आजसम्म अरू प्रकाशित भएको छैन । के यो ग्रन्थ सामूहिक लेखनको प्रयास या नमुना होइन ?

☛ १९७२ मा नेपालको 'भानु प्रकाशन' (डिल्लीबजार, काठमाडौँ) ले ४०० पृष्ठको भानुभक्त विशेषाङ्कको प्रकाशन गऱ्यो। प्रौढ लेख, समीक्षा, टिप्पणी, श्रद्धाञ्जलि, भानु गोष्ठी, पुस्तक समालोचना, रचना विवरण आदिको यो बृहत् सङ्कलन, पछि नयाँ शताब्दी २००० मा प्रकाशमा आउने डा. व्रतराज आचार्यको अत्यन्त महत्त्वपूर्ण दुई ठेलीको प्रवर्तक हुनसक्छ ।

यो विशेषाङ्कका थुप्रै अध्ययन र खोजीपूर्ण लेखहरूमध्ये तीन लेखकका लेखहरूलाई औँल्याउन चाहन्छु ।

१. प्रा. चूडानाथ भट्टरायको भाषा र भानुभक्त-एक अनुशीलन (पृष्ठ २१) यो लेखसँग विद्वान् सर्वदर्शनाचार्यका भानुसम्बन्धी *प्रगति* पत्रिकामा छापिएका र *नेपाली* त्रैमासिक सङ्ख्या १४४ मा छापिएका लेखहरू, *भानुभक्त* अध्ययनको शृङ्खलामा अत्यन्तै मौलिक, चिन्तनशील र मननयोग्य छन् ।

२. गोविन्द भट्टको *भानुभक्त र आजको नेपाल* त्यस्तै महत्त्वपूर्ण लेख छ । प्रगतिशील साहित्यको आधारमा मूल्याङ्कन गरिएको यो लेख, अरूतिर छरिएका, भानुभक्तप्रतिको प्रगतिशील दृष्टिकोणसमेत मननयोग्य विषय हुन् ।

३. डा. वासुदेव त्रिपाठीको 'भानुभक्तको कवित्व, आफैँ प्रश्न' आज 'रौँलाई समेत चिरेर व्याख्या गर्न सक्ने' भन्ने ख्याति कमाएका यी वरिष्ठ विद्वान्ले भानुभक्तमाथि लेखेका अरू लेख पनि बटुलेर पढ्नेले नयाँ दृष्टि पाउने छ ।

☛ ७० को दशकमा भानुसम्बन्धी लेख, विशेषाङ्कहरू धेरै छापिए तर २०२२ मा प्रकाशित, मुक्तिनाथ आचार्यको *भानुको भावना* ग्रन्थ र कमला सांकृत्यायनको *भानुभक्त*

र *तुलसीदासको तुलनात्मक अध्ययन* महत्त्वपूर्ण कृति हुन् । दुवैले अध्ययनले आयाम थपेका छन् ।

- ☛ ८० को दशकमा गिरिराज आचार्यको *भानुभक्त र नेपाली भाषाको विकास* अनि सिक्किममा प्रकाशित १२ लेख-रचना भएको 'स्मारक ग्रन्थ' (भानुको सालिक स्थापनाको उपलक्ष्यमा) आसाममा प्रकाशित, जीवन उपाध्यायले सम्पादन गरेको *भानु* विशेषाङ्क आसामका नै विष्णुलाल उपाध्यायद्वारा सम्पादित– *दुगरा की महान विभूति* शङ्करदेव र भानुभक्तको तुलनात्मक लेख (आसामी भाषामा) ले भानुभक्त माथिको अध्ययनको क्षितिज, फराकिलो भयो ।
- ☛ यस अवधिमा भएका ग्रन्थ प्रकाशन, स्मारिका, विशेषाङ्क र करिब १५० लेखहरूको सूची डा. व्रतराज आचार्यले आफ्नो बृहत् र विस्तृत अभिलेख *आदिकवि भानुभक्त/लोकप्रियता र सामाजिक गतिविधि*को ठेलीको पृष्ठ ७६ देखि ८६ सम्ममा दिएका छन् । त्यसै अभिलेखको पृष्ठ ११ देखि पृष्ठ १०१ सम्ममा करिब दुई दर्जन लेखहरूको फुटकर लेखको सूची दिएका छन् ।
- ☛ नयाँ शताब्दी २००० प्रवेश गर्ने बेलासम्म भानुभक्तबारे लेखिएका साहित्यिक लेखहरू, जुनसुकै दृष्टिकोणले सङ्ख्यामा पनि गहन र लगनशीलतामा अत्यन्तै व्यापक देखिन्छन् ।
- ☛ नयाँ शताब्दीमा प्रवेश गर्नेताकका भानुभक्तबारे श्रव्य, दृश्य र सङ्कलनको क्षेत्रमा भएको महत्त्वपूर्ण कार्यको उल्लेख नगरी यो टिप्पणी पूरा हुन्न ।

१. चलचित्र- नेपालका प्रसिद्ध लेखक, गायक र फिल्म निर्माता यादव खरेलले भानुभक्तको जीवनीमाथि चलचित्र बनाए । कान र आँखा दुवैले एकपटक भानुभक्तको जीवनी हेरेर गरेको अनुभवको आफ्नै महत्त्व र प्रभाव हुँदो रहेछ ।

२. १९९४ मा बनेको भानुभक्त रामायणको क्यासेट कमलमणि,

रमेश खकुरेल र कोषराज न्यौपानेको अथक परिश्रम र म्युजिक नेपालको सौजन्यले बनेको १२ क्यासेटको महत्त्व अपूर्वको छ। वाल्मीकिको रामायण काव्यगुणले भरिएको शास्त्र थियो, अध्यात्मरामायण अध्यात्मवादको मनन योग्य काव्य दक्षिण-पूर्व एसियाकै साझा महाकाव्य भन्नु रामायणै हो । विभिन्न राष्ट्र, विभिन्न भाषा विभिन्न प्रान्तमा रामायण लेखिए तर भानुभक्तको रामायणजस्तो कैयौँ दशकसम्म जनसाधारणले गाएरै मात्र बाँचेको प्रधान रूपले श्रव्य काव्य अरू छैनन्। संस्कृतका छन्दको ग्रामीणीकरण र लोकलयमा पूर्णतया रूपान्तरण भएका अरू थोरै छन् । वास्तवमा नभट्याईकनै भानुको रामायणको रस पिउन पनि सकिन्न। कानैबाट पस्नुपर्ने यो रामायणलाई विभिन्न नेपाली कलकण्ठको कलरव बनाएर त्यसको स्वराङ्कन गरेर प्रसारित गर्ने कार्य सानो उपलब्धि होइन। यो कार्य सम्पन्न भएदेखि भानुभक्तलाई बुझ्ने र मूल्याङ्कन गर्ने क्षमता, रसिकहरूमा बढेको छ।

३. डा. व्रतराज आचार्यद्वारा सङ्कलित तथा सम्पादित दुई ठेली 'आदि कवि भानुभक्त'- विवरणात्मक सूचीपत्र र आदिकवि भानुभक्त लोकप्रियता र सामाजिक गतिविधिको अभिलेखले त अगाडिको शताब्दीलाई समेटेर आउँदो शताब्दीको सँघार कटाइदिएको छ ।

यत्रो गहकिलो परम्परा र भरपूर सामग्री प्राप्त गरेका हामीहरूले अब कुन कदम उठाउने ? यसैको चर्चा गर्न नै मैले लहरो तानेर यो भूमिका लेखेको हो ।

माथि उल्लेख गरेका र डा. व्रतराजले समेटेर प्रस्तुत गरेका सामग्रीको सूची बोकेर हामी आज नयाँ शताब्दीको द्वारभित्र प्रवेश गऱ्यौँ तर के आज हामी 'नयाँ' युगलाई टेकेर उभिएका छौँ त ? के भानुभक्तबारे अध्ययन अब नयाँ पाराले गर्नै पर्छ, नयाँ पाराले गर्न सक्छौँ ? यस प्रश्नको उत्तर खोज्न आजको उत्तर आधुनिक परिस्थितिका केही बुँदा उल्लेख गर्नुपर्छ ।

विद्युत्‌गति लिएर फैलिएको प्राविधिक विस्फोटले उघारेको छ– नयाँ युगको द्वार ।

एउटा उदाहरण– राजधानीको विश्वविद्यालयमा अध्ययन, अध्यापन, अनुसन्धानमा लागेर बसेका वरिष्ठ प्राध्यापक र मनाङको अनकन्टारमा माटो कोरेर जीविका चलाएका निरक्षर बासिन्दाले एकैपटक टेलिभिजनको पर्दामा उफ्रेर नाचेको माइकल ज्याक्सनलाई, आ-आफ्नै कोठामा बसेर देख्छन् । त्यो छायाङ्कनको प्रभाव, दुवैको मन-मस्तिष्कमा एकैचोटि पर्छ। दुवैलाई यो विद्युत्-विस्फोटनको युगले, नयाँ सामाजिक बन्धनमा बाँध्छ ।

आज नयाँ जमानाका हामीले अब भानुभक्त र उनको कृतित्वलाई परख गर्दा जमानाको प्रभाव त पर्ला नै तर कस्तो जमाना आयो ? चाहे शासन अँठ्याएर आफैं हैकम चलाउनेको दृष्टिले हेर, चाहे राजनैतिक, सामाजिक र आर्थिक व्यवस्थाको कमी-कमजोरी पहिल्याएर आ-आफ्नो स्वार्थसिद्ध गर्नेका दृष्टिले हेर, चाहे अन्याय र असमानता खप्न नसकेर चिच्च्याएका, उर्लिएका, तर्सिएकाहरूको दृष्टिले हेर– नयाँ युगको रूप त लखतरान अस्तित्व निराशावाद, तर्कविहीन परिस्थिति र आजसम्म बटुलिराखेको ज्ञानको धारणा बारे नै चित्तविभ्रम भएको मनस्थिति ।

के आज यसरी सर्वत्र फैलिएको परिस्थिति, मध्ययुगीन अन्योल र अन्धकारको द्योतक त होइन ?

तर यस्तो अन्योलको बीचमा पनि, नयाँ युगमा बाँचेकाहरूले रमाउने ठाउँ त धेरै छन्। उदाहरणको रूपमा चारपाँच बुँदा प्रस्तुत गर्दछु ।

- ☛ हामी, सांस्कृतिक क्षेत्रकाले रमाउने पहिलो कुरा हो उच्च र निम्न संस्कृतिको पारम्परिक धारणाको निर्मूल ।
- ☛ हाम्रो जिन्दगीलाई ढपक्क ढाक्ने गरी फैलिएको श्रव्य र दृश्य साधनहरूको चमत्कारिता ।
- ☛ अर्थ र अभिव्यक्तिबारे व्यापक चिन्तन तथा चिह्न, चिनारी र प्रतीकमा उत्रेको यो संसार ।

☛ मानवको चिनारी र परिभाषा बदलिँदै गएको अनुभव र बदलिनै उचित भन्ने आम चेतना ।

☛ "मानव जाति या मनु सन्तति" बारे हाम्रो कथनी माथि नै उठको तर्क-वितर्क र 'प्रगति' माथि नै उठेको तर्क-वितर्क । यस्तो स्थितिमा अब के ठीक ? आजको युगलाई परगेलेर नै लक्ष्य खोज्नु कि नयाँ जमानाबारे हामीले ठहर गरेको लक्षणलाई नयाँ युग माथि आरोपित गर्ने ?

उच्चकोटिको या संस्कारी या परिष्कृत भनाउने साहित्य या संस्कृतिको मान्यता या पुरानो परिभाषाले विशिष्ट स्थान ओगट्न छाडेपछि र ऊच-नीचको धारणा धराशायी भएपछि यस नयाँ युगमा, संस्कृतिको अर्थ र परिभाषा पनि सहस्रधारा बनेर फुट्न लाग्यो ।

यहाँ हाम्रो प्रसङ्ग भानुभक्तको व्यक्तित्व र कृतित्वको छ । हाम्रो चर्चाको विषय छ, हामी भानुभक्तका समीक्षक, समालोचक, अनुसन्धानकर्ताहरूको, यस नयाँ युगमा के दायित्व भन्ने । मेरो विचारमा, समालोचक या समीक्षकको मुख्य दायित्व नै, उत्तम कृतिको र त्यसका रचयिताको काव्यगुण या सौन्दर्यका विभिन्न पक्षलाई, पाठक या रसिकहरूको सामुन्ने प्रस्तुत र प्रसारित गर्नु हो ।

दिन-दिनको जिन्दगीको क्रयविक्रय र सामान्य परिधिदेखि ललितकला या साहित्यको नियम, गुण र क्षेत्र फरकै छ । काव्यको स्वायत्त क्षेत्र, आफ्नै खालको छ । आफ्नो औचित्य र अस्तित्व सिद्ध गर्न, या कलात्मकता या रसबोधलाई प्रमाणित गर्न कला या साहित्यले व्यावहारिकता, नैतिकता या कुनै आर्थिक या राजनीतिक हेतुको सहारा लिनुपर्दैन । कला र साहित्यको औचित्य खोज्नै परे लालित्यकै परिधिभित्र खोजे पुग्छ ।

प्राविधिक क्रान्तिले गर्दा, समस्त विश्वलाई एक नयाँ सामाजिक बन्धनले बाँधिसक्यो । यी सबैले गर्दा आज विश्वमा एलेक्ट्रोनिक गाउँ छिमेकको वातावरण फैलिइसक्यो । यस्तो परिस्थितिमा गए दिनको जस्तो साझा जनसंस्कृति या समुदायको संस्कृति भन्ने कुरा अब छैन । त्यसैले समुदायसंस्कृति खोज्नुको साटो संस्कृतिहरूको समूहलाई बुझ्नुपर्छ ।

एउटै दृष्टि या सिद्धान्त लिएर आद्योपान्त या विषयगत पुर्पक्ष गर्ने पारम्परिक पद्धति, विस्फोटनको यस नयाँ युगमा सार्थक रहन्न। आजको समीक्षकले त सर्वाङ्गज्ञानलाई अँगालेर, विचारका विभिन्न द्वारलाई खुला राखेर, विविध प्रतिक्रियालाई समेटेर, विषयको मूल्याङ्कन या पुर्पक्ष गर्न सक्नुपर्छ। बहुसूरता, बहुरूपता, विविधार्थ अभिव्यञ्जना नै आजको लालित्य तथा समीक्षाको स्वरूप हो।

अर्थहरूको पछिल्तिर विविधार्थ– सुर र तालको विस्तार सँगसँगै बहुस्वरता: स्वरूपहरूको प्रसारणमा विविधावली: फुरेको, यो टी.भी. को युगमा रसिकहरू एकै पाराले रसास्वादन गर्दैनन् । अनेकार्थ र बहुलवादको यस नयाँ युगमा विभिन्न वर्ग, समुदाय या व्यक्तिले आ-आफ्नै तरिकाले अर्थ्याउने या रसको स्वाद लिने गर्न थालेका छन् ।

गहन, गहकिलो, गहिरो चिन्तन र अभिव्यञ्जनाको महत्त्व थियो हिजोसम्म । आज, अहोरात्रको प्रचार र प्रसारको बिजुली चम्किन थालेपछि र रूप, आकार तथा विज्ञापनले मनुष्यको दृष्टि ढाक्न थालेपछि, दृष्टि-सृष्टिकै सिद्धान्तले पनि गहिरो भन्नु नै हामीले निरन्तर ग्रहण गर्ने श्रव्य-दृश्यको प्रभाव र सतही ज्ञानमा नै सार खोज्ने परिस्थिति आइसक्यो ।

अब फुर्किएर भानुभक्तकै व्यक्तित्व र कृतित्वको कुरा गर्दा पनि, अर्थ लगाएर व्याख्या गर्नुभन्दा अर्थको आधार खोज्नुपर्ने देखिन्छ। यसबारे नयाँ गुगले निरन्तर तल उल्लेख गरेका पक्षहरूको उत्तर खोजिरहेजस्तो लाग्छ ।

अर्थको स्रोत कहाँ रहन्छ? के यो, लेखकको कृतिबाटै उत्पन्न हुन्छ ? कि लेखकको कृतिलाई ग्रहण गर्ने प्रसङ्ग र परिपाटीबाट उब्जिन्छ? के पाठक, आफै अर्थ लाउन स्वतन्त्र छ? आफ्नो लेख या कृतिको अर्थ र परिभाषमाथि लेखकको कतिसम्म नियन्त्रण रहन सक्छ? के उपर्युक्त क्रियाकलापको अन्तर्क्रियाले नै काव्यको अर्थ पैदा गर्छ? गर्छ भने कुन तरिकाले गर्छ र कृति र अर्थको अन्तरसम्बन्ध के रहन्छ?

नयाँ युगका यी पक्षहरूको उत्तर सजिलै पाइएला जस्तो लाग्दैन– दर्शन र सिद्धान्तको एकलव्य पुर्पक्ष या अठोट असम्भव

भइसकेको आजको परिस्थितिमा। तर प्रश्नहरू नै चिन्तन र मननका भरपूर सामग्रीजस्तो लाग्छ । उत्तर तर्कवितर्कमा पाइएला जस्तो लाग्दैन तर प्रयोगमा नै समस्या समाधानका बुँदाहरू रहन्छन् भन्ने विश्वास गरेरै निम्नलिखित प्रस्ताव प्रस्तुत गरेको छु ।

मैले सुरुदेखि नै सामूहिक प्रयासको कुरा उठाएको छु, यस लामो लेखमा अब 'भानुभक्त- उनको व्यक्तित्व र कृतित्व'माथि अध्ययन ग्रन्थ तयार गर्ने प्रयोजन, प्रक्रिया र प्राप्तिबारे केही बुँदा प्रस्तुत गर्दछु ।

**आवश्यकता**

- ☛ नयाँ जमाना र नयाँ परिस्थितिबारे धेरै व्याख्या भइसक्यो। यस्तो बदलिँदो परिस्थिति र अधिकार हाम्रो साहित्यकार, समीक्षक, अनुसन्धानकर्ताले बटुलिदिएको सामग्रीको सदुपयोग नयाँ युगअनुकूल नै हुनुपर्छ ।
- ☛ आज भानुभक्तको विषय पढ्ने, पढाउने महाविद्यालय र विश्वविद्यालय धेरै खुलिसके । त्यहाँ पढाउन जान्ने शिक्षकले अध्ययन गरेर या काखी च्यापेर जान खुल्ने एउटा अध्ययन ग्रन्थको आवश्यकता देखिन्छ । धेरै विद्यालयमा 'भानु'को साहित्यिक कृतिको उचित अध्यापन हुन्छ भन्न सकिन्न ।
- ☛ विद्यार्थीले पनि एउटा समयानुकूल ग्रन्थ पढेर आफ्नो ज्ञान बढाउने या अध्यापकमा कुने कमी-कमजोरी भए, त्यसको पूर्ति गर्ने अवकाश पाउनुपरेको छ ।
- ☛ आजको उत्तरआधुनिक युगमा सामूहिक रचनाको महत्त्व, चारैतिर देखिन्छ । चलचित्र, दूरदर्शन, र निरन्तर देखिने विभिन्न किसिमका विज्ञापनहरूको सफलता, एक्लो निर्देशकमा भन्दा सामूहिक प्रयासमा निर्भर रहेको छ ।

आजको बदलिएको युगधारामा एकाङ्गी परिभाषालाई मानेर चल्ने जमाना बितिसक्यो। इतिहास होस्, साहित्य या संस्कृति होस्– सबै क्षेत्रमा खण्डन, मण्डन, द्वन्द्व-प्रतिद्वन्द्व परस्पर विरोधी विचरण,

असङ्गति सबैलाई समेटेर र अँगालेर चल्ने वातावरण बनिसक्यो। सामूहिक प्रयासमा यो समन्वय, सहमति र सहनशीलताको उत्तर आधुनिक संस्कारमा पच्छ।

सामूहिक रचनाको प्रयासमा समग्र रचनाकारहरूले अरूको विचारबाट सिक्ने र आफ्नो विचारको मन्थन गर्ने लाभ उठाउन सक्छन् र यसको लाभ पाठकले पनि पाउन सक्छन्। समीक्षा र प्रस्तुतिको बहुआयामिक स्वरूप युगानुकूल हुनेछ।

**प्रस्तावना**

पहिलो प्रयोग 'भानुभक्त अध्ययन ग्रन्थ'को तयारी बाटै गरौँ– निम्नलिखित कदमहरूको माध्यमबाट–

१. ग्रन्थको मोटाइ ३५० देखि ४०० पृष्ठ हुनु उचित हो।

२. यत्रो ग्रन्थमा १२ देखि १४ विषयका लेख रहनुपर्छ।

३. पहिलो लेखहरूले खाम्ने विषयको मस्यौदा तयार हुनु जाती।

४. अब लेखकगणको चयन निर्णय हुनुपर्छ। सो गर्दा लेखकको विद्वत्ता र लेखन क्षमता (आज यो कार्यको लागि धेरै विद्वान् उपलब्ध हुन्छन्) भन्दा यस कार्यमा संलग्न हुन तत्पर र हातहातमा लिने फुर्सद भएकासँग नै अनुरोध गर्नुपर्छ।

५. अनि विद्वद्मण्डलीको पहिलो सामूहिक बैठकमा विषयसूची तय गरेर, ककसले कुन-कुन विषयमा टिपोट या मस्यौदा तयार गर्ने भन्ने कुराको निर्णय हुनुपर्छ।

६. हरेक समीक्षाकार या लेखकले मस्यौदा तयार गरेपछिको, यो बैठक महत्त्वपूर्ण हुनेछ। जति दिन लगाएर भए पनि, हरेक विषयको मस्यौदामाथि चर्चा हुनु र रचनाकारले सुझावहरू सङ्कलन गर्नु आवश्यक छ।

७. यस बैठकको शृङ्खला सकिएपछि तर तद् लेखकले अन्तिम मस्यौदा तयार गरेर सामूहिक बैठकमा पढेर सुनाउने र सुझाव सङ्कलन गर्ने गर्नुपर्छ।

अनि प्रत्येक विषयका आलेखको गुरुलिपि तयार हुनुपर्छ

**प्रकाशन र वितरण**

प्रकाशन र वितरणमा प्रसारणको कार्यमा दक्ष व्यक्ति या व्यक्तिहरूले नै यस कार्यको अभिभारा बोक्नुपर्छ । लेखकसमूहले सम्हाल्ने काम यो होइन ।

# ‘जगदम्बा-श्री’ पुरस्कार र मेरो अनुभूति

*– जनकविकेशरी धर्मराज थापा*

स्वा. रानी श्री जगदम्बा कुमारीको स्मृति चिरस्थायी राख्ने उद्देश्यले मदनपुरस्कार गुठीद्वारा स्थापित २०२५ सालको पद्यसाहित्यतर्फको प्रतियोगितात्मक पुरस्कार मदनपुरस्कार गुठीकी स्थापिका स्व. जगदम्बाकुमारी राणाको शान्तशालीन व्यक्तित्व आजसम्म मेरो मानस पटलमा झल्मलाइरहेको छ । उक्त मदन पुरस्कार अन्तर्गत २०२५ सालको पद्यसाहित्यर्तको प्रतियोगितात्मक सो पुरस्कार आफ्नो सौभाग्य मैले प्राप्त गरेको थिएँ साथै उहाँप्रति विनीत बन्दै श्रद्धाका केही शब्दसमेत अर्पण गरेको थिएँ ।

त्यस दिन मलाई अगुवाइ गर्दै मेरा दुवै पाखुरा समाती मौसुफ रानी साहेबतिर अघि बढाउने नेपालका स्वनामधन्य विद्वान्हरू हुनुहुन्थ्यो– इतिहासकार श्री सूर्यविक्रम ज्ञवाली, अर्का भूगोलविद् मा. खड्गमान मल्ल मञ्चमा चाँदीको डिबिया बलेको दियो, जरी जडेको हरियो दुवाको माला र टीका, पुरस्कारको थैली भित्रीभागका गरुड अङ्कित पल्टाइएको पुस्तक चित्रमा मदन पुरस्कार लेखिएको नाङ्लीभित्र सजाइएको थियो । समारोहबीच जगदम्बा महारानीबाट सगौरव मदनपुरस्कार प्राप्त गर्दा मेरो हृदय सयपत्री फुलेझैँ हर्षले प्रफुल्लित भएको थियो । त्यसभित्र आर्थिक सहयोग र सम्मान दुवै मौजुद थिए । त्यस समय नेपाली वाङ्मयको श्रीवृद्धिका लागि साहित्य-सङ्गीतको मार्गमा बेधडक अगाडि बढ्ने प्रेरणाको अनुभूति सम्म भएको थियो ।

दिवङ्गत भैबक्सेका आफ्ना स्वामी ‘मदन’को पुण्यस्मृतिमा स्थापित मदनपुरस्कार गुठी वसन्तले नयाँ पालुवा हालेको बाक्लो छहारीले अथक परिश्रमी पथिकहरूलाई पसिना पुछ्ने चौतारीको काम गर्दै जान थाल्यो । त्यहाँ सहस्रौं मुजुरा हाल्दै-फुल्दै गरेका हाँगा-विँगामा व्यापक प्रतिष्ठाको मीठा-सुगन्धित फूल-फल लाग्दै गए । गुठीले पनि यसको जरामा मलजल राख्तै उत्साहपूर्वक यस संस्थालाई अघि बढाउँदै लग्यो । नेपाली वाङ्मयका चिन्तक र उत्कृष्ट साधकहरू प्रतिवर्ष नछुटाई पुरस्कृत बन्दै जान थाले । कलाकृतिका नयाँ बाली-नालीबाट

भकारीभित्र भित्र्याउने सुरले काँचुली फेर्न थाल्यो। मौलिक संस्कृतिका कविकलाकार आफ्ना सिर्जनालाई देशदेशावर फिँजाउने-चिनाउने काममा चमत्कार देखाउँदै रहे। जगदम्बा रानीसाहेबबाट जग हालेको मदन चौतारीमा एउटा वरमात्र रोपिएको बुझिन्थ्यो, अब वरलाई साथी पीपल पनि किन नरोप्ने भन्ने आशयमा मदनपुरस्कार गुठीले सँगै 'जगदम्बाश्री' पुरस्कार पनि स्थापित गऱ्यो। यसै क्रममा 'यो पुरस्कार कस्ता साधकलाई दिने ? के कस्तो प्रक्रियाबाट पुरस्कार सञ्चालित गर्ने ? इत्यादि जिज्ञासा राख्तै मदन पुरस्कार गुठीले विभिन्न विद्वान्हरूसँग रायसल्लाह र सुझावको समेत माग गऱ्यो। जसअनुसार विभिन्न सुझाव आए, सङ्कलित पनि भए। जसलाई एकत्रित बनाई छलफल भए! जसरी मदन पुरस्कारको प्रक्रिया फूर्तिसाथ अघि बढ्दै आयो, त्यसरी नै जगदम्बा श्री'को छनोटप्रक्रिया पनि आफ्नै उद्देश्यअनुरूप अघि बढ्ने भयो। राष्ट्रिय समृद्धिमा उच्चता हासिल गर्ने कुनै पनि प्रतिभाशाली साधकलाई यो पुरस्कार प्रदान गर्न सकिने भयो। यी पुरस्कारहरूले परस्पर कुनै भेदभावमा छेकेवार हाल्ने काम भएन। यसरी राष्ट्रिय तहका पुरस्कारहरूमा मदन र जगदम्बाश्री पुरस्कार सादर सम्मानित हुँदै आएका र अविच्छिन्नता कायम गर्दै आएका कुरा अनुरोध गर्छु।

'जगदम्बा-श्री' पुरस्कार मौसुफ महारानीको वि. सं. २०४५ मा स्वर्गारोहण भएलगत्तै उहाँकै पुण्यस्मृतिमा विधिवत् स्थापना भएको हो। यसको परम्परा नेपाली वाङ्मयमा श्रव्यदृश्य अरू कुनै पनि कृतित्वबाट नेपालीको श्रीवृद्धिमा विशेष योगदान पुऱ्याउने व्यक्ति वा संस्थालाई यो पुरस्कार प्रदान गरिने परम्परा कायम भयो।

यसप्रकार २०४५बाट प्रारम्भ भएको यो पुरस्कार विभिन्न प्रतिभा र संस्थालाई प्रदान गरिँदै आएको कुरा स्मरणीय छ। यसै क्रममा मैले पनि आफ्नो योगदान र साधनाको कदर गरेको अनुभूति पुरस्कार प्राप्तिबाट महसुस गरेँ, जुन पुरस्कार वि. सं. २०५८ मा प्राप्त गरेको थिएँ। मलाई दिइएको अभिलेखमा लेखिएको थियो– 'श्रव्य-पाठ्य विभिन्न माध्यमबाट आधा शताब्दीभन्दा लामो अवधिसम्म नेपाली भाषाको उत्कृष्ट सेवा गरी नेपाली वाङ्मयको श्रीवृद्धिमा बहुमुखी विशिष्ट योगदान गरेबापत' इत्यादि।

यो पुरस्कार प्राप्तिपश्चात् मेरो मनमा आधा शताब्दीअघिको जीवनयात्रा झुल्किन पुग्यो। त्यो समय मैले गोरखा भाषा परिषद्का अध्यक्ष सरदार राममणि दीक्षितज्यूकै निकटमा रही भाषा-साहित्य सङ्गीतसेवीको रूपमा 'जनकवि' को लोकप्रियता हासिल गरेको थिएँ। एक दिनको कुरा– राममणि, चक्रपाणि चालिसे, कविशिरोमणि लेखनाथ, ख. बाबुराम आचार्य, मा. खड्गमान मल्ल, पुस्करशमशेर सागरमणि आ. दी., बालकृष्ण सम, लक्ष्मीप्रसाद देवकोटा, पं. बदरीनाथ भट्टराईसँगै नेपाली भाषा प्रकाशिनी समितिमा बसेका थिए। *बञ्चरो* पुस्तिका प्रकाशन दर्तानिम्ति त्यहाँ म पुगेको थिएँ। यो अड्डा घण्टाघरसँगै त्रिचन्द्रको भुइँतलामा थियो। मसँग छापिएको *रत्नजुनेली* र नछापिएको पाण्डुलिपि *बञ्चरो* थियो। दुई-चार कुरापछि– 'लौ कविता सुनाउनोस्' भनी खर्दार बाजेले भन्नुभयो। अनि 'रत्न जुनेली' लय हालेर मैले कण्ठाग्र सुनाएँ। त्यही बेला कलेजबाट ऋषिकेश शाह पनि आउनुभयो। मेरो काव्यशैली र स्वरमा लक्ष्मीप्रसाद देवकोटा र ऋषिकेश शाह दङ्ग पर्नुभयो। त्यसैबेला खर्दार बाजेले भन्नुभयो– कास्की पोखराका बालकहरू सानैमा नै कवि हुन्छन्। उहाँको कुरा सुनी लेखनाथले भन्नुभयो– 'हाम्रो माया त सेतीको शिरकालीलेकमा फुल्ने लालीगुराँस नै हो' (राममणिज्यूले तत्कालै आफ्नो घर 'शान्ति निकेतन'मा आउन बोलाउनुभयो। त्यसपछि म राममणिज्यूको घर पुगेँ। उहाँले आफ्नो व्याकरण ग्रन्थ 'मातृबोलीको स्वाँग' पुस्तक वितरणको आयोजना गर्नुभएको रहेछ त्यो दिन। यो पुस्तक हलन्त बहिष्कारको भाषालेखन गर्ने विषयको व्याकरण ग्रन्थ रहेछ। उहाँले जनकवि धर्मराज थापालाई उपहार .... हस्ताक्षर साथ सो पुस्तक मलाई दिनुभयो। जो अद्यापि मेरो सङ्ग्रहमा छँदै छ। यसरी सरदारबाजे राममणिज्यूबाट झाँगिँदै गएको सम्बन्ध पाटन श्रीदरबारस्थित उहाँका नाति-पनातिसम्म आइपुग्यो– यो पनि पूर्वोआर्जित सौभाग्यकै कुरा हो।

वि. स. २००८ सालको कुरा हो, त्यतिखेर म ठमेलको डेरामा थिएँ। त्यही 'नेपाली लोकगीत सङ्ग्रहालय' संस्था हामी– धर्मराज थापा, पासाङ् गोप्पर्मा, काजीमान कन्दङ्वा, लक्ष्मण लोहनी, प्रदीप रिमाल, सत्यमोहन जोशी, टेकबहादुर आदि भई खोलेका थियौँ।

सल्लाहकार हुनुहुन्थ्यो लक्ष्मीप्रसाद देवकोटा, केदारमान व्यथित र बालचन्द्र शर्मा अनि कोषाध्यक्ष नरेन्द्रमणि आदि । यो संस्थाबाट लोकसाहित्यिक ऋतुपत्रिका *डाँफेचरी* प्रकाशित हुन्थ्यो । यसै क्रममा भैलो खेली अर्थ सङ्कलन गरी पत्रिकालाई नियमितता दिँदै अघि बढाउने भन्ने निर्णय भयो । यसै समयको कुरा भारत दार्जिलिङ घुमपहाडबाट नेपालमा नै जाऊँ भनी आएका दुई युवक 'हर्ष स्याङ्बो' र 'निर्मल लामा' मेरो डेरा ठमेल आइपुगे । हर्ष स्याङ्बो बी. ए. पढेको, चलाख युवक थियो । मैले *डाँफेचरी* प्रकाशनमा उसबाट पनि लेखपढको केही सहयोग लिएँ । ऊ कविता पनि लेख्तथ्यो । हाम्रो निर्णयानुसारको भैली कार्यक्रममा केदारमणिज्यूले गरेको सङ्घनी अझसम्म पनि मलाई सम्झना छ । उहाँ लोकगीत-लोकलयको औधी प्रेमी व्यक्ति हुनुहुन्थ्यो । प्रत्येक वर्षको दीपावलीमा (तिहार) दुर्गामानसिह बस्नेत र झलकमान गन्धर्वहरूलाई जम्मा गरी 'लोकलहरी' रेडियो कार्यक्रमबाट झ्यौसी र भैली प्रसार गर्ने परम्पराको थालनी मबाट नै भएको थियो । यस कार्यक्रमलाई 'राजा तारकबहादुर शाह'ले हरेक वर्ष झ्यौसी-भैलो धर्मराज थापाको स्वरमा चलाऊ भनी फर्माइस पठाउनु-हुन्थ्यो । त्यस्तै तीजका नारीस्वरका गीतप्रति पनि उहाँको ठूलो मोह थियो ।

यसै समयको कुरा हो, कवि गोपालसिंह नेपालीको नेतृत्वमा भारत सरकारले एउटा सांस्कृतिक टोली पठाएको थियो । त्यसको स्वागतकार्यक्रम तात्कालिक 'नेपाल सांस्कृतिक परिषद्, केशरमहल' द्वारा हुने भयो । यस परिषद् व्यक्ति हुनुहुन्थ्यो– माधव घिमिरे, लक्ष्मीप्रसाद देवकोटा, कविशिरोमणि लेखनाथ, बालचन्द्र शर्मा, भवानी भिक्षु, नरेन्द्रमणि इत्यादि । त्यहाँ म पनि सम्मिलित थिएँ । कवि गोपालसिह नेपालीको 'नूपुर शब्द रसाल' पुस्तक पनि मैले पढ्ने मौका पाएँ । यस काव्यका केही कविता सुमधुर कण्ठबाट उनले सुनाएँ। मैले पनि गाएँ। अन्य कविहरूबाट पनि कविता पाठ भएको थियो। स्वागत समारोह निकै आकर्षक तथा सुमधुर थियो, सन्तोषजनक थियो । गोपालसिह नेपालीले सुनाएको एउटा कविताका केही टुक्रा–

*झिर् मिर् झिर् मिर पानी पर्छ*
*बादलमा बिजुली चम्कन्छ,*

*झन् झन् मन यो गम्कन्छ ।*
*म सम्झन्छु तिमीले सम्झे*
*झन् मेरो मन कस्तो होला ?*
*तिम्रो दिलमा बस्न पाए*
*हाम्रो जीवन कस्तो होला ?*
*म पश्चिमको कालो बादल*
*तिमी बादलको बिजुली चञ्चल*
*तिमी सँगसँगै उड्न पाए*
*हाम्रो आँगन कस्तो होला ?*
*म सम्झन्छु....*

यसरी गोपालसिंह नेपालीले गाउँदा कलकत्ताको एक जना सेठले आफ्नो कन्तुर खोली असर्फी लुटाएको थियो र त्यस्तै गरी मैले खस्यौलीमा अनुकरणमा म पुग्नविता बन्न पुगेँ यो अनुकरण भारतमा सुनाउँदा पुलको घाटमा पोखरा उपल्लो ह्याङ्जाबेसीको एक जना निरज कविझैँ लाग्यो मलाई ।

साहूले थालभरि चाँदीका डबल ल्याएर गीतश्रोताको बीच हुर्र्याइदिई रुपियाँ लुटाएको थियो । गोपालसिंहको कविता सुनाएको र खस्यौलीको रुपियाँ लुटाएको घटना अझै मलाई ताजै छन् ।

नेपालको पुरानो जमाना सरदार राममणि र लेखनाथको पालासम्म पनि झ्याउरे लोकगीतहरू गाउने बाहुन, छेत्री तहका गायकलाई झ्याउरे' 'कत्थके' र 'भाँडकवि' भनी होच्याउने उडाउने गर्थे । स्वयं कवि लेखनाथले आशुकवि शम्भुप्रसाद ढुङ्गेललाई 'भूतनाथको भर्त्सना कवितामा व्यङ्ग्य गरी बोलेका छन्–

*भाँड झैं मनपरी गरि गाली*
*झ्याउरे सकुश लेख निकाली*
*नाम खूब रहला पछिसम्म*
*हाँसनु कि रुनु हाय अचम्म ।*

यस्तो लोकलयप्रति भएको अवहेलना विशेषत: ब्राह्मण-क्षेत्री जातिमा नै सीमित थियो । लोकगीत गाउनु तल्लो वर्गका कामी, दमाईं, गाइने, भाँड जातिले मात्र हो भनिन्थ्यो । बाहुनले वेद पढ्ने

पढाउने, पण्डित जीवनी चौका चढ्ने, गुरुजी बन्ने हो । क्षेत्रीले सामान्य पढाइ गरी सैनिक सेवातर्फ लाग्ने, नभए गाउँघरको मुख्यौली समाल्ने, किसानी बन्ने ठूलोठालु गनिने हो भनिन्थ्यो । यस प्रकारको परम्परामा कोकिले कण्ठ निकाली स्वर किन्नरी बनी छोप्दै गाउँदा मानिसहरू हाम्रो परिवारमा धर्मराज छोरो बिग्रियो भनी कुरा लाउन पुग्थे । अनि बा-आमा मलाई तँ बेकारैको सन्तान होस् । गीताङ्गे बनी हिँड्ने होइन, राम्ररी पढ्नुपर्छ भनी खप्की दिनुहुन्थ्यो । सदर नेपाल खालको डिट्ठा होलास् भनी छोरालाई नेपाल पढ्न पठाए, छोरा त त्यहाँ गई गाइने गीत पो गाउन थाले छ । त्यो त बिग्रेछ भनी गाउँका ठूलाठालू मुखियाहरूसँग बाले गुनासो गर्नुहुन्थ्यो रे, मलाई लेखेको चिठीमा गुनासो पोख्दै बुबाले भैगो त गाउँ नआइज त्यहीँ बसेर गाइने गीत गाए हुन्छ भनी मनको बह पोखी लेखेको चिठी पनि पाएको थिएँ। मैले पनि सारङ्गी बोकी लाहुरेहरूका पुर्खौली वंश फलाक्तै कर्खा गाउने गाउँका गाइनेहरूलाई काठमाडौँ रेडियो नेपालमा ल्याई तालिम दिने, जागिरे बनाउने काम गर्न पाए राम्रो हुने थियो भनी सोच्दथेँ। यहीअनुसार गाउँका आफ्ना जातिमा सानातिना मुद्दा छिन्ने दुर्गे मिजारको छोरो झलकमान र लालबहादुर गाइनेलाई पोखराबाट काठमाडौँ ल्याई ती दुवैलाई राष्ट्रिय नाचघर र रेडियो नेपालमा जागिरे गराएँ। तीनका स्वर टेप गरी रेकर्डसमेत भराएँ "डाँफे र मुरली आमाले सोध्नलिन् नि" आदि गीत निकै प्रसिद्ध भए। खिमे गाइने भन्नेलाई चीन पुऱ्याएँ। नेपाली लोकबाजा सारङ्गीलाई माओत्सेतुङ्गको हातमा उपहारसमेत दिएँ । कास्की, पोखरा, लमजुङ्गका गाइने जतिलाई गर्रा-गन्धर्भमा परिवर्तन गराएँ, दाङ्गका बादी-बदेनालाई लैला-मजनु बनाएँ। डोटीका पातर्नीलाई अल्लो र भागोको रेसा बाती भाङ्गा बन्ने जागरनी पारेँ । तिम्रो चरित्र नै जीवनको जुवाहर हो भन्ने गीत गाउँदै नृत्य गर्ने कला सिकाएँ। यसरी नै गोरखाराज्य गाजेमाजेको साँचो अर्कै भौतिक ज्ञान विज्ञानको चेतनातर्फ लगाउँदै श्रव्य, पाठ्यको मैदानतिर दगुराउने विगुल फुक्न लगाएँ ।

लोकगीत के हो ? श्रव्य-पाठ्य दुवै विधा अँगाल्ने विशिष्ट मौलिक अभिव्यक्ति हो। यसैले लोकले विशेष मन पराई लोक हृदय

आकर्षित गरेको विशिष्ट साहित्यको तहमा देखा परेको छ । एउटा लोककलाकारले मञ्चमा अभिनय गर्ने थलोमा पुगेर लोक लय अलाप्न थाल्यो भने उसको हाउ-भाउ अथवा अभिनय कलामा श्रोता वा दर्शक वर्गहरू ज्यादै आकर्षित बन्न पुग्दछन् र मुग्ध बन्दछन्। यसै कलात्मक प्रस्तुतिलाई शास्त्रीय कविकलाकार विद्वान्हरूले श्रव्य-दृश्य भन्दछन् । यो श्रव्य-पाठ्य विधा मानव चेतनालाई सिधै आकर्षित गर्ने विशेष कला हो । आधुनिक साहित्यमा दुवै कला एउटैमा पाइनु अलि गाह्रो पर्दछ र यो लोकप्रिय पनि देखा पर्दैन ।

आज जीवन भर श्रव्य-पाठ्य साहित्य विधामा समर्पित भई यसैको उपलब्धिस्वरूप जगदम्बा-श्री पुरस्कारसमेत मदन पुरस्कार तथा जगदम्बा-श्री पुरस्कार सम्मान पाएकोमा मदन पुरस्कार गुठी प्रति आभार व्यक्त गर्दछु । भविष्यमा लोकसाहित्य विधाले अझै फुल्ने फल्ने र झ्याङ्गिने मौका पाओस् लोकसाहित्यकारहरू सम्मानित हुँदै जाऊन् यही आजको लोकतान्त्रिक समावेशी समाजको माग हो, आकाङ्क्षा हो ।

# त्रि. वि. पद्मकन्या क्याम्पसका तीन वर्ष

*- ज्ञाननिष्ठ ज्ञवाली*

समय बितेको पत्तो भएनछ मलाई। हिजोझैँ लाग्छ काठमाडौँ आएको पनि तर आज बाह्र वर्ष बितेछन्। सुनौलो सपना सजाएर, अनेक हुरीहुन्डरी बताससँग बतासिँदै वि. सं. २०५२ मा काठमाडौँ पुग्दाका दिन सम्झदा रुसङ्ग हुन्छु म। सुरुमा काठमाडौँसँग सङ्घर्ष गर्दाका क्षणतिर दृष्टि पुऱ्याउँदा अनौठो पनि लाग्छ।

त्रि.वि. त्रिचन्द्र कलेजमा नेपाली विषय अध्ययन गरी स्नातकोत्तर तहमा सर्वप्रथम हुँदाको क्षण सम्झँदा सुखद अनुभूति हुन्छ। पछि रातो बङ्गला स्कूलमा पढाउन थालेपछि त्यहाँ पढाउने तरिका र आफूले पढ्दाको शैक्षिक स्थितिको तुलना गर्दा कता हो कता आफ्नो अवस्था पछि परेको लाग्छ। स्कूल पढाएको भन्दा पनि धेरै सिक्ने अवसर पाएकाले आफूले पनि पढेकै हो भन्ने लाग्छ।

त्रिचन्द्र कलेजमा नेपाली स्नातकोत्तर तहमा पाँच वर्ष आंशिक शिक्षक भएर प्राध्यापन गरेपछि त्रि.वि. सेवा आयोगबाट २०६२ साल असोज १७ गते आफ्नो सफलतापछिको उपप्राध्यापक पदमा स्थायी नियुक्तिको पत्र बुझ्न म बागबजारस्थित पद्मकन्या बहुमुखी क्याम्पसतिर हानिन्छु। क्याम्पसमा २०६२, २०६३ र २०६४ गरी तीन साल बिताइसक्छु मैले। ती वर्ष, दिन र समय सम्झँदा मलाई केही अचम्म लाग्छ केही स्वाभाविक पनि।

स्थायी भएर जागिर खान जाँदा अर्कै खालको ढुक्क हुँदो रहेछ। अझ भनौँ आफ्नैजस्तो। आंशिक शिक्षकका रूपमा पढाउँदा महिनाको दुई-तीन हजार त तलब हुन्थ्यो। त्यतिबेला आन्दोलन पनि भए। सहभागी पनि बनियो। आंशिकलाई करारमा नियुक्ति दिनुपर्छ पनि भनियो। तर अब स्थायी भएपछि त्यतातिर ध्यानै जान छाडेछ। आफू र आफ्नो तह परेपछि मान्छेले पछि फर्कन जान्दैन भन्छन्, त्यस्तै भएछ क्यार! मान्छे कति स्वार्थी! कति मतलबी! कति मौसमी!

छाडौँ यस्ता कुरा। स्थायी भए पनि गन्तव्यमा त पुग्न बाँकी नै भन्छन् सबैले। म पनि त्यस्तै भन्छु। आफ्नो जन्मभूमि सम्झन पुग्छु। आफ्नै घर आँगन, पानी, पँधेरो कति आनन्द ! खुल्ला दिलले हाँस्न, बोल्न र रमाइलो गर्न पाइने। सबै आफ्नैजस्तो। सहरमा कसैलाई कहिल्यै फुर्सद नहुने। एउटै घरमा बसेकासँग पनि डेरा सर्ने भएकाले परिचय नै नहुने। हरेक दिन, छिन पाइलापाइलामा हिसाबकिताब ! कस्तो यन्त्रवत् जिन्दगी !

पद्मकन्या क्याम्पस रमाइलो छ। नयाँलाई स्वागत गर्ने चलन पनि रहेछ। सम्पन्न नाम चलेको क्याम्पसमा पदस्थापन भएकाले म खुसी हुन्छु। "विद्यार्थी स्वार्थी छन्; पढाउनन्जेलमात्र हो, पढाउन छाडेपछि बाटामा भेट हुँदा पनि नमस्ते गर्दैनन्, यस्तै पेसा हो शिक्षक" यस्ता गुनासा सुन्न पाइन्छ शिक्षकहरूका। मेरा विचारमा त जमाना अब नयाँ आएका छन्। बन्द, हडताल, तालाबन्दी, जुलुस धेरै हुन्छन्। विद्यार्थीलाई शिक्षकले पो त के छ ? भनेर सोध्नुपर्छ। सम्मान खोज्नेले आफूभन्दा सानालाई पनि सम्मान गर्नुपर्छ भन्ने कुरा पनि बुझ्नुपर्छ।

जे होस्; पुरानो परम्परा अब भत्कन थालेको छ। अझ भनौँ भत्किसकेको छ। जमाना अब भत्काउनेकै छ। साहित्य भत्काउनेको, राजनीति भत्काउनेको, मानमर्यादा भत्काउनेको, जागिर भत्काउनेको, सबै भत्काउनेकै हातमा भएकाले भत्काउनेतिर लाग्दा उन्नति हुने देखिन्छ।

क्याम्पसमा समय बिताउने क्रममा पुराना प्राध्यापकहरूका आफ्ना गुनासा, नयाँका आफ्नै खालका व्यथा सुन्न पाउँछु मैले। पुराना भन्छन्–"नयाँले के जान्दछ र ?" नयाँ भन्दछन्– "पुरानाले ठाउँ छाड्न सक्दैनन्। सोचाइ नै नयाँ छैन।" नयाँ पुराना जेजस्ता भए पनि सबैमा आ-आफ्नै अनुभव छन्; ज्ञान छन; क्षमता र योग्यता छन्। यसर्थ सबै मिलेर अगाडि बढ्नुपर्छ। नयाँपुराना दुवैले दुवैबाट सिक्ने-सिकाउने वातावरण बनाउनुपर्छ। म यही निष्कर्षमा पुग्छु तर मेरो सोचाइ खासै कार्यान्वयन हुँदैन। तथापि मलाई गुनासो छैन। क्याम्पसमा त मैले धेरैसँग सङ्गत गरेर सबैलाई चिन्ने ठूलो मौका पाएको छु। हामी आर्थिक रूपमा पछि भए पनि मनका धनी छौँ तर

मनरूपी धन पनि खर्च गर्न कन्जुस्याइँ गर्छौं। हामी बोलीवचनमा पनि कपट गर्छौं । हामी सम्मानमात्र खोज्छौँ तर सम्मान दिन जानेका छैनौँ । यी सबैको एकमात्र कारण हामीलाई फुर्सद छैन आत्मीयता साट्न ।

मैले यहाँनिर एउटा ठूलो भूल गरेको पाएँ । क्याम्पसमा मेरा तीन वर्ष बिते तर कति दिन पढाएर बिते ? मैले यसको लेखाजोखा गर्नुपर्ने थियो । तथ्याङ्क मिलाउँदै हेर्नुपर्ने थियो । मैले रेकर्ड राखेको भए कति पढाइ भयो थाहा हुन्थ्यो, आफैले कति पढाएँ, बुझ्ने मौका पाउँथेँ तर जति पढाउनुपर्ने थियो त्यति पढाउन पाइनँ, सकिनँ पनि । विभिन्न बहानामा क्याम्पसमा पढाइ हुँदैनथ्यो ।

विश्वविद्यालयको शैक्षिक अस्तव्यस्तताले भनेजस्तो भएको छैन। पढाइ नसकिँदै परीक्षाको मिति तोकिन्छ। विद्यार्थी पढाइ कति भयो भन्ने नबुझ्दै परीक्षामा बस्न पुग्छ । अनि कस्तो परीक्षा ? कति नम्बर ? कुन श्रेणी ? कुन स्तर ? यस्ता कुराहरू त क्याम्पस पढाउने र पढ्नेलेमात्र बुझ्नुपर्छ। बुझेर मात्र के गर्नु, हाम्रो विश्वविद्यालयको परिपाटी नै परिवर्तन गर्नु आवश्यक देखिन्छ। विद्यार्थी र अन्य सबैको स्थिति यथावत् हुनेछ। हामीले आदर्शका कुरा गरेर फोस्रो आश्वासन बाँड्दै व्यवहारमा बहुरूपी बन्नुबाहेक अर्को विकल्प हुने छैन ।

पद्मकन्या क्याम्पसमा बिताएका मेरा तीन वर्षे अनुभव र अनुभूतिहरू धेरै छन् । सानातिना पनि छन् । केही रोचक र उल्लेखनीय पनि छन्। ती सबै समयक्रममा विशेष किसिमबाट प्रस्तुत हुने नै छन्। अहिलेलाई यत्तिमात्र।

✍

# नेपाली लोकसंस्कृतिमा रोदी र रोदीघर परम्परा

*– डिल्लीराम मिश्र*

नेपाली लोकगीत र लोकसङ्गीतको फाँटमा रोदी र रोदीघरको जमघटले महत्त्वपूर्ण योगदान दिँदै आएको छ । नेपाली लोकगीतका अनेकन उर्जामूलक स्रोततत्त्वहरूमध्ये रोदीघर पनि एक हो । आजका धेरै नयाँ पुस्तालाई रोदीबारे थाहा नहुन पनि सक्छ, तर ग्रामीण परिवेशलाई त्यागेर जो सहरमुखी भएर रहेका युवापुस्तालाई छोडेर सबै पुस्ता र भूगोलमा पुगेको नेपाली गीतसङ्गीत क्षेत्रकै सर्वप्रिय मनोरञ्जनात्मक लोकसुस्केरा नै रोदी हो। त्यसैले नयाँ पुस्ताको लागि रोदी र रोदीघर इतिहास बनेको भए पनि यसको परिचयलाई कुनै भूमिका बाँध्नु जरुरी चाहिँ छैन भने पनि हुन्छ। तथापि लोकगीत र लोकसङ्गीतको श्रीवृद्धिका साथसाथै सङ्गीतकर्मीहरू जन्माउनमा पनि रोदीघरको सर्वोपरी महत्त्व र स्थान रहेको छ। प्रत्येक आञ्चलिक सेरोफेरोका लोकसुस्केरा र लोकभाकाहरू जुनसुकै भूगोलका नेपालीहरूलाई मनपर्ने शृङ्खलाहरू नै रोदीघरका उपज हुन् ।

नेपाली लोकगीत र लोकसङ्गीतका चरम हिमायती गुरुङ र मगर समाजमा एकलौटी पेवा सम्झने रोदीलाई महत्त्वपूर्ण साँस्कृतिक निधिकै रूपमा लिने गरिन्छ । मानवशास्त्री, समाजशास्त्री र गुरुङ विद्वान्हरूकाअनुसार पनि गुरुङ भाषामा ‘रो’ भनेको सुत्ने र ‘धी’ भनेको घर हुन्छ । त्यहींबाट रोदीघर बन्न गएको हो । आधुनिक दृष्टिकोणले रोदीको परिभाषा गर्ने र खोज्ने हो भने पाश्चात्य संस्कृति समाजमा पाइने नाइटक्लबजस्तै रोदीघर पनि एउटा क्लव घर हो । यहाँ रोदी र घर अलग अलग कुरा होइनन्। यसरी नै उमेर पुगेका तर अधिकांश विवाह नभएका युवा-युवतीहरूबीच रमाइलो र नाचगान नृत्य गर्ने रोदी कुनै पनि सुविधा सम्पन्न कलवजस्तै रमाइलो र रसिलो हुने तथ्य आफैमा अर्थपूर्ण पनि छ। विशेष गरेर गुरुङसमाजमा रोदीलाई आफ्नो संस्कृतिको अभिन्न धरोहरका साथै महत्त्वपूर्ण निकायको रूपमा लिइन्छ। निश्चित उमेर पुगेका अविवाहित युवायुवतीहरू साँझ एकै ठाउँमा भेला भई नाचगान, गफगाफ र माया र प्रेमका कुरा गर्ने थलोलाई रोदीघर भन्ने गरिन्छ । यो रोदीघर एउटा गाउँमा

सबैलाई पायक पर्ने गरी सुविधायुक्त ठाउँमा निर्माण गरिएको हुन्छ । त्यसैले रोदीका सम्बन्धमा अविवाहित गुरुङ युवायुवती भेला हुने र र माइलो गर्ने साँझको थलो हो भनी आ-आफ्नो अध्ययनका क्रममा अध्येताहरू लेख्छन् ।

नेपाली रोदी वा रोधी लोकसंस्कृतिको तात्पर्इ मनोरञ्जनको साधनमात्रै पनि होइन भनेर सचेत गुरुङहरू नै भन्ने गर्छन् । अधिकांश गुरुङ गाउँबस्तीहरूमा मात्रै सिमित रहेको यो रोदी बस्न परम्परा अहिले केही वर्षयता आएर सिथिल भएको अनुभव जो कोहीले पनि गर्ने गरेको पाइन्छ । रोदी वा रोदीघर तरुनी तन्नेरीहरूको लगनगाँठो कस्ने थलो पनि हो । गुरुङहरूको प्रभाव र प्रेरणामा परेर मगरबस्ती भएका गाउँहरूमा पनि रोदी बस्ने परम्परा अध्यावधि छँदै छ । गुरुङहरूकै अनुसार पनि उमेर पुगेका तर अविवाहित केटाकेटीहरूलाई व्यावहारिक र आवश्यक शिक्षा दिने उपयुक्त थलो पनि रोदीघर हो । पहिलेपहिले गाउँघरमा मनोरञ्जनका साधन केही नभएको र दिनभरिको कामले लखतरान भएर घरमा फर्किएपछि खानापिना खाएर घरको काम सकेर एकै उमेर र छिमलका दौँतरीहरू एकै थलोमा जम्काभेट हुँदा कुरा गर्ने, गीत गाउने, नाच्ने र हाँसखेल ठट्टा गर्ने मन त भई नै हाल्छ । तरुनी-तन्नेरीहरू मादलको तालमा गीत झिक्न थाल्छन् भने बूढापाकाहरू तमाखु तान्दै त कोही धागो कात्दै रोदीमा सहभागी भइरहेकै हुन्छन् । तर पनि रोदीको मुख्य विषेशता भनेको चोखो माया पिरतीको बन्धनभित्र विभिन्न काम सिक्ने र सिकाउने हो भने त्यहाँ अनुभव पनि बाँडिन्छ । काममा व्यस्तताका कारण कोही कता कोही कहाँ भएकाहरू दिनभरि आफ्ना मनमा उठेका भावनाहरू रोदीघरमा पखाल्ने गर्दछन्। यसरी उकुसमुकुस भएका मनका बहहरू पोख्ने गर्छन् भने रोदीमा गाउने यो रोदी लोकभाका:

*हे आज मैले घाँस काटे खोलैको रङ्गिला*
*राजा चीनमा आजकै दिनमा*
*गाईको बाच्छी धायो*
*तिमी हामी भेट भयो, आदि*

रोदीघर श्रृङ्खलायात्रामा सहज सिर्जनाको धरातललाई अझ फराकिलो पार्दै कुनै पनि साँस्कृतिक सर्जकहरूले हरेक क्षेत्र र तप्काका लोककलाकारहरू अत्यन्तै उत्साहित भएर नयाँनयाँ सिर्जनाका साथ आफ्नै मौलिक बाजागाजाहरूको माध्यमद्वारा लोकप्रिय गीतहरू रोदीघरहरूमा मन्चन गर्ने गर्दथे र कतिपय ठाउँमा अझै पनि गरिँदै छ। रोदीघर र रोदी श्रृङ्खला इतिहासमा कालखण्ड बनेको वर्तमान अवस्थामा नयाँ युवा पीढीहरूको लागि रोदी के हो भन्ने मात्र सुन्न पाइयो, तर अनुभव गर्न पाइएन भन्नेजस्ता जनगुनासाहरू पनि छँदै छ। यसरी लोकसाहित्यको प्रवल ऊर्जा बनेको रोदी शृङ्खला पलायन हुनु भनेको समाजको विखण्डन पनि एउटा मूल कारक तत्त्व हो भन्नुपर्दछ। यसो भए पनि सामाजिक सेवालगायत अन्य कार्यमा मिलीजुली काम कसरी गर्ने र कसले के वहन लिने भन्ने व्यवस्था पक्षका कार्यहरू पनि रोदीघरमा हुन्छन्। सबै कार्यको लागि समन्वयकर्ताको भूमिका रोदीआमा र रोदीबुवाले गरेका हुन्छन्। गुरुङसमाजको नेतृत्वमूलक संस्था रोदीघरमा रोदीआमा र रोदीवुबाको स्थान अत्यन्त सम्मानजनक हुने गर्दछ भने रोदीमा आउनेहरूले जन्मदिने बाबु-आमालाई जस्तै माया गर्ने गर्दछन्। रोदीमा आउने युवायुवतीहरू पनि आफ्नै छोराछोरीसमान हुन्छन्। रोदीघरमा सहभागी हुने जो कोही केटाकेटीहरू पनि बिग्रलान्, पछि दुःख पाउलान् भन्ने डर र चिन्ता भइ नै रहने हुँदा उनीहरू सधैँ सर्तक पनि भइरहेका हुन्छन्। यो डर चिन्ता र सचेत रोदी र रोदीघरप्रतिको नैतिकता र इमान्दारी पनि हो। एउटै गाउँमा पनि एकभन्दा बढी रोदीघरहरू हुने हुँदा र रोदीआमाको समन्वयमा एक अर्को रोदीमा भ्रमण गर्ने एवं अनुभवहरूको आदान-प्रदान गरी रमाइलो अनुभूति पनि बाँड्ने गरिन्छ। रोदीमा सिकेका काम र अनुभवहरू गाउँ र समाजका खातिर बढी नै उपयोगी हुने भएकाले रोदीलाई महत्त्वपूर्ण स्थान दिइएको छ। फुर्सद पायो कि राडीपाखी बुन्ने कार्यमा हातहाल्ने कुरा रोदीको उद्गम स्थलमध्ये एक मानिने लमजुङ् जिल्लास्थित घलेगाउँ उत्तरकन्यानिवासी नर्मदा गुरुङ भन्छिन्- मैले यो काम रोदीमा नै सिकेको हुँ, दसैँमा पिङ बनाउनेदेखि लिएर सबै काम रोदीबाटै हुन्थ्यो। तर अहिले रोदी बन्ध भएकोले गाउँलेहरू मिलेर

पनि काम  गर्छन् । आजकाल भने रोदी बस्ने परम्परा बिस्तारै बिस्तारै लोप हुँदै र हराउँदै गएको सर्न्दभमा घरेलु उद्योगका निमित्त चाहिने मसिना कामहरू पनि टाढिँदै गएका छन्, जसलाई समय र परिवर्तनको उपहार नै भन्नुपर्छ ।

नेपाली लोकसंस्कृति र लोकगीत सङ्गीतको क्षेत्रमा गण्डकी प्रवेशको योगदान हिमशिखर जस्तै छ र यस क्षेत्रलाई यस विधाको उद्‌गमस्थल मानिन्छ । रोदीघर र रोदी लोकगीत गण्डकी अञ्चलकै उपज हो । नेपाल अधिराज्यमा जहाँजहाँ गुरुङ मगरहरूको बाहुल्य रहेको छ त्यहाँत्यहाँ रोदी लोकसंस्कृतिको पनि चोपिलो प्रभाव परेको छ । गण्डकीप्रदेश गुरुङहरूको पुरानो बस्ती हो भने बाह्रमगरातको केही भूभाग पनि यसै प्रदेशमा पर्दछ । नेपालका चौध अञ्चलहरूमध्ये नेपाली लोकसंस्कृति र लोकसाहित्यको क्षेत्रमा गण्डकी अञ्चल सपना द्रष्टा र स्रष्टामा पर्दछ । अझ भनौँ गण्डकी अञ्चलको लोकसंस्कृति हो । नेपाली लोकसंस्कृतिको मूलधारमा गण्डकी लोकसंस्कृति मौलाएको छ । गण्डकी अञ्चलमा लमजुङ्, कास्की, गोरखा र स्याङ्जा जिल्लाहरू गुरुङहरूको घना बस्ती भएका जिल्लामा पर्दछन् भने अग्रस्थानमा लमजुङ र कास्की रहेका छन्, गुरुङ सभ्यता र संस्कृतिको विकास भयो त्यहीँबाट । झन्डै एक दशकअघिसम्म अत्यन्तै प्रभावकारीरूपमा चलन-चल्तीमा रहँदै आएको रोदी साँस्कृतिक पक्ष यतिखेर कसरी लोप हुने भयो भन्ने नरमाइलो प्रश्न यसको महत्त्व बुझेका जो-कोहीको मनमा पनि उठ्न सक्छ । गुरुङ समुदायका शिक्षित गुरुङ वर्गका युवायुवतीहरू पनि रोदीमा विकृति देखा परेको तथ्यलाई स्वीकार गर्छन् । रोदीमा यसरी विकृति आएको सत्य पक्षलाई लिएर लमजुङस्थित भुजुङगाउँका एक समाजसेवी तीर्थबहादुर गुरुङ भन्छन्- रोदी हाम्रो जिज्युबाजेहरूको पालाको जस्तो रहेन, यसमा यतिसम्म विकृतिहरू आए कि त्यहाँ रमाइलो गर्ने नाउँमा बोका, राँगा काट्ने भोज भत्तेर खाने र पैसा नभए पनि रमाइलो गर्ने र उक्त ऋण तिर्न नसक्दा बाधासमेत बस्नुपरेको देखियो । हाम्रा जिज्यूबाजेहरूले अर्कै उद्देश्यका लागि चलाएको रोदी यसरी विग्रन गयो र पनि रोदीघर शृङ्खलामा गाइने एउटा रोदी भाखाको एक टुक्का–

*यो दाजुको मोहनी बोली*
*आजभन्दा सम्झुँला झन् भोलि बन्दाकोपीले*
*दाजुलाई चिनेको ढाका टोपीले,*

नेपाली मौलिक लोकगीत, सङ्गीत र लोकसंस्कृतिको सहज मनोरञ्जात्मक थलो रोदीघर शृङ्खलाहरूमा प्रस्तुत हुने अनेकन् लोक सुस्केराहरूमध्ये-

*गाउँबाट झरेर बेसी*
*मायालुलाइ लिएर परदेशी*
*रेलले उडायो*
*हितैको मायालाई दिल्ली पुऱ्यायो ।*

प्रस्तुत गीत विशेष गरेर रोदीघरमा बसेको माया प्रेमकै बरदान हो र किन पनि बरदान हो भने पहिले-पहिले रोदीघरमा पवित्रभावना र उद्देश्य लिएर वा राखेर जमघट हुने गर्दथ्यो । युवायुवतीहरूबीचको पवित्र प्रेमकै कारण केटी भगाएर लैजाने बढ्दो विकृतिले गर्दा पनि यसले प्रेमविवाहको स्वरूप धारणा गर्न पुग्यो । त्यसैकारण पनि उपयुक्त गीतको मर्म प्रस्तुत भएको हो । विशेष गरी गुरुङ र मगर समाजमा गरिने विविध पद्धतिका विवाहपरम्परा अनुरूप मूलत: रोदीघरलगायत मेलापात घाँसदाउरा र वनपाखाहरूको यात्रामा बसेको चोखो र सङ्लो मायाप्रीति नै प्रेमविवाह हो जसलाई रोदीघरको उपज मानिन्छ । गीतसङ्गीत भन्नु नै जनताका भाकाहरू कलात्मक रूपमा पैस्तुत गर्नु हो, तापनि यसभित्र रोदीघरको तादत्म्यतालाई पनि समेटिएको हुन्छ । प्रख्यात लोकगायिका एवं चर्चित रोदीघर परिवारकी संस्थापिका उमा गुरुङले रोदी, वनको चरी र तोरी हरियो गीत एल्बमबाट–

*पानी भन्दा सङ्लो छ यो माया,*
*नदीभन्दा लामो छ पिरती भन्दै मायालाई,*
*तोरी हरियो नौ जाले मायाको फेला परियो,*
*वनको चरी मनको झरी कसो गरी मन काट्छ विचरी,*

उपयुक्त लोकगीत स्वरकी शिल्पी उमा गुरुङले आफ्नो लोकभाका संस्कृतिलाई लोप हुन नदिन रून्डै वाइस वर्ष अघि रोदी परिवारको स्थापना गरी त्यसको संस्थापक अध्यक्ष समेत रहेकी थिइन् । रोदीनामक उनको गीति एल्बम यसैकै प्रेरणाको स्रोत हो । गुरुङ समाजमा रोदीघर रङ्मञ्चको महत्त्व कति थियो र कति छ भन्ने तथ्यलाई कुनै शब्दद्वारा प्रस्तुत गर्न पनि सकिन्न । बालकदेखि बूढाबूढीसम्म सबैको मन जित्न सफल रोदीले पर्वविशेषमा भेला भएर मादल र ऱ्यालीको तालमा आफ्नो मौलिक लोकसंस्कृतिलाई उकेरा लगाउँदै सुरिलो भाकाका दोहोरी गीतमा उमेर पुगेका युवायुवतीहरूले फनफन घुमी छमछम नाचेर गर्ने मनोरञ्जन साँच्चिकै मनोहारी मानिन्छ । रोदीघरले लेकबेसी भिरपाखासँग मितेरी गाँस्दै नेपाली लोकगीत र लोकसङ्गीत जगत्को ढुकढुकीभित्र विशेष गरी एकाधिकारको रूपमा गुरुङसमाजको अत्यन्तै लोकप्रिय संस्था रोदीघरहरूमा सबैले मन पराउने लोकगीतको शब्द संयोजन चेतन कार्की र गायक स्वरसम्राट् नारायणगोपाल र साथीहरूको स्वरबाट यो लोकभाका–

*हे हा हा*
*बहिनीको दया छ भने*
*रोदीघर दाइ नाच्यो नभने*
*गोर्देघारी टुसाएको बाँसको छोरा तामा*
*तन्नेरीलाई सोल्टी भन्ने मै बूढोलाई मामा,*

आजका युवा पीडीहरूले यो मीठो लोकभाकालाई यही भाकाको लयमा छमछम नाचेको हेर्न र देख्न नपाए पनि रोदीघरमा नाचेको सुखद अनुभव गर्न सक्छन्, तर हिजोआजका रोदीघरमा यस्ता रोदी भाकाहरू घन्कँदैनन्, केवल सस्ता गीतहरू मात्र गुन्जन्छन् । लमजुङ जिल्लास्थित लाकुरीबोटगाउँका एक युवक रूपप्रसाद गुरुङ ज्यादै नरमाइलो मानी भन्छन्– दाइहरूको पालामा त रोदी थियो रे, छ-सात वर्षजति भयो हाम्रो गाउँमा रोदी हराएको दुःखेसो पोख्ने रूपप्रसाद गुरुङले रोदी के हो भन्ने सुन्न मात्रै पाए, अनुभव गर्न चाहिँ पाएनन् । यस्तै रोदीघरलाई बन्द गर्ने अभियान नै सञ्चालन गर्नु

पर्नाको कारणबारे चौहत्तर वर्षीय तीर्थबहादुर गुरुङ पुनः भन्छन्– आजकालको जमानामा केटाकेटीहरू स्कूल पनि त जानुपर्‍यो। रोदीमा नियन्त्रण हुन सकेन र दस वर्षको उमेरका बालक पनि त्यहाँ पुग्ने भए। रातभरि रोदी चल्दा उनीहरूको पढाइ पनि बिग्रियो। मैले नै आइन्दा रोदी नचलाउने भनी मेरो गाउँमा बन्द गराइदिएँ। भुजुङगाउँमा रोदी बन्द भएको छत्तीस सालदेखि हो। पछि अन्य गाउँलेहरूले पनि यसको सिको गर्न थाले। जहाँ रोदी बन्द नै भइसकेको छैन त्यहाँ पनि खुलमखुला सञ्चालन गरिँदैन। यसको मुख्य कारण भनेको रोदी नदेखेका तर यस्तो र उस्तो भनी नाना प्रकारका शब्दहरूले कुरा लगाइदिँदा हुन सक्ने बदनामीबाट जोगिनु हो। रोदीमा एकप्रकारको जिम्मेवारी पनि हुन्छ। यसलाई गुरुङ समाजको आधारभूत भन्दा पनि हुन्छ, तर रोदी बन्द गरिँदा यसको असर समुदायलाई पर्दैन भन्ने प्रश्नमा गुरुङ भन्छन्– यसलाई पूर्ण रूपमा हटाइएको नै भन्न मिल्दैन जस्तो लाग्छ, हाललाई निरन्तरता मात्रै नदिएको हो। रोदी संरक्षण समिति, क्लब र संरक्षण समिति आदिले लिएका छन्। घाटुनाच पनि गुरुङसमाजको मौलिक लोकसांस्कृतिक निधि हो, कुनै समय यो पनि विभिन्न कारणबाट बन्द हुन पुगेको भए पनि हाल गाउँलेहरू मिलेर यसलाई संरक्षण समिति मार्फत् निरन्तरता दिइएको छ।

विशेषतः जुन बेला नेपाली समाजमा मनोरञ्जनका निमित्त आधुनिक साधन सामग्रीहरूको अभावजन्य थियो उतिबेलैदेखि नै रोदी लोकसंस्कृतिलाई पाश्चात्य नाइट क्लबको रूपमा समेत रहेको तथ्य केही गुरुङ विद्वान्हरूले पनि चित्रण गर्दै आएको पाइन्छ, तर यस भनाइप्रति असहमति जनाउँदै गुरुङ समुदायका शिक्षित युवायुवतीहरूले पाश्चात्यमा प्रचलित नाइट क्लबहरूसँग तुलना हुन नसक्ने अवस्था बताउँछन्। परन्तु रोदी लोकसंस्कृतिमा बसेर प्रशस्तै मात्रामा रोदीको प्रचुर अनुभवसमेत प्राप्त गरिसकेका सर्जकहरू रोदी भनेको केवल केटाकेटीहरू रमाइलो गर्ने थलोको रूपमा मात्रै मान्न भने कदापि तयार छैनन्। रोदीमा आफ्नै दिदीबहिनी, दाजुभाइ र आमाबाबुसमेत पनि सहभागी सदस्यको रूपमा एकै समयमा त्यहाँ नेतृत्व गरिरहेका हुन्छन्, तर यसको अलावा पाश्च्यात्य नाइट क्लबमा त्यस्तो हुँदैन र

नाइट क्लवमा जस्तो खुला र स्वच्छन्दता पनि त्यहाँ हुँदैन। यसो र यति हुँदाहुँदै पनि रोदीमा सामान्य विकृति देखापऱ्यो र विकृतिलाई बढावा दिएर बाहिरियाहरूले नानाभाँतिका चर्चा-परिचर्चा गर्दै र भन्दै हिँड्दा बढी नै बदनाम हुन पुग्यो र अब त बन्द पनि भयो भन्ने पक्षमा लमजुङ भुजुङ र लाकुरीबोटगाउँका रोदी सर्जकहरू दुःखेसो पोख्छन्। त्यसकारण नेपाली मौलिक लोकसंस्कृति रोदी परम्परालाई पाश्चात्य नाइटक्लवसँग तुलना गरेर हेर्न किमार्थ सम्भव छैन। रोदी लोकसंस्कृतिको उद्भव स्थल मानिएको गण्डकी अञ्चललगायत नेपालका लुम्बिनी, धवलागिरी, राप्ती र भेरी अञ्चलका मगरबस्ती भएका क्षेत्रहरूमा अझै पनि रोदीको रमाइलै जमघट हुने गर्दछ भने नारायणी अञ्चलको चितवनमा गुरुङहरूको रोदीको प्रभाव भनेको गण्डकी अञ्चलकै कारण हो। पूर्वाञ्चलको गुरुङ बस्ती भएका ठाउँमा रोदीको परम्परा भए पनि अहिले लोप भइसकेको छ। त्यसैले स्याङ्जा जिल्लाअन्तर्गत पञ्चमूल सिरुवारीको रोदीमा गाइने गीत–

*दरौ सिरुवारी*
*नचलाउँ कान्छो दाई जाल घरबारी*

त्यस्तै तनहुँको रिसिङघिरिङ्को रोदीघरमा गाइने उउटा चर्चित रोदी लोकगीत–

*तिमी पनि रिसिङको*
*हामी पनि रिसिङको*
*लाइदिऊँ माया एकै किसिमको*
*चोली दिउँला मखमले सारी दिउँला फाइवर*
*मै हुँ कान्छी रेलको डाइभर*

तथापि रोदी लोकसंस्कृति शृङ्खलामा गाउने जति पनि गीतहरू छन् ती सबैले नेपाली लोकगीतको राष्ट्रिय मूलधारलाई नै आत्मसात् गरेका छन्।

तसर्थ, नेपाली मौलिक लोकसंस्कृति र लोकसाहित्यकै धरोहरको रूपमा समाजमा परिचित रहँदै आएको रोदी लोकगीतपरम्परा आज आएर बन्दजस्तै नै भइसकेको छ। लोकसंस्कृति संरक्षणको रूपमा

विशेष गरेर गुरुङ, मगर, दुरा, दरै र थारू जातिलगायत सबै प्रकारका जनजातिहरूले आ-आफ्नै शैली र परम्परामा रमझम गर्दै आएको रोदी परम्परा लोप हुँदै जानुमा पनि समयले ल्याएको परिवर्तनको द्योतक मान्नुपर्दछ। समयले ल्याएको परिवर्तनको सोपानसँगै यस्तो हुनुमा पनि पहिले-पहिलेका मानिसहरू सङ्गठित समाजको रूपमा एकै ठाउँमा बस्दथे र बसाइसराइको सम्भावना पनि थिएन र त्यहाँ चिरस्थायी संस्कृतिपरम्पराको विकास र संरक्षण हुने गरेको थियो । झन्डै तीन दशकयता आएर समाजमा ठूलै विखण्डन र परिवर्तन आएको छ । समय जटिल बन्दै गएको छ र मानिसलाई फुर्सद ज्यादै कम उपलब्ध छ । बसाइसराइको कारण पनि तीव्र भएको र अत्यधिक मानिसहरू गाउँ छोडी सहरतर्फ र विदेशतर्फ पलायन भएबाट पनि समाजमा विभाजन आएको छ। यसबाट रोदी लोकसंस्कृति पनि पृथक् रहन सकेको छैन। यसका साथै पहिलेपहिले समाजमा मनोरञ्जनका साधनहरू थिएनन् र रोदी लोकसंस्कृतिलाई बढी महत्त्व दिएका थिए, तर विकासको क्रममा सञ्चारमाध्यमको रूपमा रेडियो र टेलिभिजन लगायत गीतिशृङ्खला बोकेका एलबमहरू पनि प्रशस्तै मात्रामा सार्वजनिक भइसकेको आजको अवस्थामा रोदी र रोदीघरको महत्त्वमा पनि ह्रास आएको छ। अहिले बाहिरी रमझम र आनन्द खोज्ने क्रममा समाजका युवायुवतीहरू पनि माउ गयो घमाउँदै बाछो गयो रमाउँदै भनेजस्तै गाउँ पलायन प्रवृत्तिको बढी नै विकास भएको यथार्थ हो । त्यसैले चर्चित लोकगायिका बिमाकुमारी दुराको स्वरलहरीलाई सम्झँदा यो पीडावोद झल्कन्छ–

*माइती जति अरब कोरिया*
*सून्य भयो गाउँपाखा खोरिया*

यो कुनै एउटा गाउँको समस्याबोध होइन नेपालका हजारौँ-हजार गाउँहरूको साझा पीडा हो। प्रस्तुत लोकगीतको मर्मबाट पनि रोदी लोकंस्कृतिको क्षेत्रमा पर्न गएको प्रभाव प्रष्ट हुन्छ भने रोदीघरको सहज उपजको रूपमा ऊर्जाशील भएर विकसित हुँदै आएको लोकदोहोरी भाका पनि यसको जीवन्त पक्ष हो । नेपाली लोकसंस्कृति र परम्पराको पहिचान लोकदोहोरी शृङ्खला अहिले

गाउँघर, भीर, पाखादेखि सहर, बजारसम्म मात्र होइन विदेशमा समेत आफ्नो लोकप्रियता आर्जन गरेको छ । लोकगीत र लोकदोहोरीसँग आवद्ध नेपाली कलाकारहरूको लागि यो एउटा सुखद र सकारात्मक पक्ष पनि हो । त्यसैले रोदीघर लोकभाकाको एउटा बोल–

*हे आज पनि रोदीघर आए*
*हितकारी मायालाई भेटाएँ*
आदि आदि ।

# नेपाली र हिन्दीका तद्भव शब्द

- डा. तुलसी भट्टराई

## नेपाली र हिन्दीको सम्बन्ध

आर्यपरिवारका आधुनिक भाषाहरूमध्ये नेपाली र हिन्दी दुवै भाषाका बीच अति निकट सम्बन्ध छ । यी दुवै भाषा संस्कृतिका सन्तान हुन् । विस्तृतताका आधारमा हिन्दी दिदी र नेपाली बहिनी नै हुन् भन्न सकिन्छ ।[1] नेपाली र हिन्दी दुईओटै भाषा एउटै आमाका सन्तान भएका हुँदा परस्पर धेरै समानता पाइन्छ । दुवैमा व्याकरण एवं शब्द-रचना-प्रक्रिया प्रायः समान छ । सङ्ज्ञाबोधक शब्द जो संस्कृतमूलक छन् दुईओटै भाषामा एकै प्रकारका छन् ।[2]

हुन त बङ्गाली गुजराती, मराठी आदि भाषाहरूको मूल आधार पनि संस्कृत नै हो तर लिपि फरक भएकाले नेपालीको विशेष सम्बन्ध हुन सकेको छैन। नेपाली र हिन्दी आपसमा सम्बन्धित हुने अर्को मुख्य कारण लिपिको समानता हो । देवनागरीलिपि भएका यी दुवै भाषाको विकासयात्रा एउटै समयसम्म सुरु भएको हो । यी दुवै भाषा इस्वी सन् दसौँ शताब्दीदेखि विकासयात्रा प्रारम्भ गरेर विभिन्न कालमा विभक्त हुँदै आधुनिक कालसम्म पुगेका छन् ।[3]

राम्ररी विचार गर्ने हो भने नेपाली र हिन्दीका पारस्परिक सम्बन्ध-स्रोत अनेकौँ पाइन्छन् । यी सम्बन्ध स्रोतमध्ये सांस्कृतिक आदान-प्रदान, वैवाहिक सम्बन्ध, राजनीतिक सम्पर्क, व्यापारसम्बन्ध, हिन्दी क्षेत्र नेपालीको अध्ययनस्थल हुनु, लिपिको एकता र समान पारिवारिक सम्बन्ध आदि मुख्य छन् । यस्तै अरू पनि कतिपय कारणहरू छन् जसले गर्दा यी दुवै भाषाका बीचमा घनिष्ठ सम्बन्धसूत्र

---

१. *ग्रियर्सनले संस्कृतकी भतिजीकी पुत्री मानेका छन् हिन्दीलाई । यसै आधारमा दुईटै भाषाको विकासक्रम स्थिति उस्तै हो ।*
*__भारतीय भाषा सर्वेक्षण__ (अनु. निर्मला सक्सेना) भाग- ९ (पश्चिमी हिन्दी), पृ. ३६ ।*

२. *डा. डिल्लीराम तिमसिना : __भाषा र साहित्य,__ श्याम प्रकाशन, पृष्ठ ५० ।*

३. *रामचन्द्र शुक्ल, __हिन्दी साहित्यका इतिहास,__ पन्द्रहवाँ संस्करण ।*

गाँसिएको छ ।[४] जस्तै– बङ्गाली, गुजराती, मराठी आदि भाषाको आधार पनि संस्कृत नै हो । तर लिपिमा फरक हुनाले नेपालीको विशेष सम्बन्ध यी भाषासँग कम्ती छ । हिन्दी र नेपालीका बीचमा विशेष सम्बन्ध हुने एउटा मुख्य कारण लिपिको समानता पनि हो । दुइटै भाषाको लिपि देवनागरी हो ।

नेपाली र हिन्दीको सम्बन्ध प्राचीन कालदेखिकै हो । यी दुवै भाषाको विकास यात्राको प्रारम्भ पनि प्राय: एउटै समयबाट भएको हो । यी भाषा इस्वी सन्को दसौँ शताब्दीबाट आफ्नो विकास यात्रा प्रारम्भ गरेर विभिन्न कालमा विभक्त हुँदै आधुनिक कालसम्म पुगेका हुन् । वास्तवमा नेपाली र हिन्दीको पारस्परिक सम्बन्धका स्रोत धेरै छन् ।

डा. डिल्लीराम तिमसिनाका अनुसार नेपाली र हिन्दीको क्षेत्र अलग-अलग हुनाले यी दुवै भाषामा समानताका साथसाथै असमानताहरू हुनु पनि स्वभाविक हो । दुई राष्ट्र दुई मुख्य भाषाहरू हुन् हिन्दी र नेपाली र हिन्दी भारतको राष्ट्रभाषा हो भने नेपाली नेपाल राष्ट्रको राष्ट्रभाषा हो ।

भाषाको रूप नेपालीको तुलना गर्दा नेपाली भाषाको इतिहास पुरानो हो । नेपाली भाषा राज-भाषाको रूपमा १७०० तिर नै विद्यमान थियो । सम्पूर्ण नेपालको एकीकरणपछि (वि.सं. १८३५ तिर) महाराजा पृथ्वीनारायणले नेपाली भाषालाई सम्पूर्ण देशको राष्ट्रभाषा घोषित गरेका थिए त्यसपछि आजसम्म नेपालको राष्ट्रभाषा नेपाली हो । हिन्दी सन् १९४८ पछिमात्र राजभाषा बनेको हो । दुवै भाषाको विकासक्षेत्र अर्थात्, भौगोलिक निकटता र लिपिको समानता भए पनि रूप, पद, ध्वनि, अर्थ आदिमा पर्याप्त भिन्नता पाइन्छ ।[५]

---

*४. पूर्णप्रकाश नेपाली 'यात्री', **राजागगनिराजको यात्रा,** प्रथम संस्करण ।*
*डा. डिल्लीराम तिमिसिना, भाषा र साहित्य, पृ. ५० ।*
*डा. कमला साङ्कृत्यायन, **दियालो,** वाङ्मयविशेषाङ्क, १००, नेपाली साहित्य सम्मेलन दार्जिलिङ, पृष्ठ ५२ ।*

*५. धीरेन्द्र वर्मा, **हिन्दी भाषाका इतिहास,** अष्टम संस्करण, पृ. ६९ ।*

## नेपाली र हिन्दीका शब्दसम्पदा

विभिन्न प्रकारका शब्दहरू मिलेर एउटा भाषाको शब्दभण्डार निर्मित हुन्छ । नेपाली र हिन्दीको शब्दभण्डारमा संस्कृत तत्सम शब्दहरूको महत्त्वपूर्ण स्थान रहेको छ। तत्सम शब्दपछि दोस्रो स्थान तद्भव शब्दको भए पनि तद्भव शब्द सामान्य जन-जीवनसँग विशेष सम्बन्धित हुने हुँदा प्रत्येक भाषामा फरक हुने गर्छन्। यसरी प्रत्येक भाषामा तद्भव शब्द तत्सम शब्दको अपेक्षा अरू जरा गाडेर रहने गरेको कुरा सबैले स्वीकार गर्नुपर्छ ।

प्रस्तुत लेखनको उद्घाट्य विषय नेपाली र हिन्दीका तद्भव शब्द रहेको हुँदा यहाँ यी दुवै भाषाका केही तद्भव शब्दहरूका बारेमा उल्लेख गरिने छ। कतिपय भाषाविद् (केही युरोपिय र केही भाषिक भारतीय) हरूले नेपाली भाषालाई 'हिन्दीकै एउटा बोली हो' भनेर केही संरचनाहरूका आधारमा देखाउन खोजेका छन् ।[६]

यथार्थमा यी दुवै भाषाको मूल स्रोत एकै ठाउँ संस्कृतमा पुगे पनि हिन्दी भाषा, गुजराती र पश्चिमी पन्जाबीबाट फरक भएझैँ नेपाली पनि हिन्दीबाट एकदमै फरक छ ।[७]

संस्कृत माताका दुई छोरी हिन्दी र नेपालीको प्रारम्भबाटै घनिष्ठ सम्बन्ध रहँदै आएको हो। नेपाली र हिन्दी एउटै आमाका दुई छोरी भएकाले परस्पर निकै समानता छ । व्याकरण एवं शब्दरचनाप्रक्रिया उस्तैउस्तै छ । सङ्स्कृतमूलक सङ्ज्ञावोधक शब्द पनि उस्तैउस्तै छन् ।

प्राय: नेपाली र हिन्दीमा तद्भव शब्दको प्रचलन भाषाको प्रारम्भिक विकासकालदेखि नै हुँदै आएको हो । प्राय: दुवै भाषाका देवीदेवता तथा सङ्ज्ञावाचक धेरैजसो नामहरू तद्भव रूपमा भन्दा तत्सम रूपमै प्रचलित छन् ।

---

६. *डा. विजयपाल सिंह, **सामान्य हिन्दी,** प्रथम संस्करण, पृ. १६ ।*
*चूडामणि उपाध्याय रेग्मी, **नेपाली भाषाको उत्पत्ति,** प्रथम संस्करण, पृ. ९० ।*

७. *'नेपालीमा एकवचनबाट बहुवचन बनाउने एकवचनान्त शब्दहरूमा 'हरू' जोडिन्छ । रामहरू, तिमीहरू...' आदि ।*

हिन्दी शब्दसमूहलाई मुख्य रूपबाट तीन श्रेणीमा विभाजन गरिएको छ :

१. भारतीय आर्य भाषाहरूका शब्दसमूह जसमा तद्भव र तत्सम छन् ।

२. भारतीय अनार्य भाषाहरूबाट आएका शब्द ।

३. विदेशी भाषाहरूका शब्द ।

हिन्दी शब्द-समूहको अर्को प्रकार यस्तो छ– १. तत्सम, २. अर्द्धतत्सम ३. तद्भव ४. अनुकरणवाचक ५. देशज ६. विदेशज ।[८]

नेपालीको शब्दसमूहहरूको विभाजन यस्तो छ :

मौलिक : तद्भव, तत्सम, देश्य ।

आगन्तुक : तिब्बती समूहबाट, आधुनिक आर्य भाषाहरूबाट, युरोपेली भाषाहरूबाट ।[९]

नेपालीमा र हिन्दीमा प्रयुक्त आगन्तुक शब्दमा अन्तर–

जुन भाषामा विदेशी अथवा आगन्तुक शब्दलाई जति धेरै समावेश गर्ने क्षमता हुन्छ त्यो त्यति नै उन्नत कहलाउँछ । अन्य भाषाका शब्दहरू पचाउन सक्ने क्षमता भएका कारण अङ्ग्रेजी भाषा विश्वमा उन्नत छ । विभिन्न आवागमन, व्यापार तथा अन्य कतिपय कारणबाट परस्परका भाषाभाषीहरूको सम्पर्क हुन्छ अनि परस्पर प्रभाव पनि पर्छ ।

नेपालीमा यद्यपि भारतसँग जति बाह्य देशसँग सम्पर्क भएन । भारतको जस्तो नेपालमा बाह्य देशको आधिपत्य पनि रहेन । तर पनि नेपालका निम्ति भारत छिमेकी मुलुकमात्र होइन । सम्पूर्ण सामाजिक, धार्मिक, सांस्कृतिक, शैक्षिक आदि यावत् विषयहरूमा यी दुई देशबीच अनादिकालदेखि दृढ सम्बन्ध रहँदै आएको हो ।

---

८. *ग्रियर्सन, **भारत का भाषा सर्वेक्षण,** खण्ड १, भाग १, द्वितीय संस्करण, पृ. २५० ।*
*डिल्लीरमण रेग्मी, **नेपाली भाषा और उसका साहित्य,** नेपाली राष्ट्रिय काङ्ग्रेस, काशी, पृ. १८ ।*

९. ***नेपाली भाषाको उत्पत्ति,** प्रथम संस्करण, पृ. ९५ ।*
***नेपाली भाषा र साहित्य,** द्वितीय संस्करण, पृ. ७५ ।*

फलतः भारतमा विदेशीहरूको आधिपत्य हुँदा नेपालमा पनि प्रभाव पर्नु स्वभाविक हो । फारसी, अरबी, अङ्ग्रेजी मूलका शब्द भारतमा प्रचलित भएपछि नेपालमा पनि प्रवेश गरे। तर पनि हिन्दी र नेपालीका आगन्तुक शब्दहरूको प्रयोगमा अन्तर छ । हिन्दीमा प्रचलित अधिकांश आगन्तुक शब्द तत्सम रूपमा नै प्रचलित छ । परन्तु नेपालीमा प्रचलित यस्ता आगन्तुक शब्द प्रायः तद्भव अथवा परिवर्तित रूपमा विद्यमान छन् ।

**फारसी मूलक**

| **नेपाली** | **हिन्दी** |
|---|---|
| कसाकस | कशमशक |
| कम्मर | कमर |
| कालीगड | कारीगर |
| कोसिस | कोशिश |
| चलाख | चलाक |
| जिरो | जीरा |
| तमाखु | तम्बाकु |
| धमाधम | दमादम |
| निम्की | नामकीन |
| नास्पाती | नाशपाती |
| परेज | परहेज |
| पाउजु | पाजेब |
| पिसाप | पेशाव |
| बक्सिस | बख्शिस |

**अरबीमूलक**

| | |
|---|---|
| अक्किल | अक्ल |
| किसिम | किश्म |
| किराई | किराया |
| तागिता | ताकीद |

| | |
|---|---|
| तयार | तैयार |
| दिक्क | दिक्कत |
| फत्तुर | फ़ूतुर |
| जुलुम | जुल्म |
| मोलाकाज | मुलाकात |
| हुकुम | हुक्म |
| मामोली | मामूली |
| तलासी | तलाशी |
| नोकर | नोकर |
| हजुर | हुजूर |

अरबी तथा फारसी मूलका यी आगन्तुक शब्दहरूको उद्धरणबाट प्रष्ट हुन्छ– हिन्दीमा प्राय: यस्ता शब्द तत्सम रूपमा विद्यमान छन् तथा नेपालीमा चाहिँ केही परिवर्तन भएका छन् ।

नेपालीमा केही परिवर्तनसँग प्रचलित हिन्दीका शब्द :

| | |
|---|---|
| अचम्म | अचम्भा |
| अलैँची | इलायची |
| अनौठो | अनूठा |
| कपर्दी | कबड्डी |
| घुर्की | घुड्की |

## १.४ नेपाली र हिन्दीका सङ्ज्ञा

हिन्दी र नेपालीमा सङ्ज्ञाको विभाजनक्रम प्राय: एकै प्रकारको छ– हिन्दीमा जसरी सङ्ज्ञाको प्रकारका सम्बन्धमा विवाद छ, नेपालीमा पनि त्यस्तै छ । सङ्ज्ञाशब्द प्राय: दुइटै भाषमा समान छन् । विशेषत: संस्कृत तत्सम मूलका शब्दहरूमा त्यति अन्तर छैन । क्षेत्रीय र भौगोलिक कारणबाट बनेका शब्दमा फरक हुनु स्वभाविक नै हुन्छ ।

## १.५ नेपाली र हिन्दीका सर्वनाम

हिन्दीमा सर्वनाम प्रयोगको दृष्टिबाट छ प्रकारका विभाजित पाइन्छ। यस्तै विभाजन नेपालीमा पनि छ। हिन्दीका मुख्य सर्वनाम यसप्रकार छन्– मै, तू, आप, यह, वह, सो, जो, कोई, कुछ, कौन, क्या। यसको नेपाली रूप यस्तो छ– म, तिमी, तपाईं, यो, त्यो, सो, जो, कोही, केही, को, के।

संस्कृत र नेपालीमा जुन सर्वनामहरूका अनेक रूप छन्, तिनको हिन्दीमा भने एउटै रूप प्रचलित छ :

| संस्कृत | नेपाली | हिन्दी |
|---|---|---|
| भवान् | तपाईं | आप |
| अत्रभवान् | यहाँ | आप |
| तत्र भवान् | त्यहाँ, उहाँ | आप |
| इह भवान् | यहाँ, हजुर | |
| स्वयं, आत्मना | आफू | आप |

आदरवाची सर्वनामको नेपालीमा अनेक रूप, हिन्दीमा एक रूप–

| नेपाली | हिन्दी |
|---|---|
| तपाईं | आप |
| हजुर | आप |
| मौसुफ | आप |

## १.६ नेपाली र हिन्दीका विभक्तिहरू

नेपाली र हिन्दीका विभक्तिहरू समान छन्। वचन, लिङ्ग, आदिमा अन्तर पाइँदैन। विभक्ति चिह्नमा थोरै मात्र भिन्नता छ।

| | नेपाली | हिन्दी |
|---|---|---|
| कर्ता | राम | राम |
| कर्म | रामलाई | रामको |
| करण | रामले, रामद्वारा | राम ने, से, द्वारा |

| | | |
|---|---|---|
| सम्प्रदान | रामका लागि | राम के लिए |
| अपादान | रामबाट, रामदेखि | राम से |
| सम्बन्ध | रामको, का, रा, री | राम का, के, की |
| अधिकरण | राममा, माथि | राम में, पर |
| सम्बोधन | ए हे ऐ | ए हे ऐ |

**नेपाली र हिन्दीका व्यक्तिवाचक सर्वनाम**

| | नेपाली | वचन | हिन्दी |
|---|---|---|---|
| प्रथमपुरुष | त्यो, ऊ | एकवचन | वह |
| | तिनी, उनी | बहुवचन | वे |
| मध्यमपुरुष | तँ, तिमी, तपाईं | एकवचन | तुम, आप |
| | हजुर, मौसुफ | | आप |
| | तिमीहरू,... | वहुवचन | तुमलोग |
| उत्तमपुरुष | म | एकवचन | मै |
| | हामीहरू | वहुवचन | हम लोग |

१. **सम्बन्धबोधक शब्दको नेपाली र हिन्दीमा अन्तर**

छोरा तथा छोरीका लागि नेपालीमा सानो-ठूलो क्रमशः १. जेठो, २. माहिलो, ३. साहिँलो, ४. काहिँलो, ५. ठाहिँलो, ६. अन्तरे, ७. जन्तरे, ८. खन्तरे, ९. मन्तरे, १०. ठूलो कान्छो, ११. कान्छो ।

यसरी नै छोरीहरूका लागि छोरालाई पुकारिने नामको अन्त्यमा ई 'जोडेर त्यति सङ्ख्या नै पुऱ्याइन्छ'– जेठी, माहिली...आदि ।

हिन्दीमा छोराछोरीलाई बोलाउन केवल तीनओटा मात्र सङ्ज्ञा प्रचलित छन् ।

बडा, मझ्ला र छोटा । बडी, मझ्ली र छोटी ।

नेपालीमा पतिकी दिदीलाई पत्नीले चिनाउन 'आमाजु' शब्द प्रचलित छ अनि पतिकी बहिनीलाई 'नन्द' भनिन्छ । तर हिन्दीमा दिदीलाई 'बडी नन्द' बहिनीलाई 'छोटी नन्द' भन्ने गरिन्छ ।

केही अन्य सम्बन्धबोधक शब्द–

| नेपाली | हिन्दी |
|---|---|
| जेठी सासू (पत्नीकी दिदी) | बडी साली |
| साली (पत्नीकी बहिनी) | छोटी साली |
| जेठान (पत्नीको दाजु) | बडे साले |
| सालो (पत्नीको भाइ) | छोटे साले |

यसरी नै अन्य कतिपय सङ्ज्ञाहरूमा नेपाली र हिन्दीका बीच ठूलो भिन्नता पाइन्छ ।

### १.८ नेपालीमा संस्कृतबाट विकसित तद्भव शब्द, हिन्दीमा आगन्तुक शब्द

जुन संस्कृत तत्सम शब्दहरूबाट नेपालीमा तद्भव शब्दहरूको विकास भएको छ । ती संस्कृत शब्दहरूबाट हिन्दीमा तद्भव शब्दहरूको विकास भएको छैन, अथवा प्रचलनमा छैनन् । नेपालीमा प्रचलित कतिपय तद्भवका पर्याय रूपमा हिन्दीमा आगन्तुक, फारसी वा अरबीका शब्द प्रचलित भएका छन् :

| संस्कृत | नेपाली (तद्भव) | हिन्दी (आगन्तुक शब्द) |
|---|---|---|
| कुक्कुट | कुखुरो | मुर्गा (फारसी) |
| कोमल | कमलो | नरम (फारसी) |
| ज्येष्ठ | जेठो | बडा (फारसी) |
| दाडिमम् | दारिम | अनार (फारसी) |
| दुर्बल | दुब्लो | कमजोर (फारसी) |
| पारावत | परेवा | कबूतर (फारसी) |
| पीडा | पीर | दर्द (फारसी) |
| मधु | मह | शहद (फारसी) |
| रक्तम् | रगत | खून (फारसी) |
| रक्त | रातो | लाल (फारसी) |
| रिक्त | रित्तो | खाली (फारसी) |
| मनुष्य | मानिस | आदमी (अरबी) |
| बलम् | बल | ताकत (अरबी) |

## १.९ नेपाली र हिन्दी प्राकृत कालबाटै पृथक्

नेपाली र हिन्दी प्राकृत कालबाटै पृथक् हुँदै आएको प्रमाण दुइटै भाषाहरूमा प्रचलित कतिपय शब्दहरूका आधारमा स्पष्ट थाहा पाइन्छ । प्राकृत र नेपालीमा समान तर हिन्दीमा परिवर्तित केही शब्द :

| **प्राकृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| बहिणी | बहिनी | बहन |
| सअ | सय | सौ |
| सत्तरी | सत्तरी | सत्तर |
| लट्ठि | लट्ठी | लाठी |

प्राकृत र हिन्दीमा समान तर नेपालीमा परिवर्तित

| **प्राकृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| कडाह | कडाहा | कराही |
| अडिआ | खडिआ | खरी |

प्राकृत, नेपाली हिन्दी तीनओटैमा भिन्नभिन्न रूप :

| **प्राकृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| खम्ब | खाँबो | खम्बा |
| गग्गर | गाग्रो | गगरा |
| गहिर | गहिरो | गहरा |
| गावी | गाई | गाय |
| गाम | गाउँ | गाव |
| अप्प | आफू | आप |
| थण | थुन | थन |
| दाहिण | दाहिनो | दाया |
| दाईज्यय | दाइजो | दहेज |
| वीज्य | बिउ | बीज |

प्राकृत र नेपालीमा प्रचलित हिन्दीमा अप्रचलित :

| **प्राकृत** | **नेपाली** | **हिन्दी** |
| --- | --- | --- |
| कविइ | कैलो | भुरा |
| छक्क | छक्क | आश्चर्य |
| द्रह | दह | पोखर |
| पहुण | पाहुना | मेहमान |
| पिट्ठ | पिठो | आटा |
| बिराल | बिरालो | बिल्ली |
| बिगार | बिगार | नक्सान |
| बट्ट | बाटो | रास्ता |
| मरल | मैलो | गन्दा |
| मणुस्स | मानिस | आदमी |
| मद्दल | मादल | ढोलक |
| सिँघाण | सिँगान | नाक बहना |
| हिज्ज | हिजो | बीत हुआ कल (गत दिन) |

उपयुक्त विभिन्न उद्धरणको आधारमा नेपाली र हिन्दी दुइटै भाषाहरूको मूल आधार संस्कृत भाषा भएर पनि प्राकृतकालदेखि नै यी दुवै भाषाहरू भिन्नभिन्न पथबाट यात्रा गर्दै स्वतन्त्ररूपले विकसित भएका हुन् भन्ने कुरा प्रस्ट हुन्छ ।

## २. नेपाली र हिन्दीका तत्सम शब्द

नेपाली र हिन्दी दुइटै भाषाको मूल स्वरूप संस्कृत भएकाले यी दुइटै भाषामा संस्कृतका तत्सम शब्द समानरूपबाट प्रचलित छन् । तत्सम शब्दको प्रयोग प्रक्रिया पनि दुवै भाषामा मिल्दोजुल्दो छ । आजको पारिभाषिक तत्सम शब्द पनि दुवै भाषामा एउटै प्रक्रियाबाट प्रविष्ट भएका हुन् । अङ्ग्रेजी आदि विदेशी भाषाका शब्दहरूको सट्टा संस्कृतकै विभिन्न प्रत्यय, उपसर्ग आदिका आधारमा नवीन शब्दहरू निर्माण गर्ने प्रक्रिया पनि नेपाली र हिन्दी दुवैमा प्राय: समान छ ।

भाषाहरूको क्षेत्र भिन्न भएकाले समानतासँगसँगै रचना-विधान र प्रयोग-प्रक्रियामा अन्तर हुनुचाहिँ स्वभाविक हो ।

## २.१ नेपाली र हिन्दीमा समान रूपबाट प्रचलित तत्सम शब्द

हिन्दी र नेपाली दुइटै भाषामा अधिकांश तत्सम शब्द समान रूपबाट प्रचलित छन् । यस्ता समानरूपबाट प्रचलित केही तत्सम शब्दहरूमा दुई प्रकारका शब्द छन् । एक प्राचीन कालबाटै समानरूपमा प्रचलित हुँदै आएका तत्सम शब्द, अर्को आधुनिक कालमा नवनिर्मित पारिभाषिक तत्सम शब्द। हिन्दी र नेपाली दुइटैमा समान रूपबाट पहिलेदेखि नै प्रचलित केही तत्सम शब्द यसप्रकार छन्–

अङ्ग, अंश, अन्त, अन्त्य, अवश्य, आज्ञा, आतुर, आग्रह, आर्य, आचार, आधार, आरम्भ, आरोग्य, इच्छा, उत्तम, उत्तर, उन्मत्त, उद्यत, उत्पात, उन्माद, उज्ज्वल, उपाध्याय, उदय, उत्पन्न, उत्तीर्ण, ऋण, ऋतु, ऋषि, एक, एकछत्र, एकपक्ष, एकान्त, औषधि, औषध, कक्षा, कटाक्ष, कर्ण, कर्कश, कथा, कन्या, काल, कार्य, काण्ड, कुमार, कुल, कुशल, कुटुम्ब, कोष, क्षति, खण्ड, खड्ग, गमन, गुरु, गुण, गृह, घात, घटना, चल, चर, चर्चा, छल, जन्म, जय, जगत्, जीवन, जित, जन्म, चिन्ता, तत्त्व, तम, तिक्त, तृष्णा, तैल, दग्ध, दाता, दानव, दक्षिण, दम्पत्ति, दुष्ट, दुर्गम, दुग्ध, धन, धर्म, धाम, निर्णय, नियम, निश्च, नित्य, नियुक्त, निपुण, पति, पाप, पुण्य, परोक्ष, परम, पवित्र, फल, बद्ध, बुद्धि, भक्ति, भाग्य, भावना, भविष्य, भीषण, मनुष्य, मान्य, मन्त्र, मोक्ष्य, मुक्ति, मुनि, यज्ञा, योग्य, योजना, राजा, रक्त, रोग, लक्ष्य, लक्ष्मी, लुब्ध, लोक, विजय, विनोद, विश्व, विनीत, विधाता, शक्ति, शास्त्र शुक्ल, शुल्क, षट्कोण, सागर, समुद्र, सुख, सुत, सुन्दर, हरि, हवन इत्यादि ।

यस्ता हजारौँ तत्सम शब्द नेपाली, हिन्दी, बङ्गाली आदि भाषाहरूमा प्रारम्भदेखि नै प्रचलित भएर पचिसकेको कुरा अध्ययनबाट प्रष्ट हुन्छ । यस्ता शब्दको अर्थमा पनि विशेष परिवर्तन भएको पाइँदैन ।

## २.२ आधुनिक कालमा प्रचलित तत्सम शब्द

आधुनिक काल विशेषतया विभिन्न वैज्ञानिक तथा विभिन्न उपकरणहरूका साधन बढ्दै जाँदा सम्बन्धित देशहरूबाट यस्ता साधनहरूको प्रवेश हुन थाल्यो। यस्ता उपकरण– साधनका नाम पनि विशेष रूपमा विदेशी भाषाका शब्दमा प्रचलित हुन थालेपछि यस्ता शब्दका अनुवाद संस्कृत भाषामा गरिन थालियो। उपसर्ग, प्रत्यय, दुई वा दुईभन्दा धेरै शब्दहरूलाई जोडेर पनि नयाँ पारिभाषिक शब्दहरू निर्माण गर्न थालियो।

यस कार्यमा हिन्दी र नेपाली दुइटै भाषाहरूले प्रायः एउटै उपाय ग्रहण गरेका छन्। यस्ता पारिभाषिक शब्द समानरूपबाटै प्रचलित छन्। यस्ता पारिभाषिक शब्द अदालत, शिक्षाकेन्द्र, वैज्ञानिक क्षेत्र आदिमा प्रचलित हुने अङ्ग्रेजी शब्दहरूका रूपान्तरण गरेर पनि बनाइसकिएको छ :

अधिनायक, अधिकार, अनुमोदन, अन्वेषण, अन्याय, अधिवक्ता, अभियोग, अभियुक्त, अभिभावक, अभ्यर्थी, अराष्ट्रिय, अन्तर्राष्ट्रिय, आन्दोलन, उद्योग विभाग, उत्तेजना, उपलब्ध, उपपत्नी, उपाध्यक्ष, उपयोग, ऐच्छिक औपचारिक, कार्यकारिणी, कार्यकर्ता, कार्यशाला, गणतन्त्र, गृहमन्त्रालय, गणपूर्ति, औद्योगिक विकास केन्द्र, निदानकेन्द्र, नियोजन, निरोध, नियुक्ति, निरीक्षक, परमादेश, परिभाषा, पञ्जीकरण, निरपराध, मनोनीत, माननीय, महान्यायाधिवक्ता, यातायात, योजनाआयोग, परिवार नियोजन, मातृशिशुकल्याण केन्द्र, विनियम, समिति, संयुक्त सचिव, हस्तकला इत्यादि।

यस्ता असङ्ख्य शब्द हिन्दी र नेपालीमा समानरूपमा प्रचलित छन्। अङ्ग्रेजी आदि विदेशी भाषाहरूको तुलनामा संस्कृत भाषा नै नेपाली र हिन्दीको निकट भएकाले यी दुवै भाषाले आफ्नो भाषामा प्रयोग हुने शब्दहरू संस्कृतबाटै ग्रहण गर्ने गरेका छन्।

## २.३ हिन्दीमा विकल्पयुक्त, नेपालीमा विकल्पहीन तत्सम शब्द

केही तत्सम शब्द नेपालीमा बहुप्रचलित छन् तर हिन्दीमा कम प्रचलित छन्। धेरै प्रचलित भएका कारण नेपालीले तत्सम शब्दलाई नै चलाउने गरेको छ। हिन्दीमा यस्ता तत्सम शब्दहरूको सट्टा तद्भव

वा अरबी-फारसी आदिको शब्द प्रचलित हुँदै आएकाले तत्सम शब्दको प्रयोग गौण भएको देखिन्छ ।

| **नेपालीमा तत्सम शब्द** | **हिन्दीमा तद्भव वा अन्य** |
|---|---|
| ज्वाला | लपेटें |
| सम्मान | कदर |
| सुन्दर | खूबसुरत |
| स्वास्थ्य | तबीयत |
| अंश | हिस्सा |
| समूह | कतार |
| सम्पत्ति | दौलत |
| प्रवेश | दाखिला |
| परामर्श | सलाह, मसविरा |
| कृष्णपक्ष | वदी |
| शुक्लपक्ष | सुदी |
| दोष | ऐब, फरेब |
| ॠण | कर्जा |
| एकान्त | सुनसान |
| कुमारी | क्वाँरी |
| वंश-कुल | खानदान |
| विवाह | शादी |
| व्रतबन्ध | जनेउ |
| भाग्य | तकदीर |
| उत्सव | जलसा |
| रुचि | पसन्द |
| बुद्धि | अक्कल |
| मुख | चेहरा |
| शरीर | वदन |
| उत्तम | उम्दा |

## २.४ नेपालीमा बहुप्रचलित, हिन्दीमा अप्रचलित

नेपालीमा केही तत्सम शब्द अति प्रचलित छन् । हिन्दीमा प्रचलित छैनन्–

**कण्ठश्री** : अतिप्रिय वस्तु वा व्यक्ति, गलामा पहिरिने एक प्रकारको आभूषणका निम्ति कण्ठश्री शब्द प्रचलित छ, जुन शब्द हिन्दीमा छैन ।

**भाग–शान्ति**– यस शब्दबाट नेपालीमा कुनै वस्तुलाई धेरै जनामा पक्षपात नगरी बराबर बाँड्नु अर्थ सम्झिइन्छ ।

**वरणी**– विवाहमा कन्या पक्षको द्वारमा जन्ती पुगेपछि कन्यापक्षको प्रतिनिधिद्वारा गरिने वरपूजा र तत्सम्बन्धी विधान ।

**गतिमति**– दशा, अवस्था, खराब आचरण ।

**अभिकर्ता**– अदालतमा पेस गरिने प्रार्थनापत्र, निवेदन आदि लेख्ने व्यक्ति ।

उल्लिखित शब्दहरू नेपालीमा अत्यधिक प्रचलित छन् तर हिन्दीमा ती शब्दहरूको प्रयोग पाइँदैन ।

## एउटै विषय भिन्न–भिन्न तत्सम शब्दद्वारा प्रचलित

नेपाली र हिन्दीमा कतिपय तत्सम शब्दका पर्यायवाची शब्दहरूको एउटा शब्द नेपालीमा प्रचलित छ भने अर्को शब्द हिन्दीमा प्रचलित पाइन्छ ।

माघशुक्लपञ्चमीमा सरस्वतीपूजाको आयोजना हुन्छ । नेपाल र भारत दुवैतिर यस महोत्सवको प्रचलन छ । यस दिनलाई नेपालीमा श्रीपञ्चमी भनिन्छ । हिन्दीमा वसन्तपञ्चमीको नामबाट पुकारिन्छ ।

श्रावणशुक्लपूर्णिमालाई नेपालीमा ऋषितर्पणी पूर्णिमाको नामबाट पुकारिन्छ । हिन्दीमा रक्षाबन्धन प्रचलित छ ।

यस्तै केही तत्सम शब्द हिन्दीको तुलनामा नेपालीमा धेरै प्रचलित छन् :

उल्का, कर्कश, चण्डी, निष्ठुर, कपाल, जात, टीका, रिपु, शेष, वायु, हंस, कति आदि ।

यद्यपि हिन्दीमा पनि यस्ता शब्द प्रचलित छन् तर सामान्य जनजीवनमा हुने प्रचलनका आधारमा बुझ्दा हिन्दीभन्दा नेपालीमा धेरै व्यापक छ ।

यसरी नै दिन शब्द हिन्दीमा धेरै व्यापक छ । नेपालीमा दिवस शब्दको तद्भव रूप दिउँसो शब्द बहुप्रचलित छ । मुख शब्दके नेपालीमा कुनै विकल्प छैन । तर हिन्दीमा मुह उच्चारण गरिन्छ ।

नेपाली र हिन्दीमा प्रयुक्त हुने तत्सम शब्दहरूबारे अध्ययन गर्दा प्रष्ट हुन्छ– यी दुइटै भाषामा प्रयोग हुँदै आएका तत्सम शब्दमा व्यापक अन्तर छ। केही तत्सम शब्द नेपालीमा विशेष प्रचलित हुने गरेका छन् भने हिन्दीमा कम। केही शब्द नेपालीमा कम प्रचलित छन् भने हिन्दमिा धेरै प्रचलित। यी दुवै भाषाको आधारक्षेत्र अलग-अलग भएकाले आ-आफ्नो क्षेत्रमा प्रचलित रीति/रिवाज, परम्परा, धार्मिक विश्वास, सामाजिक स्थिति, राजनतिक परम्परा, सांस्कृतिक धरातल आदि अनेकौं कारणले यी तत्सम शब्दहरूको धेरथोर प्रचलन, सम-प्रचलन आदिको आधार बनेको हो ।

संस्कृतबाट विकसित कतिपय तद्भव शब्दका तद्भवसँग मूल रूप (तत्सम) पनि प्रयुक्त हुने गर्छन्– कमबाट काम, कार्यबाट काज हस्तबाट हात (नेपालीमा) हाथ (हिन्दीमा) आदि ।

कतिपय तद्भव शब्दले आफ्नो मूलरूप (तत्सम)लाई व्यवहारमा जितिसकेको छ– अक्षि शब्दबाट आँखा (नेपाली) आँखा (हिन्दी) नासिकबाट नाकजस्ता शब्दहरू प्रयोग गर्दा मूलरूपतिर कोही जाँदैन ।

धेरैजसो तद्भव शब्दले आफ्नो मूल तत्सम रूपमा जुन अर्थ थियो त्यसलाई पनि छोडिसकेका छन् । जस्तै बौद्ध शब्दको अर्थ बुद्धका अनुयायी हुन्छ। परन्तु यसको तद्भव रूप बुद्धु शब्दले मूर्ख वा अज्ञानी भन्ने बुझिन्छ ।

## नेपाली र हिन्दीमा प्रचलित केही तद्भव शब्द

यी दुवै भाषामा प्रचलित तद्भव शब्दको आदिस्रोत एउटै भए पनि कतिपय शब्दमा अर्थगत समानता देखिए तापनि शब्दगत समानता दुईओटै भाषामा प्रचलित तद्भव शब्दका बीच पाइँदैन । एउटै मूल रूपबाट विकसित भए तापनि उच्चारण, मात्र, वर्णागम, वर्णविपर्यय, वर्णलोप आदि अनेकौँ कारणबाट नेपाली र हिन्दीका तद्भव शब्दमा शब्दगत समानता प्रायः देखिँदैन ।

तसर्थ नेपाली भाषा हिन्दीकै एउटा बोली हो भनेर नेपाली भाषाप्रति दुर्भावना राख्नेहरूले पनि यो बुझ्नुपर्छ– वास्तवमा नेपाली र हिन्दीको बाटो प्राकृत कालदेखि नै छुट्टिएको हो अनि यी दुवै भाषा एकअर्काका अनुवर्ती होइनन् । दुवै समानान्तर भाषा हुन् ।

## नेपाली र हिन्दी प्राकृतकालदेखि नै पृथक्

नेपाली र हिन्दी प्राकृतकालदेखि नै पृथक् भएर आएका हुन् भन्ने प्रमाण यी भाषामा प्रचलित अनेकौँ शब्दहरूका आधारमा भन्न सकिन्छ ।

### प्राकृत र नेपालीमा समान, हिन्दीमा परिवर्तित

| **प्राकृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| बहिणी | बहिनी | बहन |
| सअ | सय | सौ |
| सत्तरी | सत्तरी | सत्तर |
| लट्ठि | लट्ठी | लाठी |
| को | को | कौन |
| गहिरो | गहिरो | गहरा |
| बहिरो | बहिरो | बहरा |
| गोरो | गोरो | गोरा |
| छुरो | छुरो | छुरा |

**प्राकृत र हिन्दीमा समान/नेपालीमा परिवर्तित**

| प्राकृत | हिन्दी | नेपाली |
|---|---|---|
| कडाह | कडाह | कराही |
| खडिया | खडिया | खरी |

**प्राकृत, नेपाली, हिन्दी तीनओटैमा भिन्न रूप**

| प्राकृत | नेपाली | हिन्दी |
|---|---|---|
| खम्ब | खाँबो | खम्भा |
| गग्गर | गाग्रो | गगरा |
| गहिर | गहिरो | गहरा |
| गावी | गाई | गाय |
| गाम | गाउँ | गाँव |
| थण | थुन | थन |
| दाहिण | दाहिजो | दहेज |
| बीज्ज | बिउ | बीज |
| चउत्थी | चौथो | चौथ |

**प्राकृत र नेपालीमा प्रचलित हिन्दीमा अप्रचलित**

| प्राकृत | नेपाली | हिन्दी |
|---|---|---|
| कविड़ | कइला | भूरा (रङ्ग) |
| छक्क | छक्क | आश्चर्य |
| द्रह | दह | पोखर |
| पहुण | पाहुना | मेहमान |
| पिट्ठ | पिठो | आँटा |
| बिगार | बिगार | नुक्सान |
| बट्ट | बाटो | रास्ता |
| मणुस्य | मानिस | आदमी |
| मद्दल | मादल | ढोलक |

| | | |
|---|---|---|
| महम् | मह | शहद |
| रुक्खो | रूख | पेड |
| जोव्वणम् | जोवन | जवानी |
| छावओ | छाउरा | बच्चा |

**मात्र परिवर्तनकासा समान तद्भव शब्द**

हिन्दीमा अ कारान्त अथवा आ कारान्त भएका तद्भव शब्द नेपालीमा ओकारान्त रूपमा छन् :

| **हिन्दी** | **नेपाली** |
|---|---|
| आग | आगो |
| खम्भा | खाँबो |
| ससुर | ससुरो |
| उँचा | उँचो |
| दीया | दीयो |
| दुबला | दुब्लो |

**विशेषणमूलक शब्द**

विशेषणमूलक तद्भव शब्दहरू हिन्दीमा प्रायः आकारान्त हुने गर्छन् । नेपालीमा ओकारान्त भएका छन् ।

| **हिन्दी** | **नेपाली** |
|---|---|
| काला | कालो |
| नीला | नीलो |
| तीखा | तीखो |
| बहरा | बहिरो |
| हरा | हरियो |
| गोरा | गोरो |
| गहरा | गहिरो |
| महँगा | महँगो |

**शब्दान्त ल व्यञ्जन**

कतिपय शब्दान्त ल व्यञ्जन भएका तत्सम शब्दबाट बनेका नेपाली तद्भव रूपमा पनि ल व्यञ्जनमा परिवर्तन आएको छैन तर त्यसैको हिन्दी तद्भव रूपमा लको ठाउँमा र भएको पाइन्छ :

| **संस्कृत तत्सम** | **नेपाली तद्भव** | **हिन्दी तद्भव** |
|---|---|---|
| अट्टाली | अटाली | अटारी |
| शृगाल | सियाल | सिआर |

कतै-कतै यसको विपरीत अर्थात् नेपालीमा र भएको छ–

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| काष्टफल | कटहर | कटहल |
| कदली | केरा | केला |

**संस्कृत स्त**

संस्कृत तत्सम शब्दको शब्दादि स्तको नेपालीमा थु, हिन्दीमा थ भएको छ। संस्कृत स्तनबाट थुन (नेपाली) थन (हिन्दी) शब्दान्त स्तमा भने सको आकार भएको छ। परन्तु नेपालीमा शब्दान्त त बदलिएको छैन, हिन्दीमा तको थ भएको पाइन्छ :

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| हस्त | हात | हाथ |
| हस्ती | हात्ती | हाथी |

**तत्सम शब्दको अन्त्य ऊकार**

संस्कृत तत्सम शब्दको अन्त्य ऊकार नेपालीमा ऊकार नै रहेको छ तर हिन्दीमा अ भएको छ :

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| श्वश्रू | सासू | सास |

नेपालीमा उ कारान्त हिन्दीमा व कारान्त

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| ग्राम | गाउँ | गाँव |

| | | |
|---|---|---|
| घात | घाउ | घाव |
| पाद | पाउ | पाँव |

नेपालीमा मध्य उ कार, हिन्दीमा व कारमध्य

| **नेपाली तद्भव** | **हिन्दी तद्भव** |
|---|---|
| उत्ताउलो | उतावला |
| कसाउनु | कसवाना |
| सुनाउनु | सुनवाना |
| साउन | सावन |

नेपालीमा शब्दमध्य इकार, हिन्दीमा यकार

| **नेपाली** | **कोयल** |
|---|---|
| कोइला | कोयला |

नेपालीमा शब्दान्त ईकार, हिन्दीमा यकार

| **नेपाली** | **हिन्दी** |
|---|---|
| गाई | गाय |
| धाई | धाय |

**हिन्दीका तद्भव शब्द नेपालीमा**

हिन्दीभाषामा प्रचलित केही तद्भव शब्द नेपालीमा पनि समानान्तर रूपमा प्रचलित छन् । परन्तु नेपाली भाषाले अन्य भाषाबाट लिएका शब्द केही परिवर्तनका साथ मात्र ग्रहण गरेको पाइन्छ ।

| **हिन्दी** | **नेपाली** |
|---|---|
| अचम्भा | अचम्म |
| अनूठा | अनौठो |
| इलैंची | अलैँची |
| घुडकी | घुर्की |

**नेपालीमा संस्कृत निर्मित तद्भव शब्द, हिन्दीमा आगन्तुक शब्द**

नेपालीमा धेरै यस्ता तद्भव शब्दहरू छन् जो संस्कृतबाट निर्मित भएका छन् तर हिन्दीमा यस्ता शब्दका ठाउँमा संस्कृत-निर्मित तद्भव शब्द नभएर आगन्तुक अरबी अथवा फारसीका शब्दहरू पाइन्छन् :

| संस्कृत (तत्सम) | नेपाली (तद्भव) | हिन्दीमा प्रचलित शब्द |
|---|---|---|
| कुक्कुट | कुखुरो | मुर्गा (फारसी) |
| कोमल | कमलो | नरम |
| दाडिमम् | दारिम | अनार (फारसी) |
| पारावत | परेवा | कबूतर (फारसी) |
| पीडा | पीर | दर्द (फारसी) |
| मधु | मह | शहद (फारसी) |
| रक्तम | रगत | खून (फारसी) |
| रिक्त | रित्ती | खाली (फारसी) |
| बलम् | बल | ताकत (फारसी) |

**नेपाली तथा हिन्दीका आदरार्थी तद्भव शब्द**

नेपाली तथा हिन्दीमा प्रचलित सर्वनामवाची शब्दहरूमा पनि प्राय: समानता पाइँदैन । विशेषत: आदरार्थी सर्वनाम शब्दमा धेरै भिन्नता छ ।

नेपालीमा तपाईं भन्दा हिन्दीको आप शब्दको तुलनामा निकै दुब्लो छ । उदाहरणमा हेरौँ– नेपालीमा तपाईंभन्दा बढी आदर यहाँ उहाँ शब्दबाट झल्किन्छ । अरू धेरै आदर गर्नुपर्दा हजुर शब्दको प्रयोग हुन्छ । आफू शब्द पनि आदर गरिने व्यक्तिप्रति हुन्छ । परन्तु हिन्दीमा एउटै आप शब्दले मात्र काम चलाउनुपर्छ ।

**आगन्तुक शब्द**

जुनसुकै भाषामा पनि आगन्तुक शब्दको राम्रो स्थान रहेको हुन्छ । आगन्तुक शब्द जति समावेश गर्न सक्यो त्यति नै त्यो भाषा उन्नत कहलाउँछ । यसकारण नै अङ्ग्रेजी भाषा विश्वमा उन्नत ठहरिएको हो । विभिन्न आवागमन, व्यापार तथा अन्य कतिपय

कारणले गर्दा एकअर्का भाषाको भाषाशैलीको सम्पर्क हुन्छ। यसैबाट भाषाको आदन-प्रदान हुन्छ ।

नेपाली र हिन्दीका तद्भव शब्दको तुलना गर्ने क्रममा, यी दुई भाषाबीच जुन भाषाले आगन्तुक शब्द कुन रूपमा रहेका छन् भन्ने कुरा देखाउनु नै उपयुक्त हुनेछ । यी दुई भाषामा प्रयुक्त हुने आगन्तुक शब्दमा मुख्य भेद– कतिपय आगन्तुक शब्द नेपालीमा तद्भव रूपमा प्रचलित हुनु र हिन्दीमा तत्सम रूपमै रहनु हो ।

**फारसीबाट**

| **हिन्दी** | **नेपाली** |
|---|---|
| काशमकश | कसाकस |
| चालाक | चलाख |
| तम्बाकू | तमाखु |
| पेशाब | पिसाप |

**अरबीबाट**

| **हिन्दी** | **नेपाली** |
|---|---|
| किश्म | किसिम |
| ताकीद | तागिता |
| जुल्म | जुलुम |
| नौकर | नोकर |
| बकाया | बक्यौतो |

**अङ्ग्रेजीबाट**

| **हिन्दी** | **नेपाली** |
|---|---|
| लेफ्टिनेन्ट | लप्टन |
| जनरल | जर्नेल इन्यादि |

यसरी हिन्दी र नेपालीका तद्भव शब्दलाई केलाएर हेर्दा यी दुवै भाषाबीच ठूलो अन्तर छ। यी दुवै भाषा परस्पर आश्रित भाषा नभएर समानान्तर भाषा हुन् । यी दुईओटैको आ-आफ्नो

साहित्य छ । क्षेत्र फरक छ । आ-आफ्नै ढङ्गले विकसित भएर आएका छन् ।

तद्भव शब्दको यी दुवै भाषामा विशेष महत्त्व भएको कुरा विद्वान्हरूले मानेका छन् । हिजोआज भाषामा ञर्रोपन ल्याउने प्रक्रियाअन्तर्गत तद्भव शब्दको महत्त्व निकै बढेको छ ।

'तद्भव शब्द नै असली हिन्दी शब्द हुन् तसर्थ यीप्रति विशेष मोह हुनुपर्छ ।'[१०]

'तद्भव शब्द नै नेपाली भाषाको विकासक्रममा आएका शब्द हुन् । यस्ता शब्द नेपालीले पैतृक सम्पत्तिका रूपमा प्राप्त गरेको छ ।'[११] हिन्दी तथा नेपाली दुवै भाषाक्षेत्रका विद्वान्हरूले तद्भव शब्दलाई विशेष महत्त्व दिन थालेको कुरा माथिका भनाइबाट प्रस्ट हुन्छ ।

### ३.६ समानरूपमा प्रचलित तद्भव-शब्द

नेपाली र हिन्दीमा अधिकांश तद्भव शब्द समानरूपले समान अर्थमा प्रचलित छन् । यद्यपि तत्सम शब्दको जस्तो पूर्णतया समान तद्भव शब्द पाइँदैनन् । तद्भव शब्दको उच्चारणमा अथवा विकास-प्रक्रियामा स्थानभेदका कारण पर्याप्त भिन्नता हुन्छ । हिन्दी भाषामा पनि स्थानभेद हुनेबित्तिकै कतिपय शब्दहरूको उच्चारण बदलिन्छ । मात्र, ध्वनिभेद आदिलाई लिखित रूपमा मान्यता नदिनु अर्को कुरा । नेपाली र हिन्दीका तद्भव शब्दहरूको बीच असमानता हुनु स्वभाविक नै हो ।

**हिन्दी र नेपालीमा समान तद्भव**

| **संस्कृत (तत्सम)** | **नेपाली (तद्भव)** | **हिन्दी (तद्भव)** |
|---|---|---|
| गृह | घर | घर |
| आशा | आस | आस |
| कर्म | काम | काम |

१०. *धीरेन्द्र वर्मा,* ***हिन्दी भाषाका इतिहास,*** *अष्टम संस्करण, पृष्ठ ७० ।*
११. *चूडामणि बन्धु,* ***नेपाली भाषाको उत्पत्ति,*** *प्रथम संस्करण, पृ. ८१ ।*

| | | |
|---|---|---|
| घोटक | घोडा | घोडा |
| तैल | तेल | तेल |
| कर्ण | कान | कान |
| नासिका | नाक | नाक |

### ३.७ मात्रा परिवर्तनका साथ समान तद्भव शब्द

हिन्दीमा अकारान्त अथवा आकारान्त तद्भव शब्द नेपालीमा ओकारान्त :

| **संस्कृत (तत्सम)** | **नेपाली (तद्भव)** | **हिन्दी (तद्भव)** |
|---|---|---|
| अग्नि | आगो | आग |
| उच्च | उँचो | उँचा |
| स्तम्भ | खाँबो | खम्भा |
| दीपक | दीयो | दीया |
| वत्स | बच्चो | बच्चा |
| श्वसुर | ससुरा | ससुर |

### ३.८ विशेषणवाचक तद्भव शब्द

संस्कृतका विशेषणवाचक तत्सम शब्दहरूको अन्त्य अकार हिन्दीको तद्भव रूपमा आकार बनेको छ भने नेपालीमा ओकार–

| **संस्कृत (तत्सम)** | **नेपाली (तद्भव)** | **हिन्दी (तद्भव)** |
|---|---|---|
| काल: | कालो | काला |
| हरित: | हरियो | हरा |
| नील: | नीलो | नीला |
| गौर: | गोरो | गोरा |
| तीक्ष्ण | तीखो | तीखा |
| गंभीर | गहिरो | गहरा |
| बधिर | बहिरो | बहरा |
| महार्घ | महँगो | महँगा |
| दुर्बल | दुब्लो | दुबला |

## ३.८ मात्रा, व्यञ्जन आदिमा परिवर्तित तद्भव शब्द–शब्दान्त ल व्यञ्जन

कतिपय शब्दान्त ल व्यञ्जन तत्सम शब्दको लको नेपाली तद्भव रूपमा परिवर्तन भएको छैन, हिन्दीमा लको स्थानमा 'र' प्रचलित छ–

| **संस्कृत (तत्सम)** | **नेपाली (तद्भव)** | **हिन्दी (तद्भव)** |
|---|---|---|
| अट्टाली | अटाली | अटारी |
| शृगाल | सियाल (स्याल) | सिगार |

कतिपय शब्दमा विपरीत अर्थात् हिन्दीमा 'ल' नेपालीमा 'र' भएको छ ।

| **संस्कृत (तत्सम)** | **नेपाली (तद्भव)** | **हिन्दी (तद्भव)** |
|---|---|---|
| काष्टफल | कटहर | कटहल |
| कदली | केरा | केला |

संस्कृत स्तको हिन्दीमा थ नेपालीमा थु

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| स्तन | थुन | थन |

**शब्दादि ओ स्वर**

संस्कृत तत्सम शब्दको आदि ओ को हिन्दीमा हो बनेको छ भने नेपालीमा ओ नै प्रचलित छ :

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| ओ | ओ (सम्बोधनशब्द) | हो |

**शब्द मध्य स व्यञ्जन तथा शब्दान्त त**

हिन्दी तथा नेपाली दुइटै भाषामा संस्कृतको शब्दमध्य सको आकारमा परिवर्तन भएको छ । तर यस्ता शब्दको अन्त्य त वर्णको हिन्दीमा थ भएको छ भने नेपाली त नै स्थिर छ :

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| हस्त | हात | हाथ |
| हस्ती | हात्ती | हाथी |

**शब्दान्त श व्यञ्जन**

संस्कृत तत्सम शब्दको अन्त्य श हिन्दीमा प्राय: ह भएको छ। नेपालीमा भने कतै इ छ कतै र बनेको छ। अनि कतै हको लोप भएको छ।

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| द्वादश | बाह्र | बारह |
| षोडश | सोह्र | सोलह |
| एकादश | एघार | ग्यारह |
| चतुर्दश | चौध | चौदह |
| सप्तदश | सत्र | सत्रह |

**संस्कृत तत्सम शब्दको अन्त्य ऊ स्वर**

संस्कृतमा प्रयुक्त शब्दान्त ऊ को हिन्दीमा अकार बनेको छ भने नेपालीमा ऊ नै प्रचलित छ :

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| श्वश्रू | सासू | सास |

**नेपालीमा उकारान्त हिन्दीमा वकारान्त**

| **संस्कृत** (**तत्सम**) | **नेपाली** (**तद्भव**) | **हिन्दी** (**तद्भव**) |
|---|---|---|
| ग्राम | गाउँ | गाव |
| आम | आउँ | आँव |
| घात | घाउ | घाव |
| पाद | पाउ | पाँव |

**नेपालीमा मध्य उ हिन्दीमा व**

| **नेपाली** (**तद्भव**) | **हिन्दी** (**तद्भव**) |
|---|---|
| उत्ताउलो | उतावला |
| डराउनु | डरावना |
| सुनाउनु | कसवाना |
| साउन | सावन |

**हिन्दीमा मध्य य नेपालीमा इ**

| **हिन्दी** | **नेपाली** |
|---|---|
| कोयल | कोइली |
| कोयला | कोइला |

**हिन्दीमा अन्त्य य नेपालीमा इ**

| **हिन्दी** | **नेपाली** |
|---|---|
| गाय | गाई |
| धाय | धाई |

**३.१ नेपाली प्रचलित हिन्दीमा अप्रचलित तद्भव शब्द**

संस्कृतका अनेकौँ तत्सम शब्द विकृत भएर प्राकृत हुँदै नेपालीमा तद्भव रूपमा प्रचलित भएका छन् तर हिन्दीमा यस्ता शब्द प्रचलित छैनन् :

| **संस्कृत** | **प्राकृत** | **हिन्दी** | **नेपाली** |
|---|---|---|---|
| दृढ | दड | दरो | मजबुत |
| पति | पई | पोई | पति |
| कपिल | कविल | कइलो | भूरा |

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| परारि | परार | दो साल पहले |
| ह्यः | हिजो | बिता हुआ कल |
| आसीत् | अस्ति | कुछ दिन पहले |
| मनुष्य | मानिस | आदमी |
| मसृण | मसिनु | मुलायम |
| वक्र | बाङ्गो | टेढा |
| सुगृह | सुग्घर | सफा |

**समान रूपमा प्रचलित तद्भव शब्द**

| **संस्कृत (तत्सम)** | **नेपाली (तद्भव)** | **हिन्दी (तद्भव)** |
|---|---|---|
| कार्य | काज | काज |
| कर्म | काम | काम |

| | | |
|---|---|---|
| गो | गाई | गाय |
| माता | आमा | माँ |
| गेह | घर | घर |
| यमुना | जमुना | जमुना |
| लक्षण | लच्छिन | लच्छन |
| मयूर | मुजूर | मोर |
| अग्नि | आगो | आग |
| उच्च | उँचो | उँचा |
| दुर्बल | दुब्लो | दुबला |
| आशा | आस | आस |

| संस्कृत | नेपाली | हिन्दी |
|---|---|---|
| द्वितीय प्रहर | दोपर | दोपहर (मध्याह्न) |
| क्षेत्र | खेत (केवल धान रोपिने) | खेत (सम्पूर्ण) उपज, उर्वर भूमि |
| स्थान | थर (नेपालीमा उपनामबोध) | थर (स्थानविशेष) |

**नेपाली र हिन्दीमा अर्थ भिन्नता**

| संस्कृत | नेपाली | हिन्दी |
|---|---|---|
| दीपावली | देवाली | दिवाली |

उल्लिखित दीपावलीबाट बनेको हिन्दी तद्भव दीवाली शब्दबाट एउटा तिहारविशेषको बोध हुन्छ परन्तु नेपाली तद्भव देवाली शब्दबाट कुलदेवताको विशेष पूजा सम्झिन्छ ।

**तिथिवार शब्दबाट विकसित तद्भव शब्द**

**तिथिवार** शब्दबाट हिन्दीमा त्यौहार तथा नेपालीमा **तिहार** भिन्न-भिन्न तद्भव शब्द विकसित छन् । यी दुइटै शब्दको अर्थमा भिन्नता छ । हिन्दीमा **त्यौहार** शब्दबाट नै कुनै पनि पर्व-उत्सवविशेषको बोध हुन्छ। नेपाली **तिहार** शब्दबाट केवल यमपञ्चक (दीपमालिका-भ्रातृद्वितीया) सम्झिइन्छ । हिन्दी त्यौहार शब्दको अर्थको विस्तार छ तर **तिहार**को अर्थ सङ्कुचन भएको छ ।

## ३.१४ पृथक्-पृथक् तत्सम शब्दबाट विकसित तद्भव शब्द

एकै वस्तुको अर्थबोध गराउने संस्कृत शब्दमध्ये कुनै एउटा शब्दको तद्भवरूप हिन्दीमा विशेष प्रचलित छ भने नेपालीमा त्यसैको पर्यायवाची अर्को तत्सम शब्दबाट तद्भवरूप विकसित भएको छ ।

**हरिण** एक पशुविशेष शब्दको हिन्दीमा **हिरन** शब्द तद्भव रूपमा प्रचलित छ। नेपालीमा **हरिण**को नै पर्यायवाची शब्द मृगबाट बनेको मिर्ग तद्भव रूप प्रचलित छ । **सूर्य** शब्दको विकसित रूप **सूरज** हिन्दीमा प्रचलित छ । नेपालीमा अर्को पर्यायवाची **घर्म** शब्दबाट विकसित **घाम** शब्द सूर्य अर्थमा प्रचलित छ। यसै प्रकार **चन्द्र** शब्द तद्भवरूप चाँद शब्द हिन्दीमा व्यापक छ । नेपालीमा **ज्योत्स्ना** शब्दको तद्भव रूप **जून** शब्द **चन्द्र**को बोधक छ ।

## ३.१५ हिन्दी एवं नेपालीका क्रियाहरू

नेपालीमा केही क्रियाहरू जो नेपालीमा प्रचलित छन् हिन्दीमा प्रचलित छैनन् :

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| वस्-वसति | बस्छ | बैठता है |
| खन्-खनति | खन्छ | खोदता है |
| चर्-चरति | चर्छ | चुगता है |

केही तद्भव क्रियाहरू जो नेपालीमा प्रचलित हिन्दीमा छैनन् :

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| भण्-भणति | भन्छ | कहता है |
| क्री-क्रीडति | किन्छ | खरीदता है |
| उत+चल=उच्चालयति | चाल्छ | उठाता है |
| तक्ष-तक्षति | तास्छ | छिलता है |

## ३.१६ नेपालीमा तत्सम रूपमै प्रचलित, हिन्दीमा तद्भव रूप

| **संस्कृत** | **नेपाली** | **हिन्दी** |
|---|---|---|
| आश्चर्य | आश्चर्य | अचरज |
| धर्म | धर्म | धरम |

| | | |
|---|---|---|
| कर्म | कर्म | करम |
| पूर्ण | पूर्ण | पूरन |
| मूर्ख | मूर्ख | मूरख |
| भक्त | भक्त | भगत |
| तीर्थ | तीर्थ | तीरथ |
| कर्तव्य | कर्तव्य | करतब |
| विघ्न | विघ्न | विघन |
| भ्रम | भ्रम | भरम |
| सूर्य | सूर्य | सुरज |

माथि नेपाली र हिन्दी भाषाहरूको सामान्य तुलना गर्दै दुवै भाषाहरूमा प्रयुक्त तत्सम शब्द एवं तद्भव शब्दको समानता र विषमताबारे सङ्क्षेपमा उल्लेख गरिएको छ । साथै हिन्दी तथा नेपालीका तद्भव शब्दहरूको तुलनाबाट दुइटै भाषाहरूका बीच केही समानताका साथै धेरै परस्पर भिन्नता छ भन्ने कुरा बोध हुन्छ। यी दुइटै भाषाहरू समानान्तर भाषा हुन् । अनि एउटै मूल अर्थात् संस्कृतबाट विकसित हुन् तर क्षेत्र भिन्नताका कारण दुवैमा असमानता हुनु स्वभाविक छ ।

हिन्दी तथा नेपाली दुइटै भाषामा संस्कृतका तत्सम शब्द अथवा तद्भव शब्द नै मुख्य शब्दसमूह हुन्। आजका भाषावैज्ञानिकहरू तत्सम तथा तद्भव दुइटै शब्दसमूहलाई समानरूपबाट प्रयोग गर्दै आएका छन् ।

हिन्दीमा राष्ट्रिय-अन्तर्राष्ट्रिय– दीर्घ इकारान्त ।

सङ्ख्यावाचक 'कति' शब्दको नेपालीमा कुनै तद्भव रूप छैन, हिन्दीमा 'कितना' शब्द 'कति'को स्थानमा प्रचलित छ ।

प्रस्तुत आलेख तयार पार्न– संस्कृत, नेपाली, प्राकृत र हिन्दीका विभिन्न कोश र व्याकरणहरूको सहायता लिइएको छ। विस्तृतताका भयले सबैको उल्लेख गर्न सकिएन ।

# रसियाली साहित्यमा मानवीय संचेतनाका सम्बेग

– *तेजेश्वर बाबु ग्वंग:*

मानवीय संचेतनाका सवेग भेट्टाउन मानवीय कृतिहरूकै सेरोफेरो चहार्नुपर्ने हुन्छ । मानवीय कृतिले मूर्त र अमूर्त कला, सङ्गीत, साधना, तिनका साजबाज र शब्दविन्याशका अभिव्यक्ति बनेका ग्रन्थ आदिलाई सङ्केत गर्दछ। यतिकैमा समग्र मानवीय संवेग र संचेतनाका अनुभूतिहरूलाई समेटियो भन्न सकिन्न । मानवीय संचेतनाका संवेगहरूलाई संवेदनशील बनाउने अरू अनेक संवेगहरूका साधनाहरू आविष्कार भइसकेका छन्। यसमा साहित्य, कला, सङ्गीत, नृत्य-नाटक र अरू आख्यान विधामा मानिसले तन्मयतासाथ चित्त लगाई आफूभित्रको तरङ्गलाई तरङ्गित पार्ने अनेक साधना पर्छन् । अचेल विज्ञानले हामीमा अद्भुत क्षमतावान् कोसेलीहरू उपहार गरेका छन् । विद्युत्-तरङ्ग-साधन (Electronic Media) हरूले अद्भुत र अकल्पनीय संयन्त्रहरू हाम्रा जीवन प्रक्रियाका सहकर्मी बनाइदिएका छन्। फलस्वरूप हाम्रा किताब, रङ्ग, चित्र, स्वर-सङ्गीतमा मुखरित वा झन्कृत हुने यावत् कुरा कम्प्युटर प्रणालीमा अवतरण भइसकेर नितान्त सहज सिक्ने प्रक्रिया बन्न पुगेको छ ।

विज्ञान र वैज्ञानिक प्रक्रिया आधुनिकबाट अत्याधुनिक कोटीमा अवतरित छ। अत्याधुनिक विद्युतीय प्रविधिले सञ्चार क्षेत्रमा पुऱ्याएको प्रभाव अत्यन्त सम्वेदनशील छ । सञ्चार संवेदनाले दुरुह कुरोलाई सुरुचिपूर्ण बनाएको छ । पुस्तक-पत्रिका अब पुस्तकालय साधन बन्न गए । दैनिक मनोरञ्जनात्मक साधन बनिसकेको विद्युतीय सञ्चार साधनले पठन-पाठन गरी अध्ययन गर्ने कार्यगत प्रक्रियामा सकारात्मक भन्दा बढी नकारात्मक प्रभाव छ्याप्न सफल भएको छ । यस्तो चुनौतीपूर्ण अवस्थालाई अतिरञ्जित हुन नदिन इन्टरनेट सेवा सुविधाले अध्ययताहरूलाई सघाएको पनि छ। विश्व साहित्यका स्रस्टाहरूलाई चिन्ने चिनाउने काममा विद्युतीय सञ्चारको देन उपलब्धिमूलक बनेको छ ।

यस प्रसङ्गलाई यतैकतै विश्रान्ति लगाई रसियाली साहित्यमा मानवीय सञ्चेतनाका संवेगलाई तरङ्गित पार्ने उल्लेखनीय स्रष्टाहरू

प्रति बिहङ्गम दृष्टि दिनु यस प्रसङ्‌गको प्रकरण बन्छ । मानवीय सञ्चेतनाका संवेगलाई रसियाली साहित्यको परिप्रेक्षमा नियाल्दा साहित्यका विविध विधाका आधारलाई जग बनाउनु आवश्यक ठहर्छ । यस दृष्टिमा नियाल्न सबैभन्दा पहिले साहित्यिक विधाका अवधारणाहरूलाई पस्काउनुपर्ने हुन्छ । यस पस्काइमाको प्रयोजन काव्य, गद्य र आख्यान विधा प्रमुख बन्न आएछ । काव्यगत नियालाइभित्र सार्वजनिक कविता, महाकाव्य, खण्डकाव्य, गीति काव्य आदि प्रमुख हुन सक्छन् । यसका साथै काव्यिक चिन्तन विधामा रसियाली साहित्यले विश्वसाहित्यबाट के-कति रागात्मक अनुरागका प्रभाव आत्मसात गर्न सकेका छन्, तिनलाई पनि ओकल्नु पर्ने हुन आउँछ। परन्तु, यो सहज, सरल र सामान्य काम पटक्कै होइन ।

गद्य र आख्यान विधामा पनि यस्तै हुन आउँछ । गद्य साहित्यमा कथा, निबन्ध, प्रबन्ध, दर्शन, मनोविज्ञान, विज्ञान आदिलाई सार्थक सन्दर्भसामग्री बनाइनुपर्ने हुन आउँछ। यी र यस्तै अन्य अनेक विधागत विषयवस्तुहरू साहित्यका मार्मिक विषयवस्तु बन्दछन्। दर्शन, विज्ञान, इतिहास, भूगोल, मनोविज्ञान आदि शास्त्रगत धारणहरूलाई गद्य र आख्यान लेखकहरूले आ-आफ्ना क्षेत्रगत लेखन साहित्यरचनामा केही न केही अंश सान्दर्भिक रूपमा समेटिएका हुन्छन् । यसरी समाहित गरिएका वा भएका धारणहरूमा मानवीय संचेतनाका संवेगहरूलाई समाउनु कठिनसाध्य काम बन्छ। यिनै कठिनसाध्य कामको साधना यस रचनाको मर्म बनेको छ । साहित्यमा मानवीय संचेतनाका सम्वेगलाई समेट्ने काम रुसी लेखकहरूबाट ओतप्रोत पारेका छन् । यस्ता संचेतनात्मक संवेगहरू जो रुसी साहित्य महर्षिहरूबाट भए तिनलाई मात्र रसियाली भूमि, समाज र राष्ट्रको मात्र सम्पदा बनाउन सकेनन्, जतिजति ती कुराहरू राष्ट्रिय सम्पदासूचीबाट अन्तर्राष्ट्रिय सम्पदामा सूचीकरण हुन थाले त्यति-त्यति नै रुसी साहित्य मानवसमाजको सम्पदा बन्न थाले । रुसी साहित्यले जतिजति मानवीय संचेतनाका संवेगहरू आफ्ना आत्मासरि पसार्न सके, पस्काउन सके त्यति-त्यति नै रुसी साहित्यले अन्तर्राष्ट्रिय स्वरूप लिन सके ।

साहित्यमा मानवीय संचेतनाका संवेगहरू भन्नु सामूहिक मानवीय सरोकारको चासोलाई दर्शनमा घोली सौम्य, सौहार्द र कलात्मक विचार-विज्ञानलाई पसार्नु हुन आउँछ । मानवीय संचेतनाका क्षेत्रमात्र मानव समाजव्यापी रहन्न । मानवीय संचेतनाले चराचर जीवजन्तु, जल, थल, नभ पर्यन्तका जीवाणुलाई समेट्छ । यी अनेक प्राणीलाई मानवजीवनका सार्थक सहयोगीका रूपमा पर्यावरणीय सन्तुलन कायम राख्न प्रकृतिद्वारा प्रदत्त उपहारका रूपमा नस्विकारी हुन्न । यस तथ्यलाई स्विकारी मानवसमाज र यावत् अन्य जीवजन्तुबीचको पर्यावरणीय सम्बन्ध सन्तुलित राख्न उपयुक्त विवेक व्यवहार फस्टाउने, हुर्काउने साहित्य सिर्जना गर्नु साहित्यकार खेमाको दायित्वमुखी सङ्कल्प बन्छ, लिपिबद्ध अभिलेख बन्छ। यस प्रयोजनका लागि रचिएका यावत् साहित्यलाई मानवीय संचेतना संवेगका दायराभित्र समावेश नगरी हुन्न। रुसी साहित्य यसतर्फ घनिभूतरूपले कुबेर बनेका छन्। रुसी साहित्यको मर्म यही प्रज्ञापन गर्छ ।

विज्ञान प्रविधि रुसको विशद् सम्पदा बनेको छ । विज्ञान र प्रविधि रुसी साहित्यको स्वनामधन्य क्षेत्र बनेको छ। विज्ञान र प्रविधि अथवा प्रविधि र विज्ञान रुसी राष्ट्रको मानवीय सम्पदा बनेको छ । मानवीय सम्पदाको मान्यता रुसी राष्ट्रव्यापी मात्र बनेको छैन । उपयोग र उपयोगिता, कल्याण र हितकारिता, प्रविधि र वैज्ञानिकताको आधारमा रुसी प्रविधि र विज्ञान वा विज्ञान र प्रविधिको सीमा आकाश बनेको छ । अन्तरिक्ष आकाश हो । आकाशभित्रै त अन्तरिक्ष समाहित छ, समायोजित छ । पहिलो अन्तरिक्ष यान स्पुटनिक, पहिलो अन्तरिक्षयात्रु जीव लाइका, पहिलो अन्तरिक्ष यात्री यसुरिगागरिन, पहिलो महिला अन्तरिक्ष यात्री भ्यालेन्टिना टेरिस्कोभा रुसैले पठाएको इतिहास बोल्छ । यससम्बन्धी यावत् जीवनवादी वैज्ञानिक साहित्यहरू मानवीय संचेतनका संवेग कसरी रुसी साहित्यका युगान्तकारी देन होइन भन्न सकिएला ?

रुसी विज्ञान र वैज्ञानिकहरूको मानवीय संचेतना जगाउने साहित्यिक संवेदना मात्र रुसी समाजपरक नरही विश्वव्यापक हुन भएको तथ्य रुसी-अमेरिकी वैज्ञानिकहरूद्वारा संयुक्त अभियान बनाएको अन्तरिक्ष उन्मुख सहकार्यले पुस्ट्याउँछ । यसरी नै दर्शनसाहित्यमा

सर्गेइ एस्कल्डोभले (सर्गेइ एलेक्सेभी एलेक्सेन, १८७१ – १९४५) 'विचार र यथार्थता' कृतिमा यी दुईका पारस्परिकता अनि अन्तरविरोधका व्याख्या, विवेचना र विश्लेषण गरेका छन् । यस्ता दर्शनले प्रबुद्ध पाठक लेखकहरूमा गहिरो छाप हाल्दा लेखनभित्र दर्शनका छनक समावेश हुनपुग्छ । तव नै कालजयी सृजनाले जीवन्तता पाइरहन्छ। युगयुग पर्यन्त। भन्न मन लाग्छ दर्शन भित्री तवरबाट भित्री तहसम्म डुबुकिएर प्राप्त हुने अन्तर दृष्टिगत देख्न सकिने दिव्य देख्न र देखाइ हो । दिव्य देख्न र देखाइ दृष्टिको पारमार्थिक दृष्टिकोण हो । दृष्टि वा आँखाको काम मात्र हेर्न र हेराइमा सीमाबद्ध रहन गए दिव्य दृष्टिको देख्न र देखाई च्यूत बन्न पुग्छ। हेर्नको लागि आँखा पर्याप्त हुन्छ। देख्नको लागि अन्तर आँखा चाहिन्छ । अन्तर आँखाको अर्को नाम प्रज्ञा हो– जहाँबाट विवेक टप्किन्छ। अन्तरदृष्टिबाट टप्किएको विवेक ब्रह्म फुल्केका दार्शनिक, वैज्ञानिक, साहित्यकार रसियाली लेखकहरूका लेखन। युगन्तकारी र कालजयी रहेका छन् र पो नेपाल-रुस साहित्यिक समाज पुस्किन, गोर्की, लेर्मेन्टोभ, टल्सटाय, चेखब, टुर्गेनिभ, गोगल, डस्येइभ्स्की, सोल्जेनिट्सिन लगायतका स्रष्टाहरूप्रति श्रद्धासुमन अर्पण साथ नेपाली स्रष्टाबीच बारम्बार घुलमिल भइरहने गरेका छन् ।

साहित्यमा मानवीय संचेतनाका संवेगहरूलाई एकाकीपनमा गरिन्न। संचेतनाका संवेगहरू बाह्य र आन्तरिक दुवै प्रभावबाट पैदा भइरहन्छन्। त मानवीय संचेतना पूर्ण रूपले आन्तरिक सत्कार्य मात्र हो न त यो बाह्य प्रभावकै मात्र पनि संवेग हुन्। मानवीय संचेतना दुवै आन्तरिक एवं बाह्य प्रभावका प्रतिफल रहेका छन् । रुसी साहित्यमा एसियाली जीवनदर्शनका बिम्ब र छाया भेटिन्छन् । रुस स्वयं आंशिक रूपमा एसिया र युरोप दुवै रहेका कारण भौगोलिक एवं प्रादेशिक प्रभाव रुसी साहित्यमा अवतरण हुनु आश्चर्यजनक हुन्न । रुसी साहित्य सर्जक महारथीहरूमध्ये कसैले जीवनदर्शन पश्चात्य मूल्यलाई संवरण गरेर अभिव्यक्ति दिए भने कसैले एसियाली प्रवृतिमूलक अभिव्यक्ति दिए । पूर्वीय र एसियाली जीवनदर्शनको समीकरण यस रूपमा रुसी साहित्य सृजना बन्न गएका छन् ।

यथार्थमा जीवन-दर्शन मूल्य र मान्यताका मर्मशील सारबाहेक अरू के नै हुन सक्दो हो ।

बीसौँ शताब्दीको पूर्व क्षितिज काल अर्थात् १९१० अवधिसम्मका साहित्यसर्जक लेभ टल्टायका रचना र सृजनात्मक अभिव्यक्ति पूर्वीय दर्शनमा आधारित मूल्यबोधक छन् । टल्टायका 'तीन प्रश्न' शीर्षक कथा यसका उदाहरण बनेको छ । त्यसरी नै 'एक व्यक्तिको लागि कति नै जमिनको खाँचो पर्छ ?' सृजनाले पनि यिनै तथ्यलाई प्रत्यक्षीकरण गर्छ । मात्र ६ फिट जमिन मानिसका शरीर गाड्न पर्याप्त हुन्छ भने मलाई भन्न मन लाग्छ । 'मात्र ६ फिट जमिनले मानिसमात्रलाई समान बनाउन पर्याप्त छ ।' आखिर साहित्यिक संरचनाका संवेग जीवनलाई उत्सर्गमूखी तुल्याउने उत्कर्षसम्म डोऱ्याउनु नै मात्र अहङ्कारको प्रज्ञापन हो । यी त मानवीय संचेतनाका संवेग साहित्य, कलामा मात्र सीमित रहन्न । मानवीय संचेतनाका संवेग जीवनका अनेक सन्दर्भ सापेक्ष रहन्छ । साहित्य मानव संचेतना संवेग रहेझैँ कला पनि मानवीय संचेतनाका संवेगै हुन् । कलासाधनाका पनि आयामिक क्षितिज छन् । गोल-गोल खगोलभित्रका यावत् ग्रहनक्षत्रहरू गोलै छन् । गोल ब्रह्माण्डका क्षितिजहरू पनि शत प्रतिशतै गोल छन् । गोलाइमा स्वयम् हाम्रा यावत् सरोकारका गोलाइ नै स्थापित एवं शाश्वत आयतन बन्छ । अति त नभनी हुन्न सङ्गीत, वार्तालाप, नाटकीय अभिनय, सोच-विचार आदि पनि मानवीय संचेतनाभित्रकै संवेग बन्न पुग्छन् । मानवीय संचेतनाका संवेगहरू यसभन्दा पारी पनि विचरण गर्न पुग्छ । राजनीति अनि विज्ञान पनि मानवीय संचेतनाकै संवेग हुन् । राजनीति सत्ताप्राप्ति निमित्त राजनीतिमा कुत्सित चाल पनि परिस्कृत देखाइन सकिने भएर राजनीतिमा फोहोर मैला पनि सुग्घरसफा र सुग्घरसफा पनि फोहोरमैला बन्न सक्दछ । महाकवि देवकोटा आनीवानी पुस्तकमा सङ्गृहित 'देवकोटा, केही स्मृति विम्ब' रचनामा कृष्णचन्द्रसिंह प्रधानले २०१३ सालको जाडोतिर दिल्लीस्थित विज्ञान भवनमा सफलतासाथ सम्पन्न एसियाली लेखक सम्मेलनको दोस्रो दिनको दोस्रो सत्रमा सी. राजगोपालचार्यले... "म साहित्यलाई भोजनालयको सङ्ज्ञा दिन्छु । राजनीति त शौचालय हो । अहिले म त्यही शौचालयबाट तपाईंहरू समक्ष यस भोजनालयमा

आएको छु । यहाँ आउनेबित्तिकै थरीथरीका मगमगाउँदो परिकारको मीठो वासनाले मलाई आकर्षित गऱ्यो र आनन्दानुभूति गरिरहेछु ।" उद्‌गार व्यक्त गर्नुभएको छ ।

साहित्य भोजनालय बन्नुको रहस्य खुल्ला स्पष्ट छ। भोजनालय सफासुघर मगमगाउँदो हुन्छ । साहित्य भोजनालय बन्नु पछाडिको अर्को रहस्य पनि छ । साहित्य मानसिक खुराक बन्छ । मानिस जसभित्र मानिसका संवेदना र संचेतना जागेको हुन्छ त्यहाँ मानसिक भोजनको अनिवार्य आवश्यकता पर्छ, परिरहन्छ । साहित्य स्वस्थ मानसिकताकै चिन्तनशील संवेदना भएकोले साहित्य मानवीय कल्याणमुखी रहन्छ । यो तथ्य साहित्यको विश्वव्यापी संवेग रहेको छ । रुसी साहित्यमा पनि यसकै अनुरागहरू यथेष्ठ नै रसास्वादन गर्न पाइन्छ। लियो टल्सटायका संरचना र सृजनहरू मानवीय संचेतनाका संवाहक रहेका छन्। उनका 'तीन प्रश्नहरू' 'व्यक्तिका कति नै जमिन चाहिँदो हो' कथाहरू बेजोड उदाहरण बनेका छन् । वर्तमानका महत्ताहरू मानवीय कालखण्ड, पात्रता (मानिस स्वयम्) सत्कार्य जसमा आफू संलग्न छ तिनै महत्त्वपूर्ण छन् । कालखण्डको वर्तमानलाई जनाउँदा पात्रले साथमा रहेका मनुष्य र मनुष्यत्वलाई इङ्गित गर्छ, आफू नै प्रवृत्त रहेका काम सर्वोत्कृष्ट कार्य रहने दर्शनयुक्त विचार विज्ञान टल्स्टयले पस्केका थिए । आफ्नो जीवनकालको परिवेश उन्नाइसौँ सताब्दीको अन्ततिरलाई नियाली विश्लेषण गरेका यी मर्म बोधहरू एकाइसौँ शताब्दीका लागि पनि उत्तिकै शाश्वत बनेका साहित्यिक संरचनाका संचेतनाहरू कालजयी बनेका छन्। कालजयी संचेतनाहरू सर्वकालिक हुन्छन् । सर्वकालिक संचेतनामा आधारित अभिव्यक्तिहरू शाश्वत बन्छन् । टल्स्टायका पस्काइहरू नितान्त कालजयी बन्नका आधारशील जीवनदर्शन र मानवीय संचेतनाका मार्मिक आभाषहरू हुन् । फिओदर दस्तइभ्स्की (१८२१-१८८१) को उपन्यास 'कारमोजोभ दाजुभाइहरू' उपन्यास जीवन, मृत्यु र जिउनुको मूल्यमाथि खोजिनीति गर्छ। जीवनव्यथित बन्नुका रहस्य उद्‌घाटन गर्दै त्यसप्रति सामुहिक एवं पारस्परिक दायित्व बोध गर्न गराउने चेष्टा उभार्छ । मानिस मानिसबीचको अन्तर द्वन्द्व र स्वभावहरूको चित्रण गर्न सफल उपन्यास उन्नाइसौँ शताब्दीका रुसी साहित्यिक इतिहासका

मूर्धन्य सिर्जनात्मक रचना सावित भएको छ । यी सावितीहरूका पृष्ठपोषण रुसी साहित्यमा मानवीय संचेतनाका संवेग नै सावित हुन्छ ।

यस सन्दर्भमा विश्वविख्यात रुसी कथाकार एन्टन चेखब स्मरण नगरी हुन्न । एन्टन चेखवका कैयौँ कथावस्तुहरू प्रखर मानवीय संवेगमुखी संचेतनावाहक बनेका छन् । उनका 'बाजी' कथा मानवीय संचेतनाका संवेग बोक्छ। मानवीय संचेतना यथार्थ जीवनविन्दुका विस्तृत प्रस्तुति बन्छन् । जब यथार्थ जीवनविन्दुहरू भावनात्मक चरम उत्कर्षमा उतीर्ण हुन पुग्छन् स्रष्टाका सिर्जनाले मानिसका जीवन सन्दर्भलाई नै सान्दर्भिक बनाउन पुग्छ ।

पन्ध्र वर्षको एकान्त जेलजीवन, स्वाध्ययनले मनग्य ज्योतित व्यक्ति एकाएक बीस लाख नगद र १५ वर्षे कठोर एकान्त जेल जीवनमा उपलब्ध सबै वैभवलाई तिलाञ्जली दिएर जेल अवधि व्यतीत हुनु पाँच दिनअगावै भाग्नु पार्थिव शारीरिक जीवन एवं भौतिक सुखशैली प्रतिको नफरत ठहर्छ। यी अभिव्यक्ति युक्त कथा संरचनाका भावभूमिका । रसियाली साहित्य मानवीय संचेतनाका संवेगहरू बोक्छन् । यी संवेगहरू विश्वपाठक जगत्मा उत्रन्छन्, अनुदित हुन्छन्, आफ्ना भाषामा रसियाली साहित्य अनुदित साहित्यिक कोसेलीका रूपमा ग्रहण गर्छन् । म पनि एक यस्तै पाठक हुँ जसले एसियाली साहित्यमा गुञ्जित मानवीय संवेदनाका सवेगहरूलाई अलि-अलि अङ्ग्रेजी र अलि-अलि नेपाली माध्यमबाट रसास्वादन गर्ने जमर्को गर्दछु । एसियाली साहित्यमात्र रुसी रङ्गभूमिका लालिमा नभई अब त मानवीय संचेतनाकै सन्देशवाहक संवेग बनिसकेको छ ।

साहित्य समाज, राष्ट्र र मानवताको अभिव्यक्ति भएर यसभित्र अवतरित अनि थेग्रिएका संचेतनाका संवेगहरू मात्र शाब्दिक अभिव्यक्तिमा नाप्न सकिन्न । मानवीय संचेतनाका संवेगहरू जीवनका अनेक विधागत अङ्गहरूमा मुखरित भइरहेका हुन्छन् । चित्रकला रङ्गमा भाका हाल्ने कला साहित्य हो । चित्रकला रङ्गमा भाका हालेर मौन श्रवण गराइरहन्छ हामीलाई । चित्रकलाको मौनश्रवण स्रोतलाई पहिल्याउन विशिष्ट संचेतना हुर्कनुपर्छ, हुर्काउनुपर्छ । चित्रकलाको मौन श्रवण रङ्गहरूको विश्लेषण र विवेचनामा खुल्छ, बोल्छ । चित्रकला भन्नु

रङ्गमा भाका हाल्ने क्षमतावान् सीप हुन आउँछ । कलाकार रङ्गमा गुनगुनाउँछ। कलाकार रङ्गकै स्वर सुसेल्छ। रङ्गमै जीवन दर्शन गर्छ रङ्गकर्मी कलाकार ।

दर्शन विनाको साहित्य क्षणिक बन्छ। दर्शन ओतप्रोत रहेर साहित्यकालजयी बन्छ । आधुनिकतालाई गर्भाधान गरेर दार्शनिक अभिव्यक्तिलाई पस्काउने *आमा* उपन्यासका आख्याता माक्सि गोर्की कालजयी बन्नुभित्रको मर्म यसमै सटेको छ। उनका 'आमा' प्रतिको मर्म बोध कालजयी यस निमित्त बन्छ कि उनलाई पठन गर्ने मर्मशील पाठकभित्र अर्को नौलो आख्यानकार जन्माउने हुत्ती बढाउँछ। प्रत्येक सृष्टि सिर्जनाको संवेग बन्नुपर्छ । सिर्जनाले अर्को नयाँ सृष्टिको संरचना गर्न सकेन भने सृष्टि बाँझिन्छ, थारिन्छ। स्रष्टाको देन नयाँ सृजनशीलताको बीउ उमार्नु हो। रुसी साहित्यलाई मानवीय संचेतनाका संवेगहरूका मूल बनाउने मिखइल शोलाखोभ (१९०५-१९८९) अनातोली अलेक्सिन (१९२४-................), युरी बोन्दरेभ (१९२४-...............), अलेकसान्द्र रेकेमचुक (१९२७-.........) जस्ता स्रष्टाहरूका सृजनाहरू मानवीय छन् । रेकेमचुक भन्छन्– "लेखकका लागि सबभन्दा महत्त्वपूर्ण कुरो हो– मानवजीवनको निरन्तर अध्ययन । तिनका सुखदु:खका विभिन्न क्षणहरूबारे जानकारी राख्नु, चरित्रको विकासक्रमलाई नियालिरहनु ।" (गहिराइमा कथाहरू अनुवाद: डा. जङ्गब चौहान: पाना: १५)

मानवजीवनको निरन्तर अध्ययन मानवीय संचेतनाका संवेग बाहक अध्यवसाय बन्छ आफैमा। जहाँ लगनशीलता सङ्कल्प छ, त्यहीँ अध्यवसाय छ । जहाँ अध्यवसाय छ, त्यहाँ संचेतना हुन्छ । जहाँ संचेतना छ, त्यहाँ संवेगहरू निचोरिने तत्त्वबोधी संचेतनाका संवेगहरू बन्छ । तिनै संचेतनाका संवेगहरू जहाँ मानवीय चरित्रनिर्माणका डोबहरू हालिएका हुन्छन्, लाई भेट्टाउने अनवरत जमर्कोहरू मनुष्यत्वका अनेक आयामिक पहलहरूमध्येका केही निसन्देह हुन्। यी धारणहरूका पृष्ठपोषणमा भ. सुव्वोतिन "पहिलो पुस्तक" लघुकथा पस्काउँदै भन्छन्–

"...त्यस पुस्तकले अब गरम मुलुक र बाँदरको बारेमा मात्र जानकारी दिएर पुग्दैन । त्यसले त युद्धका बारेमा पनि भन्ने गर्छ

जसका बारेमा त्यतिखेर मलाई केही थाहा थिएन । त्यस्तो पुस्तक पढ्नका लागि धेरै कुरा देख्नुपर्छ, धेरै लामो जीवन जिउनुपर्छ ।

हरेक व्यक्तिसँग एउटा यस्तै आफ्नो पुस्तक हुन्छ। म अझै त्यो अधैर्य केटोलाई देखिरहेछु... कसरी ऊ छाप्रोको भुइँमा खाली खुट्टा उफ्रिन्थ्यो, कसरी झ्यालतिर दौडिन्थ्यो, कसरी पसलतिर सुइँकुच्चा ठोक्थ्यो अनि झ्यालको ऐनाबाट बाटोमा कसैको प्रतीक्षामा हेरिरहन्थ्यो ।

मैले नपाएको तर परिकल्पना गरेको त्यो पुस्तक अझै मेरो सम्झनामा जीवित छ ।"

सुवेतिनका यस लघुकथाभित्रका छोटो वाक्यहरूमा विन्याशित जीवन संचेतनाहरू मार्मिक स्पन्दन बन्छन् । "त्यसले त युद्धका बारेमा पनि भन्ने गर्छ ..." वाक्यले विदिर्ण झोपडीभित्र थाङ्ने छालाको लम्बुकोटमा गुटमुटिएर अगेनाको रापमा जीवनको रापलाई ऊर्जा पुऱ्याइरहेको जीवन विम्बकै प्रतिबिम्ब उतारिरहेको छ । युद्ध विभीषिकाले छताछुल्ल रहन्छ । घर भत्काउँछ, संरचना नष्ट गर्छ, सभ्यता ध्वस्त गर्छ र गर्छ जीवनहरूका गाथाहरू विलुप्त । "युद्धका बारेमा पनि भन्ने गर्छ ..." सानु वाकसभित्रको महाभारतीय विश्लेषण र विवेचना अटेसमटेसिएका छन् । "युद्धका बारेमा पनि भन्ने गर्छ ..." सानु वाक्यले लाडाइँप्रतिको विभत्स धारणा व्यक्त गर्छ । युद्धकै कारण त्यस बालजीवन त्यो विदीर्ण अवस्थामा गुज्रन बाध्य हुन पुगेको लाक्षणिक अर्थ बोध गराउँछ । यहीँनिर हो जहाँ रसियाली साहित्यमा मानवीय संचेतनाका संवेगहरू छचल्किरहेका तरङ्गहरू भेट्टाउन सकिने भइरहेका हुन्छन्। युद्धका विभीषिका रुग्ण झोपडीभित्रको पिल्पिले अगेनाको राप वरपर गुजुल्टिएको असाध्य चिस्यानग्रस्त नाङ्गो खुट्टाका हलचलहरूमा अल्झिरहेको बाल पाइलाहरूमा नाप्न सकिन्छ । यही त हो मननशील पाठक मानवीय संचेतनाका संवेगहरू रसियाली साहित्यको सेरोफेरो आत्मसात् गर्न थाल्छ ।

"गहिराइमा कथाहरू" सङ्ग्रहमा (अनुवादक) डा. जङ्गव चौहान आफ्ना अभिव्यक्तिमूलक "सिर्जना भनेको कलामात्र होइन मानिसप्रतिको सम्बन्ध पनि हो।" मन्तव्यमा खुलस्त पार्छन्, "...मानिसमा मानवताको

भावना कलिलै उमेरदेखि उमार्नुपर्दछ भन्ने भाव बगेका छन् यी कथाहरूमा । ...बालहृदयमा अरूको हर्ष र पीडालाई बुझ्ने शक्ति जन्मिन्छ, जब ऊ यसलाई साक्षीभावले हेरेर त्यसमा सहभागी बन्न पुग्छ, तब मात्र ऊ सही अर्थमा मानव बन्न सक्दछ । ...यही सन्देशका साथ युद्धविरोधी कथारचनाहरूमा लेखकहरूले विध्वंश, हत्या र मृत्युप्रति घृणाभाव उत्पन्न गराउँदै यथार्थवादी चित्र प्रस्तुत गरेका छन्। ...दयालुपना, संवेदनशीलता र मानवतामा सौन्दर्यबोध गर्ने तथा त्यस प्रक्रियामा सफल मार्गदर्शनका लागि सक्रिय शक्ति प्रदान गर्ने कार्य यी कथाका रचनाकारहरूले अघि सारेका छन् ।"

युरोपिय र एसियाली महाद्वीपका सम्बन्ध सूत्र बनेका संसारका भूनायक रुसी सङ्घ साहित्यिक मात्र होइन वैज्ञानिक संचेतना र संरचनाका माध्यमबाट विश्वमाथि दह्रो प्रभाव जमाउन सक्ने राष्ट्र बनेको छ । रुसी साहित्य र विज्ञानका प्रभावशाली देन मानवीय संचेतनाका संवेगहरू नै हुन्। साहित्य स्वयम् नै मानवीय संचेतनाका संवेग भएर त्यसले मनुष्यत्व जगाउने वा उठाउने प्रवृत्तिलाई संवरण गरिरहेको हुन्छ। यसमा अन्तरनिहित मनोवैज्ञानिक तरङ्गहरूका चिन्तनशील प्रवाहहरू गहिरिएर मानिस मस्तिष्कहरूलाई आफ्ना प्रभाव क्षेत्र बनाउँछन् । मनोवैज्ञानिक प्रभावहरू संचेतना केन्द्र स्थानमा पसेर, पुगेर चोट पुऱ्याउँछन् । तिनै अन्तरचोटहरू प्रभावका पाप्रा बन्छन् । ती प्रभावका पाप्राहरू जब उप्किन्छन् मानवीय संचेतनाका साहित्यिक संवेगमा परिणति पाउँछन् । रसियाली साहित्यिक समाजले जन्माएको संचेतनाका मानवीय संवेगहरू विश्वसाहित्यका मर्म बन्न सक्नु भित्रका गुदी यिनै गुण हुन्, मेरा संचेतनाका संवेगहरू मलाई उद्बोध गरिरहेछन् ।

# इ.शि. बाबुराम आचार्यको नेपालीमा प्रकाशित एउटा लेखको विषयमा

– *नयनाथ पौडेल*

नेपाली भाषा, साहित्य, कला-संस्कृति, इतिहास एवं पुरातत्त्वको क्षेत्रमा अनवरत रूपमा योगदान पुऱ्याइएको *नेपाली* (त्रैमासिक) पत्रिका अब ५० वर्षको भएको छ । यस अवसरमा यस पत्रिकाको बृहदाकारमा विशेषाङ्क प्रकाशित गर्ने कार्यक्रम भएको हुँदा नेपाली भाषाको सेवामा सर्वात्मना समर्पित कमलमणि दीक्षितले नेपाली पत्रिकामा प्रकाशनार्थ के-कस्तो किसिमले कति परिश्रम गरी लेखहरूको सङ्कलन, सम्पादन एवं प्रकाशन कार्य गराउनुभएको थियो भन्ने कुराको एउटा सानो नमुनाको रूपमा यस लेखलाई प्रस्तुत गर्ने प्रयास गरेको छु ।

प्रसिद्ध हास्यव्यङ्ग्यकार एवं जगदम्बा प्रेसका म्यानेजर वासुदेव लुइँटेलले मलाई एक दिन एउटा लेखको पाण्डुलिपि हातमा थमाई इतिहास (ज्ञ) शिरोमणि बाबुराम आचार्यको घरमा जान भन्नुभयो । त्यसैले २०२७ सालको इन्द्रजात्रा (भदौ २ गते) का दिन बेलैमा म इ.शि. ज्यूको घरमा पुगेँ ।

हुन त यसअघि पनि मैले धेरै पटक इ.शि. ज्यूको घरमा पुग्ने सौभाग्य पाइसकेको थिएँ । मलाई सम्झना छ– आफू सानै छँदा सबभन्दा पहिलोपटक पिताज्यू भोलानाथ पौडेलसँग म इ.शि.ज्यूको बालापीठ भनिने सिनामङ्गलनजिकै रहेको ठूलो गौचर (जहाँ अहिले त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलको आगमन र प्रस्थानकक्षको मुख्य भवन रहेको छ) को घरमा गएको थिएँ । मलाई बाले घरबाट बिहानै पशुपतिनाथको दर्शन गराउने उद्देश्यले सँगै लिएर जानुभएको थियो । पशुपतिनाथको दर्शन गरेपछि बालसुलभ मन न हो मैले हवाईजहाज उडेको नहेरीकन घरै नजाने भनेर ज्यादै कर गरेँ । त्यसैले पिताज्यूले अवलोकन गराउनको लागि ठूलो गौचरन लिएर जानुभयो । त्यतिखेर नामैले ठूलो गौचरन, कामले पनि ठूलो गौचरन नै थियो । हवाईजहाज उड्ने वा बस्ने जानकारी पाएपछि चारैतिरबाट सुरक्षाकर्मीले यसलाई घेर्थे, अनि हवाईजहाजको अवतरण

वा उड्ने काम हुन्थ्यो, अरू बेलामा साह्रै सीमित आवागमन हुने भएकोले ठूलो गौचरन त भैमालतिर जाने आउने मुख्य बाटो हुन्थ्यो, बटुवाहरू लर्कन लागेर हिँडिरहेका देखिन्थे। कहिलेकाहीँ गाइबस्तुहरू पनि छेउछाउमा चरिरहेका हुन्थे । अहिले त यस्तो कुरा कथा भइसकेको छ ।

हवाईजहाज उडेको हेरिसकेपछि बाले ‘हिँड्, अब आज म तँलाई एक जना विद्वान्‌को घरमा लिएर जान्छु’ भनी लैजानुभयो । बाले मलाई त्यही गौचरन नजिकै दुईतले, टायलको छाना भएको, वरिपरि सानो पर्खालले घेरिएको, बाहिरबाट हेर्दा बार्दली हाम फाल्न लागेको जस्तो देखिने, दक्षिणाभिमुख सानो घरमा सोझै भऱ्याङ चढेर माथि लैजानुभयो । माथि भोटो सुरुवाल लगाएका एक जना व्यक्ति बसिरहनुभएको थियो । बाले उहाँको दर्शन गरेर आफ्नो नाम भन्नुभयो । त्यसपछि धाराप्रवाह वार्तालाप सुरु भयो । कतिपय बितिसकेका गाउँका बूढाहरूको बारेमा कुराकानी भयो, कतिपय बित्न ठिक्क परेका बूढाहरूको बारेमा पनि चर्चा चल्यो । महन्त (योगी नरहरिनाथ) को बारेमा पनि छलफल भयो । इतिहास संस्कृतिको बारेमा पनि कुराकानी भयो, भइरह्‌यो । कुरा सुन्दा-सुन्दा मलाई त कस्तो उकुस-मुकुस भयो भने आफूले भर्खरै हवाईजहाज उडेको देख्न पाउँदाको रमाइलो पनि त्यसै हराएर गयो। के-के हो, के-के, कहिल्यै नसकिने कुराकानी चलिरह्‌यो । हातमा फूलमार चुरोट च्यापेर बेलाबेलामा सुइँक्क तन्काउने अनि बीचबीचमा खोक्ने र खोकेर आएको खकारलाई आफैले चपाइरहेको जस्तो गरेर मुख चलाइरहने अनि आँखाचाहिँ नदेख्ने तर टुलुटुलु हेरिरहने अचम्मका व्यक्ति कति बोल्न सकेका होलान् जस्तो मनमा लागिरह्‌यो। आमासँग गएको भए, उहिल्यै फर्किसक्ने। बासँग गएको, फर्कौंन भन्ने आँट पनि नआउने, मलाई त उहाँहरूको वार्तालाप सकसमा परिणत भइसकेको थियो । उहाँहरूलाई आपसी शास्त्रचर्चाको रसास्वादन ! आफूलाई भने कहिले मुक्ति पाइएला भन्ने ध्याउन्न !

हामी बसेको कोठाको दायाँपट्टि यसो बारेर एउटा कोठाजस्तो बनाइएको थियो । त्यहाँ एउटा ठूलो काठको सन्दुस राखिएको थियो । काठकको सन्दुसमा बडेमानको भोटेताल्चा मारिएको

थियो । त्यसभन्दा पल्लोपट्टि भान्छाकोठा थियो र त्यहाँबाट भात पकाइराखेको हुनाले धूवाँ पनि आइरहेको थियो । भात पाकिसकेको रहेछ क्यार ! छलफलमा किन विघ्नबाधा पारौँ भनेर होला, इ.शि.ज्यूकी धर्मपत्नीले पनि पर्खिरहनुभएको रहेछ । अब त उहाँलाई पनि भोकले खपिनसक्नुभएछ क्यार, भान्छाकोठाबाट फुत्त निस्कनुभयो, अनि कम्मरमा झुन्ड्याइरहेको साँचोले भोटे ताल्चा खोली काठको सन्दुस उघार्नुभयो र सन्दुसको बिर्कोलाई आफ्नो टाउकोले थमाउनुभयो । अनि सन्दूकभित्र रहेको हर्पेलाई बायाँ हातले च्याप्प समाउनुभयो र दायाँ हातमा रहेको थुर्पीले जमेको घिउलाई सोझो हातले घिउ आउँदैन भन्ने उखानलाई चरितार्थ गराउने किसिमले बेसरी घुमाएर कोतर्नुभयो । यसरी कोतरिएर पत्रैपत्र जस्तो परेर आएको घिउलाई डल्लो पारी बायाँ हातले समातेर सन्दुसलाई पुनः बन्द गरी सुरुक्क भान्छातिर नै लाग्नुभयो । उहाँले चुँक्क पनि केही बोल्नुभएन । निधारमा रातो टीका, रातो धोती (चोलो लगाउनुभएको थिएन), उज्यालो मुहार मैले इ.शि.बाबुराम आचार्यज्यूकी धर्मपत्नी श्रीमती तीर्थकुमारी आचार्यज्यूलाई देखेको पहिलोपटक । त्यसपछि हाम्रो बाले पनि तुरुन्तै कुरा छोट्याएर बिदा माग्नुभयो, हामी हिँड्यौँ ।

यति लामो कुराकानीको प्रसङ्गमा के-के विषयमा छलफल भयोभयो, तर मैलेचाहिँ वटुकको हैसियतले बुझेको र रमाइलो मानेर सम्झेको चाहिँ यत्ति हो– "अस्ति बराल आएका थिए, दिनभरि बसेर यहीँ ढिँडो खाएर गए ।" आफू गाउँमा हुर्कि को मान्छे, 'पाहुना तर्साउनु, खेताला पल्काउनु' भने पनि गाउँघरतिर खेतबारीमा काम गर्ने खेतालालाई ढिँडो पकाएर खान दिने चलन ! यो बराल भन्ने मान्छे के काम गर्न आयो होला ? घरवरिपरि बारी पनि त्यति धेरै देखिन्न । के गरेर गयो होला ?

इ.शि. श्री बाबुराम आचार्यसँगको पहिलो भेटमा नामले फेला परेका यी बरालले मलाई धेरै दिनसम्म रन्थन्याइरहे । पछि पो थाहा पाएँ । आमै ! बराल भनेका त उतिखेर बडामहाराजा पृथ्वीनारायण शाहको विषयमा बेलाइतको विश्वविद्यालयबाट पिएचडी गर्ने, प्रसिद्ध समीक्षक पछि नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान (अब प्रज्ञा-प्रतिष्ठान)का

कुलपति हुन पुगेका विद्वान् ईश्वर बराल पो रहेछन्, इ.शि.ज्यूसँग शास्त्रचर्चा गर्न आएका !

अँ त, लागौँ आफ्नै प्रसङ्गतिर। इन्द्रजात्राको दिन ई.शि.ज्यूको घरमा पुगेर मैले उहाँको दर्शन गरेँ, आफ्नो नाम भनेँ, र आफू आएको कारण पनि बताएँ। मैले आफ्नो नाम बताएपछि उहाँले मेरो पिताजीको बारेमा सोध्नुभयो। महन्तको सङ्गतमा पशुपति मृगस्थलीमा मेरा पिताज्यूले संस्कृत पढाउनुभएको कुरादेखि लिएर ठूलाघर, लुभुका पौडेलहरूको नालीबेलीसमेत लगाउनुभयो। कुराको सिलसिलामा उहाँले "तिमी पनि जाँच दिँदै जाऊ, पास हुँदै गर। हेर, मैले एम.ए. पास गरेको भए म पनि प्रोफेसर हुन्थेँ" भन्नुभयो। उहाँले साह्रै माया गरेर मलाई यसो भन्नुभएको थियो, मेरो उन्नतिको कामना गर्नुभएको थियो। भए पनि आफूसँग जे छैन, मानिसलाई त्यसैको बढी चाहना हुन्छ भनेको ठीकै लाग्यो। नेपालमा इतिहास विषयका प्रोफेसर कति दर्जन भइसके होलान्। खोइ त यस विषयमा उहाँको बराबरीमा आउन सक्ने को छ र अहिलेसम्म ? उहाँ प्रोफेसरभन्दा कमको योग्यता भएको मानिस हो र ? तैपनि 'इच्छा बलवती ह्येषा'। यस्ता असाधारण व्यक्तित्व एवं मूर्धन्य विद्वान्लाई पनि एम.ए. पासको मोहजालले जेलिरहेको सुन्दा मलाई अचम्म लाग्यो। धन्न प्रमाणपत्रीय पाश्चात्य शिक्षा प्रणालीको सम्प्रभुता !

यसपटकको भेटमा त म एउटा लेखको पाण्डुलिपि बोकेर गएको थिएँ। कसको हस्ताक्षरले त्यो लेख लेखिएको थियो मलाई सम्झना भएन। त्यो दिनको मेरो कामचाहिँ उक्त लेखलाई तलमाथि के-के मिलाउन बाँकी रहेको थियो, उहाँको आदेशअनुसार मिलाएर अन्तिम रूप दिनु थियो। लामै समय बसेर इ.शि.ज्यूले भनेअनुसार मिलाइसकेपछि त्यो पाण्डुलिपि मैले फेरि फिर्ता ल्याएर कमलबाबुलाई बुझाइदिएँ। इ.शि.ज्यूको सो लेख २०२७ कार्तिक, मङ्सिर र पसको *नेपाली* पूर्णाङ्क ४५ मा "नेपालमा जलशयन नारायण मूर्ति"को स्थापना भन्ने शीर्षकमा प्रकाशित हुन पुगेको छ। यस दिनको भेटघाटलाई मैले आफ्नो दैनिकीमा यसरी लेखेको रहेछु। सो उद्धरण गर्ने धृष्टता गरेको छु।

२०२७ भदौ २ गते

आज गाईजात्राको दिन । इ.शि.बाबुराम आचार्यज्यूकहाँ गएको थिएँ । उहाँको एउटा लेख नेपालीमा छापिँदै छ, त्यसैको बारेमा म गएको थिएँ । निकै बेर कुराकानी गरियो । सारिदिने कोही भए अब पृथ्वीनारायण शाहको जीवनी अझ विस्तृत एवं शुद्धसँग लेख्न सक्थेँ भन्नुहुन्थ्यो । कसले पूरा गरोस् पृथ्वीनारायण शाहको जीवनी ? दुई-चार दिनपछि राष्ट्रको यत्रो विशाल सम्पत्ति हराउँछ । अनि नेपालले उनलाई चिन्छ र उनको महिमा गाइन्छ । त्यत्रा विद्वान्ले फाटेको सुरुवाल लगाएर बसेको देख्दा नेपालका विद्वान्हरूको आर्थिक अवस्था कस्तो छ भन्ने स्पष्टै छ ।

हुन पनि यस्तै भयो । वि.सं. २०२९ साल भदौ २१ गते इ.शि.ज्यूको स्वर्गारोहण भयो । राष्ट्रको यति ठूलो सम्पत्ति यसै बिलाएर गयो ।

यसप्रकार एउटा लेख नेपालीमा प्रकाशित गर्नको लागि कमल दीक्षितले मलाई इ.शि. बाबुराम आचार्यज्यूसमक्ष पठाएको विषयमा चर्चा चलाउनुको मेरो मनसाय *नेपाली* अनवरत रूपमा स्तरीय भएर ५० वर्षसम्म पुऱ्याउन सम्पादकले कति कठिन परिश्रम गर्नुपरेको थियो भन्ने कुराको नमुना पाठकहरूसमक्ष प्रस्तुत गर्नु हो । स्तरीय लेखहरू प्राप्त गर्नको लागि सम्पादकले कति जना व्यक्तिहरूलाई कति लेखकहरूकहाँ पठाउनुभयो होला, कति लेखकहरूकहाँ उहाँ आफैं पुग्नुभयो होला । आफूले सम्पादन गरेको पत्रिकामा कसरी स्तरीय लेखहरू प्रकाशित गर्न सकिन्छन् भनी अहोरात्र चिन्तन गरेर परिश्रम गर्न सके मात्र पत्रिकालाई निरन्तरता दिन सकिन्छ । नत्र त पत्रिकाहरू बीचैमा हराइहाल्छन् नि !

यसकिसिमले अनवरत रूपमा ५० वर्षसम्म पत्रिकाको सम्पादन एवं प्रकाशन गरिरहनु साह्रै कठिन र परिश्रमसाध्य कार्य हो। नेपाली भाषा एवं साहित्यसेवाप्रतिको निष्ठा हो। यसकिसिमको निरन्तरता सधैं कायम रहिरहोस् ।

# नेपालीभित्र केही कुरा

– *नित्यराज पाण्डे*

नेपाली भाषा नेपालको राष्ट्रभाषा हो । यो भाषा भारतको संवैधानिक भाषा र नेपालीहरू बसेका संसारको विभिन्न क्षेत्रमा बोलिने भाषा हो । धेरै शताब्दीदेखि चलिआएको यो विकसित भाषा हो । नेपाली जातिलाई बोध गराउने हुँदा यसको नाम नेपाली रहेको हो । नेपालीलाई पहिले गोरखाली पनि भनिने हुँदा भारतबाट *गोरखा भारत,* गोर्खाली *गोर्खे खबर कागज* आदि शब्दबाट पत्रिका प्रकाशित भएको हो भने काठमाडौँबाट १०० वर्षअघि प्रकाशित *गोरखापत्र* हो । यो भाषालाई राष्ट्रभाषा र काम गर्ने कर्मचारीलाई राष्ट्रसेवक भनिने हुँदा यस्तो नाम भएको पत्रिका सम्पादनमा लागेको यो व्यक्ति पनि हो ।

संवत् १९५८ मा स्थापित नोबेल पुरस्कार जस्तै नेपाली भाषा सम्बद्ध गर्ने मदन पुरस्कार हो । २०१२ साल असोज १० मा मदन पुरस्कार दिने सूचनापछि २०१२ साल पौष १ गते रोज ६ का दिन ल.पु. पोता रजिस्ट्रेसन अड्डामा यो संस्था दर्ता भएको हो । रानी जगदम्बाले आफ्ना दिवङ्गत पति ले.ज. मदनशमशेर जबराको पुण्य स्मृतिमा नेपाली भाषामा उच्चकोटीका ग्रन्थहरू सिर्जना भई भाषा भण्डार उत्तरोत्तर बढ्दै जाओस् भनी उच्च उद्देश्य राखी मदन पुरस्कार स्थापना हुँदा नेपाली भाषीहरू हर्षविभोर भएका थिए ।

यसको गतिविधि आफ्नो तर्फबाट प्रकाश गरी नेपाली भाषा प्रवर्द्धन गर्न पत्रिका आवश्यक भएको कुरामा गुठीभित्र ओफ्रेल पर्ने कुरा भएन । सम्पादककै शब्दमा गुठीको आम्दानी नपुगेर प्रकाशित हुन नसकेको पत्रिका खर्च पुग्दासाथ ल.पु. म्या.नं. ४ मा दर्ता भई *नेपाली* त्रैमासिक, २०१६ कात्तिक, मङ्सिर र पुसको अङ्क निस्केको छ । यो कुन मितिमा निस्केको ठ्याक्क भन्न नसके पनि तेस्रो वर्षको मदन पुरस्कार वितरण र लेखापरीक्षकको २०१६ साल पुस १ गतेको प्रतिवेदन देखेपछि यो पत्रिका २०१६ साल पुसमा प्रकाश भएको स्पष्ट छ । प्रारम्भदेखि अहिलेसम्म यसको सम्पादक कमल दीक्षित, प्रकाशक मदन पुरस्कार गुठी र मुद्रक जगदम्बा प्रेस देखिन्छ । मुखपृष्ठमा

यसको ठेगाना मदन पुरस्कार गुठी श्रीदरबार पुल्चोक काठमाडौँ देखिन्छ ।

यस पत्रिकाको कुरा गर्दा पहिलो १० अङ्क र अरू यसको अगाडि छ । पहिलो अङ्कमा प्रसिद्ध नाटककार बालकृष्ण समको 'म कहिल्यै मर्दिनँ' भन्ने कवितामा ब्रह्माण्ड, प्राचीन सम्पदा, वैदिक वैशिष्ठ्य र पाश्चात्य व्यक्तिसमेत देखाई अणुमा व्यापक भई स्पुतिनिक हुत्याएर, राकेटले चन्द्रमासतह नाघी सुगन्धित भइरहने दार्शनिक कविताबाट अनन्त जगत्मा आत्मसन्तुष्टि भइरहने कुरा दर्साइएको छ । यो पत्रिका २०० अङ्कचाहिँ बृहत् आकारमा निक्लने योजना सुन्दा भाषा-साहित्यमा समृद्धि ल्याउने गुठीको पत्रिका भविष्यसम्म रहिरहनेछ । यसमा विद्वान् ज्योतिषाचार्य, गणितज्ञ र इतिहासकार नयराज पन्तको यसको यशको पात्र के ? चाणीय त्रिकोण मितिको विकासको एक झलक लेखमा पूर्वीय चाणीय त्रिकोण मितिको विषय 'नेपियर' नाममा दर्ता हुँदा हाम्रो गुण देखाइएको छ । दुइटा मूर्धन्य व्यक्तिको कविता र लेखबाट यसको उज्यालो रूप स्पष्ट छ । दोस्रो अङ्कमा भिक्षुका 'मेरो गीत मेरो क्षण' कविता, काशीनाथ आचार्य दीक्षितको *आत्मकथा*बाट झिकिएको ४२ सालको लेखमा यस पर्वको कुरा, त्यसबेलाको शासकको गतिविधि र चितवनमा खेलिएको सिकारको बयान छ। सिकार खेल्ने व्यक्ति दीक्षित नभए पनि शासक वर्गसँग उनको बसोबासले पनि यसको प्रस्तुति राम्रो छ । पछिको अङ्कमा ज्यादै थोरै कुरा नमिलेका भनी भीमभक्तमान सिंहले लेखेका पत्र पनि छापेर सम्पादकले आफ्नो दायित्व पूरा गरेको देखिन्छ । तेस्रो अङ्क हेर्दा विश्वप्रसिद्ध चित्रकार लियोनार्दो दा भिन्चीका प्रसिद्ध कलाकृति लास्ट सपर र मोनालिसाको सम्बन्धमा प्रसिद्ध कलाकार लैनसिंह वाङ्देलका रचना छ भने इतिहास-शिरोमणि बाबुराम आचार्यका सम्बन्धमा आनन्ददेव भट्टको लेख मननयोग्य छ । श्रद्धेय इतिहासकारकै शब्दबाट उनलाई लागेको लाञ्छनामा यथार्थ कुरा जनसमक्ष आउँदा निकै जान्न पाइएको छ । चौथो अङ्कको 'परमेश्वरको रूप' शीर्षक राखी रामकृष्णले लेखेको लेख यथार्थपरक धार्मिक लेख हो । समालोचक र न्यायाधीश शर्माको कलमबाट परमेश्वरको स्वरूप मननयोग्य छ। समालोचनातर्फ रत्नध्वज जोशीको

चिसो चूल्हो र यदुनाथ खनालको 'तरुण तपस्वी-एक दृष्टिकोण' उल्लेखनीय छ । समालोचनाक्षेत्रमा नाम चलेका लेखकहरूबाट जान्ने कुरा निकै छ । समालोचनातर्फ पत्रिकाको लक्ष्य द्वारतर्फ उन्मुख भएको देखिन्छ । यसमा यस व्यक्तिले मदन पुरस्कार पाएको कुरा पनि छ । वाङ्मयलाई विविध विषयमा डोऱ्याउन पाचौँ अङ्कले टेवा दिएको छ । सरस्वतीप्रसाद घिमिरेले धातुका मूलरूप क्रियापदबारे संस्कृत व्याकरणको लेट लकारलाई वैदिक काल जोडेर विस्तारपूर्वक लेखेका छन् । वैदिक संस्कृत साहित्यतर्फ पनि पत्रिकाले आफ्नो ढोका खोलेको छ । अदालत प्रक्रियामा लास जाँचले अदालतले विभिन्न अर्थ लगाई फैसला हुने गरेकोमा डा. मोहनमणि दीक्षितको "लास जाँच" लेखबाट यथार्थ रूपमा प्रकाश गरिएको छ । चिकित्सा शास्त्रको दृष्टिकोणबाट अदालतलाई सहयोग हुने लेख देखिन्छ । नयराज पन्तको पहिलो लेखको क्रममा यस दोस्रो लेखमा वृत्त रत्नाकर र प्यासकष्टका त्रिभुजको कुरा राखी हाम्रा शास्त्रका विशेष कुरा दर्साएका छन् । विदेशीले नेपालीलाई डोऱ्याउने दृष्टिकोण परिवर्तन गरी पन्तका रचनाहरूबाट पूर्वीय पुस्तकले नै पथप्रदर्शन गरिएको प्रस्ट छ । साहित्यलाई उपयोगी हुने शृङ्गार रसको कुरा पनि छ । साहित्यमा महत्त्वपूर्ण अङ्ग भएको यस रसको कुरा यसले लेखेको पुस्तक 'राजीवलोचन जोशी र केदार कल्प' मा केही कुरा लेखेको थियो भने नेपाली साहित्यमा मनोहर स्थान भएको विषय संवत् १९७४ मा प्रकाशित *सूक्तिसिन्धु* कविता सङ्ग्रहमा स्पष्ट छ । नेपाली साहित्यका वरिष्ठ पुरुष रामकृष्ण शर्मा र यदुनाथ खनालबीचको जुहारी भावसमेत भएको पढ्नलायक लेखहरू आउनु समालोचना क्षेत्रमा उल्लेखनीय छ । *सूक्तिसिन्धु*लाई क्षयोन्मुख र अश्लील साहित्य मान्ने यदुनाथ र क्रान्तिकारी, मौलिकता वृद्धि प्रदान गरी उन्नतिको पथमा हिँडेको मान्ने रामकृष्ण शर्माबीच विद्वत्तपूर्ण तर्क छ । यो कुरा शर्माको 'सूक्तिसिन्धु-एक स्वतन्त्र दृष्टिकोण' लेख र यसभन्दा अघि २०१७ असार, साउनको इन्दु पत्रिकामा खनालको 'नेपाली साहित्यमा प्रयोग र परम्परा'बाट सुरु भएर ग्याँगिएको छ । यसको साथै *रूपरेखा* वैशाख, जेठमा 'सूक्तिसिन्धुको मूल्याङ्कनको खोजमा' लेख छापी यो पत्रिका पनि यसतर्फ गाँसिएको छ । दुवैतर्फ तर्कपूर्ण अभिव्यक्ति जस्तो

शर्माको ‘सूक्तिसिन्धु स्वतन्त्र दृष्टिकोण’बाट अङ्ग्रेजी साहित्यका उदाहरणसमेत राखी अश्लील नठहराएको देखिन्छ । सम्पादकले पछिपछि यस्तो कुरा नछाप्ने भनेपछि यो वादविवाद थन्किएको छ । तर सम्पादकले यसको महत्त्व बुझेको हुँदा आफ्नो सहयोगी जगदम्बा प्रेसबाट प्रकाशनले संवत् २०२४ मा छापी रसस्वादन गर्ने अवसर पाठकलाई प्राप्त भयो । २०५५ सालमा लेखकहरूको परिचयसमेत दिएर राजेन्द्र सुवेदीले तेस्रो सम्पादन गरी छापिएकोबाट यसको वैशिष्ट्य देखिन्छ । छैटौँ अङ्कमा वाङ्देलले लेखेको एलग्रेको चित्रकला लेखबाट पहिले लेखेजस्तै पाश्चात्य देशको कलाको बयानबाट नेपालीलाई पनि चित्रकलामा प्रेरणा दिन प्रयत्न गरेको देखिन्छ । समको ‘म नाङ्गै बोल्छु’ भन्ने कविता र योगनाथ प्याकुर्‍यालको ‘हृदय’ निबन्ध छापिएको छ । यसले २०११ सालमा शान्ति विद्यागृहमा पढाउँदा प्याकुर्‍याल सेक्रेटरी भए पनि संस्थापकको नाताबाट उनको हैकम र मुख्य शिक्षक भएको देखिएको थियो । यिनले सौता नामक पुस्तक पनि लेखेका छन् भने निबन्धमा पनि हात हालेको देखिन्छ । सातौँ अङ्कमा नेपाली साहित्यका प्रसिद्ध समालोचक ईश्वर बरालको खोज अनुसन्धानपूर्वक आशुकवि शम्भुप्रसाद ढुङ्ग्यालका सम्बन्धमा विस्तृत रचना छापिएको छ । उनका बारेमा लेख्नेलाई खुराक मिलेको छ । ८ औँ अङ्कमा जनकलाल शर्माको ‘सेनभूमि विजयपुर र अन्य केही स्थल’ लेखमा यस क्षेत्रको ऐतिहासिक र वर्तमान परिवेशको वर्णन छ भने पं. तुलारामलाई काशीदेखि टिस्टासम्म जजमानी गर्ने गरी गोरखावंशले थमौती गरेको कागजको उल्लेख हुँदा ऐतिहासिक सामग्रीअनुसार यहाँ नेपालको शासन भएको स्पष्ट छ । ‘अपराधको तहकिकात’लेख यसमा छ । कानुनको पहिलो लेखपछि यो दोस्रो लेखमा तहकिकात गर्न अरू देशको प्रणालीसमेत देखाएर हाम्रा अदालतलाई सजिलो पार्न अदालतका न्यायाधीश, महान्यायाधिवक्ता र कानुनमन्त्रीसमेत भएका शम्भुप्रसाद ज्ञवालीले मेहनत गरेका छन् । यो पत्रिका प्रकाश भएपछि दुईपटक पुरस्कार पाउने दुईको फोटो र पुरस्कार वितरण समाचार अलि बढाएर प्रकाशित गर्दा गुठी पत्रिकाको शोभा बढेको छ । नवौँ अङ्कमा पनि पुरस्कार पाउने दुईको संयुक्त फोटो छापेर राम्रो गरेको छ । राणाशासनदेखि नेपाली भाषा प्रकाशिनि समिति र शिक्षाविभागमा

मेहनतसाथ काम गर्ने सागरमणि आ.दि.को 'नेपाली साहित्य र शिक्षा' लेखबाट नेपाली भाषा उन्नतिको कुरा राखेर राम्रो भएको छ। यस अङ्कको महत्त्वपूर्ण लेख रत्नध्वज जोशीको 'कथा कथाकार आलोचक' लेख हो। नेपाली साहित्यको समालोचना क्षेत्रमा जोशीको महत्त्वपूर्ण स्थान छ। इतिहास-शिरोमणि बाबुराम आचार्यको चिट्ठीबाट *बुइँगल* पुस्तकका ऐतिहासिक कुराको पत्ता मिलेको छ। दसौँ अङ्कमा 'नेपालचीन सीमानासम्बन्धी लेख मननयोग्य छ। ऐतिहासिक पुरुषका पुस्तक लेख्ने चित्तरञ्जनले भारतका सर्भेयर जनरलको नामबाट हिमालको उच्च शिखरको नाम राख्दा नेपालमा रेजिडेन्ट भई बसेका ब्राउन हड्सनले विरोध गरे पनि नेपालीले चासो नराख्दा त्यो नाम रहेको स्पष्ट छ। त्यहाँ महेन्द्रको राष्ट्रियताप्रति अटल विश्वासले त्यस सन्धिमा सगरमाथा नाम परेको पनि उल्लेख छ। सगरमाथाबारे पहिलो लेख लेख्ने इ.शि.को भावना फलिभूत भएको छ। २०१७ सालमा यो लेखको लेखक सिनामङ्गलको इ.शि.को घरमा पुगी विभिन्न विषयको कुरा गर्दा सगरमाथाको चर्चा गरेको थियो। त्यसमा उनले जुद्धशमशेरको शासनमा खप्की खान परेको पनि बताएको सम्झना छ। बालकृष्ण पोखरेलबाट सङ्ग्रह गरिएको 'हीन व्याकण विद्यापतिकृति तीन कविता'बाट भानुभक्तकालिक कविताको रूप थाहा हुन्छ। यसरी १० अङ्कभित्र पुग्दा घुम्दै अरू २ अङ्कका कुरामा पनि मन खिचिएको छ। त्यो हो २०६० वैशाख, जेठ र असारको १७५ औँ अङ्कमा छापिएको 'नेपालभारतको एक साझा भाषा नेपाली' लेखको कुरा हो। नेपालीको प्राध्यापक रहेका दाहालले वाराणसीमा भएको भारतीय नेपाली लेखक सम्मेलन २००३ मा यो लेख वाचन भई छलफल भएको थियो। यसमा नेपाली भाषाको सामाजिक सांस्कृतिक पृष्ठभूमिदेखि लिएर भाषा विकास, साझा भाषाका रूपमा नेपाली र यसको चुनौती तथा भावी दिशा राम्ररी स्पष्ट पारिएको छ। यो व्यक्तिले २०१८ साल माघ १८ र फागुन २ को गो.प. को दुई अङ्कमा लेखेको 'नेपाली साहित्यको झलक'को सम्झना आउँछ। हनुमान्ढोकाको सरकारी समारोहमा प्रा. यदुनाथ खनालसँग प्रकाश भएको केही दिनपछि भेट हुँदा यो लेख राम्रो भनेका थिए। त्यसैमा लागेर यसले गो.प. २०१९ भाद्र ४ मा नेपालमा गद्यसाहित्यको

अवस्था र २०२२ श्रावण २८ को गो.प.मा नेपाली भाषाको विकास लेख लेखेको थियो। मसँग भीमनिधि तिवारीको सिहदरबारमा भेट हुँदा राम्रो भनेका थिए। दाहालबाट यसले भन्दा बढी कुरा र भारतलाई समेत मिल्ने गरेर साझा भाषा चुनौती र भावी दिशाका सुझावहरू राम्रा छन्। अनुसन्धान गरेर लेख्न सक्ने शक्ति भएका दाहालको प्रज्ञा ८७ मा प्रकाशित बौद्ध भिक्षु स्रोनचङ र हुयेनसाङको लेखबाट उनको परिधि ठूलो भएको देखिन्छ। अर्को कुरा गर्दा २०६३ वैशाख, जेठ र असारको १८७ अङ्कमा प्रकाशित 'अलङ्कार चन्द्रोदय-उपोद्‌घात' रचना हो। १९७८ मा चन्द्रको निगाहबाट अलङ्कार चन्द्रोदय प्रकाश भएपछि शास्त्रीय पद्धति अलङ्कार गुणको कसौटीबाट नेपाली कविताको गुण बढेको थियो । नेपालका प्रसिद्ध शास्त्रीय कवि भरतराज पन्तले महाकाव्य, काव्य, कविता गद्यलेखका साथै धार्मिक पुस्तकसम्बन्धी धेरै पुस्तक लेखी साहित्यमा शोभायमान छन्। यी प्राध्यापक संस्कृत साहित्यका विद्वान् मात्र होइनन्, पाश्चात्य साहित्यका अध्येता पनि हुन् । कूट कविताको रस निकाल्ने शक्ति भएका यी कवि धेरै कविताहरू सम्झेर मुखाग्र गर्न सक्तथे भने शास्त्रीय अलङ्कार र छन्दमा निपुण देखिन्छन्। कुलचन्द्रजस्ता विद्वान्‌को अलङ्कार पुस्तकमा समीक्षा पार्न सक्नु चानचुने गुण होइन । पुस्तकमा अलङ्कारको लक्षणअनुसार उदाहरण नमिलेको प्रस्तुत गरेका छन्। अतिरञ्जनात्मक उदाहरण भएको अलङ्कार चन्द्रोदयभन्दा राघवालङ्कार वस्तुगत दृष्टिमा ग्राह्य भएको पनि उल्लेख गरेका छन्। फुफु गरेर लेख्न पर्ने र राजा खुसी भए केही हुन्छ भन्ने जमाना र प्रजातन्त्रपछिको पुस्तकमा फरक त हुने नै भयो।

नेपाली साहित्यका सबै अङ्कले स्थान पाउने छन् भनी लक्ष्य लिएको पत्रिकाले समको आशिष, भास्कराचार्यको आधारमा पन्तको अनुसन्धानात्मक लेख ४२ सालको ऐतिहासिक खण्डको बयान, सिकारका कुरा, बाबुरामका यथार्थ कुरा, परमेश्वरसम्बन्धमा एकलौटी भावना नराखी व्यक्त भावना, *तरुणतपसी, चिसोचूल्हो, सूक्तिसिन्धु*समेतका समालोचनात्मक लेख, नेपाली भाषा साहित्यका कुरा, कानुनसम्बन्धी र कथा र कथाकारसम्बन्धी समीक्षात्मक लेखहरूबाट पत्रिकाले आफ्नो वचन पुऱ्याउन प्रयत्न गरेको देखिन्छ।

त्यसमाथि अलङ्कार सम्बन्धमा दुई जना विशिष्ट व्यक्तिका कुराहरू आउँदा यसबारे लेखिदिन सम्पादकको अनुरोध देख्या कुरा धेरै आवस् भन्ने चाहना स्पष्ट छ। कलाक्षेत्रमा बाहिरका कलाकारको कुरा राखेर कलामा समर्पित यहाँका गुभाजुवर्ग निम्ति भित्तेचित्र लेख्नेलाई बाहिरका भाव पनि बुझ्न मद्दत गरेको छ। कविता केही छापे पनि पाँचौं अङ्कमा नै पद्यमा र गद्यकविताहरूमा चाहेजति जिनिस आएनन्। लेखिसकेकोले यसतर्फ यो लालायित देखिँदैन। यसमा कथा त यो लेख्नेले पढेको छैन, कथा र कवितामा ध्यान नदिने नीति भएको लागेको छ। लक्ष्यअनुसार अरू विभिन्न विषयका लेखहरू, अनुसन्धान, समीक्षा र समालोचनामा बढी केन्द्रीभूत भएको लाग्दछ। दुई नाउमा खुट्टा हाल्नुभन्दा एकै नाउमा रहनु बेस मानेको छ। यसले विज्ञापन नलिने आफ्नो नीति त पूरापूर मानेर साहित्यिक पत्रिका साहित्यको हो भनी देखाएको छ। यस पत्रिकाको वितरणसम्बन्धमा ग्राहक बनाए राम्रो हुने लाग्छ। तोकिएको ठाउँमा मात्र राखी बिक्री गर्दा व्यस्त बुद्धिजीवी वर्गलाई खोजीखोजी हिँड्न सजिलो देखिँदैन। कार्यालय सचिवलाई त काम बढ्छ तर सहयोगी एक राखिए यो काम र बस्दै गएको अन्य काममा पनि व्यवस्थित गर्न सजिलो हुने देखिन्छ।

✍

## "नेपालीत्व बढाउने विषयमा हामी सबै एक छौँ"

– *पूर्णप्रकाश नेपाली 'यात्री'*

*नेपाली* त्रैमासिक राष्ट्रिय तथा अन्तर्राष्ट्रिय नेपालीहरू समग्रको मार्गद्रष्ट्रा बनेको छ। त्यसैले पनि होला आधिकारिक तवरमा *नेपाली* पत्रिकाले उमङ्गसाथ आफ्ना उद्‌गारहरू दुई सय अङ्कलाई विशेषाङ्कको रूप दिन लागेको जानकारी पाइयो। यो औधी हर्षको कुरा हो। किनकि यो पत्रिकाको उद्देश्य लाभकारी नभएर सन्देशवाहक बनेको कुरा सर्वविदित छ। नभन्दै त्रैमासिक सङ्कल्पमा प्रतिबद्ध रहेर पचास वर्षदेखि *नेपाली*को एकता घरदैलामा पुऱ्याउँदै आएको कुरा सर्वविदित छँदै छ। त्यसमा पनि अरू भनौँ भने नेपालीत्वका नवीन ऊर्जाहरू, सन्देशहरू नेपालीका घरघर पुऱ्याउन पचास वर्षदेखि आफ्नो त्रैमासिकीय दायित्व वहन गर्दै इमान्दारीपूर्वक जवाफदेही वहन गर्नु निश्चय नै प्रशंसनीय विषय हो।

*नेपाली* पत्रिकाका लागि कथा, कविता नराखिदिन पनि अनुरोध गरिएको रहेछ। त्यसमा अन्यमनस्क बनिनुपर्ने कारण छैन। यिनको कारण के होला भन्न मन लाग्यो भने संसारलाई निर्माण पथमा पुऱ्याउने र डोऱ्याउने विश्वव्यापीरूपमा कवितामय सन्देश प्रवाहित गर्ने तत्त्व त ऋग्वेद आफ्नो स्थानमा छँदै छ। गन्तव्यमय धीरोद्वात्व वागवाणी उद्‌गारित रूपमा पूर्ववत् रहिआएकै छन्। यी भनाइको परिपुष्टिका लागि डाक्टर विद्वान् सम्पूणानन्द कृत्व *आर्योका आदिदेश* अध्ययन गर्नु आवश्यक छ। त्यस्तै बोधगम्य कुरा अर्को देखिन आउँछ। ऋग्वेदले कवितामय उद्‌गायन गरेको हजार १५ सय वर्ष पुगिसक्दा पनि शानवानका लागि आफ्नो तारुन्य बार्धक्यमा पुग्न नदिनु यो नै उसको उद्‌गायन क्षमता हो।

त्यस्तै मन्त्रसाहित्यका लहरसँग आबद्ध रहेर रचित ग्रन्थहरू *महाभारत*, वाल्मीकिय *रामायण*जस्ता विशालकाय ग्रन्थहरूका ओजस्विता र उद्‌गार गहिराई यति नै छन् भनेर किटान गर्न गाह्रो छ। त्यसै अर्थ परिपुष्टिका लागि महाभारतका आदिपर्वमा नै उसले सगर्व यस्तो घोषणा गरेको पाइन्छ। "यद्धेहास्ती तदननेत्र यत्न हास्ति कुत्रचीत" यसको पूर्वरूप यस प्रकार छ। (धर्मे अर्थे च कामे च मोक्षे च

भरतर्सव:) यसको आसय यस्तो हुन सक्छ। धर्मशास्त्रमा, अर्थशास्त्रमा, कामशास्त्रमा तथा मोक्ष्य शास्त्रमा जहाँ जुन प्रसङ्ग र विषय खोज्नुपरेको छ। यसमा सर्वसुलभ पाइन्छन्। परन्तु यसमा नभएका तरलतादात्यहरू संसारमा कतै पनि पाउन सकिँदैन। विचार गरौँ यी पङ्क्तिहरूमा कति शिष्ट र प्रतिष्ट हुङ्कारहरू पाइन्छन्। अतएव: यिनै पङ्क्तिहरूलाई साक्ष्य राखेर यहाँनेर के भन्न सकिन्छ भने कथा र काव्य विधामा भावगहनताविना कविता हुँदैन। पञ्चपल्लवविना कविता हुँदैन। ती विषयहरू उल्लेख गर्न थालियो भने *नेपाली* त्रैमासिक जो आफ्नो सूक्ष्म कलेवरद्वारा कर्तव्यवोध गर्न गइरहेको छ। त्यस्तै कविता नै कविता हो। जसले आफ्ना स्पष्टीकरण यसरी दिन सकेको छ। उत्तिष्ठ जाग्रत: प्रात्यवरान निवोधत: यिनका भाव विस्तारको अक्षरश: बयान गर्न थाल्ने हो भने कविता भनेको त्यस्तो पो हुन्छ भन्नुपर्ने हुन जान्छ।

वस्तुत: यो अनिवार्य चाहिन्छ भन्ने आसयसँग आबद्ध छैन केवल गुनासो मात्र हो यद्यपि एक तवस्वीले आफ्नो गन्तव्य सुरक्षित राख्नाका लागि सविनय आग्रह गरेको छ भने त्यसको अवज्ञा गर्न सुहाउँदैन। अतएव: *नेपाली* त्रैमासिकले जस्तो गन्तव्य रोजेको छ त्यो गन्तव्य अत्यन्त सराहनीय र प्रशंसनीय छ नभनी सुखै छैन।

वास्तवमा *नेपाली* त्रैमासिक भनेको मदन पुरस्कार गुठीको मुखपत्र हो भन्ने कुरा यसका १९८ अङ्कहरूले आफ्ना अभिव्यक्ति साक्ष्य प्रस्तुत गरिसकेका छन्। यदि प्रस्तुत त्रैमासिकले आफ्ना अभिव्यक्तिगत उद्गारद्वारा प्रस्ट गरिसकेका छन् कि हाम्रा गन्तव्य कति छन् कति भनी साध्य छैन। कहिले हामी छात्रवृत्तितिर लाग्छौँ भने कहिले हामी विद्वद्वृत्तितिर लाग्छौँ। साथै हामीले प्राकट्य गर्न खोजिएका गहिराईहरू विस्तृत चिन्तनहरू प्रछन्न सम्भावनाहरू निरन्तर चालु राखेर जसरी हुन्छ जातिय अस्मिता एवं नेपालीत्वका चिन्तनधारा समग्रमा गहिराई र व्यापकताका साथ उद्घाटन गर्नुपरेको छ। किनभने विश्ववाङ्मयको नेतृत्व गर्दै आएको नोबेल पुरस्कारसँग नेपालीत्वलाई मदन पुरस्कार एवं जगदम्बा-श्री पुरस्कारद्वारा अघोषित नेतृत्व प्रदान गर्नु नै यिनका गहिराइको पृष्ठभूमि हो।

जे जस्तो होस् अब *रूपरेखा*को संसार देदिप्यमान रहेको छैन। उत्तम कुँवरको असामयिक मृत्युले नै यसको भविष्य टुङ्ग्याइदिए जस्तो लाग्दछ। *गरिमा*लाई हेरौँ, उसको कछुवागति दर्शकलाई राम्रो लागेर पनि पाठकलाई सन्तोष प्रेरित हुन नसक्नु सर्वविदित छ। त्यसैले *मधुपर्क*ले पनि आफ्नो भविष्य कसरी सुरक्षित राख्न सक्ला कतै अकस्मात् विश्वव्यापी मान्यताको परिपालन हुन सकेन भने त्यस अवस्थामा धावनमार्गमा अपरिचित लुटेराले तगारो हाल्न खोजे भने त्यसबेला उसको भविष्य के होला भन्नुपर्ने चिन्ताको विषय छ।

*नेपाली* त्रैमासिकले नवीन प्राप्ति र प्रचीन इयत्ता दुवैको सन्तुलन मिलाउँदै आएको म ठान्दछु। किनभने दुवै हत्केलाको पारस्परिक योगदानविना ताली बज्दैन। त्यसअर्थमा *नेपाली*को घोषित इयत्ता एवं गर्वोक्तिहरूले आफ्नो ताछिल्य प्रकट हुन दिएका छैनन्। यस अवधिसम्म हाम्रा ताक्षिल्यहरू सुरक्षित राख्न सकेका छन् नभनी आ जतासुकै होस् भन्न सकिँदैन। अर्थात् पौढता र बूढापाका अन्वेषणात्मक अनुसन्धित्सहरू सुरक्षित राख्न सक्नु यो प्रवल पक्ष हो। भने युवापुस्ताका तारुण्य र ताक्षिल्यहरू यथामति संरक्षण गर्नसक्नु यस पत्रिकाको जीवन्त तपस्या हो नभनी वेवास्ता गर्न सकिँदैन।

भारतबाट प्रकाशित हुँदै आएका समकालीन अभिव्यक्तिहरू अभिनव, नवनीत, अकादम्विनी तथा कलकत्ता, मद्रास, मुम्बई, दिल्ली तथा लखनौ आदि नगरहरूद्वारा प्रकाशित हुँदै आएका मासिक पत्रिकाका गहिराइ यति सन्तुष्टि र प्रस्टोक्तिका साथ प्रकाशित हुँदै आएका छन् तिनले आफ्नो परिवर्तनशील यति तीव्र गतिमा प्रदान गर्दै आएका छन् जुन कुरा शब्दमा व्यक्त गर्न अलिवेर सोच्नुपर्दछ।

नेपालीमा पनि पूर्वोक्त पत्रपत्रिकाहरू पौष्टिकता प्रदान गर्न सङ्कोच मानिरहेका छन् भन्ने खुल्न आएको छ। यदि साझा प्रकाशनले अलिकति पनि अल्छी मानिदिने हो भने *गरिमा*को के गति होला। यस्तै पुरातत्त्वले हार खाइदिने हो कि कसो हो तराजुमा तौलन नमिले जस्तो प्राचीन र अर्वाचीन दुवैथरी पल्लाहरू युगानुकूल गराउन सकेको देखिँदैन। यस्तै मधुपर्कका भग्नमनोरथहरू निर्देशित मार्गको गतिमन्दता अलिकति बढाइदिए भने निकट भविष्यमा मधुपर्कले दुर्गति भोग्नु नपर्ला भन्न सकिँदैन।

यस अर्थमा यी सबै पत्रपत्रिकाको यथामति उल्लेख गर्नुपर्ने अवस्था किन आयो *नेपाली* त्रैमासिकले व्यक्त गर्दै आएका बेलाबखतका अभाव र अभियोगहरू युगानुकूल चिन्तनद्वारा बन्न सकून् भन्ने आसय हो। अतएव: प्राचीन र अर्वाचीनका सन्तुलनहरू टपक्क मिल्न सकून् मिलिरहून् भन्ने आसय पनि हो। निज पत्रिकासँग व्यावसायीकरणका व्यापकताहरू के अनुत्तरित प्रश्न बनिएलान् र? त्यसो त सम्भवै छैन त्यस्ता दिशा-विदिसालाई पनि *नेपाली* त्रैमासिकले आफ्नो सजावट तथा साजसज्जा कसो गरेमा समयानुकूल हुन सक्छ। त्यो कुरा उसले राम्ररी बुझेको छ। बुझ्नु पनि अति आवश्यक छ। *सुन्दरी* मासिकदेखि *शारदा, हिमानी, प्रगति, उदय, धर्ति, ज्योति, मञ्जरी* आदि पत्रिकाहरू समयसापेक्ष नभए पनि लड बस्नै किन नहोस् प्रकाशमा आएका हुन तापनि आ-आफ्ना आयु *नेपाली* त्रैमासिकलाई थपिदिए जस्तो गर्दै दिवंगत भइसकेका छन्। अतएव: पाठकवर्गले *नेपाली* त्रैमासिकसँग यस्तो अपेक्षा राखेको हुन सक्छ। *नेपाली* त्रैमासिकले आफ्ना ५० वर्ष आयुका साथसाथै दीर्घायुस्य प्राप्त गर्ने सहजसाध्य कुरामा अथवा सुखद् अवसरमा कलेवरमा पनि केही अभिवृद्धि गर्ने हो कि? जुन अभिवृद्धि हुनसके आफ्ना-आफ्ना जगा बाटो "उत्तीष्ठ: जाग्रत: प्राप्यवरान निवोधत:" जस्ता उद्‌गार व्यक्त गर्न पाइन्थ्यो कि? अस्तु!

वस्तुत: वर्तमान पत्रपत्रिकाको यात्रासँग दाँज्दै हेर्ने हो भने गोर्खापत्र, मधुपर्क, प्रज्ञा समकालिक, सयपत्री, नेपाल आदि पत्रिका चलिरहेकै छन् तापनि ती राज्यव्यवस्थाका सहयोगमा चले पनि उनीहरूले दिनदिन आफ्नै आयुक्षीण हुँदै गएको अनुभव गर्दै होलान् तर *नेपाली* त्रैमासिक भने उपर्युक्त गुठीसँगै प्रादुर्भाव भई मुखपत्र बनिरहन राजीखुसी रहेको अनुभव हुन आउँछ। साझाबाट *गरिमा*ले सूचना विभागबाट *नेपाल*ले पुर्नजीवन पाएको *शारदा, मिर्मिरे* जस्ता पत्रपत्रिकाहरूले अकालमा मर्नुपरेको तिनका शवयात्रीहरूद्वारा जानकारी पाइँदै छ। कतिपय बाँचेका होलान् तिनमा पनि के खाउँ के लाउँ जस्ता रोगले सताइरहेको हुन सक्छ। *नेपाली* त्रैमासिकको विशेषता भने ५० वर्षका ऊहापोह हेर्दा र मनन गर्दा *नेपाली*का सञ्चालकद्वारा रोग लागेपछि उपचार गर्नुभन्दा रोगै लाग्नु नदिनु बेस भन्नेजस्ता उखान चरितार्थ

गराएको प्रस्टै छ । यताउता गुठी, छात्रवृत्ति स्वास्थ्य उपचार उच्च अध्ययन अन्य सामाजिक कार्य इत्यादिका प्रसङ्गमा यथायोग्य अभिव्यञ्जना पुऱ्याएकै छ ।

सम्भवत: यी पत्रिकाहरूले इच्छाएका दीर्घकालिक यात्राहरू कल्पना गर्नासाथ उनका पालन-पोषणमा सञ्चालक सदस्यहरूका इमान्दारिता र उदारता भइदिनु पहिलो कर्तव्य हुँदो रहेछ । यथार्थमा उदारताबिनाको इमान्दारिता पनि त्यति भरपर्दो हुँदो रैनछ । साथै इमान्दारिताबिनाको उदारता नितान्त खोक्रो हुँदो रहेछ । दायाँ-बायाँ हात जस्तै इमान्दारिता र उदारता यी दुईका पारस्परिक योगदानले जुन उचाइ प्राप्त गर्दछ त्यसो भइदिनु नै *नेपाली*को मुखरित उद्गार हो नभनी सन्तोष अनुभव हुँदैन । यी सबै कुराको यथासक्य निरूपण गर्दै गन्तव्यपथमा लम्किरहेको *नेपाली* त्रैमासिक सामु सम्भवत: कहिल्यै पनि “नरहे बाँस नबजे बाँसुरी” जस्ता उखानले कहिल्यै अभाव र अभियोगजस्ता कुराको सामना गर्नुपर्दैन । सुश्रावात्यक परिप्रेक्ष्य बारम्बार दोहोऱ्याउन सकिन्छ सुरु ४००० नगद राशिबाट आरम्भ भएको मदन पुरस्कार र वर्षौंका अन्तरमा स्थापना गरी परिकल्पना र तिनका सार्थकताको तुलनीय राशि दुईदुई लाख वृद्धि गरिएका प्रसङ्गमा *नेपाली* त्रैमासिकले पनि कलेवरको वृद्धि प्राप्त गर्न अपेक्षा राख्यो भने रुन् कता हो कता फलदायी बन्न सक्तैन र यसै यात्राका शिरोभागमा उद्धरण गरिएको एक पङ्क्ति कविताको अन्त:करण चरितार्थ भइदियो भने के *नेपाली* त्रैमासिकले सहर्ष आत्मव्याख्यात बन्ने संयोग नपाउला ! *नेपाली* प्रतिको आर्थिक दायित्व मदन पुरस्कार गुठीसम्म मात्र हुन सक्छ त्यसमा अन्यथा छैन । तापनि बौद्धिक दायित्व भनेको आया *नेपाली*को हो नभनी सुखै छैन ।

जर्जर मरुभूमिबाट जन्मिएको बिरुवा *नेपाली* त्रैमासिक पचास वर्षपछि सार्वभौम अधिकार सु-सम्पन्न नेपाली जनतासामु, आधिकारिक, शैक्षिक दायित्व बहन गर्ने अवसर पाइएको छ । त्यस उसले आधिकारिक रूपमा हातेमालो गर्न आइपुगेको छ । यसरी सबै कुराको कासन मिलेर विकासोन्मुख नेपालीका जीवनस्तर उठाउन *नेपाली* त्रैमासिक दत्तचित्त भएर लागिपरेको देखिन आउँछ ।

अन्ततः *नेपाली* त्रैमासिक नेपालीका लागि नोबेल पुरस्कार जस्तो मानिने मदन पुरस्कार गुठीको लागि "चरेवेती चरेवेती चेलेव मधु विनदते" जस्ता औपनीसदिक मधुरवाक्यसँग साक्षात्कार गर्न लागेका बेला नेपालीको बौद्धिक स्तर बढाउन स्वयंमा क्षमताको वृद्धि गर्नुपर्ने अपेक्षा राख्न सकिन्छ। यो स्वभाविक पनि हो। उसले आफ्नो गन्तव्य स्पष्ट गरिसकेको पनि छ। कस्तो प्रतीति राख्न सकिन्छ भने *नेपाली* त्रैमासिक पत्रिका मदन पुरस्कार गुठीको बौद्धिक दूरदर्शन हो। आजसम्मका लगनशीलता र समर्पित भावको गति देखेर यसको भविष्य अत्यन्त उज्वल छ भन्न सञ्चालक महोदयहरूका गतिविधिमा एक मात्र खड्कने कुरा आइपरेको देखिन्छ । त्यो के हो भने प्रारम्भिक अवस्थामा डिमाइ १/८ साइजमा प्रकाशित भएको प्रष्ट देखिन्छ भने १/१० साइजमा बौद्धिक स्तरमा उतार्नुपर्नेमा उल्टै आकार घटेको बुच्चो बनाएर निकालेको देखिन्छ। साँच्चै भन्ने हो भने *नेपाली* त्रैमासिकको व्यक्ति हुन पाएको क्षेत्रीयता विश्वकै नेपालीका लागि नपढी नहुने बौद्धिक सामग्री हुनुपर्‍यो। नत्र यसको भविष्य अझै थेप्चिन र चेप्टिन सक्छ। यसको भविष्य त कस्तो सुन्दर अपेक्षा राख्न सकिन्छ भने यसको भावी कलेवर केवल डिमाइ १/१० वा १/१२ अथवा १/१४ हुन सक्यो भने बल्ल यसको भविष्य स्वर्णाक्षरमा अङ्कित हुन सक्छ। एक शुभचिन्तक पाठकले यसको परिकल्पना गरेछ भने गर्न सक्ला सु-स्वागत पनि पाउन सक्ला। र यसले प्रकट गरिआएको माधुर्य उद्गार यथाशीघ्र कर्णगोचर गराउन पाइयो भने के असम्भव नहोला।

अन्तमा यथाशीघ्र *नेपाली* त्रैमासिकले आफ्नो शतवार्षिकी यात्रा सु-सम्पन्न गरेको साथै अन्य देशका पुरातत्व तथा प्रज्ञाप्रतिष्ठानले प्रकाशित गर्दै आएका ती बौद्धिक प्रतिकहरू तुलनीय हुन पाऊन् यही अपेक्षासहित मदन पुरस्कार गुठी र उसका सहायक अङ्ग प्रत्यङ्गहरू बौद्धिक स्तरका लागि सारा सञ्चालकहरू इमान्दारिताका साथ बौद्धिक परिकर बनिरहन पाऊन्! अन्तमा "त्वम जीवः शरदहः शतम्" अभिव्यक्ति व्यक्त गर्दै किमत्यलम् विज्ञेषु।

✍

# नीतिकार कवि-व्यक्तित्वका सन्दर्भमा लेखनाथ

*– डा. बमबहादुर जिताली*

नीतिकारिता लेखनाथको कवि-व्यक्तित्वमा अभिन्न अङ्ग बनेको छ । 'कवि-कवितालाप' (१९६९) देखि नै 'रसिला नैतिक वात' र 'भाषामा उपदेश' दिने अठोटका साथ कान्तासम्मित तरिकाले उपदेश दिने प्रयोजन तथा रसिलो-रोचक पाराले नीति सिकाउने वा समाजलाई सत्मार्ग देखाउने उद्देश्य उनका कवितामा पाइन्छ । उनका 'म कस्तो हुँ ?', 'नैतिक दृष्टान्त', 'म केके नगरूँ', 'सत्य सन्देश' र 'विवेक-वाटिका' अन्तर्गतका मुक्तक कविताजस्ता विशुद्ध नीति-उपदेशपरक कविता, सत्य-कलिसंवादजस्तो सामाजिक काव्य, ऋतुविचार जस्तो नीतिमूलक र प्रकृतिपरक काव्य र बुद्धिविनोदजस्ता आध्यात्मिक बौद्धिक काव्यमा पनि औपदेशिक ध्वनिका साथै नैतिक स्वर पर्याप्त मात्रामा पाइन्छ ।

त्यस्तै *लक्ष्मीपूजा* नाटक (१९९४) हुँदै *तरुण-तपसी* (२०१०) मा आइपुग्दा लेखनाथको नीतिकार कवि-व्यक्तित्व पूरा परिपक्व देखिन्छ । मानिसलाई नैतिक-आध्यात्मिक सत्मार्ग देखाएर समाजलाई शान्ति र विकासको थुम्कोमा पुऱ्याउने काम उनका नीतिपरक कविताले गरेका छन् । नीतिपुट र नीतिपरक चेतनाको उचित प्रयोग गर्ने सूक्तिमय कविताका निर्माता भारवि र औचित्य-सिद्धान्तका प्रवर्तक क्षेमेन्द्रबाट प्रेरणा र प्रभाव प्राप्त गरेका लेखनाथले अन्य नीतिवादी साहित्यकार-शास्त्रकारबाट पनि प्रभाव ग्रहण गरेको देखिन्छ तापनि कवि लेखनाथको नीति-चेतनाको खास आधारशिलाचाहिँ *पञ्चतन्त्र* नै हो । गीता-सार लेखेर लेखनाथले थोरैमा धेरै भाव अटाउने कला-कौशल कमाए भने *पञ्चतन्त्र* पढाउँदा र अनुवाद गर्दा उनको नीतिकार व्यक्तित्वलाई शैली, अभिव्यक्ति र प्रवृत्तिका दृष्टिले नैतिक स्वरसँग घुलमिल हुने मौका मिल्यो। लेखनाथको नीतिकार कविव्यक्तित्वलाई तुलनात्मक विवेचनबाट अरु स्पष्ट पार्न सकिन्छ ।

साहित्यका माध्यमबाट उपदेश वा शिक्षा दिने उपयोगी उद्देश्यले लेखिएका उपदेशात्मक कृतिलाई दृष्टिगत गर्दा पञ्चतन्त्र र हितोपदसेशका कथा, ग्रीसेली *इसप-नीतिकथा,* दाँतेको *दिभिना कमेदिया,*

मिल्टनको *प्याराडाइज लस्ट,* सेक्सपियरको *किङ लियर,* पृथ्वीनारायण शाहको *दिव्योपदेश,* भानुभक्तको *प्रश्नोत्तर* र *वधूशिक्षा,* लेखनाथ र धरणीधरका कविताका अतिरिक्त भैरव अर्यालको व्यङ्ग्यलेखनमा कुनै न कुनै रूपमा उपदेशवाद (डिडाक्टिसिजम्) देखापर्छ । यिनै कृति र व्यक्तित्वहरूसँग लेखनाथका कविता-कृति र नीतिकार कविव्यक्तित्व तुलनीय देखिन्छ ।

नवीन नेपाली साहित्यको थालनी लेखनाथ पौड्याल र धरणीधर कोइरालाबाट भएको हुनाले यी दुवै कविका कवितामा नव्यता पाइन्छ ।[१] यी दुवै कविका कविता समकालिक कवि सोमनाथ सिग्द्याल, चक्रपाणि चालिसे, रामप्रसाद सत्याल, शम्भुप्रसाद ढुङ्ग्याल, शिखरनाथ सुवेदी, कृष्णप्रसाद रेग्मी, भोजराज भट्टराई, रेवतीरमण न्यौपाने, तारानाथ नेपाल आदिका रचनाभन्दा भिन्नै छन् । यीमध्ये सबैजसोले परम्पराश्रित प्रयोग गरेका भए पनि आभ्यासिक भरौटे र कुरौटे लेखनप्रवृत्ति छाडेर लेखनाथले आहाने नेपालीको प्रयोग गरी विषयवस्तुको नवीन आदर्श र उपदेशलाई कलात्मक ढाँचामा उपस्थित गरे ।[२] जुन कुरा आध्यात्मिक आदर्शको व्याख्या, नीतिनिर्देशनात्मक कला, सूक्तिको प्रयोग र दृष्टान्त प्रतिपादन गर्ने उनको प्रवृत्तिले स्पष्ट पार्दछ ।

उनका निम्ति परिष्कारवादी शिल्पको आदर्श संस्कृत काव्य-रीति र नेपाली साहित्यको माध्यमिककालिक परम्परा भए तापनि उनी नेपाली भाषाका प्रमुख शैलीकार[३] हुनाले आफूले आर्जेको शिल्पकला, आध्यात्मिक आदर्श, नीतिचेतना, लोककल्याणकारी भावना र दीर्घ साधनाले गर्दा उनी शास्त्रकार, नीतिकार भए तापनि सरस साहित्यधर्मी, औपदेशिक कलाकर्मी र सौन्दर्यचेतनाका मर्मी एवं संवेदनशील युगधर्मी कवि कहलिए ।[४]

---

*१. ईश्वर बराल,* ***छरिएका समीक्षा,*** *सम्पादक शरद्चन्द्र शर्मा भट्टराई (ललितपुर : साझा प्रकाशन, २०५६), पृ. १२१ ।*

*२. ईश्वर बराल (सम्पादक), 'भूमिका,'* ***हिमालचुली*** *(काठमाडौँ : साझा प्रकाशन, २०१२), पृ. ५ ।*

*३. पूर्ववत्, पृ. ५ ।*

*४. पूर्ववत्, पृ. ६ ।*

लेखनाथको भावपक्ष र नैतिक पक्ष उत्तिकै उज्यालो छ । सनातनी ब्राह्मण भएकाले पौरस्त्य साहित्य, सभ्यता र जीवनदर्शनका परिवेशमा उनले विषयवस्तुलाई युगधर्मसित समन्वय गरी भावपक्षमा प्रशस्त प्रकाश पारेका छन् । यिनै शैलीगत र विषयगत विशेषताले गर्दा उनको भाषा लयालु भयो,[५] अभिव्यक्ति सरस देखियो र औपदेशिक भएर पनि मार्मिक बन्यो । विषयवस्तुका निर्वाचनमा पनि उनले विविधता देखाए । उनी परम्परा र नवीनताका साँघु बने । दुई युगसन्दर्भका दोसाँधमा परेकाले उनको भावोन्मेष यथार्थदर्शीको छ भने दृष्टान्त दिने अभिवृत्तिचाहिँ नीतिकारको देखिन्छ । शास्त्रीय परम्परा, दार्शनिक गहनता, नैतिक निपुणता, औचित्यपूर्ण नीतिकारिता, लाक्षणिक विचित्रता, प्रतीकात्मकता, यथार्थता, मर्यादित व्यङ्ग्यमयता जस्ता विशेषता उनले आफ्ना कवितामा देखाए ।[६]

लेखनाथले जस्तो शुद्ध शब्द प्रयोग धरणीधरले गरेका छैनन् र लेखनशैलीलाई परिष्कृत पारेका पनि छैनन् । उनले "अपि माषं कुर्यात्, छन्दो भङ्ग न कारयेत्" भन्ने पूर्वीय मान्यताको पूर्ण पालन गरे । उनका कवितामा लेखनाथका कवितामा भन्दा बढी युगचेतना पाइन्छ । उनले खेलनाथले भन्दा बढी सरलता अँगालेर कवितालाई सम्प्रेषणीय र संवेदनशील तुल्याए र सकेसम्म राष्ट्रिय भावनालाई उकासे । राष्ट्रियताको बोध, स्वजातिको मोह, स्वसाहित्यप्रतिको श्रद्धा, वीरताको गायन, विद्यानुराग आदि उर्वर भावनाका कविता उनले दिएर बर्बर राणातन्त्रद्वारा थिचिएका, किचिएका, दलिएका, पिँधिएका र चुसिएका नेपाली जनतालाई उनका कविताले झनै स्पर्श गरे । प्रवासी नेपालीलाई पनि उनले सुधारका निम्ति प्रशस्त प्रेरणा दिए । उनले नेपालीको भावना, कामना, यन्त्रणा र मन्त्रणालाई मुखरित गरिदिए, जसमा धरणीधर कोइरालाको विशेषता झल्किएको पाइन्छन् ।[७]

प्राथमिक कालमा यदुनाथ पोखऱ्यालजस्ता राष्ट्रवादी कवि भए तापनि माध्यमिक कालका कविको ध्यान स्वदेशपट्टि पटक्कै

---

*५. पूर्ववत्, पृ. ६ ।*

*६. पूर्ववत्, पृ. ६ ।*

*७. पूर्ववत्, पृ. ७ ।*

गएन। लेखनाथले पनि स्वदेशको गिर्दो, भत्किँदो र बिग्रँदो अवस्थालाई शाब्दिक जाल बुनेर ढाकछोप गरे[८] तापनि उनले विकृतिलाई उधार्ने तथा यस लोक र परलोक सुधार्ने चेष्टा देखाएका छन् जुन कुरा *सत्य-कलिसंवाद*का श्लोक ३६१-६६ बाट स्पष्ट हुन्छ। यतिमात्र होइन, धनमहिमाको व्यङ्ग्य वर्णन गरेर *धनसङ्ग्रह* र धनाभिषाविरुद्ध लेखनाथले व्यञ्जनात्मक शैलीमा उपदेश दिए। उनी यस दृष्टिले धनमोहका परम्परालाई प्रोत्साहन दिने तथा महाजनी सामन्ती सभ्यतालाई हुर्काउने व्यक्ति नभएर लोककल्याणकारी व्यक्तिसरह देखिन्छन्। उनको 'धन-महिमा' तथा उनैका समकालिक पशुपतिभक्त पन्तको अभिधार्थक कवितालाई नियाल्दा लेखनाथ सामन्ती व्यवस्था नरुचाउने देखिन्छन् भने पशुपतिभक्त यसको विरोधी नभएर परिपोषक कविका रूपमा देखिएका छन्।[९]

यसै गरी लेखनाथले *तरुण-तपसी* दशम विश्रामको श्लोक २० देखि ३० सम्म धन सञ्चय गर्ने मानिसको धज्जी उडाउँदै उग्र विरोध र तीव्र घृणा व्यक्त गरेका छन्। धनसञ्चय गर्ने तुच्छ सरुवा रोग मौरीबाट मानिसमा सरेको हो कि मान्छेबाट मौरीमा सरेको हो वा मौरीले मान्छेलाई धनसञ्चय गर्ने कला सिकायो होला कि मान्छेले मौरीलाई धन जम्मा गर्ने सीप सिकायो होला भन्ने शङ्काको निराकरण कविले खोजेका छन्। सत्यको नाश गर्ने कडा सरुवा रोगको वशमा परेर आज संसारमा लाखौँ मानिस सडेका छन्, हत्या, हिंसा, लुट आदि अनैतिक कार्य बढेको छ। मानिसले धन सञ्चय गर्ने कला नजानेको भए संसार बैकुण्ठजस्तै कुण्ठारहित बन्थ्यो, भोकको आगो शान्त गर्न जति आवश्यक पर्छ, त्यतिमात्र भोजन गरे पुग्थ्यो, चराले जस्तै सञ्चय नगरी पेटभरि लिने, खाने गरे हुन्थ्यो। धनमाथि धन थुपार्ने मान्छेले गर्दा कति गरिबको भाग हरण भएको छ भने त्यस्तो अर्काको भाग हरेर अन्न, धन जम्मा गर्ने पापीको नाम विधाताका खातामा दर्ता हुन्छ भन्ने ठानेर शान्त, सभ्य र सुसंस्कृत जीवन बाँच्न उनले नैतिक उपदेश दिएका छन्। यही

---

*८. पूर्ववत्, पृ. ८।*

*९. पूर्ववत्, पृ. ८।*

चेतनाले उनलाई नैतिक, धार्मिक, मार्मिक र कमनीय कलाका कवि बनाएको छ ।

उपर्युक्त तुलनात्मक विवेचनाबाट के स्पष्ट भएको छ भने प्रचलित व्याकरणसम्मत भाषा, सुललित शैली र परिष्कृत शिल्पमा धरणीधरभन्दा लेखनाथ अगाडि छन् र नैतिक चेतना अनि आदर्शमय भावनामा पनि माथि देखिन्छन्। युगचेतना, राष्ट्रिय चिन्तन, जनचाहना र समस्याबोधका सम्बन्धमा भने धरणीधर अगाडि बढेका पाइन्छन्, तर परिष्कृत शास्त्रीय परम्परा, दार्शनिक गहनता, नैतिक निपुणता, औचित्यपूर्ण नीतिकारिता, लाक्षणिक विचित्रता, प्रतीकात्मकता र मर्यादित व्यङ्ग्यमयताजस्ता विशेषतामा भने लेखनाथका कविताले उछिनेका छन्, तैपनि सामाजिक सुधारका निम्ति प्रेरणा दिने प्रयासमा चाहिँ दुवैको भूमिका उत्तिकै महत्त्वपूर्ण देखिन्छ ।

लेखनाथले दार्शनिक गाम्भीर्य बोकेका नीतिको सन्देश दिने रचनाहरूतर्फ आफ्नो जाँगर एकोहोऱ्याई रचेका उपदेशात्मक प्रवृत्तिका छन्दोबद्ध कविता नेपाली साहित्यमा अद्वितीय छन् । उनका रचनामा प्रकृतिको चित्रण वा भौतिक बयान बाहिरी कुरो मात्र हो भने भित्री चुरोका रूपमा उनले हरेक रचनामा अद्वैतवादी वेदान्ती दर्शन प्रतिपादन गरेका छन् । यस लक्ष्यप्राप्तिमा उनको कुनै सन्देह वा दोधार कतै पनि पाइँदैन। लेखनाथको 'धन-महिमा' पनि भौतिकताको समर्थन होइन, त्यो त धनप्राप्तिको लोभलाई दिएको दनक वा व्यङ्ग्य हो ।[१०] लेखनाथको 'धन-महिमा' कविताले खास गरी धनमूलक सामन्ती परिवेश र भौतिक मोहप्रति व्यङ्ग्य गरेको छ ।[११]

धन कमाउने धुनमा मानिसले क्षणभरमै भौतिक भवन र भुवनसमेत भस्म पार्न सक्ने सम्भावना औंल्याउँदै लेखनाथले (*तरुण-तपसी*, दशम विश्रामको ३१ र ३२ श्लोकमा) मौरी, मुसा र मानिसको क्रमशः मह, अन्नपात र धनसम्पत्ति सञ्चय गर्ने चरम रोगले गर्दा चिन्ताग्रस्त भएका र चरामा त्यस्तो भविष्यको निम्ति

---

*१०. तारानाथ शर्मा, "अन्तर्वार्ता" (**हिडपा,** २:६, पूर्णाङ्क ५, चैत २०४०), पृ. २४ ।*

*११. वासुदेव त्रिपाठी (सम्पादक), **लेखनाथका प्रमुख कविता**, पूर्ववत्, पृ. छ ।*

आजै थुपार्ने प्रवृत्ति वा अधम सरुवा रोग नभएको हुँदा नै उन्मुक्त भएर समान हैसियतमा सानन्द जीवन बाँचेको प्रसङ्गमा उपमा र दृष्टान्त दिएका छन् । चराले जस्तो पेटअनुसारको आहार खाई भोलिका निम्ति बटुलेर थुपार्ने लोभ परित्याग गर्न सके मानिसले पनि अमृतपानको आनन्द पाउन सक्ने पावन पालो पाउँछ भन्दै उनी नैतिक नियम, उपदेश र परिवेशमा मनोहर जीवन-यापनको परिकल्पना गर्न पुग्छन् र मानिसको पतन हुनाका कारणहरू पत्ता लगाउँछन् ।

नेपाली साहित्यका फाँटमा लेखनाथ पौड्याल नीतिकार कविका रूपमा उदाएका छन् र उनले निरन्तर नीतिपरक प्रकाश दिएका छन्। उनी प्रत्येक दृष्टिकोणले नैतिक कवि हुन्।[१२] आर्य-संस्कृतिअनुरूप उनका कवितामा मानव-आत्मालाई खार्ने र नैतिक-औपदेशिक विचारलाई तिखार्ने सद्वृत्ति देखिन्छ, तर उनमा कोरा नीति र शुष्क उपदेश दिने उद्देश्य देखिन्न । उनका कविता सत्य र शिवभावले भरिएका छन् अनि काव्य-सौन्दर्यले पनि परिष्कृत छन् भने उपदेश कोचिएर विकृत नभई शब्दशैली र अर्थालङ्कारको चमत्कारका साथै उचित भावको उत्थानले सुमधुर, आनन्ददायक र कल्याणकारक हुन पुगेका छन् ।

लेखनाथको काव्यगत मूल्याङ्कन गर्दै ईश्वर बरालले समष्टि प्रभावमा नैतिकता उनको काव्यगत प्रवृत्ति हो[१३] भनेका छन् भने कुमारबहादुर जोशीले नैतिकता र आध्यात्मिकता लेखनाथको प्रमुख विशेषता हुन्[१४] भनेका छन् ठाकुरप्रसाद पराजुलीले चाहिँ चिन्तनमा तीव्र दार्शनिकता र नैतिकता लेखनाथका मुख्य विशेषता हुन् अनि कविसुलभ संवेदना उनको कवितात्मक उपलब्धि हो भनेका छन्।[१५] यी

---

*१२. ईश्वर बराल, पूर्ववत् पृ. १५ ।*

*१३. पूर्ववत्, पृ. १५ ।*

*१४. कुमारबहादुर जोशी, "कविशिरोमणि लेखनाथको 'तरुण-तपसी'," (**रमझम**, ४:३, २०२५), पृ. ७-१६ ।*

*१५. ठाकुरप्रसाद पराजुली, "नेपाली कविताको आधुनिक दिशा र प्रवृत्ति," (**रूपरेखा** ११:१०९, जेठ २०२७), पृ. १३-३० ।*

भनाइले लेखनाथलाई नीतिकार कविका साथै कवित्व कला-कौशलका कुशल कवि तथा सत्य, शिव र सौन्दर्य-संयोजन गर्न सिपालु कवि-व्यक्तित्वका रूपमा सिद्ध गरेका छन्। महानन्दले के भनेका छन् भने नीतिकारले धर्म, अर्थ र नीतिको निरन्तर सेवन गर्नुपर्छ... आज नेपालीलाई पनि त्यस्तो नैतिक अङ्कुश चाहिएको बुझिन्छ।[१६]

यस अर्थमा लेखनाथ युगीन आवश्यकताले जन्माएका नीतिकार कवि-व्यक्तित्व हुन् । आधुनिकताका सन्दर्भमा पनि उनका कविता महत्त्वपूर्ण देखिन्छन् । उनका कवितामा समाजसुधार गर्ने प्रवृत्ति पाइन्छ। यस आधारमा हेर्दा लेखनाथले सनातन हिन्दू-धर्म र आर्य-संस्कृतिमा देखा परेका अन्धपरम्परा र विकृतिविरुद्ध उभिएर परिष्कृत धर्म, संस्कृति र काव्य-परम्परा प्रारम्भ गर्ने खालका नवीन नैतिक मूल्य र मान्यता स्थापनाका निम्ति पुनर्व्याख्या गर्ने आँट देखाएका छन् भने उनका अधिकांश रचना समाज-सुधारकै निम्ति उन्मुख रहेका हुनाले उनमा आधुनिक सचेतता पनि पाइन्छ। यस अर्थमा आधुनिक नेपाली साहित्यका निर्मातामध्ये लेखनाथको मूर्धन्य स्थान छ। उनी आधुनिक नेपाली काव्यका प्रमुख प्रतिनिधि कवि हुन्।[१७]

लेखनाथका नैतिक-आध्यात्मिक कवितामा लोकको हित हुने मूल बाटो अवलम्बन गर्न र त्यतैतिर अग्रसर हुनाका निम्ति जीवन-सन्देश दिइएको पाइन्छ । सामाजिक कल्याणका लागि नैतिक-औपदेशिक विषयलाई महत्त्वपूर्ण ठानी त्यसबाट सामाजिक चेतना जगाउने चेष्टा लेखनाथले गरेका छन् । उनको सचेत भावुकतापूर्ण कवि-व्यक्तित्वले 'सर्वजनहिताय' सर्वोच्च सिद्धान्त परिपालन गरेको छ।[१८]

लेखनाथ धार्मिक कवि हुन् तापनि उनको धर्ममा केवल धर्म नभएर शिवपूर्ण राष्ट्रवाद मुखरित छ अनि अन्धविश्वासको घैमलदेखि

---

१६. *महानन्द सापकोटा, **नेपाली भाषा** (करफोक : ने.भा.प्र. संघ, २०१०), पृ. क ।*

१७. *ईश्वर बराल (**सुवानन्ददेखि शम्भुप्रसादसम्म,** सम्पादक शरद्चन्द्र भट्ट (काठमाडौँ : साझा प्रकाशन, २०१२), पृ. ५ ।*

१८. *तीर्थराम झा, **लेखनाथ पौड्यालको ऋतुविचार** (काठमाडौँ : अमृतकुमार अर्याल, २०४१) पृ. १-२ ।*

भिन्न रहेको देखिन्छ भने राष्ट्रिय कवि महानन्द सापकोटाकोझैँ उनको शिवत्वमा इष्टदेवता र राष्ट्रदेवता दुवै रहेका हुन्छन् ।

कुनै पनि कवि आफ्नो देश, काल, परिस्थिति र त्यसबाट उत्पन्न युगीन चेतनाको चौघेरा तोडेर उम्कन नसक्ने हुनाले लेखनाथलाई उनकै युगमा राखेर हेरेका खण्डमा उनको महत्त्व आफैँ स्पष्ट हुन आउँछ । उनका एकथरी कवितामा आफ्ना मालिकहरू (राणा)को र आफ्नै पनि इच्छापूर्ति गर्ने खालका धार्मिक तथा व्यक्तिपूजाका रचना छन्,[१९] भने अर्कातिर मानवजीवनका घामछाया देखिने 'पिँजराको सुगा' तथा 'तरुण-तपसी'जस्ता पद्य-कविताहरू पर्दछन् । दार्शनिक दृष्टिले 'बुद्धिविनोद' काव्य रचेर नैतिक-सामाजिक सन्दर्भमा लक्ष्मीपूजा नाटक लेखी लेखनाथले जन-कल्याणका निम्ति जन-साधारणप्रतिको आस्था र प्रेमलाई सधैँ च्यापेका हुनाले उनलाई नेपाली पाठकले आफ्नै हावा, पानी र माटाको गीत गाइरहने श्रद्धेय कवि ठानेका छन् । उनका कविताले नेपाली समाज र पाठकलाई असल बाटो देखाएका छन् । उनको नीतिकार कवि-व्यक्तित्वलाई उनका परम नीतिपरक कविताले चरमचुलीमा पुऱ्याएका छन् भने कविताका विविध उपविधामा पाइने नीतिकारिताका साथै 'लक्ष्मीपूजा' (१९९४) नाटकभित्रका नीतिपरक पद्यरचनाले दिएको सामाजिकता र नैतिक सन्देशमूलकता लेखनाथका कविताको महानता र उनको उच्च कवि-व्यक्तित्वको प्रतीक पनि हो ।[२०] यसबाट उनको सर्वोपरि नीतिकार कवि-काव्यकार व्यक्तित्व झल्किएको स्पष्ट हुन्छ ।

नैतिकताका दृष्टिले लेखनाथका फुटकर कवितामा 'नैतिक दृष्टान्त' सर्वोत्कृष्ट रचना मानिन्छ भने अन्य कृतिमा 'ऋतुविचार' 'तरुण-तपसी' काव्यका अतिरिक्त 'लक्ष्मीपूजा' नाटक पनि त्यस्तै ठानिन्छ । 'जाने सम्पत्ति नजाने विपत्ति' भनी व्यावहारिक उपदेश दिने लेखनाथले जीवन भनेकै नीति हो, वरत्र र परत्र सपार्ने माध्यम नै नैतिकता हो, नीतिछाडा व्यक्ति र धर्मछाडा मान्छे देशको कलङ्क हो

---

*१९. आनन्ददेव भट्ट, "एक महान् कविको मृत्यु" (**रत्नश्री,** ३:४, २०२३), पृ. ४२-४५ ।*

*२०. पूर्ववत्, पृ. ४५ ।*

भन्ने यथार्थ बुझेर नीतियुक्त जीवन बिताए ।[२१] जतिबेला लेखनाथ रानीपोखरी संस्कृत छात्रावासमा अध्ययन गर्न र कविता रचना गर्न थालेका थिए, त्यतिबेला विशेषत: दधिराम मरासिनी र अन्य त्यस्तै साथीसँग लागेर तास-जुवा खेलेर बढी समय बिताउन थाले । खेल्दाखेल्दै एक दिन बाह्र सय रुपियाँ जुवामा हारे। त्यसको चोटबाट चेतेर लेखनाथले 'लक्ष्मीपूजा' नाटक लेखे ।[२२]

लेखनाथको जीवन र कविताबीच तादात्म्य पाइन्छ । कविले खेलाएपछि ढुङ्गो पनि शालिग्राम बन्छ। कविता जीवन हो र जीवन नै कविता हो भन्ने लेखनाथका जीवनमा जति घटना भए ती सबै कविता हुन्, जीवन नै एउटा महाकाव्य हो, जसमा अनेक सर्ग हुन्छन्, ती सर्गहरूमा नैतिक-अनैतिक, सुखान्त-दु:खान्त आदि अनेक घटनारूपी कविताले जीवनरूपी महाकाव्यको सृष्टि हुन्छ भन्ने लेखनाथका कविता नैतिक जीवनमूलक छन् र जीवनोपयोगी छन् । नैतिकता नै सार्थक जीवन हो भन्ने ठहरका साथ अघि बढेका लेखनाथको जीवनी नैतिकताका सापेक्षतामा अत्यन्त सार्थक रहेको पाइन्छ ।[२३]

कविशिरोमणिको जीवन र साहित्य-साधनामा एकरूपता पाइन्छ । स्वान्तसुखाय आनन्द तथा नीतिसङ्गत जीवनबाट प्राप्त आनन्द र समाजका निम्ति उपयोगी साहित्य नै लेखनाथको महत्त्वपूर्ण उपलब्धि हो ।[२४] शिवत्व नै साहित्यको मूल तत्त्व भएकाले सौन्दर्यचेत र नीतिचेतको मिश्रणबाट नीति-उपदेशलाई पनि उनले जनहितका निम्ति साहित्यको चास्नीमा घोलेर अभिव्यक्त गरेका छन् । 'नैतिक दृष्टान्त' कविता यसको ज्वलन्त उदाहरण हो। आत्मा वा ब्रह्मबाट प्राप्त आनन्दमा शिवत्व हुन्छ भने साहित्यमा नैतिकताले शिव वा कल्याणको भाव उकासेको हुन्छ । साहित्यमा नैतिकता रहेन भने साहित्य, विज्ञान र दर्शनमा भिन्नता रहन्न ।[२५] नास्तिक दर्शन र विवेकविहीन विज्ञानले ल्याएको विनाशलाई रोक्न र मानवताको रक्षार्थ

*२१. डमरुवल्लभ पौड्याल, "रेडियो अन्तर्वार्ता," २०५८ पुस १५ ।*

*२२. पूर्ववत् ।*

*२३. पूर्ववत् ।*

*२४. माधव घिमिरे, "रेडियो अन्तर्वार्ता," २०५८ पुस १५ ।*

*२५. पूर्ववत् ।*

नैतिकताको आवश्यकता पर्ने हुँदा लेखनाथका नैतिक कविताको उपादेयता झन् टड्कारो देखिन्छ । लेखनाथ विशेषत: हिन्दूधर्म चिन्तक, नैतिक सन्देशका कवि र संस्कृतिका संवाहक हुनाले कवितात्मक भाषाद्वारा आफ्नो परम्परागत नीति र संस्कृतिको प्रचार गर्नु उनका कविताको उद्देश्य देखिन्छ। कविताका माध्यमद्वारा नीति र संस्कृतिका विषयमा उनको विशेष सफलता झल्किन्छ ।

जीवनलाल सत्यालका पिता बिहारीलाल सत्यालसँग लेखनाथको घनिष्ठ सम्बन्ध रहेकाले पासा खेल्न र पुस्तकालय-अध्ययन गर्न बिहारीलालका घरमा लेखनाथ बराबर आइरहने बेलाको स्मरण गर्दै जीवनलाल सत्याल के भन्छन् भने लेखनाथ नैतिक र आध्यात्मिक जीवन बाँच्ने, नैतिक पाठ सिकाउने, सात्विक खाना खाने, सात्विक आचरण गर्ने कवि ऋषि नै हुन् ।[२६] यसबाट लेखनाथको जीवन र उनका नैतिक-औपदेशिक कवितामा तादात्म्य रहेको स्पष्ट हुन्छ ।

नेपाली नैतिक-आध्यात्मिक चेतनाको परम्परा र युगोन्मेषको समीकरणका विन्दुमा विश्वबोध गर्ने कवि-तपसीका रूपमा लेखनाथ चिनिएका छन् । उनी नेपाली समाजका आदर्श पुरुष र नैतिक-आध्यात्मिक पथ-प्रदर्शक कवि-दूरद्रष्टाका साथै नीति, अध्यात्म र प्रकृति-काव्यसौन्दर्यका स्रष्टा पनि हुन् ।[२७]

नेपाली कविताका क्षेत्रमा लेखनाथले मर्यादावादी धारामा नीतिपरक तथा औचित्यमूलक कविताको उठान गरी उत्कर्षमा पुऱ्याएर उल्लेखनीय उपलब्धि प्राप्त गरेका छन् । यही नै उनको महत्त्वपूर्ण वैशिष्टच हो । उनका कवितामा सरलता, सरसता, श्रुतिमधुरता, कोमलता, दार्शनिकता, आध्यात्मिकता, उचितता र नैतिकताजस्ता उत्तम साहित्यिक विशेषता पाइन्छन् । व्याकरणसम्मत स्तरीय भाषा, काव्यगत सचेतता र सुललित पदरचनाबाट नेपाली वाङ्मयको अभिवृद्धिमा लेखनाथको उललेखनीय प्रसिद्धि छ । मधुरो काव्यस्वरमा गहिरो भाव बुझाउने लेखनाथ सामाजिक सचेतताका उद्घोषक तथा

---

*२६. जीवनलाल सत्याल, "रेडियो अन्तर्वार्ता," २०५८ पुस १५ ।*

*२७. वासुदेव त्रिपाठी (सम्पादक), **कविशिरोमणि लेखनाथका प्रतिनिधि कविता** (काठमाडौँ : श्री ५ को सरकार सूचना विभाग, २०४२, पृ. ट-ढ ।*

युगकवि पनि हुनाले उनी सर्वश्रेष्ठ दार्शनिक कवि हुन् भने सर्वोपरि नैतिक चिन्तनका कवि पनि हुन्। लेखनाथको समकक्ष नेपाली कविमा अर्को नैतिक र दार्शनिक चिन्तनको कवि पाउनु दुर्लभ छ।[२८]

पूर्वीय दर्शन र नीतिपरक साहित्यलाई नेपाली काव्यमा भित्र्याएर लेखनाथले कवितात्मक सौन्दर्यसमेत सजाएका छन्। रस, ध्वनि, अलङ्कार, औचित्य, आदर्श आदि काव्योचित गुणबाट उनका कविता चमत्कृत हुन पुगेका छन्, जसले नैतिक चेतना-प्रवाहलाई रमणीय, पठनीय र स्मरणीय तुल्याएको छ। उनले काव्यालङ्कार र सौन्दर्यका सन्दर्भमा कालिदासको प्रभाव ग्रहण गरेका छन्। अनि औचित्य र नैतिकताका सिलसिलामा क्षेमेन्द्रको बढी स्मरण गरेका छन्। उनका कविताभित्र उपदेशात्मकता, उचितता र दार्शनिकताका साथै आलङ्कारिक चमत्कार, व्यञ्जनाको बाहुल्य र कल्पनाको शृङ्गार पनि पाइन्छ।[२९]

आधा शताब्दीभन्दा बढी निरन्तर रूपमा नेपाली साहित्य-सेवा गर्ने लेखनाथका कवितामा नैतिक दृष्टान्तका अनुपम उपमा, उत्प्रेक्षा र विविध बिम्ब-प्रतीकहरूको सफल संयोजन पाइन्छ[३०] भने जातीय सांस्कृतिक चेतना र धार्मिक-सामाजिक सुधारका निम्ति नैतिक-औपदेशिक लक्ष्यतिर लम्कँदै गरेका हितकारी भावनाको सहज उच्छलन र मानवतावादी दृष्टिकोण घनीभूत भएको पनि पाइन्छ।[३१]

नेपाली साहित्यको माध्यमिककालिक चरमोत्कर्ष र आधुनिक युगको अरुणोदयका दोसाँधमा देखिएका लेखनाथले नेपाली कवितामा नैतिक, कला र भावपक्षको त्रिकोणात्मक समन्वय गरेका छन्। उनी नीतिसचेत आदर्शवादी भएर पनि उनको उपदेश र आदर्शमा कोरापन पाइँदैन। उनले आफ्नो युगको प्रतिनिधित्व मात्र नगरी नैतिक-औपदेशिक र औचित्यपरक कविता-सृजनाका साथै नेपाली कवितामा

---

*२८. राममणि रिसाल, पूर्ववत्, पृ. ५९।*

*२९. पूर्ववत्, पृ. ६२।*

*३०. बमबहादुर जिताली, "पाँच प्रतिनिधि कविताका सापेक्षतामा लेखनाथ" (**गरिमा,** १९:१, पूर्णाङ्क २१७, पुस २०५७), पृ. ६८-७२।*

*३१. वासुदेव त्रिपाठी, पूर्ववत्, पृ. २१।*

आधुनिकताको जग पनि बसालेका हुनाले नेपाली भाषा र साहित्यको इतिहासमा उनको प्रभाव उल्लेखनीय र प्रशंसनीय रहेको छ ।[३२]

लेखनाथको व्यक्तित्व र योगदानका सन्दर्भमा बालकृष्ण सम भन्छन्– "अविश्वास नभई क्रान्ति हुँदैन, तसर्थ दैव र कर्मयोगमा विश्वास राख्ने लेखनाथ सुधारवादी हुन्, क्रान्तिकारी होइनन्, तर उनले नेपाली कविताको युग बदले, क्रान्तिले होइन, सुधारमूलक स्वरले । तसर्थ लेखनाथीय युगको आधा शताब्दीभित्र नेपाली कविता उचित विचार, भावगाम्भीर्य, प्रगतिशीलता, नैतिकता, आदर्श आदि सबै पक्षको विकासबाट वार्णिक छन्दको अधिकार प्राप्त गर्दै भानुभक्तले गाएर नेपाली भाषालाई नेपाली जातिमा व्यापक बनाए भने लेखनाथले त्यस्तै जातीय भाका दिएर नेपाली भाषालाई संस्कृतजत्तिकै उच्च र लयात्मक बनाएर उनी महामानव भए ।[३३]

उपर्युक्त विभिन्न भनइबाट के स्पष्ट हुन्छ भने नैतिकता र आदर्शप्रतिको आस्था, वैचारिक दृष्टिकोण, गहन भाव र तीव्र प्रगतिको चाहनासँगै सुधारवादी युगीन स्वर अभिव्यक्त गरेर भाषिक, सामाजिक र साहित्यिक युगपरिवर्तन गर्नमा भानुभक्तपछि लेखनाथको स्थान सर्वोच्च रहेको छ भने परिस्कृत, परिमार्जित र सुललित भाषा तुल्याउने शिल्पका सन्दर्भमा उनको नीतिकार व्यक्तित्व सर्वोत्कृष्ट ठहर्छ ।

✍

---

*३२. भानुभक्त पोखरेल, "लेखनाथबारे केही" (**बिम्ब–प्रतिबिम्ब,** साहित्यिक सङ्कलन, २०२३), पृ. ६९-७३ ।*

*३३. बालकृष्ण सम, "कविशिरोमणि लेखनाथ" (भानु : कविशिरोमणि लेखनाथ विशेषाङ्क ३:८, फागुन, २०३३), पृ. २३४-२४६ ।*

# सन्दर्भ : ‘षुवाको वाहालि गर्न्या तिर्जा, चर्चाः जङ्गबहादुर कुँवर र विजयराज पण्डित

– *डा. भवेश्वर पंगेनी*

## परिचय

आधुनिक नेपालको राजनीतिक इतिहासमा शक्ति प्राप्तिका लागि सङ्घर्ष हुनेगरेका घटना सामान्यजस्तै देखिन्छन् । पृथ्वीनारायण शाहको मृत्युसँगै दरबारिया राजनीतिमा स्पष्टरूपले सत्ता सङ्घर्षका घटनाहरू देखा परे । राजा प्रतापसिंह शाहले भाइ बहादुर शाहप्रति गरेको व्यवहारबाट थालनी भएको राजपरिवारबीचको मनोमालिन्यले उनको मृत्युपछि सत्ता सङ्घर्षको रूप लिनपुग्यो । सत्ता प्राप्तिका लागि राजपरिवारका अतिरिक्त भारदारसमेतले हिंसाको बाटो लिन पनि पछि परेनन् । फलस्वरूप आधुनिक कालको थालनीदेखि रुन्डै आठ दशकको समयावधिमा सर्वजित रानाको हत्याबाट थालनी भएको यो क्रममा दामोदर पाँडे, भीमसेन थापा, रणजङ्ग पाँडे, माथवरसिंह थापा तथा गगनसिंहजस्ता भारदारहरूको अन्त्य एवम् हत्या हुनगयो । त्यतिमात्र नभएर मुख्तियार (वर्तमानका प्रधानमन्त्री जस्तै) फत्येजङ्ग शाहका अतिरिक्त प्रमुख भारदारलगायत ३२ जनाको हत्या गरिएको र रुन्डै ५६ जना भागेर ज्यान बचाएका तथा निष्कासित भएको घटना ‘कोतपर्व’[१] बाट वि.सं. १९०३ मा मुलुकको शासन जङ्गबहादुर कुँवरको नियन्त्रणमा गयो । इतिहासका विभिन्न पक्षमा जानकारी पाउन पुराना कागज सङ्कलन गर्ने लत नै लागेको यस लेखकले खोजीका क्रममा फेला पारेका तीनओटा पुराना कागजहरूबाट एकै समयतिर दरबारिया राजनीतिमा प्रमुख भूमिका निर्वाह गरेका गगनसिंह, जङ्गबहादुर र विजयराज पाण्डेका बारेमा केही प्रकाश पार्न सक्ने भएकाले तिनैसमेतका आधारमा प्रस्तुत लेखमा गगनसिंहका बारेमा सामान्य जानकारी दिनुका अतिरिक्त ‘कोतपर्व’ को एक महिना जतिपछि ‘कम्याण्डर इन् चिफ् जनरल जङ्गबहादुर कुवर के १९०४

---

१. *ज्ञानमणि नेपाल, नेपालको महाभारत (भण्डारखाल आदि पर्वसङ्ग्रह), काठमाडौंः साझा प्रकाशन, वि.सं. २०५०, पृ. २८४, २८९ ।*

सालका वालि लाई भर्ना भयाका षुवाको वाहाली गर्न्या तिर्जा' र सो को चार दिन पहिला सम्वत् १९०३ साल मिति कार्तिक वदि ७ रोज १ (ई.सं. १८४६ अक्टोबर ११)[२] का दिन 'श्रीराजपंडीत् धर्माधिकार विजयराज पंडीत्के सुमंतसिं कुवरको षायल् सर्दारि षनगीका १९०४ सालका षुवाको वाहालि गर्न्या तिर्जा' का सम्बन्धमा सामान्य चर्चा गर्ने प्रयास भएको छ ।

## गगनसिंह खवास

दरबारिया राजनीतिको केन्द्रमा पुगेका भारदार गगनसिंहका सम्बन्धमा धेरै जानकारी नपाइए तापनि ई.सं. १८३९ डिसेम्बर (वि.सं. १८९६) मा जेठी रानी साम्राज्यलक्ष्मी र पाँडे (रणजंग पाँडे ?) ले उनलाई बन्दी बनाएको भन्ने प्रसङ्ग पाइन्छ ।[३] यो बन्दीका कारण, मिति, अवधि आदिका बारेमा यथेष्ट जानकारी पाइएको छैन । वतन काठमाडौँ उल्लेख गरिएका गगनसिंह खवास भोटु भँडारीका नाति तथा जगजित खवासका छोरा थिए । उनको जन्म वि.सं. १८५३ मा भएको देखिन्छ ।[४] उनको घर काठमाडौँको यट्खाटोलबाट कङ्केश्वरी जाने बाटोमा थियो जहाँबाट हनुमान्ढोका राजदरबारमा पुग्न ५ मिनेटजति लाग्ने मानिन्छ ।[५] वि.सं. १८९३ साल मिति ज्येष्ठसुदी ५ रोज ६ (ई.सं. १८३६ ) का दिन उनलाई "श्रीनाथ कंपुलेटर"मा 'खानगी' खेत ४०। तथा 'खुवा' नगद वार्षिक रकम रु. ३,०००/– को सुविधाका साथ 'कप्तान' दर्जा दिइएको थियो । यो नियुक्तिमा उनलाई अन्य कार्यका अतिरिक्त "...श्री जनरल कम्यान्डर इनचीफ भीमसेन थापाले लाया अह्राया वमोजीम

---

*२. त्रिरत्न मानन्धर, डेट कन्भर्सन चार्ट: विक्रम/क्रिस्चियन एरा, १८०८-१९६३/१७५२-१९०६ ए.डी., कीर्तिपुर: सेन्टर फर नेपाल एन्ड एसियन स्टडिज, ई.सं. २००२, पृ. ९५ ।*

*३. जोन ह्वेल्पटन, किङ्गस, सोल्जर्स एन्ड प्रिस्टस्: नेपलिज पोलिटिक्स १८३०-१८५७, काठमाडौँ: रत्नपुस्तक भन्डार, ई.सं. १९९२, पृ. १२३ ।*

*४. दिनेशराज पन्त, 'मन्तव्य', (प्रकाश ए. राज, कोतपर्वकी महारानी राज्यलक्ष्मी (जिवनी), काठमाडौँ: नवीन पब्लिकेसन, वि.सं. २०५९ बाट उधृत) पृ. ७ ।*

*५. प्रकाश ए. राज, कोतपर्वकी महारानी राज्यलक्ष्मी (जीवनी), काठमाडौँ: नवीन पब्लिकेसन, वि.सं. २०५९, पृ. ९ ।*

तद्वीर भै गर्नु..." भन्ने लिखित निर्देशन पनि दिइएको थियो।[६] उनको नियुक्तिपत्रको दायाँ किनारमा 'मार्फत भीमसेनथापा' उल्लेख गरिएकाले कसैलाई कप्तान पदमा नियुक्ति गर्दा पनि मुलुकको सर्वोच्च प्रशासनिक व्यक्तिको सहमति आवश्यक पर्ने तात्कालिक प्रशासनिक व्यवस्था रहेको स्पष्ट देखिन्छ। जनरल दर्जासम्म पुगेका गगनसिंह कुनकुन समयमा केकस्ता दर्जा हुँदै माथि पुगे भन्ने जानकारी दिने सामग्री प्राप्त नभए तापनि सम्भवतः माथवरसिंह थापाको हत्यापछि मात्र उनलाई यो पद दिइएको थियो। हुनतः उनलाई 'काजी' दर्जा दिइएको भन्ने उल्लेख पाइए तापनि[७] यसको स्पष्ट आधार भने देखिँदैन। उनीसँग सम्बन्धित वि.सं. १९०२ साल पौष सुदि ७ रोज १, १९०३ साल श्रावणसुदि रोज ७ र सोही श्रावण सुदि १५ रोज ६ अर्थात् हत्या गरिनुभन्दा केही दिन अगाडिसम्मका कतिपय पत्रहरू प्राप्त भएका छन्। यिनमा गगनसिंहलाई 'जनरल' नै सम्बोधन गरिएको छ।[८] यसै सन्दर्भमा उनको हत्या हुनुभन्दा केही अगाडि अर्थात् वि.सं. १९०२ साल मिति माघसुदि १० रोज ६ का दिन[९] लेखिएको एउटा पत्रमा गगनसिंहलाई 'जनरल' सम्बोधन गरिएकोबाट पनि उक्त कुरालाई पुष्टि गर्दछ। यो पत्र जनरल गगनसिंह र काजी कुलमानसिंह बस्न्यातको नामबाट लेखिएको थियो। पत्रको थालनीमा "स्वस्तिश्री जनरल गगनसिंह श्रीकाजी

---

६. *भवेश्वर पंगेनी, 'नेपालको इतिहासमा गगनसिंह खवास', रोलम्ब, भोलम-२४, नं.-३ र ४, जुलाई-डिसेम्बर २००४, पृ. ४६।*

७. *(क) रामजी उपाध्याय, नेपालको इतिहास अर्थात् दिग्दर्शन, बनारस : सुब्बा होमनाथ केदारनाथ, वि.सं. २००७, पृ. २४७।*
*(ख) 'नेपाल देशको इतिहास', प्राचीन नेपाल, सङ्ख्या- २५, वि.सं. २०३० कार्तिक, पृ. १५।*

८. *पंगेनी, पाद टिप्पणी नं. ६, पृ. ४७-४८।*

९. *मानन्धर, पाद टिप्पणी नं. २, पृ. ९५। त्रिरत्न मानन्धरको अनुसार माघसुदिका दिन बिहीबार पर्दछ, जबकी यो सामग्रीमा रोज ६ अर्थात् शुक्रबार परेको छ। त्यसैले यो दिन कुन बार पर्दछ भन्ने कुरा अझ स्पष्ट हुनु आवश्यक देखिन्छ। त्यस्तै वि.सं. १९०२ साल माघसुदि १० मा ई.सं. १९०२ फेब्रुअरी ५ परेको देखिन्छ।*

कुलमानसिंह वस्न्यात् कस्य पत्रम्...” भएबाट पनि मुलुकको तात्कालिक प्रशासनमा उनको हैशियतका बारेमा सहजै अनुमान लगाउन सकिन्छ ।[१०]

आरम्भमा जेजस्तो दर्जा दिइए तापनि गगनसिंह राजाको बैठकेका रूपमा दरबार प्रवेश गरेका थिए भन्ने भनाइ पनि पाइन्छ ।[११] दरबार प्रवेशपछि कान्छी रानी राज्यलक्ष्मी (लक्ष्मीदेवी) पट्टिका साहेबजादाका 'दादा' बनेका[१२] गगनसिंह कान्छी रानीको निकट हुन पुगेकै कारण उनीहरूबीच अनैतिक सम्बन्ध रहेको,[१३] सो सम्बन्धका बारेमा राजा राजेन्द्र तथा युवराज सुरेन्द्रलाई पनि थाहा भएको भन्नेजस्ता कुरा पनि पाइन्छन् ।[१४] त्यसो त कान्छी रानीको गगनसिंहका अतिरिक्त दलबहादुर थापासँग पनि त्यस्तै सम्बन्ध रहेको भन्ने भनाइ पनि नपाइने होइन ।[१५] जेहोस्, निकट सम्बन्धकै कारण गगनसिंहलाई रानीको खोपीमा जानेआउने छुट थियो ।[१६] रानीसँगको निकटताकै कारण दरबारिया राजनीतिमा नियन्त्रण बढाउँदै गएका माथवरसिंह थापासँग उनको वैमनस्यता भएको कुरा नेपालका लागि

---

*१०. जनरल गगनसिंह र काजी कुलमानसिंह बस्न्यातको नामबाट निभारचोक चरङ्केका थरी, मुखियालगायतलाई लेखेको वि.सं. १९०२ साल मिति माघसुदि १० रोज ६ को पत्र । विस्तृत जानकारीका लागि यो पत्र परिशिष्ट नं. १ मा राखिएको छ ।*

*११. पुरुषोत्तमशमशेर ज.ब.राणा, श्री ३ हरूको तथ्य वृत्तान्त (भाग-१), वाराणसी : परमवीरशमशेर ज.ब. राणा, वि.सं. २०४७, पृ. १०-१३ ।*

*१२. नेपाल, पाद टिप्पणी नं. १, पृष्ठ २०४ ।*

*१३. क. एच. एम्बोर्स ओल्डफिल्ड, स्केचेज फ्रम नेपाल (भोलम- १), दिल्ली: कोस्मो पब्लिकेसन्स, ई.सं. १९८१, पृ. ३५३-३५४ ।*

*ख. त्रिरत्नमानन्धर, “हु एसासिनेटेड गगनसिंह ?', भ्वाइस अफ हिस्ट्रि, भोलम- १, वि.सं. १९३१, पृ. ८१ए ।*

*ग. उपाध्याय, पाद टिप्पणी नं. ७क, पृ. २३८ ।*

*१४. पद्मजङ्ग बहादुर राणा, लाइफ अफ महाराजा सर जङ्गबहादुर, काठमाडौँ : रत्नपुस्तक भण्डार, ई.सं. १९८०, पृ. ४९-५२ ।*

*१५. दिनेशराज पन्त, “श्री ५ राजेन्द्रकी कान्छी रानीसम्बन्धी अप्रकाशित छओटा पत्र”, पूर्णिमा, वर्ष- १८, अङ्क २, वि.सं. २०४३ आश्विन, पृ. ३१-३७ ।*

*१६. लुडविग एफ. स्टिलर एस.जे., जेटर्स फ्रम काठमाण्डु : द कोट म्यासेकर, कीर्तिपुर : रिसर्च सेन्टर फर नेपाल एन्ड एसियन स्टडिज, ई.सं. १९८१, पृ. २९० ।*

तात्कालिक ब्रिटिस रेसिडेन्ट लरेन्सले पनि उल्लेख गरेको पाइन्छ ।[१७] उनीहरूबीचको सत्तासङ्घर्षकै क्रममा ईर्ष्यालु गगनसिंहद्वारा रानीलाई उक्साएर माथवरसिंहको हत्या गरिएको देखिन्छ ।[१८] माथवरसिंह थापालाई तत्कालै हटाउनका लागि गगनसिंह हतारमा राजदरबार गएर रानीलाई उत्तेजित गराएको आफैले देखेको भन्ने कुरा पद्मजङ्गले पनि लेखेका छन् ।[१९] यसबाट माथवरसिंहको हत्याकाण्डको योजनाकार उनी नै भएको देखिन्छ ।[२०] यो कार्यमा उनलाई जङ्गबहादुर र अभिमानसिंह रानाले सघाएको मानिन्छ ।[२१] हत्याका निम्ति जङ्गबहादुरलाई आफ्नो पक्षमा पार्न गगनसिंहले उनलाई कङ्केश्वरीमा लगेर धर्म भकाएका थिए भन्ने भनाइ पनि पाइन्छ ।[२२] माथवरसिंह थापाको हत्याको केही दिनसम्म उनले जस्तै गगनसिंहले पनि राजकाज सञ्चालन गरेको मानिन्छ ।[२३]

माथवरसिंहको हत्यापछि फत्येजङ्ग शाह, गगनसिंह, अभिमानसिंह र जङ्गबहादुरलाई सेनाको जनरल पद दिइयो ।[२४] त्यसपछि नभएर झन्डै चार महिनासम्मको वार्ता एवम् छलफलपछि मात्र चौतरिया फत्येजङ्ग शाहको मुख्तियारीमा एउटा संयुक्त मन्त्रिमण्डल गठन गरिएको थियो ।[२५] मान्यताक्रममा फत्येजङ्गपछि क्रमशः गगनसिंह,

---

*१७. एम. एस. जैन, इमरजेन्स अफ ए न्यु एरिस्ट्रोकेसी इन नेपाल (ई.सं. १८३७-५८), आग्रा : श्रीराम मेहरा एन्डको., ई.सं. १९७२, पृ. ५२-५३ ।*

*१८. फ्रान्सिस टुकर, गोरखा : द स्टोरी अफ द गोरखाज अफ नेपाल, लन्डनः कन्सल्टेन्ट एन्ड कम्पनी लिमिटेड, ई.सं. १९५७, पृ.१७७, १२४ ।*

*१९. राणा, पाद टिप्पणी नं. १४, पृ. ५२-५३ ।*

*२०. के.के. अधिकारी, 'माथवरसिंहज एसासिनेसन', भ्वाइस अफ हिस्ट्री, भोलम-१, वि.सं. २०३१, पृ. १३-१५ ।*

*२१. विक्रमजित हसरत, हिस्ट्री अफ नेपाल, पन्जाब : देवदत्त शास्त्री, ई.सं. १९७०, पृ. ३१९ ।*

*२२. 'नेपाल देशको इतिहास', प्राचीन नेपाल, सङ्ख्या- २५, वि.सं.२०३० कार्तिक, पृ. १५-१६ ।*

*२३. उत्तम कुँवर (अनु.), 'सर हेनरी लरेन्सको जीवनी', नेपाली, अङ्क- ३, पूर्णाङ्क-१७, वि.सं. २०२० कार्तिक-पुस, पृ. ६३ ।*

*२४. राणा, पाद टिप्पणी नं. १४, पृ. ६३ ।*

*२५. लुडविग एफ. स्टिलर, एस. जे, नेपाल : ग्रोथ अफ ए नेसन, प्रकाशन स्थान अनुल्लिखित, ह्युमन रिसोर्सेस डेभलोप्मेन्ट रिसर्च सेन्टर, ई.सं. १९९३, पृ. ७८ ।*

अभिमानसिंह र जङ्गबहादुर थिए। मुख्तियार फत्येजङ्गभन्दा दर्जामा कम भए तापनि गगनसिंहलाई वि.सं. १९०२ आश्विनवदि ७ रोज २ मा लेटर, श्रीनाथ, राजदल, महीन्द्रदल, रामदल, कालीप्रसाद र शमशेरदल गरी जम्मा ७ पल्टन फौजको तैनाथी दिइयो,[२६] जबकी फत्येजङ्गलगायत अन्य सबैलाई ३/३ पल्टनमात्र दिइयो । यसप्रकार सबैभन्दा बढी अर्थात् ७ पल्टनका साथ सेना प्रमुख बनाइएका गगनसिंहको हैसियत मुख्तियार फत्येजङ्ग शाहको भन्दा सशक्त एवम् प्रभावशाली रह्यो ।[२७] दरबारिया राजनीतिमा नियन्त्रण गर्नुका अतिरिक्त रानीसँगको निकटतासमेतका कारण गगनसिंहप्रति राजा, युवराज, मुख्तियारलगायत भारदारहरू सन्तुष्ट नहुनु स्वाभाविकै थियो । यस्तैमा वि.सं. १९०३ आश्विनवदि ९[२८] (ई.सं. १८४६ सेप्टेम्बर १४)[२९] रातमा उनको हत्या भयो । यो दिन वि.सं. १९०३ साल भाद्र ३१ गते परेको थियो ।[३०] हत्यासँगै गगनसिंहको सहयोगी रानी पनि दरबारिया राजनीतिमा कमजोर हुन पुगिन् ।

## 'षुवाको वाहाली गर्ने तिर्जा' सन्दर्भ

## कमाण्डर इन चीफ जनरल जङ्गबहादुर कुँवर

आफ्नै घरमा पूजा गरिरहेका बखत हत्या गरिएका[३१] गगनसिंहको मृत्युबाट विकसित घटनाक्रमकै परिणामस्वरूप सोही रात कोत हत्याकाण्ड हुन गएको हो । तीन दर्जन जति उच्चपदस्थ भारदारहरूको एक चिहान हुन गएको यस घटनामा मुख्तियार चौतरिया फत्येजङ्ग शाहलगायत तात्कालिक मन्त्रिमण्डलका अन्य सदस्यहरू अभिमानसिंह राना र दलभञ्जन पाँडेसमेतको हत्या भएकाले

---

*२६. 'नेपाल देशको इतिहास', पाद टिप्पणी नं. ७ ख, पृ. १६ ।*

*२७. त्रिरत्न मानन्धर, नेपाल : द इयर्स अफ ट्रबल (१८७७-८५), काठमाडौं : पूर्णदेवी मानन्धर, ई.सं. १९९६, पृ. १५-१८ ।*

*२८. नेपाल, पाद टिप्पणी नं. १, पृ. २८४, २९० ।*

*२९. मानन्धर पाद टिप्पणी नं. २, पृ. ९५ ।*

*३०. नेपाल, पाद टिप्पणी नं. १, पृ. २५९ ।*

*३१. त्रिरत्न मानन्धर, नेपालको इतिहासमा जङ्गबहादुर, काठमाडौं : दि अ ती प्रकाशन, वि.सं. २०४८, पृ. ४ ।*

सो मन्त्रिपण्डलमा सबैभन्दा पछिल्लो स्थानका जङ्गबहादुर कुँवरमात्र जीवित रहन पुगे। यस अवस्थामा उनलाई नै कमाण्डर इन चीफ बनाइएको थियो।[३२] यसै प्रसङ्गमा कमाण्डर इन चीफका हैसियतले जङ्गबहादुरले थुप्रै पत्राचार गरेको पाइन्छ। त्यस्तै कोत हत्याकाण्ड भएको ३२ दिनपछि वि.सं. १९०३ साल कात्तिकवदि ११ रोज ५ (ई.सं. १८४६ अक्टोबर १५) का दिन अर्को वर्ष वि.सं. १९०४ का लागि कमाण्डर इन चीफ जनरलका हैसियतमा जङ्गबहादुरलाई बाली खाने एउटा 'तिर्जा' दिएको पाइएको छ। सोही तिर्जाका बारेमा यहाँ सामान्य जानकारी दिइएको छ।[३३]

कोत हत्याकाण्ड ई.सं. १८४६ सेप्टेम्बर १४ मा भएको थियो। सो सेप्टेम्बर महिना ३० दिनको थियो।[३४] अर्को महिना अर्थात् अक्टोबर १५ अर्थात् वि.सं. १९०३ साल मिति कात्तिकवदि ११ रोज ५ (ई.सं. १८४६ अक्टोबर १५) का दिन उनै जङ्गबहादुरलाई अर्को वर्ष वि.सं. १९०४ का लागि 'कम्यांडर इन चीफ जनरल'का हैसियतले बाली खाने तिर्जा जारी गरिएको पाइन्छ। यस दृष्टिबाट सो दिन कोत हत्याकाण्डको ३२ औँ दिन पारेको देखिन्छ। यो गणनाबाट कोतपर्वको ३२ दिनसम्म पनि जङ्गबहादुर कुँवर कमाण्डर इन चीफ नै रहेको स्पष्ट हुन्छ। यसै सन्दर्भमा प्राप्त एउटा सामग्रीमा 'कम्यांडर इन् चिफ जनरल'का हैसियतमा उनलाई जम्मा रुपियाँ ९३४१/– (नौ हजार तीनसय एकचालीस) र केही पैसा तोकिएको देखिन्छ। सो रकममध्ये 'जनरली खान्गी' का रूपमा भोगचलन गर्दै आएको खान्गीमा नपुगेको रुपियाँको दर्द- ८१०१/–, अभिमानसिंह रानाले खाएको खान्गी थप गर्दा त्यसको खुवा र खान्गीमा नपुगेको रुपियाँको दर्द- ८१०१/– (खुवा भर्ना- ६८०२। ।।।३, दर्द-

३२. *कोत हत्या भएपछि जङ्गबहादुरलाई 'प्राइमिनिष्टर' बनाइएको कुरा कतिपय लेखकले लेखे पनि वास्तवमा उनलाई कमाण्डर इन चिफ बनाइएको कुरा यसपछि उनको नामबाट जारी गरिएका पत्रहरूबाट स्पष्ट हुन्छ।*

३३. *'श्री कम्यांडर इन् चिफ् जनरल जङ्ग वहादुर कुवर के १९०४ सालका वालिलाई भर्ना षुवाको वाहाली गर्न्या तिर्जा' विस्तृत जानकारिका लागि यो तिर्जा परिशिष्ट नं. २ मा राखिएको छ।*

३४. *मानन्धर, पाद टिप्पणी नं. २, पृ. ९५।*

१२९९ ।१), फत्यजङ्ग शाहले खाएको खान्गीको झिकुवा- २५१७ (पलानचोकको- १६०७, नामदुको- ९१०) तोकिएको थियो ।

कमाण्डर इन चीफ जनरल जङ्गबहादुर कुँवरलाई काठमाडौं उपत्यकालगायत नुवाकोट, झगाझोली, गोर्खा, भिर्कोट आदि जस्ता पहाडी तथा तराईमा खासगरी महोत्तरी र बारा जिल्लाका विभिन्न क्षेत्रका जमिनको खुवा दिइएको थियो । यस्ता पहाडी क्षेत्रहरूमा- तिल्पुं, फोगत्पुर, भादगाउ वास्वारी, चितलां भडारखर्कू, गोकर्ण राईटार, लौखनझ्ग, अगर्खु, तांवे झारा मेगजीन्, सिकर्व्यासि, नुवाकोट भालुडाँडा, धार्क्या दिही, झगाझोली, संग्रामटार, सानुपलांती, ठुलोपलांती गोर्खा ज्वरां गैह्र, भिर्कोट, तथा तराईका क्षेत्रमध्ये महोत्तरी जिल्लामा- प्रगन्ना कोराडि मौजे कुभरौडा, सोहनी मुजैलीया, ऐ मौजे मानसिंपट्टा, भगवांपट्टि, ऐ मौजे झटियाहि, प्रगन्ना महुत्तरी मौजे अनैठा, प्रगन्ना खेश्राहा मौजे मगराह दुसरवार र बारा जिल्लामा- प्रगन्न खेश्राहा मौजे भतौडा, प्रगन्ना कोडाहा मौजेवाल आदि क्षेत्रको जमिन खुवाका रूपमा दिइएको थियो । यी क्षेत्रबाट आम्दानी हुने रकमबाट निर्धारित रकम नपुगेपछि नगद रकम नै तोकिएको थियो । सो रकम रु. २१ ॥। /॥ निर्धारण गरिएको पाइन्छ ।

समग्रमा वि.सं. १९०३ सालामा कम्याण्डर इन चीफले वर्षमा रु. ९३४१ को सरकारी सुविधा पाउने देखिन्छ ।

**श्रीराजपण्डित धर्माधिकार सर्दार विजयराज पण्डित**

खुवाको बहाली गर्ने तिर्जाको चर्चा गर्दा जङ्गबहादुरलाई सघाएका विजयराज पण्डितलाई दिइएको तिर्जा प्रसङ्ग पनि उल्लेख्य देखिन्छ । कोतपर्वभन्दा अगाडिदेखि नै कट्टर समर्थक रहेकाले विजयराजले जङ्गबहादुरसँग मिली दरबारभित्र झगडा गराउने प्रयत्न गरेको; कोत हत्याकाण्डका क्रममा पनि उनले राजा र महारानीलाई कोतबाट बाहिर पठाई भारदारहरूको हत्या गर्ने काममा जङ्गबहादुरलाई सहयोग गरेको; कोतपर्वपछि महारानीले जङ्गबहादुरको हत्या गर्न विजयराजको सहयोग प्राप्त गरिन् भन्ने कुरामा सत्यता नरहेको; जब राजा राजेन्द्रले कायममुकाम ब्रिटिस रेजिडेन्टसँग भेट्न नपाएर कोतमा फर्के, त्यतिबेला कोतको मुख्य ढोकामा बसेर विजयराजले राजेन्द्रलाई

कोतभित्र जान रोकेको र यी सबै सहयोगको पुरस्कारस्वरूप जङ्गबहादुरले विजयराजलाई राजगुरु बनाएको भन्नेजस्ता प्रसङ्ग पनि पाइन्छन् ।[३५]

हुन त, गोरखाली राजा राम शाहका पालादेखि चलिआएको पूर्विया ब्राह्मणलाई खारेज गरेर राजगुरु पुरोहित पद जङ्गबहादुरले "...आफ्ना कृत्याकृत्यका साथी मित्र विजयराज पाण्डेका खलकमा..." दिएका थिए । यसै सन्दर्भमा गगनसिंहको हत्यासमेतमा विजयराजको सक्रिय सहायता जङ्गबहादुरले पाएको हो भन्ने भनाइ पनि पाइन्छ ।[३६] यद्यपि यो भनाइको वास्तविकताको परख अरू भएको पाइँदैन । यसै प्रसङ्गमा जङ्गबहादुर कमाण्डर इन चीफ भएपछिको राजनीतिक घटना 'भण्डारखालपर्व'का अवसरमा उनलाई सघाउनेमध्ये विजयराज पाण्डे पनि देखिएको;[३७] दरबारका भित्री पूजाकोठे विजयराज पाँडेलाई जङ्गबहादुरले आफ्नो मतियार बनाइसकेको; कान्छी रानीकी मन परेकी पुतली नानीलाई अघिदेखि नै आफ्नो मायाजालमा फसाएर हात लिएका जङ्गबहादुरले उनकै माध्यमबाट षड्यन्त्रको कुरा थाहा पाएर उनै पण्डित विजयराजलाई जानकारी दिएको र सो षड्यन्त्रका बारेमा विजयराजले पहिले नै जङ्गबहादुरको निवास लगनमा गएर आफूले बुझेका कुरा सविस्तार अवगत गराएको तथा सोही जानकारीका आधारमा जङ्गबहादुरले षड्यन्त्र विफल पारेको भन्ने जस्ता भनाइ पनि नपाइने होइन ।[३८] विजयराजका सम्बन्धमा उल्लिखित भनाइहरू पाइए तापनि कोतपर्व हुनुभन्दा एक वर्षअगाडि नै उनले धर्माधिकारको पदवि पाइसकेको भन्ने पनि देखिन्छ ।[३९] यसका आधारमा कोतपर्व हुनुपूर्व उनी दरबारिया राजनीतिमा प्रवेश गरिसकेको कुरामा सन्देह रहँदैन ।

---

*३५. मानन्धर, पाद टिप्पणी नं. ३१, पृ. ३८-३९ ।*

*३६. रामजी उपाध्याय, नेपालको इतिहास अर्थात् दिग्दर्शन, बनारस : सुब्बा होमनाथ केदारनाथ, वि.सं. २००७, पृ. २५७-५८ ।*

*३७. अम्बिकाप्रसाद उपाध्याय, नेपालको इतिहास र रामनगरको इतिहास, बनारस : देवीप्रसाद उपाध्याय, वि.सं. १९८६, पृ. १६५-६६ ।*

*३८. प्रमोदशमशेर राणा, राणाशासनको वृत्तान्त, काठमाडौँ : रमा राणा, ई.सं. २००४, पृ. ४७ ।*

*३९. प्रकाश ए. राज, विजयराज पण्डित जीवनी (१८६२-१९३५), काठमाडौँ : नवीन पब्लिकेसन्स, वि.सं. २०५३, पृ. ६ ।*

उपर्युक्त भनाइअनुसार कोतपर्व पूर्व नै राजदरबार प्रवेश गरिसकेका विजयराजलाई हात लिएर जङ्गबहादुरले दरबारमा हुने क्रियाकलापको जानकारी पाउने गरेको देखिन्छ। जहाँसम्म गगनसिंहको हत्या जङ्गबहादुरले गराएको र त्यसमा विजयराजको सहयोग रहेको भन्ने भनाइका सम्बन्धमा किटान गर्न सकिने सामग्री प्रकाशमा आएको पाइँदैन । आफूलाई सघाएकै कारण शक्तिमा आउनासाथ जङ्गबहादुरले विजयराजलाई सन्तानदरसन्तानलाई राजगुरुको पद दिएको भन्ने भनाइ पनि छ ।[४०] त्यतिमात्र नभई जङ्गबहादुरले उनलाई 'सर्दारी' खानगी पनि दिएका थिए । यसै सन्दर्भमा भण्डारखाल पर्वपछि मात्रै विजयराजले राजगुरुको पदवी पाए भन्ने धारणा गलत भएको र उनलाई कोतपर्वपछि नै सो पदवी दिएको कुरा "श्रीराजपंडीत्. धर्माधिकार विजयराज पंडीत्के सुमंतसिं कुवरको षायल् सर्दारि षनगीका १९०४ सालका षुवाको वाहालि गर्न्या तिर्जा..."बाट स्पष्ट हुनछ ।[४१]

'राजपंडीत्. धर्माधिकार विजयराज पंडीत्'लाई कमाण्डर इन चीफ जङ्गबहादुर कुँवरकै चाहनानुसार 'सर्दारी' खानगी पनि दिइएको देखियो । उनलाई सम्बोधन गर्दा प्रयोग गरिएका विशेषण 'राजपंडीत्' तथा 'धर्माधिकार'लाई देख्दा ती दर्जाहरू पहिले नै दिइसकेको तथा तिनका अतिरिक्त 'सदारी' खानगी पनि थप गरियो। विजयराजलाई सुमतसिं कुँवरको खायल[४२] सर्दारि खानगी दिइएको थियो। उनलाई कोतपर्वको २७ दिनमा वि.सं. १९०३ साल कार्तिकवदि ७ १ (ई.सं. १८४६ अक्टोबर ११)[४३] का दिन वि.सं. १९०४

*४०. बालचन्द्र शर्मा, नेपालको ऐतिहासिक रूपरेखा, वाराणसी : श्रीमती कृष्णकुमारी देवी, वि.सं. २०२७, पृ. ३१५ ।*

*४१. 'श्रीराजपंडीत् धर्माधिकार विजयराज पंडीत्के सुमंतसिं कुवरको षायल् सर्दारि षनगीका १९०४ सालका षुवाको वाहालि गर्न्या सम्वत् १९०३ साल मिती कार्तिक वदी ११ रोज ५ को तिर्जा' । विस्तृत जानकारीका लागि यो सामग्री परिशिष्ट नं. ३ मा राखिएको छ ।*

*४२. (खायल-कुनै घरले चर्चेको जमिनको कित्ता वा खण्ड; खेती गरिने जग्गा) कृष्णप्रसाद पराजुली, नेपाली बृहत् शब्दकोश, काठमाडौँ : नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान, वि.सं. २०४०, पृ. २७९ ।*

*४३. मानन्धर, पाद टिप्पणी नं. २, पृ. ९५ ।*

सालको खुवाको वाहाली गर्ने तिर्जा दिइएको थियो । सो तिर्जामा उनलाई सर्दार रससिंह, चौतरिया गुरुप्रसाद शाह र श्री गुरु पण्डितराज रंगनाथ पण्डितले भोगचलन गरेका जमिन तोकिएको थियो । सोअनुसार कटुवाल गाउँ, सुरवीर कार्कीको छ्यापबाहेक रुपियाँ, सर्दार रससिंहले खाएको छ्याप २० बाँकि सर्दार रससिंहले खाएको २४ ।–, गलकोट् चौतरिया गुरुप्रसाद शाहले खाएको रुपियाँ ३०२ ।–२; जिल्लै वारा प्रगन्ना चेरवन्त मौजे सोनाभार, श्रीगुरु पण्डितराज रंगनाथ पण्डितले खाएको रूपैया ४०८; जिल्लै महुत्तरी, प्रगन्ना महुत्तरी मौजे सोनमा रूपैया १४७० ( ?) ४४७ (महाभारत् कर्ताम् रूपैया १०९ ‌॥।–; चितवनमध्ये रूपैयाँ ३०८– ॥।२) तोकिएको थियो । उल्लेख्य कुरा के देखिन्छ भने यो तिर्जामा विजयराजलाई वि.सं. १९०४ सालमा जम्मा कति रकम दिइएको थियो भन्ने स्पष्ट कतै लेखिएको पाइँदैन । त्यति भए तापनि सो तिर्जामा उल्लेख भएको रकमहरूका आधारमा उनलाई वार्षिक झन्डै रु. १६४२ दिइने देखिन्छ । सोही वर्षका निम्ति कमाण्डर इन चीफ जङ्गबहादुर कुँवर र राजपण्डित धर्माधिकार विजयराजको तिर्जाको तुलनात्मक अध्ययन गर्दा विजयराजको भन्दा जङ्गबहादुरको तलव सुविधा झन्डै ५–६ गुनाले बढी भयो ।

## उपसंहार

भीमसेन थापा पदबाट बाहिरिएपछिको अस्थिर दरबारिया राजनीतिमा एकै समयतिर देखा परेका प्रभावशाली व्यक्तिहरूमा गगनसिंह, जङ्गबहादुर र विजयराज पाण्डे थिए । रानी लक्ष्मीदेवीको निकटताबाट शक्तिप्राप्तिको प्रयासमा लागेका गगनसिंह लामो समयसम्म टिक्न सकेनन् । भारदारबीचको सत्ता सङ्घर्षका क्रममा उनी कमजोर साबित हुन पुगे अर्थात् छोटो समयमा नै उनको हत्या हुन गयो । यही हत्याकाण्डबाट सिर्जित घटनाक्रमलाई अर्का व्यक्ति जङ्गबहादुरले आफ्नो अनुकूल बनाउन सफल भए । फलस्वरूप प्रधानमन्त्री (प्राइमिनिस्टर) पद आफ्नो परिवारमात्रमा सीमित बनाउनुका अतिरिक्त राजकाजमा सर्वेसर्वा हुनपुगे । अझ भन्ने हो भने मुलुकमा जहानियाँ शासनको थालनी गरे । यद्यपि कोतहत्याकाण्डपछि राजकाजमा

हर्ताकर्ता भएका जङ्गबहादुर तत्काल 'कमाण्डर इन चीफ' मात्र भएको कुरा माथिको तिर्जासमेतबाट स्पष्ट हुन्छ । जहाँसम्म अर्का व्यक्ति विजयराजको सन्दर्भ छ, उनकै सहयोगसमेतका कारण जङ्गबहादुर शक्तिमा आउन सफल भएको देखिन्छ। आफूलाई शक्तिशाली बनाउन सघाएका विजयराजलाई जङ्गबहादुरले राजकाजमा उल्लेख्य स्थान दिनुका अतिरिक्त सर्दारी खानगी पनि दिए । त्यतिमात्र नभएर जङ्गबहादुरको शासनकालमा विजयराजको हैसियत पनि महत्त्वपूर्ण देखियो ।

**परिशिष्ट नं. १**

जनरल गगनसिंह र काजी कुलमानसिंह बस्न्यातको नामबाट निभारचोक चरङ्गेका थरी, मुखिया, भलामानिस लगायतलाई लेखिएको वि.सं. १९०२ साल माघसुदि १० रोज ६ को पत्र ।


स्वस्तिश्रीजनरलगगनसिंह श्रीकाजीकुलमानसिंह बस्न्यातकस्यपत्रम
आगेनिभारचोक चरङ्गाकोथरि मुखिया भलामानीस गाउल्या मोहीयाके गैहृकेजथोचि
तउप्रान्त निभारचोकव्यास्मिका षेत पलीषोला ले [illegible] दिदा षेतवाझारहन गया
हाम्राआतकावलले पुन्याकाषेतवनाउन सकीउन भनिपदम सेलुवाल स्मेतगे
ह मोहि याहाकराउन आयानसर्थ योसालतीमिहनलाई अनेत्र कोझारा लाग्या
कोरहेनछ तिमिहरुले आफ्ना आफ्ना गाउघरउकोगहार झारा मोहीयाहरुगे
ह सामेलगरि त्योपुन्याका षेत जतिदिनमा वनाइ सकीन्छ वनाइ तयार गरि
घरजान्याकाम गर इति सम्वत १९०२ साल मिती माघ सुदि १० रोज ६ शुभम्

**परिशिष्ट नं. २**

'श्री कम्यांडर इन् चिफ् जनरल जंग बहादुर कुवर के १९०४ सालका वालिलाई भर्ना भयाका षुवाको वाहाली गर्न्या सम्वत् १९०३ साल मिती कार्तिकवदी ११ रोज ५ को तिर्जा'


श्रीकम्यांडर इन चिफ जनरल जङ्ग बहादुर कुवर के [illegible] साल वालिलाई भर्ना भया
का षुवाको वाहाली गर्न्या तिर्जा

तपसिल

[illegible]

अभिमान सिंराना ले षायाको षानगी [illegible]

षुवा भर्ना — ६५०२।।।३

ताके भर्ना — [illegible]

अभिमान सिंराना ले षायाको षुवा — ६५०२।।।३

**परिशिष्ट नं. ३**

वि.सं. १९०३ साल कार्तिकवदि ७ रोज १ का दिन श्रीराजपण्डित धर्माधिकार विजयराज पण्डितलाई सुमंतसिं कुवरको षायल् सर्दारि खानगीको १९०४ सालका षुवाको वाहालि गर्ने तिर्जा



श्रीराजपंडीत धर्माधिकार विजयराजपंडीतके सुमंतसिंकुवरको षायल सर्दारि षानगीका
१९०४ सालका षुवाको वाहालि गर्न्या तिर्जा

तप्सील

कइवालगाउ सुरविर कार्किको छाप वाहेक रुपैया ४४।॥म
सर्दार रससिंके छाप २० वाकि सर्दार रससिंले षायाका — १के २४।
गस्तकोट चौतरीया गुरुप्रसाद साहले षायाको — १के ३०२।॥२ह्नि.
जिह्लै वारा प्रगना चेरवन्न मौजे सोनाभार श्रीगुरुपंडितरा
ज रंगनाथ पंडीतज्यूले षायाको — १के ४०८
जिह्लै मकुन्वरि प्रगन्ना मकुन्वरी मौजे सोनमा १के १४७०म — ४४७
महाभारत कर्नाम — १के १०९।।
चितवन मध्ये — ३०८।।।।२

इति सम्वत १९०३ साल मिति कार्तिकवदि ७ रोज १ शुभम्

# *नेपाली*का सम्पादक श्री कमलमणिज्यूकै अनुरोधमा दुई–तीन कुरा

*– भुवनलाल प्रधान*

...मदन पुरस्कार गुठीअन्तर्गत सञ्चालित त्रैमासिक पत्रिका *नेपाली,* सङ्ख्या ११, वि.सं. २०१९ वैशाख-जेठ-असार अङ्कमा लेखिएको "हाम्रो नेपाली साहित्यको एउटा ठूलो अभाव भनूँ या नेपाली लेखकहरूको ठूलो कमजोरी भनूँ– त्यो हो हाम्रा लेखकहरूले आफ्ना बारेमा नलेख्नु," भन्ने टिप्पणीबाट कुतकुत्याइएर तथा पुराना नेपाली पत्रिका-पुस्तकसम्बन्धी एकदुइटा उहिले घटेका यथार्थ तथ्यको जानकारी मदन पुस्तकालयमा पुगोस् भन्ने मनसायले मात्र– आफूलाई लेखक ठानेर होइन– निम्नलिखित धर्साहरू कोर्ने धृष्टता गरेको हुँ, माफ गर्नुहोस् ।

१. वि.सं. १९८७ सालको एस.एल.सी. परीक्षामा म ऐच्छिक विषय *नेपाली* लिएर प्रथम श्रेणीमा प्रथम (बोर्ड फर्स्ट) भएको थिएँ । त्यसताका प्रथम हुने अधिकांश विद्यार्थीहरूले ऐच्छिक विषय *नेपाली* लिँदैनथे, प्रायः गणित लिएका हुन्थे । त्यसबेला ऐच्छिक विषय *नेपाली* लिएर प्रथम हुनु भनेको एउटा असामान्य घटनाजस्तै थियो ।

२. श्री कमलमणिज्यूको 'कालो अक्षर' पुस्तकको 'कहाँको कहाँ' लेखमा वि.सं. २००३ साल फाल्गुनमा काठमाडौँ म्युनिसिपलिटीमा निर्वाचित भएका सदस्यहरूबाट २००४ सालमा गठन गरिएको पहिलो काठमाडौँ म्युनिसिपलिटी बोर्डअन्तर्गत प्रकाशित 'म्युनिसिपलिटी पत्रिका' शीर्षक नेपाली आवधिक पत्रिकाबारे केही चर्चा गरिएको थियो । सो लेखको तेस्रो पादटिप्पणीमा "'का.म्यू. पत्रिका' मा सम्पादकहरूको नाम छैन..." लेखिएको छ। पत्रिकामा सम्पादकहरूको नाम नछापिए पनि त्यस पत्रिकाको सम्पादन गर्न बोर्डमा निर्वाचित सदस्यहरूको एउटा उप-समिति बनाइएको थियो। त्यस सम्पादन उप-समितिमा हामी– त्रिपुरवरसिंह प्रधान, शेषराज दली, म भुवनलाल प्रधान र पूर्णबहादुर एम. ए. थियौँ। उक्त पत्रिका नेपाली भाषा प्रकाशिनी समितिमा उप-समितिको तर्फबाट

मैले नै, मेरै नाउँबाट दर्ता गराएको थिएँ । समितिको दर्ता रजिस्टरी कापीमा मैले नै सही गरेको थिएँ। दर्ता नम्बर किटान गरिदिने कर्मचारी रत्नमान मल्ल थिए र दर्ता नम्बरचाहिँ ०२ थियो ।

यहाँ के कुरा उल्लेख गर्नु आवश्यक हुन्छ भने २१ जना निर्वाचित सदस्य भएको त्यस म्युनिसिपलिटी बोर्डमा मनोनीत सरकारी सदस्य १० जना थिए तथा सभापतिचाहिँ मनोनीत सरकारी बहालवाला पदाधिकारी थिए । सभापतिले सर-सफाइसम्बन्धी दैनिक वा सामान्य काम, बोर्डका नियमहरू तर्जुमा आदि कामबाहेक समसामयिक सुधारका कार्यक्रम सकभर पारित हुन दिँदैनथे । सनद-सवालले बोर्डलाई तोकिदिएको अधिकार र ठेकिएको खर्चमा रकमको कमीले कुनै नयाँ काम गर्न अप्ठ्यारो हुन्थ्यो । फलस्वरूप उपर्युक्त म्युनिसिपलिटी पत्रिका सम्पादन उप-समिति हामी चारै जनालगायत निर्वाचितमध्ये ११ जना सदस्यहरूले आखिर वि.सं. २००४ साल चैत २८ गते बोर्डको सदस्यबाटै राजीनामा दियौँ । त्यतिन्जेलसम्म केही अङ्क निस्किसकेको त्यस पत्रिकाको प्रकाशन नै बन्द भयो ।

यसरी उपर्युक्त पत्रिका देशको इतिहासमा पहिलो निर्वाचित म्युनिसिपलिटी बोर्डअन्तर्गत प्रकाशित भएको पहिलो 'म्युनिसिपलिटी पत्रिका' हुनाको साथै राजधानी नगर काठमाडौँका जनप्रतिनिधिहरूका विचारधाराको पहिलो प्रतीक पनि हो । तसर्थ त्यस पत्रिकाका प्रतिहरू अहिले उपलब्ध हुन नसके पनि कमसेकम त्यसको सम्झना नेपाली हृदय-पटलबाट बिलाएर नजाओस् ।

३. फेरि *नेपाली* पत्रिका, सङ्ख्या ६३ वि.सं. वैशाख, जेठ र असार अङ्कको सम्पादकीय, पृ. ३९ मा छापिएको निम्नलिखित सम्पादकीय टिप्पणीतिर ध्यान आकृष्ट गर्दै छु–

"...त्यसबाहेक नेपाली विभूतिहरूको जीवनी शोधखोज गरी छाप्ने परम्परा हामीकहाँ कैल्यै मौलिन सकेन । हामीले हाम्रा राष्ट्रिय विभूतिहरूलाई 'वीर पूजा' कहिल्यै गर्न सकेनौँ । अरु सकेका छैनौँ– सात सालको त कुरै छाडौँ सन्तानब्बे सालका शहीदहरूको

पनि बृहत् आधिकारिक जीवनी नेपालीमा अहिलेसम्म छापिएको छैन ।"

यससम्बन्धमा वि.सं. २०२९ सालैमा मैले लेखेको 'शहीद शुक्र' शीर्षक शुक्रराज शास्त्रीको जीवनी काठमाडौँ नगरपञ्चायतले वि.सं. २०२९ साल शहीद सप्ताहको उपलक्षमा प्रकाशित गरिसकेको थियो। यसै पुस्तकबारे गोरखापत्रले मिति २०३०/५/१७ को अङ्कमा र तात्कालिक *समीक्षा* साप्ताहिक पत्रिकाले मिति २०३०/८/१७ को अङ्कमा आ-आफ्ना टीका-टिप्पणी पनि प्रकाशित गरेका थिए जसबाट उद्धृत टुक्राहरू यस प्रकार छन्:-

"... श्री भुवनलाल प्रधानको प्रस्तुत पुस्तक जति सुन्दर र सूक्ष्म रूपमा शहीदको विस्तृत परिचय दिन सफल भएको छ त्यति अरूहरूबाट भएको छैन भन्नामा अत्युक्ति हुँदैन। प्रस्तुत पुस्तकका लेखकले सरसर्तिरूपमा जीवनी कोर्ने प्रयास मात्र गर्नुभएन, बरु शहीद शुक्रराज शास्त्रीको जीवन विचारका दर्शनपक्षलाई पनि स्पष्टसँग पाठकछेउ प्रस्तुत गर्नुभएको छ । देश, काल र परिस्थितिको सम्यक् प्रभावमा श्री शुक्रराज शास्त्रीमा कसरी शहीदमा हुनुपर्ने गुणहरू विकसित हुँदै आएर परिमार्जनको परमोत्सर्गमा उहाँले कत्तिको धैर्य र सहिष्णुताले देश र जनताको लागि आफूलाई समापन गर्नुभयो भन्ने कुरालाई हार्दिक रूपमा व्यक्त गर्न लेखक सफल हुनुभएको छ... श्री शुक्रराज शास्त्रीको जीवनी लेखेर एउटा ऐतिहासिक वास्तविकतालाई रोचकताका साथ प्रस्तुत गर्नुमा... तात्कालिक अन्तर्राष्ट्रिय गतिविधिको छोटो परिचयले इतिहासको स्थितिको सम्पूर्ण निचोडलाई यथार्थ रूपमा व्यक्त गर्न पनि लेखक सफल हुनुभएको छ । ..." (राजहंस, *गोरखापत्र,* मिति २०३०/५/१७ को अङ्क, 'नयाँकृति' शीर्षकअन्तर्गत)

"...यो खोजपूर्ण सानो पुस्तकले शहीद शुक्रराज शास्त्रीका जीवनी र विचारधाराबारे सके पहिलोपटक पूर्वाङ्ग विवेचना गर्न निकै सफल कोसिस गरेको छ । पुस्तक सानो भए तापनि यसलाई तयार पार्ने काममा लेखकले निकै नै परिश्रम गर्नुभएको छ भन्ने कुरा पढ्न सुरु गर्नासाथ छर्लङ्ग हुन थाल्दछन् ...रूखको हाँगामा झुन्डिचाइएको सुर्केनीलाई आफ्नो निम्ति देखेपछि आउँदो

भविष्यलाई प्रस्ट देख्दै भनेका थिए– "जुद्धशमशेर आज मेरो प्राण लिन बडो उत्सुक छ । तर म मर्दिनँ, मेरो आत्मा अमर रहने छ । राणा सरकार्का ध्वंश-विध्वंश बादलपारिका आकाशमा गएर हेर्नेछ ।" शुक्रराजको त्यो आवाजले रूप पाउन जम्मा दस वर्ष अठ्ठाइस दिनजति मात्र पर्खिनुपऱ्यो ...ती शहीदको सम्झनामा जीवन दिने कोसिस गर्नुभएको छ । एउटा पुस्तकद्वारा मात्र कहाँ केही हुन सकेको छ र भुवनलालज्यूको यो पुस्तकले केही गर्न सक्ला ? तर भुवनलालज्यूले भने आफ्नो कर्तव्यलाई शक्तिका साथ पूरा गर्नुभएकोमा धन्यवाद दिनै पर्दछ । ..." ('सुधांशु', *समीक्षा*, मिति २०३०/८/१७, 'पुस्तक-पत्रिका परिचय' अन्तर्गत)

यस पुस्तकको सम्बन्धमा ने.रा.प्रतिष्ठानले प्रकाशित गरेको आफ्नो *नेपाली साहित्य कोश*, वि.सं. २०५५ मा यसो लेखिएको छ, "...नेपाली जीवनीमा अर्को महत्त्वपूर्ण मोड वि.सं. २०२८ मा भुवनलाल प्रधानको 'शहीद शुक्र' बाट आयो । ऐतिहासिक खोज र कल्पनाको सन्तुलन यसले प्रस्तुत गर्नाको साथै स्वदेशी स्वजाति नायकको शोधखोजको परम्परा पुन: स्थापना गऱ्यो ..." - पृ. ३०१-३०२)

यसपछि मैले वि.सं. १९९७ सालको काण्डमा परेका अरू शहीदहरूको जीवनी पनि क्रमश: लेख्दै प्रकाशित गरेको छु । र ती पुस्तकहरूका संशोधित संस्करणहरू पनि प्रकाशित भएका छन् ।

मैले *नेपाली* पत्रिकाकै शुभेच्छाअनुसार आफ्नो बारे यति जानकारी दिएकोमा अन्यथा नठानियोस् । धन्यवाद !

✍

# मानव, भाषा र शब्दका कुरा

– *भुवनहरि सिग्देल*

मानव सभ्यताको इतिहास अत्यन्त सङ्घर्षशील छ । आदिम मानिस नितान्त जङ्गली थियो । सर्वथा यो जाति पशु थियो । पशुजन्य क्रियाकलाप यसका दिनचर्या थिए । बलियोद्वारा निर्बल लखेटिन्थ्यो, मारिन्थ्यो । बलियाले लुट्थ्यो, निर्धाहरू लुटिन्थे । ऊ स्वार्थी थियो, व्यभिचारी र हैकमी थियो। मानिसको इतिहासमा लाखौँ मानिस मारिएका छन्, आफ्नै जातिबाट। लाखौँ मानिस दास बनेका छन् र लाखौँलाई बन्दीगृहमा सडाइएको छ । परदासताबाट मुक्ति पाउन मानिसले हजारौँ सङ्ग्राम लडेको छ। त्योबेला पनि सफलता र असफलता शक्तिमा निर्भर रहे । हारजित भई नै रह्यो आज जस्तै। सङ्ग्राम जित्नेले आफूलाई जोधाहा ठान्यो। हार्ने पक्ष दब्यो र चाउरियो । यो शृङ्खला वर्तमानसम्म अवशेषका रूपमा छँदै छन् समाजमा। फरक के छ भने आदिम युगमा भाषा थिएन। भाषाको सङ्गत पनि थिएन, देखासिकी पनि थिएन। केवल श्रवण थियो तर भाषाविना श्रुतिको परम्परा गर्भमा मात्रै थियो। कसैले दाह्रा किटेर आँखा तऱ्यो भने रिसायो भनी बुझ्न अनि डाँको छोडेर रोयो भने दु:खी भयो भनी बुझ्न पनि वर्षौं लाग्यो होला । अरूबाट निर्घात कुटाइ खाएर भाग्नु भनेको आफू बलियो नहुनु हो भनेर बुझ्न पनि युग बिते होलान् । सान र सङ्केतका भरमा मानिसका पुस्तौँपुस्ता बिते। कुनै समूहले व्यक्तिविशेषलाई दखल दिएको देखेर सङ्गठनको महत्त्व बुझ्यो होला । क्रमश: सान, सङ्केत र सङ्गठनमा मानिस पीडित हुन थाल्यो । तिनै सङ्केतहरूलाई धूलो र ढुङ्गामा कोर्न थाल्यो। यही अवस्था मानिस र पशुको दोबाटो हो। पशु एउटा बाटो लाग्यो र आजसम्म पशु भयो। मानिससँग विवेक बढी हुनाले अर्को बाटो समात्यो मानिस भयो। ऊ सानबाट सङ्केत र सङ्केतबाट भाषाको तोतेबोली युगतर्फ अग्रसर भयो ।

यो अवस्थामा आइपुग्न मानिसलाई हजारौँ वर्ष लागेको छ । त्यस्तै भाषाको विकास गर्न यो जातिलाई अरू हजार वर्ष लागेको छ। विभिन्न प्रयोग र अनुसन्धानपछि मात्र भाषालाई लिपिमा ढाल्यो

मानिसले; हिला-गिलो माटोलाई इँटामा रूपान्तरण गरेजस्तै । यो पनि कम दुरूह काम थिएन । त्यस्तै आशय र भावलाई भाषामा बाँध्न पनि सहज भएन। कतिपय समूहले अर्को समूहमा त्यो भाषा पुऱ्याउन कम झन्झट भएन । यसरी एक समूहको भाषालाई अर्को समूहले नक्कल गरेर एउटै भाषाभाषी र एउटै संस्कार समाजमा कायम हुन पुग्यो । तर यसरी नक्कल गर्दा धेरै शब्दहरूको अपभ्रंश हुन गयो । जस्तो सुदूर पश्चिममा बोलिने भाषा र काठमाडौँमा बोलिने भाषा एउटै भए पनि शब्द, उच्चारण र ध्वनिमा फरक लाग्नुको कारण पनि यही हो ।

त्यो बेला आजको जस्तो यातायात सहज हुने कुरै भएन । आजको जस्तो सञ्चारक्षेत्रको जन्म भएकै थिएन। परेवाद्वारा चिठीपत्र आदानप्रदान गर्ने कुरा अहिले पत्याउन गाह्रो छ। एक समूहबाट अर्को समूहसम्मको पहुँच नहुँदा त्यस्ता समूहले आ-आफ्नै तौर-तरिकाबाट छुट्टै लिपि र भाषाको विकास गरे । ती बेग्लै भाषाभाषीमा गनिए, फरक यत्तिमात्र हो। तर अझैसम्म कुनै समूहले आफ्नो समाज, भाषा, लिपि आदिको विकास गर्न सकेनन्, त्यस्ता समूह (जाति) अवशेषको रूपमा विद्यमान छन् । ती राउटे रहे, कुसुन्डा भनिए ।

यसरी भाषा विकासका कुरा गर्दा मानिसले वर्ण, लिपि, ध्वनि, (उच्चारण) वर्णविन्यास, वाक्यसंयोजनलाई प्रचलनमा ल्यायो, शब्द निर्माण गर्दा धर्तीका वन, पाखा, भीर, पहरा, मैदान, बस्ती, व्यवहार, रीतिरिवाजबाट प्रभावित भयो । त्यस्तै कतिपय शब्द पशु, पक्षी, घाम, पानी, नदी, नाला, हावा आदिबाट अनुकरण पनि गऱ्यो । चन्द्र, सूर्य, तारा, खगोल, ग्रह, नक्षत्र आदिबाट मिलायो । यसरी सङ्कलित शब्दलाई जनजिब्रोमा मिलाई समाजमा स्थापित गर्न समूहहरूलाई अरू शताब्दी लाग्यो। कुनै पनि भाषाको कुरा गर्दा यही क्रम र प्रक्रिया भेटिन्छ ।

देवनागरी लिपि र यसअन्तर्गत स्थापित भाषाहरू भने बृहत् भारतवर्षका विभिन्न प्रान्तमा विकास भएको पाइन्छ । यो लिपिमा प्राकृत, संस्कृतको राजमार्ग पार गरेर आएको नेपाली भाषालाई हामीले राष्ट्रिय साझा भाषाको स्थानमा राखेका छौँ । यो भाषालाई खस भाषा भनेर भाषाविद्हरूले ठूलठूला अनुसन्धान र चर्चा गरेका

छन् । यो सङ्क्षिप्त चर्चालाई त्यो पाटोतिर मोड्न खोजिएको होइन । यसमा त खास गरी हाम्रो समाजमा प्रचलित र जनजिब्रोमा बसिसकेका मीठा र सहज शब्दहरू प्रचलनबाट टाढिन लागेकाले त्यस्ता केही शब्दहरूको टिपोट गर्ने प्रयासतिर केन्द्रित रहन खोजिएको हो । किनभने शब्दहरू मानिसको रहनसहन, रीतिरिवाज, बसाइँसराइ, सहरीकरण आदि कारणले ओझेलमा पर्न गई लोपोन्मुखको स्थितिमा पुग्न जानेरहेछन् । यसरी शब्दहरूलाई ओझेलमा पार्दै र मार्दै जाने हो भने अन्ततः भाषा शिथिल हुन्छ भन्ने ठम्याइ हो । तीन-चार दशक अघिसम्म हाम्रो समाजमा साँझ-बिहान प्रयोग हुने शब्द नै आजका बालबच्चाले नबुझ्ने अवस्था छ । जस्तै– ढिकी, जाँतो, फेटा, फाम, सिङ्माङ, गबुवा, खोल्मा, चौँठो, सिलौटो, लोहोरो, चुलेसी, धुलौटो, ठेकी, मदानी, नेती, गोठ, अँगेनु, मझेरी, बुइँगल, चिम, ढुकुटीखाट, दाम्लो, भुजुङ्गो, तपेस, ताप्के आदि । यस्ता शब्दहरू बालबच्चालाई बुझाउन चित्र कोरेर परिभाषा दिनुपर्ने अवस्था सिर्जना हुँदै छ । यस्ता केही शब्द हालसम्म गाउँ-घरमा जीवित भए पनि सहरी क्षेत्रमा क्रमशः अस्ताउने क्रम छ । त्यसैले यो छोटो आलेखमा यस्ता धरापमा पर्दै गएका केही शब्दको झलक प्रस्तुत गर्ने प्रयास गरिएको हो ।

म आफैँले पनि यस्ता केही शब्दहरूलाई पुनर्जीवन दिने उद्देश्यले आफ्ना काव्यहरूमा प्रयोग गरेको छु र त्यसको मलाई कटु अनुभव पनि छ । मेरो उद्देश्य के हो भने यसरी हामीले आफ्ना भण्डारमा सुरक्षित यी अमोल रत्नलाई भुल्दै र फाल्दै जाने हो भने भाषाभण्डार गरिब बन्दै जान्छ । भाषाको श्रीवृद्धिका लागि धरोहरलाई जीवन्त राखी समयसापेक्ष शब्दभण्डार थप्तै जानुपर्छ भन्ने ध्येय हो । मैले यस उद्देश्यका लागि ती शब्दहरूलाई प्रयोग गरेँ । तर केही प्यारा विद्वान् मित्रहरूले यसलाई 'हलुवामा बालुवा' पनि भने । मैले त्यो बेला म आफैँ 'नवोदित कवि', 'खाते कवि' आदिको पङ्क्तिमा हुनाले आरोपलाई आशीर्वाद मानेर ग्रहण गरेँ, केही बोलिनँ । यतिखेर मेरो मानसमा त्यो प्रश्नचिह्न चनाखो नै बसी रहेको कारणले जे त, पर्ला भनेर यो प्रसङ्ग खोलेको हुँ । के मैले अचाक्ली नै गरेको हुँ त निम्न शब्दहरूलाई प्रयोगमा ल्याएर ? –

मैले प्रयोग गरेका शब्द तिनका अर्थ

| | | |
|---|---|---|
| १. | मुकुर | पक्वा |
| २. | लखेटो | हैरानी |
| ३. | रसम | चलन |
| ४. | गथासा | लामा गन्थन |
| ५. | लवरलय | ताल न बेतालका कुरा |
| ६. | चिल्को | राम्रोसँग प्वाँख नउम्रेको बच्चो |
| ७. | मुरबिर | जासुस, निन्दो चर्चो गर्ने मानिस |
| ८. | खिपाहा | च्यापेर कुरा गर्ने मानिस |
| ९. | घरिया | सुन गाल्ने माटोको भाँडो, माटोको भाँडो |
| १०. | असर्दो | नभएको वा खाँचो परेको अवस्था |
| ११. | च्याँखे | खाल बाहिरबाट थापिने दाउ |
| १२. | खोप्रा | झ्याल-ढोका नभएका साना छाप्रा |
| १३. | छ्यान | विवेक |
| १४. | अनखट | खट्टो, खाँचो, अप्ठ्यारो |
| १५. | उँडालु | च्याउली |
| १६. | हरक | गन्ध |
| १७. | ठाँटा | पुस-माघमा जमेको पानीमा ऐनाजस्तै जम्ने तुसारो |
| १८. | शैवाल | समुद्रको फिँज, फोहर |
| १९. | हियो | मुटु |
| २०. | अभर | भर नभएको |
| २१. | च्याङ्थो | जीर्ण लुगा विशेष |
| २३. | अतल | पीँध थाहा नभएको, गहिरो |
| २४. | डोडो | हम्मे-हम्मे पर्नु |
| २५. | दियत | मरवट |

| | | |
|---|---|---|
| २६. | फत्तु | बिना बाउलाको भोटो |
| २७. | बर्को | मजेत्रो |
| २८. | टाँड | जमिनमा खामा गाडेर सुत्न, सामान राख्न बनाइएको मचान |
| २९. | चिल्था | थोत्रा |
| ३०. | छेम | आनन्द, कुशल भनी सोध्ने शब्द |
| ३१. | खुटी | सामान झुन्ड्याउन भित्तामा ठोकिएको किलो |
| ३२. | अकलगुम | जुक्तिहीन |
| ३३. | रासोबासो | धेरैजसो बस्ने ठाउँ |
| ३४. | स्याखु | घुम |
| ३५. | टन्टन | अनावश्यक झन्झट |
| ३६. | पउल | प्रशस्त |
| ३७. | भाउँटो | अनावश्यक समस्या |
| ३८. | धरिन | दलिन |
| ३९. | सिकटो | दुब्लो मरन्च्याँसे |
| ४०. | रूपी | सारौँ चरो |
| ४१. | खररो | पशुको जिउ कन्याउने खस्रो बुरुस |
| ४२. | जभेटो/जभ्रेटो | गाईजिब्रे लहराको पात |
| ४३. | भिमल | आकुल |
| ४४. | गुमस्ता | गोप्य सल्लाह |
| ४५. | बतुरो | बढी फाल्तु कुरा गर्ने मानिस |
| ४६. | दम्पच | कसैले नदेख्ने गरी लुकाउने काम |
| ४७. | अदेखा | झट्ट नदेखिने |
| ४८. | परिन्जो | धनुको ताँदो |
| ४९. | कन्थो | थोत्रो, चिल्थो |
| ५०. | पिन्चे | सानो कुरामा पनि रोई हाल्ने |

| | | |
|---|---|---|
| ५१. | दच्किनु | तर्सिनु |
| ५२. | दुम्किनु | शरीर सङ्कुचन गरेर लुक्नु |
| ५३. | थेचारो | धिङ्न्याहा |
| ५४. | झिटिझरो | भएको जति सबै |
| ५५. | खरिघसा | एकएक हिसाब गर्ने मानिस |
| ५६. | वासर | दिन |
| ५७. | माजृनी | सफा गर्ने साधन |
| ५८. | भामरी | उल्टो दशा (बोलीचालीमा) |
| ५९. | घाहा | दिलमा चोट पर्नु |
| ६०. | गजेटो | खुदो/चुकको फिँज निकाल्ने साधन |
| ६१. | रनाहा | छटपटी (क्रोधसहित) |
| ६२. | पतेग्रो | बोट-विरुवाको पातमा लाग्ने पहेँलो रोग |
| ६३. | घनेरो | बाक्लो |
| ६४. | ओला | असिना |
| ६५. | चिमाली | सेतो गुराँस |
| ६६. | गमर्को | मुठ्याउन सकेजतिको परिमाण |
| ६७. | गलन्ज्या | तल्लो जातबाट गर्भ रहेर जन्मेको छोरो |
| ६८. | घिचाहा | घीन लाग्ने गरी धेरै खान सक्ने मानिस |
| ६९. | खोलमा | घरको अगलबगलको तल्लासहितको गोठ |
| ७०. | इलो | थाम अड्याउने ढुङ्गो |
| ७१. | निदुली | निद्राको प्यारो अवस्था |
| ७२. | भुस्तिघ्रे | मोटो-घाटो/ठूला तिघ्रा भएको |
| ७३. | पुहुनी | नयाँ बालीपछि पाउने भाग |
| ७४. | रैमट्ट | छ्यासमिस |
| ७५. | बादरा | बुट्टा, झुम्का भर्ने साधन |

| | | |
|---|---|---|
| ७६. | ओहाली | धान रोप्ता गाइने कथानक गीत |
| ७७. | उभेटो | थाँक्रो |
| ७८. | उरपोश | थनचोली/दूधेटो |
| ७९. | हम्को | हम्कँदा आउने हावाको झक्का |
| ८०. | भुटो | नचिताएको टन्टा |
| ८१. | आसरा | आश्रय |
| ८२. | अन्खासी | बिरानो |
| ८३. | उकुच | सइन, गिजिरज पाकिरहने घाउ |
| ८४. | मेढो | बलि दिन कबोल गरिएको पशु |
| ८५. | रैवारे | सन्देशबाहक |
| ८६. | ढाडस | सान्त्वना |
| ८७. | ऊर्मि | छाल |
| ८८. | रनिवास | रानीहरूको खोपी |
| ८९. | उटुङ्गो | उल्क्याहा |
| ९०. | फुङ्गा | तन्नमटाट |
| ९१. | अङ्खोडी | तुरुन्तै रिसाएर जाइलाग्ने मानिस |
| ९२. | जुम्सो | अति लोसो |
| ९३. | खिस्सा | थैली |
| ९४. | समन | अदालतबाट जारी पुर्जी |
| ९५. | रन्थरुमा | रुमलो |
| ९६. | अपाम्मे | साह्रै नै |
| ९७. | इत्तर | सरम पचेको व्यक्ति |
| ९८. | अधमरो | आधा मरेको |
| ९९. | ओपी | कुवा |
| १००. | जनन | जन्म |
| १०१. | वापी | सानो जलाशय |

| | | |
|---|---|---|
| १०२. | ओढो | ओढ्ने साधन |
| १०३. | रुमलो | धेरै काम एकैचोटि परेर यो कि त्यो गरौँ भन्ने अवस्था |
| १०४. | खरमसो | ढोकामा ताल्चा मार्न ठोकिएको काठ |
| १०५. | रौसिनु | उत्साहित हुनु |
| १०६. | अखटो | भीरको खुड्किलो |
| १०७. | काम्लो | राडी, पाखी |
| १०८. | सराङ | अगेनुमाथि दाउरा तथा सामान सुकाउन बनाइएको तखता |
| १०९. | गग्रेटो | गाग्री राख्ने ठाउँ विशेष |
| ११०. | गबुवा | एकैनास मुख भएको गाई, भैँसी दुहुने काठको भाँडो |
| १११. | चिन्डो | तेल राख्ने सानो माटोको भाँडो |
| ११२. | उझिन्डो | ठेकी, सिङ्माङ, चिन्डो झुन्डयाउने डोरी |
| ११३. | निदरी | निद्रा |
| ११४. | जिउती | बिहे गरेर ब्याउली घरमा ल्याएपछि ब्याउला, ब्याउली बस्ने कोठा, चुलेबास |
| ११५. | अखच बिखच | गाह्रो साँघुरो |
| ११६. | काँधीकाठ | मुर्दा बोक्ने काठ/बाँस |
| ११७. | करमभाटी | छानु कस्ने मुख्यबीचको भाटो |
| ११८. | अखानु | अप्ठेरो र बीचमा पर्ने अवस्था |

यस्ता अरू धेरै शब्दहरू गाउँ-घरमा प्रचलित नै भेटिन्छन् । खासगरी यी शब्दहरूको प्रचलन सहरी क्षेत्रमा क्रमश: हराउँदै जानुको कारण हो, समाजको परिवर्तन। हाम्रो रहनसहनमा परिवर्तन हुँदै छ, खानपिनमा परिवर्तन भइरहेछ, बोलीचालीमा परिवर्तन हुँदै छ । योभन्दा पनि हाम्रो पठनपाठनका तौरतरिकामा भिन्नता आएको छ । विद्यालयमा पठाइने पाठ्यक्रमलाई गम्भीरतापूर्वक तयार नगरी नेपाली

भाषाको सामान्य ज्ञानमात्र सिकाउने उद्देश्यजस्तो देखिन्छ । अझै भन्ने हो भने भाषा शिक्षालाई परीक्षामुखी बनाइएको पाइन्छ, ज्ञानमुखी होइन । त्यसैले विद्यार्थी सस्तो साहित्य पढ्न रुचाउँछ । क्रमशः भाषापोखरी उत्रिएको छ, जलकुम्भीले कमलपोखरी ढाकेजस्तो, रानीपोखरीको पींधमा दबदबे हिलो जमेर सतहमाथि उठेजस्तो । हो पनि, रानीपोखरीका असङ्ख्य माछा गर्मी याममा छटपटाएको हामी देख्छौँ । पानी प्रेमी माछो हो भने हामी भाषाप्रेमी मानिस हौँ । भाषा पोखरीको सतहमा जलकुम्भीले नढाकोस् र पींधमा हिलो नभरियोस् ! हामी यसमा निर्वाधिरूपले पौडन सकौँ ! योमात्र कामना हो ।

✍

# जर्जिया, रूस र हङ्गेरीका राष्ट्राध्यक्षहरूसित भेटवार्ता

*– मदनमणि दीक्षित*

सन् १९६३ को २१ सेप्टेम्बरमा 'विश्व पत्रकार महामञ्च' को तेस्रो महाधिवेशनमा भागलिन म एक्लै रोम, अल्जियर्स, ट्युनिसिया, लिभिया, मिश्रमा गई ९ अक्टोवर सन् १९६३ मा ........... अन्त्य भएको थियो । त्यसपछि ती २८२ पत्रकारमध्ये मसहित थप ७९ पत्रकारलाई फोलियसम्मको भ्रमण गर्ने निम्ता दिइएर कालामागाको सुखमी भन्ने रूसी जहाजबाट ओर्लियौँ । हामी ८० जना जति जर्जियाका उपराष्ट्रपति भेट्न गएका थियौँ ।

त्विलिसिया जर्जिया प्रेसिडेन्टल दिएका रात्रिभोजमा मेरो भेट साइबेरियाको इर्कुता सहरका पत्रकारसित भयो । सवाघण्टा लामो हाम्रो कुराकानीमा तिनी साइबेरियाको इर्कुता सहरका पत्रकार हुन् भन्नेबाहेक मैले केही बुझिनँ । म आफू नेपालको हुँ भनी बताएपछि तिनी 'बाल्वा ? !' भनी प्रसन्न भए र हिमालय र बुद्धको नाउँ लिए । तिनीले मलाई एउटा सामान्य फाउन्टेनपेन दिए । मसित छ चाहिन्न भन्दा पनि नमानेर तिनले मेरो कोटको जेबमा बलजफ्ती त्यो पेन घुसारिदिए र मैले नझिकूँ भन्ने विचार गरी मेरो त्यो जेबलाई हातले एक मिनेटसम्म छोपी मेरो मुखमा मन्दमुस्कानमा हेर्दै हाँसिरहे । मैले स्वीकार गर्नै पर्‍यो ।

दिवा भोजभन्दा पहिले ती राष्ट्रपतिले आफ्नो भवनको सभाकक्षमा प्रेस भेटघाट गरेका थिए । मैले जर्जियाको अङ्गुर विश्वप्रसिद्ध छ तर बेरुतको जस्तो सुगन्धित छैन, किन ? भनी प्रश्न गरेँ । भूमध्यसागरको वायुको प्रभावले गर्दा त्यस्तो भएको हो, वेरुतबाट पूर्वतिर हावा बग्दै आउँदा अङ्गुरको सुगन्ध बढ्दै जान्छ र जर्जियामा ककेसियाली हिमशृङ्खलाको वायुसित त्विलिसिया जर्जियाका राष्ट्रपतिद्वारा प्रेस भेटघाटपछि उपराष्ट्रपतिले राष्ट्रपतिका तर्फबाट रात्रिभोजनको आयोजना गर्नुभयो । परिकारजति सबै नै जर्जियाली स्वादका र नेपाली तथा भारतीय निमित्त स्वादिष्ट प्रकारका थिए । नृत्य पनि हुने गर्थे। युरोपेली र जर्जियाली एकल वा द्वैत नृत्य। सबै जना टेबिलमा बसेर हेरिरहेका थियौँ । त्यत्तिकैमा अद्जुवेइले ताली

पिटे। सबैका ध्यान त्यता गए। हेर्छौं त तिनको सामुन्ने टेबिलमा बियरको ठूलो सिसी ८० डिग्रीको कोणमा ढल्किएर उभिइरहेको! यो के भएको भनेर सबै छक्क परे। अन्तिममा खुस्चेभका ती ज्वाइँले बोतलको बाङ्गो आकृतिको रहस्य खोले। तिनले पूर्वी जर्मनीमा बियर खाएका बोतललाई त्यसरी ८० डिग्रीको कोणमा अड्याउने सामान्य चमत्कार सिकेका रहेछन्।

अक्टोबर ११ मा हामी त्विलिसीबाट मस्कोनिम्ति उड्यौँ। मूलआकर्षण थियो– सोभियत सङ्घका प्रधानमन्त्री श्री निकिता खुस्चेभसित १५ अक्टोबरमा हुने प्रेस भेटघाटको। ११ देखि १४ अक्टोबरसम्म हामीले बोत्सोइ नाट्यगृहमा 'स्वानलेक' नृत्य तथा सर्कसमा रूसी सर्कस हेर्ने, सहर घुम्ने त छँदै थियो, त्यो प्रेस भेटघाटमा प्रधानमन्त्रीको भाषण हुने मात्र कार्यक्रम थियो, प्रेसबाट प्रश्नोत्तर थिएन।

तर १५ अक्टोबरमा प्रधानमन्त्रीलाई फुसर्द भएन। अनिश्चितकालनिम्ति भेटघाट सऱ्यो। भोलिपल्ट मस्कोमा ज्यादै कडा जाडो भएकोले हामी ८० जना निम्ति ऊनी टोपी र मोटो ऊनी ओभरकोट किनिदिन प्रधानमन्त्रीले आदेश गरेछन्। हामीलाई 'कम्सेमोल' (युथ कम्युनिस्ट जमात) ले चलाएको पसलमा लगियो। मैले त्यहाँ मोटो र ऊनी तीन बटनको ओभरकोट र छालाको भुत्ले टोपी रोजेर लिएँ।

२० अक्टोबरनिम्ति प्रेस भेटघाट पनि त्यो समयमा बेफुर्सतीले गर्दा भएन र जसरी भए पनि २५ अक्टोबरनिम्ति पक्कापक्की गरियो। २२ अक्टोबर १९६३ का दिन दिउँसो मलाई हामी बसेको 'होटल उक्रेन' मा खोज्दै आएर एउटा निम्तापत्र दिए। त्यसबेलासम्म मस्कोमा नेपालको राजदूतावास रहेनछ। बेलायतमा रहेको दूतावासले मस्कोको पनि काम गर्दो रहेछ। श्री ऋरेन्द्रनारायण सिंह बेलायतबाट आएका रहेछन्। अक्टोबर २३ का दिन नेपालका 'प्रथम मन्त्री' डा. तुलसी गिरी बिहान मस्को आइपुगेर दिउँसो २ बजे मस्कोको दोमद्रुज्भा (मित्रता गृह) मा प्रधानमन्त्री निकिता खुस्चेभसित औपचारिक भेटवार्ता गर्ने भएका रहेछन्। त्यो अवसरनिम्ति मलाई निम्ता रहेछ।

२१ अक्टोबरका दिन मस्को टिभीले 'सामूहिक भेट र छलफल' का निम्ति ५ महादेश युरोप, एसिया, अफ्रिका, ल्याटिन अमेरिका र पूर्वीय युरोपका ५ पत्रकारलाई विश्व पत्रकार सङ्गठनमा काम गर्ने एक रूसी पत्रकारले सदस्यहरूलाई बोलाएको थियो। एसियाबाट म, अफ्रिकाको केन्याबाट १, क्युवाबाट १, पूर्वीय युरोपको हङ्गेरीबाट १, युरोपबाट उही बेरुत पुग्नेभन्दा पहिले मैले विवाद गरेका फ्रान्सेली पत्रकारहरू थियौँ। अघिल्लो वर्ष अमेरिकाले रूसको ९० हजार फिटमाथि पठाएको विख्यात 'यु-टु' जासुसी विमान रूसले तोप हानी त्यसलाई खसालेको घटना, ताप-नाभिकीय अस्त्र होड, क्युवा काण्ड, विश्व शान्तिका समस्या आदिबारे हामी ६ जनाबीचका छलफललाई मस्को टिभीले अङ्कित गरी प्रसारण गरिसकेको थियो। सोबापत मैले ४० रुबल पाइसकेको थिएँ।

दोमद्रुज्भाभा नेपालका प्रथम मन्त्रीसित रूसी प्रधानमन्त्रीले भेट गर्ने त्यो महत्त्वपूर्ण अवसरमा म अग्रपङ्क्तिमा उभिएको थिए। त्यो अवसरमा राष्ट्रसङ्घले स्वीकार गरेको ६ ओटा भाषाका ६ जना अधिकारीका दोभाषे र १२० भन्दा बढी देशका मस्कोस्थित राजदूत तथा तिनका पछि उभिएका ती प्रत्येकको 'प्रथम सचिव'हरू गरी झन्डै साढे तीन सयको उपस्थिति त्यहाँ थियो। सभाकक्षको बीचमा रूसी प्रधानमन्त्री र दस फिटजति टाढा वृत्ताकारमा उभिएका राजदूतहरू पालैपालो गर्दै रूसी प्रधान मन्त्री र नेपाली मन्त्रीछेउ गएर दुई मिनेट कुराकानी गरी फर्किने गर्थे। त्यस्तैमा मेरो पछिल्तिर उभिएको एक रूसीले कुममा छोएर मेरो ध्यानाकर्षण गऱ्यो। सन् १९६२ मा काठमाडौँको कार्यावधि सिध्याएर मस्को टिभीमा काम पाई सरुवा भएको त्यसले अघिल्लो दिन मलाई टिभीमा देखेछ र भेट्न आएको रहेछ।

'तेस्रो विश्व पत्रकार महाधिवेशनबारे आफ्ना सङ्क्षिप्त अनुभवबारे रुसी प्रधानमन्त्रीलाई यही अवसरमा भेटेर भन्न किन राजदूतहरूलाई पर्खिन्छौँ' भनी ती रूसीले मलाई उत्साहित गरे। क्यानडाका राजदूतले कुरा गरेर फर्किनासाथ म खुस्चेभतिर अघि सरेँ र सामुन्ने गएर आफ्नो परिचय दिँदै महाधिवेशनबारे सङ्क्षिप्त बताएँ। ती त्यसै हँसिला प्रधानमन्त्री खुसी भएर 'तपाईंका मन्त्री यही मस्कोमा र अहिले

यही सभाकक्षमा हुनुहुन्छ, भेट्नुभयो ? भनेर धन्यवादमा मसित हात मिलाए । डा. गिरीलाई मैले भेटेँ र दुई मिनेट कुरा गरी मलाई उत्साहित गर्ने रूसीसित त्यो दोमद्रुज्भाबाट निस्किएर ती मित्रको डेरामा गएँ । ती रसियनको आग्रहमा त्यो रातभरि जाग्रामै रही मैले नेपालमा श्री ५ महेन्द्रको परराष्ट्र नीति नेपालको निक्कै पछ्यौटे समाजको राउटे तथा त्यसबेला नेपालमा सुरु गरिएको 'दुईवर्षे योजनाबद्ध विकासका अवसर, समापन र सम्भावना'बारे १०-१० मिनेटका ३ ओटा लेख तयार पारेर दोस्रो दिन मस्को रेडियोको भर्खरै सुरु गरिएको नेपाली कार्यक्रममा गएर रेकर्ड गराएँ । सोबापत मलाई १५० रुबल दिइएको थियो । मैले भ्वाइलिन किनेर घरमा ल्याएको थिएँ ।

११ अक्टोबरमा मस्को पुगेपछि फेलिकसवर्स्टेननामक दोभाषेले मलाई सहायता गरिरहेका थिए । १८ सेप्टेम्बरका दिन मैले नेपाल छोडेको थिएँ, अब त घर फर्किने बेला भयो भनी ती दोभाषेलाई भन्दा 'भोलि दिउँसो २७ अक्टोबरमा तपाईं बुडापेस्ट जानुहुनेछ, त्यहाँबाट ३ नोभेम्बरमा यहाँ फर्किनुहुनेछ अनि ३ नोभेम्बरमा रात्रिको विमानद्वारा नयाँदिल्ली जानुहुनेछ' भनी मलाई बताए । भयो पनि त्यस्तै ।

सोको अघिल्लो दिन अर्थात् २५ अक्टोबरको दिउँसो हामी सोभियत निम्तामा आएका ८० पत्रकारले क्रेमलिनमा प्रधानमन्त्री कार्यालयको दोस्रो ठूलो सभाकोठामा रूसी प्रधानमन्त्रीसित भेट गऱ्यौं, प्रेस भेटघाट ।

त्यो प्रेससभामा क्रेमलिन पुगेपछि पनि हामी सबैले एक घण्टाजति कुर्नुपऱ्यो । निर्धारित टेबिलमा ४ जनाका दरले हामी बसिरह्यौं । विश्व पत्रकार सङ्गठनका रूसी अध्यक्ष पत्रकारहरूसित फर्केर लामै टेबिलमा बसेका थियौं । प्र.म. निकिता ख्रुस्चेव आएर तिनीसँगै बस्नुभयो । १५ अक्टोबर निम्ति निर्धारित प्रेस भेटघाट त्यतिका दिन लम्बिएर २५ अक्टोबरमा मात्र सुरु भएकोमा खेद प्रकट गरेर 'तैपनि मस्को रमाइलो र आकर्षक सहर छ, तपाईंहरूले आफ्ना मित्रहरूसित यहाँ भेट गर्नुभयो होला' भन्दै पूरै १ घण्टा लामो

भाषण सुनाउनुभयो । मस्को टिभीका दोभाषेले गरेका अनुवाद टेबिलमा जडिएका माइक्रोस्पिकरमा हामीले आ-आफ्ना भाषामा सुन्यौँ ।

प्रेसका तर्फबाट पाँच जनाले मात्र प्रश्न गर्न पाए। ती प्रश्न चल्दा फेलिक्स वर्स्टेन्टले मेरा छेउ आएर 'यी प्रश्न सिद्धिएपछि अफ्रिका, युरोप र एसियाबाट आएका पत्रकारहरूमध्ये जम्मा तीन जनाले प्रधानमन्त्रीलाई धन्यवाद दिनुपर्नेछ। तेस्रो महाधिवेशनबापत र आजको भेटघाटबापत । धन्यवाद दिनेमा एसियाबाट तपाईं रोजिनुभएको छ' भने । म साह्रै आत्तिएँ, तैपनि तिनले धैर्यसाथ सम्झाएँ। 'यहीँ बसे छोटकरी मस्यौदा गरिहाल्नुहोस्, आत्तिनुपर्ने केही छैन' भनेर गए ।

१० मिनेटपछि धन्यवादको कार्यक्रम सुरु भयो । पहिले अफ्रिकाको युगान्डाका पत्रकारको पालो आयो । त्यसपछि जर्मन जनवादी गणराज्यका विशिष्ट पत्रकारले। दुवै जनाका धन्यवादभाषणपछि टेबिलमा सँगै बोलाएर रुसी प्र.म.ले धन्यवाद दिँदै अँगालो हालेर दुवै गालामा दुई पटक चुम्बन गरी बिदा गरे ।

अनि आयो मेरो पालो। ३७ दिनदेखि एउटै सुट पैह्रिनुपरेको मैले आफ्नो डायरीको २६ पङ्क्तिमा लेखेर (अङ्ग्रेजीमा) त्यहीँ तयार पारेको छोटकरी भाषण प्र.म. छेउको टेबिलसामु माइकसामु उभिएर पढेँ र अनुवादकले मेरो भाषण सुन्दै र लेख्दै रहे, तिनी प्र.म. कार्यालयका प्रबल अङ्ग्रेजी दोभाषे रहेछन् । मेरो धन्यवादभाषण समाप्त भएर आफ्नो टेबिलनेर पुग्दा रूसी प्रधानमन्त्रीले ताली पिटेर मलाई आफूतिर बोलाएर 'खरासो, ओचिन खरासो ! धन्यवाद, (फेरि रूसीमा) दोमद्रुज्भामा भेटेकै थियौँ, फेरि भेटौँला' भन्दै अँगालो हालेर गालाहरूमा तीनपटक चुम्बन गरी बिदा गरेका थिए ।

त्यो दिनको मेरो भाषणको पूरै पाठ २६ अक्टोबरको 'प्राभ्दा'को मुख पृष्ठमा दुई कलमको बस्कमा प्रकाशित भएका थिए। भाषणका प्रत्येक शब्द शुद्ध अनुवाद भएका छन् भनी फेलिक्सवर्न्स्टेले मलाई बताएका थिए । मेरो अङ्ग्रेजी पाठ र 'प्राभ्दा'को रिपोर्ट मेरा फाइलका डङ्गुरमा अझै सुरक्षित होलान् ।

हामी बुडापेस्ट पुग्दा सहरका होटेलहरू युरोपभरिबाट युरोपेली फुटबल प्रतियोगिता हेर्न दर्शकहरूले भरिएका हुँदा सात माइल टाढाको सरकारिया पाउनाघरमा हामीलाई पुऱ्याइयो । दोस्रो दिन हामीले पनि फुटबल प्रतियोगिता हेऱ्यौँ ।

दोस्रो विश्वयुद्धले सहरमा ध्वस्त पारेका ठाउँहरू हामीले हेर्न पायौँ । पाउनाघर होचो पहाडमा थियो । त्यो पहाडबाट ओर्लिएर मैदानमा झरेपछि टाढा-टाढा साना गाउँहरू देखिए । 'ती गाउँका श्रमिकको आन्दोलनबाट हङ्गेरीमा जर्मन फासिस्टहरूका विरोध र अन्त्यमा दोस्रो विश्वयुद्धको समाप्तिसँगै हङ्गेरीमा पनि समाजवाद सुरु भएको हो' भनी पर्वतबाट बुडापेस्टतिर लग्ने बसका दोभाषेले बताएका थिए । तिनताक के भएर हो, बसमा चढ्नासाथ म उँघ्न थाल्थेँ । त्यो पाउनाघरमा हामी सबै चार दिन बस्यौँ । दोस्रो दिन आफ्नो छेउमा बसेको मेचमा बस्न मलाई एक वृद्धा चेकोस्लोभाकियन पत्रकारले बोलाइन् । बस हिँडेको दुई मिनेटमै उँघेर तिनको कुममा मेरो टाउको अड्न थालेछ । त्यसो नगर्न र बसमा निदाउन हुँदैन भनी तिनले दुईपटक मलाई ब्युँझाइन् । तर बुडापेस्ट पुग्दानपुग्दै तेस्रो पटक फेरि तिनकै कुममा मेरो टाउको अडिन पुगेछ । तिनी रिसाइन् र बसको पछिल्लो सिटमा बस्न गइन् । म फेरि उँघेर कुर्सीमा ढलेछु । हङ्गेरीमा उपराष्ट्रिपतिको प्रेस सम्मेलनमा तेस्रो विश्व पत्रकार महाधिवेशनमा उपस्थित भई हङ्गेरीमा निमन्त्रित हामीहरू पनि उपस्थित थियौँ । मैले हिटलरको नाजिवाद र सन् १९४५ मा हिरोसिमा र नागासाकीमा अमेरिकी अणुबमका कुरा उठाएँ । ती दुवै घटनाबारे पूर्वीय युरोप र सोभियत सङ्घका पत्रकारहरू शब्दत: एक जस्तै रहने गर्थे ।

हङ्गेरीका उपराष्ट्रपतिसित हामी निम्ता पाई त्यो देशमा गएका र पत्रकारमध्ये मबाहेक अरूहरूले प्रश्नहरू गरे । हामी बसेको पाहुना घरबाट सहरतिर जाँदा बुढापेस्ट छेउछाउका गाउँहरू ठूलाठूला कृषि फाँटहरूका पल्ला छेउमा सानासाना तर पक्की घरहरू देखिएका थिए । मेरो मनमा सामान्य प्रश्न उठ्यो– हङ्गेरी कृषिप्रधान देश जस्तो छ, यहाँ कसरी समाजवादी क्रान्ति भयो होला ? जवाफ पनि आफैँले पाएँ– दोस्रो विश्वयुद्धमा नाजीवादले हङ्गेरीमाथि कब्जा

गरेकोलाई सन् १९४४ को अन्त्यतिर रूसले अन्त्य गऱ्यो र सन् १९४८ मा "नाटो" (NATO) गठन भएपछि रूसले वार्सासन्धि सङ्गठन खडा गार्दा यो देश पनि सोअन्तर्गत पर्न गएको हुनुपर्छ।

प्रेसका प्रश्नहरूलाई उप-राष्ट्रपतिले जवाफ दिए। मैले भने प्रेस सम्मेलनप्रति आफूमा कुनै रुचि जगाउन सकिनँ, म चुपचाप नै रहेँ।

निश्चित समयपछि हामी विमानघाटमा पुग्यौँ र हङ्गेरीबाट बिदा भई मस्कोनिम्ति एरोफ्लोटको विमानमा बस्यौँ। मस्कोतिर विमान उड्यो र मस्को सहरमाथि ३ चक्कर लगायो। २ चक्कर लगाउँदा मैले तल त्यसबेलाको अन्तर्राष्ट्रिय विमानस्थल "नुकोभो" देखेँ तर विमान त्यहाँ ओर्लिएन। शान्त भएर म झ्यालनिरै बसिराखेको झ्यालबाहिर हेर्न थालेँ। साँझतिरको विमानको छायाँ घरहरूमाथि परिरहेका म हेरिरहेको थिएँ। मलाई लाग्यो विमानमा केही गोलमाल छ त्यसकारण विकामघाटमा उत्रिएन। यो कुरा हङ्गेरी र रूसका अन्य विमानयात्रीहरूले पनि बुझेका रहेछन्।

आफ्नै देशभित्र हेटौँडादेखि थानकोटसम्म ट्रकमा यात्रा गर्दा र जोखिममा पर्दा पनि मलाई त्यतिसारो डर लाग्दैनथ्यो। तसर्थ मैले हङ्गेरीदेखि साथमा रहेका मेरै छेउमा बसेका एक यात्रीसित सुस्तरी रूसी र अङ्ग्रेजी शब्दहरू मिसिएका सरल वाक्यद्वारा "यो विमान दुर्घटनामा पर्ने जस्तो छ, घरमाथि परेका विमानका छायाँहरू हेर्दा विमानका पाङ्ग्रा निस्किएका देखिँदैनन्।" तिनले भने– "मलाई पनि त्यस्तै लागिरहेको छ। हामीहरू शान्त बसौँ।"

तापनि विमानका सहायक चालकले आफूलाई सिक्रीले बाँधेर झ्यालबाट उडिरहेको विमानमा ओर्लिएर पाङ्ग्रालाई उतार्न सके। विमानबाट मस्कोमा सुरक्षित तवरले उत्रियो। मलाई लिन फेलिवम वर्महटेन आएका रहेछन्। "जीवन जोगिएर आइपुग्नुभयो हार्दिक स्वागत" भनेर तिनले अँगालो हाले।

त्यही रात दिल्लीका निम्ति उड्नु थियो। दोभाषेले २५ अक्टोबरमा प्रधानमन्त्रीको प्रेस सम्मेलन समयका तस्विर तयार छन्, लिन जाऔँ भनिन् त्यसैले सोभियत पत्रकार सङ्घ केन्द्रीय कार्यालय

लिन गयौँ। फ्रान्सेली भाषामा दोभाषेको समेत काम गर्ने त्यो रुसी तरुनीले मलाई रूसीमा केही भनी र "जीवनमा फेरि कुनै समयमा तिमीसित भेट होला नै" भनेर "दास्निदानिया !" भनी बिदा दिई मलाई। रूसी प्रधानमन्त्रीसित क्रेमलिनमा बसेको टेबिलको म र मैले धन्यवाद दिँदा भाषण गर्दाका दुई सामान्यभन्दा केही ठूलै भित्तामा टाँग्न मिल्ने दुई तस्विर पाएँ।

एयरपोर्टतिर जाँदा फेलिक्स वर्नस्टेन (पछि तिनी रूसमा सहायक मन्त्री भए) ले त्यो मलाई भने– "त्यो दोभाषे केटीले किन तिमीसित त्यसो भनी ? बुझ्यौ।" मैले बुझ्ने कुरै थिएन। फेलिक्सले भने– "ट्युनिसियामा तिमीलाई देखेपछि के कारणले हो त्यो तरुनी तिमीप्रति साह्रै आकर्षित भएकी थिई। हाम्राबीच साउती चल्यो। तिमी भने पूरै अनभिज्ञ थियौ। हामी हाँस्यौँ। तिमीले ध्यानै दिएनौ। त्यसैकारण त्यसले आज व्यङ्ग्य गरेकी हो। तिमीले फेरि पनि बुझेनौ।"

छक्क पर्नुबाहेक मैले के गर्ने ?

विमानघाटमा ४ घण्टा उडनेमा विमान रोकियो। राति ११ बजे विमान उड्यो। म सबैभन्दा पछिल्लो ढफाको अघिल्लो सिटमा परेँ। मेरै देब्रेतिर एक रूसी र एक एसियाली जस्ता दुई जना कुरा गरिरहेका थिए। ती एसियालीले चाहिँ त्यहाँ "नेपाल" शब्दको उच्चारण गरे। बिहान साढे चार बजे नयाँ दिल्लीको पालम विमानघाटमा प्लेन उत्रियो। पहिले म ओर्लिएँ अनि ती दुई जना ओर्लिए। दुईमध्ये एक रूसी दिल्लीमा सोभियत दूतावासका तृतीय सचिव रहेछन्। अर्का रहेछन् नेपाली। एयरपोर्ट कार्यालयमा पुग्दा मैले "तपाईं नेपाली हो ?" भनेर सोध्दा "हो म नेपालको बझाङ्गी राजाको छोरो हुँ, रुमानियामा वन विकास अध्ययन गरी फर्किंदै छु भनेर नेपाल जाने विमानमा सिट पाइन्छ पाइन्न" भन्ने जवाफ पाएँ। हामी दुवैले ट्याक्सी लिएर सफदरजङ्ग विमानघाट गयौँ। तर त्यही दिनको विमानद्वारा भारतका उपराष्ट्रपति डा. सर्वपल्ली राधाकृष्ण काठमाडौँ जाने रहेछन्, जसले गर्दा हामीले विमानमा ठाउँ पाएनौँ। अब के गर्ने ? मैले सहायता गरेँ र हामी दुवै नेपाली दूतावासमा हरिशरण श्रेष्ठको पाहुना लाग्न गयौँ।

ती बझाङ्ग युवराजले नयाँ दिल्लीमा डलर साट्न खोजे, मैले रोकेँ र ट्याक्सी-भाडासमेत बुझाएँ। तैपनि तिनले दूतावासमा नै दस डलर साटेछन् र साझमा हामी दुई जना घुम्न निस्किँदा नजिकैको हिन्दी सिनेमा घरमा सिनेमा हेर्न पुग्यौँ। "तपाईंसित भारतीय रुपियाँ थिएन त" भनी मैले सोध्दा दूतावासमा साटेको भनी तिनले बताए। साँझमा सिनेमा सिद्धिँदा तिनले भने– "दूतावास नजिकै रहेछ। तपाईं थाक्नुभएको छ, दूतावास जानुहोस्, मैले बाटो चिनिसकेँ, म एक घण्टा जतिमा आइपुग्छु भनी मलाई छोडर कनाटप्लेसतिर लागेँ। तिनी फर्किएर दूतावासमा आफ्नो सुटकेस लिन आए। त्यही साँझको आर.एन.ए.सी. विमानमा तिनले आफ्नो परिचय दिएर प्लेनमा सिट मिलाएछन्। पछि काठमाडौँमा श्री ५ महेन्द्रका जेठा ज्वाइँको रूपमा तिनको विवाह भयो। भोलिपल्ट बिहान नौ बजेको प्लेनमा मैले पनि सिट पाएँ। ६ नोभेम्बरका दिन म काठमाडौँ आइपुगेँ। १८ सेप्टेम्बर पछि ६ नोभेम्बरसम्मको मेरो दोस्रो विदेशयात्रा त्यसरी अन्त्य भयो। डेढ महिना अर्थात् ४५ दिनको मेरो त्यो विदेशयात्रामा ८ जना राष्ट्रपति, उपराष्ट्रपति र विदेशमन्त्रीहरूसित भेट भयो। साइप्रशका राष्ट्रपति कासिरपोभले ममा अत्यन्त ठूलो प्रभाव पारे, जीवनकै बहुमूल्य अनुभव। त्यसबखत ममा पुरातत्त्वबारे कुनै ज्ञान थिएन तर त्यो प्रान्तमा कैयौँ पुरातात्त्विक स्थललाई हेर्‍यौँ। ममा नयाँ ज्ञानले प्रवेश गर्‍यो। पछि गएर पुरातत्त्वबारे निकै रुचि बढ्न गयो, जुन आजसम्म पनि ममा बलियो भएर बसेको छ।

✍

# द्विजाति विवाहमा ७ र ५५ मातृका पूजा : तथा शाश्वतता

*– मदनमणि दीक्षित*

आउँदो चैत्र २०६४ पछि नेपालमा वैदिक विवाह पद्धतिका लग्नहरू असार २०६५ सम्म चल्नेछन् । मेरै नाति अनिश दीक्षितको विवाहको कन्यादान आदि समग्र क्रियाहरू २६, २७ फाल्गुनमा सिद्धिएको थियो । सौभाग्यवश नेपालका वैदिक परम्पराका विवाहहरूमा त्यो प्राचीन परम्पराका कतिपय लक्षणहरू आज पनि विद्यमान छन् । तथापि समाजमा अनेक परिवर्तनहरू भइरहेछन्, चलिरहेछन् । गत २००० वर्षदेखि *मनुस्मृति*ले चार जातका संस्कारगत विभाजनहरू गऱ्यो आज पनि त्यो विभाजन चलिरहेको छ । तर साथै समाजमा अन्तर्जातीय विभाजन र विलीनीकरण पनि उत्तिकै मात्रामा चलिरहेको छ ।

यहाँ म वैदिक विवाहपद्धतिको प्राचीनताका आर्वाशिष्ठ केही लक्षणतिर ध्यान दिने चेष्टामा छु । द्विजातिको आधारमा विवाह मात्र होइन, अन्य संस्कारहरूसमेतलाई दुई पृथक् भागमा छुट्याएर सम्पन्न गर्ने गरेको देखिन्छ । पहिलो संस्कारको अङ्गलाई पूर्वाङ्ग भनिन्छ र यो सामान्यतया सबै संस्कारमा सम्पन्न गरिन्छ । पूर्वाङ्गको मुख्य उद्देश्य हो, परिवारका मरेर गएका पितृहरूको सम्झना गर्नु र तिनका निम्ति कार्यहरू सम्पन्न गर्नु ।

पूर्वाङ्गको मुख्य आराधाना सप्तमातृका र पचपन्न मातृकाहरूको पूजा सम्पन्न गरी गरिन्छ । विवाह हुँदा जन्ती जानेभन्दा पहिले गरिने पूर्वाङ्गमा पितृ र मातृकाहरूको सम्झना गरी तिनको आशीर्वाद लिनुलाई वैदिक विधिले मान्यता प्रदान गर्नु स्वाभाविक हो । यहाँ त्यो पूजाविधिको प्राचीनताबारे सङ्क्षेपमा केही उल्लेख गर्नु युक्तिसङ्गत नै हुनेछ ।

पूर्वाङ्ग र मातृकापूजा गरिने कोठालाई “जिउती कोठा” भन्ने प्रचलन छ । त्यो कोठाको पूर्वपट्टिको भित्तामा एक जोडी हरियो दूबो घुसारिएको गाईको गोबरका साना सातओटा थुम्का टाँसिएका हुन्छन् । ती थुम्काहरू पूर्वीय भित्ताको जमिनभन्दा डेढ हात जति माथि टाँसिएका हन्छन् । भित्तामा टाँस्नुको अर्थ तिनीहरू पृथ्वीबाट

बिदा भइसकेका तर स्वर्ग नपुगेका अवस्थाका देवीहरूको सम्झना गर्नु हो। दुलहीघरबाट दुलहाले कन्या भित्र्याएपछि त्यो 'जिउती कोठा' मा लगेर आफ्नी आमासित नयाँ दुलहीको परिचय गराउँछन्। त्यसपछि सासु-बुहारीले हामी एक समान हौँ भन्ने भाव प्रदर्शित गर्न आ-आफ्ना चुल्ठा जोरेर भित्तामा टाँसिएका सप्तमातृकाप्रति आफ्नो श्रद्धारूपी दूधधारा बगाउँछन्।

ती सप्तमातृकाका आफ्ना नाउँहरू छन्। त्यसपछि जमिनमाथि पलाँस काठको पहेँलो पिर्कामा ५५ ओटा मातृकाप्रति श्रद्धा अर्पण गरिन्छ। आज आएर मातृकाका नाउँ र सङ्ख्या तोकिएका छन् तर त्यो प्राचीन मातृप्रधान समाजको सुरुमा सप्तमातृका अनि त्यो सङ्ख्यामा वृद्धि हुँदै गएर ५५ मातृकामा पुग्यो। निश्चय नै ती सबै जीवित मातृका थिए, जो समाजमा आफ्नो प्रधानताको व्यवहार गर्ने गर्थे। पछि गएर समाजमा नारीप्राधान्यको ठाउँलाई पुरुषप्रधानताले ग्रहण गर्दै गयो। फलतः जिउँदा कुमारीहरूको प्रतिरूपका रूपमा भित्तामा टाँसिएका र जमिनको पलाँस पिर्कामाथि अड्याइएका मातृकाहरूको अर्चना हुन थाल्यो।

प्राचीन समयमा पश्चिम भारतको सिन्धुसभ्यताले पुरुषप्रधान समाजको रूपमा विकसित गरिसक्दा (वि.पू. २७०० देखि) मातृकाहरू गोवरको सानो थुम्को जस्तोमा परिणत हुँदै गए। तथापि नेपालको उपत्यकामा ती मातृकाहरू जिउँदा र कन्यारूपमा नै रहिरहे, जो आजसम्म व्यवस्थाको रूपमा जीवित छन्। जीवित छन् किनभने कुनै पनि कारणले, सिन्काको टुप्पोले घोचेर एक थोपा रगत तिनको शरीरबाट बग्यो भने पनि तिनले जीवित कुमारी पूजा पाउने अधिकारबाट वञ्चित हुन्छन् र सो ठाउँमा अर्को कन्याकुमारीको वरण हुन्छ। सिन्धु सभ्यताको विनाशपछि कुमारी पूजापद्धतिलाई अवशिष्ठ सैन्धवहरूले महाराष्ट्रमा पुऱ्याए, जहाँबाट त्यो व्यवस्थाले प्राचीन कालमा नेपाल उपत्यकामा प्रवेश गऱ्यो भनिन्छ।

ऋग्वेदको 'सूर्याविवाह' सूक्तले द्विजातिका विवाह हुँदाका पद्धतिहरूको चर्चा गरेको छ। नेपालमा आज त्यस्ता विवाह हुँदा उक्त सूर्याविवाह सूक्तका कतिपय मन्त्रहरू उच्चारण गरिन्छन्।

यो पद्धति कहिलेदेखि सुरु भयो भन्नेबारे पनि केही सङ्केत पाइन्छन् । विवाहमा कन्यादान हुँदा कन्यालाई ऊ जन्मिएको गोत्रबाट छुट्याएर विवाह गर्दा वर हुनेको गोत्रसित जोड्ने गरिन्छ। गोत्रविभाजनको यो पद्धति सिन्धुसभ्यता युगको भन्दा पहिलेको समाजमा रहेको अनुमान गर्नेहरू छन् ।

विवाहकार्यपद्धतिहरू सिद्ध्याएर दुलहाले दुलहीलाई आफ्नो घर लैजाँदा सर्वप्रथम 'जीउती कोठा'मा पुऱ्याएर भित्ताका र पिर्काका सात र पचपन्न मातृकालाई विवाहबापत धन्यवाद दिँदै आशीर्वाद मागेर विवाह टुङ्ग्याइन्छ ।

माथिका कुराहरूबारे मैले आफ्नी छोरी इल्याको विवाहमा यही घरमा निम्त्याएका दुलहीपट्टिका निम्तालुहरूसामु बताएको थिएँ । ती निम्तालुमध्ये एक जना सोभियत कूटनीतिज्ञ पनि निम्ता मान्न आएका थिए। मैले तिनलाई विवाह मण्डपमा गाडिने पाँचओटा बाँस, मण्डपको बीचमा रहने आगोको मण्डप, त्यसको ठीकमाथि बाँधिने चँदुवा, अग्निमण्डपको चारैतिर बनाइने रेखाचित्रहरू र पाँचओटा बाँसका साथै राखिने पानीले भरिएको माटाका भाँडा आदि सबै आजसम्म चलिआएका प्राचीन जीवन पद्धतिका प्रतीक हुन् भनी बताएको थिएँ ।

सिन्धु-सभ्यता भनेपछि आजभन्दा ४७०० वर्ष पहिलेको समाज हो । यो २७०० वर्षभित्र त्यो समाज, त्यसका सांस्कृतिक र जीवन पद्धति युगान्तकारी परवर्तन र विकास भए । आज हामी "सनातन धर्म" भनी जेलाई भन्छौँ, त्यसको इतिहास कम्तिमा ४७०० वर्ष पुरानो अवश्य नै हो ।

यहाँसम्म मैले द्विजातिमा विवाह हुँदाका मातृकाहरूले पाउने गरेको पूजाबारे चर्चा गरेँ । मातृकापूजा त्यतिमै सीमित छैन ।

संवत् १९९१ तिर मेरा पिताको परिवार बारा जिल्लामा बस्दा मैले प्रत्येक गाउँको छेउमा ठूलो पिपलको बोटमुनि 'वरम' र 'माई' का वार्षिक पूजा हुने गरेको देखेको थिएँ । पश्चिम नेपालबारे म त्यति सारो भन्न सक्तिनँ तर पूर्वीय नेपालको तराई भागमा समेत सबै जाति र वर्णले बडो धूमधामका साथ यो पूजा

गर्ने गर्छन् । तिनको धारणाअनुसार ती 'वरम' र 'माई' गाउँका रक्षक देवीदेवता हुन् । त्यसकारण गाउँका प्रत्येक जाति उपजाति प्रजातिले धूमधामका साथ तिनको पूजाअर्चना गर्नुपर्छ ।

यहाँ 'वरम' भन्नाले कुन प्राचीन परम्परालाई बोध गराउँछ भन्नेबारे म निश्चित केही भन्न सक्दिनँ। पुराणहरूले ब्रह्मा (वरम) बाट समग्र विश्वको सृष्टि भएको हो भन्ने गऱ्यो। तर मेरो विचार अनुसार सिन्धु-सभ्यतामा 'वरम'को होइन, मातृकाको अथवा योगरत पशुपतिको आराधना हुने गर्दथ्यो। यी दुवै देवता आज पनि पूजित छन्। आज पनि बारा जिल्लामा हरेक पाँच वर्ष 'गढीमाईको मेला' लाग्दै आएको छ । यो गढीमाई भनेको सप्तमातृकामध्ये प्रधान हुन् । यिनीहरू सात दिदीबहिनी थिए भन्ने प्रचलन ती जिल्लाभरि अहिलेसम्म छ। गढीमाईको मेलामा मुसालगायत सातओटा चारखुट्टे पशु वा दुईखुट्टे पक्षीका लाखौँ वली दिइन्छ। यो बलि प्रथाको मुख्य पुजारी भने गढीमाईका एक जना थारू छन् ।

नेपालको तरियानी क्षेत्रका गाउँहरूमा अहिले पनि नवरात्रको देवीपूजाको अवसरमा नारीहरूले रातमा आफ्नो शिरमा एक-एकओटा रातो घडा लिएर गाउँ घुम्ने गर्दछन्। ती घडाका पीँधबाहेक पेट र घाँटीसम्म चारैतिर थुप्रै प्वालहरू बनाइएका हुन्छन्। घडाको भित्री भागमा पीँध माथि जाज्वल्यमान दीपशिखाहरू बलिरहेका हुन्छन् । नवरात्रमा गरिने यो नौ दिने दीपशिखाको प्रदर्शनलाई तराईमा 'झिझिया' भन्ने चलन छ ।

पिपलबोटमुनि माईको पूजा वा झिझियाको पूजाले हामीलाई माथि भनिएको 'सिन्धु-सभ्यता' को सम्झना गराउँछ। घैँटोभित्र बल्दो आगो लिएर ती नारीहरू सिन्धु-सभ्यतामा पनि आफ्नो क्षेत्रको भ्रमण गर्थे । काठमाडौँ उपत्यकामा रहेका कुमारी कन्याहरूका शिरका मुकुटका रूप र रङ्गलाई हेरेमा तिनले शिरमा जाज्वल्यमान आगो लिएर हिँड्ने गर्थिन् भन्ने सम्झना दिलाउँछ ।

मैले यो लेखमा यहाँसम्म मातृकाको रूपमा नारीप्राधान्यको आजसम्म पनि चलिआएको परम्पराबारे उल्लेख गरेँ । अहिले मैले पुस्तक वा पुस्तकलेखकको नाउँ सम्झन सकिनँ तर सो पुस्तकअनुसार

हिमाली उपमहादेशको यो मातृका पूजा पद्धति कुनै समय अफ्रिकाका पूर्वीय तटवर्ती देशहरूमा समेत प्रचलनमा थियो ।

'सिन्धु-सभ्यता'का नार्मिणी (मोहे जो डेरो) तथा हरियुपिया (हरप्पा) वा कालीबङ्गा (यो ठाउँको वैदिक नाउँ ज्ञात छैन) विश्वकै प्रथम नगरायण थिए भनी डा. देवीप्रसाद चटोपाध्यायले आफ्नो पुस्तक *History of Science and Technology in ancient India* नामक पुस्तकमा लेखेका छन्। उक्त पुस्तक साह्रै नै गम्भीर अध्ययन हो भन्ने कुरा बेलायतका उत्तिकै ठूला विशेषज्ञ प्रो. निड ह्यामले भूमिकाको रूपमा प्रस्तुत गरेका छन्। त्यो सिन्धु-सभ्यतामा मातृकापूजा अवशिष्ठ रूपमा मात्र आज उपलब्ध छ । नगरायण सुरु हुनुभन्दा अझै १०००-१५०० वर्ष पहिले त्यहाँको ग्रामीण समाज मातृका प्रधानयुक्त रहेको थियो । यो कुरा मध्यप्रदेश विश्वविद्यालयद्वारा प्रकाशित 'आईहरूको इतिहास' भन्ने पुस्तकको अवलोकनबाट थाहा हुन्छ ।

समाज विकासको इतिहासबारे अध्ययन गर्नेहरूले विगत २०० वर्षदेखि स्थापना गरेअनुसार असभ्यबाट वर्वर अनि सभ्य समाजको प्रारम्भ भएको हो । मानवले वणी पाउन थालेको समाजको वर्वर अवस्थादेखि हो । त्यो युगमा मानव रूखका हाँगा छोडेर पृथ्वीका गुफामा बस्न थाल्यो, जुन गुफाबाट मानिसले छाप्रो हालेर घर बनाउने व्यवस्था सुरु गरेको थियो । अर्को शब्दमा यसलाई भू-गर्भ शास्त्रीहरू नव-पाषणयुग भन्ने गर्दछन्। एसियामा साइबेरियाको निकै दक्षिणतिर केही हजार वर्षसम्म स्थायी हिमप्रणत हुने गर्थ्यो । आजभन्दा दस हजार वर्ष पहिले त्यो हिमप्रणत सर्दै गएर उत्तरी साइबेरिया अर्थात् आर्टिक क्षेत्रमा सीमित हुन पुग्यो ।

एसियामा मातृकाप्रधानसमाजको उदय नव-पाषाणयुगको यही बीचको अवधिमा भएको हो भन्ने विश्वास गरिन्छ । यो हिमाली उपमहादेशमा विक्रम पूर्व ६-७ हजार वर्षको समयमा मातृकाप्रधान समाज थियो । समाजमा नारीप्रधानताका अवशेषहरू कुरुक्षेत्र युद्ध (वि.पू. १४००) को समयमा हिमालयको तल रहेको 'स्त्री राज्य'को रूपमा कृष्णद्वैपायन व्यासले उल्लेख गरेका छन् । त्यो मातृकाप्रधान समाजका अवशिष्ठ लक्षणहरूले कहिले नेपाल प्रवेश गरे होलान् भन्ने

अनुमान गर्नु आज अध्ययनको अभावमा निकै गाह्रो भएको छ । तथापि डोल्पा हिमालदेखि सिक्किमसम्मका हिमाली क्षेत्रमा पाइने बहुपति प्रथा अथवा पत्नीले खुट्टाले सारिदिएपछि मात्रै पतिले थालको भोजन पाउने अवस्थाले समाजमा नारी प्रधानतातिर सङ्केत गरेको छ नै ।

भारतमा प्राग् वा प्राचीन इतिहासबारे अध्ययन र शोधकार्य सुरु भएको एक शताब्दी पनि पूरा भएको छैन। त्यसो हुँदा प्राचीन इतिहासबारे यो हिमाली उपमहादेशको सन्दर्भमा युरोपियनहरूले ठोकुवा गरेर जे भनिदिन्छन्, त्यसैमाथि आज हामीले विश्वास गर्नु परेको छ ।

परन्तु यो हिमाली उपहादेशको प्राग् र प्राचीन इतिहास अलंग्य समयदेखि नाल्दै आएको छ भन्ने विश्वास गर्नेहरू छन्। केही व्यक्तिहरू ऋग्वेदका मन्त्रहरूलाई लाखौँ वर्ष पहिलेका ईश्वरीय प्रेरणाबाट मन्त्रबद्ध भएका हुन् भन्ने विश्वास गर्नेहरू पनि छन्, परन्तु बितेका साठी वर्षभित्र तिनै प्राचीन युरोपीय चिन्तन र निष्कर्षका आधारमा यो हिमाली उप-महादेशको इतिहासलाई बुझ्ने प्रक्रिया सुरु भएको छ । यो प्रक्रियाले आफूलाई अनुमानबाट मुक्त गरी कहिले आफूलाई यथार्थमा अड्याउने हो भन्नेबारे अहिले नै केही भन्न सकिन्न। उदाहरणनिम्ति सन् १९२२ मा सुरु भएको हरप्पाको उत्खन्ननले अवश्य नै अलव्य वस्तुको इतिहासलाई प्रकट गरेको छ। तर के पनि भन्नै पर्छ भने यो विशाल हिमाली उपमहादेशमा प्राचीन सैन्दम्य सभ्यतालाई देखाउने आठ वा दसओटा ठाउँबारे मात्र उत्खन्नन र अध्ययन भएका छन् ।

परन्तु यस्तो स्थितिले निरन्तरता पाउने असम्भव छ। नेपालकै एउटा कुरा गरौँ, बुटवलको एउटा कुनामा रहेको पर्वतीय क्षेत्रमा १ करोड वर्षभन्दा पहिलेको अवस्थामा रहेको नर-वानरको अस्थी अवशेष गत शताब्दीभित्र फेला पऱ्यो । त्यो अस्थि-अवशेष रहेको इलाकाको संरक्षण र सुप्रबन्ध अझै भएको छैन भनी गत फाल्गुन महिनामा टेलिभिजनले गुनासो गरेको थियो। यस्तो अज्ञानको स्थिति सदाकालका निम्ति कायम रहनेछैन भन्नेबारे आज हामी विश्वास

गर्छौं। मैले सुरुमा नेपालका द्विजातीयहरूका विवाह हुँदा सात र ५५ मातृकाहरूले पूजा-आराधना पाउने प्रचलनबारे उल्लेख गरेको थिएँ। त्यति मात्र किन, ती विवाहमा कन्यादानपछि विवाह-मण्डपलाई कन्या र वरले पटकपटक परिक्रमा गर्ने चलन छ। ती परिक्रमा हुँदा हरेकपटक विवाह-मण्डपको छेउमा राखिएको सिलौटो माथि लोहोरोमा कन्याले टेक्ने र वरले लोहोरोमा टेकेकी वधूको खुट्टालाई हटाउने चलन छ। यो क्रियापद्धति प्राचीन समयको कुन प्रक्रियाको अवशेष हो ? त्यस्तै विवाहको दोस्रो दिन चतुर्थीकर्म पद्धति गर्दा सिलौटोरूपी त्यो शिशुलाई शयनागारतिर पुऱ्याउँछन्। कुन अति प्राचीन प्रक्रियाको यो अवशिष्ठ रूप हो यो ? मलाई थाहा छैन तर मैले भविष्यमा प्रश्नकर्तालाई थाहा दिनुपर्नेछ नै।

यी यस्ता विषयहरूबारे ममा संवत् १९९५ मा आफ्नो विवाह हुँदा सुरु भएका थिए। त्यसबेला हाम्रो विवाह गराउने मुख्य पण्डित 'चतुर्वेदाध्यायी श्रीरङ्ग भट्टराई' हुनुहुन्थ्यो। त्यसबेलादेखि ममा उत्पन्न जिज्ञासा प्रश्नमाथि प्रश्न गर्दै झन्झन् बढ्दै गएका छन्। कैयौँ प्रश्नले सामान्य उत्तर पनि पाएका छन् तथापि यो विवाह पद्धतिबारे समग्र जिज्ञासा यथावत् छ।

सङ्क्षिप्त हुँदा-हुँदा समग्र विवाह पद्धति खारेज हुँदै गएको छ। त्यो पद्धतिअन्तर्गत सम्पन्न गरिने नराम्रा मात्र होइन, राम्रा पक्षसमेत हटाइन थालेका छन्। मेरो विचारमा *ऋग्वेद*को दसौँ मण्डलमा रहेको "सूर्या विवाह"ले दाम्पत्य जीवनमा जो पवित्रता स्थिरता र उच्च मानवीयता देख्ने चेष्टा गरेको थियो, ती सबैलाई वर्तमान युगले क्रमशः खारेज गर्दै गएको छ। मानवसमाजका लक्षण वा चरित्र स्थायीरूपका हुँदा पनि हुँदैनन्।

अहिले म यहाँ *महाभारत*मा उल्लिखित साङ्ख्य र मैत्रीको विषयमा आइपुगेको छु। सात वा पचपन्न मातृकाका पूजा आराधना गरेर विवाह सम्पन्न गर्दा त्यो मानवीय सम्बन्धमा मानवबीच मैत्री-करुणा र साङ्ख्यका जग बलिया भइसकेका हुन्छन्। ती जगमा दाम्पत्य सम्बन्धले काम गर्दा मुख्यतः मानवीय सम्बन्ध नै क्रियाशील रहेको पाइन्छ।

यस विषयमा *महाभारत*का केही प्रमुख घटनाहरूतिर ध्यान दिऊँ। कुन्तीले आफ्ना सन्तानलाई समेत छोडेर आफ्नो जेठो सन्तान कर्णबारेको सत्यलाई लुकाएर धृतराष्ट्र र गान्धारीका आजीवन र यथार्थमा निष्पृह सेवा गरिन् तथापि तिनकै छोराहरू र कुन्तीका आफ्ना छोराहरूबीच विकराल युद्ध भयो। कुन्तीपुत्रहरूप्रति गान्धारीमा पुत्रवत् स्नेह अटुट र आभ्यन्तरिक रहेको थियो। तथापि युद्ध समाप्त भएपछि नियमअनुसार तिनले आफ्नो आँखाको पट्टि खोलेर दृष्टिले ज्वालामुखीद्वारा पाण्डवहरूलाई भस्म तुल्याउने मनसाय गरेकी थिइन्। तथापि पाण्डवहरू जोगिनु अर्कै कुरा हो। कुन्तीमा भने गान्धारी पुत्र कौरवहरूप्रति निमेष मात्र पनि कुनै दुर्भाव कहिल्यै प्रकट भएन। हो, एकपटक तिनले विदुलाको उपाख्यान कृष्णलाई सुनाएर विदुलापुत्र सञ्जय जैँ नपुंशक भएर नबस भनी मेरा तर्फबाट सुनाइदिनू भनेकी अवश्य थिइन्। परन्तु बदला भाव प्रेरित भएर तिनले त्यो सन्देश पठाएकी थिइनन्, बरु क्षत्रियहरूले पराजित भएर पलायन हुनु हुँदैन भन्ने सम्झना गराउन मात्र।

विजयपछि छोराहरू हस्तिनापुरमा सर्वेसर्वा भएर बसे। युधिष्ठिरको मन्त्रिमण्डल विधिवत् बन्यो। द्रौपदीको जगजगी बढ्यो होला, माता कुन्ती सम्मानित भइन् होला। तर धृतराष्ट्रले वानप्रस्थी भएर गान्धारीलाई सँगै लिएर वनप्रवेश गर्दा कुन्ती जेठानीको पछि लागिन् र तिनको सेवा गर्दै वनको दावानलमा अरू सबै सँगै आफू पनि खरानी भइन्।

ती दुई नारी कुन्ती र गान्धारीबीचको त्यो मैत्रीबारे त्यति साह्रो चर्चा भएका छैनन्। तथापि मलाई लाग्छ, करुणामा आधारित त्यो मैत्रीको अर्को उदाहरण संसारकै कुनै अभिलेखमा छैन। कुन्ती र गान्धारी नारी हुन्। तिनले आपसमा जुन मर्यादाको पालन गरे *ऋग्वेद*को “सूर्या विवाह” (१०/८५) चर्चित दाम्पत्यभन्दा तल वा माविथको भन्दा पृथक् छैन। कुन्तीमा उपलब्ध रहेको उच्चतम मानवता त्यसरी करुणा र मैत्रीमा अभिव्यक्त भएको छ। यिनै कुरालाई ‘सूर्या विवाह’ले दम्पतीका आदर्शको रूपमा प्रकट गरेको थियो। *महाभारत*मा दुई मानव अर्थात् दुई नारीबीचको सम्बन्धमा त्यही प्रगाढ मनोभाव प्रकट भएको थियो।

नारी र पुरुषबीच मैत्रीका मैत्री आधारित दाम्पत्यका विख्यात उदाहरणहरू प्राचीन आईदेशीय वाङ्मयमा मनग्य पाइन्छन् । पछिल्लो युगले सम्झनाका रूपमा सम्पूर्ण अनुमोदनयुक्त उल्लेख गरेकोबाट दाम्पत्यका ती उदाहरणमा मैत्री र करुणा रहेको हुनै पर्छ भन्ने म ठान्दछु । नल र दमयन्ती अत्रि र अनुसूया, अगतस्य र लोपामुद्रा, याज्ञवल्क्य र मैत्रेयी, महादेव र पार्वती, पुरुखा र उर्वशी, पुरुकुत्स र नर्वदा, सुधास र दमयन्ती, चन्द्रमा र रोहिणीका दाम्पत्य तथा मानवीय सम्बन्धयुक्त मैत्रीलाई वैदिक परम्पराले आजसम्म सम्झिने गरेकै छ । त्यतिमात्र होइन, आजका प्रत्येक वैदिक पद्धतिका विवाह वरवधूले वृद्धावस्थामा पारस्परिक साङ्ख्य र मैत्रीका जीवन बिताऊन् भन्ने प्रतिज्ञा गर्दै त्यो मैत्रीका दुई पक्षका रूपबारे यसो भने–

*आमोहऽस्मि सात्वम् जेउ रहम सामा हमस्मि*
*रिक्त त्वं छौरहं पृथिवी त्वम् । तावेही विवहावहै*
*सह रेतो दधावहै, प्रजां प्रजनया*
*वहै पुत्रान विन्दावहै वहुन् ते सन्तु जटदष्प्य*
*जीवेम शरदः शतः श्रणुयाम शरदः शतम् ।*

म प्राण हुँ, म विष्णु हुँ, तिमी लक्ष्मी हौ, म आकाश हुँ । म सामवेद हुँ, तिमी ऋग्वेद हौ, म आकाश हुँ, तिमी पृथ्वी हौ । आऊ हामी दुवै विवाह गरौँ, सँगै वीजारोपण गरौँ, धेरै प्रजाहरू जन्माऔँ धेरै छोराहरूलाई हुर्काऔँ, तिनीहरू सधैँ चिरायु रहून् । हामी सय शरद् बाँचौँ । सय शरद्सम्म मानिसका स्वर सुनौँ ।

आईदेशले मैत्रीलाई निकै नै उपल्लो मानवीय सामाजिक र राजनीतिक सम्बन्धको रूपमा समेत ऐतिहासिक कालदेखि मान्यता दिँदै आयो । राज्यहरूबीच आगोलाई साक्षी राखी गरेका मैत्री सन्धीहरूलाई उपयोग गर्नुलाई आई देशको इतिहासले त्यति आदर्श मानेन। हुन त राम र सुग्रीवले त्यसै गरेका थिए ।

यहाँ मैले वैदिक र हिन्दूविवाहपद्धतिबारे चर्चा सुरु गरी त्यो मानवीय सम्बन्धमा लैङ्गिक तत्त्व देखा परे तापनि मूलतः मानवीय सम्बन्ध नै थियो भन्ने देखाउने चेष्टा गरेको हुँ । यो दृष्टिकोणबाट

प्रेरित दाम्पत्य सम्बन्ध होस् वा मैत्री सम्बन्ध तिनमा शाश्वतता रहन्छ, सनातन धर्मले सुरुदेखि यिनै मैत्रीपूर्ण जुन व्यवहारलाई अपनायो भन्नेमा मेरो भनाइ हो । सत्य हो, सनातन हिन्दूधर्ममा दाम्पत्यसम्बन्धी यो मैत्रीपूर्ण दृष्टिकोण केही अपवादबाहेक अधिकांश जीवन्त छ। यही कुरा बाँकी संसारनिम्ति सनातन धर्मको रूपमा हाम्रो सामु प्रस्तुत छ । तथापि त्यो शाश्वत सिद्धान्तमा विखण्डन र विचलन सुरु भएर त्यसले नयाँ दिशा लिन थालेको हो कि भन्ने शङ्कासमेत छ ।

नारी र पुरुषबीचको दाम्पत्य सम्बन्धमा अति प्राचीन कालदेखि विवरणगत परिवर्तनहरू हुँदै आए । तथापि त्यो सम्बन्धमा रहेको मानवीय पक्षमा शाश्वतता भने कायम छ र रहिरहनेछ भन्नेमा म विश्वस्त छु ।

# रमानाथ आचार्य र उनको 'हितोपदेश' कविता

– *मतिप्रसाद ढकाल*

नेपाली भाषाको एकीकरण र विकासमा आदिकवि भानुभक्त आचार्यको महत्त्वपूर्ण योगदान छ। उनका दुई छोराहरूमध्ये कान्छा छोरा शिवशङ्करको अल्पायुमै निधन भएको र जेठा छोरा रमानाथले केही कविताहरू लेखी नेपाली साहित्यलाई समृद्ध बनाउन सहयोग पुऱ्याएका छन् तापनि उनको जीवनी, व्यक्तित्व र कृतित्वका बारेमा हालसम्म विशेष अध्ययन-अनुसन्धान हुन सकेको छैन। यस अध्ययनमा उनको जीवनी, व्यक्तित्व र कृतित्वका बारेमा सङ्क्षेपमा समीक्षात्मक चर्चा गर्दै उनको 'हितोपदेश' कविताको परिचयात्मक एवम् तुलनात्मक विश्लेषण गर्न खोजिएको छ।

## १. जीवनी

रमानाथ आचार्यको जन्म तनहुँको चुँदीरम्घामा भएको हो। उनी आदिकवि भानुभक्त आचार्य र चन्द्रकलादेवीका जेठा छोरा हुन्। उनीभन्दा तीन वर्षले कान्छा भाइ शिवशङ्करको चौधै वर्षको अल्पायुमा निधन भएको थियो। उनकी एउटीमात्र बहिनी थिइन्, जसको विवाह गोर्खामा भएको थियो। उनले आफ्नै पिता भानुभक्तबाट शिक्षा-दीक्षा प्राप्त गरेका थिए। उनका बालकुमारी, रमाकान्ता र रमाप्रियानामक तीन श्रीमती थिए। जेठी श्रीमतीबाट सन्तान नभएपछि उनले दोस्रो विवाह गरेका हुन्। उनका पाँच छोराहरू थिए– चिरञ्जीवी, वेद शर्मा, देवीभक्त, दुर्गाभक्त र शिवभक्त। यीमध्ये कान्छा छोरा शिवभक्तको जन्म कान्छी श्रीमती रमाप्रियाको कोखबाट भएको थियो (आचार्य, २०६४) उनका छोरीहरू पनि पाँचओटै थिए– विष्णुमााया, इन्द्रमाया, अन्नपूर्णा, जमुना र कौशल्या। यीमध्ये जेठी छोरी विष्णुमायाले आफ्ना जीबा भानुभक्त र बुबा रमानाथका कृतिहरूलाई सङ्कलन गरी प्रकाशमा ल्याएकी छन् (विष्णुमाया, १९९८)। फलस्वरूप उनलाई सबै बन्धु-बान्धवहरूले डोलीमा बोकेर कालीगण्डकीको 'गडगडी' भन्ने घाटमा पुऱ्याएका थिए र उनलाई प्राप्त भएको पूर्वसूचनाअनुसार वि.सं. १९६८ पौषशुक्ल प्रतिपदाका दिन ६६ वर्षको उमेरमा

बोल्दाबोल्दै उनको निधन (इच्छामरण) भएको थियो (आचार्य, २०४२:१०३) ।

## २. व्यक्तित्व

रमानाथ आचार्यको मूल व्यक्तित्व भन्नु नै कवि व्यक्तित्व हो । यसका अतिरिक्त उनमा अध्ययनशील व्यक्तित्व पनि रहेको थियो। उनी सधैं अरू विशेष केही काम नगरी *श्रीमद्भागवत*को पुस्तक हेरेर बस्ने गर्दथे । उनको खानपिनमा पनि छुट्टै विशेषता थियो । आधा माना घ्यू नभई उनले भात खाँदैनथे। उनका लागि एक माना दूध छुट्टै भाँडामा बाक्लो हुने गरी तताइदिनुपर्दथ्यो । उनले विशेष खुराक दिएर भैंसीको रेखदेख पनि गर्थे र उनले पालेको भैंसीले बिहान, दिउँसो, बेलुका तीनै साँझ एक-एक पाथी दूध दिन्थ्यो। त्यसैले उनले आफ्नो खानामा दूध र घ्यूको विशेष अपेक्षा राख्नु स्वाभाविक पनि थियो । उनले चिचिन्डोलाई बूढी औँलाभन्दा ठूलो हुन दिँदैनथे, सानैमा टिपेर दुई फ्याक पारी घ्यूमा भुटेर खाने गर्दथे । उनले एकैपटक मार हान्दा छिनेको मात्र मासु खान्थे। पहिलापहिला मासु खाने स्वभाव भए पनि पछि उनले क्रमश: छोड्दै गएका थिए । खेलहरूमध्ये ठेलो फाल्ने खेलमा उनलाई कसैले जित्न सक्तैनथ्यो । ठेलो फाल्ने खेलको प्रतियोगिता भइरहेका बेला उनी संयोगवश एकपटक लमजुङको करपुटार पुगेका रहेछन्, खेलाडीलाई पुरस्कृत गर्नुपूर्व उनले ठेलो फाल्दा पहिलो भएकाले भन्दा तीन हात पर पुऱ्याइदिएछन् (आचार्य, २०४६)। त्यसैले उनमा खेलाडी व्यक्तित्व पनि विद्यमान थियो भन्ने पुष्टि हुन्छ। खेलाडी व्यक्तित्वले उनलाई स्वस्थ बनायो भने अध्ययनशील व्यक्तित्वले उनी खारिए; फलस्वरूप उनको कविव्यक्तित्व प्रस्फुटित भयो र कविव्यक्तित्व नै सर्वोपरि रहन पुग्यो।

## ३. कृतित्व

रमानाथ आचार्यले के-कति कृतिहरू लेखेका थिए भन्ने बारेमा हालसम्म पूर्णत: यकिन गर्न सकिएको छैन ।, सन् १९२७ (वि.सं. १९८४)मा काशीको मालिका पुस्तकालयले हितोपदेश, आत्मज्ञान र वैराग्यबोध शीर्षकका तीन कविताहरूको सँगालोका रूपमा *हितोपदेश* नामक पुस्तक प्रकाशमा ल्याएको थियो । यस पुस्तकको आरम्भमा

कुनै लेखकको नाम उल्लेख छैन । यस सङ्ग्रहको तेस्रो कविताको पन्ध्रौँ श्लोकको तेस्रो पाउमा "छोरो हूँ म त भानुभक्त कविको नाम हो रमानाथ् भनी" भन्ने उल्लेख छ । यस पाउका आधारमा यस सङ्ग्रहका तीनओटै कविता रमानाथ आचार्यले लेखेका हुन् भन्ने पुष्टि हुन्छ ।

वि. सं. १९९५ मा मोतीराम भट्टको जीवनी लेखी प्रकाशन गर्ने सन्दर्भमा नरदेव पाण्डेले १९४८ सालको अनिकालको वर्णनसँग सम्बन्धित २.५ श्लोके "श्री भानुभक्त कवि पुत्र म हूँ उनैको..." इत्यादि कविता रमानाथले लेखेको उल्लेख गरेका छन् । मुक्तिनाथ आचार्य (२०२९:९४, २०४२:१०१) ले पहिलो अध्ययनमा नरनाथ र विष्णुमायालेझैँ प्रकाशित गरे पनि दोस्रो अध्ययनमा निम्नलिखित ६ पाउ थपेर क्रमभङ्गसमेत गरी यस कवितालाई चार श्लोकको बनाएका छन्–

*"बाँच्नै पनि अब त मुस्किल हून लाग्यो । (२.३)*
*कस्का पिछा परुँ खुबै अनिकाल जाग्यो ॥ (२.४)*
*बिन्ती म गर्छु महाराज् करुणानिधान्को । (४.१)*
*भक्ती निरन्तर बसोस् मनमा हरीको ॥ (४.२)*
*दीर्घायु होस् सकल राज् पनि यो गरीयोस् । (४.३)*
*सारा मुलुक् हजुरका यशले भरीयोस् । (४.४)*

तुलनात्मक रूपमा यी ६ पाउको संरचना आधुनिक शैलीको भएकाले विचारणीय छन्। यी दुई पाउबाहेक अन्य १० पाउयुक्त २.५ श्लोके कविता रमानाथकै हुनु सम्भव छ। नरदेव (१९९५) ले यसको रचनासन्दर्भ मोतीरामले रमानाथ काठमाडौँ आउनुको प्रयोजन सोध्दा प्रत्युत्तरस्वरूप लेखेको भन्ने दिए पनि मुक्तिनाथ (२०२९, २०४२) ले सरकारसमक्ष बिन्ती चढाउँदा लेखिएको उल्लेख गरेका छन् । त्यसैले यस कविताको रचनासन्दर्भ पनि अनुसन्धेय छ ।

वि.सं. १९९८ मा रमानाथपुत्री विष्णुमायाले भानुभक्तका समग्र कृतिहरूलाई सङ्कलन गरी *भानुभक्त मणिमाला* प्रकाशन गर्दा थप ६ ओटा फुटकर कवितालाई रमानाथका रचना भनी उल्लेख गरेकी थिइन् । तीमध्ये "भानुङ्को सरि गाउँ..." इत्यादि र "यत्ती छन्..."

इत्यादि कवितालाई मुक्तिनाथ आचार्य (२०२९, २०४२) ले पनि रमानाथकै रचना मानेका छन्। तर मतिप्रसाद ढकाल (२०६४: ७७, ८१) ले यी दुवै रचना भानुभक्तका हुनु सम्भव छ भन्ने अनुसन्धानात्मक निष्कर्ष प्रस्तुत गरेका छन्। विष्णुमाायाले रमानाथको भनी उल्लेख गरेको "अघिल्ला जन्मैका..." इत्यादि ६ पाउको कवितालाई भानुभक्तकै रचना मान्दै आइएको भए पनि रमाानाथको 'वैराग्यबोध' कविताका तेह्रौँ र पन्ध्रौँ श्लोकमा पाइएकाले यिनलाई रमानाथकै रचना मान्नुपर्ने निष्कर्षसमेत ढकाल (२०६४: ९८) को छ। विष्णुमायाद्वारा सूचित "क्वै उठ्छन्..." इत्यादि कवितालाई मुक्तिनाथ (२०२९ : २०४२) ले पहिलो अध्ययनमा रमानाथको माने पनि दोस्रो अध्ययनमा यसको उल्लेख नगर्नुले यसलाई रमानाथको रचना नभई भानुभक्तको रचना मान्नुपर्ने अवस्था देखिएको छ (ढकाल; २०६४: ८०)। विष्णुमायाले "चौरासी जुनिका..." इत्यादि कवितामा अघिल्ला दुई पाउमात्र पढेकी थिइन् र मुक्तिनाथ (२०२९, २०४२) ले पहिलो अध्ययनमा पनि अघिल्लै दुई पाउ थपिएका छन्–

*"संसार्को गति यै छ जानि सबले छोडी अभिमान् जती।*
*गर्नू पर्वछ (पर्दछ?) भक्ति श्री हरिमहाँ कल्याण होला अती॥"*

यी दुई पाउ पनि रमानाथका हुन् वा होइनन् भन्ने बारेमा अनुसन्धान हुन बाँकी नै छ। विष्णुमायाद्वारा सर्वप्रथम सूचित ६ ओटा कविताहरूमध्ये "दर्जा हुँदैन धनले..." इत्यादि कवितालाई मुक्तिनाथ (२०२९, २०४२) ले समेत समर्थन गरेका र विवाद नदेखिएकाले यो कविता रमानाथकै हुनु सम्भव छ।

मुक्तिनाथ आचार्य (२०२९ : ७५, २०४२ : १०२)ले पहिलो अध्ययनमा "पढ्नू-गुन्नू..."इत्यादि कविता र "क्याले भुल्छौ..." इत्यादि कवितालाई भानुभक्तको रचना मानेका थिए भने दोस्रो अध्ययनमा यसलाई सर्वप्रथम रमानाथको रचना भनी प्रकाशित गरेका छन्। व्रतराज आचार्य (२०५८ : ८७, २०६३) ले पनि पहिलो अध्ययनमा दुवै कवितालाई भानुभक्तकै भनेका छन् भने दोस्रो अध्ययनमा दोस्रोलाई भानुभक्तकै र पहिलोलाई भानुभक्तको होइन भन्ने आशङ्का व्यक्त गरिएको छ। यी विवरणहरूको अध्ययन गरी मतिप्रसाद ढकाल

(२०६४ : ६६) ले यी दुवै कविता भानुभक्तका नै हुनसक्ने सम्भावना व्यक्त गरेका छन्। त्यसैले यी दुवै कविता पनि रमानाथका हुन् वा होइनन् अनुसन्धेय छ।

यसप्रकार २७ श्लोकको *हितोपदेश,* ११ श्लोकको *आत्मज्ञान,* १५ श्लोकको 'वैराग्यबोध', २.५ श्लोकको 'श्री भानुभक्त कवि पुत्र हूँ...' इतयादि, २ पाउको 'चौरासी जुनिका...' चार पाउको 'दर्जा हुँदैन...' इतयादि गरी ५७ श्लोकहरू रमानाथ आचार्यका रचनाका रूपमा प्रमाणित हुनसक्छन् भने उपर्युक्त अन्य शङ्कास्पद कविताहरूको पूर्णतः सम्परीक्षण गरिनु आवश्यक छ। साथै *श्लोकसङ्ग्रह* (१९५६) मा सङ्गृहीत अन्य कविताहरूको समेत तुलानात्मक अध्ययन पुनर्मूल्याङ्कन भएपछि मात्र रमानाथका समग्र कृतिहरूको यथार्थबोध हुनसक्ने देखिन्छ।

## ४. 'हितोपदेश' कविता

रमानाथ आचार्यद्वारा लिखित *हितोपदेश* (१९२७) नामक कविता सङ्ग्रहमा तीनओटा कविताहरू सङ्गृहीत छन्। तीमध्ये पहिलो कविता 'हितोपदेश' हो र यसैका आधारमा कविता सङ्ग्रहको नामकरणसमेत गरिएको छ।

### ४.४. कथावस्तुको स्रोत

प्राथमिक र माध्यमिक कालका कवि-लेखकहरूले कथावस्तुको स्रोत कुनै न कुनै रूपमा धर्मशास्त्र, नीतिशास्त्र आदि प्राचीन वाङ्मयका ग्रन्थहरूबाट ग्रहण गर्दथे। प्राथमिककालका भानुभक्तले आफ्नो 'रामायण'लाई *अध्यात्मरामायण*को उपजीव्य (स्रोत) बनाएका थिए भने माध्यमिक कालमा देखापर्ने उनकै पुत्र रमानाथले संस्कृतको 'हितोपदेश'लाई आफ्नो कविताको उपजीव्य बनाएका छन्। संस्कृत 'हितोपदेश'को पनि उपजीव्य ग्रन्थ *पञ्चतन्त्र*को रचना गरेका थिए। त्यही *पञ्चतन्त्र*को सार खिचेर 'हितोपदेश'को रचना गरिएको हो ( शर्मा, १९८६: २)। यही *हितोपदेश* ग्रन्थको सार लिएर रमानाथ आचार्यले 'हितोपदेश' कविता लेखेका हुन्।

### ४.२. वस्तु–विन्यास

रचनामा क्रमिकरूपमा व्यवस्थित गरिएको कथावस्तुलाई 'वस्तुविन्यास' भनिन्छ। गणेशको वन्दनासहित मङ्गलाचरण गरी ज्ञानी र गुणी हुने वरदानको अपेक्षा राखिएको छ, विद्यालाई सबैभन्दा ठूलो सम्पत्ति मान्दै विद्याको महिमा गाइएको छ, पटनामा रहेका सुदर्शननामक राजाले एक दिन काव्य पढेको सुनेर विद्या नै ठूलो रहेछ भन्ने बुझ्दछन्, पढ्ने र नपढ्ने व्यक्तिहरूका गुण र दोषको तुलना गर्दै उनी आफ्ना छोराहरूलाई पढाउनुपर्ने रहेछ भन्ने निष्कर्षमा पुग्छन्, राजसभामा गएर उनले विद्वान्हरूसँग आफ्ना छोराहरूलाई धर्मशास्त्र र राजनीतिको सबै ज्ञान दिलाइदिन अनुरोध गर्छन्, शिव शर्माले राजाको इच्छाअनुसार युवराजहरूलाई धर्मशास्त्र र राजनीतिको सम्पूर्ण शिक्षा प्रदान गरेर शिक्षित बनाइदिन्छन्, राजा वृद्ध भएकाले शिक्षित युवराजले राज्य चलाउँछन् र आफ्ना प्रजालाई नीतिपूर्वकको न्याय दिएर खुसी तुल्याउँछन्, यस कविताको वस्तुविन्यास यसरी नै भएको छ।

### ४.३. लयविधान

यस कविताको आधारग्रन्थ *हितोपदेश* कथामुखमा विशेषत: अनुष्टुप् छन्दको प्रयोग भए पनि रमानाथको 'हितोपदेश' कविताको लयविधान शार्दूलविक्रीडित छन्दमा आधारित छ। लयलाई सघन बनाउनका लागि अन्त्यानुप्रासयोजनासमेत यस कवितामा सर्वत्र मिलेको नै देखिन्छ।

### ४.४. भाषाशैली

यस कवितामा भानुभक्तीय भाषा र शैली अनुकरण गर्न खोजिए पनि यस कवितामा प्रयुक्त केही शब्दहरू भानुभक्तीय भाषा-शैलीबाट पृथक् रहेका भेटिन्छन्। गएर जन्म अर्थमा क्रमश: 'जाई' (१४.४) र 'जनम्' (१८.४) शब्दको प्रयोग भानुभक्तले पनि गरेका छन्। स्वरवर्णको हलन्तप्रयोग भानुभक्तीय रचनाको मौलिक विशेषताका रूपमा देखापर्दछ भने रमानाथले केवल दुई ठाउँमा 'जस्लाइ' (२१.१) र 'तेस्लाइ' (२१.२) प्रयोगमा इकारलाई हलन्तप्रयोग गरेका छन्। लागोस्>लागोस (१.१), दण्डवत्>दण्डोत् (१.४), कृपा>क्रीपा (२.१),

ज्ञान>ग्यान (२.१, ३.३), फिंज>फिंद (२.३), सफेद्>सपेत् (२.३), युग>जुग् (३.३), बग्दै>वगदै (५.१), फल>फलित (५.२), छेउमा>छयौ (१३.२) आदि प्रयोगहरू रमानाथका कविताका शैलीगत विशेषता हुन्। 'श'का ठाउँमा अधिकांश ठाउँमा 'स' को प्रयोग भएको छ भने येकडार (३.४), नौमटिया (७.१), पुनस् (१०.२), अनभोग् (१२.२) जस्ता प्रयोगहरूसमेत उनका कवितामा पाइन्छन् तापनि उनको कविताको भाषाशैली सरल र सहज नै देखिन्छ ।

## ४.५. उपजीव्य ग्रन्थसँग तुलना

रमानाथको 'हितोपदेश' कविता मूलतः संस्कृतको *हितोपदश* ग्रन्थ पनि विष्णु शर्माद्वारा लिखित संस्कृतकै *पञ्चतन्त्र*नामक ग्रन्थको उपजीव्य ग्रन्थ मानिन्छ । पञ्चतन्त्रमा काग, कछुवा, गिद्ध, गोरु, हरिण, मुसा आदिका कथाहरूको माध्यमले स-साना बाल-बालिकाहरूलाई सहज रूपमा नीतिको ज्ञान दिएर शिक्षित बनाउने प्रयास गरिएको छ (शर्मा, १९८६: २) । *पञ्चतन्त्र* र *वृहत्कथा, कामन्दकीयनीतिसार* आदि नीतिग्रन्थमा वर्णित विषयवस्तुलाई यथावत् रूपमा वा सङ्क्षेपीकरण गरेर *हितोपदश* ग्रन्थको निर्माण गरिएको हो (शर्मा, १९८६: ४) । पञ्चतन्त्रमा मित्रभेद, मित्रसम्प्राप्ति, काकोलूकीय, लब्धप्रणाश र अपरीक्षितकारक गरी पाँच तन्त्र वा खण्ड छन् भने *हितोपदेश*मा मित्रलाभ, सुहृद्भेद, विग्रह र सन्धि गरी चार खण्ड छन् । रमानाथको 'हितोपदश' कविता संस्कृतको *हितोपदश* ग्रन्थको मित्रलाभ खण्ड प्रारम्भ हुनुभन्दा पूर्वको कथामुखमा मात्र केन्द्रित भएको देखिन्छ ।

हितोपदेश- कथामुखमा ४५ श्लोक र स-साना ७ अनुच्छेदहरू छन् भने रमानाथको हितोपदेश कविता २७ श्लोकमा संरचित छ । कथामुखको पहिलो श्लोकमा भगवान् शङ्करको मङ्गलाचरण गरिएको छ भने रमानाथको कवितामा पहिलो र दोस्रो श्लोकमा शङ्करलाई दिएको विशेषण रमानाथले गणेशको शरीरलाई दिएका छन्, यसबाहेक प्रारम्भिक दुई श्लोकको संरचनामा रमानाथले उपजीव्य ग्रन्थको सहयोग नलिएकाले यी दुवै श्लोकमा उनको मौलिक अस्तित्व भेट्न सकिन्छ ।

कथामुखको दोस्रो श्लोकले *हितोपदेश* ग्रन्थ पढेपछि विद्यार्थीहरू संस्कृत बोल्न चलाख हुन्छन्, वाक्यरचनामा अद्‌भुत शैली अपनाउन सक्छन् र नीतिविद्याको समेत शिक्षा प्राप्त गर्न समर्थ हुन्छन् भन्ने जनाएको छ भने रमानाथको कविताले पञ्चजनहरूलाई बिहान ईश्वरको स्मरण गर्न, चतुरो हुन र सधैँ सत्सङ्गत बुझेर ज्ञान-गुन सिक्ने अम्मल लिन निर्देश गरेको छ । रमानाथले उपजीव्य दोस्रो श्लोकका आधारमा आफ्नो तेस्रो श्लोकलाई यथासम्भव नेपालीकरण गरेर मौलिक बनाउने प्रयत्न गरेको देखिन्छ ।

धर्मको आचरण गर्दै विद्या एवम् धनको आर्जन गर्नुपर्छ र सबै चीजहरूमध्ये विद्या नै उत्तम धन हो भन्ने कथामुखको तेस्रो र चौथो श्लोकलाई आधार बनाएर रमानाथले चौथो श्लोक बनाएका छन् । विद्यालाई उत्तम धन मान्नुका कारणमा उनले राजाले र रिसले पनि हर्न नसक्ने भन्ने थपेका छन् । संस्कृतमा अन्यत्र पाइने “न च राजहार्यम्...” लाई नै आधार बनाएर यहाँ ‘राजाले’ भन्ने थप गरेका हुन् भने ‘रिसले’ शब्दचाहिँ छन्द संरचनाका सन्दर्भमा प्रयुक्त हुन आएको हुनुपर्छ ।

विद्याले नै निम्नस्तरको व्यक्तिलाई पनि उच्चस्तरमा पुऱ्याइदिन्छ भन्ने कथामुखको पाँचौँ श्लोकलाई आधार बनाएर रमानाथले पाँचौँ श्लोकका अघिल्ला दुई पाउको रचना गरेका छन् भने पछिल्ला दुई पाउको संरचना स्वतन्त्र रूपमा गरेको पाइन्छ । विद्याले क्रमशः नम्रता, व्यक्तित्व, धन, धर्म र सुख प्रदान गर्दछ भन्ने कथामुखको अत्यन्त प्रसिद्ध छैटौँ श्लोकको विषयवस्तुलाई रमानाथको कविताले समेट्न सकेको छैन । सम्भवतः उनले विद्या, यश र धन बढाउनुपर्छ भनी पाँचौँ श्लोकको चौथो पाउमा जोड दिन खोजेकाले प्रकारान्तरले कथामुखको छैटौँ श्लोकको आशयलाई ग्रहण गर्न चाहेका हुनसक्छन् ।

ज्ञान र यश प्राप्तिका लागि शास्त्रविद्या र शस्त्रविद्या दुवैको शिक्षा लिनु आवश्यक भए पनि वृद्ध अवस्थामा समेत उपहास नगरिने र सबैले सदैव आदर गरिने शास्त्रविद्या नै उत्तम छ भन्ने कुरा कथामुखको सातौँ श्लोकले व्यक्त गरेको छ भने रमानाथले आफ्नो कविताको छैटौँ श्लोकमा त्यसलाई सरलीकृत गरेर यस्तो बनाएका छन्–

*"विद्यामा नरले सुयस् कन फिंजी फेरी धनुर्वेद् पनि ।*
*जस्ले राज्य गर्‍यो उ प्राणिजनको आयू पूरा होस् भनी ॥*
*भन्छन् पढ्न नगर्नु अल्छि गुणिले येक् चित्त मन्मा गुनी ।*
*आफू वृद्ध हुँदा पनी जय दिन्या विद्या जगत्की मणि ॥६ ॥*

जसरी काँचो माटाको भाँडामा कोरिएका रेखादि चिह्नहरू भाँडो फुटे पनि रहिरहन्छन् र नष्ट हुँदैनन् त्यसरी नै कथा-कहानीहरूका माध्यमले बालकहरूको कोमल हृदयमा प्रदान गरिएको नीतिविद्या पनि सधैँ स्थिर रहन्छ, त्यसैले नीतिशास्त्रको उपदेश गर्न खोजिएको हो भन्ने कुरा कथामुखको आठौँ श्लोकमा व्यक्त भएको छ र यसै आधारमा रमानाथले सातौँ श्लोक बनाएका हुन् । उनका कविताको पहिलो पाउ "जस्तै नौमटिया विषे जल भरी वीसुद्ध नास्ती रती" को सान्दर्भिक अर्थ खुल्दैन तर अन्य तीन पाउचाहिँ मौलिक र सहजबोधगम्य बनेका छन् । उनले बालककालमै मेहनेत गरेर पढेको कुरा पछि नभुलिने भएकाले सबैले यसप्रकारको मति लिन निर्देशन गरेका छन् ।

कथामुखको नवौँ श्लोकको विषयवस्तु *हितोपदेश*को संरचना र वर्गीकरणसँग सम्बन्धित छ र त्यसैलाई आधार बनाएर रमानाथले आठौँ श्लोक बनाएका हुन् । उनको आठौँ श्लोकका अघिल्ला दुई पाउ उपजीव्य ग्रन्थमै आधारित भए पनि पछिल्ला दुई पाउमा उनले सार झिकी नेपाली भाषामा श्लोकबद्ध गरेर सबैलाई पढ्न सजिलो होस् भनेर *हितोपदश* बनाइएको हो भनी मौलिक अभिव्यक्ति प्रस्तुत गरेका छन् ।

कथामुखले नवौँ श्लोकपछि पढिएको पहिलो अनुच्छेदका आधारमा रमानाथको नवौँ श्लोक संरचित भएको हो । उनको कविताको विषयवस्तु उपजीव्य ग्रन्थअनुरूप रहे पनि राजाले दुई श्लोक सुने भन्ने ठाउँमा उनले काव्य पढेको सुने भन्ने उल्लेख गरेका छन् । 'काव्यै' का ठाउँमा उनले 'श्लोकै' पढिदिएको भए पनि छन्दसंरचनामा कुनै बाधा पर्दैनथ्यो र मूलअनुरूप पनि हुन्थ्यो तापनि उनले 'श्लोक सुन्नु'लाई भन्दा 'काव्य पढेको सुन्नु'लाई महत्त्व दिएर 'काव्यै' शब्द उल्लेख गरेका हुन् । यस श्लोकको अन्तिम पाउमा उनको मौलिक अस्तित्व भेटिन्छ–

*"नाना शास्त्र पदार्थ सब् बुझि ठुलो विद्या त मन्मा गुन्या ॥"*
*सर्वस्य लोचनं शास्त्रं यस्य नास्त्यन्ध एव सः ॥१० ॥"*

कथामुखको यस श्लोकको मूल आशयलाई विश्लेषण र सरलीकरण गरेर रमानाथले आफ्नो कवितालाई यस्तो बनाइदिए–

*"मन्को सोग् पनि फालने शरिरमा आरोग्य गर्न्या अनी ।*
*पुनस्को फल देखिन्या सब कुरा पर्लोक तार्न्या पनी ॥*
*फेर् जस्का हृदिमा त शास्त्रहिन भो ऊ मूर्ख अन्धो पनी ।*
*राजाले मनमा विचार् गरि लिया विद्यै बडो हो पनी ॥१० ॥"*

मनमा रहने अनेक प्रकारका 'संशय' लाई उनले 'शोक' भनेका छन् र त्यो शोक शास्त्रले फालिदिएपछि शरीर पनि स्वस्थ हुन्छ भन्ने उनको विश्लेषण मनोवैज्ञानिक दृष्टिले महत्त्वपूर्ण छ । त्यस्तै 'परोक्षार्थ'लाई उनले भूत अर्थात् पूर्वजन्मको फल देख्न सकिने र भविष्यको फल अर्थात् परलोक तार्न सक्ने पनि विद्या रहेछ भन्ने जनाउन खोजेका छन् । यस श्लोकको अन्तिम पाउ पादपूरवका रूपमा पुनरुक्ति भएको देखिन्छ ।

युवावस्था, प्रशस्त धन, मालिकपन र अविवेकितामध्ये मात्र एउटा पनि विपत्तिका लागि पर्याप्त हुन्छ भने चारओटै एकत्र छन् भने ठूलो विपत्ति अपरिहार्य छ भन्ने कथामुखको एघारौँ श्लोकलाई आधार बनाएर रमानाथले एघारौँ श्लोकको निर्माण गरेका हुन् । विपत्तिका कारणहरूले मुक्ति दिन सक्तैनन् र शास्त्रचिन्तनतर्फ अग्रसर हुनुपर्छ भन्ने उनको आशय छ । तुलनात्मकरूपमा उपजीव्यभन्दा उनको कविता सहज बोधगम्य देखिन्छ ।

रमानाथले कथामुखको एघारौँ श्लोकपछि पढिएको दोस्रो अनुच्छेदका आधारमा बाह्रौँ श्लोक बनाएका छन् । कथामुखमा उपर्युक्त दुई श्लोक सुनेर सधैँ कुमार्गमा हिँड्ने र नपढ्ने छोराहरूको चिन्ताले राजालाई विचलित बनाएको कुरा उल्लेख छ । रमानाथले विद्या नपढे सबै धर्म नष्ट हुने; दया, क्षमा आदि पाँच गुण आर्जन नहुने र छोरा मूर्ख भएमा वंश पनि हीन हुनेछ भनी राजा चिन्तित भएको भन्ने विश्लेषण गरेका छन् ।

कानो आँखाले हेर्न नमिलेर सधैँ दुखै पाएझैँ विद्वान् वा धार्मिक हुन नसक्ने छोराले पनि सधैँ कष्ट नै दिइराख्छ भन्ने कथामुखको

बाह्रौँ श्लोकको आशयलाई सरलीकरण गरेर रमानाथले आफ्नो कविताको निम्नलिखित तेह्रौँ श्लोक बनाएका हुन्–

*"जस्का पुत्र सपूत पण्डित बडा छैनन् कुनै वंसमा ।*
*विद्या ग्यान दया धरं नभइ ती पर्छन् सबै कष्टमा ॥*
*छोरो भैकन शास्त्र ज्ञानहिन होस् अन्धो शरीर् हो भनी ।*
*जानी ज्ञानीहरू त खुब् मन दिई पढ्छन् चनाखो बनी ॥१३ ॥*

कथामुखको तेह्रौँ श्लोकमा नजन्मेको पुत्र र जन्मेर तत्काल मरेको पुत्रले क्षणिक दु:खी बनाउँछ भने मूर्खपुत्रले जीवनभर कष्ट दिइरहन्छ भन्ने उल्लेख छ । त्यस्तै कथामुखको चौधौँ श्लोकमा मर्ने र जन्मने क्रम चलिरहने संसारमा जन्मेर जसले आफ्नो वंशको उन्नति गर्छ वा आफू प्रसिद्ध हुन्छ, त्यही पुत्रको जन्म सफल हुन्छ भनिएको छ । रमानाथले कथामुखको तेह्रौँ श्लोकका आधारमा आफ्नो कविताको चौधौँ श्लोकका अघिल्ला दुई पाउ र चौधौँ श्लोकलाई आधार लिएर पछिल्ला दुई पाउ बनाएका हुन् । यस श्लोकको अन्तिम पाउमा अज्ञानी कुपुत्रहरू कुलैसहित नरकमा पर्ने कुरा उल्लेख भएको हुँदा सबैले आ-आफ्नो जन्म सफल बनाउन प्रयत्न गर्नुपर्छ भन्नेतर्फ कविले निर्देश गर्न खोजेको बुझिन्छ ।

विद्वान्हरूमा जसको राम्रो कीर्ति रहन्छ, त्यही पुत्रको जन्म सफल हुन्छ र त्यस्तो पुत्र जन्माउने आमाको कोखसहित बाँझो ठहरिँदैन भन्ने मूल आशयलाई लिएर रमानाथले पन्ध्रौँ श्लोकको रचना गरेका छन् । जसको जन्मले देश उज्यालो हुनसक्छ, बन्धु-बान्धवहरूको आशा-भरोसा पूर्ण हुनसक्छ, विद्याआर्जनले कीर्ति फैलाउन सक्छ, त्यस्तो पुत्र जन्माउने कुल नै भाग्यमानी हुनेछ भनेर उनले उपजीव्य ग्रन्थको आशयलाई सरलीकरण गरी विश्लेषण गरेका छन् ।

राम्रो कुलमा जन्मिएर रूप, गुण, शील, धर्म, धन, बुद्धि, चतुर्‍याइँ, राजकीय सम्मान आदि उपलब्ध भए पनि नपढेको पुत्र आधा शरीर हो भन्ने कुरा व्यक्त गरिएको रमानाथको सोह्रौँ श्लोकको संरचनामा *हितोपदेश* कथामुखको आधार लिइएको पाइँदैन । त्यस्तै उनले *पञ्चतन्त्र*को निम्नलिखित पाँचौँ श्लोकलाई सत्रौँ श्लोकको उपजीव्य बनाएका छन्–

*"वरं गर्भस्रावो वरमृतुषु नैवाभिगमनं ।*
*वरं जातः प्रेतो वरमपि च कन्यैव जनिता ॥*
*वरं वन्ध्या भार्या वरमपि च गर्भेषु वसति-*
*र्न चाविद्वान्रूपद्रविणगुणयुक्तोऽपि तनयः ॥५ ॥"*

यस श्लोकबाट गर्भ तुहिनु, जन्मेर तत्काल मर्नु, श्रीमती बाँझी हुनु बरु राम्रो छ तर मूर्ख पुत्र हुनु कदापि राम्रो हुँदैन भन्ने कथावस्तुलाई मात्र ग्रहण गरेर रमानाथले यस्तो कविता बनाइदिएका हुन्–

*"हूनू चाहिं कुपुत्र सब् स्त्रि जनको गर्भै तुह्याको निको ।*
*बालक् कालइमा कि दैवगतिले मृत्यु भयाको निको ॥*
*तेस्भन्दा पनि कोख अस्त्रि जनको बाझै रह्याको निको ।*
*कुल्मा जन्म लियेर मूर्ख भयको त्यो हुन्न कैल्है निको ॥१७ ॥"*

रमानाथले *हितोपदेश* कथामुखका २०, २१, २२, २३ र २४ औँ श्लोकका विषयवस्तुहरू आएका छैनन् । उनले कथामुखको पच्चीसौँ र छब्बीसौँ श्लोकको विषयवस्तुलाई एकत्रित गरेर आफ्नो कविताको उन्नाइसौँ श्लोकको रचना गरेका छन् । आयु, कर्म, धन, विद्या र मृत्यु पूर्वजन्मको फलअनुसार प्राप्त हुन्छन्, आफ्नो कर्मअनुसार साना-ठूला सबैले भाग्यमा लेखिएको मात्र प्राप्त गर्छन्, शङ्कर नङ्गा हुनुपर्ने र विष्णु सर्पको शय्यामा सुत्नुपर्ने उदाहरणले भावीको लेखाइलाई अन्यथा गर्न नसकिने रहेछ भन्ने सरल विश्लेषण उनको यस कवितामा भएको छ ।

*हितोपदेश* कथामुखको सत्ताइसौँ श्लोकदेखि चौतीसौँ श्लोकसम्म भाग्यमा निर्भर नरही आलस्य त्यागेर पुरुषार्थतर्फ उन्मुख हुनुपर्छ भन्ने कुरालाई विभिन्न दृष्टान्तहरू दिएर स्पष्ट गर्न खोजिएको छ । कथामुखका यी आठ श्लोकको आशयलाई सरलीकृत र सङ्क्षेपीकृत रूपमा ग्रहण गरेर रमानाथले आफ्नो कविताका बीसौँ र एक्काइसौँ श्लोक बनाएका छन् । रथको एक पाङ्ग्राको मात्र गति नभएझैँ पुरुषार्थ केही नगरे भाग्य र लक्ष्मी पनि प्राप्त गर्न नसकिएमा त्यसलाई दोष दिन मिल्दैन, त्यो पूर्वजन्मकै फलले गर्दा हुन गएको हो, कुमालेले एउटै चक्रमा अनेकौँ प्रकारका भाँडाहरू बनाएझैँ विधाताले

पनि कर्मअनुसार नै भाग्य लेखिदिएका हुन्छन् भन्ने कुरा यी दुवै श्लोकमा व्यक्त गरिएको छ ।

रमानाथले 'हितोपदेश' कथामुखको पैतीसौँ श्लोकको आशय छत्तीसौँ श्लोकमैँ समाहित भएको ठानेर त्यसैका आधारमा आफ्नो कविताको बाइसौँ श्लोकको रचना गरेका छन् । हाँसका बथानमा बकुल्लाले शोभा नपाएझैँ पण्डितहरूका अगाडि मूर्ख पुत्रले पनि आदर नपाउने हुँदा बाल्यअवस्थामा शिक्षा नदिने आमा-बाबु दुवै शत्रु हुन् भन्ने कुरा 'कथामुख' र रमानाथको कविता दुवैमा समानरूपमा अभिव्यक्त भएको छ। कथामुखका सैतीसौँ र अठ्तीसौँ श्लोकमा पनि विद्या नपढेको पुत्रले शोभा वा आदर नपाउने कुरा दृष्टान्तहरू दिएर पुष्टि गर्न खोजिएको छ । रमानाथले यी दुवै श्लोकको आशय पनि बाइसौँ श्लोकमा नै समेटिसकेको देखिन्छ ।

रमानाथले *हितोपदेश* कथामुखको अठ्तीसौँ श्लोकपछि पढिएको चौथो अनुच्छेदलाई आधार बनाएर आफ्नो कविताका तेइसौँ र चौबीसौँ श्लोकको संरचना गरेका छन् । आफ्ना मूर्ख छोराहरूलाई नीतिशास्त्रको शिक्षा प्रदान गर्न राजाले अनुरोध गर्ने कुरा कथामुखसँग मिले पनि राजा बिहान उठ्ने, धर्मशास्त्र र राजनीतिको शिक्षा दिलाउन अनुरोध गर्ने, गुरुका चरणमा पर्ने र तत्काल छोराहरूलाई बोलाएर शिक्षाका लागि पहिल्यै गुरुलाई समर्पण गर्ने प्रसङ्गहरू उपजीव्य ग्रन्थको विश्लेषण गर्दा देखिएका मौलिक पक्ष हुन् । उनले अठ्तीसौँ श्लोकको चौथो पाउ "निर्गन्ध इव किंशुका:"को आशयलाई यहाँ तेइसौँ श्लोकको तेस्रो पाउमा "फूल्को वास सुरूपले त नहुन्या पूजा नगर्ने भया" भनेर सुमधुर ढङ्गले विश्लेषण गरेका छन् ।

जसरी सुनको संसर्गले काँच पनि मणिजस्तै सुशोभित हुन्छ त्यसरी नै विद्वान्को सङ्गतले मूर्ख पनि बुद्धिमान् हुन्छ भन्ने *हितोपदेश* कथामुखको उनन्चालीसौँ श्लोकका आधारमा रमानाथले आफ्नो कविताको पच्चीसौँ श्लोकको पहिलो र दोस्रो पाउको संरचना गरेका छन् भने पछिल्ला दुई पाउको रचना पादपूरणका लागि स्वतन्त्ररूपमा गरिएको देखिन्छ । महापुरुषको सङ्गति आवश्यक छ भन्ने दृष्टान्त दिने कथामुखको चालीसौँ श्लोकको आशय पच्चीसौँ

श्लोकमा आइसकेको हुँदा यसलाई रमानाथले पुनः उपजीव्य बनाउन नचाहेको बुझिन्छ ।

*हितोपदेश* कथामुखको चालीसौँ श्लोकपछिको पाँचौँ अनुच्छेदका आधारमा रमानाथले आफ्नो कविताको छब्बीसौँ श्लोकका अघिल्ला दुई पाउ बनाएका छन् भने पछिल्ला दुई पाउ र सत्ताइसौँ श्लोकको संरचना सम्पूर्ण हितोपदेशको शिक्षा प्राप्त गरिसकेको भनेर उनले मौलिक रूपमा रचना गरेको देखिन्छ । कथामुखमा विष्णु शर्माले राजपुत्रलाई नीतिशास्त्रको ज्ञान दिएको कुरा छ भने रमानाथको कवितामा शिव शर्माले राजकुमारलाई धर्मशास्त्र र राजनीतिको शिक्षा दिएको भन्ने उल्लेख छ । उपजीव्य ग्रन्थ *पञ्चतन्त्र* र *हितोपदेश* दुवैमा गुरुको नाम विष्णु शर्मा नै छ, रमानाथले विष्णु शर्माका ठाउँमा किन शिव शर्मा उल्लेख गरे ? विचारणीय छ । सम्भवतः उनले 'विष्णु' लेख्दा 'वि' को ईकार षकारको संयोगका कारण दीर्घ हुने बनेर 'मास'लाई "'मस' गर्नू तर छन्दोभङ्ग नगर्नू" भन्ने शास्त्रीय नियमको पालना गर्नका लागि "शिक्षा श्री शिव शर्मा गर्न भनि ऊट् लाग्या उसै काल्महा" भनेर उल्लेख गरेको हुनुपर्छ । *हितोपदेश* ग्रन्थमा कथामुखको पैतालीसौँ श्लोकपछि राजाले गुरुसमक्ष आफ्ना छोराहरूलाई सुम्पेको कुरा उल्लेख छ भने रमानाथको कवितामा चौतीसौँ श्लोकमै राजाले राजपुत्रहरूलाई समर्पण गरेको वर्णन छ ।

यसप्रकार हितोपदेश कथामुखका पैतालीस श्लोक र साता अनुच्छेदहरूमध्ये ६, १६, १७, १८, २०, २१, २२, २३, २४, ४१, ४२, ४३, ४४ र ४५ औँ श्लोक तथा तेस्रो र छैटौँ अनुच्छेदका विषयवस्तुहरूबाहेक अन्य श्लोक तथा अनुच्छेदका विषयवस्तुलाई सरलरूपमा विश्लेषण गर्ने प्रयास रमानाथको 'हितोपदेश' कवितामा भएको छ। उनले आफ्नो कविताको सत्रौँ श्लोकको संरचनाका लागि 'पञ्चतन्त्र'लाई उपजीव्य बनाए पनि अन्यत्रचाहिँ *हितोपदेश* ग्रन्थको कथामुखमा वर्णित विषयवस्तुलाई नै आफ्नो कविता संरचनाको आधार बनाएको देखिन्छ। उपजीव्य ग्रन्थका आलङ्कारिक र जटिल विषयवस्तुलाई यथासम्भव सरल र सहज रूपमा बोधगम्य बनाउन उनको कविताको संरचना सक्षम भएको छ ।

रमानाथको कविताको विषयवस्तु पुरानै भए पनि चिन्तन-मनन गरी त्यसलाई वस्तुगतरूपमा कवितामा व्यक्त गरिएकाले उनको यो कविता प्रशस्त मौलिकताले ओतप्रोत भएको छ । शृङ्गारिक धाराको प्रबलता रहेको माध्यमिक कालका कवि भए पनि उनी विशेषत: नीति उपदेशमूलक प्रवृत्तिका कवि हुन् र उनको यस 'हितोपदेश' कविताले अर्ती र उपदेशमूलक भावनाबाट बुद्धिचातुर्यका विद्यामा थप ऊर्जा दिन सक्षम भएको देखिन्छ (मित्र, २०६३: २८) ।

## ५. उपसंहार

रमानाथ आचार्य आदिकवि भानुभक्तका सुपुत्र भए पनि उनी हाम्रो नेपाली साहित्यको इतिहासमा ओझेलमै परेका छन् । उनको जीवनमा के-कति घटनाहरू घटेका थिए ? भन्ने सामान्य विवरणसमेत हामीसँग छैन । उनको व्यक्तित्व के-कति क्षेत्रमा बाँडिएर रहेको थियो ? भन्ने बारेमा पनि हामी अनभिज्ञ नै छौँ । उनका उपलब्ध कृतिहरू पूर्णत: निर्विवादित छैनन् र उनका थप कृतिहरूको अन्वेषणतर्फ पनि हालसम्म कसैले चासो देखाएका छैनन् । उनका उपलब्ध निर्विवादित कृतिहरूको सामान्यरूपमा समेत अध्ययन, विश्लेषण र विवेचना हुन सकेको छैन । यसै सन्दर्भमा प्रस्तुत अध्ययनमा त्यसबारे सामान्य प्रकाश पार्ने प्रारम्भिक प्रयास गरिएको हो । परन्तु उनको जीवनी, व्यक्तित्व र कृतित्वको पूर्ण अध्ययन-अन्वेषण गरी उनका योगदानको समुचित मूल्याङ्कन गर्नेतर्फ यथासमयमै नेपाली भाषा-साहित्यका अन्वेषकहरूको विशेष ध्यान आकृष्ट हुनु जरुरी देखिन्छ ।

## सन्दर्भ-सूची


आचार्य, मुक्तिनाथ (२०२९), ***भानुको भावना,*** तनहुँ : लेखक स्वयम् ।

" " (२०४२), ***आदिकवि भानुभक्त आचार्य खोजपूर्ण जीवनी,*** तनहुँ : लेखक स्वयम् ।

" " (२०६४), प्रत्यक्ष कुराकानी ।

आचार्य, रमानाथ (१९२७ई.) ***हितोपदेश,*** काशी : मालिक पुस्तकालय ।

आचार्य, व्रतराज (२०५८) ***आदिकवि भानुभक्त : जीवनी र कविताको सम्परीक्षण,*** तनहुँ : भानु जन्मस्थल विकास समिति ।

झा, रामचन्द्र (सं.)(१९८४ईं) ***पञ्चतन्त्रम्,*** वाराणसी : चौखम्बा विद्याभवन।

ढकाल, मतिप्रसाद (सं.) (२०६४) ***भानुभक्तका लघुरचनाहरू,*** नवलपरासी : आस्था आगम प्रकाशन।

न्यौपाने, दैवज्ञराज र व्रतराज आचार्य (२०६३) ***भानुदर्शन*** ८, काठमाडौँ : भानु प्रतिष्ठान

मिश्र, डिल्लीराम (सं.) २०६३) ***भानु स्मारिका,*** तनहुँ : भानु जन्मस्थल विकास समिति।

शर्मा, विश्वनाथ (सं.) (२०८६ई.) ***हितोपदेश,*** दिल्ली : मोतीलाल बनारसीदास।

✍

# जापानी हाइकु : एक चर्चा

*– माधवलाल कर्माचार्य*

जापानमा कुनै बेला एक वा बढी कविहरू मिलेर हाइकाइनामक लामा शृङ्खलाबद्ध कविताहरू लेख्ने चलन थियो। ती कवितामा तीन भाग हुन्थे– पहिलोलाई होक्कु भन्थे, दोस्रोमा वाकिकु, दाइसोन, हिराकु आदि भनिने अनेक चरणहरू हुन्थे; तेस्रोलाई अगेकु भन्थे । अगेकुबाट कविताको समापन हुन्थ्यो भने, होक्कुबाट आरम्भ । बाकिकु, दाइसोन, हिराकु आदि एकबाट अरूमा निःसृप्त हुँदै जाने भएकोले तिनीहरू एकातिर निर्भर हुन्थे भने अर्कोतिर स्वभर । कुनै किसिमको अङ्कुश नभएको पहिलोचाहिँ अर्थात् होक्कु चलनले नै स्वतन्त्र स्वभावको भएकोले अर्थात् स्वयं पूर्व हुने भएकोले सत्रौँ शताब्दीतिर त्यसको प्रयोग हाइकाइबाट छुट्टै, अलग्गै पनि हुन थाल्यो । त्यस्तै हिसाबले त्यसको प्रतिष्ठा पनि भयो । अर्थात् त्यो आफै पूर्ण रूपको कविता बन्यो, कुनै लामो कविताको अङ्ग बन्नु परेन। समय तथा परिस्थितिको फेरबदलले उन्नाइसौँ शताब्दीतिर हाइकाइ लोकप्रियताबाट हटेपछि त्यसको संस्कारबाटै पूर्ण रूपले मुक्त भई होक्कुको नामै पनि 'हाइकाइ'को 'हाइ' र 'होक्कु'को 'कु' मिली खुम्चिएर 'हाइकु'मा परिवर्तन भयो अर्थात् सानो पद्य आज यही नामले यसको विश्वप्रसिद्धि छ ।

विश्वले आज यसको परिभाषा गर्दा अथवा परिचय गर्दा जापानी भाषाको सत्र शब्दांशको कविता भनी गर्ने गरेको छ । यसलाई क्रमशः पाँच, सात र पाँच शब्दांश भएका अनुप्रास विहीन कविता वा पद्यरूप पनि भन्ने गरेका छन्। जापानी साहित्यमा आज यसको विशेषता गीति कविताको रूपमा छुट्टै कायम भएको छ । यसको रचनाको लोकप्रियता पेसेवार कविहरूको अतिरिक्त अरूहरूमा पनि देखिएको छ। यदाकदा एकभन्दा बढी वाक्य वा पङ्क्तिमा लेखिने गरिएको देखिए पनि यथार्थमा यसलाई पाँच, सात र पाँच शब्दांशहरूको तीन भागमा बाँडिएको एउटै वाक्य वा पङ्क्तिको कविता भनी मानिन्छ । यो धारणा मानिसमा उठ्ने प्रत्येक उद्वेग एउटै सिङ्गो, अविभाज्य, समग्र हो र यसको कणभित्रको सार कुरो थोरै मात्र

सारगर्भित शब्दहरूबाट व्यक्त हुन सम्भव छ भन्ने विचारबाट उब्जेको देखिन्छ । यो विशेषता जापानका साहित्यिक वा चित्रात्मक कलाकृतिमा व्यापकरूपले परिलक्षित भएको कुरा हो ।

यसप्रकार जापानी हाइकु एक लघुतम कविताको रूप हो । यसलाई जापानका कविले र अरूले पनि उत्तिकै मन पराई अनुशीलन गरेको देखिन्छ । अरूले यसलाई कुनै कुरा सम्झाउनीको रूपमा तथा सजावटको रूपमा राख्न तथा त्यस्तै कुनै तात्पर्यको लागि आफ्नो कुरालाई पद्यात्मक रूप दिई ओजपूर्ण बनाउन त्यसो गर्ने गरेको देखिन्छ भने कविहरूले चाहिँ आफ्नो उद्वेगलाई काव्यात्मक जलप लगाई मनोहारी बनाउन त्यसो गरेको भेटिन्छ । उदाहरणका लागि दुइटा रचना लिन सकिन्छ– एउटामा बिहान कार्यालय खुलेको समयदेखि एक ठाउँमा एकछिन स्थिर भएर नबसी काममा यताउति गरिरहेका बैङ्कका कामदार कर्मचारीलाई देख्ने त्यही बैङ्कमा काम गर्ने कविको मनमा त्यो जमात 'एक्वारियम'मा विभिन्न रङ उकिलिने गरी चुलबुलाइरहेका माछाको रूपमा चित्रित हुन्छ भने अर्कोमा आध्यात्मिक शिक्षा प्राप्त गर्न उद्यत भई भेला भएका शिक्षार्थीहरूको उत्सुकतापूर्ण भाव देख्ने एक प्रबुद्ध प्रशिक्षिकाको मनमा त्यो जमात जिन्दगीको सुख समृद्धिको कामना गरी महत्त्वपूर्ण रहस्यको साँचो फेला पार्न बन्द ढोकाको अगाडि आतुर भएर बसिरहेको जमातको रूपमा चित्रित हुन्छ । अनि ती दुई थरीले ती दुई थरी चित्रभावलाई आआफ्नो किसिमको हाइकु शैलीमा प्रस्तुत गर्दा पहिलोले त्यो भावलाई

*प्रदीप्त माछा*
*बैङ्कका कामदार*
*बिहानै देखि*

भनी गर्दछ भने पछिल्लोले

*खोल्यौं है द्वार*
*आत्मनिर्भरताको–*
*यो प्रशिक्षण*

भनी गर्दछन् । यसप्रकार बैङ्कका कार्यालयमा काम गर्न पदार्पण गरेका कवि प्रतिभा कानेको तोता (१९१९-) ले बिहानैदेखि

छिटोछरितो चालले काममा व्यस्त भर्खरको उमेरका कामदारहरूको चाला देख्दा त्यो प्रसङ्गलाई चम्किलो छवि प्रदर्शित गर्दै पानीमा रिँगिरहने प्रकृति भएका माछाहरूको प्रसङ्गसित जोडेर आफ्नो भावलाई एउटा मनमोहक चित्रमय सिर्जनाको रूपमा व्यक्त गरेका छन् भने, आध्यात्मिक शिक्षा ग्रहण गर्न जिज्ञासुभावले धैर्यधारण गरी अनुशासित रूपले बसिरहेका प्रशिक्षार्थीहरूको छाँट देख्ता जिन्दगीको सुखशान्तिको लागि अन्तरआत्माको विकासमा निरन्तर जोड दिने रेयुकाई शिक्षाका द्वय प्रर्वतक मध्येकी श्रीमती किमी कोतारी (१९००-१९७१) ले त्यो प्रसङ्गलाई सत्यको उद्घाटन गर्ने एउटा रहस्यमय तहमा पुग्न आफ्नो श्रम र सीपको सदुपयोग गर्न तर्खराएका दृढसङ्कल्पी व्यक्तिहरूको छाँटसित जोडेर भावलाई आफ्नो स्नेहपूर्ण आग्रहको रूपमा व्यक्त गरेकी छिन् ।

कविताको रूपमा, स्पष्ट छ, यी दुवै उत्तिकै आकर्षक र मनोहारी छन् । तर हाइकु हुँदैमा त्यसरी आकर्षक र मनोहारी किन हुन्छ ? हाइकु भन्नेबित्तिकै आजका मानिसहरू किन हुरुक्क हुन्छन् । यसमा त्यस्तो मूलभूत आकर्षण के छ ? यो एउटा खुल्दुली र जिज्ञासाको कुरा हो। यही जिज्ञासा र खुल्दुली एक दिन एक जना जैनमतका गुरुले एक जना कविसमक्ष राखेछन् । ती कवि थिए ओइजिमा ओनिचुरा (१८६१–१९३८) उनले जवाफ दिए– त्यसमा त्यही ६ जुन फूलबारीमा फुलेको चिनियाँ गुराँसको बोटमा छ । त्यो फुलेको गुराँसको बोटको सन्दर्भलाई उनले कवितामा यसप्रकार उतारेका पनि छन् :

*बारीमा बोट*
*चिनियाँ गुराँसको*
*शुभ्र फुलेको ।*

भनाइको मतलब फुलेकोमा फुलेको मात्र होइन, केही कुरा खुलेको पनि छ– जो शुभ्र छ, श्वेत छ, शोभाकरी छ । (अर्थात् जो देख्न सक्नेको लागि देखिने र अनुभव गर्न सक्नेको लागि अनुभव गरिने हुन्छ । तात्त्विक भेदको कुरा गर्ने हो भने, कविले अपेक्षा गरी भनेको मूलभूत कुरा हाइकुमा सहजात हुन चिनियाँ गुराँसको हकमा जस्तो प्रकृतिगत कुरा नभई पुस्तौँ पुस्ताका साधक र अनुशीलनकर्ताहरूको साधना र अनुशीलनको प्रतिफल भएको कुरो यसको नामै पनि

घुमीफिरी होक्कुबाट टुटी जोडिई नयाँ (हाइकु) बन्न गएबाट स्पष्ट हुन्छ । साथै यस रूपको कविताको पद्यको ढाँचामा थोरै मात्र शब्दहरू अट्ने र यसरी थोरै मात्र अटेका हिसाबले ती खचाखच भएका थोरै शब्दबाट धेरै कुरा भनिनुपर्ने अनि त्यसको लागि अनि बिम्ब, सूत्र र सङ्केतको प्रयोगले अर्थ दिँदा एउटा जादूमय, रहस्यमय, मन बहलिने अर्थात् खिँचे अनौठोजस्तो मोहनीमय अनुभूतिको सञ्चार हुनु अस्वभाविक होइन ।

यस अर्थमा यो हाइकु कविता एउटा कलामात्र होइन, विज्ञान पनि हो– यस अर्थमा कि यसमा कविको भाव प्रस्तुतिको साथै सीप, कौशल, ज्ञानको पनि सक्रियता हुन्छ । त्यसै भएर यो एउटा छोटो, अविभाज्य, स्व-सम्पूर्ण अभिव्यक्ति बन्न गई चुस्त, मीठो, चुम्दो हुन जाने हुनाले यसको लोकप्रियता स्थापित हुन गएको अनुमान गर्न सकिन्छ। यो लोकप्रियता वास्तवमा एकोहोरो नभई दोहोरो हो। यस्तो प्रकारको अभिव्यक्ति दिन सक्ने व्यक्ति आफैलाई यसबाट परम सन्तुष्टि हुने भएकोले आत्मसन्तुष्टिको लागि यसको अनुशीलन कविहरू स्वयं गर्न सक्ने व्यक्तिलाई परम आनन्दको अनुभूति हुन्छ। वास्तवमा यही परम आत्मसन्तुष्टि र परम आनन्दको अनुभूति नै त्यो चरम विन्दु हो जसमा यस पद्यरूपमा भाव ओकल्ने कविको स्वार्थ र त्यो ओकलिएको भावबाट आनन्दतिरेक हुने पाठक वा श्रोताको स्वार्थ मिल्न जान्छ र त्यो कविता लोकप्रिय बन्छ ।

यस्तो हुनुमा एउटा महत्त्वपूर्ण भूमिका यसको पाँच, सात, पाँचको शब्दांशको पद्य संरचनाले पनि खेल्ने गरेको मान्न सकिन्छ । यी शब्दांशको यसप्रकारको संयोजनले कविको भाव गाम्भीर्यलाई त्यही ढाँचामा ठिक्क मिल्ने शब्दहरू र ती शब्दहरूको ध्वनि र अर्थहरूको संयोजनले संवहन गरेको हुन्छ अर्थात् त्यसरी संवाहित भएका शब्दहरूको उपयुक्त किसिमको ध्वनि र अर्थले त्यो भाव गाम्भीर्यलाई मानिसको मनभित्र नेपथ्यमा यथार्थ र दुरुस्त प्रकारको सम्प्रेषित गरी प्रभावित गर्न पुग्छ। अर्को शब्दमा भन्ने हो भने पद्यको ढाँचा नै एउटा यस्तो छ, त्यसले भाव प्रकट गर्ने, भनूँ कविताको रचना गर्नेबाट उपयुक्त शब्दको चयन, त्यसरी चयन गरिएको शब्दको उपयुक्त स्थानमा स्थापन अनि त्यसरी स्थापनपछि

त्यसमा अर्थ दिने गरी कुनै किसिमको अडान वा एक छिनको विश्रामको माग गरेको हुन्छ, जसबाट त्यो अर्थ परिपाक हुनलाई समय मिल्न जान्छ । त्यो मागको पूर्ति भर्न स्वरूप प्रयोग भएको रचनाकारको रचना कौशलबाट हाइकु स्वरूपको सूत्रात्मक, चित्रात्मक र बिम्बात्मक कविताको रचना हुन्छ । यही स्वरूपको रचनाको मोहकताको रहस्य नै यी नै पाँच, सात, पाँच शब्दांशको संयोजन मानिएरै हुन सक्छ, अन्य भाषाका कविजनहरूले यसमा प्रस्फुटित हुने गरेको किसिमको उद्वेगलाई आफ्ना भाषामा अल्याख किसिमका छन्द, मात्रा, लयको ढाँचा भए पनि, त्यसमा नगरी यही पाँच, सात, पाँच शब्दांशको बन्धनपूर्ण ढाँचामा नै व्यक्ति गर्न रुचाउने गरेका छन् ।

जे होस्, सुरुमा केही कालअवधिसम्म यस पद्य रूपमा यस किसिमको स्वतन्त्र अस्तित्व भएको कविताको सिर्जना हुने कुरा अनपेक्षित थियो । सुरुमा भनेझैं त्यस अवधिमा यसको प्रचलन कुनै लामो कविताको भूमिकारूपमा सीमित थियो । विषयप्रवेशको रूपमा भनेझैं यसमा कुनै खास कविले कुनै खास विषयको चर्चा गरिदिन्थ्यो जसमा कुनै खास, तोकेर भनिएको नभए पनि आवेशपूर्ण प्रतिक्रिया उब्जने खालले कुनै ऋतु वा प्रकृतिको प्रसङ्ग सम्बन्धित कुनै कुराको बयान हुन्थ्यो । जसलाई टिपेर अरू कवि वा कविहरूद्वारा दोस्रो भागस्वरूप अरू पद्य वा पद्यहरू थपेर त्यो कवितालाई पूरा गरिन्थ्यो । इतिहासको कथनानुसार ७९४-११८५ को कालअवधिमा जापानका कविहरूमा राम्रो कविता लेख्ने होड चल्थ्यो र मनोरञ्जनप्रधान शृङ्खलावद्ध कविता लेख्ने चलन त्यही सिलसिलामा चौधौँ शताब्दीमा चलेको हो । यस्तो कविता दुई किसिमका लेखिन्थे । एउटा, पाँच लहरको जसमा पहिलो तीन लहर पाँच, सात, पाँच शब्दांशहरूको गरी सत्र शब्दांशको हुन्थ्यो भने, दोस्रो दुई लहर सात-सात शब्दांशको गरी चौध शब्दांशको हुन्थ्यो । यसरी एकतीस शब्दांशको कविताको पहिलो भागका तीन हरफ एक जना कविले लेखिदिन्थ्यो भने बाँकी दोस्रो खण्डको दुई हरफ अर्को कविले लेखी त्यो कविता पूरा गरिदिन्थ्यो । अर्को किसिमको कवितामा पहिलो तीन हरफ पहिलो किसिममा झैँ एक जना कविले लेखिदिन्थ्यो भने अरू

सात-सात शब्दांशका हरफहरू अरू एकभन्दा बढी कविहरूले लेख्दै थप्दै जान्थे। यसप्रकार यसमा शब्दांश एकतीसभन्दा बढी नै हुन्थे र हरफहरू पनि पाँचभन्दा बढी हुन्थे । यसरी दुई वा दुईभन्दा बढी कविहरू मिलेर लेखिएको पहिलो तीन हरफको भागलाई जस्तो सुरुमा चर्चा गरिसकिएको छ– होक्कु भन्थे भने, दुई हरफको अन्तिम भागलाई अगेकु भन्थे । यो होक्कु नै हाइकुको प्रारूप हो । पन्ध्रौँ शताब्दीको अन्ततिर माथि भनेझैँ हाइकाइ हास्यात्मक वा भनूँ, मनोविनोदपूर्ण शृङ्खलाबद्ध कविताको प्रादुर्भाव हुँदा पनि प्रारम्भिक चरणको रूपमा यही होक्कु नै प्रतिष्ठित रहन्थ्यो । विषय वा प्रसङ्गअनुसार यसमा प्रस्तुत हुने कुरो चुट्किलो, हास्यजनक, उपहासात्मक वा भनूँ मनोरञ्जनात्मक आकर्षक काव्यात्मक नै हुन्थ्यो र त्यसले आफूपछिका सिलसिलाबद्ध भइआएका चरणहरूलाई एककिसिमले बाटो देखाउँदै नेतृत्व गर्थ्यो । समयअनुसार मानिसको भावना, विचार, धारणा, अवधारणा र दृष्टिमा फेरबदल भएपछि सो समयमा जीवन यापन गरिरहेका कविहरू पनि प्रभावित हुनु स्वभाविकै थियो र निजहरू सम्बद्ध भई रचना हुने गरेको शृङ्खलाबद्ध कविताको रचनामा पनि स्वभावत: हेरफेर आयो र होक्कुले पनि आफ्नो भित्री स्वरूप बदलेर पहिलेजस्तो हल्काफुल्का विषयका छाँटमा सीमित हुन छोडेर शिष्ट, संस्कृत र गम्भीर तथा मर्यादित कविताको रूपमा आफूलाई प्रस्तुत गऱ्यो। यसमा ठूलो भूमिका सयौँ शताब्दीका माचुओ बासो नाम गरेका कवि (१६६४-१९९०) बाट भएको मानिएको छ। बाइस वर्षको सानो उमेरमै उनले यस पद्यमा लोकभाषामा, लोकभावनामा, लोकशैलीमा निम्नलिखित टुक्रा लेखेर दिशासूचना गरेका थिए–

*वनको हाँस*
*जान्छ अब उडेर*
*बादल पारि ।*

आफूले कर्मनिष्ठ भई सेवा गरी आएको मालिकको एक्कासि निधन भएपछि यो एक टुक्रा कविता लेखी छोडेर उनी अत्तोपत्तो कसैलाई केही थाहा नदिएर साथीभाइ, घरबार सबैदेखि टाढा हिँडेका थिए। उनी जीवनभर अविवाहित रहे र उनको बेलाबखत प्रकृतिबीच विचरण गरेर स्वच्छन्द जीवन बिताए । उनी एक अध्ययनशील,

एकान्तप्रिय र भावुक प्रकृतिका व्यक्ति थिए । उनले मालिकबाट प्रेरणा पाई जापानी भाषा र साहित्यको विशद अध्ययन गरेका थिए । यसै क्रममा उनले एक जना भिक्षुलाई गुरु थापी जेनमतको पनि ज्ञान प्राप्त गरेका थिए । यसको अतिरिक्त, उनले हस्तलिपि, चित्रकला, चिनियाँ कविता र औषधोपचारको पनि अनुशीलन गरेका थिए । हुन सक्छ– भर्खर-भर्खर भनेजसो दीर्घकालिक गृहयुद्ध समाप्त भई पुनर्निर्माणको कार्य चलिरहेको अवस्थामा राष्ट्रव्यापी रहेको जनभावना उनमा पनि क्रियाशील थियो र जीवनमा कुनै किसिमको नयाँ दर्शनको आवश्यकता मानिसहरूले महसुस गरिरहेका थिए। त्यही सरह चेतनशील उनले पनि साहित्यमा स्वतः, खास गरी, त्योबेला लोकप्रिय भई प्रयुक्त भइरहेको होक्कु अनि हाइकाइमा पनि त्यस्तै प्रकारको दर्शनको खाँचो महसुस गर्न पुगे । घुमन्ते जीवनको क्रममा एक्लै बसी कविता कोर्नुपर्दा लामो शृङ्खलाबद्ध कविताको प्रारम्भिक चरणको रूपमा प्रयुक्त भइरहेको पद्यरूपलाई वाहकको रूपमा प्रयोग गर्दा दुवैको तत्त्व समायोजन हुने भएकोले हुनसक्छ, उपयुक्त देखी त्यसैअनुसार प्रयोग गरी कविता गर्ने गर्दा मौलिकरूपको कविताको परम्पराको सिर्जना हुन गयो र भन्न सकिन्छ– यसरी नै उनीबाट स्वतन्त्र होक्कुको शिलान्यास हुन गयो । भनिन्छ– त्यसबेला प्रचलित कवितासम्बन्धी विभिन्न मतको अध्ययनपश्चात् उनले आफैले यसरी स्थापना गरेको स्वतन्त्र होक्कु परम्परामा कुनै-कुनै शाश्वत सत्यको आभाससहित समसामयिकताको तत्त्व पनि समाहित भएको हुनुपर्छ भन्ने कुरामा जोड दिए ।

जे होस्, उनीबाट सुन्दर-सुन्दर कविताहरूको सिर्जना भयो; र रातको चकमन्नमा एउटा पुरानो झ्याउ नै झ्याउले टम्म ढाकेको पोखरीको डिलमा बसी मग्न भई बस्दा कताकताबाट त्यो पोखरीमा एउटा भ्यागुतो एक्कासि उफ्री पस्दा उछिट्टिएर पानीको आवाजले अभिभूत भई सैंतीस वर्षको उमेरमा लेखिएको निम्न भावार्थको उनको कविताले विश्वप्रसिद्ध नै पायो–

*पुरानो दह*  
*पस्छ फुत्त भ्यागुतो*  
*कुर्लन्छ पानी ।*

तल अर्थ उतारिएको उनको अर्को कविता पनि विश्वका पाठकको मन छुन सफल भयो जसमा पात झर्ने हिउँदको यामको एक मधुरो साँझको उज्यालोमा एउटा पात नभएको रूखको हाँगामा चुपचाप बसिरहेको एउटा कागको चित्रण छ, जुन परम्पराबाट छुट्टिएको उनको पहिलो रचना मानिन्छ :

*नाङ्गो हाँगामा*
*मौन एउटा कौवा*
*साँझको बेला ।*

यसमा वर्णित कुराबाट मानिसको मथिङ्गलमा पर्न जाने वातावरणको प्रभाव पनि उत्तिकै घतलाग्दो मात्र होइन, छोइँदो पनि भएको स्पष्ट छ ।

उनको यस्ता रचनाहरूबाट जापानको कविता क्षेत्रमा एउटा नौलो आयाम थप्ने काम भएको छ, जसको पहिचानस्वरूप, उपर्युक्त कविताहरूबाट स्पष्ट हुन्छ, उनीबाट निम्न विशेषताहरू भित्रिएको मानिएको छ–

१. आन्तरिकता र लाक्षणिकता ।

२. सूक्ष्म प्रकारको आन्तरिक चेत ।

३. प्रकृतिसितको मानवजीवनको तादात्म्यता ।

४. सरल र साझा भाषा ।

यसको अतिरिक्त, त्यही कालदेखि कवितारचनामा केही विशेष नियमहरूको पालनाको पनि आग्रह भयो जसमा मुख्य यस प्रकार छन्–

१. प्रकृतिसम्बन्धी कुनै प्रसङ्ग हुनुपर्ने ।

२. कुनै खास घटना वा अनुभवको सङ्केत हुनुपर्ने ।

३. तात्कालिक कुनै घटनाको प्रस्तुति हुनुपर्ने ।

प्रकृतिसम्बन्धी प्रसङ्गको कुरा पूर्वकालदेखि भइआएको हो तापनि विशेष जोड दिइएको देखियो ।

यसप्रकार आन्तरिक भावना, प्रतीकात्मकता, आध्यात्मिक चेतना, प्रकृति दर्शन, आदि माथि यसकिसिमले जोड दिइएको भए पनि

सथसाथै यथार्थ जीवन, यथार्थ जीवनको तत्त्व, यथार्थ अनुभव परोक्ष रूपैले भए पनि समाहित गर्ने प्रयास भएकोले, अथवा भनूँ, कविको मनोव्यापारको प्रकृतिअनुसार हुन जाने भएकोले, यसको धारणा परम्परागत होक्कुको धारणाबाट छुट्टै अलग्गै हुन गएको स्पष्ट छ भन्न सकिन्छ। यसैबेलादेखि पुरानै ढाँचामा अन्तरवस्तुस्वरूप नयाँ मूल्य र मान्यताका कुराहरू अभिव्यक्त गर्ने परम्पराको थालनी भयो।

सोहीअनुरूप अठारौँ शताब्दीमा उनैका अनुयायी तानिगुची बुसोन (१७१८–८३) फरक धारणा लिएर देखा परे र उनीबाट नयाँ शैलीको सिर्जना भयो। उनी वस्तुतः कविभन्दा चित्रकार बढी थिए र उनको दृष्टि कवितामा पनि त्यही प्रकारको थियो। उनी यथार्थभन्दा बढी कल्पनामा रमाउँथे। उनले बीस वर्षको उमेरमा कविद्वय उचिदा सेन्जान र हायानो हाजिताको निर्देशनमा हाइकाइको अध्ययन गरेका थिए। काव्यकला र चित्रकला दुवैको प्रेरणाको लागि उनले ठाउँठाउँको विस्तृत भ्रमण पनि गरे। कलाकारको रूपमा प्रतिष्ठित भइसकेपछि उनी काव्यसाधनामा पहिलेभन्दा बढी लागे। काव्य क्षेत्रमा उनी वस्तुतः सोख वा मनोरञ्जनको लागि मात्र लागेको भए पनि उनको देनले उनी बासोपछि दोस्रो स्थानको कवि हुन पुगेको मानिन्छ।

कविता रचनामा उनीबाट तल लेखिएबमोजिम विशेषताहरू भित्रिएको मानिएको छ–

१. सुखवादी चिन्तन।

२. कल्पनालोकको मोह।

३. चित्रात्मकता।

४. शिष्ट मनोहारी शैली।

यसरी बासोको भन्दा तात्त्विक भिन्नता भए तापनि उनले स्थापित गरेको मूल भावलाई मजबुत पारेर उनले काव्यानन्दको नयाँ आयाम थपिदिए। नमुनास्वरूप उनको एउटा रचना यसप्रकार छ–

*फूलको कली*
*जब फुल्छ फुटी*
*छुट्न इन्द्रेणी।*

यहाँ 'पी-ओनी' नाम गरेको एउटा रातो गोलो आकारको फूलको चर्चा गरिएको छ, जसको कोपिला फुटी फुल्न खोज्दा सप्तरङ्गी इन्द्रेणीको आत्मा निस्केको आभास हुन्छ भन्ने चित्रमय कल्पनापूर्ण दृष्टान्त यहाँ प्रस्तुत गरिएको छ । यस्तै कल्पनापूर्ण चिन्तनको अनुभूति उनको अर्को निम्नलिखित रचनाबाट सम्प्रेषित हुन्छ :

*हिउँदे झरी !*
*केले गुजारा गर्नन्*
*ती पाँच गृही !*

यस्तै प्रकारले अर्को नौलो आयाम थप्ने काम अठारौँ शताब्दीमा कोबायासी इस्सा (१७६३–१८२८) नाम गरेका अर्का कविबाट भयो । उनी एकसिसिमले पलायनवादी प्रवृत्तिका व्यक्ति थिए; उनी जीवनको झन्झटबाट टाढा रहन चाहन्थे तर चटक्कै माया मारी पूरै टाढा बस्न पनि सक्तैनथे र फर्कीफर्की नजिक पनि आइरहन्थे । यही नै उनको वैलक्षण्य थियो । साँच्चै भन्ने हो भने, उनको जीवन दुःख-कष्टपूर्ण थियो, दुई वर्षको सानो उमेरमा उनले आँखा गुमाएका थिए । छ वर्षको उमेरमा उनको बाबुले अर्की बिहा गरेकाले उनले कान्छी आमाबाट र तिनीबाट जन्मेका सन्तानबाट सौतेनी व्यवहार खप्नुपऱ्यो । फलस्वरूप दस वर्षको उमेरमा उनी घरबाट एक किसिमले धपाइए, दसौँ वर्ष उनले आफ्नै बलबुतामा उभिई जीवन गुजारा गर्नुपऱ्यो । त्यसै अवधिमा उनले हाइकाइको अध्ययन गरेका हुन् । अट्ठाइस वर्षको उमेरमा घर फर्के पनि एक वर्ष पनि सुख र शान्तिसित बस्न सकेनन् अनि फिरन्ते भई हिँडे । त्यस अवसरमा उनको धेरै कविहरूसँग उठबस भयो, र उनले कविताको अनुशीलन गर्दै गए । तर घरको सम्झनाले सताउन नछोडेपछि धेरै वर्षपश्चात् आफ्नो जन्मथलोमा फर्के । त्यो बेला बाबुको मृत्यु भइसकेको थियो र सौतेनी भाइसँग अंशबण्डाको मुद्दा पऱ्यो । दसौँ वर्ष झेलेपछि त्यो मुद्दा बल्ल छिनियो र बाउन्न वर्षको उमेरमा बिहे गरे । तीन जना छोरा र एक जना छोरी पनि भए तर सबैको सानैमा मृत्यु भयो । केही वर्षपछि स्वास्नीको पनि निधन भई बिछोड भयो । बासट्ठी वर्षको उमेरमा फेरि अर्को बिहे त गरे तर दुई वर्षपछि आफै पनि

बिते । यस्तो दुःख र सङ्घर्षपूर्ण जिन्दगीमा उनले हजारौँ कविता लेखे । यस्तो अवस्था भोगेर लेखिएका कवितामा कविको जीवनदर्शन र जीवनको अवधारणा झल्किनु अस्वाभाविक होइन । उनको रचनाबाट स्पष्ट हुन्छ– उनले जीवनलाई जस्तो छ उस्तै स्थितिमा आत्मसात् गर्न सकेनन्, न बासोले झैँ माथि उठेर मनको शान्ति नै प्राप्त गर्न सके । आइपरेका दुःख-कष्टलाई ठट्टामा उडाइदिएर झन्झटबाट व्यर्थै भाग्न मात्र खोजे र नसकेर फेरिफेरि फर्केर आइरहे । यही क्रम नै उनको जीवनको विशेषता रह्यो र मानसिक तनावस्वरूपको यही विशेषता नै कवितामा प्रतिबिम्बित भएर एउटा नौलो वैलक्षयको रूपमा छाउन पुग्यो । त्यसअनुरूप उनका कवितामा देखापरेका वैलक्षण्यहरू यस प्रकार छन्–

१. नैराश्य भाव ।
२. क्लेशमिश्रित हास्य ।
३. पलायन प्रकृति ।
४. सरल र सोझो अभिव्यक्ति ।
५. व्यक्तिगत मनस्थितिको प्रतिबिम्ब ।

नमुनाका लागि केही कविता प्रस्तुत छन् । एउटा छ–

*मातृ विहीन*
*हे साना भँगेरा हो !*
*आओ है खेलौँ*

उनको भनाइ छ– उनले यो कविताको रचना आफू छ वर्षको छँदा गरेका हुन् । त्योबेला उनी एक्लो थिए, आमा नभएको टुहुरो भनी छिमेकका कुनै पनि बच्चा उनीसँग खेल्न मान्दैनथे । उनी धुमधुमती एक्लै बसेर लामा दिनहरू काट्दथे । आफूजस्तै आमा नभएका विचरा बचेराहरू विचल्ली अवस्थामा रहेका हुन् भनी सम्झँदा यो कविता स्फूर्त भएको स्पष्ट छ । यसरी नै उनले लेखेको अर्को कविता यसप्रकार छ–

*काम, नहान,*
*हात-पाउ मल्दै छ*
*झिँगा विचरा ।*

निःसहाय झिँगामाथिको सहभावको साथै उनको मनमा जमेर बसेको भित्री भाव पनि यसरी व्यक्तिन गएको छर्लङ्ग हुन्छ ।

यस्तै आत्मीय भाव प्रकट भएको उनको अर्को एउटा कविता यस प्रकार छ–

*हे छैली चरी*
*घर मेरो हेरिद्यौ*
*म नआइन्जेली ।*

बासोको प्रकृतिसित घनिष्टता मात्र थियो, इस्साले मितेरी नै लगाए । बासोले प्रकृतिलाई अन्तरिक ज्योति उद्दीपित गराइदिने तत्त्वको रूपमा भेटेका थिए र यसैले यसलाई सदासर्वदा रसानुभूतिजन्य आनन्द र मनोरञ्जनको स्रोत भएर रहने कलापूर्ण सिर्जनाको माध्यमको रूपमा भेटेर त्यसै रूपमा मात्र प्रस्तुत गरेका थिए जब कि इस्साले यसलाई मानव मनलाई शाश्वत शान्ति दिने कारक तत्त्वको रूपमा उभ्याइदिए ।

होक्कुको यो गतिशील परम्परामा उन्नाइसौँ शताब्दीमा एउटा शक्तिशाली चिन्तनको लहर आयो, जसले यो गतिशीलतालाई सचेत मनले भेटेको भावनालाई प्रस्तुत गर्ने यसको सुरुदेखिको स्वरूपलाई बदलेर भावनाले भेटेको अवचेतन मनलाई प्रस्तुत गर्ने स्वरूप दिई गति प्रदान गर्ने प्रयास गऱ्यो। यो प्रयासमा मुख्य भूमिका युवाकवि मासाओका सिकी (१८६७–१९०२) को थियो। उनको यो प्रयासलाई वस्तुगत वर्णनको प्रयास भनिन्छ। उनले त्यसबेला मोमिजिकाइनामक एउटा संस्था खोलेका थिए। होक्कु सुधार आन्दोलनमा सरिक हुन चाहने समविचारका कवि वा लेखकहरू यसका सदस्य थिए। यो संस्थाले बेलाबखतमा गोष्ठी गरेर काव्यकृतिहरूबारे चर्चा-परिचर्चा गर्दथ्यो। वस्तुतः सिकी पनि सुखले वञ्चित कविताकर्मी थिए। पाँच वर्षको उमेरमा उनले बाबु गुमाएका थिए। बाइस-तेइस वर्षको उमेरमा उनलाई छातीको रोग लाग्यो। त्यही रोगले उनी जीवनभर पीडित रहे। तर इस्साजस्तै मानसिक तनावले पीडित भएर उनी रहेनन्। रोगको पीडालाई बिर्सन उनी कवितामा लागिरहन्थे र गम्भीर प्रकृतिका कविता लेखिरहन्थे। होक्कु सुधार आन्दोलनमा पनि

लागिरहन्थे । उनलाई काव्य र काव्यशास्त्रसितको परिचय उनका हजुरबाले गराइदिएका थिए जसले उनलाई चिनियाँ साहित्यको पनि शिक्षा दिएका थिए ।

जापानी सहित्यको विशद अध्ययन उनले पछि गएर टोकियो इम्पेरियल युनिभर्सिटीमा गरे । उनले युद्धको ताका केही कालसम्म चीनमा गई युद्ध संवाददाताको पनि काम गरे । उनले यसप्रकार एककिसिमले संसारको वास्तविक स्वरूप देखेका थिए । त्योबेला जापानी साहित्यमा फ्रेन्च साहित्यको प्रभाव परिरहेको थियो । उनले युरोपेली कलाकारहरूको चित्रकलाबाट पनि प्रेरणा प्राप्त गरेका थिए। समयको भावनाअनुरूप जापानी साहित्यिक परम्पराको पुनर्मूल्याङ्कन भई पुनर्निर्माणको क्रिया चालू भइरहेको थियो । त्यही सिलसिलामा हाइकाइ पुरानो जमानाको कुरा ठहरिई नयाँ जमानामा त्यसको कुनै महत्त्व नभएको साबित भएर त्यसलाई बहिस्कार गरियो । फलस्वरूप हाइकाइको प्रारम्भिक चरणका रूपमा प्रयोग हुने गरेको होक्कुको प्रयोग अब त्यसो हुने नभई स्वतन्त्र कविताको रूपमा मात्र हुने भएकोले त्यसको नामै पनि बदली हाइकु हुन थाल्यो। यसको अन्तिम लक्ष्य मूल्य प्राप्तिभन्दा सौन्दर्यप्राप्ति मानेर बुद्धिपक्षभन्दा भावपक्ष अनि परम्परागतभन्दा नयाँ जमानाको नयाँ जीवनको नयाँ विषयसँग हुनुपर्नेमा जोड दिन थालियो। यसप्रकार सिकीको प्रेरणाबाट चलेको होक्कु सुधार आन्दोलनको फलस्वरूप देखा परेका विशेषताहरू यस प्रकार छन्–

१. अवचेतन मनको भाव प्रक्षेपणमा विशेष जोड ।
२. वस्तुगत कुराको चित्रण ।
३. समयसापेक्ष विषयको प्रस्तुति ।
४. साहित्यिक वा आलङ्कारिक भाषाको साथै प्रचलित भाषाको जोड ।

यो कुरा सिकीका निम्नलिखित केही रचनाहरूबाट पनि स्पष्ट हुन्छ । एउटा यसप्रकार छ–

*उज्यालो भयो*
*सेतो मस्तूल सऱ्यो*
*फूल बाहिर ।*

भनिन्छ– कवि सुतेको सानो कोठाको झ्याल शुद्ध र स्वच्छ हावाको आउजाउको लागि खुल्लै छोडिएको थियो र बिछ्यौनामाथि फूल बाँधिएको थियो । बिहान सखारै आँखा खुल्दा झ्यालबाहिरको नदीमा एउटा ढुङ्गाको पाल बिस्तारै सर्दै गइरहेको दृश्य देखेछन् । त्यसले उनको अवचेतन मनमा उद्दीपन गरेको भावना यसमा उत्रिएको छ ।

त्यसरी नै अर्को कविता यसप्रकार छ–

*झ्यालबाहिर*
*गुलाफ हेरिरन्छु*
*दुख्न छोड्दा ।*

भनिन्छ, जीवनको अन्तिम सात वर्ष उनी ढाड दुख्ने रोगले थला परेर एक्लै बसिरहन्थे, त्यही बेलाको एउटा अन्तर्मनको भाव यसमा चित्रण गरिएको छ ।

त्यसरी नै थला परी, बाहिर परिरहेको हिउँ हेरिरहँदाको भाव अर्को एउटा कवितामा यसप्रकार प्रस्तुत गरिएको छ–

*फेरि, र फेरि*
*सोध्दै रहन्छु, हिउँ*
*कति गहिरो ?*

यसप्रकार नयाँ युगअनुसारको नयाँ किसिमको कविता लेख्ने प्रवृत्ति बढेपछि मानिसहरूमा कोही 'ऋतु वा प्रकृतिको प्रसङ्गविना'को कविताको वकालत गर्ने भए भने कोही पुरानै परम्पराको पछि लागेर पुरानै पद्यरूपमा किन लेख्ने, 'स्वच्छन्दरूप'को पद्यमा किन नलेख्ने ? भन्ने पनि भए । फलस्वरूप नयाँनयाँ प्रयोगहरू हुँदै आए र सोही अनुरूप यसको लोकप्रियता पनि बढ्दै गयो र यसको अनुशीलन गर्ने नयाँनयाँ कविहरूको जमातमा वृद्धि हुँदै आयो ।

यस सन्दर्भमा बीसौँ शताब्दीका कानेको तोताको नाम एक सशक्त प्रभावशाली कविको रूपमा लिइन्छ । उनको जन्म १९१९ मा पहिलो विश्वयुद्धपछि भएको हो, जसले विश्वभरिका मानिसहरूको विचारपद्धतिमा क्रान्तिकारी परिवर्तन ल्याएको थियो । उनले टोकियो विश्वविद्यालयबाट १९४३ मा अर्थशास्त्रमा स्नातक उपाधि हासिल

गरेका थिए। त्योबेला विश्वमा दोस्रो महायुद्ध चर्किरहेको थियो, जसले मानिसको मानसिक धरातल पहिलो विश्वयुद्धले भन्दा चर्को प्रभाव ल्याइरहेको थियो। त्यो युद्धमा उनको देश जापान पनि सरिक थियो, र उनले सेनामा भर्ती भई एउटा टापुमा गई बस्नुपरेको थियो । लडाइँ सकिएपछि उनी आफ्नो ठाउँमा फर्की एउटा वित्तीय संस्थामा कार्यरत रहे । उनी बाबुको प्रेरणाले हाइकु लेख्नमा प्रवृत्त भएका थिए । लडाइँको विभीषिका देखे-भोगेका उनीजस्तोलाई वैज्ञानिक उन्नतिले ल्याएको परिवर्तन र पश्चिमी जीवनशैलीले ल्याएको प्रभावबारे उदासीन भएर रहन सक्ने कुरो थिएन । बढ्दो सहरीकरणले गर्दा ऋतु तथा प्रकृतिसम्बन्धी कुराहरूको अवलोकन जन्य कुराहरूको प्रसङ्ग लिई कविता गर्ने भन्ने कुरा पनि सबैका लागि व्यावहारिक भन्ने स्थिति पनि रहेको थिएन न मात्र प्रकृति नै प्रेरणाको स्रोत रहेको थियो । भौतिकवादी चिन्तनले ज्यादा प्रभाव जमाउन लागेको र आफ्नो संस्कार-संस्कृति धराशायी प्रायः हुन लागेको अवस्थामा आफू जन्मनुभन्दा सय वर्षअगाडि जन्मेका तामिजावा काकियो (१९०२–१९६२) ले प्रकृतिको प्रसङ्गको बारेमा गरेको वकालतमा विशेष ध्यान दिए पनि 'स्वच्छन्द पद्यरूप'को बारेमा उनले सम्झौता गर्न सकेनन् । सांस्कृतिक सम्पदास्वरूप पुस्तौंदेखि व्यवहृत भएर आइरहेको पद्यको ढाँचासित उनले सम्बन्धविच्छेद गर्न चाहेनन् र आधुनिक जीवनको विगतसित अर्थात् सांस्कृतिक परम्परासित कुनै न कुनै सम्बन्ध वा नजिकको नाता रहिरहनुपर्छ भन्ने उनको राष्ट्रवादी धारणा थियो र पाँच, सात, पाँचका शब्दांशको तीन भागकै ढाँचामै लेखिरहे। उनको रचनामा टड्कारिएका केही विशेषताहरू यसप्रकार छन्–

१. सामाजिक तथा राजनैतिक चेत ।
२. समसामयिक जीवनप्रति मोह ।
३. पूर्व र पश्चिमको जीवनशैलीको प्रभाव ।
४. स्थूलबाट सूक्ष्मको प्रतिबिम्ब ।
५. साङ्केतिकता ।

उनका कविताका केही नमुना यसप्रकार छन् ।

एकातिर कुन्युँमा हिउँ पर्दै थुप्रिँदै गइरहेको अवस्थामा अर्कोतिर ईश्वरको अस्तित्व आदिबारे चर्चा गरिरहेका माध्यमिक विद्यालयका विद्यार्थीको कुरा आफूमा परेको प्रभाव स्पष्ट पार्न लेखिएको एउटा कविता यसप्रकार छ–

*माविका छात्र*
*चर्चामा ईश्वरको,*
*हिउँ कुन्युँमा ।*

यसरी नै सल्लाको रूखबाट भर्खरैजसो झरेर घाँसमा काँढाले टेकी टुक्रुक्क बसेझैं बसिरहेको एउटा फलको दृश्यको चित्रण गरी लेखिएको उनको एउटा अर्को कविता यसप्रकार छ–

*के-के झैं यौटा*
*ताजा सल्लाको फल*
*घाँसमा ठिङ्ङै ।*

यसबाट उनमा के प्रभाव पऱ्यो– उनले बताएका छैनन्, पाठकमा स्वत: अनुमान जाग्ने कुरा हो ।

यसरी नै फलामको एउटा कारखानाबाट निस्केर माथितिर उडेर गइरहेको धूवाँलाई देख्दा लेखेको एउटा कविता यसप्रकार छ–

*थाकेको हात*
*तन्केर फैलिएको-*
*धूवाँ मिलको ।*

वर्णन यहाँ कारखानाको चिम्नीबाट निस्केको धूवाँको छ तापनि प्रसङ्ग मजदुरको काम गर्दा थाकेर तन्केर फैलिएको हातको भएबाट सङ्केत अर्कैतिरको भएको स्पष्ट छ ।

उनले यसप्रकार नव यथार्थवादका भिन्नै कल्पनाशीलताका नमुनास्वरूपका कविताहरू प्रचलनमा ल्याएको पनि धेरै भइसक्यो । यसबीचमा अरू पनि अनेक किसिमका प्रयोगहरू आइसकेका छन् र आइरहेका पनि छन् । एकातिर बासो शैलीका परम्परावादी कविताहरू पनि लेखिएकै छन् भने, अर्कातिर अरूअरू प्रतीकवादी तथा अति-यथार्थवादी कविताहरू पनि लेखिएका छन् र तिनको चर्चापरिचर्चा

पनि भएकै छन् । समग्रमा भन्नुपर्दा हाइकुको लोकप्रियता यत्तिको लामो कालको पश्चात् पनि निखिँदै छ, निखिँदै आइरहेको छ । निक्र्यौलमा भन्ने हो भने जापानी हाइकु कविहरूले कलात्मक तथा आनन्ददायी अनुभूति र मनोरञ्जनको लागि पुस्तौं अघिदेखि थोरैमा थोरै शब्दमा धेरैमा धेरै कुरा बुझिन जाने उक्तिवैचित्र्य, उक्तिसौन्दर्य र उक्तिमाधुर्यले मनमोहक कविता लेखेर आफ्नो साहित्यिक विशेषतालाई अक्षुण्ण राखेका छन् ।

यस सन्दर्भमा उल्लेखनीय कुरो छ, नेपालका कविहरूले पनि केही वर्षयतादेखि आफ्नो वर्णमालाका पाँच, सात, पाँच अक्षरका तीनभागको पद्यमा हाइकु शैलीका कविताहरू लेखी विभिन्न प्रयोग गरिआएका छन् । ती कविताहरूमा कुनै स्वतन्त्र अस्तित्वको भनी टड्कारो हुने गरी शीर्षक लागी आएका छन् भने, कुनै हाइकुको परम्परागत पहिचानस्वरूप ऋतु वा प्रकृतिको कुनै न कुनै प्रसङ्गको साथ लागी आएका छन् । कुनै पाँच, सात, पाँच अक्षरको तीन लहरमा गरी सम अक्षरको पद्यरूपमा पनि देखिने गरेका छन् । अनि कुनै कवितैमा मात्र सीमित नरही कथामै पनि फैलिएर हाइकु कथाको रूपमा पनि विस्तारित हुने सुरसारमा छन् । यी सबले नेपाली हाइकु साहित्यले कस्तो स्वरूप लिने हो, हेर्न बाँकी नै छ तापनि यसबाट जापानी हाइकु साहित्यको लोकप्रियता जापानको सीमाबाहिर पनि कुन प्रकारले फैलिँदो छ भन्ने स्पष्ट हुन्छ ।

## आधारसामग्री


१. अधिकारी, क्षेत्रप्रताप, **जापानी साहित्यको इतिहास**, अक्षरप्रकाशन, काठमाडौँ, २०५७

२. इन्साइक्लोपिडिया ब्रिटनिका, **माइक्रोपिडिया**, भोल्युम १०; नलेजटु डेप्थ ।

३. उएदा, माकोतो, **मडर्न जापनीज् हाइकुःएन् एन्थोलजी**, जापान युनिभार्सिटी अफ टोकियो प्रेस १९७६ ।

४. **ओबुसाज् एसेन्सियल जापनिज् रङ्लिस डिक्स्नरी**, द ओबुंशा, टोकियो ।

५. **केस्ट,** बाइमन्थली मागाजिन, रेयुकाई इन्टर्नेसनल डिपार्टमेन्ट अफ टोकियो, भोल्युम १, नं २, मे १९८३ ।

६. **जापान आएज् इट इज,** गाक्केन कं. लि., १९८२ ।

७. **द वर्ल्ड बुक डिक्स्नरी,** वर्ल्ड बुक इन्कर्पोरेसन, सिकागो, १९८८ ।

८. **बर भन्याङ्ग,** वर्ष २, अङ्क १, शरद्-हेमन्त २०५७ ।

९. **सर्कल,** द इन्टर्नेसनल रेयुकाइ क्वाटर्ली म्यागाजिन, इन्टरनेसनल डिर्पाटमेट, १-७-८ आजाबुदाइ, मिनातो-कु, टोकियो । अङ्क १२ ।

१०. **वेबस्टर्स सेभेन्थ न्यु कलेजियट डिक्स्नरी,** साइन्टिफिक बुक एजेन्सी, कलकत्ता, भारत, १९६७ ।

११. हिमांशु थापा (अनुवादक), **न्हू जापानी हाइकु,** च्वसापासा, काठमाडौँ, २०४५ ।

१२. **हाइकाइ एफ हाइकु,** द निप्पन गाकाजुचु, सिकोकाइ, टोकियो, १९५८ ।

१३. नेपाली पत्रपत्रिकाहरू तथा प्रकाशनहरू ।

# कृष्णविक्रम र उत्तर आधुनिकता

*– युवराज नयाँघरे*

केटाकेटीमै सुनेर मन पराएको गीत यो ।

*'सिन्धुली गढी घुमेर हेर्दा सुन्तली माई कतिमा राम्रो दरबार मार्‍यो नि मायाले मार्‍यो .........'*

गीतको गेडा जति राम्रो, त्यसलाई उरालधुराल पारेर गाइएको स्वर अझ मीठो र मोहक । निस्फिक्री भएर गाएका छन्, यसका गायकले ।

धेरैपछि थाहा भो, कृष्णविक्रम थापा रहेछन्– यो प्रिय गीतका गायक । सम्भवत: यसको जोहो साजसज्जा र सुर-तरानामा थापाकै रगत पसिना खर्चिएको होला ।

साहित्यमा उत्तरआधुनिकताले एउटा दह्रो र गतिलो बाँकटे हान्न थालेको समय झन्डै एक दशक जति भयो भन्ठान्दछु म । विषय, बहस र विमर्श पनि अझ चर्कोसँग भएको छ– उत्तर आधुनिकताको । शब्दको मधुरता मात्रैले तानिएर लेखक र सर्जकहरूले यसरी यो विषयमा भेडाधसान अवश्यै गरेका होओइनन् ।

दुई कुरा जोडेर यो विषय लम्बिरहेछ, ज्ञातव्य छ ।

कृष्णविक्रमको गति र उत्तरआधुनिकता । कति पृथक् छ यी दुवैमा । कति अस्मेल छ यी दुईमा । कति फरक छ यी दुइटै स्थितिमा । भाव र सिर्जनाको भिन्न चरित्रमा डोरिन खोजेको छु ।

टाउकामै कृष्णविक्रमको गीतका फाँकी टिपेँ । कारण छ त्यसको । एकातिर गीतको मूल्य, महत्ता र मिठास आफैँमा पिलन्धरे छैन, सबल छ । फेरि इतिहास, लोकमान्यता र संस्कृतिको गह्रुँगो चित्र पनि गीतमै लिपिक्क टाँसिएर आएको छ । अनि पो उच्चता गीतको ।

अहिलेको मण्डला । माइतीघरको एउटा बेन्चमा चुरोटको फुइँकीमा भेटिए तिनी । र, कुरा भएथे त्यही गीतबारे ।

थोते थिए कृष्ण । कुराचैँ बुझिन्थे । पातला, लुरे, काला वर्णका कृष्ण; नाउँ अन्सारकै भने नि हुने ।

'साह्रै जतनले गाएको गीत अहिले घाटमा पुग्यो। मलाई त्यो गीत खोज्न र कथ्न ठूलै हम्मे भो। यतिखेर माटैमा मिल्यो भने नि हुने। के गर्नु, चोर बाटो हिँड्नेहरूकै हुल बढ्ता देख्छु। सोधपुछ पनि छैन, खैखबरी नि छैन । गढी पनि सिद्धियो, गीतको गन्ध पनि दुर्गन्धित भयो ।'

उत्तर आधुनिकतामा चाख राख्ने साथी थियो छेउमै, उसका परेला झिम्झिमाए ।

'मलाई गाउँमा गएपिच्छे टिप्पा कस्छन् । मेरो पुरानो गीतलाई नयाँ तन्नेरीले बर्बादै पारेछन्। आफ्नी स्वास्नीलाई अर्काले अँगाल्दा नि फुरुङ्ग पर्नेलाई यो गाउँको दलान छैन भन्छन्। मेरै गीतले मलाई ताली दियो, मेरै गीतले गाली दियो मैलाई !'

कृष्णविक्रमले भनेका थिए।

उत्तरआधुनिकताको उर्लंदो बाढीमा परेको छ, यतिखेरको हाम्रो साहित्य। समयको माग वा आवश्यकता कति छ? रूपान्तरणको वेग कतिसम्म स्वीकार्य हुन्छ? प्रश्नका चक्रमा घुम्दै छु म।

नेपाली साहित्यमा नयाँपन र सर्वश्रेष्ठताले गुलेली ताकेको समय नै पो कति भो र? युगका उही घाम र जून छन्। अब बेग्लै छायाँ र प्रतिचित्र बनिहाल्ने तर्कले कत्तिको जरा गाडिहाल्न सक्छन्?

विनिर्माणका चालमा चलेर पुराना सभ्यताका इन्द्रेनी भत्काउनु उत्तिको महिमाशाली मानिनँ मैले । प्राचीनताको अर्थ र महत्त्व त्यत्तिकै ख्यालख्यालको कुरो होइन। मौसम नबुझेर छाता बोक्दाको खिसीट्युरी हो त्यो ज्ञान र दाबा । अर्थात् भत्काएर नयाँ मात्रै बनाउँछु भन्ने फतौरे कुरो ।

रचनाको प्राण एउटै हुन्छ। त्यसले धारण गरेको रूपाकृति हो भिन्न र मौलिक। आधुनिकताको माखेसाङ्लोमा अब जम्मै आकृतिलाई घालघुल पार्छु भन्नेहरूको हबिगत हो– कृष्णविक्रमको गाली। अर्थात् गाउँलेको गुनासो कृष्णलाई जस्तै ।

हो, एउटा तर्कले आफूलाई उभ्याउने चेष्टा गर्छ ।

'नसुनिरहेको, नपढिरहेको र नहेरिरहेको अवस्थालाई हामी सिँगारेर सामयिक बनाउँछौं नि त !'

अरु बिस्तारमा बुझौँ ।

'नसुनिएको गीतलाई नयाँ बाजा र तालमेलमा गाउँछौँ हामी ! नपढिएको कृतिलाई नवीन परिवेश र वातावरणमा उताछौँ हामी ! ! नहेरिएको चित्रकलालाई नौलो रङ र क्यान्भासमा सजाउँछौँ हामी ! ! !

जानेसम्मको गूढ यत्ति हो उत्तरआधुनिकताको। मेरो मनोज्ञानले थाहा पाएको तथ्यमात्र यही नै हो ।

नौलो र रूपान्तरणका पूजकहरूले सुन्नुपर्छ– कृष्णविक्रम थापाले गाउँको दलानमा स्वागत नपाएको कुरा ।

'यता बहिस्कार वा तिरस्कार । नयाँपनसँगै अघिल्लो युगको बढारकुँढार गरी सिउँडी उमार्ने होहल्ला । उत्तरआधुनिकताको रडाको यै त हो नि !'

कृष्णविक्रमले निधार खुम्च्याउँदा मैले आगो ओकलेँ ।

शास्त्रीयता कदापि खराब होइन, कमसल होइन र छेउकुना लाउनुपर्ने नि होइन । हिजोको रचना वा शिल्प अपाच्य ठान्नु सौन्दर्यको विरोधी र अधम हो, कृष्णका दुखेसो बोल्दछन् ।

पुनर्निर्माण र विनिर्माणका स्याहास्रेस्तालाई अन्तिम मान्ने कुनै दर्शन ब्युँतिसकेको छैन र ब्युँतिहाल्ला र लगत्तै ? यो पनि त एउटा छड्के हो नि ! आफैमा विध्वंसजस्तो यो खोजाइ ।

अघिल्लो साहित्यको पाठक र स्नेहालुवर्ग अल्प छँदै छैन। त्यो सम्प्रदाय अद्यापि शास्त्रीय रचनाको सुवासमा रमाउँछ, रमाइरहन्छ । मोहक साहित्य जति पहिला आयो, आज त मूलबाटो बिराउने दुनियाँको छोटो संसारमात्र आउँछ भन्छन् पाठकवर्ग ।

यो मिथ्या आरोप होइन, हुँदै होइन ।

समयले शिल्प माग्छ, विषय दिन्छ । रचना गर्ने हात र आँतको जाँगर आफैँमा समुन्नत हो । नमान्नु वा किनार लगाउनु फेरि समयप्रतिको अनास्था र अनादर हो । एउटा क्रमलाई भङ्ग गरेको भ्रमपूर्ण विचार मान्छु म त्यसलाई । अवज्ञा बेग्लै कुरा हो । तर निधो नै गरी भन्नु कीर्तिमानी हुँदै होइन ।

मोनालिसाको मर्म प्रेम, हार्दिकता र सुवासित संसार हो । करुणा स्थितिमा निर्भर छ ।

खिचडी पो हो कि उत्तरआधुनिकता ?

कृष्णविक्रम थापाका मगजमा यो प्रश्न नघुमेको होइन । किनभने छुँदाखाँदा आफ्नै बलैंसी र आँगनको सुसेलीमा हजार खाले बेतुकका डकार आउनु कसरी न्यायोचित ?

आफ्नै लय र शब्दमा बाँचेको स्वतन्त्र गीत अष्टावक्रको दुर्नियति भोग्छ । स्व-परिचयमा यात्रारत रचनाले पराश्रित जीवनको स्वरूप देखाउँछ । यी जम्मै तर्कमा उत्तरआधुनिकतालाई प्रश्न गर्ने प्रज्ञामूर्ति छन् सर्वत्र ।

प्रयोगलाई आदर्श र आधार मानेको हो कि उत्तरआधुनिकताले ? यसैले नवीनताको आवाजमा सधैँ सहमति जनाएको लाग्ने गर्छ आधुनिकले । आदर्शविनाको जीवनले बाटो पहिल्याउने कुरै भएन ? साहित्य जीवननिरपेक्ष हुने कसरी ?

यहींनिर जवाफ छैन उत्तर आधुनिकतासँग !

मानिस भन्नु समाज हो। बेग्लै कसरी हुने मानिस र समाज ? समाजकै पाइलामा डोरिएर लेखिएको साहित्य, चित्र वा सङ्गीत नै मनमुखी सिर्जना हो। जनजनलाई विस्मृतिमा राखेर रचिएको साहित्यको सुगन्ध कसरी मधुमय हुन्छ ? प्रयोग नै मेरुदण्ड मानिएको उत्तर आधुनिक ता सामु यस्ता काँडे जिज्ञासा उम्रिरहन्छन् नित्य समय ।

कृष्णविक्रम थापा, निष्कपट साधक !

दुनियाँका अनेक रङ्ग, रोगन र पौढँजोरीसँग तिनको कुनै गुनासो छैन, आसक्ति छैन र सम्मोहन पनि छैन। नित्यकर्ममा एकल सहभागिता छ र आफ्नो प्राप्ति आफैँले पर्गेल्ने मनमुटु छ र छ पारख गर्ने क्षमता ।

तर जब गलामा माला आउने समय भएथ्यो, अपमानका माला तेर्सिए थापा समीप । आधुनिकताले त्यो पहाडी आवाजलाई प्रश्नका प्रहारले रगतपिच्छे पाऱ्यो, पाऱ्यो ।

आधुनिकताको एउटा त्रिभूज चित्रमा कुन कोणले बढी स्थान प्राप्त गर्छ होला ? सोधाइ र दूरन्य उत्तरमा बाँचेको हुन्छ, उत्तरआधुनिकता ।

विनिर्माणको पहिरो अनवरत छ । त्यो अनवरतमा हाम्रा थुप्रै पुराना सत्यहरूको सहीछाप भेटिन्छ । नेपाली लोक्ता र भोजपत्रमा लेखिएका अन्य इतिहासलाई रूपान्तरणको प्रक्रियामा लान असहज नहोला । यो सत्य पनि यस ठाउँमा उभिएर भन्दै छ– 'परम्पराको अर्को नाम अन्धविश्वास मात्र होइन है !'

कृष्णविक्रमले गीत गाउनु स्वयम्मा स्वत:स्फूर्त कर्म र जिम्मेवारी हो । यसमा कुनै आग्रह छैन, लालच छैन र दम्भको दुन्दुभि पनि छैन । हो, पछिकाले त्यो जिम्मेवारीमा नानाभाँतिका खोँचे र खित्का छोड्नु अनुचित र दुखद हो ।

प्रकृतिलाई पढेर प्रकृतिकै भाषा टिपे कृष्णले । कृष्णको भाकामा कुनै बनावटी वा पालिसको लेपन छैन । अब त्यो मौलिक भावमा प्रभाव खोज्नु, प्रयोग खोज्नु वा प्रत्यारोपण गर्न खोज्नु प्रकृतिमाथिको बलात् सोच होइन– कसरी नभन्नू ?

विवाद भन्दिनँ, बहस बनोस् उत्तरआधुनिकता र शास्त्रीय सिर्जनाबारे ।

राजनीति, समाज र बजार अर्थतन्त्रबाट अलग्गै बसेको रचनाकारिता आजको सत्ताले चेपुवामा पर्दै गएर बोल्न खोज्ने निरीह ज्यान मात्रै होइन । ऊ भित्रको कोमलतम् सीपले गीत कथ्छ, सङ्गीत रच्छ र कविताका बेर्ना रोप्छ । कुनै जटिल वा विवादित स्वर अलापेर प्रतिक्रिया थप्ने झोली पनि त्यो ग्राम्य र सुबोध समाज होइन । सम्मिश्रण अर्थात् 'फ्युजन' संस्कृति हो उत्तरआधुनिकता ?

उत्तरआधुनिकताले यी सुधा र सरल रचनाकारका भावनामा किन अनावश्यक हस्तक्षेप गर्छ ? किन अनाहक प्रश्न तेर्स्याउँछ ? किन गर्छ अनपेक्षित शङ्का र बिखालु टिप्पणी ?

कृष्णको मन भाँच्चियो !

गीत गाएरै तिनले पिँढीको प्रेम पाएथे । राग अलापेरै तिनले दलानमा गुन्द्री ओच्छ्याउन पाउने अधिकार प्राप्त गरेथे । कृष्णविक्रम थापा नाउँको पहाडी अनुहार पराश्रित थिएन, भएन र रहेन पनि ।

हुत्तिँदै कुदिरहेको समाजले तिनको अन्तर्मनलाई गिजोलेपछि झस्के कृष्ण । अनन्त झस्काइले तिनी आत्तिए, दुखे र उदास बने । नयाँ

समाजको रूपान्तरणबाट नङ्ग्रा र दाह्रा उम्रेपछि सरसता देखियो पूर्णत: विपक्षमा ।

पक्ष रित्तियो विपक्ष भरियो !

समकालिक साहित्यमा एक दर्शन मौलाउँदै छ– हिजोलाई 'वाद' गरौँ । तर त्यो वहिस्कारले पार्ने प्रदूषणबाट रोग निम्तिएको, दुखाइ भित्रिएको र अन्यौल थुप्रिएको पक्ष सामान्य छैन । असामान्य स्थितिबाट भित्रिरहने प्रदूषित वातावरणको कारक तत्त्व उत्तरआधुनिकतालाई मान्ने समाज पनि नभएको होइन ।

कृष्णले भनेको सम्झन्छु– 'हालीमुहाली गर्नेकै पछि कुद्ने त हाम्रो समाज ?'

साहित्य, गीत वा चित्रलाई नेपाली रचनात्मक समाजले सदैव आदर गऱ्यो, मान्यो र छातीमै टाँस्यो । त्यो मान, आदर र टाँसको मूल्य कम आँक्नु सबैका निम्ति घातक र प्रहारक हो । जान्नु आवश्यक छ, गइरहेको बाटो कहाँ गएर टुङ्गिन्छ ?

परिवर्तन वा नवनिर्माणको दार्शनिक पक्षले जित्न सक्तैन, शास्त्रीय सभ्यतालाई। सभ्यतालाई नौला आँखा, हेराइ वा दृष्टिले मात्र पराजित तुल्याउँछु भन्नु भ्रमको पगरी गुथ्नु हो। पगरी गुथ्नेहरू कति घटेका छन्, कति बढेका छन् ? निर्क्यौल भइसकेको छैन अद्यापि ।

उत्तरआधुनिकताको पहिरोमा नबगून् कृष्णविक्रमहरू !

# अज्ञात कवि लोकराम

*– रमा शर्मा*

"यो देशका लागि तपस्या धेरै जरुरी छ । खान पाइएन भने बरु मर्न तयार हुनुपर्छ; २/४ पैसाको लोभले आफू बिग्रने काम कदापि गर्नुहुँदैन"– यो भनाइ हो शिक्षासेवी श्री लोकराम पाँडे (१९८०-२०५८) । राजधानीबासीका निमित 'लोकराम पाँडे' त्यति परिचित नाम होइन होला, तर जनकपुर जाने हो भने पढेलेखेका कुनै पनि व्यक्ति सो नामसँग अपरिचित नहोला। राणाकालमा संस्कृतबाहेक आधुनिक शिक्षाको भरपर्दो कुनै विद्यालय नै नभएको जनकपुरमा आधारशिक्षाको तालिम प्राप्त शिक्षक नियुक्त भई २००४ सालदेखि शिक्षण कार्य आरम्भ गर्नुहुने लोकराम पाँडेले उमेरको हदका कारण सेवाकार्यबाट निवृत्त नहोउन्जेल २०३६ सालसम्म लगभग ३६ वर्ष विद्यार्थीलाई लाभान्वित गराइरहनुभयो । यस अवधिमा उहाँले बालबालिकाका लागि, प्रौढका लागि बेग्लाबेग्लै विद्यालयको स्थापना पनि गर्नुभयो। सबैभन्दा महत्त्वपूर्ण कुरा जनकपुरको शैक्षिक विकासमा उहाँले गर्नुभएको अर्को कार्य हो शैक्षिक जागरण ल्याउनु । काठमाडौंनिवासी उहाँ शिक्षकका रूपमा यस्तो ठाउँमा खटिनुभयो जहाँ आफ्ना छोराछोरी (छोरीलाई पढाउने भन्ने त कल्पनै नभएको)लाई पढाउनुपर्छ भन्ने चेतन नै थिएन । त्यसैले विद्यालयमा पढाउनका लागि उहाँले घरघरै विद्यार्थीहरूको 'शिक्षा' माग्दै हिँड्नुभयो र आकर्षक ढङ्गले पढाई शिक्षाप्रति विद्यार्थीको अभिरुचि जगाउनुभयो। यसरी सर्वसाधारणलाई शैक्षिक क्षेत्रप्रति चेतनशील तुल्याउने महत्त्वपूर्ण कार्य गरी समर्पित भावले शिक्षाक्षेत्रमा दशकौं संलग्न रहनुभएका कारण नै उहाँ 'जनकपुरका गुरु' (माधव पोखरेल– समाचारपत्र, २०५७-७-२०) बन्न पुग्नुभयो ।

यसबाहेक उहाँले त्यस क्षेत्रमा नेपाली साहित्यको प्रवर्द्धनमा पनि ठूलो योगदान दिनुभयो । भानुजयन्ती, मोतीजयन्ती, देवकोटा जयन्ती मनाउने परम्परा सुरु गरी स्थानीय व्यक्तिहरूलाई साहित्यिक गतिविधिमा संलग्न गराउने कार्यमा पनि उहाँले अग्रणी भूमिका निर्वाह गर्नुभयो । त्यस्तै तिहारमा द्यौसी-भैलो खेल्ने, फागुलाई पर्वको रूपमा

मनाउने अभियान पनि उहाँले चलाउनुभयो। यसरी शैक्षिक, साहित्यिक, सांस्कृतिक गतिविधि (जुन अति सङ्क्षिप्तमा यहाँ उल्लेख गरिएको छ) लाई अगाडि बढाउन उहाँ जुन किसिमले सक्रिय रहनुभयो त्यसको प्रशंसामा रमेशचन्द्र आर्य, माधव पोखरेल, सत्येन्द्रप्यारा श्रेष्ठ, लीलासिंह कर्माहरूले लेखेका माध्यमबाट थुप्रै शब्द प्रयोग गरेको स्मरणीय छ ।

माथि जेजति उल्लेख गरियो त्यो जनकपुरबासीले प्रत्यक्ष अनुभव गरेको कुरा हो । अहिले म उहाँको त्यो पक्ष कोट्टयाउन लागेको छु जुन पक्षसँग हामी पूर्णतः अपरिचित छौँ, जनकपुरलाई नै कर्मथलो तुल्याउनुहुने लोकराम पाँडेलाई राम्ररी चिन्ने त्यहाँका स्थानीय व्यक्तिलाई पनि थाहा छैन । त्यो हो उहाँको सिर्जनशील पक्ष । उहाँ कवि पनि हुनुहुन्थ्यो तर उहाँले आफ्नो सिर्जनालाई प्रकाशमा ल्याउने कार्य कहिल्यै गर्नुभएन । जनकपुरमा स्थायी बसोबासको व्यवस्था गर्न नसकेका बखत डेरा सरिरहनुपर्दा आफ्ना बयासी रचना हराएको जानकारी उहाँबाट पाएको चर्चा लीलासिंह कर्माबाट भएको छ । (मास्टर लोकराम पाँडे- कान्तिपुर, २०५३/७/२४/७) ती झन्डै सात दर्जन रचना नहराएका भए उहाँ निश्चय नै एउटा पुस्तकाकार कृतिका स्रस्टाका रूपमा नेपाली साहित्याकाशमा देखिनुहुन्थ्यो । अब त्यो सौभाग्य हामीलाई छैन । माधव पोखरलले 'पत्रपत्रिकामा लेखरचनाहरू फाट्टफुट्ट प्रकाशित भैरहेकोमा ...(मिथिलाका साहित्यिक गुरु– समाचारपत्र, २०५७/७/२०) उल्लेख गरेबाट केही रचनाहरू छापिएको बुझिन्छ । ती स्थानीय पत्रिकामा छापिए होलान् भनूँ। तर त्यसबारे आफू अनभिज्ञ रहेको मैले स्वीकार्नै पर्छ । कसैको दृष्टिमा सो परेको भए अथवा माधव पोखरेलबाट त्यसको जानकारी सार्वजनिक भएमा थप उपलब्धि हुने थियो भन्ने लाग्छ । त्यसका निमित्त आह्वान गर्नु म आफ्नो कर्तव्य ठान्दछु । प्रकाशित रचनाका बारेमा आधिकारिक रूपमा केही थाहा नपाउन्जेल अप्रकाशित रचनाका स्रस्टा नै भन्नुपर्ने हुन आउँछ लोकराम पाँडेलाई । यहाँनिर पनि भिन्न रूपमा प्रस्तुत गर्नुपर्ने हुन आएको छ उहाँलाई। पाठकहरू सोच्नुहोला, उहाँका हराएका भनिएका रचनाहरू फेला परेछन् कि भनेर। त्यसो होइन। के चाहिँ हो भने

उहाँले जिज्ञासा राख्नेलाई टिपाउनुभएका कविताहरू नै अहिले उहाँलाई कविका रूपमा वा स्रष्टाका रूपमा स्थापित गर्ने सामग्री बन्न पुगेका छन् । यसरी कविता टिप्ने सुअवसर मैले पनि पाएकी हुँ ।

सो कसरी भन्ने प्रश्न उठ्ला । त्यसैले अब अलिकति स्रष्टा पाँडेज्यूको पारिवारिक पृष्ठभूमिको चर्चा गरौं । लोकराम पाँडे मेरा पूज्य बुबा गोपाल पाँडे असीमका सहोदर भाइ हुनुभएकाले उहाँ मेरा काका (जसलाई हामी कान्छाबा भन्ने गर्थ्यौं) हुनुहुन्छ । उहाँ जनकपुरमा र म काठमाडौंमा बस्ने हुँदा उहाँसँग चाहेको बेला भेट हुने कुरा भएन । त्यसैले एकपटक उहाँ काठमाडौं आउनुभएको बखत (२०५०) र अर्को म जनकपुर (विवाहपञ्चमीमा) गएका बखत (सं. २०४७) उहाँसँग भेट हुँदा र मैले उहाँको सिर्जनाबारे जिज्ञासा राख्दा उहाँले आफूभित्रै सुरक्षित रहेका आफ्ना कविताहरू सन्दर्भसहित सुनाउन थाल्नुभएको र मैले लेख्दै गएकी हुँदा ती मसँग सुरक्षित हुन पुगे । दुई पङ्क्तिको भिन्न कविताचाहिँ क्रमशः माधव पोखरेल र लीलासिंह कर्माको लेखमा भेटिन्छ । तिनै कविताहरूमध्ये केहीको यहाँ उल्लेखका साथ राष्ट्र र राष्ट्रियताप्रति हुरुक्क भई आफ्ना विभिन्न क्रियाकलाप सञ्चालन गर्न मरिमेट्ने लोकराम पाँडेलाई वाणीसाधक कविका रूपमा प्रस्तुत गर्नु उचित ठानेकी छु ।

आठ कक्षामा (दरबार हाईस्कूलमा) पढ्दाको उमेरमा १९९७ सालमा लेखिएको पहिलो कविता चार पङ्क्तिको छ र अनुष्टुप् छन्दमा छ । त्यो हो–

*विद्याभ्यास गरी चाँडो मातृभाषा जगाउन*
*कहिले पाउँला माता हुँदैन यो गलाउन ।*

*लोकराम भनी जान मेरो नाम सँधैभर*
*शारदेलाइ ढोगे झैं प्रणाम म उपर गर ।*

माथिल्लोमा मातृभाषा प्रेम देखिन्छ भने तल्लोमा चाहिँ रसिकता । सम्भवतः दोस्रो चाहिँ साथीसङ्गतीलाई लक्ष्य गरी लेखिएको हुनुपर्दछ ।

छन्दज्ञान पटक्कै नभए पनि पाठ्यपुस्तकमा पढिएका कविताको प्रभावमा विद्यालयमै बसेका बखत उहाँले 'दरबार स्कूल' शीर्षकमा यो कविता लेख्नुभयो, लगभग अठाह्र वर्षको उमेरमा–

*दर्बार स्कूल तिमी पिता हौ*
*सद्बुद्धि सद्ज्ञान दिने गीता हौ*
*तिम्रा ति शिष्यहरू ज्ञानी देख्छु*
*तिम्रै सहाय लिइ लेख लेख्छु ॥१ ॥*

*नेपाल सुन्दर पहाड तडाग बीच*
*कान्तिपुरी नगरी यो छ बडो मजाको*
*विद्या छ खानी जसमा कमलो सुवास*
*भृङ्गै बनी सकल तत्व लिउन् खुला छ ॥२ ॥*

*चारै दिशातिर छ उज्ज्वल भानु-कान्ति*
*हावा छ मन्द र सुगन्ध दिने सुशान्ति*
*हाँगा र पातहरूको प्रतिबिम्ब पर्दा*
*रानी तलाऊ पनि शोभित भैरहेछ ॥३ ॥*

'शारदास्तुति' शीर्षकको अर्को कविता यसप्रकार छ–

*हे शारदे ! मकन पीर परेर आज*
*आएँ मुहार फुक्दैकन त्यागी लाज*
*मानिस हुँ त अब लेख्न र पढ्नमा त*
*बाधा नहोस कहिल्यै यिनमा ममा त ॥१ ॥*

*जे लेख्छु जेजति म लेख्तछु गद्यपद्य*
*मानेर भाव पनि हुन्न कदापि सद्दे*
*यात्रा र छन्द पनि हुन्छ सदा विभिन्न*
*यो देखि कट्टर मुटु पनि हुन्छ खिन्न ॥२ ॥*

*आमा तिमीले त नहेरदामा*
*छोरो भएँ मूर्ख बडो बिकम्मा*

*मूर्खैंहरू लीकन दङ्ग पर्दछ्यौ*
*भने गरौं के तिमी जे त गर्दछ्यौ ॥३॥*

राष्ट्रोत्थानका निमित्त स्वदेशी उद्योग बढाउनुपर्दछ र स्वदेशी लुगा लाउनुपर्दछ; यसका लागि कच्चापदार्थ पनि आफै निर्माण गर्नुपर्दछ भन्ने भावनाबाट प्रेरित उहाँले अरूमा पनि यो जागरण ल्याउन यो उद्गार व्यक्त गर्नुभयो–

*भाइ बैनी कान खोली सुन मेरो बिन्ती यो,*
*जाँगर कत्ति नहुँदामा देश हाम्रो बिग्रियो,*
*अघि चल्थ्यो घरघरैमा तान चर्खा कतुवा,*
*वस्त्र लाएथ्यौं स्वदेशी धनी थियो देश यो,*
*बीचमा अल्छी हुँदा आधा लियौं विदेशको,*
*धन विदेशमा बहायौं दुर्दशा यो भैदियो,*
*हात खुट्टा छन् अझै नै लाज राखौं देशको,*
*आओ भाइ बैनी आओ नाम राखौं देशको ।*

मानिसहरूमा प्रायः भनाइ एउटा र गराइ अर्को पाइन्छ । तर उहाँले २००६ सालमा रचना गर्नुभएको गजल शैलीको यस कवितामा व्यक्त भावअनुसार आजीवन नेपाली कपडा नै लगाइरहनुभयो ।

भाषाप्रेमसम्बन्धी दस पङ्क्तिको उहाँको कविता लीलासिंह कर्माले आफ्नो लेखमार्फत सार्वजनिक गरेका छन् । 'विद्यार्थीको गुनासो' शीर्षकको त्यो कविता यस्तो छ–

*प्रकृतिले हामीलाई हात गोडा दिए,*
*काम गर्छौं हामी सबै काम सिकाइदिए*
*प्रकृतिमा हामीलाई खेल्न मन लाग्छ*
*प्रकृतिमा खेल्न पाए सुप्त ज्ञान जाग्छ*
*कतुवा र चर्खा देऊ हामी धागो कात्छौं*
*कपडाको रासमाथि हाँसी हाँसी नाच्छौं*
*हामीलाई चाहिँदैन विदेशीको भाषा*
*हामीलाई पढ्न देऊ हाम्रै राष्ट्र भाषा*
*पैले पढाऊ मातृभाषा अनि राष्ट्रभाषा*
*दुवै भाषा जानेपछि पर-राष्ट्र भाषा ।*

यी र अन्य केही कविता (जसबारे पछि चर्चा गरिनेछ) सुरक्षित रहन पुगेबाट शिक्षासेवी तथा जनकपुरमा साहित्यिक जागरणका अगुवा लोकराम पाँडेलाई 'कवि' का रूपमा पनि देख्न पाइएको छ। यसबाट नेपाली कविसमूहमा एक सङ्ख्या थपिन पुगेको छ । अन्त्यमा, 'कोइली' शीर्षक कविताको अन्तिम श्लोकका साथ आफ्नो लेखनीलाई विश्राम दिन्छु–

*त्यै कोइली नृप थियो वनका वसन्ते*
*भन्दै स्वप्राण सरि ठान्थ्यो भयो मगन्ते*
*यस्तै छ भाइ जगको सब ढाल चाल*
*यो नेत्र बन्द गरिहेर बुझेर हाल ।*

✍

# नेपाली भाषाबारे

– *रमेश खकुरेल*

प्राणी जगत्मा मनको भाव सम्प्रेषण अरूमा गर्ने इच्छा सबैमा हुन्छ। यसका लागि सबभन्दा उचित माध्यम ध्वनि नै बढी प्रचलनमा छ । अरू प्राणीले विभिन्न किसिमले विभिन्न भाव व्यक्त गरेको त देखिएकै छ । किन्तु उनीहरूमा शब्द वा व्याकरण भए-नभएको भने भन्न सकिन्न। सबभन्दा विकसित मानिसले ध्वनिका विभिन्न समायोजन गरेर शब्द र वाक्यको विकास गरी भाषा बनाएको छ। यो ज्यादै राम्रो कुरो हो तर संसारभरिका सबै मानिसको भाषा पनि एउटै भएको भए कति राम्रो हुन्थ्यो होला। परन्तु यो कुरा हुन सकेन। भाषाको कुरै छोडौँ; सङ्केतमा समेत विभिन्न स्थानमा भिन्नता भएको देखिन्छ। उत्तर भारतमा हो भन्न वा सकारात्मक सहमति जनाउन टाउको तलमाथि हल्लाइन्छ र होइन भन्न दायाँ-बायाँ हल्लाइन्छ । तर त्यहीँ दक्षिण भारतमा यसको बिलकुल उल्टो हो भन्न दाहिने बायाँ र होइन भन्न अगाडि पछाडि हल्लाइन्छ। यस्तै संसारभरि विभिन्न ठाउँमा विभिन्न भाषाहरू जन्मिई विकसित भएका छन् र सबै भाषाभाषी आ-आफ्ना भाषामा उत्तिकै गर्व गर्दछन् र उत्तिकै माया गर्दछन् भने कतिपय भाषाका भाषीहरू ज्यादै सानो सङ्ख्यामा छन्। कतिपय भाषाहरू कुनै देशविशेषकै अझ धेरै देशका राष्ट्रभाषा हुने सौभाग्य पाएका छन् र धेरै भाषाहरूमा ज्ञान-विज्ञानका विशाल भण्डारहरू र पुस्तकहरू प्रकाशित पनि भएका छन् भने कतिपय भाषाका आफ्नो लिपिसमेत बन्न सकेको छैन ।

यसै परिप्रेक्ष्यमा लागेकाले यो लेख्ने जमर्को गर्न लागिएको हो । मूलभाषा संस्कृतबाट प्राकृत आदि भाषाहरूको रूपमा बदलिँदै करिब पन्ध्र सय वर्षको समयको अन्तरालमा आजको रूपमा नेपाली भाषा आइपुगेको छ । विभिन्न भाषा बोल्ने विभिन्न जातजातिहरू भएको यस नेपालमा यही भाषा सबैका बीचको सामान्य बोलीचालीको भाषा भएको छ। जे लेखियो, त्यही बोलिने र घाँटीबाट निस्कने सबै ध्वनिहरू लेख्न सकिने देवनागरी लिपिमा लेखिने यो भाषा शब्दभण्डारमा पनि संसारका कुनै पनि भाषाभन्दा कम छैन। अङ्को

पङ्कोमा देशका र छिमेकी देशका अरू भाषाहरूका आगन्तुक शब्दहरूसमेत प्रयोग गरिने यस भाषाले माउभाषा संस्कृतका सबै शब्दहरूलाई विना हिचकिचाहट प्रयोग गर्न पाउनेसमेत हुनाले शब्दभण्डारमा धनी हुन विशेष अवसर पाएको छ। यी सबै कारणले नेपाल राज्यको त यो राष्ट्रभाषा भएको छ नै, नेपालबाहिर अरू मुलुकहरूमा पनि नेपाली मूलका व्यक्तिहरूको यो सम्पर्कभाषा हुन पाएको छ। भारतले पनि संविधानको अनुसूचिमा पञ्जीकृत गरेर यस भाषाको गरिमाप्रति आदर अभिव्यक्त गरेको छ। नेपालभित्र अनेक जात तथा जातिमा विभाजित भएर जति विखण्डित भए तापनि नेपाल बाहिर हुनासाथ सबै नेपाली एक जाति हुन्छन्; केवल नेपाली। अहा ! यही भावना नेपालभित्र पनि राख्न सकेका भए हामी कति दरिलो राष्ट्र हुन सक्थ्यौँ होला।

हो, देशभित्र अरू पनि धेरै राष्ट्रिय भाषाहरू छन् र ती सबैलाई हामी सबैले उचित आदर र संरक्षण गर्नुपर्छ। कुनै भाषा लोप भएर जान दिनुहुँदैन तर यसो भन्दैमा हामीले सबै भाषालाई राष्ट्रभाषाकै स्तरमा विकास गर्नु, तिनमा उच्च शिक्षासम्मका पाठयपुस्तक तयार पार्नु र सरकारी कामकाजको भाषामा समेत प्रयोग गर्नु अव्यावहारिक मात्रै होइन, असम्भव नै हुन्छ। एक त देश आफै सानो छ, आर्थिक तथा शैक्षिक सम्पन्नता सीमित छ र राष्ट्रिय भाषाहरू धेरै छन्। त्यसैकारण सबै नेपाली मिलेर एक भई सहमतिमा आएर नेपाली भाषालाई नै बढी विकसित गराउनु आवश्यक छ। संसारका अरू देशहरूले पनि यस्तै नीति लिएर विकास गरेका हामी देख्दछौँ। कुनै-कुनै देशले दुई वा तीन भाषासम्म पनि सरकारी कामकाजको भाषा बनाएको पनि देखिन्छ तर ती देशहरू एक त आकारमा ठूला, आर्थिक दृष्टिले अति सक्षम र यस्ता भाषाभाषीको सङ्ख्या पनि धेरै भएको देखिन्छ। यस्तो भएर पनि ती देशहरूले समेत कुनै एउटा भाषालाई विशेषरूपले बढी आड लिएको देखिन्छ। कसैले राजनीतिक स्वार्थका लागि कुनै अरू राष्ट्रिय भाषाविशेषको ओड लिएर नेपाली भाषाको विरोध गरेको पनि देखिन्छ तर उनीहरू आफैलाई पनि यसो गर्नु अनुचित हो भन्ने अन्तर्मनमा ज्ञान छ।

यति हुँदाहुँदै पनि नेपाली भाषामा विश्वका समग्र ज्ञान र प्रविधिका पुस्तकहरू बनिसकेका छैनन् । यस्ता कुरा जान्न हामीले अन्तर्राष्ट्रिय भाषामध्ये कुनै (विशेषत: अङ्ग्रेजी) सिक्नै पर्ने बाध्यता छ । यस्ता कमी हटाउन हाम्रा विशेषज्ञहरू र राष्ट्रले समेत खास प्रयास गरेको पाइँदैन । व्यक्तिगतरूपमा यस्ता किताब लेखन प्रकाशन गर्दा पाठक वा विद्यार्थी सङ्ख्या पुग्दो नभएको र धेरै विद्यार्थीको आर्थिक हैसियत पनि पुस्तक किनेर पढ्न सक्ने नभएकाले लेखक-प्रकाशक दुरुत्साहित भएका छन् । दोस्रो कुरा, आफ्नै भाषामा प्राविधिक शब्दको कमी हुनु पनि ठूलो अभाव हो । यसका लागि विश्वविद्यालयहरू, प्रज्ञा-प्रतिष्ठानहरू र सरकारले मिलेर विज्ञ व्यक्तिहरूको समिति बनाएर प्राविधिक शब्दकोश बनाउन निकै ढिलो भइसकेको छ । रेडियो, टेलिभिजन र कोट आदि भनेजस्तै सबै विदेशी शब्दहरू आगन्तुकमा भित्र्याउँदा पनि भाषाको गरिमामा त्यति राम्रो देखिँदैन । नयाँ नेपाल बनाउँछु भन्नेहरूले यसतर्फ पनि सोच्नै पर्ने बेला भएको छ ।

नेपाल बाहिरको त कुरा छाडौँ, नेपालभित्र पनि स्थान विशेषको फरक हुँदा बोलिने नेपाली भाषामा केही फरक भएको देखिन्छ । यसैलाई आधार बनाएर लेख्नेहरूले पनि सोहीबमोजिम लेखेको पाइन्छ । जस्तो 'रहेछ' एउटा शब्दलाई 'रेछ' 'रैछ' 'रच' आदि र यस्ता अरू पनि धेरै उदाहरण दिन सकिन्छ । व्याकरणमा ती सबै प्रविष्टिलाई मान्ने वा कुनै यौटै मात्र मानक गर्ने भन्ने विषय पनि विचार गर्नुपर्ने र निरूपण गर्नु आवश्यक छ । नेपालबाहिर त अरु नेपाली भाषा र स्थानीय भाषाको खिचडी नै भएको भेटिन्छ । नेपालमा ढाड, पिठिउँ, कण्डो आदि बोलिने शब्द आसाममा स्थानीय भाषाको 'ककाल' पनि नेपाली भएर भित्रिएको छ । यस्ता धेरै कुराहरूबारे निरूपण गर्नुपर्नेछ ।

नेपाल र भारतमात्र नभएर विश्वका अरू धेरै मुलुकहरूमा पनि नेपालीको निकै ठूलो सङ्ख्या छरिएर बसेको छ । तिनीहरू पनि आफ्नो भाषालाई माया गरेर आ-आफ्ना क्षमताअनुसार नेपाली भाषाको भण्डारमा श्रीवृद्धि गर्दै छन् । कतिपय नयाँ पुस्ताले नेपाली लेख्न-बोल्न बिर्से पनि धेरैले घरमा नेपाली बोल्ने, नेपाली लेख्ने र

समूह, संस्था बनाएर सहकार्य गर्ने गरिरहेका छन् । कहीँ रेडियो टेलिभिजन आदिमा कार्यक्रम पनि भइरहेका छन् । यो धेरै खुसीको कुरो हो । उनीहरूले आफ्नो भाषालाई माया गरेको राम्रो हो । कुनै दिन नेपालीको सङ्ख्या बढ्दै गएर ती देशमा पनि नेपालीले संवैधानिक अनुसूचिमा स्थान पाओस् तर यसो भन्दैमा उनीहरूले अहिल्यै हतारिएर त्यहाँको राष्ट्रभाषाकै विरोध गर्ने आदि काम गर्नु भने राम्रो हुने छैन । कुनै पनि देशको अखण्डता र एकता त्यस देशको राष्ट्रभाषामा आधारित हुन्छ । आफ्नो मातृभाषाको साँच्चिकै माया गर्ने हो भने वर्तमानका ज्ञान, विज्ञानका र सूचनामूलक र चिन्तनमूलक ग्रन्थहरू आफ्ना भाषामा तयार गर्नुपर्छ जसले गर्दा यस भाषालाई सिक्न अरू भाषाभाषीलाई पनि लालायित गराओस् । विश्वका उत्कृष्ट वैज्ञानिक कुराहरू, अर्थनीति र औद्योगिक कुराहरू साथै विशिष्ट विद्वान्हरूद्वारा अनुसन्धान गरिएका शोधपत्रहरू नेपाली भाषामा अनुवाद मात्र गर्न सकिए पनि हाललाई ठूलो उपलब्धि हुनेछ । नेपालीहरूले नै पनि विदेशी भाषामा गरेका कतिपय शोधपत्रहरू छन्, तिनलाई नै नेपाली भाषामा पनि उल्था गरिदिए नेपालीको ठूलो उद्धार हुनेछ । मेरो भाषालाई अरूले वास्ता गरेन भनेर रुने काम होइन, भाषालाई सवल, समृद्ध र सरल बनाउनुपर्छ । अनि मात्र नेपाली भाषाको साँचो सेवा गरेको ठहरिनेछ ।

# आधा शताब्दीको *नेपाली* त्रैमासिक पत्रिकाको स्वर्णबिम्ब प्रकाशन

*– रमेश गोर्खाली*

मध्यकालिक नेपालका काजी वंशीधर (सोही नाउँ र पदका अन्य एक पुरुष पनि इतिहासमा हुनु) को सन्तति कहलिएका काठमाडौँको मेरो मावली प्रारम्भदेखि जिज्ञासु र ज्ञानपिपासु रहिआएको हो । राणा कालका प्रहरी अधिकृत मावलीका हजुरबुबा रामेश्वरलाल प्रधानले आफ्नो जीवनकालमा विराटनगरमा छायाँ लोकतान्त्रिक आन्दोलनमा पिताजी कृष्ण प्र. कोइरालाका रूपमा पूर्वाञ्चलमा सम्मानित समाजसेवीका गृहिणीहरू (राजनैतिक विभूति विश्वेश्वरप्रसाद कोइरालाका मुमाहरू)लाई अङ्ग्रेजी पढाएको भन्ने वृत्तान्त मैले सुन्न पाएको छु । वीरगन्जबाट काठमाडौँ आउँदा बाल्यकालमा बीसको दशकान्ततिर सानीमा डा. हीरामन प्रधान र संयुक्त राज्य अमेरिकाको क्यालिफोर्नियानिवासी कान्छो बाबु राजामामा नृपेशकुमार प्रधान (राजप्रसाद सेवाको एक समयका प्रमुख सचिव पशुपतिभक्त महर्जनका बहिनीजुवाइँ) का कोठाको टेबलमा विभिन्न पुस्तकका साथै *रचना, रूपरेखा, भानु, शारदा* र *नेपाली* आदि कैयन् पत्रपत्रिका मैले देख्ने गर्थें ।

पत्रपत्रिकाको नाउँ हेक्का भए पनि त्यसबखत तिनलाई पढ्ने र बुझ्ने उमेर भने मेरो भइसकेको थिएन । कन्यामन्दिर हाई-स्कूलको तात्कालिक म्याट्रिक कक्षाकी छात्रा सानीमाका सङ्गिनीहरूमा सामन्ती कुँवर, पद्मावतीसिंह, चैत्यदेवी सिंह, शान्ता, मीरा र वीणा वैद्य प्रवृति कतिपयको उहाँको कोठामा समय-समयमा आउजाउ भइरहन्थ्यो ।

मलाई ख्याल भएका त्यसबेलाको उक्त स्कूलका केही प्रसिद्ध गुरुहरू हुन्– शिक्षकशिरोमणिका रूपमा चर्चित हेडसर केदारनाथ न्यौपाने, कृष्णचन्द्रसिंह प्रधान, भीमदर्शन रोका र दुर्गालाल श्रेष्ठ ख्वाविलु आदि । पठनपाठनमा जेहेनदार र कक्षामा प्रथम रहने सानीमाले घरमा सबैलाई दिक्क गर्न थाल्यो भन्दै दुई-तीनपल्ट मलाई आफ्नो स्कूलतिर डोऱ्याउनुभएको हो । बाल्यावस्थामा प्रथम

साहित्यकारको रूपमा कालजयी महान् निबन्धकार र समालोचक कृष्णचन्द्रसिंह प्रधानलाई पहिलोपल्ट मैले त्यही विद्यालयमा देखेको हुँ । त्यसबखत म राष्ट्रकवि माधव घिमिरेको बालकविता सँगालो 'घामपानी' (संवत् २०१०) पढ्ने उमेरको भए पनि स्मृतिपरक तीक्ष्णताले झन्डै पाँच दशक पूर्वका गतिविधि मैले सम्झेको हुँ ।

सम्भवत: स्मरणसूचक यस्तै धेरथोर विशेषताले आख्यान पुरुष ध्रुवचन्द्र गौतम र वरिष्ठ कथाकार विनोद दीक्षित प्रवृत्तिले स्नेहवश मलाई 'मोबाइल इन्साइक्लोपिडिया' भन्ने गरेका हुन् । आधा शताब्दी भन्दा बढीको इच सन्धि नाघ्दा अहिले कतिपय सानातिना व्यक्तिले गर्दा आफ्नो स्मृतिकोष पूर्वसम्मको तुलनामा केही भुत्ते भएको मलाई महसुस हुन थालेको छ ।

संवत् २०३३-३४ तिर वीरगन्जस्थित ठाकुरराम बहुमुखी क्याम्पसमा आई.ए.को विद्यार्थी छदाँ कौडिन गोत्री प्रथम गुरु कविराज न्यौपाने (प्रसिद्ध कवि एवं प्राध्यापक दैवज्ञराज न्यौपानेका भतिजो) ले आधुनिक नेपाली साहित्यिक पत्रपत्रिकाको इतिहास पढाउँदा पुन: *नेपाली* पत्रिकाको बोधानुभूतिले हामी विद्यार्थी सुपरिचित र आप्लावित भएका थियौँ । श्रद्धेय न्यौपाने सरले *नेपाली* मौलिक कलेवर र लेख्य रहेको पत्रिका हो भनी सम्झाउनुभएको मलाई स्मरण हुन्छ ।

समयसमयमा सर्वश्री रोचक घिमिरे, ध्रुवचन्द्र गौतम, नगेन्द्रराज शर्मा र विश्वनाथ न्यौपानेजस्ता कतिपय सुधिजनबाट वीरगन्जमा प्रेषित वा प्राप्त पत्रपत्रिकामा *नेपाली* पनि कहिलेकाहीँ पर्ने गर्थ्यो । विनोदशिरोमणि वासुदेव लुइँटेल (संवत् १९७४-२०६३)ले आफ्नो जीवनकालभरि नबिर्सीकन र नटुटाईकन नियमित दिनुहुने प्रमुख पत्रिकामा *नेपाली* एक नम्बरमा रहने गर्थ्यो । यसबाहेक मदन पुरस्कार गुठीको व्यवस्थापन पक्षसित सम्बद्ध स्नेही अग्रज गजेन्द्रनाथ रेग्मीको सौजन्यबाट विभिन्न पुस्तक र *नेपाली* पत्रिका मैले सदैव पाइरहेँ ।

संवत् २०१६ को कात्तिक-पुसदेखि प्रकाशित *नेपाली* गद्यप्रधान त्रैमासिक पत्रिका हो । यसले शोधपरक गहन लेखोट, संस्मरण,

अनुवाद, जीवनी, भाषा र व्याकरणसम्बन्धी थुप्रै सर्वोपभोगी नियमित अङ्क प्रकाशित गरेको देखिन्छ । गद्य विधाको समुन्नयनका लागि *नेपाली*ले राष्ट्रिय बौद्धिक परिवेशमा अतुलनीय योगदान दिएको भेटिन्छ ।

हेटौँडाको मकवानपुर बहुमुखी क्याम्पसमा राजनीतिशास्त्र विषयको म लेक्चरर हुँदा संवत् २०५२-५३ तिर समालोचना विधाका अगुवा अग्रज अनिरुद्ध तिम्सिना (आफ्नो समयमा त्रि.वि.को नेपाली विषयको एम.ए.का बोर्ड प्रथम) को मौदगल्य गोत्री तिमिल्सिना (तिमिल्सना र तिमल्सेना पनि) को थर र वंशसम्बन्धी *नेपाली*मा छापिएको समाज शास्त्रीय यौटा रचना अत्यधिक चर्चित रहेको मलाई सम्झना हुन्छ ।

सोही शैक्षिक संस्थामा संलग्न कलैया नगरको व्यवस्थापन विषयका उपप्राध्यापक एवं साहित्यप्रेमी भाइ दामोदर तिमिल्सिना-लगायत थुप्रैले उक्त लेखलाई मन पराएका थिए । कालक्रममा बारा, पर्सा, मकवानपुर र चितवनसहित नारायणी अञ्चलभरि छरिएका कतिपय तिमिल्सिना थरधारी ब्राह्मण र क्षेत्रीहरूले सो अङ्क साझा प्रकाशनमा खोजीखोजी किनेको र पढेको कुरा मैले सुन्न पाएँ । हास्यव्यङ्ग्यप्रेमी साहित्यकार 'विनोद' तिमिल्सिनाले आफ्ना भाइबन्धु भएको ठाउँठाउँमा उक्त अङ्कको प्रचार गरेको मैले भेटेँ र देखेँ । मैले स्वयं तिमिल्सिनालाई गौरवान्वित तुल्याउने राष्ट्रभाषासेवी लोकप्रिय कवयित्री गोमा, उनकी विदुषी सुपुत्री प्राध्यापक डा. गार्गी शर्मा, समालोचक डिल्लीराम तिमिल्सिना, लेखक सुकुम शर्मा, राजनीतिज्ञ बलराम उपाध्याय र एक समयका नेपाली प्रधान न्यायाधीश सम्माननीय केशवप्रसाद उपाध्यायजस्ता केहीको अनुहार सम्झिन पुगेँ। एक समयमा पश्चिम नेपालको 'तिमिलासैन भगवतीका उपासक' थरवाहकलाई कतिपयले 'तीमल बोक्ने सेना' र केही विदेशीले तिम्सिनालाई त्रि-सिन्हा बुझ्नु र ठम्याउनुजस्ता विविध वक्रोक्तियुक्त मननीय तथ्यले उक्त अङ्क सामाजिक कृत बनेको पाइन्थ्यो ।

*नेपाली* पत्रिकाले आधा शताब्दीको अवधिमा नेत्रपटल खोलेर र चिम्लेर विश्वोपकार गर्ने ध्यानावस्थित साधु महर्षिझैँ नेपाली

वाङ्मयको विश्लेषणीय अपूर्व सेवा गरेको बौद्धिक वृत्तले लेखेका छन् ।

*रचना, अभिव्यक्ति भानु, शारदा, बगर, उन्नयन, शिवपुरी सन्देश, जुही, जनमत, समष्टि, ज्ञानगुनको कुरा, मिर्मिरे, मधुपर्क* र *गरिमा*ले भन्दा धेरथोर पृथक् मार्ग र पृथक् दिशा पहिल्याई *नेपाली*ले निस्वार्थ ढङ्गले नेपाली वाङ्मयको श्रीवृद्धि गरेको पाइन्छ। साहित्यिक पत्रिकाको वस्तुगत मौलिकतालाई परगेल्दा पृथक् रूप र पृथक् ढङ्गमा अभिजात किसिमले यो पत्रिका समुपस्थित रहेको देखा पर्दछ। महान् भाषिक विभूति बालकृष्ण समद्वारा संरचित डिजाइनको श्वेत आवरण र श्वेत आकर्षणमा राष्ट्रिय पत्रिका क्षेत्रमा *नेपाली* गुणकारी शिलाजीत, च्यवनप्राश र अन्य ओखती समान अत्युपयोगी रहेको पाइन्छ ।

नेपाली बौद्धिक जगत्मा बहुसम्प्रभु सिद्धान्तका प्रणेता हेराल्ड लास्कीको प्रतिरूप रहेका एवं भाषिक र साहित्यिक दृष्टिले सबैलाई माया गर्ने एवं गर्न खोज्ने गद्यपुरुष कमल दीक्षितले प्रकाशनकालको सुरुवातदेखि यस पत्रिकाको सम्पादन, संरक्षण र व्यवस्थापनमा आफ्नो जीवनको उत्तम र उर्वर समय समर्पित गरेको असङ्ख्यले देखेका छन् । जसको जतिसुकै प्रशंसा गरे पनि त्यो एकप्रकारले थोरै हुन्छ। विशेषतया *नेपाली* त्रैमासिक पत्रिका (संवत् २०१६-२०६५)लाई विगत पचास वर्षदेखि २०० औँ स्वर्णबिम्ब प्रकाशनको यस स्थितिसम्म ल्याइपुऱ्याउने ज्ञात अज्ञात समस्त सम्बद्ध व्यक्ति यसबेला सुयश र साधुवादका हकदार रहेका छन् । पत्रिकाको संस्थापक परिवारलाई फूलको र सुनको दुवै थोकको माला पहिराइए उचित हुने देखिन्छ।

द्वन्द्व व्यवस्थापन र संविधानसभा २०६४ को निर्वाचनपश्चात् सङ्घीय लोकतान्त्रिक गणतन्त्र र समावेशी बहुदलीय पद्धतिलाई नेपाल र नेपालीले आत्मसात् गरेको पाइन्छ । सङ्घवादी पुनर्संरचनामा नेपाली माध्यम राष्ट्र भाषा मानिए पनि सर्वमान्य केन्द्रीय प्रमुख राष्ट्रभाषाको रूपमा विश्वप्रशिद्ध अङ्ग्रेजीझैँ यसले दक्षिण एसिया र विश्व जीवनमा आफ्नो अत्युच्च स्वर्णिम भूमिका निर्वाह गरिरहने देखिन्छ । प्रा. नगेन्द्रराज शर्मासहित कतिपय उपप्राध्यापक, सह-

प्राध्यापक, प्राध्यापक, प्राज्ञ, सुविज्ञ र शुभचिन्तकले 'प्रमुख संवैधानिक राष्ट्रभाषा' माध्यम राष्ट्रभाषा तुल्याइँदा यसको गरिमा न्युनीकृत भयो कि भनी चित्त दुखाएकाले परिवर्तित परिस्थितिमा *नेपाली* भाषाको गुणवत्ता र गौरव कालान्तरमा झन् स्थिर र यथावत् रहने अनुभूति मलाई हुन्छ । यसको साहित्यिक र प्राज्ञिक प्राञ्जल उदाहरणको रूपमा *नेपाली* त्रैमासिक सबै समक्ष प्रस्तुत रहेको भान हुन्छ ।

शिखरीय स्थितिमा राष्ट्रभाषाको स्तरोन्नति गर्न, नागरिक जीवन, अन्तर्राष्ट्रिय समाज र पुस्ता-पुस्ताबीच सेतुबन्धनको सहकार्य गर्न *नेपाली*ले आधा शताब्दीमा पुऱ्याएको योगदान अविस्मरणीय र संप्रेयणीय छ । सुलभ र समयोचितरूपमा यस्ता ऐतिहासिक विशिष्ट *नेपाली* त्रैमासिक पत्रिकालाई लोकतान्त्रिक कालखण्डमा 'बजारीकृत गरिनु' अत्यावश्यक छ ।

✍

## नरशाही (नरु शाह) टप्पुको इतिहास :

*– प्रा. डा. राजाराम सुवेदी 'त्र्यम्वक'*

नेपालको पश्चिमाञ्चल क्षेत्रमा पर्ने लुम्बिनी अञ्चलअन्तर्गत नवलपरासी जिल्ला पर्दछ । त्यस जिल्लामा अधिकांश तराईभाग र केही चुरे पहाडी र महाभारत शृङ्खला पर्दछ । नवलपरासीको उत्तरतिर पाल्पा र तनहुँ, दक्षिणतिर भारतको गोरखपुर जिल्ला, पूर्वतर्फ चितवन जिल्ला र पश्चिममा रूपन्देही जिल्ला पर्दछ । यो जिल्लाको क्षेत्रफल तराईमात्र ९३५ वर्ग किलोमिटर पर्दछ । वि.सं. २०१९ सालमा १४ अञ्चल ७५ जिल्लामा नेपाललाई प्रशासनिक क्षेत्रमा विभाजन गर्दा नवलपरासी जिल्लालाई नवलपुर र परासीका फाँटलाई जुटाएर, दाउन्नेको डाँडादेखि पूर्वको नवलपुर र त्यहाँदेखि पश्चिमको परासीलाई नवलपरासी जिल्ला कायम गरेको पाइन्छ । त्यसपछि पुराना ३६ जिल्लाका जिल्ला सदरमुकाममा रहेका कागजपत्रहरू बाँडफाँड गरी परासीलाई नवलपरासी जिल्लाको सदरमुकाम घोषित गरी अड्डाखानाहरू स्थापना गरिएका थिए। वर्तमानकालमा कावासोतीमा जिल्ला कार्यालयको शाखाहरू स्थापना गरी दोस्रो सदरमुकामको रूप दिइँदै आएको महसुस हुन्छ । हाम्रो चर्चाको विषय नरशाही टप्पुको हो, जसको ऐतिहासिकतालाई यहाँ स्पष्ट पार्ने प्रयत्न गरिएको छ ।

नरशाही टप्पु हाल नवलपरासी जिल्लाको दक्षिणी भागमा पर्दछ । नारायणी नदीतटमा पर्ने सो जिल्लाको गा.वि.स. हाल सीमाविवादमा मुछिएको छ । वि.सं. २०३२ सालको पञ्चायती संविधानको दोस्रो संशोधनबाट पूर्वी पाल्पाका ११ वटा गा.वि.स. र तनहुँ जिल्लाको १ गा.वि.स. नवलपरासी जिल्लामा सम्मिलित गरिएको छ। त्यसैले त्यस नवलपरासी जिल्लामा जम्मा ५० वटा गा.वि.स. र परासी नगरपालिका रहेका छन् । ती सबै गा.वि.स. सदरमुकाम परासी नगरपालिकाबाट दूरीसमेत स्पष्ट होस् भनी नामसहित यहाँ प्रस्तुत गर्नु सान्दर्भिक हुने छ। अमरबन ६, अर्ग्यौली ३७, उपल्लोअर्खेल १९, कावासोती ३९, कुश्मा ८, कुडिथी १९, कोटथर १८, कोल्हुवा ३३, गुठीपरासौनी १६, गैरमी ८, गैंडाकोट ४५, जगरनाथपुर १४,

जमुनिया ११, बहदा ८, जौवारी १९, तन्सेरिया ३०, तिलकपुर ६, देवसरा ४, धिवादी १३, नन्दन ४, नरशाही १९, पकलिहवा २१, पाल्ही ४, पिठौली ५४, पुर्सौली १२, प्रगतिनगर ५०, प्रतापुर १४, बडहरादुवौलिया १०, बुलिङटार २४, बणिमणिपुर १७, बेल्डिहा ५४, वैकुण्ठपुर २, बैदाली १५, मुजहवा १०, मङ्गलचौर २८, मनरी ३, माकर ११, मिथुकरम १६, रकुवा २४, रमपुरवा १०, रामनगर ६, रुचाङ १६, रूपौलिया १९, सनई ८, शिशवार ५२, सुनवल ६, सुस्ता २८, स्वाठी ३, हुप्सेकोट १२, त्रिवेणी २१ माइलको दूरीमा पर्दछन् भने परासीलाई ० माइल मानिएको छ ।[1] माथिको सूचीअनुसार नरशाही गा.वि.स. २१ सौं पङ्क्ति पर्दछ भने मेचीदेखि महाकालीको १९ सौँ क्रममा रहेको छ ।[2] यसरी नरशाहीटप्पु भन्ने नामको गा.वि.स. नवलपरासी जिल्लामा पर्ने स्थान भएको प्रमाणित भएको छ। त्यस गा.वि.स.को नाउँ नरशाही रहनाको कारण र ऐतिहासिक आधारहरूबारे तथ्यपूर्ण खोजी गर्नुपर्ने स्थिति आएको छ ।

नरशाही गा.वि.स. र नरशाहीटप्पु कहाँ पर्छ भन्ने कुराको टुङ्गो पछि नरशाही (नरु शाह) को हुन् भनी पत्तो लगाउनुपर्ने भएको छ । पुराना ऐतिहासिक स्रोत र इतिहासका कृतिहरू अध्ययन गर्दा नरशाही भन्ने व्यक्ति नरु शाह चौतरिया भएको कुरा पत्तो लागेको छ । श्री ३ चन्द्रशमशेरले बेलायतबाट आफ्नो प्रशंसापूर्ण इतिहास लेखाउनका लागि एक व्यक्तिलाई आतेजाते, खानपिन, घुमफिर, बसोबासको सुविधाबाहेक ने.रु. १६ लाख कबोल गरी बोलाएका थिए । ती इतिहासकार पर्सिभल ल्यान्डन थिए । उनी नेपाल आएर १८ महिना बसेर यहाँका माहिला पण्डित र राजगुरु हेमराज पाण्डे तथा राममणि आचार्य दीक्षितले नेपालीमा लेखिराखेको नेपालको इतिहासको पुस्तकबाट समेत मजबुन खिँची नेपाल- भाग १ र २

---

१. *राधेश्याम पौडेल, नवलपरासी जिल्ला परिचय (ललितपुर: तालिम सामग्री उत्पादन केन्द्र, २०३५) पृष्ठ २२-२६ ।*

२. *मेचीदेखि महाकाली भाग ३ (काठमाडौँ : सूचना विभाग २०३१) पृष्ठ ९०० ।*

नामक पुस्तक अङ्ग्रेजीमा (छपाउन) लेखी छोडेका थिए । त्यस पुस्तकमा नरु शाहको पुस्तावली यसप्रकार दिइएको छ :[३]




३. *Perceval Landon, Nepal I, II (Kathmandu : Ratna Pustak Bhandar, 1976) P. Genalogical table of the reigning (Shah) Family of Nepal drawn up to A.D. 1963*

*काठमाडौं, कालधारा निवासी लवविक्रम शाहबाट प्राप्त ।*

माथि उद्धृत गरिएको वंशावलीबाट गोरखाका राजा द्रव्य शाहबाट सुरु भएको र त्यसपछि क्रमागत रूपमा उनका छोरा पूर्ण (पुरन्दर) शाह, उनका छोरा राम शाह, त्यसपछि डम्बर शाह, त्यसपछि कृष्ण शाह, त्यसपछि रुद्र शाह त्यसपछि पृथ्वीपति शाह गोरखाका राजा भएको कुरा वंशावलीमा पाइन्छ । राजा पृथ्वीपति शाहका ६ ओटा छोराहरू क्रमशः वीरभद्र, उद्योत, चन्द्ररूप, रविरमण, शान्तरूप र सुर्तान शाह नामका भए । उनका पाँचौं पुत्रको नाम शान्तरूप शाह भएको पुष्टि भएको छ । उनै शान्तरूप शाहका एकमात्र पुत्रको नाम नरु शाह हो । शान्तरूप शाहका विषयमा एउटा ऐतिहासिक प्रसङ्ग सम्बन्धित देखिएको छ । त्यसको चर्चा गर्नु यहाँ रुचिपूर्ण हुने छ ।

वि.सं. १७१६ मा गोरखा राज्यका राजा श्रीकृष्ण शाह भएको समयमा उनैकी कान्छी रानी रुक्मिणावतीले दरबारिया आन्तरिक कारणवश उद्बन्धन प्रक्रियाबाट देहत्याग गरिन् । उद्बन्धन प्रक्रियाबाट देहत्याग गर्नु भन्नाले गलामा पासो लगाएर झुन्डिएर मरिन् भन्ने अर्थ खुल्दछ । त्यसरी आत्महत्या गरेर मर्नेहरूको आत्मा अतृप्त रहिरहन्छ भन्ने परम्परा चल्दै आएको छ । किनभने कुनै न कुनै कुरामा पूर्ण असन्तुष्ट रहेपछि अन्त्यमा मानिसले आत्महत्या गरेको प्रवृत्ति पाइन्छ । त्यसरी मर्नेहरूको आत्मा भड्किएर दोषावायु बन्ने अनि आफन्तलाई पीडा दिन्छ भन्ने पनि विश्वास गरिन्छ । त्यसै विश्वासअनुसार कान्छी रानी रुक्मिणावतीको दोषवायु बोलाई वायुको स्थान बनाई पूजाआजा गरी मन्साइएको (चित्त बुझाइएको) थियो ।[५] त्यसैगरी वि.सं. १७४६–१७४७ मा गोरखाका राजा पृथ्वीपति शाहका कान्छा छोरा रणदुर्लभ शाहले दरबारी कूटनीतिका फेरमा परी गोरखा दरबारको आफ्नै कोठामा पासो लगाई मरे ।[६] त्यसपछि उनी पनि अतृप्तात्मा भई दोषवायुमा परिणत भएका थिए ।[७]

---

*५. दिनेशराज पन्त, गोरखाको इतिहास, भाग १ (काठमाडौँ : दिनेशराज पन्त, २०४१) पृष्ठ १२५–१२८ ।*

*६. योगी नरहरिनाथ, गोरखा वंशावली (काशी : आर्यवीर सङ्घ, २०२१) पृष्ठ ७०–७५ ।*

*७. मीनाक्षी राणा, नेपाल नरेश श्री ५ महाराजधिराजका वायुदेवता : एक परिचय, २०५६, स्नातकोत्तर शोधपत्र, पृष्ठ ३०–३६ अप्रकाशित ।*

माथिको वंशावलीमा वीरभद्र शाहका दाजुभाइ ६ ओटाको नाउँ विदेशी लेखक पर्सिभल ल्यान्डनको नेपाल भन्ने पुस्तकमा दिएको पाइन्छ । तर गोरखावंशावलीमा राजा पृथ्वीपति शाहका कान्छा छोरा भनी बारम्बार आवृत्ति भएको पाइनाले र गोरखाली राजाको वायुदोष हुनेमा रणदुर्लभ शाहको नाउँ पनि भएको अनि गोरखादरबारमा रणदुर्लभ कोठा भनी सधैँ बन्द रहने परम्पराको अध्ययन गर्दा त्यो कुरा स्वीकारयोग्य देखिन आएको छ। साहेब रणदुर्लभ शाह वायुदोष भई राजपरिवारलाई अत्यन्तै दु:ख दिन थाल्यो। त्यसप्रकार दोषवायुको समन गर्न भनी सोधपुछ गर्दै कुमाउँबाट ठगुमाला भन्ने कुनै कडा धामी झिकाइयो र दोषवायु भएका रणदुर्लभ शाहकी पत्नीलाई बाँसका स्याउला हातमा लिई डाँग्रे बनाइयो । तदनुसार उनको आङमा दोषवायु प्रवेश भयो र उनी काँपेर पुकार गर्न, फलाक्न, बक्न, रुन थालिन्। त्यसपछि वायुदोष उत्रेकोले परिवारमा कष्ट कम हुन गयो ।

गोरखाका राजा नरभूपाल शाहकी छोरी पद्मावती बाउन्ने पुड्की थिइन् जो अकालमै मरिन् र परिवारजनलाई दु:ख पुऱ्याउन थालिन् । त्यस दोषका कारण पृथ्वीनारायण शाहका दुवै आँखा भित्रभित्रै दुख्ने, पोल्ने तर बाहिरबाट केही नभएजस्तो देखिने भयो । वैद्य, ज्योतिष, हेरकोर गर्दा वायुदोष हुनुपर्ने ठहर भएकोले त्यसको स्थायी समाधानपट्टि सोच्न थालियो। त्यसका निम्ति सिद्धपुरुष झिकाएर वायुपूजा गरी दोषमुक्त गराउन भनी अनेक पुरुषार्थी, तान्त्रिक, धामी, सिद्ध र परामनोविज्ञानवेत्ताजस्ता व्यक्तिको परीक्षण हुन लाग्यो । अन्त्यमा पौडीश्रीनगर गढवालबाट कुमाउँको अल्मोडा गोलूस्थानमा आइबसेका एक सिद्ध नारद धामीलाई गोरखादरबारमा झिकाइयो। ती नारद धामीलाई वायुदोष रुक्मिणावतीदेखिको विवरण सुनाइयो र पृथ्वीनारायण शाहको अवस्थाप्रति अवगत गराइयो। नारद धामीलाई सबै कुरा ज्ञान भएपछि वायु प्रवेश गराउने व्यक्ति तयार पार्न भनियो। उनी गुरुधामी (धमाला) भनिन्थे ।

गुरुधामी नारद धमालाले वायु आरोहण गराउने व्यक्तित्व जाँच पडताल गर्द पृथ्वीनारायण शाहका भाइ दलमर्दन शाह योग्य भएका हुँदा उनैको आङमा वायुदोष उतारियो र वायु बक्न थाल्यो। तर

त्यसैबेला गोरखामा बाहिरबाट आक्रमण भएको हुनाले सेनालाई नेतृत्व दिने क्षमता उनै दलमर्दन शाहको हुँदा त्यसै अन्तरालमा उनलाई युद्धमोहोडा जानुपऱ्यो । त्यसपछि पृथ्वीपाल शाहलाई डाँग्री बनाई वायु उतारेर काम अगाडि बढाइयो । उनी अलि रोगी हुनाले गोरखाको हावापानी फेर्नुपर्ने भई काशीबास जानुपऱ्यो । गोरखामा वायुदोषको डाँग्रीको अभाव भई वायुदोषले राजपरिवारलाई अऱ्‍ पिरोल्न थाल्यो । उता दोषवायुको पूजा नै रोकिन गयो । गोरखा दरबारमा अशान्ति फैलन थाल्यो। उनै नारद धमालाको सल्लाहअनुसार स्थायी धामी डाँग्रीको रूपमा पृथ्वीपति शाहका पाँचौं छोरा शान्तरूप शाहलाई वरण गरियो । उनै नारद धमला र शान्तरूप शाह चौतरियाको सल्लाहअनुसार वायुदेवताको मन्दिर दरबारमा स्थापना गरी नित्य पूजा गर्ने बन्दोबस्त मिलाउने कुरा आयो । पृथ्वीनारायण शाहलाई आँखा दुख्न छोडेको हुनाले सो कुरामा पत्यार भएबाट वायुदेवताको नित्यनैमित्यिक, पार्विक, वार्षिक, द्वैवार्षिक, त्रिवार्षिक, पञ्चवार्षिक पूजाका निम्ति पूजासामान, बलि, पूजारी, गुठी, धामी गुठी, डाँग्री गुठीको रूपमा स्थापना गरियो । त्यस दरबन्दीपछि धमाला, गुरुधामी, डाँग्री हुन गोरखादरबारबाट टीको लिनुपर्ने र गुरुधामीबाट बडारकुँडार गर्ने प्राणधर खवास, किस्न्या पुतवार, मनि श्रेष्ठ, जैनसिं श्रेष्ठ, रनवीर अचार, साहेवसिंह महानलाई वायुदेवताको सुसारेहरू, धामी, सुसारे, वानादारलगायतका दरबन्दीका मान्छे ठीक भए-नभएको परीक्षण गुरुधामी र धमालाले गरी छनौट गर्नुपर्ने र वायुको डाँग्रीमार्फत भकाएर टुङ्गो लगाइन्थ्यो ।[८]

गुरुधामी नारद धमालाको अन्त्यकालमा उनको ज्ञानलाई श्रवण गर्ने काम शान्तरूप शाहले लिएकाले उनको चौतरिया खलकलाई धमाला चौतरिया भन्न थालियो । उनै धमाला चौतरियाका छोरा नरु शाह भएको कुरा प्रमाणित भएको छ । नरु शाहको बारे जानकारी पाइसकेपछि उनको जीवनी र क्रियाकलापका बारेमा पनि जानकारी लिनुपर्ने भएको छ। एक स्रोतअनुसार चौतरिया नरु शाहले अल्पायुमै मृत्यु भएका राजा प्रतापसिंह शाहको १३ दिनसम्म क्रियाकाज

---

*८. ऐजन । एकपटक अयोग्य भए उक्त व्यक्ति सधैंलाई अयोग्य मानिन्थ्यो ।*

गरी आशौच उतारेका थिए। उनको मद्दतका लागि शिव शाह, भोटू पाँडे, नीलध्वज, भवानीदत्त तथा इन्द्रमणिहरूले पनि १३ दिनसम्मको क्रियाकाजमा खटेर काम गरेका थिए ।[९] त्यसबाट नरु शाहको राजपरिवारमा कति निकटता रहेछ भन्ने प्रमाणित हुन्छ। प्रतापसिंह शाहको क्रियाकाजको बाह्रौँ दिनको सपिण्डी कार्य चौतरिया दलजित शाहबाट गराइयो भने बहादुर शाहलाई पर्सामा नै रोकेर राखिएको थियो । प्रतापसिंह शाहको शुद्धशान्ति सकिएपछि गर्भवती नायव राजेन्द्रलक्ष्मीले एक कन्यालाई जन्म दिइन् जसको नाम शिवप्रिया राखियो । केही दिनपछि प्रतापसिंहकी भित्र्यानी मैजु कन्याले छोरो पाइन् जसको नाम शेरबहादुर शाही राखियो। त्यसको केही दिनपछि मैजुकन्यालाई प्रतापसिंहको नाममा सती पठाइयो ।[१०]

प्रतापसिंह शाहको मृत्युपछि गद्दी रिक्त राख्न नहुने हुँदा साढे दुई वर्षका दूधे बालक रणबहादुर शाहलाई गद्दीमा बसाली आमा राजेन्द्रलक्ष्मीले नायब भएर राजकाज चलाउन थालिन् । उनलाई हरेक कुरामा दाहिने हात भएर काम गर्ने व्यक्तिका रूपमा चौतरिया नरु शाह रहेको कुरा पनि ऐतिहासिक प्रमाणबाट जानकारी पाइन्छ। नायब मुमा राजेन्द्रलक्ष्मीलाई राजकाजमा मद्दत गर्ने भारदारहरूमध्ये सर्दार रामकृष्ण कुँवर पनि थिए, जसलाई पाल्पाका राजा मुकुन्दसेनको मृत्युपछि उनका छोरा महादत्त सेनका दौँतरी भएबाट अनेक तरहका हावभावले आफ्नो पक्षमा पार्ने प्रयत्न गरेका पत्रहरू पाइएका छन् । त्यति नै बेला राजेन्द्रलक्ष्मीले पाल्पामाथि आक्रमण गर्न चौतरिया नरु शाहलाई सेनासाथ खटाकी थिइन्। अभिमानसिंह बस्न्यातले पाल्पामाथि हमला गर्दा पाल्पाली राजा ठहर्न नसकी अर्धाराज्यतिर पलायन गर्न बाध्य भए । उता नरु शाहको सेना कास्कीराज्यमाथि चढाई गर्दै पर्वततिर बढ्दै गरेका समयमा पर्वत र तनहुँका गठिलो सेनाले नेपाली सेनालाई चेपुवामा पार्न लागेको सूत्र थाहा पाई राजेन्द्रलक्ष्मीले चौतरिया नरु शाहलाई त्रिशूली नुवाकोटतिर र अभिमानसिंह बस्न्यातलाई

---

*९. बाबुराम आचार्य, श्री ५ प्रतापसिंह शाह (काठमाडौँ : श्रीकृष्ण आचार्य २०६०), पृ. १२४-२९ ।*

*१०. ऐजन। यज्ञनाथ आचार्य, नेपालको सङ्क्षिप्त इतिहास (काठमाडौँ : एकता बुक्स, २०५०), पृ. १३०-१३५ ।*

पाल्पाबाट तुरुन्त लमजुङ फर्कने ताकिता गरिन् । नरु शाहको मद्दतका लागि काजी स्वरूपसिंह कार्कीको मातहतमा थप सेना केन्द्र काठमाडौँबाट पठाइदिइन् । त्यसरी स्वरूपसिंह कार्की, अभिमानसिंह बस्न्यात र नरु शाहको संयुक्त सेनाले पर्वत राज्यमाथि आक्रमण गरे । उनीहरूले पर्वत राज्यअन्तर्गतका विभिन्न भागमा आक्रमण गरी नियन्त्रण कायम गर्न सफल भए ।[११]

राजा प्रतापसिंह शाहको मृत्युपछि राजेन्द्रलक्ष्मी र बहादुर शाहले संयुक्त रूपमा नायबी चलाई राजकाज गर्न थाले। क्रमश: ती दुवै देवरभाउजूबीच एकमत हुन कठिन पर्दै गयो । चौतरियाहरूले बहादुर शाहको समर्थन गर्न थाले। बहादुर शाहले राजेन्द्रलक्ष्मीलाई नजरबन्द गरे । चौतरिया महोद्दामकीर्ति शाहले राजेन्द्रलक्ष्मीलाई नजरबन्दबाट मुक्त गराए। गोरखामाथि चौबीसी आक्रमण हटाउन बहादुर शाह र नरु शाह त्यता लागेकामा नायब राजेन्द्रलक्ष्मीले उनीहरूलाई पक्राउपुर्जी पठाउँदा ती दुवै नेपालबाट भागे।[१२] चौबीसीको आक्रमणलाई निष्क्रिय पार्न गोरखातिर लागेका चौतरिया बहादुर शाह र नरु शाहलाई नायब राजेन्द्रलक्ष्मीले काठमाडौँबाट पक्राउपुर्जीसाथ मानिस पठाएको थाहा पाएपछि गोरखाबाटै दुवै पाल्पातिर लागे । किनभने चौतरिया नरु शाहको ससुराली पाल्पाको राजपरिवारमा थियो । ती दुवै केही दिन त्यहीँ बसे । चौतरिया बहादुर शाहको विवाह पनि भएको थिएन र दरबारकै एउटी कन्यासँग विवाह गर्ने कुरा नरु शाहले पहिल्यैदेखि चलाएका थिए । पाल्पामा बसेर पूरै समय बिताउने र बहादुर शाहको विवाह पनि गर्ने प्रस्ताव पाल्पाली राजाले राखेका पनि थिए। तर भागदौडको ओह्रालो पाइलोमा त्यसो गर्न बहादुर शाहले स्वीकार गरेनन्। ती दुवैलाई पाल्पाली प्रस्तावहरू स्वीकार नभएरै बहादुर शाह आफ्नो परिचित प्रवास रामनगर

---

*११. ऐजन । यज्ञनाथ आचार्य, नेपालको सङ्क्षिप्त इतिहास (काठमाडौँ : एकता बुक्स, २०५०), पृ. १३०-१३५ ।*

*१२. सं. देवीप्रसाद भण्डारी “इ.शि. बाबुराम आचार्यले रचना गर्नुभएको नेपालको सङ्क्षिप्त इतिहास” पूर्णिमा पूर्णाङ्क ६० (माघ, २०४१), पृ. ३७-४३ ।*

बेतियातिर लागे भने नरु शाह पाल्पाको तलहट्टीमा पर्ने नारायणी नदी त्रिवेणी आसपासको जङ्गलबीचमा केही गोरखाली र केही पाल्पाली मानिसका साथ बसोबास गर्ने र सिकारी जीवनका साथै युद्धको अभ्यासमा लाग्ने निर्णयसाथ त्यहाँ पुगे। आफ्ना परिवारलाई पनि नरु शाहले त्यहीँ झिकाए।

नरु शाह धामी धमाला र वैद्याङ्गीसँग पनि परिचित हुनाले सो ठाउँलाई जङ्गल फँडानी गरी बस्तीलायक बनाए। पहिले उक्त ठाउँलाई वनकटवाबस्ती भनियो। पछि केही वरपरका थारूमूलका मानिसहरू चौतरिया नरु शाहीको आश्रयमा आएर बस्न थाले। उनीहरूले नै उक्त वनकटवाबस्तीको नाउँ नरशाहीटप्पु राखिदिए। आजकाल त्यो सानो टप्पु (अग्लो मचान) नरही नरशाही गाउँ विकास समिति नै बन्न गएको छ। वास्तवमा चौतरिया नरु शाहले नेपाल दरबारको आँखा छल्न पाल्पाकै सरहदको जङ्गली भाग फँडानी गरी आवाद गुल्जार गर्न पाल्पाले नै दिएको ठाउँ हो र त्यहीँ उनी बसी २० कोस दक्षिणी जङ्गलसम्म सिकार गर्दथे। उनले सिकार खेल्न अरूभन्दा सिपालु हुनुमा जङ्गलको निर्वासनले गर्दा दक्षता हासिल गर्न सकेका थिए। उनको त्यतिबेला गरेको युद्धाभ्यास र सिकारको तरिकाले नेपालको एकीकरण र त्यसपछि बडो प्रयोगसिद्ध भएको थियो भन्ने पछिका वर्णनले पुष्टि गर्नेछन्। त्यस ठाउँमा अवध र अङ्ग्रेज दुवैको आँखा छल्न नरु शाह सफल भएका थिए र नेपाल-अङ्ग्रेज युद्धमा मूल निहुँको कारण पनि सोही ठाउँ बन्न गएको थियो। सुगौली सन्धिपछि उक्त ठाउँलगायत प्रशस्त दक्षिणी भागबाट अङ्ग्रेजहरूले आफ्नो दाबा छोडेका थिए। प्रतापसिंह शाहका पालामा चितवन जोगीमारा, जुटपानी, उपर्दाङगढी लिँदा पनि सो नरशाहीटप्पु भन्ने ठाउँ कब्जा गरिएको थिएन। नरु शाहले त्यहाँ अग्लो मचान निर्माण गरी टाढाटाढाका जङ्गली जन्तुको निरीक्षण, स्वरेक, फाल र चियो गर्ने गरेका थिए। त्यतिबेला नरशाहीटप्पु सिकारखेल (The Big Game) को लागि अखाडा बन्दै गएको थियो। नेपालको एकीकरणपछि त त्यो ठाउँ ज्यादै महत्त्वको बन्न गयो।

वि.सं. १८३५ भदौ १९ गते नायबमुमा महारानी राजेन्द्रलक्ष्मीलाई चौतरियाहरूको सल्लाहमुताबिक बहादुर शाहले चाँदीका नेल हाली

नजरबन्द गराएकोमा १८३६ भदौ १० गते चौतरिया महोद्दामकीर्ति शाहले उनलाई मुक्त गराएका थिए। गोरखामा बसी चौबीसीको चाल अध्ययन गरिरहेका दुवै जना (बहादुर शाह र नरु शाहलाई) पक्राउ गर्ने पुर्जीसाथ मानिस पठाइन् । ती दुवैले बेलैमा सुइँको पाएकाले पाल्पातिर पलायन गरेको कुरा माथि नै उल्लेख गरिसकियो । उनीहरूको निर्वासनकाल वि.सं. १८४१ मा बालक राजा रणबहादुर शाहको शुभ-उपनयन (व्रतबन्ध) गराए। त्यस अवसरमा ती दुवैलाई निम्तासम्म पनि पठाइएन बरु आफन्तबाट उनीहरूले थाहा पाएका थिए। वि.सं. १८४३ साउन २ गते (१३ जुलाई १७८५ ई.) मा नायब राजेन्द्रलक्ष्मीको मृत्यु भएको हुनाले बहादुर शाहले क्रियाकाज गर्नु परेको हुँदा बोलाई पठाइयो। त्यसै सिलसिलामा बहादुर शाहले नरशाहीटप्पुबाट नरु शाहलाई पनि साथ लिई नेपाल फर्केका थिए। बहादुर शाह बेतियाबाट र नरु शाह नरशाहीटप्पुबाट हेटौँडा मकवानपुरमा भेट भएका थिए ।[१३]

बेतियाबाट बहादुर शाह र नरशाहीटप्पुबाट नरु शाह नायबमुमा महारानी राजेन्द्रलक्ष्मीको मृत्युपछि सरासर नेपाल काठमाडौँ फर्की १० वर्ष राजा रणबहादुर शाहको नायबी भई बहादुर शाह बसे भने नरु शाह भारदार । नायब बहादुर शाहको विवाह पाल्पाकै राजकुमारी विद्यालक्ष्मी (नजरमैयाँ) सँग गर्न नरु शाहले विशेष भूमिका खेलेका थिए। चौतरिया नरु शाहले नायब बहादुर शाहको विवाहपछि नेपालको एकीकरण कार्य सम्पन्न गर्न अगाडि बढ्दा पाल्पाराज्य बाधक बन्ने ठानी पाल्पाली राजालाई नेपालको मद्दतमा ल्याउने र त्यसो गरेबापत धुरकोट, इश्मा, मुसीकोट, गुल्मीचारपाला, अर्घा र खाँची गरी ६ राज्यको अधिकार दिने कुरामा मध्यस्थताको भूमिका निर्वाह गरेका थिए। पाल्पाको नेपाललाई मद्दत मिल्नासाथ गोरखाविरुद्धको चौबीसी सङ्गठन फुट्न गएकोले नेपालले पश्चिम विजय अभियान आरम्भ गरी भेरी नदीसम्म आफ्नो सीमा पुऱ्यायो। भेरी नदीको किनारामा नेपाली सेना पुगेको चाल पाएर जाजरकोटे राजा गजेन्द्र शाहले आफ्नो शक्तिसमेत जुटाई नेपालको सिमाना

---

*१३. काठमाडौँ कालधारानिवासी श्री सुरेन्द्रविक्रम शाहसँगको २०५६ को साक्षात्कारबाट ।*

महाकालीसम्म पुऱ्याउन मद्दत पुऱ्याए। नेपालको सिमाना महाकाली नदीमा गएर ठोक्किएपछि त्यसैबेला कुमाउँको राजनीतिबाट भुक्तभोगी भई आत्मरक्षार्थ सल्यान राज्यमा आई बसेका कुमाईंहरूका नायक हर्षदेव जोशीले नेपाललाई महाकाली पश्चिमतिर पनि विजय गर्ने र आफूलाई कुमाउँको प्रधानमन्त्री बनाउनुपर्ने सर्तनामा पठाए। त्यस सर्तलाई नेपालका नायब बहादुर शाहले स्वीकार गरी नेपाली सेनालाई महाकाली तर्ने आदेश गरे। त्यसपूर्व हर्षदेव जोशी कुमाउँ प्रवेश गरी नेपालको विजय गर्न सजिलो वातावरण तयार पार्न तत्पर रहेका थिए। बहादुर शाहको नायबीकालमा चौतरिया नरु शाहले नेपालको एकीकरण अगाडि बढाउन मद्दत पुऱ्याउँदै नेपाली सेनासँग पश्चिम विजय अभियानमा आफैँ खटेर लागेका थिए। परिणाम स्वरूप नेपालले विभिन्न मोहडामा सफलता हासिल गर्दै अगाडि बढेको थियो। कुमाउँका प्रधानमन्त्री हर्षदेव जोशीले डोटी चूडीका चूडालहरूसँगै सल्यानी राजाकहाँ शरण लिएपछि नेपाललाई झन् सहयोग पुग्न गयो।[१४] त्यसपछि कुमाईंहरू नेपालतिर बसोबास गर्न थालेका थिए।

महाकाली पश्चिमपट्टिको विजय अभियानमा चौतरिया नरु शाहलाई सुबेदारी खान्गी प्रदान गरी नेपाली सेनासाथ खटाइएको थियो। नेपाली सेनाले नरु शाहको नेतृत्वमा कुमाउँमाथि अधिकार गरेपछि कुमाउँका प्रधानमन्त्री हर्षदेव जोशीले अझ पश्चिम गढवालतिर नेपाल बढ्नुपर्ने सङ्केत गरे। त्यसमा नरु शाहले हर्षदेव जोशीलाई भेटेर गढवालमाथि नेपालले विजय गरेपछि उनी के चाहन्छन् भनी प्रश्न राख्दा गढवालको पनि प्रधानमन्त्री आफैँ बन्ने इच्छा राखेका थिए। त्यो कुरा केन्द्रमा नायब बहादुर शाहलाई पठाई केन्द्रबाट सो प्रस्तावलाई स्वीकार गरी नेपाली सेना गढवालतिर बढ्न थाल्यो। गढवालका राजा प्रद्युम्न शाह नेपाली सेनासँग युद्ध गर्न असमर्थ भएकाले युद्धक्षेत्रबाट दक्षिणतिर पलायन गरे। तर उनले कौड्या भन्ने ठाउँमा अचानक नेपाली सेनामाथि आक्रमण गरे। कालू पाँडे र जयजित पाँडेले नेतृत्व गरेको सेनासामु उनी टिक्न नसकी कौड्याबाट

---

*१४. राजाराम सुवेदी, पं. हर्षदेव जोशीको... गरिमा पूर्णाङ्क १६० (२०५३ वैशाख), पृ. ६१-६७।*

पनि पलायन भए। नेपालको गढवालमाथि विजय भएपछि पश्चिमतिर बढ्ने कि नबढ्ने सल्लाह र विजित राज्यहरूमा नेपालले शासन गर्ने तरिकाको अध्ययन, अभ्यास र प्रयोग गरिरहेको समयमा नेपाल-तिब्बत-चीन युद्ध सुरु भयो। गढवालमा छाउनी, खलङ्गा, थर्पु, गढीहरू निर्माण गरी बसेको नेपाली सेनालाई फिर्ता आउन केन्द्रबाट ताकिता पत्रहरू आइरहन थाले। ती-ती केन्द्रबाट नेपाली सेना तिब्बतचीनसँग युद्ध गर्न केन्द्र काठमाडौँतिर फर्किन थाले। तदनुसार वि.सं. १८४८ सम्ममा नेपाली सेनाले स्थापना गरेका खलङ्गामा केही सिपाहीबाहेक अधिकांश शक्ति बाहिर रहेको थियो। त्यो थाहा पाएर गढवाल, कुमाउँ, डोटी, अछाम, जुम्ला, भीरकोट, चैनपुर, च्याङथापुजस्ता ठाउँमा नेपाल विरुद्ध विद्रोह फैलिन थाल्यो। त्यस्तो भयावह वातावरणबारे नेपालले (केन्द्र) कुनै शङ्का गरेन र चाल पाउन पनि सकेन। उता तिब्बतसँगको व्यापारसम्बन्धी गन्जागोलले युद्धको रूप लिएको हुनाले त्यस कचिङ्गललाई तिब्बतले युद्धमा मोडिदियो। तिब्बत हार्ने अवस्था देखिएपछि उसले चीनसँग मद्दत माग्यो। चिनियाँ सेना कुती र केरुङबाट पसी केरुङको नाकाबाट चिनियाँ सेना धैबुङ, बेत्रावतीसम्म आइपुग्यो।

वि.सं. १८४८-४९ मा कुमाउँको बन्दोबस्त मिलाउन नेपाल सरकारले सुब्बा जोग मल्ललाई खटाएको थियो। उनले त्यस्तो युद्धकालमा नेपाललाई आर्थिक सङ्कट परेको अवस्था बुझेर कुमाउँ क्षेत्रबाट विभिन्न शीर्षकमा रकमहरू जम्मा गरी केन्द्रमा पठाउने कार्य गरेका थिए। उनले २० नाली जमिन आबाद गर्ने परिवारबाट वार्षिक रु १ चुँगी मालपोत पोता उठाएका थिए। त्यो कुरा कुमाउँतिर ठूलो होहल्लाको विषय बन्न गएको थियो।[१५] कुमाउँमा रैतीहरूले सुब्बा जोग मल्लको घोर विरोध गरेका हुनाले नेपाल सरकारले त्यो सिकायतलाई मनन गरी उनलाई केन्द्रमा फिर्ता बोलाएको थियो। सुब्बा जोग मल्ललाई मद्दत गर्न भनी नरु शाहलाई राखिएकोमा मल्ल फिर्ता भएपछि त्यो प्रशासनको जिम्मेवारी नरु शाहलाई मिल्यो।

---

*१५. बद्रीदत्त पाँडे, कुमाउँका इतिहास (अल्मोडा : अल्मोडा बुक डिपो, १९९७ ई.) पृ. ३९२-३९३।*

तसर्थ वि.सं. १८४९ मा नरु शाह कुमाउँका प्रशासक बने। प्रशासक भएपछि नेपालको विरुद्ध विद्रोहको वातावरण बनिरहेको र नेपालका प्रशासकलाई कुमाउँमा असफल गराउने षड्यन्त्र भित्रभित्रै चलेको थियो। त्यो षड्यन्त्र कसरी भएको छ भनी नरु शाहले नेपालको हितमा कारबाही गर्दै पनि जान थाले। उनले जनतालाई साह्रै दु:ख दिए, दण्ड दिए, हत्या गरे भन्ने जस्ता धेरै आरोपका पत्रहरू केन्द्रमा भकाभक आउन थाले। वास्तवमा त्यहाँको कुरा अर्कै थियो। वि.सं. १८५० मा चौतरिया काजी नरु शाह र उनका सहायक कामदत्त शाहीले कालु पाँडेको मद्दत लिई विद्रोहीहरूको खानतलासी गर्न थालेका थिए। गढवाल नगरकोटमूलका नगरकोटीहरू बारामण्डल र सोरराज्यमा सेनाको कार्य गर्दै आएका र स्थानीय केटीहरू विवाह गरी घरजम गरी बसेका थिए। ती नगरकोटीहरूले नेपाल विरुद्ध कुमाउँनीहरूलाई भड्काइरहेका र युद्धमा उक्साइरहेका थिए। त्यसका निम्ति प्रत्येक मङ्गलबार रातमा निश्चित ठाउँमा जम्मा हुने कुरा पत्तो लगाई ती विद्रोहीहरूलाई नेपाली सेनाबाट घेर्न लगाई सबैलाई एकै चिहान पारे। त्यसैलाई कुमाउँनीहरूले "नरशाहीका मांगल" भन्ने प्रचार गरेका थिए।[१६] काजी नरु शाहले कुमाउँमा नेपालको अहित गर्नेहरूलाई बरबाद गरिदिएको कुरा तोडमोड गरी नकारात्मक पत्रहरू केन्द्रमा पठाउन थाले। परिणामस्वरूप कुमाउँका काजी नरु शाहको खान्गी खोसी शिव्या खत्रीलाई कज्याइँ प्रदान गरी कुमाउँको प्रशासकमा नियुक्त गरियो। अजवसिंह खवासलाई पनि उनैको मद्दतको लागि खटाइयो। कुमाउँमा हुन लागेको नेपालविरुद्धको विद्रोह नरु शाह, रामदत्त शाही र कालु पाँडेको प्रयत्नले दमन गरियो र त्यसको पगरी (जस) शिव्या खत्री र अजवसिंह खवासलाई मिल्न गएको बुझिन्छ। नेपालले निस्पक्ष रूपले छानबिन गर्नुको सट्टा ज-जसले जे पोल गर्छन् त्यस्तैमा पत्यार गरी खोसुवा गर्ने, कारबाही गर्ने परम्परा लिएको देखिन्छ। कुमाउँबाट खान्गी खोसुवामा परेका नरु शाह त्यसपछि कहाँ गए? के के गरे? भन्ने कुरा अझ रहस्यमय छ।

---

*१६. ऐजन। योगी नरहरिनाथ, इतिहास प्रकाशमा सन्धिपत्र सङ्ग्रह १ (दाङ : आध्यात्मिक परिषद् २०२२) पृ. ४०१। राहुल सांकृत्यायन कुमाउँ (कुमाउँ : ज्ञानमण्डली, २०१५) पृ. ११५।*

वि.सं. १८५१ मा नरु शाह कुमाउँबाट ढाक्रेसरह बन्न गएका र पुगनपुग ३ वर्षको अनुभव (वि.सं. १८४८-१८५१) गरेर आफ्नो निर्वासनमा पुगेका क्षेत्र 'नरुशाहीटप्पु' भन्ने ठाउँमा पुगेर अऋ महत्त्वपूर्ण कार्यहरू गर्न थाले । त्यो ठाउँमा अझै पाल्पा राज्यको आधिपत्य रहेको र नरु शाहको व्यक्तित्व गह्रुङ्गो भइसकेकोले 'नरशाहीटप्पु' रहँदा प्रशस्त मानिसहरूको सरसङ्गत गर्न थाले । नेपालमा जङ्गली हात्ती छोपी तालिम दिएर प्रयोग गर्ने परम्पराको सुरु नरु शाहले गराएका थिए। जङ्गली हात्तीलाई छोप्ने कार्यलाई 'हात्तीखेदा' भन्ने गरिन्थ्यो । त्यतिबेला नेपालमा हात्तीखेदा गरी हात्तीलाई पक्रेर तालिम दिने चलन खूब चलेको थियो। त्यो कुरा बुझेका नरु शाहले थारूहरू आँटिला मानिसहरू र माहुते (राहुते) हरूलाई गुमस्ता बनाई आवश्यक तयारी गर्न लागे। तदनुसार उनले चारओटा ढोही (पोथी हात्ती) हरूलाई अबधबाट झिकाए । ती ढोहीहरूलाई माहुतेको इशारामा चार दिशातिर ल्याउँछन् । नरु शाहद्वारा पठाइएका चारओटी ढोहीमध्ये दक्षिणतिर लागेकी ऋद्धिमाया नामकी ढोहीले ठूला दाह्रा भएको भाले हात्तीलाई फकाउँदै नरु शाही टप्पुनेर ल्याइपुऱ्याई ।[१७] तर हात्तीसारमा उक्त जङ्गली हात्ती जान मानेन । दोस्रो दिन पनि ऋद्धिमायालाई सोही हात्ती तलास गर्न पठाइयो । त्यो त त्यहीँ नजिक ढुकेर बसेको रहेछ । दुवैको भेट भएपछि नारायणी गण्डकीमा गएर जलविहार क्रिडा गरे। त्यसैगरी केही दिन त्यो राशलीला चल्यो। अर्कोतिर नरु शाहको नेतृत्वमा उक्त हात्तीलाई पासोमा पार्न अन्य ढोहीहरूलाई घेर्न लगाई लामालामा रस्सी, लट्ठा र डोरीले जालो पारी उक्त मत्ता हात्तीलाई टन्काउँदै लगे। अन्त्यमा भाले मत्ता हात्ती चल्न चल्मलाउनै नसक्ने अवस्थामा पुऱ्याई सबैले आफ्ना डोरी टन्काएर ठूला रूखहरूका फेदमा लगी बाँधियो । माहुतेहरूको नाइके शूरो मानिसले हातमा तीखो भाला लिएर जङ्गली हात्तीको पुर्पुरोमा रोप्न थाल्यो। हात्तीको माथाबाट रगतका फोहरा छुट्न थाले। उक्त माहुतेले मुठीभरि सिन्दूर लिएर

*१७. ललितपुर कुपन्डोलनिवासी गोवर्द्धनविक्रम शाहको वर्णनका आधारमा उद्धृत ।*

रगत आएको ठाउँमा छर्न थाले, जसले रगत थामियो। तर जङ्गली हात्ती बेस्सरी चुइँकिँदै उफ्रन थाल्यो। माहुतेले बारम्बार भाला रोप्दै रगत आएको ठाउँमा सिन्दूर छर्ने क्रम दोहोऱ्याए। हात्ती जबर्दस्त हुनाले दिनभर जस्तै सङ्घर्ष गर्दै रह्यो। अन्त्यमा चलमल गर्न छोडी आत्मसमर्पणको शैलीमा सूँढ लुलो पाऱ्यो।

जङ्गली मत्ता हात्तीलाई ढोहीमार्फत फन्दामा फसाएर बस पारेपछि हात्तीलाई मीठामीठा फलफूल र घाँस खान दिइयो। तर दुई दिनसम्म हात्तीले तृणसम्म पनि मुखमा राखेन र बन्धन र फन्दा फुकाएको पनि थिएन। त्यसै बीचमा ढोहीहरूलाई माहुतेहरूले हात्तीछेउ लगेर ललाई-फकाई मुसारमुसुर गर्न थाले र फकाएर घाँस टिप्ने पारे। नाइके माहुतेले भाषा पढाउन र तालिम दिन सुरु गरिहाल्यो। केही दिनपछि त्यस हात्तीले माहुतेको भाषा इशारा र खुट्टाका बूढी औँलाको सङ्केत बुझ्न थाल्यो। पूर्णतः तालिमपास भई सँधिएको उक्त हात्तीको नाम गणेश राखियो भने उसकी प्रेमिका ऋद्धिमाया भई। ती दुवै हात्ती राजा रणबहादुर शाहको लागि काठमाडौँ चलान गरियो। यसरी चौतरिया नरु शाहले हात्तीखेदा गरी हात्ती छोपी पठाउने र गैँडाको स्वर पत्तो लगाई त्यसैको रगतबाट राजालाई पितृतर्पण गराउने बन्दोबस्त पनि मिलाउन नरशाहीटप्पुबाट काम गर्न थाले।

चौतरिया नरु शाहका बाबा शान्तरूप शाहलाई राजा प्रतापसिंह शाहका निम्ति निर्माण गरिएको ज्याम्रुङदरबार, नुवाकोट र काठमाडौँ विजय गरेपछि मिलेको थियो। प्रतापसिंह शाहको राज्यकाल वि.सं. १८३२ मा शान्तरूप शाहको मृत्यु भएको र नरु शाह टुहुरा भएबाट प्रतापसिंह शाहले आफ्नै रेखदेखमा राखेका थिए। प्रतापसिंह शाहको मृत्युपछि नरु शाहलाई क्रियाकाज गर्न लगाई ज्याम्रुङदरबार, डिही र धानखेत सेरोफेरो मिलेको थियो। चौतरिया बहादुर शाहसँगै निर्वासित बन्न पुगेका नरु शाहले नरशाहीटप्पुको सिर्जना गरेका थिए। नेपालको एकीकरणपछि नरशाहीटप्पुको महत्त्व खूब बढेको थियो। गर्मी मौसममा ज्याम्रुङ र ठन्डी महिनामा नरशाहीटप्पुमा बस्ने गरेका नरु शाहले राजकीय सिकारको बन्दोबस्त मिलाउँथे। उनले गणेश देउतानामक हात्ती सँधाएपछि सर्वप्रथम ज्याम्रुङदरबार पुऱ्याई

केही दिन मुकाम गराई सदर नेपाल कान्तिपुर वसन्तपुर हात्तीसारमा पुऱ्याएका थिए । नरशाहीटप्पुबाट धादिङ ज्याम्रुङसम्म हात्तीहरू पुऱ्याउँदा नदीको किनारै किनार लगियो । पहाडमा हात्ती उकालो नचढ्ने हुँदा घुमाउरो गरी सदरबाटो बनाइन्थ्यो । वि.सं. १८५२ मा ज्याम्रुङदरबारमा हात्ती पुऱ्याइएको थियो ।[१८]

चौतरिया नरु शाह जयाम्रुङदरबार र नरशाहीटप्पुमा बस्दै आएका थिए । तराईमा हिउँद लागेपछि बाघलाई घेरेर मार्ने तरिका पनि विचित्रको हुन्थ्यो । बाघ भएको ठाउँवरपर सेतो कपडाले घेरेपछि तलबाट बाघ छिरेर नजाने हुनाले माथिबाट फड्कने बेलामा गोली हानेर मारिन्थ्यो । राजाहरू, भारदारहरू, विदेशी पाहुनाका साथ सिकारमा दफन बस्न सिपालु मानिसहरूसाथ दरबारका नानी सुसारेहरू पनि सहभागी भई आ-आफ्नो भूमिका निर्वाह गर्दथे ।

मध्यकालिक नेपालमा सिकारको परम्परा व्यापक थियो । त्यसैको अवशेष नेपाल एकीकरणपछि र राणाकालसम्म व्यापकरूपले सिकार गरिन्थ्यो । त्यसलाई अऊ रोचक पार्ने काम बेलायती भारतका शासक र प्रशासकहरूको सहभागिताले राणाकालमा गुल्जार पारेको पाइन्थ्यो । शाहकालमा त महिनौँ सिकार चल्दथ्यो र सिकारी टोलीमा वैद्य, भान्से, शिल्पी, कर्मी, कुल्ली, दाउरे, ढाके, छाते, डोले, पानसे, हुक्के, सुसारे, तालिमे, ढोके, पोसाके, नट, नटी, भाइभैयाद, चौतरिया, साहेबज्यू, शाहज्यादा तथा विशिष्ट भारदारहरूको लस्कर लाग्दथ्यो । सिकारीहरूले दिनहुँ प्युरा, च्याखुरा, बट्टाई, कालिज, थार, रतुवा, मृग, जरायो मारेर सिकार पुऱ्याउँथे । हात्ती, गैँडा, बाघ, चितुवा, भालु, बनेलको विशेष सिकार हुन्थ्यो । सकेसम्म हात्ती छोपिन्थ्यो तर ज्यादै मात्यो र सतायो भने मात्र मारिन्थ्यो । सिकारको मुटुकलेजो, राजखानी विशेष व्यक्तिलाई मर्यादाक्रमका आधारमा खान मिल्दथ्यो । मासुका धेरै परिकार बनाउँदा सबैजसो भाग प्रयोग गरिन्थ्यो । नेपालको एकीकरणबाटै चौतरिया नरु शाहले शाही सिकार गराउँदै आएको कुरा उनका सन्ततिहरूबाट जानकारी पाइन्छ ।

---

*१८. काठमाडौं वनस्थलीनिवासी डा. विश्वविक्रम शाहबाट प्राप्त जानकारी । धादिङ मैदीकोट निवासी विष्णुप्रताप शाहको वर्णनका आधारमा ।*

चौतरिया नरु शाहको विवाह पाल्पाको राजपरिवारमा भएको हुँदा बहादुर शाहको पनि पाल्पामा नै विवाह भयो । विवाहकै कारण पाल्पालाई नेपालसँग सन्धि गराई पश्चिमतिर विजय गर्ने योजनालाई सफलता बनाउन नरु शाहले विशेष भूमिका खेलेका थिए । चौबीसी सङ्गठनको नाइके पाल्पालाई तोडी नेपालतिर मिलाएपछि चौबीसीको नेतृत्व गर्ने भूमिका पर्वतले लिएको भए पनि त्यो हद्दै कमजोर बन्न गएको थियो । यदि नरु शाहले त्यो भूमिका निर्वाह नगरिदिएका भए नेपालको पश्चिमविजय गर्ने अभियान सफल हुन सक्ने थिएन। पाल्पासँगको विवाहसम्बन्धपछिको कूटनीतिक चाल चल्ने अक्कल नरु शाहले झिक्न नसकेको भए नेपालको एकीकरण र बहादुर शाहको पालामा त्यति धेरै भूभागमा नेपाल फैलिन सक्ने थिएन ।

वर्तमान नेपालको स्वरूप टिस्टादेखि सतलजसम्म बनाउने नेपाली वीर, कारिगर, अक्कलीहरूमध्ये नरु शाह पनि एक मानिन्छन् । उनको वंश गोरखा राजघरानासँग सम्बन्धित भए पनि शाहवंशीय राजाहरूले आफ्ना भाइ, भतिजा प्रभावशाली, शक्तिशाली, धनी, उच्चपदासीन र शिक्षित भए भने आफ्नो शक्ति क्षीण हुने आशङ्का रहन्थ्यो । त्यस्तो भय राजाहरूमा रहेबाट चौतरिया, साहेबज्यू, भारदार तथा भैयादहरूको कहिल्यै सुखी जीवन व्यतीत हुन पाएन । त्यस कुरालाई नायब बहादुर शाहको दुःखान्तको घटनाले परिपुष्टि गर्दछ । नरु शाहको जीवनलीला पनि केन्द्र काठमाडौँबाट फराक पर्ने धादिङ ज्याम्रुङ दरबारमा कष्टपूर्ण जीवन व्यतित गर्नुपरेको जानकारी हुन्छ । नरु शाहको मृत्यु वि.सं. १८५२ मा भएकाले उनले बहादुर शाहको अन्त्य देख्नुपरेन। वि.सं. १७८९ मा जन्मेका नरु शाह पुगनपुग ६३ वर्ष जीवित रहेको बुझिन्छ । चौतरिया नायब बहादुर शाहका दाहिने हातको रूपमा रहेका नरु शाहको छिटै मृत्यु भएकोले दरबारिया षड्यन्त्रबारे नायबलाई जानकारी हुन पाएन । नरु शाहको दुई वर्षअगाडि मृत्यु भइदिँदा दरबारमा बहादुर शाहका विरोधीहरूले टाउको उठाउने मौका पाए । त्यस्तो वातावरण आउनुको कारण राजा रणबहादुर शाहलाई सिकारका कथा र सिकारप्रति आकृष्ट गराउने र दरबारका षड्यन्त्र बुझी

बहादुर शाहलाई सतर्क गराउने नरु शाह अब नरहेकाले बहादुर शाहलाई ठूलो धक्का पऱ्यो। नरु शाहको मृत्युले गर्दा राजासँग हुने गोप्य षड्यन्त्रको सूचना बहादुर शाहसँग समयमै पुऱ्याउने सम्पर्क व्यक्तिको अभाव भइसकेको थियो। त्यसको प्रत्यक्ष असर नेपालको निर्माण कार्यमा पर्न गयो। नरु शाहले नेपालको एकीकरणमा प्रत्यक्ष र परोक्षरूपमा गरेको अमूल्य सहयोगको मूल्याङ्कन हुन बाँकी नै रहेको छ। त्यस्ता नेपालका विभूति नरु शाहको स्मरणार्थ स्थापित नरशाहीटप्पुको संरक्षण र पर्यटकीय स्थलको रूपमा विकास गर्नुपर्ने देखिन्छ। नरशाहीटप्पु नेपालको ऐतिहासिक सिकार गर्ने केन्द्रस्थल हो।

✍

# संस्थागत अभिवादन र थोरै कुरा

*– राममणि रिसाल*

सर्वप्रथम संस्थागत अभिवादन 'मदन पुरस्कार गुठी'लाई । जसको मूल नेतृत्वमा सबै सञ्चालित र पुरस्कृत छन् । 'प्रकाशन' 'पुरस्कार' र 'पुस्तकालय' सबै 'गुठी'कै अँगालोमा अग्रता प्राप्त गरिरहेका पाइन्छन् । २०१२ सालदेखि अनेक कार्यकारण सजिला र असजिला यात्राहरू तय गर्दै यो अग्रसर छ। शिरबिन्दु र श्रीबिन्दु जे भने पनि यही हाम्रो । नेपाली भाषानुरागीका हृदयमा यही अभिनन्द्य छ। हुन त, विषय र वस्तु भन्नु सबै संसारको सिर्जना। समग्रतामा जिन्दगी मोहबाट सुरु र मोहभङ्गबाट समाप्त हुन्छ जीवन दर्शन यही। फेरि, हाम्रा स्मृतिको पनि निश्चित एउटा रेखा हुन्छ, 'जोमिट्री' (रेखागणित) को मात्र रेखा हुँदैन । नेपाली भाषा र साहित्यप्रतिको सेवा र समर्पणको स्वर्णीम रूपरेखा र जगमा उठेर फिँजारिएको छ सर्वत्र सिङ्गो 'गुठी' । अन्य सबै यसैमाथि फलेफुलेका हुन् । साधारणतः संस्थागत स्मृतिचर्चा र अभिवादनबाट कुरा सुरु गर्न चाहन्छु । दोस्तावस्कीले कतै भनेका छन्– 'मान्छे सबभन्दा बढी प्रसन्न आफ्नो कुरा गर्दा हुन्छ ।' म पनि त्यस्तै फिरन्ते छु। कहीं आत्मपरकताको आधिक्य झुल्किँदा सो 'क्षम्य' समेत होओस्, भन्ने मेरो निवेदन यससँगै छ ।

धेरै दिन गुडेछन्, 'मदन पुरस्कार पुस्तकालय' र *नेपाली* (पत्रिका) भित्र प्रवेश नभईकनै मेरा पनि । अहिले सम्झायो, अनुरोधपत्रले पुराना दिनहरूलाई । यतिखेर, मैले तीनबीस हिउँद राम्ररी पचाइसकेको छु । हिजो 'विद्वद्वृत्ति' थाप्दाका बखत भएका कालाकेशराशि सबै हिमालीरङ्गले पोतिइसक्यो। आवाजहरूको ज्योति उठ्थ्यो जुरुकजुरुक कलेजका कक्षामा पढाउँदा, अब ती स्वर पनि मधुरो भई सुकिसके बिस्तारै । थिएँ, म भाग्यमानी ती सुकिला दिनहरूमा । २०२३/२०२४ सालतिर 'मदन पुरस्कार पुस्तकालय' भित्रको १०-५ बजेको बसाइ-पढाइ सुखद लाग्छन्, अति नै। सायद, यही भयो मेरा अध्ययनको पहिलो आधारशिविर। यसैले,

गतिलो 'प्राध्यापक' मलाई बनायो भन्छु । होइन, सुरुमै यी कताबाट बर्से मेरा कुरा ।

आफ्नो सबै देशको भू-भाग र विदेशका केही ठाउँ घुम्दाफिर्दा पनि संस्कारगतरूपमा 'मदन पुरस्कार पुस्तकालय' सिङ्गो बस्ने मेरा मनभरि । म बिर्सूँ ती मेरा दिन अहिले कसोरी ? जहाँ पुगे पनि मेरा लागि उत्प्रेरकतत्त्व यही थियो र भैरह्यो । म एकै सासमा त्यता बज्छु, आफ्नै मनका तारतारहरूमा । भित्री कुरा ठूलो रै'छ । यहीँ छेउ, 'मदन पुरस्कार गुठी'कै प्रकाशन *नेपाली*ले हालसम्म अध्ययन र अनुसन्धानका क्षेत्रमा पुऱ्याएको योगदान हेर्दा यथासम्भव आफ्ना शब्द- कुसुमाञ्जलि त्यता चढाउने लालसा बलवान् भई अगाडि उभिन्छ । तर, पीर एउटै, केकस्ता विषय उठाउँदा संस्थागत, समसामयिक र उपयोगी हुन जाने होला भन्ने लाग्छ । उठान-बैठान भैरहेछ गोलमाल ! जेहोस्, अहिले मूलसंस्थासित पूरै गाँसिएर पो अगि बढौँ कि ?

सोच्छु, मेरा मूल्यवान् उमेर र समयको सदुपयोग गर्ने त्यस पावन थलोका सम्बन्धमा भोगे-देखेका केही कुरा चिनारीकै रूपमा भए पनि लेख्दा बेस होला भन्छु । म र 'पुस्तकालय'सँगै *नेपाली* (पत्रिका) को सान्दर्भिकतासमेत त्यहाँ आओस् भन्ने मेरो कामना छ । एकप्रकार अतीतको सानो सिंहावलोकन कमजोर मेरा मानसिकताको । यही इच्छा, अधूरो र अपूरो । अरू किन धेरै भनौँ ?

'मदन पुरस्कार पुस्तकालय'मा पहिलो प्रवेश र त्यताको चिनारी खोतल्दा भर्खर त्रिभुवन विश्वविद्यालयमा स्नातकोत्तरतहको विद्यार्थी छँदा पुस्तकालयमा पढ्ने सहयोग तात्कालिक गुठीका सचिव श्री कमलमणि दीक्षितबाट मिल्यो, खुसीसाथ । समय तोकियो, अपराह्न चारदेखि छ बजेसम्मको । 'मदन पुरस्कार पुस्तकालय'मा पढ्ने योग्यता र आधारहरू रहेछन् । पढ्यौँ दिनदिनै । यो २०२१/२२ सालतिरको कुरो हो । त्यहाँ हालका मदन पुरस्कार गुठीका कार्यालय सचिव तथा पुस्तकालयका तात्कालिक इन्चार्ज श्री गजेन्द्रनाथ रेग्मी (जो ५० वर्षसम्मको जीवन र जवानी 'गुठी'कै वरपर बिताई कदर स्वरूप पुरस्कृतसमेत भएका व्यक्ति) को लामो सेवा, कुशल व्यवस्थापन र अनुभव उल्लेखनीय रहेको थियो । म बिर्सन्नँ, त्यो कहिल्यै ।

यसरी, अध्ययन र प्राध्यापनमा बितेका मेरा वर्षका शृङ्खलाहरू एकआर्कासित भाग्दाभाग्दै पनि अन्तर्ग्रथित हुँदा रहेछन् । क्रम-उपक्रमका ताँतीताँती/जीवनधारा भाँतिभाँति । अतीत व्यतीत भनी म सीधै टाल्दिनँ । निरन्तरताको गाढा सम्बन्धको पक्षपाती छु म । प्राणान्त नभई केही विसर्जित हुँदैन भन्ने लाग्छ । फेरि नबिर्सौं; परम्परागत आफ्ना पुर्ख्यौली विशेषताको पालना, सेवा र साधनाका साथ भैदियो भने चिरञ्जीवी हुने रै'छ मान्छेको जात । फेरि, सरदार स्व. राममणि आ.दी.को वि.सं. १९६५ *माधवी* प्रकाशनदेखिको नेपाली भाषा र साहित्यमा भएको विशेष योगदान र लामो परिष्कृत परम्परालाई तीन पुस्ता (अरू चौथो पुस्ता समेत)ले थाम्दै-उचाल्दै आउनुले ठूलो कुरो कहन्छ । हो, 'मदन पुरस्कार गुठी' अन्तर्गतका तीन चार शृङ्खला अधिक उल्लेख्य छन् । 'मदन पुरस्कार', 'मदन पुरस्कार पुस्तकालय', अनि 'जगदम्बा-श्री पुरस्कार' । नेपालका यी नामी काम कुरा भएका छन् । *नेपाली* यिनैका सुन्दर अँगालो र उच्च सँगालोभित्र उल्लेख्य अङ्क भएको छ । विशेष गरी 'मदन पुरस्कार' र 'जगदम्बा-श्री पुरस्कार' आफैँमा महिमाशाली महान् अङ्क बनेका छन्। भुल्नुहुँदैन, राणाका दरबारभित्र प्रत्यक्ष-अप्रत्यक्षरूपमा नेपाली भाषा र साहित्यलाई प्रवेश गर्न-गराउन बनारसदेखि काठमाडौँसम्मको लेखन-प्रकाशनको दह्रो लगनगाँठो बाँध्नमा धेरै अघिदेखि दीक्षित परिवारको यथेष्ट योगदान रहेको छ। नेपाली भाषा-साहित्यका अनुरागी लेखक तथा प्रकाशक सबैका लागि यो एकप्रकार साझा अनुकरणीय कुरा बनेको छ ।

कसैलाई लाग्दो होला सर्वत्र 'मदन र जगदम्बा'को नै नामोच्चारण किन हुन्छ ? नढाँटीभन्दा भाषासेवी सिङ्गो 'दीक्षितपरिवार' कृतज्ञताका नाममा मात्र यता फर्केको हो। जसका स्नेहसिञ्चित धन र धरतीमाथि यी सबै कामकुरा सम्भव र स्थापित हुन पुगे र फलेफुलेका छन् । तिनै नाम, प्रसङ्ग, सहयोग र स्थानले महत्त्व पाउनुमा अनुचित पनि कसरी हुन जाला र ? हिजो को कहाँ थियो भन्नुले यसमा फरक पार्दैन । मान्छे नाम र कामसँग गाँसिन्छ र साँचिन सदा खोज्छ । यसैका भावनात्मक पृष्ठभूमिमा सिँगारिँदै अघि बढ्छ/अन्यथा श्रम-पसिना, सेवा र त्यागको पछि इतिहासमा के

रहने भो र ? अर्को, जे कुरा तात्कालिक हाम्रा मूर्धन्य साहित्यकारहरूद्वारा उचित ठानी प्रस्ताव पारित गरियो र सर्वमान्य ठहरियो। उही 'दीक्षितपरिवार'ले शिरोधार्य गरेको विषय यो थियो/लहड एक्लोको थिएन । यसको दिनानुदिन प्रगतिको कामना हाम्रा लागि अहिले ठूलो। अन्यथा यी सबै भाषा-साहित्यमाथि हिजो र आज भएका हस्ताक्षर र लगानी त्यसै खेर गइसक्थे/न यता न उता हुन्थ्यो। जे भएको छ, त्यो उत्तम-अत्युत्तम सुकार्य भएको छ भन्छु। म आफू त्यसै 'गुठी परिवार'को एक सदस्य भएकोले गौरव अनुभव गर्दछु।

२००७ साल अघि र पछिका शासक र तिनका परिवारले ठूला महल र अग्ला पर्खालहरूभित्र राखेका श्रीसम्पत्ति कहाँ उडे र कसरी त्यसै स्वाहा भएका छन्, तिनको पत्तोफाँट कहाँ छ ? सायद, अहिले तिनको सदुपयोग भए-नभएको हेर्ने कति प्रत्यक्षदर्शीहरू वरपर बसी मूल्याङ्कन गर्दै होलान्/छन् । इतिहास सधैँ पेवा कसको पो भएको छ र ? हो, निष्ठा र समर्पणले उठाएका र बढाएका कामकुरामात्र ऐतिहासिक अभिलेख बन्न जाने हुन्छन् । सुकार्य र दुष्कार्यको परीक्षा र मूल्याङ्कन भोलिका लागि पनि यही हो। सबैबाट यस्ता असल काम हुने र भएका पनि यहाँ कमै छन्। यसमा 'दीक्षित परिवार' विशेष गरी अनन्य भाषासेवी श्री कमलमणि दीक्षितको योगदान र सेवा आपूर्व छ। साधना र समर्पणको जीवित उदाहरण 'कमलबाबु' ।

२०२० साल अगि नै *नेपाली* को म सानोतिनो पाठक बनिसकेको थिएँ। यद्यपि, त्यसभित्र प्रवेश गर्ने लेखकीय हुति भने थिएन, मेरो। साँचोभन्दा आज पनि छैन। वरपरदेखि हिजो हुन्थ्यो केवल साधारण नमस्कार ! एक प्रशंसक, पाठक र सङ्कलकचाहिँ म भएँ, थोरै। यसदेखि बिलकुलै पर उदासिन बन्नचाहिँ मलाई गाह्रो छ। कुनै बेला *नेपाली*भित्र प्रकाशित उल्लेख्य लेख-रचनाहरूको मात्र भिन्नै पृथक् प्रकृतिको सानोतिनो सङ्ग्रह वा पुस्तक तयार पार्ने योजना मेरा मनमा उदाएको थियो। सिङ्गो समय त्यसमा दिन नसक्ता बीचैमा त्यो सपनी तुहियो। थोरै खिन्नता उदायो र अस्तायो। यद्यपि, 'प्रकाशन' र 'पुस्तकालय'का सम्बन्धमा दिनानुदिन

धेरै राम्रा कामकुरा भैरहेका छन्, अहिले पनि ठूलो खुसी यही। शब्द बाँच्छ हजार वर्ष 'लेखनी'को अँगालोमा बाँधिदा ।

विगत ५० वर्षदेखि नेपाली भाषा-साहित्य, संस्कृति, इतिहास, पुरातत्त्व आदि विषयमा *नेपाली*ले पुऱ्याउँदै आएको योगदानका साथै त्यसभित्रका दुर्लभ सबै सामग्रीहरू भोलिका दिन तथ्यमूलक एवं उपयोगी विषय बन्न जानेमा कुनै सन्देह छैन । निरन्तर सेवाले सिङ्गारिएको सुनौलो इतिहास *नेपाली* (त्रैमासिक) को अखण्डित प्रकाशनको छ। अन्य चाँडै उदाउने र अस्ताउने पत्रिका प्रकाशनका अनुपातमा यसलाई भिन्न र अतुलनीय ठान्दछु। साथै, आगामी दिनमा *नेपाली*को २०० औँ अङ्कमा स्तुत्य छ। नेपाली भाषा र साहित्यलाई अरु गरिमामय बनाउन हुने यस्ता महासङ्कल्पको ऐतिहासिक महत्त्व हुने कुरामा म विश्वस्त रहेको छु । यथार्थमा विना भिक्षा र विनाविज्ञापन चलेको यो एक बहुमुखी चिन्तन-चित्र आफैँमा मौलिक र बेग्लै धरातलमा अवस्थित छ । यहींनिरै, *नेपाली*को 'मदन पुरस्कार गुठी'सँगको संस्थागत सान्निध्य र गाँठो निकै लामो र बलियो छ, यो कदापि बिर्सनुहुँदैन ।

वास्तवमा 'कमल दीक्षित'को कलम *नेपाली* माथि र कमलका पुस्तकहरूको सङ्ग्रह 'मदन पुरस्कार पुस्तकालय' भित्र सङ्गृहित हुनुको विशेष तारतम्यले अथक सेवा र समर्पणको संस्थागत गतिलो उदाहरण पेस गरेको छ। कलमको सङ्ग्रह र किताबको सङ्ग्रहलाई प्रभावी हुन दिने दुवै हिजोका सचिव र आजका अध्यक्ष एकै व्यक्ति/एकै 'गुठी'का । एकप्रकार पारिवारिक अन्योन्याश्रित स्नेह सम्बन्धकै कारण यस्ता अग्रगामी परम्परा जन्मिने र त्यसैअन्तर्गतका कार्यकारणहरू सफल हुने कुरा देखिने गर्दछन्। अन्यथा आधा शताब्दी अक्षरमा यताउति नगरी/नपारी बाँच्ने *नेपाली*का स्वर्णमहोत्सवको यस्तो सुवर्ण संयोग बन्ने नै थिएन। हुन त, के कति गर्दा हुने भन्ने कुनै सीमा नै छैन । तर घुमीफिरी कार्यगत एकता र सफलताको आधार खोज्दा त्यो सबै 'मदन पुरस्कार गुठी'कै संस्थागत पोल्टामा हाल्न चाहन्छु । 'संस्था' मेरा लागि सर्वोपरि कुरो ।

'धन्य' छ, 'मदन पुरस्कार गुठी' । नेपाली भाषामा लेखिएका पुस्तकहरू यसैले खोजीखोजी पुरस्कार दिन्छ, योगदानको कदर गर्छ,

त्यो पनि गहकिलो रकमसहित वर्षैपिच्छे दुई-दुईओटा । यो क्रम २०१३ सालदेखि नै यथावत् चालू रहेको छ आफैँमा पुरस्कार महत्त्वपूर्ण छन् । 'गुठी'को एकप्रकार पौरख र सौरभ म यतैतिर बढी भेट्छु । अनि साध्य र साधनाको मीठो मिलनविन्दु पनि यहीँ देख्छु ।

प्रसङ्गवश भनिहालौँ यो कुरो पनि । नेपाली भाषा र साहित्यमाथि अध्ययन-अनुसन्धान गर्ने/गराउने एक सुकार्य र उत्तम लगानी बनेको 'मदन पुरस्कार विद्वद्वृत्ति' प्रदान गर्ने सुकार्यलाई नरोकी निरन्तरता दिने विषयमा 'गुठी'ले अब गम्भीरतापूर्वक सोचोस् भन्ने मेरो यहाँ विनम्र अनुरोधसमेत छ । यसैबाट संस्थागत इतिहास उठ्ने र आस्थागत विस्तार हुँदै जाने कुरो निश्चित छ ।

अर्को 'मदन पुरस्कार पुस्तकालय'को कडा नियमका कारण पढ्न पाइएन भन्ने अध्येताहरूको बढ्दो सङ्ख्या र गुनासो त्यहाँ पनि पहिले पुगिसकेकै हुनुपर्छ । यसमा पुस्तकहरूको सुरक्षालाई प्राथमिकता दिई सानोतिनो व्यवस्थापन मिलाउन सक्दा यता 'श्रेय' मिल्न जाला कि ? पहिलेदेखि मैले यो भनेको र सुनेको थिएँ, फेरि पोखेँ यहीँ अहिले ।

थोरै कुरा राखौँ कि अझै *नेपाली* (त्रैमासिक) कै सन्दर्भमा । यसका केही पुराना 'पूर्णाङ्क' (विशेष गरी १०८ र १५१)हरूले समय समयमा उठाएका विषयगत प्रसङ्गहरू तर्कसङ्गत र यथार्थिक लाग्दालाग्दै पनि कताकता मेरो भित्र *नेपाली* नअस्ताओस् र नैराश्य हटोस् भन्ने हार्दिक कामना रहेको छ, यसमा शङ्का छैन । अनुभवी सम्पादकले उठाएका समस्या एकातिर खोजे जायज र समाधान हुन सक्ने देखिन्छ भने अर्कोतिर हाम्रा आलस्य र उदासिनतामाथि चिन्तन गर्नु अहिले आवश्यक कुरो भएको छ । हो भावनाको अनुवाद शब्दले गर्छ, सीधै वा घुमाइफिराइ । ठानेँ, पहिलो, 'प्रकाशन'प्रतिको अगाध आस्था र स्नेहको प्रतीकात्मक चिन्तन र दोस्रो एक समर्पित 'एकलव्य' (सम्पादक)का लेखनीको स्पष्टोक्ति । यस 'गुठी' का मुखपत्रको आधा सय उमेर लहडले मात्र बितेको ठान्नु कबै हुन्न । सोची सम्झी यो स्वत: स्फूर्तरूपमा उदाएको प्रमाण *नेपाली* नै यो साँचो ।

वास्तवमा नेपाली भाषा-साहित्यका पत्र-पत्रिकाको नियति निश्चित छैन । नीति र नियतको सफल राजमार्ग पनि कतै स्पष्ट पाइन्न ।

यसैले, उदाएका कति पत्रिका हेर्दाहेर्दै हाम्रा सामुबाटै अस्ताए । तर *नेपाली* भने 'गुठी' परिवार, लेखक र सम्पादकका शुभेच्छु नजर र सिर्जनशील अँगालोमा बेसरी कस्सिएको छ, यही खुसीमाथिको खुसी । आगामी दिनका लागि भनौँ, २०१६ सालदेखि २०६५ सालसम्मको लामो 'भूत, भविष्य र वर्तमान' को त्रिकालदर्शी अभिलेख, अन्वेषण र सञ्चारणको सामर्थ्य यसैका सुनौला पानाहरूमा सुरक्षित रहने छ । हामी सबैको यही साझा एकमात्र *नेपाली* हुनेछ । अध्येता र अनुसन्धाताका लागि प्रिय कोसेली । षोडशोपचारको अक्षरपूजा र स्वर्णाङ्कित इतिहास । बन्ने छ, भोलि यसको यही गौरव र सार्थकता । यो प्रशंसामात्र हुने छैन ।

अन्त्यमा *नेपाली*को एकै मूल उद्देश्यका तर भिन्नभिन्न सामग्रीहरूका एक वर्षको चारओटा निस्कने पूर्णाङ्कहरू आधा शताब्दीदेखि निर्विघ्न प्रकाशित हुँदै जानुले समेत त्याग, तपस्या र समर्पणको एकल उदाहरण पेस गरेको छ, यही ठूलो । निष्ठाको साहित्य सेवा एक सन्न्यासी पेसा/यस्तो संस्था वा चरित्र सदा उत्प्रेरक र प्रणम्य बन्छ/बनेको छ । अब पनि हिमाल, पहाड र तराई यहीँ बोलोस्, खोज चलोस् र सिङ्गो देशदर्शन हुने-गर्ने काम थालियोस् । यही हुनेछ, भोलिका लागि पनि आजैको एकमात्र लगानी । यत्ति !

✍

## 'तिम्रा अक्षरहरूको आयाम'भित्र 'कलाको मन्दिर त्यो, अमृता प्रीतम यी आँसुहरू'

*– राधिका राया*

२००४ सालमा भारतीय नेपाली लेखिकाको रूपमा दार्जिलिङबाट साहित्य अकादमी पुरस्कार ग्रहण गर्न भारतको राजधानी दिल्लीमा आइपुगेकी लोकप्रिय प्रसिद्ध भारतीय लेखिका अमृता प्रीतमसित भेट गर्न विन्द्या सुब्बा पुगिन्– अमृता प्रीतमको कलाको मन्दिरमा । साथमा हुनुहुन्थ्यो उनका श्रीमान् पूर्ण हाङखिम, प्रोफेसर डा. हरिप्रसाद श्रेष्ठ, काठमाडौँबाट र मीना सुब्बा, सिक्किमबाट पनि साथै हुनुहुन्थ्यो ।

त्यस दिन, १ मार्च सन् २००४ को महत्त्वपूर्ण दिन थियो । दिउँसोको १२ बजेतिर दिल्ली नगरीको हाउजखासतिर, अमृता प्रीतमको वासस्थानतिर, यो महत्त्वपूर्ण भेटघाटको कार्यक्रम दिल्ली आकाशवाणीमा कार्यरत प्रकाशप्रसादज्यूको प्रबन्धबाट भएथ्यो । तीन-चारतले भवन, हिन्दी भाषी साहित्य उपासिका अमृता प्रीतमको पवित्र साहित्यिक मन्दिररूपी घरमा, विन्द्या सुब्बा दर्शनार्थ पुगेकी थिइन् । हातमा ग्लेडियस फूलका कोपिला भएका कतिपय ताजा र झर्झराउँदा बुके लिएर ।

अमृता प्रीतमको घरको मूल ढोकामा भएको कलबेल बजाएपछि माथिल्लो तलातर्फ जान्छन् उनीहरू । चित्रकार इमरोजजीसित भेट हुन्छ– एक अग्ला छरिता, वृद्ध पुरुषसित । हात जोडेर उपस्थित सबैलाई सत्कार गर्छन्। काठमाडौँबाट आइपुग्नुभएका हरि श्रेष्ठज्यूलाई– 'धुस्वाँ कस्तो हुनुहुन्छ ?' भनी प्रश्न राख्नुहुन्छ– आदरणीय कवि धुस्वाँ सायमी विषयको । सन्तोषजनक उत्तर सुन्नुहुन्छ ।

विन्द्याजी माथिल्लो कोठामा पुग्नासाथ देख्छिन्– चित्रकारिताको, चित्रहरूको एक अनुपम प्रदशर्नीजस्तो । अमृता प्रीतम नै अमृता प्रीतम । छेउको अर्को कोठा पनि त्यस्तै चित्रहरूमाथ्र झुलेको, प्रसिद्ध चित्रकार इमरोजज्यूका चित्रकारितामा, चारै दिशामा अमृता प्रतीम कति लावण्यमयी र माधुर्यमयी !

इमरोजज्यूको सहमतिमा भेट्न गइन् तिनी अमृता प्रीतमको कोठाभित्र तिनलाई भेट्नलाई 'माया' भनी बोलाउनुभयो इमरोजज्यूले। सुतेकी देखिइन् एक बिरामी वृद्धा, सिरानीछेउ घोप्टिएर शिरसम्म ओढाइएको लुगा अलिकति हटाउँदा विन्द्या सुब्बाले देखिन्– यौवनावस्थाबाट वृद्धावस्थामा ढल्केको जीवन ! के तिनी नै अमृता प्रीतम हुन्– जसले सारा विश्वलाई र विश्वका सम्पूर्ण सत्य, सौन्दर्य र मानवीय संवेदना तथा हृदयका प्रेम र अनुभूतिहरूको सम्पूर्ण रहस्य खोल्न सफल भएकी थिइन्। आज यस्तो अशक्त अवस्थामा, के यहाँ नै हुनुहुन्छ प्रसिद्ध बहुचर्चित सर्वाधिक लोकप्रिय भारतीय महिला लेखिका अमृता प्रीतम ?

विन्द्या सुब्बाले आफ्नो बायाँ हात उहाँको नरम पातला र सेता केशहरूमाथि राखेर अनि दायाँ हातले उहाँको ओढ्नेभित्रको हात समाएर आफ्नो परिचय हिन्दीमा दिन्छिन्– 'हामी दिल्ली आएका छौँ, तपाईंको दर्शन नगरी कसरी फर्कने ? एक प्रशंसक हुँ म तपाईंको !'

प्रत्युत्तरमा एक मधुरो र अस्पष्ट स्वर सुनिन् विन्द्या सुब्बाले– "ठिक है, अच्छा ही किया।"

विन्द्या सुब्बा भन्छिन्– "आँखाको डिलमा कुनै बाँध हुँदैन, त्यसैले त्यहाँ उर्लन लागेको बाढीलाई रोकेर बाहिर निस्कँ म।"

यसरी नै उपस्थित हरिज्यू, मीना र पूर्णज्यू अलिक ओरैबाट दर्शन गरेर चकित भए।

भेटघाटको कार्यक्रमपश्चात् अघिकै ठाउँमा सबै पुनः बसेपछि इमरोजज्यू भन्नुहुन्छ– "चौरासी वर्ष पुगिन्, ठीकै थिइन्, हामी दुवै मिलेर सबै काम गर्थ्यौं, तर दुई वर्षअघि लडेर फिलाको हाड भाँचियो र त्यहाँ लोहाको रड लगाइएको छ, त्यसै समयदेखि बिछ्यौनामा सीमित छिन्।"

"भारतको दोस्रो सर्वोच्च नागरिक सम्मान– 'पद्मविभूषण पुरस्कार' ग्रहण गर्न अमृता प्रीतमको छोरा जानुहुन्छ। उनलाई त त्यसमा केही एक्साइटमेन्ट नै छैन। एक्साइटमेन्ट त त्यस्ता

व्यक्तिहरूले मात्र गर्दछन् जो आशा गर्छन्, उमेर हुन्छ।" इमरोजज्यू विन्द्या सुब्बाले सोधेका प्रश्नको यसरी उत्तर दिनुहुन्छ।

चित्रकार इमरोजज्यू एक असाधारण प्रेमी, जसले अमृताका सम्पूर्ण अपार सृजनशक्ति भएको व्यक्तित्व सौन्दर्य, गुण-अवगुणलाई लिएर स्वीकार गर्नुभएको छ। एक त्यागी चित्रकारझैं।

कलाको अनुपम सङ्गम, यी दुई व्यक्तिहरूमा। एकै छानोमुनि दुई सहयात्रीहरू। यी माया र त्याग देखेर अमृता प्रीतमले लेख्नुभएका केही वाक्यहरूको विन्द्या सुब्बालाई सम्झना आउँछ– नेपालले मेरो त्यो कलमको सत्कार गऱ्यो, त्यही कलमले मैले तिम्रा निम्ति प्रीतमको गीत लेखेकी थिएँ, यसैकारण मैले जति फूलहरू पाएँ इमु, तिम्रै यादमा समर्पण गरेँ।

विन्द्या सुब्बाले आफ्नो शीर्षकमा लेखेकी छन्– "यी आँसुको प्रत्येक चित्रकारिता अवलोकन गर्दा तिनमा आँसुहरूले साथ दिइरहेथ्यो, हुन सम्भव छ– अति रुग्ण अवस्थामा सुतिरहेकी अमृता प्रीतमलाई आफ्नै आँखाले देख्नुपर्दा, यो दुःखको आँसु हो। सुखको आँसु पनि हो– अमृता प्रीतमसित भेट गर्न पाउनु, यो अहोभाग्य हो अनि उहाँकै कृतिहरूमाझ उहाँ बाँचिरहेको देख्न पाउनु सौभाग्य पनि हो। तर म भन्छु अमृता प्रीतम सम्पूर्ण साहित्यिकहरूको हृदयमाझ आफ्ना अनगिन्ती कृतिहरू सम्हालेर अझ सुन्दरी भई सुतिरहेको देखिनुपर्छ।"

अन्तमा बिदाइ घडी पनि आयो। माननीय इमरोजज्यूले आफैं हातले बनाएको अमृता प्रीतमको एउटा चित्र ल्याएर विन्द्या सुब्बालाई उपहारस्वरूप दिनुभयो। यसरी नै हरिज्यू र मीनज्यूले पनि पाउनुभयो। यो क्षणिक मिलन, यो उपहार एउटा बहुमूल्य अध्याय अविस्मरणीय भएर रहिरहेको छ, विन्द्या सुब्बाको हृदयमाझ।

विन्द्या सुब्बाका शब्दहरूभित्र म पनि त्यही अथाह सागरभित्र डुबुल्की लगाइरहेछु– सुन्दरी अमृता प्रीतम, युवतीको रूपमा, आमाको रूपमा, विह्वल प्रेमिकाको रूपमा, विप्लवी नारीको रूपमा र सर्वाधिक एक सशक्त एवं युगान्तकारी लेखिकाको रूपमा, साह्रै ओजश्वी र सौन्दर्यमयी अमृता प्रीतम। एक समय भारतको राज्यसभाकी मनोनीत सदस्य पनि हुनुहुन्थ्यो।

एक सयओटा जति मौलिक कृतिहरूकी स्रष्टा अमृता प्रीतम २०-२५ ओटा कवितासङ्ग्रह, ३१ ओटा उपन्यास, ३६ ओटा कथासङ्ग्रह र लेखसङ्ग्रह, ३ ओटा जीवनी र अनगिन्ती फुटकर रचनाहरू । १९५४ मा दिल्ली साहित्य अकादमी पुरस्कार प्राप्त, १९८३ मा ज्ञानपीठ पुरस्कार । २०-२२ ओटा पुरस्कार र सम्मानले विभूषित अमृता प्रीतम । उहाँ पन्जाबी स्रष्टा हुनुहुन्छ । हिन्दीमा पनि लेख्नुहुन्छ । सम्पूर्ण भारतीय भाषा र कतिपय अन्तर्राष्ट्रिय भाषाहरूमा पनि अनूदित भएका देखिन्छन् उहाँका कृतिहरू । उहाँका कृतिहरूमाथि आधारित कैयौँ चलचित्रहरू, धारावाहिक वृत्तचित्रहरूबाहेक उहाँकै जीवनमाथि टेलिफिल्महरू बनेका छन् । भर्खरै पनि उपन्यास ‘पिञ्जर’ माथि आधारित चलचित्र ‘पिञ्जर’ नै निर्माण भएको छ– देश विभाजनको दुःखद स्थितिलाई लिएर लेखिएको उहाँकै उपन्यास ।

भारतीय साहित्यमा एक नैरन्तर्य हुन् महिला साहित्यिक अमृता प्रीतम ।

# समय र जीवनको बगाइ

*– रुकु कार्की*

"अहो ! मैले आफ्नो जीवनका पचास वर्ष थाहै नपाई बिताएछु । समय र जीवन पानीजस्तै लाग्यो मलाई– बगेको थाहै नपाइने । वास्तवमा जीवन त क्षणिक पनि रहेछ। बिहान, मध्याह्नी र साँझ हुँदै आउँदै-जाँदै गर्दो रहेछ जीवन । जीवन विवाहबन्धन, पतिसम्बन्ध, प्रेमालाप र सिन्दूर-पोतेमा मात्र सीमित हुँदैन । सन्तानको स्याहार-सुसार, लालनपालन, सरसफाइ, तेल लगाउने, थाङ्ना धुने, सुकाउने, पटयाउने तथा पारिवारिक खुसीकै लागि जीवन घुमिरहेको पो रैछ त। नारीको जीवन कर्मशील गतिशीलता हो, मातृत्व एउटा ईश्वरीय वरदान हो। सबै किसिमका अप्ठयाराको सामना गर्दै छोराछोरीलाई पढाउनु, लेखाउनु आदि सजिलो हुँदैन । पीडाजन्य स्थिति हुन्छ । मातृत्वको भार बोक्नु जति गरिमामय र ममतामयी थियो त्यति नै चुनौतीपूर्ण पनि ।

पहिले मैले साहित्यमा लागेर आफ्नो भावना र जीवन बुझ्ने कोसिस गरिनँ । जिन्दगीको लामो यात्रामा पेट भनेर, शरीर स्याहारेर एउटा राम्रो घर बनाउने, सजिलो जिन्दगी बिताउने, सुखी परिवारको परिकल्पना गर्नेतिर लाग्दा केही गर्न नसकेकाले पीडाबोध भयो । अनि म साहित्ययात्रामा लाग्न थालेँ । त्यसो त म किसान परिवारमा जन्मेहुर्केकी हुँदा साहित्य पढ्नै मुस्किल थियो । उतिखेर लेखनक्षेत्रमा लाग्ने कुरा सोच्न पनि सकिन्नथ्यो ।

मैले आफूलाई उपन्यास र संस्मरणमा मोड्ने प्रयत्न गरेँ । उपन्यास सिर्जना गर्दा आनन्दको अनुभूति हुन्छ भने संस्मरण लेख्दा आफ्नै जीवनभित्र संसार छामिरहेको हुन्छु । जीवनमा मुस्कानको अनुभव गर्छु। उपन्यास र संस्मरण आफूलाई मन पर्ने हुँदा रहरले लेख्न थालेकी हुँ। म आफ्नै पचास वर्ष पुरानो जीवन र अनुभूतिका कुरामा अल्झने गर्छु । एक दिन पनि चुप लागेर बस्न सक्तिनँ । उपन्यासले समाजलाई धेरै रूपबाट मार्गदर्शन गर्न सक्छ। संस्मरणमा आउने अनुभूतिमा गीत, कवितामात्र नभएर निबन्ध, कथा आदिका पाटा पनि हुन्छन् । पुस्तक मेरो प्रिय साथी हो । म पुस्तकसँग

रमाउँछु, हाँस्छु, रुन्छु; पढ्नलाई पनि उपन्यास, आख्यान र आत्मकका किताबहरू पढ्छु, जुन पढ्दा बढी आनन्द र रमाइलो लाग्छ। भाषा र शैलीको मिठासले पनि उत्तिकै छुन्छ। आजकाल म म्याक्सिम गोर्कीको 'आमा' र पर्ल एसवकको 'कल्याणी धर्ती' पढिरहेकी छु।

म स्मरण लेख्दा जीवनका घटनाहरूसँग आबद्ध हुन पुग्छु। त्यसमा मलाई जीवन बोलिरहेझैँ लाग्छ, मन अन्तरिक्षमा उडिरहेझैँ लाग्छ। आत्मकथा यति चाखलाग्दा र स्वादिला हुन्छन् त्यसैमा डुबुल्की मारिरहन मन लाग्छ। मलाई के लाग्छ भने मान्छे जो अध्ययन, मनन र साधना गरिरहन्छ ऊ कहिल्यै पनि एक्लो र निरुत्साही हुन सक्दैन। मलाई साहित्य जीवनको आधार भएको छ। साहित्यले समाजलाई ठूलो कुरा दिइरहेको हुन्छ। साहित्य आफ्नो ठाउँमा गरिमामय छ, जसले जीवन र जगत्भित्रका रहस्यहरूलाई खोतल्ने काम गर्छ। साहित्य विशिष्ट ज्ञानको भण्डार त हुँदै हो, उज्यालोमा देखिने घाम पनि हो। सृष्टिमा घामबाहेक अरू पनि उज्यालो के होला ? भन्दा हामी घामलाई नै देखाउँछौँ र भन्छौँ– साहित्य भनेको उज्यालो घाम हो, तर उज्यालो घामको मात्रै नभएर धेरै थरीको हुन्छ– जूनको, ताराको, आगोको, बत्तीको। त्यस्तै साहित्य पनि धेरै थरीको उज्यालो भएको पाइन्छ।

नेपाली साहित्यका महारथीहरू लेखनाथ, सम, देवकोटा, सिद्धिचरण श्रेष्ठजस्ता व्यक्तिहरू हिमालमा हिउँसँग लुकामारी खेलेको, प्रकृति र माटोसँगको प्रेमका बारेमा लेख्थे। लालीगुराँसमा देश हाँसेको र सुनगाभामा हिमाल फुलेको कविता लेख्थे; कहिले नदी, झरना, छहरा र तालहरूका कविता लेख्थे। त्यसको सुसेलीमा धर्ती नै गीत गाउँथ्यो, प्रकृति नै मुस्कुराइरहन्थ्यो। माया र प्रेम जीवनसँग मात्र हैन, धर्तीसँग हुन्छ, देश र माटोसँग हुन्छ, हिमाल र तराईसँग हुन्छ।

आजकाल म एक्लै सोच्ने गर्छु– यस्तो किसिमको ज्ञानवर्द्धक साहित्यको अध्ययनमा कमी भएर नै आज देशमा अनेक किसिमका विकृति र विसङ्गति फैलिरहेछन्। समय विपरीत भइरहेको छ, मानिसको कल्पनाभन्दा बाहिरका घटना घटिरहेका छन् दिनहुँ। मानवीय चिन्तन पाइला-पाइलामा अशान्ति, दु:ख, पीडा र वेदनाले ग्रस्त भएको पाइन्छ।

कि त मानिस सानैदेखि असल शिक्षा र राम्रो सरसङ्गतले सप्रन्छ कि ज्ञानसागरमा डुबेर । ती दुवै नभएमा मानिस कुकृत्यमा लागेर बिग्रन्छ । त्यसको निराकरणका लागि नेपाली साहित्य, अरु विश्वसाहित्य नै अध्ययन-मनन गर्दै जानुपर्छ । त्यस्तो हुने हो भने अवश्य पनि देश र समाजमा विकृतिका कार्य हुने थिएनन् ।

साहित्यको यात्रामा लाग्दा गोष्ठी, छलफल र समारोहमा पुगेपछि साहित्यका सर्जकहरूसँग जुन किसिमले भेटघाट हुन्छ र जुन किसिमको सम्बन्ध बढेको छ त्यो सागरजस्तै गहिरो छ, मीठो छ । विभिन्न अग्रज तथा समकालिक लेखकहरूसँग भएको सम्पर्क तथा साहित्यिक पुस्तक र पत्रपत्रिकाको अध्ययन-मननद्वारा आत्मीयता बढिरहेछ । समयले साथ दिए लेख्ने कुरा धेरै छन्, त्यसका निम्ति समय चाहिँदो रहेछ ।

समय अत्यन्त बलवान् छ, एउटा समय यस्तै आयो । शरद्यामको गोधूलि बेला थियो । २०६४ ।६ ।१५ ।४ को मदन पुरस्कार गुठीको भव्य कार्यक्रममा म हतारिँदै मनभरिको कौतूहल, प्रफुल्लता र प्रसन्नता लिएर पुगेँ । कति हर्ष र खुसीयालीको दिन थियो यो ! पाटनस्थित श्रीदरबारटोलको सुन्दर महलमा सम्पन्न भइरहेको त्यस दिनको पुरस्कार वितरण समारोहमा जाने जुन सौभाग्य मैले पाएँ, मेरा लागि त्यो अविस्मरणीय सुखद क्षण हो ।

यस वर्ष संयोगले घटस्थापनाको भोलिपल्ट (असोज १५ गते) मदन पुरस्कार गुठीद्वारा जगदम्बा-श्री र मदन पुरस्कार प्रदान गर्न आयोजित समारोहमा पुगेँ । वरिष्ठ साहित्यकार तथा श्रद्धेय मेरा गुरु कविवर कृष्णप्रसाद पराजुली र साहित्यकार, आख्यानकार जगदीश घिमिरे समारोहनजिकै बसिरहनुभएको थियो । भवनभित्र सिँगारिएका स्वागतम्को तुलले भद्रता र सौम्यता थपेको थियो । समारोहमा मदन पुरस्कार गुठीका अध्यक्ष कमलमणि दीक्षितले गहकिलो भाषण दिएपछि पुरस्कार वितरण कार्यक्रमको शुभारम्भ भयो । साहित्य सर्जक महानुभावहरू, साहित्यप्रेमी बन्धु र पत्रकारहरूको उपस्थितिले हल खचाखच भरिएको थियो ।

नेपालको नोबेल पुरस्कार मानिने जगदम्बा-श्री र मदन पुरस्कारका राशि दुई-दुई लाख रुपियाँ थिए । गुठीका अध्यक्ष कमलमणि दीक्षितले पुरस्कृत व्यक्तिहरूलाई ताम्रपत्रसहित नगद प्रदान गर्नुभयो । उहाँले विधिपूर्वक स्वागत अभिनन्दन र मन्तव्यसहित शुभमङ्गल अर्पण गरी पराजुली र घिमिरेलाई सम्मान अर्पण गर्नुभयो । प्रसिद्ध पत्रकार एवं सदस्य-सचिव कुन्द दीक्षितले गुठीका तर्फबाट रोचक रूपमा धन्यवादज्ञापन गर्नुभयो ।

साहित्यको शिखर चुम्नुभएका मेरा श्रद्धेय गुरु विराट् साहित्यिक व्यक्तित्व कविवर कृष्णप्रसाद पराजुलीले जगदम्बा-श्री पुरस्कार ग्रहण गर्नुहुँदाको क्षण सम्झँदा आजसम्म मेरो हृदय पुलकित भइरहेछ । म अहिलेसम्म पनि रमाइरहेको छु । यसरी खुसीले रमाउनुको कारण पनि म आफैंले पुरस्कार प्राप्त गर्नुसरह नै लागिरहेको छ । मृत्युसँग पनि जुधेर बाँचिरहनुभएका कविवर पराजुली नेपाली साहित्यकाशमा एक उज्ज्वल नक्षत्र, सगरमाथाको शिखर हुनुहुन्छ । नेपाली भाषा र साहित्यका सन्दर्भमा देशकै साझा व्यक्तित्व कविवर पराजुली एउटा साहित्यिक खम्बा हुनुहुन्छ, साधक र सेवक हुनुहुन्छ । यस क्षेत्रमा उहाँको काम गराइ, लेखाइ र आकर्षित गर्ने भूमिका हेर्दा उहाँ व्यक्तित्व मात्र होइन, उहाँ एक साहित्यिक संस्था र राष्ट्रभाषाका मानदण्ड हुनुहुन्छ । कविवर पराजुलीले विभिन्न विधामा शक्तिशाली कलम चलाएर दिएको योगदानमा जगदम्बा-श्री पुरस्कार प्राप्त गर्नु कम साहसिलो कुरा होइन, नेपाली साहित्यजगत्मा खास गरी उहाँको गीत, कविता, कथा, बालसाहित्य, निबन्ध र लोकसाहित्य तथा संस्मरणको लेखनमा बढी भूमिका रहेको देखिन्छ ।

पुरस्कार कार्यक्रमपछि अर्का पुरस्कृत व्यक्ति जगदीश घिमिरेसँग पनि मेरो परिचय भयो । केही छिनको भलाकुसारीपछि मैले घिमिरेलाई आफूले रचना गरेको संस्मरण सङ्ग्रह 'आफ्नै जीवन र अनुभूति' झिकेर उहाँको हातमा दिएँ । उहाँले सहर्ष ग्रहण गर्नुभयो । घिमिरेज्यूको शिष्टता, मृदु व्यवहार र आत्मीयताबाट म प्रभावित भएँ । बिचरा उहाँ निको नहुने 'माइलोमा' रक्तक्यान्सरबाट पीडित पो हुनुहुँदोरहेछ । यस्तो अवस्थामा पनि छातीभरि वेदनाका घाउ बोकेर 'अन्तर्मनको यात्रा' लेख्ने उत्साह र लगनशीलता देख्ता

म त अचम्भित भएँ । मानिस सङ्घर्षशील प्राणी भएकाले जीवनमा अनेक उतारचढाव आइपर्छन् । त्यसैले सामाजिक जीवनमा दुःखकष्ट, मर्मका पोकाहरू, मिलन-बिछोड र हाँसोखुसी भन्नु जीवनका यथार्थ प्रतिबिम्ब हुन् । *अन्तर्मनको यात्रा* उत्कृष्ट आत्मकथा हो, यो उहाँको पछिल्लो साहित्यिक दस्तावेज हो । २००२ साल चैत २८ गते मन्थली रामेछापमा जन्मनुभएका उमेर पैँसट्ठीको सेरोफेरो समात्न लागेका घिमिरेले रोगसँग जुध्दै-लड्दै जे गर्नुभयो, त्यो प्रशंसनीय छ, अनुकरणीय छ ।

कुनै पनि प्रतिभाशाली साहित्यकार कलाकार दिवङ्गत भएपछि हैन, जिउँदो हुँदा नै कदर गर्नुपर्छ । उनीहरू राष्ट्रका गहना हुन् । राष्ट्रिय विभूति हुन् । मदन पुरस्कार गुठीद्वारा दिइने जगदम्बा-श्री पुरस्कार र मदन पुरस्कार नेपालका गरिमामय पुरस्कार हुन् । राष्ट्रिय विभूतिका रूपमा दुई जना वरिष्ठ साहित्यसेवीको नाम पर्नु कम खुसीको कुरा होइन । यसबाट इमानदारीपूर्वक भाषासाहित्यमा योगदान दिनेहरूलाई समयले मूल्याङ्कन गर्दो रहेछ भन्ने स्पष्ट हुन्छ ।

समयको गति छिटोछिटो परिवर्तन हुँदै विश्वलाई चकित पारेको छ । आजको युगलाई वैज्ञानिक युगमा रूपान्तर गरिएको छ । युगको रथ हाँक्ने साहित्यिक सर्जकहरू यस धर्तीमा जन्मिऊन्, नेपाली साहित्यका फाँटमा यस्ता प्रतिभाशाली स्रष्टाहरू जन्मेर यो देशका छहरा-पहरा, ढुङ्गामाटो र हिमाललाई ब्यूँझाउन सक्ने, जुर्मुराउन सक्ने गति दिइरहून् । जूनघाम पनि शुभेच्छाले धर्ती आकाशमा घुमून् । कविवर पराजुलीज्यू, साहित्यकार घिमिरेज्यू, म तपाईंहरूलाई शुभकामना दिँदै सुस्वास्थ्यको मङ्गल कामनासहित आभार व्यक्त गर्दछु ।

नेपाली भाषा-साहित्यमा साहित्यसेवी मोतीराम भट्टको योगदान उल्लेखनीय रहेको पाइन्छ । त्यसपछि बालकृष्ण सम (वि.सं. १९५९-२०३८), लक्ष्मीप्रसाद देवकोटा (१९६६-२०१६) र सिद्धिचरण श्रेष्ठ (१९६९-२०४५) को नेपाली साहित्यसाधनामा उल्लेखनीय योगदान रहेको हो । त्यसरी नै २०६० साल असोज ७ गते राज्यको तर्फबाट 'राष्ट्रकवि' को उपाधिले विभूषित हुने कविवर माधवप्रसाद घिमिरे हुनुहुन्छ । सरकारले उहाँको सम्मानमा मासिक १२,०००/– रुपियाँ

भत्तासमेत उपलब्ध गराएको छ । नेपाली साहित्यको इतिहासलाई अध्ययन गर्दा अढाई सय वर्षको इतिहासमा निकै सामाजिक, राजनीतिक र आर्थिक परिवर्तन देखा पर्दै आएका छन् । नेपाली साहित्य भण्डारमा लेखक-साहित्यकारहरूको सङ्ख्या पनि निकै बढिरहेको छ। पत्रपत्रिकाले पनि साहित्यलाई सम्मानजनक स्थान दिन थालेका छन्। यसको चर्चा-परिचर्चा, टिभी, इन्टरनेटदेखि अन्तर्राष्ट्रिय स्तरमा समेत फैलिएको छ ।

नेपाली साहित्यमा एउटा महारोग पनि छ। त्यो हो– कवि-लेखकहरूले गरिबीको पीडा भोग्नुपरेको छ । साहित्य-साधनामा लाग्छन्, आफ्ना अन्तर्मनका भावनालाई लेखनमा ढाल्छन्, तर यसरी तयार भएका पुस्तक छपाउन पैसा हुँदैन। उनीहरू प्रकाशनका लागि प्रकाशक खोजेर हिँड्छन्, अन्य आर्थिक स्रोत केही छैन। बजेटको अभाव हुन्छ। सीप र ज्ञान भएका साहित्यिक स्रस्टाहरू अर्थपीडित हुनु दु:खद पक्ष हो ।

देशको अवस्था ठीक छैन, नेपालमा भएका प्रज्ञाप्रतिष्ठान तथा साझा प्रकाशन खै के गर्दै छन् कुन्नि ! प्रज्ञाप्रतिष्ठानजस्तो गरिमामय संस्थाको प्रतिष्ठा घट्दै शून्यमा बिलाउँदै छ । हामी नवप्रतिभाहरूले सहयोग र प्रोत्साहन पाउन सकेका छैनौँ। यी संस्थाहरू लेखकहरूको हौसला, प्रोत्साहन, अवसर र सहयोग उपलब्ध गर्ने ठाउँ हुन् । साहित्यप्रतिको साधनालाई यसरी नै जीवनमुखी चिन्तनका प्रवाहमा बगेर लगाइरहनुपर्ने हो, तर छापिने पुस्तकहरू पनि मूल्याङ्कन समितिबाट यो भएन, त्यो भएन भनी विभिन्न आक्षेप लगाई फिर्ता गरिन्छन्। हामी मोफसलका साहित्यकारहरूलाई पनि बेवास्ता गर्छन्, बजेटको अवस्थाले पनि भूमिका खेलेको हो कि के हो थाहा हुँदैन।

नवोदित साहित्यकारहरूलाई प्रेरणा र प्रोत्साहनको खाँचो छ। उनीहरूलाई विविध विषयमा प्रशिक्षित तुल्याउनुपर्छ । उनीहरूबाट सृजना मात्र होइन, अध्ययन-अनुसन्धानका महत्त्वपूर्ण काम पनि हुन सक्छन्। यी सब कुराका निम्ति विश्वासपूर्ण दह्रो आधार चाहिन्छ। त्यसतर्फ पनि गहकिला पाइला चाल्ने प्रयास हुन्छ कि ? आशा गर्नु निश्चय नै अर्घेलो ठहरिने छैन ।

# बालाजी पोखरीका चलपले माछा... त्यसबेला र त्यसपछि

*– लीलबहादुर क्षत्री*

डी. आर. सुब्बा आएनन्। सल्लाह थियो, म केही दिनअघि नै इटहरी, बिराटनगर पुगेर असमबाट गएका परिचित मानिहरूसित भेटघाट गर्ने काममा अल्मलिँदै गर्ने, तीन-चार दिनपछि शिलाङका डी. आर. सुब्बा विराटनगर पुग्ने र विराटनगरबाट हवाईजहाजमा काठमाडौँ जाने । म काठमाडौँ कहिले नगएको मानिस, अनि शिलाङ्का सुब्बा मामा पोहोरमात्र पुगेर आएका । उनी साथ छँदा धेरै आड हुन्छ भन्ने विचार ।

यो अन्दाजी सन् १९६७ को कुरो हो । वि.सं. २०२४ हो क्यार । त्यसबेला पूर्वपश्चिम राजमार्ग बन्ने सुरसार मात्र थियो । बसबाट काठमाडौँ जानुपर्दा रक्सौलबाट वीरगञ्ज भएर त्रिभुवनराज-पथबाट जानुपर्थ्यो । विराटनगर आउन पनि रेलमा कटिहारबाट जोगवनी भएर आउनुपर्थ्यो ।

सातादिनसम्म पनि डी. आर. सुब्बा आइपुगेनन्; आइपुग्यो एउटा तार, वीपिनदेव ढुङ्गेलज्यूको हिमालचुली छापाखानाको ढुङ्गोमा, Comming not Sure, expect at Kathmandu (आउने निश्चयता छैन, तैपनि काठमाडौँमा बाटो हेर्नू) भन्ने ।

म अन्योलमा पर्छु । दोधारै-दोधारमा भोलिको निम्ति जहाजको टिकट पाइने नपाइने खबर बुझ्न विपीनदेवलाई भन्छु । भोलि उही हवाईअड्डामै टिकट लिँदा पनि हुन्छ भन्ने थाहा लाग्छ ।

म विराटनगरको हिमालय होटलमा छुट्टै कोठा लिएर बसेको थिएँ । बेलुकीपख त्यसै होटलमा एउटा नवदम्पती बास बस्न आइपुग्यो । त्यहाँ त्यस्तो छुट्टै अर्को कोठा खाली नभएकोले उनीहरूको अप्ठयारो बुझी मैले आफ्नो कोठा छोडेर अन्यत्रै कुनै साथीको निवासमा जाने विचार गरेँ ।

भोजपुरबाट भरखर बिहे गरेकी नयाँ दुलही लिएर आउने ती युवा व्यक्ति रहेछन् कार्की छेत्री । नाउँ रहेछ मोहन कार्की ।

काठमाडौँमा जागिरे हुनाले उनी सपत्नीक भोलिको जहाजबाट काठमाडौँ जाँदै रहेछन् । उनीसित मेरो परिचय भयो र एक जना लेखकको रूपमा पनि उनले मलाई चिनेँ । भोलिपल्ट म पनि उनीहरूकै साथ लागेर काठमाडौँ जाने कुरो मिल्यो ।

मैले भनेँ– 'म काठमाडौँ कहिले नगएको मानिस मलाई तपाईंले केवल के सहयोग गर्नुपर्‍यो भने काठमाडौँ पुगेपछि अलि केन्द्र ठाउँमा एउटा सुहाउँदो बुझिँदो होटलमा पुर्‍याइदिनुपर्छ जहाँदेखि म सबैतिर डुल्न, घुम्न र भेटघाट गर्न सकूँ ।'

मोहन भाइले त्यो कुरा स्वीकारेपछि भोलि हवाईअड्डामै भेट्ने सल्लाह गरी हामी छुट्टियौँ ।

भोलिपल्ट म आफ्नो सामानसहित एक जना केटालाई साथमा लिई जोगबनी छेउको हवाईअड्डामा पुग्छु र दोमन-दोमन गर्दै हवाईजहाजको टिकट लिन्छु । ती कार्की दम्पती अझ आइपुगेका छैनन् । यता जहाज पनि काठमाडौँबाट आइपुगेको छैन र निश्चित समयभन्दा अलि ढिलो होलाजस्तो भयो ।

मन एकदमै सन्त्रस्त छ । काठमाडौँमा त्यसरी चिनेजानेको कसैलाई छैन। यसै त साहित्यिक परिचय र पत्राचार धेरैसित छ तर उही नाउँको मात्र। प्राय:सित साक्षात्कार भएको छैन। त्यस्तो घनिष्ठ सम्पर्कको आफन्त नै भन्न सकिने कोही छैन जसलाई म गुहार्न सकूँ । अँ साझा प्रकाशनका तात्कालिक महाप्रबन्धक क्षेत्रप्रताप अधिकारीसित भने गुवाहाटीमा केही महिनाअघि लामै भेटघाट भएको हो र त्यसबेला उहाँले काठमाडौँ आउने आग्रह पनि गर्नुभएको थियो र मैले पनि आउँछु भनेको हुँ । त्यसैताका मेरो नाटिका 'दोबाटो' पनि साझा प्रकाशनबाट छापिँदै थियो ।

अब यो कार्की दम्पती काठमाडौँमा कहाँ बस्छन् ? मानिस कत्तिको विश्वस्त हुन्? यिनले एउटा सुरक्षित होटलमा पुर्‍याइदिनेसम्मको साथ दिए त मजस्तो यहाँको आनिबानी नजानेको मानिसलाई ठूलो सहयोग हुनेछ। टुङ्गो लागेपछि अधिकारीजीसित भेट गरौँला अनि त एउटा क्रम बनिहाल्छ भन्ने सम्झेँ ।

विचारको सिलसिला चल्दाचल्दै जहाज आएको आवाज सुनिन्छ र केहीछिनमै जहाजले भुइँ छुन्छ। यता कार्की दम्पती पनि टुप्लुक्क आइपुग्छन् ।

मानिसहरू ओर्लनेबित्तिकै चढ्नेहरूको ताँती लाग्छ। जहाज यसै पनि एकघन्टा ढिलो भएको छ। मानिसहरू चढिसक्ता-नसक्ता जहाज रनवेतिर लाग्छ र केही छिनमै भुइँ छोड्छ ।

तल हरियो चौर, खेत, पहाडका थुम्का, ससाना खोलाहरू देखिँदै-देखिँदै उत्तरतिर हाराहारी हिउँका चुचुराहरूले सम्पूर्ण ध्यान आकर्षित गर्छ। एयरहोस्टेजले पकडाइदिएको लोजेनको कुड्को चुसी सक्ता-नसक्तै, धरहरा, स्वयम्भूको स्तूप, पशुपतिको गजुर आदि देखिन थाल्छन् र जहाज गौचर हवाईअड्डा आइपुग्छ ।

आफ्ना माल समानसित हवाईअड्डा प्राङ्गणबाट बाहिर निस्केपछि ती कार्की भाइले प्रस्ताव राखे– 'आज अब साँझ परि नै हाल्यो। यो सामान लिएर कता होटल खोज्दै हिँड्नू? मेरो डेरा भक्तपुरमा छ। आज उतै जाऊँ; भोलि होटलको व्यवस्था मिलाउँला, हुन्न?' मलाई के थाहा, भक्तपुर कता हो अनि होटलहरू कता छन्! भने– 'तपाईं जे उचित सम्झनुहुन्छ, त्यसै गरौं। मलाई यहाँको कुरा केही थाहा छैन ।'

एउटा थोत्रो जिपमा सामानहरू भराई हामी रत्नपार्क आइपुग्यौं जहाँबाट भक्तपुर जाने बस समात्नु पर्नेरहेछ। साँझको याम; बसमा निकै घुइँचो छ। ती कार्की दम्पतीको एउटा निकै ठूलो टिनको बाकस छ जो कुनै बसले चढाउन मान्दैन। निकै बसहरू छुटिसके तर हामी बाहिर उभिएकै छौं। कार्कीकी एक जना छिमेकी महिला फेला परिन् बसअड्डामै र उनले एक जना बस कन्डक्टरलाई नेवारी भाषामा के भनेर बुझाइन् कुन्नि? उसले बल्लतल्ल आफ्नो बसको पछिल्लो सिटमुनि त्यो बाकस हाल्न राजी भयो। जेनतेन हामी राति नौ बजेतिर भक्तपुर आइपुग्यौं। बसको पनि त्यो अन्तिम बिसाउनी रहेछ ।

आआफ्ना सामान समेटेर एउटा सानो गोरेटोबाट हामी अघि बढ्छौं। शरद् ऋतुको जुनेली रात हुनाले बाटो पैल्याउन त्यति गाह्रो

पर्दैन । बाटाको छेउ एउटा अजङ्गको अग्लो स्तूपाकार भवन देख्ता मलाई कता मिश्र देशका पिरामिडको सम्झना हुन्छ । प्राचीन सभ्यताको सहरजस्तो कहाँ आइपुगेँ म ? भोलिपल्ट थाहा हुन्छ, त्यो अजङ्गको पाँचतले देवल न्यातपोल रहेछ ।

सानो सङ्कीर्ण गल्लीका दुवैतिर लामा अग्ला दुई-तीन तले घरहरू छन् । कता किताबमा पढेको प्राचीन बेबिलोन अथवा बगदाद सहरको सम्झना गराउने खालको दृश्य ।

केही दिनपछि एउटा लामो तीनतले घरको छेउ आएर हामी उभिन्छौँ अनि जेनतेन सामानहरू झुन्ड्याएर एउटा काठको भऱ्याङबाट तीन तलामाथि चढ्छौँ । खामा काठका ढुङ्गा र माटो मुछेर लाएको गाह्रो, त्यस्तै माटाले छोपेको मजेरी भएको यी तले घरहरू मान्छे चढ्दा ओर्लंदा थथरकिएको आभास पाइन्छ । एउटा कोठाको छेउ आएर उभिएपछि कार्कीले कोठा खोल्छन् । उनकै इसारामा होचो ढोकाबाट केही निहुरिएर हामीभित्र पस्छौँ ।

मुस्किलले सात फुट अग्लो, सात फुट चौडा र आठ फुट जति लमाइ भएको यो कोठामा खाट अथवा चारपाई हुल्ने त कल्पनै हुँदैन । एक छेउमा एउटा ओछ्यान लाएको छ जहाँ कष्टमस्टले दुई जना सुत्न सक्लान् । त्यसबाट उब्रिएको अर्को छेउको अलिकति ठाउँमा मैले आफ्नो बेडिङ बिसाएँ र त्यसैमाथि थ्याच्च बसेँ । अर्कोपट्टि एउटा कुनामा कार्की दम्पतीले आफ्नो स्टिलको बाकस र अन्य झिटिझ्याम्टा थन्क्याएँ ।

विचारेँ– भखरै बिहे गरेर नयाँ दुलही लिएर आएका यी कार्कीले मलाई कहाँ सुताउँछन् ! यो कोठामा न मेरो बेडिङ्ग ओछ्याउने ठाउँ छ, न यसरी यो उकुस-मुकुस हुने परिवेशमा नवदम्पतीसित टाँसिएर सुत्न सम्भव हुन्छ ।

एउटा अन्योलमै थिएँ म । 'रात पनि निकै बित्यो, अब के खाने प्रोफेसर साब ? पहाडबाट चिउरा ल्याएका छौँ; त्यसैले हाम्रो काम त चल्ला ? तपाईंलाई पनि त्यही टक्र्याऔँ कि ?' कार्की प्रश्न राख्छन् ।

'अहिलेलाई तल दोकान हुँदो पाइन्छ भने चिया एक प्याला खाऊँ, अरू म केही खान्न ।' भन्छु म ।

तल एउटा पसलमा हामीले चिया खायौँ र माथि चढ्यौँ ।

कार्कीको कोठाकै छेउमा त्यस्तै अर्को एउटा कोठा रहेछ जसको साँचो कार्कीले खोले र मलाई त्यहाँ सुत्ने व्यवस्था मिलाइदिए। उनले भने– 'यो मेरो साथीको कोठा हो। उनको राति डिप्टी हुन्छ र बिहानमात्र आउँछन् । 'तपाईं यहाँ आरामसित सुत्न सक्नुहुन्छ ।' मैले सन्तोषको सास फेरेँ । कार्कीको कोठाबाट आफ्नो सामान ल्याएँ। ओछ्यान लाएकै थियो तापनि आफ्नै बेडिङ ओछ्याएँ। ढोका थुनेर सुत्ने प्रयत्न गरेँ तर निद्रा पटक्कै लागेन ।

मनमा कता कुन अनकन्टार ठाउँमा आइपुगेँ म भन्ने भावनाले ग्रसित भइरहेको बेला कोठाको सानो झ्यालबाट जून छिरेर कोठामा छरियो अनि जून लाग्ने धर्तीकै कुनै भागमा रहेछु भन्ने आनन्दले विभोर भएको पनि अहिले सम्झना भइरहेछ ।

बिहान कोठाका मालिकसित परिचय भयो । उनी प्रहरी विभागमा हवल्दार रहेछन् । भने– मेरो प्रायः नै राति डिप्टी रहन्छ। तपाईं यही बसेर काठमाडौँ डुले हुन्छ। बस पाइहालिन्छ, किन होटलमा खर्च गर्नू ? उनको आत्मीयताले म मुग्ध भएँ। त्यहाँ अरू नि निम्नबेतनभोगी जागिरेहरू बहालमा बस्ता रहेछन् । स्तर निम्न तर हृदय विशाल। प्रायः सबैले मलाई उनीहरूको आतिथ्य स्वीकार गर्ने आग्रह गरेका थिए। यो टोलको नाउँ रहेछ– क्वासे टोल ।

कार्कीले भने– 'अहिले एकछिन भक्तपुर डुलौँ। यो ठाउँ पनि पर्यटकहरूको निम्ति निकै आकर्षणीय छ । १० बजेपछि म मेरो कार्यालयमा आफ्नो उपस्थिति दर्ता गराउँछु अनि बिदा लिएर जता जानुपर्ने जाउँला ।'

परिस्थिति दिएअनुरूप म आफ्नो नित्यकर्म टुङ्ग्याउँछु र कार्कीसित निस्कन्छु । भक्तपुरका दर्शनीय स्थल जस्तै न्यातपोल, सुवर्णद्वार, पचपन्न झ्याल, भुक्ने घन्टी, भक्तपुरको राजदरबार, कमल पोखरी आदि ठाउँ हेर्‍यौँ र त्यहाँदेखि देखापर्ने धवलागिरिको

मनोरम दृश्य अवलोकन गऱ्यौँ । पाँचतले देवल न्यातपोल हेरेर लाग्यो, यो त सप्त आश्चर्यभित्रै पर्ने एउटा आश्चर्य हो । भक्तपुरमा केही छिन भए पनि डुलेको फायदै भो । कारण यसपालाको काठमाडौँ यात्रामा फेरि भक्तपुर आउने अनुकूल परेन ।

डेरामा फर्केपछि कार्की भाइले आफ्नी नयाँ दुलहीको हातको भान्सा खान कर लगाए । सबैभन्दा माथि छतमा एक छेउ बारेर भान्साकोठा बनाएको रहेछ ।' हेर्नोस् म कति भाग्यवान् रहेछु, नयाँ दुलहीको हातको पहिलो भान्सा खाने मौका पाएँ' म भन्छु ।

'सौभाग्य हाम्रो हो, सागपातले भए पनि तपाईंजस्ता अतिथिको स्वागत गर्न पायौँ ।' कार्की आफ्नो सौजन्य पोख्छन् ।

सामान त्यही छोडिराखेर हामी निस्कन्छौँ । कार्की आफ्नो कार्यालयमा उपस्थित भएपछि, बिदा लिएर बसबाट हामी रत्नपार्क आइपुग्छौँ । होटेलसम्बन्धी ती कार्की भाइलाई पनि उति जानकारी नभएको बुझेँ । पहाडबाट आएर जागिरमा लागेका भक्तपुर डेरा गरी बस्ने मानिसलाई काठमाडौँका होटलबारे जानकारी नहुनु स्वाभाविकै हो ।

'हामी पहिले पाटन, साझा प्रकाशनको कार्यालयमा जाऊँ । त्यहाँ एक जना मेरा परिचित व्यक्ति हुनुहुन्छ । कुन होटल वा अतिथिशालामा बस्ता सजिलो पर्छ, त्यस विषयमा उहाँको सल्लाह उपयोगी होला ।' मैले भनेँ ।

हामी सोझै पाटन पुग्छौँ र साझा प्रकाशनको ढोकाअघि आएर उभिन्छौँ । एउटा निकै ठूलो भव्य भवनमा अवस्थित रहेछ साझा प्रकाशनको केन्द्रीय कार्यालय । हो त, उहिले कुनै राणाको दरबार हुँदो हो । तल सोधपुछ गर्दा थाहा भो, महाप्रबन्धक क्षेत्रप्रताप अधिकारीको कार्यालय माथ्लो तलामा छ र उहाँ कार्यालयमै हुनुहुन्छ । हामी माथि पुगेर कोठामा पस्यौँ ।

प्राय: दुई महिनाअघि गुवाहाटीमा अधिकारीजीसित भेट हुँदा उहाँको व्यवहार अति सौहार्दपूर्ण थियो, तर यो काठमाडौँ हो र यहाँ कस्तो व्यवहार हुने हो भन्ने मनमा एउटा धुकचुक थियो । हाल उहाँको कर्मथलो काठमाडौँ भए पनि अधिकारीको पुर्ख्यौली थलो तनहुँ

रहेछ जो हाम्रा प्रात:स्मरणीय आदिकवि भानुभक्तको जन्मथलो हो र नेपाली मात्रको तिर्थस्थली । अधिकारीज्यूमा त्यो पहाडी संस्कार छँदै थियो जहाँ सहज, सरल निश्छल व्यवहार पाइन्छ ।

मैले चिताएभन्दा बढी आत्मीयता उहाँबाट पाएँ। भलाकुसारीपछि मैले मोहन कार्कीको परिचय दिँदै, म हिजो बिराटनगरबाट सँगै आई कसरी भक्तपुर उहाँको डेरामा बास बस्न पुगेँ । त्यसको सङ्क्षिप्त निवृत्ति दिएर भनेँ– अब सबैभन्दा पहिले एउटा होटलको व्यवस्था मिलाएर मेरा झोलाझ्याम्टा भक्तपुर कार्कीजीको डेराबाट ल्याई थन्क्याएपछि मात्र अन्य कुरातिर लागौँला ।'

'तपाईं एक जनालाई किन होटल चाहियो ! मेरै डेरामा भइहाल्छ नि । एकै ठाउँ बस्दा तपाईंलाई काठमाडौँ डुलाउन पनि सजिलो पर्छ । बरु तपाईंको सामान लिन कार्कीजीसित म मानिस पठाउँछु ।' उहाँले कार्कीसित गएर सामान ल्याउन एक जनालाई खटाउनुभो । वास्तवमा मेरो पहिलो काठमाडौँ यात्रामा मलाई त्यसरी सघाउने ती कार्की भाइ बिदा भएर गए अनि यसपछि पनि म अनगन्ती पटक काठमाडौँ पुगेँ तर ती भाइसित फेरि कहिले भेट भएन । सुरुमा केही समयसम्म पत्राचार भने थियो ।

क्षेत्रप्रतापज्यूको त्यसबेला डेरा कमलपोखरीमा थियो । हामी डेरा आइपुग्दा मेरो सामान पनि आइपुगेको रहेछ । केहीछिन सुस्ताएर हामी बेलुकी रत्नपार्कतिर डुल्न निस्क्यौँ । म काठमाडौँ पहिलोचोटि आएको व्यक्ति । मैले काठमाडौँको एसियाभित्रै फराकिलो र भव्य ठहरिने ऐतिहासिक टुँडिखेल र खरीको बुटोसम्बन्धी धेरै सुनेको थिएँ, जुन खरीको बुटो टुँडिखेलको मध्यभागमा उभिएर नेपालको अनेकौँ राजनैतिक उथल-पुथलको साक्षी बनेको छ र इतिहासका नयाँ पाना सिर्जने कैयौँ राजनैतिक परिवर्तनको घोषणा यसले सुनेको छ ।

आज त्यो ऐतिहासिक टुँडिखेल धेरै भागमा बाँडिएछ । त्यसैको एउटा भाग रत्नपार्क, अर्को शहीद गेट, अन्य खेलकुद र शाही जङ्गी अड्डा आदि। यो सबै जानकारी मैले अधिकारीजीबाट पाएँ ।

म हिजो रत्नपार्क आइपुग्दा टाढैबाट आँखामा परेदेखि नै भव्य र विशालकाय सिंहदरबारले मलाई एकहोरो आफूतिर तानिरहेको छ । काठमाडौँको जुनसुकै अलि अग्लो ठाउँबाट टड्कालै देखिने हिमालय पर्वतजस्तो आफ्नो गौरव गरिमासित उभिएको यो दरबारलाई मौका मिलाएर नजिकैबाट हेर्ने योजना मनमनै बनाउँछु ।

क्षेत्रप्रतापजीको स्कुटरमै, दरबार स्कूल, घन्टाघर, रानीपोखरी, वीर अस्पतालको फन्को मारी त्यहाँ चल्दै गरेको रमाइलोमेलामा केही छिन अल्मलिएर डेरातिर फर्कन्छौँ ।

काठमाडौँमा मैले बिताउने साता दिनको बढी सदुपयोग हुने गरी भोलिपल्टदेखि मेरो डुलाइको योजना बनाउनुहुन्छ अधिकारीजी, बिहान हामी भगवान् पशुपतिनाथको दर्शन गर्न जान्छौँ । साथमा अधिकारीबाहेक अन्य साथी, कृष्ण, भीष्म, नारायण आदि हुन्छन् ।

हामी भित्रीबाटो भएर हिँडेरै पशुपतिमन्दिर पुग्छौँ । बाटामा पर्ने स-साना ढिस्का, हावामा सुसेल्ने सल्लाका रूख, पहाड काटेर बिराएका खेतका पाटा आदि अनेकौँ मनोरम दृश्यले मलाई कता मैले बाल्यकाल बिताएको शिलाङको सम्झना गराइरहेको थियो भने अर्कोतिर त्यतै कता महाकवि देवकोटाको कर्मथलो भनेर साथीहरूले परिचय गराएको पनि अहिले म सम्झन्छु ।

काठमाडौँ भन्नेबित्तिकै हामी बाहिरबाट जानेहरू बाग्मतीनदीको किनारमा अवस्थित पशुपतिनाथको भव्य मन्दिर सम्झन पुग्छौँ । नेपालको अनेकौँ ऐतिहासिक गौरव गाथको अन्त्यलाई आफ्नो बसमा समेटेर बसेको आर्यघाट सम्झन्छौँ । यी कुराहरू म जीवनमा पहिलो पटक हेर्दै थिएँ ।

पेगोडा शैलीमा निर्मित चाँदीका चार ढोका भएको मन्दिरभित्र पञ्चमुखी भगवान् पशुपतिनाथको दर्शन गरेर म आत्मविभोर भएँ । त्यसो त, यसअघि वाराणसीमा विश्वनाथमन्दिरको पनि दर्शन गरेको थिएँ । गुवाहाटी कामरूपकी देवी कामख्या त आफ्नो ग्रामदेवी नै भइन् ।

यी मन्दिर र पशुपतिमन्दिरमा एउटा पार्थक्य के फेला पारेँ भने अन्य मन्दिरमा जस्तो पशुपतिको मन्दिरमा दर्शन गराउन

कुनै पण्डा झम्टिन आएनन् न त कसैले यति भेटी चढाऊ, उति दान गर भन्ने दावी गरे। स्वच्छताले पशुपतिलाई फूलप्रसाद चढाइयो र प्रसादग्रहण गरियो।

बाग्मती पारीपट्टि गुह्येश्वरीदेवीको मन्दिरमा भने पुग्न भ्याइएन। वारी आर्यघाटबाटै देवीलाई हात जोर्‍यौँ र फर्क्यौं।

त्यसै दिन दिउँसो कमल दीक्षितज्यूसित भेट गर्ने कार्यक्रम थियो। भगवान् पशुपतिको दर्शन गर्ने जुन चीर लालसा मनमा थियो, कमल दीक्षितसित भेट गर्ने उत्सुकता पनि मेरो निम्ति कम थिएन। त्यसको कारण के भने बसाइँको प्रकाशनसम्बन्धी उहाँसित मेरो लामो पत्राचार भएको हो। बसाइँको पहिलो संस्करण प्रकाशित भएको पनि झन्डै एक दशक समय बितिसक्यो। यसबीच यसका चार-पाँच संस्करण निस्किसके। उहाँसित पत्राचार र साहित्यिक आदानप्रदान पनि चली नै रहन्थ्यो, तर साक्षात्कार कहिले भएको थिएन। त्यसैले मेरो जिज्ञासा स्वाभाविकै थियो।

साझाको कार्यालयबाट फोन गरेर हामी भेट गर्न निस्क्यौं। त्यसताक उहाँ साझा प्रकाशनका अध्यक्ष पनि हुनुहुन्थ्यो। पाटनढोकाबाट भित्र पस्तै गर्दा अधिकारी भन्दै हुनुहुन्थ्यो– 'यहाँ कमलजीकै कार्यालयमा एक जना व्यक्ति हुनुहुन्छ जोसित भेट भएपछि जीवन पच्चीस प्रतिशतबाट पचहत्तर प्रतिशतमा उक्लन्छ... भन्दा-भन्दै हामी एक जना व्यक्तिको सामु उभिन पुग्छौं। केही डल्लो बान्कीका, न होचो, न अग्लो, निकै स्वस्थ खँदिलो शरीर, चेहरा उज्ज्वल निक्खर सेतो नभए पनि गोरो नै भन्नुपर्ने व्यक्तित्व– को हुन् यी व्यक्ति? अधिकारीले भन्नुभएको जीवन पच्चीसबाट पचहत्तरमा उकास्ने व्यक्ति अथवा कमल दीक्षित? म अन्योलमा परेँ। अधिकारीले मेरो परिचय दिनुभो तर ती व्यक्तिको दिनुभएन; आवश्यक सम्झनुभएन कि। दोधारमै जम्ला हात गरेँ मैले। जोसित वर्षौंदेखि साक्षात्कार हुने जुन उत्सुकता थियो, त्यही उल्लासमय उत्साह थिएन मेरो अभिवादनमा, न त उताबाटै त्यस्तो विशेष जाँगर देखापर्‍यो। म धरमरमै थिएँ। भलाकुसारी केही अघि बढेपछि बल्ल म निर्क्योलमा पुगेँ, मैले कुरा गरिरहेका व्यक्ति कमल दीक्षित नै हुन्, अन्य होइनन्।

'काठमाडौँ कुन सिलसिलामा आउनुभो; कुनै सभा-समारोहको निम्तोमा हो कि ?'

त्यसै ताक, रोयल नेपाल एकेडमीको वार्षिक समारोह; त्रिभुवन पुरस्कारलगायत अन्य पुरस्कार प्रदान गर्ने कार्यक्रम पनि चलिरहेको थियो । शिलाङका कृष्णप्रसाद ज्ञवाली पनि पुरस्कार थाप्न आएका थिए। कमलजीलाई, म पनि एकेडमीले निम्त्याएर आएको हुँ कि भन्ने परेछ ।

मैले– 'कुनै निम्तोमा होइन। काठमाडौँ डुल्न-घुम्न, पशुपतिनाथको दर्शनलगायत तपाईंहरूसित भेटघाट गर्न आएको' भनेपछि कमलज्यूको अनुहार निकै उज्यालिएको अनुभव गरेँ मैले । कुनै संस्थासङ्गठनको निम्तोमा पेवा भएर होइन; आफ्नै स्वतन्त्र यात्रा रहेछ भन्ने कुराले उहाँ प्रभावित देखिनुभयो, कारण जे-सुकै होस् ।

'भन्नोस्, कहाँ-कहाँ डुल्न चाहनुहुन्छ काठमाडौँमा तपाईं ?' उहाँको प्रश्न । 'मलाई के थाह, काठमाडौँमा कहाँकहाँ डुल्नुपर्ने हो ? त्यो त यहाँहरूले दर्साउने कुरो हो ?' मैले भनेँ ।

अधिकारीजीले प्रस्ताव राख्नुभो, साझाको तर्फबाट भोलि वा पर्सि बालाजीमा एउटा प्रीतिभोज तथा परिचय गोष्ठी राखेर केही साहित्यिक साथीहरूलाई निम्त्याउने। त्यसले उहाँलाई डुलाउने क्रममा सबैसित परिचय पनि हुन्छ ।

'होइन परिचय गोष्ठी त यहीँ साझाको कार्यालयमा राखेर जलपानको व्यवस्था गर्दा हुन्छ । डुल्नचाहिँ अहिले अलिपछि निस्कौँ न । बेलुकीको याममा स्वयम्भूबाट काठमाडौँको दृश्य अति मनोरम देखिन्छ ।' कमलजीको भनाइ थियो ।

हामी त्यसपछि जगदम्बा प्रेसमा आयौँ जहाँ जीवन पच्चीसबाट पचहत्तर प्रतिशतमा पुऱ्याउने जादुगर वासुदेव शर्मा लुइँटेलसित भेट हुन्छ । नेपाली साहित्यमा साह्रै महँगो विद्या हास्यव्यङ्ग्यलाई आधार पारेर साहित्य सृजना गर्न मात्र होइन उहाँको बोल्ने शैलीले पनि सदैव तनावले रापिएको जीवनलाई धेरै शीतल पार्दथ्यो । हामी मदन पुरस्कार पुस्तकालयतिर लम्क्यौँ जो छेउमै थियो । नेपाली साहित्यमा मदन पुरस्कारको स्थापनाले ठूलो काम गरेको छ जसले नेपाली

साहित्यका स्रष्टाहरूलाई नोबेल पुरस्कारकै प्रेरणा दिँदै छ । मदन पुरस्कार पुस्तकालयको महत्त्व अझ बढी छ जहाँ विश्वका कुनै कुनामा लेखिएको वा प्रकाश भएको नेपाली पुस्तक, पत्रपत्रिका, पर्चा आदि खोजेर सङ्कलन गरेर यत्नपूर्वक राखिएको छ । पूर्वोत्तर भारतकै नेपाली साहित्यसम्बन्धी जानकारी लिनु परे यही पुस्तकालयमा आएर खोजी गर्नुपर्छ। नेपाली भाषा र साहित्यको विषय शोध प्रबन्ध लेख्ने छात्रहरू सामग्रीको निम्ति यहीँ आउँछन् ।

पुस्तकालयमा पूर्वोत्तर भारतका प्रकाशित कृति पनि देख्न पाइयो । मैले पूर्वाञ्चलका लेखक, पत्रकार, प्रकाशकलाई प्रकाशनको एकप्रति मदन पुरस्कार पुस्तकालयमा अवश्य पठाउनू भन्ने गरेको कुरा केही मात्रामा फलिभूत भएको लाग्यो ।

हामी पुस्तकालयछेउको एउटा सानो कोठामा पस्यौँ जहाँ नेपाली भाषा र साहित्यका संरक्षक प्रकाण्ड विद्वान् व्यक्तित्वसित मेरो साक्षात्कार हुन्छ । उनी थिए मूर्धन्य समालोचक डा. ईश्वर बराल जो पृथ्वीनारायण शाहसम्बन्धी ग्रन्थ लेख्नमा व्यस्त थिए र अनुसन्धानको सिलसिलामा मदन पुरस्कार पुस्तकालय आएका रहेछन् । डा. बरालसित यो मेरो पहिलो भेट थियो ।

हामी कमलजीको कारमा डुल्न निस्क्यौँ। अधिकारी र वासुदेवबाहेक कमलजीको आग्रहमा डा. बरालले पनि साथ दिएका थिए । कार कमलजी आफैँले हाँक्नुभएको थियो ।

हामी पहिले बालाजी पुग्यौँ जुन बालाजुको पहिलोपटक दृश्य अवलोकन गरेर भानुभक्त आत्माविभोर भएका थिए र इन्द्रलाई पनि खैँचेर ल्याई स्वर्गको रचना गर्ने कल्पना गरेका थिए । भानुभक्तले देखेको बालाजुमा हो त बाइसै धारा बगेका हुनन् तर ससाना कृतिम पोखरी बनेका होवैनन् जहाँको सङ्लो पानीमा सयौँ चुलबुले माछा खेलिरहेका थिए । यो दृश्य उनले देखेको भए बुटाहरूमा झुल्ने सुरिला चराहरूको मधुरो बोलीको साटो ती ससाना हौजहरूमा खेल्ने अटेरी माछाहरूको वर्णन आफ्नो कवितामा गर्ने थिए । यस यात्रामा मैले देखेको बालाजुमा बाइसधारा त होइन नौओटाजति धारामा भने पानी बगिरहेको थियो । मलाई भने यी ससाना जलाशयहरूमा खेल्ने

कुद्ने, उफ्रने चुलबुले माछाले ज्यादै प्रभाव पाऱ्यो र यसले मनमा अमिट छाप बसालेको छ । यस्तै माछाको चहलपहल मैले शिलाङको वार्डसलेकमा देखेको हुँ जहाँ हजारौँको सङ्ख्यामा झुत्तिन आउने दृश्य हेर्न दर्शकहरू हातमा चना र बदाम लिएर माथि पुलमा उभिन्छन् ।

बालाजु साँच्चै नै मनोरम थियो। प्रकृतिले सजाएको सौन्दर्यलाई केही कृत्रिम शृङ्गारको पुट र साफ-सफाइले अरु आकर्षक पारेको थियो । अलिमाथि केही अग्लिएको पाखातिर प्राकृतिकरूपमै हुर्केका उत्तिसका रूख, अङ्गेरी, धंगरु, ऐँसेलु, उनिऊँ, तीतेपातीका बुटाहरूले भने मलाई बाल्यकालमा देखेको पितृथलो गाउँको सम्झना गराउँछ ।

हाम्रो कार अब स्वयम्भूतिर लाग्छ । बालाजु पोखरीका ती माछा त्यहीँ छुटे र अब मेरो मानसपटमा मात्र ती अटेरी माछा चलबलाइरहेका छन् र जहिले पनि बालाजु सम्झ्यो कि चलपलाउन थाल्छन् ।

समतल भञ्ज्याङबाट निकै अग्लिएको थुम्कामाथि तिब्बतकै झाँकी दर्शाउने पेगोडा शैलीका समाना ढुङ्गा र काठका घर, बौद्धमठकै आकारमा एउटा निकै अग्लो स्तूपमाथि निर्मित एकहोरो चियो गरिरहने दुई चक्षु ।

साँच्चै नै बेलुकीको पहेँलपुर घाममा स्वयम्भूको टाकुरादेखि विस्तृत भञ्ज्याङमा फैलिएको काठमाडौँको दृश्य साह्रै मनोरम देखिन्छ अथवा त्यसताक देखिन्थ्यो, उहिलेको यो कुरो हो। स्वयम्भूको सम्पूर्ण क्षेत्र कोलाहल मुक्त, शान्त थियो ।

घन्टाघर, धरहरा एकातिर टड्काले छुट्टिन्थे भने पुरातन नेपाली संस्कृति दर्शाउने माटो र ढुङ्गाको गाह्रो र झिँगटीको छानोले बनेका ससाना पुतलाघरजस्ता घरहरू कीर्तिपुरको डाँडोमा बेग्लै देखिन्थ्यो ।

म विदेश नपुगेको मानिस, तर मलाई के लाग्छ भने यति ठूलो भञ्ज्याङमा बसेको प्रकाण्ड सहर अन्यत्र विरलै फेला पर्ला; फेला परे पनि कुनै अग्लो टाकुराबाट हेर्दा यति मनोरम अवश्य देखिनेछैन ।

यहाँदेखि हामी भरखरभरखरै बनेको पाँचतारे सोल्टी होटलतिर लाग्छौँ जसको चर्चा त्यसताक निकै थियो । वासुदेव भन्नुहुन्छ– 'होइन ! इन्द्रप्रस्थ युधिष्ठिरको राजमहलमा दुर्योधन झुक्किएर पछारिए जस्तो, सोल्टी होटलका ढोका र झ्यालका काँचमा ठोकिएर मानिसको टाउकामा टुटुल्को उठ्छ रे; खुला ठाउँ भनेर अघि बढ्यो काँच जडेको ढोकामा पो ठोक्किराखेको मानिसहरू ।'

'आफू केही नजान्ने लाटोजस्तो भएर बठ्याइँ दर्साउने वासुदेवजीको खुबी हो नि लीलबहादुरजी, बुझ्नुहोला ।' कमलजीको भनाइमा सबैको हाँसो दोहोरियो । निकैबेरदेखि गम्भीर देखापरेका डा. बराल पनि केही हाँसे । त्यसपछि धेरै हास्यव्यङ्ग्यका चुट्किला सुनाएर उनले हाम्रो मनोरञ्जन गरे । आफ्नो शिक्षणकालमा पाश्चात्य देश लन्डनदेखि लिएर भारतको राजधानी दिल्लीको प्रसिद्ध विश्वविद्यालय जे.एन.यू. सम्मका धेरै अनुभवहरू उनले सँगेटेको परिलक्षित हुन्थ्यो ।

पाँचतारे होटल त दिल्ली, बम्बई, कलकत्तातिर धेरै देखियो र कतिपयमा बस्ने सौभाग्य पनि मिलेको छ, सोल्टी होटलको तर आफ्नै प्रकारको विशेषता रहेछ । यसले आफ्नो व्यावसायिक दृष्टि राख्ता-राख्तै पनि आफ्नो वैशिष्ट्य र परम्परालाई सँगेटेर छुट्टै अस्तित्व कायम राख्न खोज्दो रहेछ । यसभित्र बेग्लाबेग्लै देशको झाँकी प्रस्तुत गर्दै ती देशहरूको विशेषतासित तिनको प्रतिनिधित्व गर्ने छ ओटा रेस्टोराँहरू (जलपान गृह) रहेछन् । हामी भेनिस रेस्टुरेन्टमा पस्यौँ जसको कोठाको सजावट, भित्रको कुर्सीटेबल, टुल, तलको कार्पेट, रिकापी, बटुका, गिलास, खाने-पिउने सामग्री सबै कुराले भेनिस सहर कै प्रतिनिधित्व गरेका थिए ।

एक जना सुट-टाइमा सजिएको बियराले चिया ल्याउँछ । 'यहाँ त बियराहरूसित पनि अङ्ग्रेजीमा कुरा गर्नुपर्छ भन्छन् ।' वासुदेवको आफ्नै शैली ।

"पर्दैन हजुर ! क्या को अङ्ग्रेजी बोल्न परोस्; हामी नेपाली नै त हौँ क्यारे !" बियरा अङ्ग्रेजी सजिए पनि मानिस ठेट नेपाली परेछ । हामीले धेरै हलुँगो अनुभव गर्‍यौँ ।

चियापानबाट निस्किएपछि हामी हिमालचुली रेस्टुराँमा पस्यौँ, जसले प्राचीन खानदानी घरानियाँ नेपाली सभ्यता र संस्कृतिको झलक प्रस्तुत गर्दछ । झ्यालढोका, आँखिझ्याल, गाछो, खम्बाहरू नेपाली काष्ठ कारिगरीले कुँदिएको । भित्तामा नेपाली खड्ग खुँडा, ढाल, तरवार, खुकुरीले सजाइएको मेजमा काँस, पितलका झर्के थाल बटुका, रिकापी, किस्ती, डाडु, पन्यूँ, खड्कुला आदि सामग्री प्रदर्शन गरिएको, त्यस्तै केही नेपाली खानपानका सामग्री, तल कार्पेटको ठाउँमा मूल्यवान् राडी ओछ्याएको यो कोठामा पस्ता नेपाली सांस्कृतिक प्रदर्शनी स्टल अथवा कुनै सङ्ग्राहलयमा पसेजस्तो लाग्छ ।

आज बजार इलाका वरिपरि डुलेर पुराना कुराहरू हेर्ने कार्यक्रम थियो। अधिकारी कार्यालय जानुभो र म साथीहरू कृष्ण र भीष्मसित डुल्न निस्कैँ। दरबार स्क्वायर पुगेर पुरानो राजाको नौ तल्ला बाउन्न ढोका भएको दरबार पनि हेरियो । मित्रसेनले झ्याउरे लयमा गाएको गीत, 'नौतले बाउन्न ढोका नेपाले राजैको दरबार' सुन्दै आएको भए पनि दरबारसित साक्षात्कार हुने मौका आज बल्ल पाएँ। त्यो समयलाई बिचार्दा प्रायजसो काठ र माटा ढुङ्गाको गाह्रो र मजेरी भएको यो दरबारको आफ्नै विशेषता छ। त्यसताकसम्म कति पो थिए र नौतल्ले भवन? पाश्चात्य देश छाडेर भारतमै पनि मनग्य थिएनन्। हनुमान् ढोकाछेउको राजदरबार पनि हेऱ्यौँ । छेउछाउको इन्द्रचोक, कुमारीचोक, कुमारीदेवीको मन्दिर, आकाशभैरव, अनि योगी गोरखनाथको मण्डप हेऱ्यौँ जुन मण्डप एउटै रूखको काठले बनेको र यसै मण्डपबाट नेपाल खाल्डोको नाउँ काष्ठमण्डप रहेको कथा प्रचलित छ। काठमा कुँदिएका अलौकिक कारिगरी, यहाँका मठ मन्दिर, मण्डप, महलहरूको विशेषता हो जुन कारिगरीको अवलोकन गर्न सदा विदेशी पर्यटकहरूको धुइरो छुटिरहेको हुन्छ । कुनैकुनै मन्दिरमा यौनका नग्न चित्रहरू पनि कुँदिएको थियो । यस्ता चित्रहरू मैले पछि भुवनेश्वर कोनार्कको सूर्यमन्दिर तथा अन्यत्र पनि देखेको थिएँ।

झन्डै डेढ किलोमिटरको परिधिभित्र फैलिएको दस फिटजस्तो चौडा भएको पर्खाल र पर्खालभित्रै सुरक्षागारत बस्न हुने ससाना कोठाहरू बनिएको व्यवस्थासित गगनचुम्बीरूपमा ठडिएको भव्य पाँचतले

अट्टालिका सिंहदरबारको लम्बाइ करिब ३०० मिटर र त्यति नै चौडा होला । यसमा साना-ठूला गरी बाह्र सय कोठा भएको जानकारी पाएँ । सामन्ती व्यवस्थाभित्र निरङ्कुश एकतन्त्रवादी शासनपद्धतिको चुडान्त रूप हो यो सिंहदरबार। एकतन्त्रवादी शासन पद्धति जहाँ एक जना व्यक्ति पूज्य हुन्छ, त्यसले चूडान्तरूप नलिएसम्म एक जना प्रधानमन्त्रीको निवासको निम्ति यस्तो दरबार निर्माण हुन सक्तैन । यदि साम्राज्यवादी व्यवस्थाभित्र एकछत्रवादी शासनको केही उपलब्धि छ भने त्यो यही नै हो । भारततिर मुगल साम्राज्यवादी एकतन्त्री शासनको प्रतिफल हो ताजमहल जो विश्व प्रसिद्ध छ र सप्त आश्चर्यभित्र एक आश्चर्य ठहरिएको छ । मिश्रदेशको पिरामिडमा पनि यस्तै साम्राज्यवादी व्यवस्थाको अपवाद छैन । हाल सिंहदरबारभित्र सम्पूर्ण मन्त्रालयका विभिन्न सचिवालय अटाएका छन् जसका चोटा र कोठा हेरेर साध्य छैन । बरु दरबार प्राङ्गणभित्रै अवस्थित सानो रेडियो स्टेसनभित्र पस्यौँ हामी जहाँ जनकवि धर्मराज थापा, नातिकाजी, शिवशङ्कर आदि कलाकारसित भेट भयो ।

अवश्य, मैले देखेको त्यो सिंहदरबारको ठूलो भाग जल्यो । अग्निकाण्डबाट जोगिएको सिंहदरबारको मरम्मत भए तापनि अघिको त्यो गौरवमय गरिमा अब रहेन ।

त्यसै बेलुकी लालदरबार पनि हेऱ्यौँ जो दरबारहरूमा सिंहदरबारलाई छाडेर यो निकै नामी दरबार रे जसको जोडाइ, पिसेको मासद्वारा बनेको वज्रबाट गरिएको रे ।

वास्तवमा मठ-मन्दिर, देवालय, बौद्धथान, दरबार र प्राचीन देवलहरूले घेरिएको काठमाडौँमा जता हेऱ्यो उतै मन्दिर, थान अनि दरबार, कतै गणेशथान, कतै भैरवमन्दिर कतै शिवालय त कतै गोरखनाथ मन्दिर ! कति हो कति ।

काठमाडौँ आइपुगेको आज पाँचौँ दिन। आज अलि व्यस्तताको दिन थियो । अधिकारीसित नेपाली साहित्यका त्रिरत्नमध्येका एक, बालकृष्ण समलाई भेट्न जाने योजना थियो बिहान । अन्य दुई रत्नको दर्शन पाउने सौभाग्य घटेन जीवनमा । रोमानी ढाँचाको विशाल अट्टालिकाको सम्मुख फराकिलो प्राङ्गण वरिपरि फूल बगैँचा

अघि फाटकमा उभिएपछि मलाई लाग्यो लेखकलाई सफलताको सिँडीमा सजिलैसित उक्लन केही वंश-परम्परागत वैभव र केही आर्थिक सम्पन्नताको पुट पनि चाहिँदो रहेछ । बालकृष्ण समको व्यक्तित्व धेरै कुराको सम्मिश्रणले बनेको छ। सम्पूर्ण देशको प्रशासन बागडोर आफ्नै हैकममा राखी एकछत्र शासन चलाउने राणा वंशमै जन्मेका बालकृष्णशमशेर निरङ्कुश एकतन्त्रवादी शासन विरुद्ध उभिने केही राणा खलकमध्ये एक थिए र उनी समशेरबाट 'सम' बने । बहुआयामका धनी सम, नेपाली नाट्य जगत्का सेक्सपियर, कुशल अभिनेता, चित्रकार, गीतकार, नेपाली महाकाव्यका सर्जक महाकवि, एक गम्भीर चिन्तक, दार्शनिक, श्रेष्ठ कथा र निबन्धकार ... । भवनको सामु ढोकामाथि कुँदिएका दुई हरफ–

*'यो कुनै वास हो नाथ मेरो जीवन मार्गको*
*तिमीतिर हिँड्नेछु स्वप्न पूरा भएपछि ।'*

यसले उनको चिन्तक व्यक्तित्वलाई पुस्ट्याउँदछ ।

एक जना महान् कलाकार तथा साहित्य महारथीको निवासथलो । सारा परिवेश कलामय छ। फाटकदेखि भवन प्रवेशको ढोकैसम्म बाटाका दुवैतिर ढुङ्गा तथा काठमा कुँदिएका मूर्तिहरू; भित्र बैठककोठामा पस्नेबित्तिकै सामु भित्तामा कोरिएको एक विदुषी महिलाको जीवन कामसुन्दर चित्रमा आँखा पुग्छन्, समको कुशल चित्रकारिताको बेजोड नमुना। प्रेमलाई नै जीवनको आधार र मूल धर्म मान्ने समको यो चित्रलाई आफ्नी जीवनसङ्गिनीप्रतिको अकाट्य प्रेमको प्रतीक ठानेँ मैले । बैठककोठासितै जोडिएको सानो समय कक्षमा पनि जताततै चित्रकारिता, कारिगरीका नमुना छरिएका छन् । एकातिर भित्तामा पञ्चमहाभूत, शौरमण्डलको चित्र कोरिएको छ । बैठकको अर्कोतिर छेउ कोठो पनि किताब फोटोग्राफ, तैलचित्र र अनेकौँ कलाकृतिका सामग्रीले ठसाठस भरिएको छ– मेजमा, आलमारीमा, भुइँमा, भित्तामा यत्रतत्र जताततै ।

'ज्यादै साँगुरो भो, ठाउँ नै पुगेन यी सामग्रीलाई व्यवस्था पुऱ्याउन; समजीको यो गुनासो सुनेपछि सधैँ मनलाई पिरोलिरहने मेरो आफ्नै स्थानाभावको बोझ धेरै हलुँगिएको अनुभव गरेँ । यत्रो

अट्टालिकाभित्र समजीलाई त ठाउँ पुगेको छैन भने, म कुन गन्तीमा आउँछु र ?

समजीको निम्ति आज निकै व्यस्तताको दिन। बेलुकी राष्ट्रिय नाचघरमा हुने समारोहको पनि दायित्व उनीमाथि छ । तैपनि हामीलाई उनले झन्डै डेढ घन्टा समय दिए। मैले 'मेरो कविताको आराधान' र 'नियमित आकस्मिकता' दुई पुस्तक उपहार पाएँ, अनि हामी बिदा भयौं ।

त्यसबेलाको राणाकालिक बाध्यता र बन्धनभित्र धेरै हिरण्यकशिपुमाझ उभिन पुगेका बालकृष्ण सम साँच्चि नै तात्कालिक प्रल्हाद नै थिए जसले आफूले लेखेको उत्कृष्ट नाटक प्रल्हादभित्रै अमरता प्राप्त गरेका छन् ।

दिउँसो साझा कार्यालय पुगेपछि अधिकारीज्यूकै स्कुटरमा पाटनको एक फन्को मारियो र त्यहाँको दरबार स्क्वायर कृष्णमन्दिर, सुनधारा आदि ठाउँ हेरियो। त्यतै कता मल्लकालिक राजा जयदेवले कामरूप राजकन्या राज्यमतीलाई बिहे गरेर ल्याएपछि दुरदेशमा आएकी रानीको उदासिनता मेटाउन निर्माण गरिएको फोहोराको टुप्पामाथि पखेटा फिजाएर उड्न तरखराएको एउटा चराको प्रतिमा पनि देखाए जस्तो लाग्छ तर धेरै वर्षअघिको त्यो कुरो अब उति सम्झन सक्तिनँ। जाउलाखेल चिडियाखाको पनि एक दृष्टि लाएर हामी फर्क्यौं ।

बेलुकी साझाले केही जलपानको व्यवस्थासित एउटा परिचय गोष्ठी राखेको थियो। चार बजेतिर नवीन पुरातन गरेर बीस-पच्चीस जना साहित्यिकहरू भेला भएका थिए। अब धेरैजसोको नाम सम्झन सक्तिनँ। कमलजी, वासुदेव, अधिकारी, साझाका केही स्टाफ, विश्वविद्यालय तथा क्याम्पसका केही प्राध्यापक, भूपी शेरचन, कृष्णचन्द्रसिंह प्रधान आदि भने पक्कै थिए। कुनै एक जना प्राध्यापकले मेरो सङ्क्षिप्त परिचय दिएपछि आजको यो महफिल विशिष्ट कवि भूपी शेरचनकै थियो । उनको सम्पूर्ण कुराकानीमा हास्यव्यङ्ग्य काव्यधारा सलल बगिरहेको थियो । सबै जना गोलमेचको वरिपरि टम्म बसेका थिए । कुनै एक जना व्यक्ति मेच नपाएर पछिल्तिर एक छेउमा

टक्रक्क उभिए । भूपीजीलाई हास्यसामग्री फेला परिहाल्यो । भने– 'ओहो भारतको मानचित्रमा श्रीलङ्का अलग्गै छुट्टिएजस्तो तिमी पनि आएर परै ठिङ्ग उभियौ त ?' यो एउटा उदाहरण मात्र राखेँ । वास्तवमा आजको यो बेलुकीको याम उनैले रमाइलो पारेका थिए ।

सभा विसर्जनपछि कमलजीकै कारमा हामी 'राष्ट्रिय नाचघर' पुग्यौँ जहाँ रोयल नेपाल एकाडेमीको भव्य समारोह थियो । त्यहाँ विशिष्ट र अति विशिष्ट अनगन्ती व्यक्तित्वसित मेरो परिचय भयो जो अब न सम्झेर साध्य छ, न बखानेर ।

आजको समारोहमा तात्कालिक राजा महेन्द्रको हातबाट सोमनाथ सिग्द्याललाई त्रिभुवन पुरस्कार अनि कविता प्रतियोगिता आदि अन्य पुरस्कार वितरणपश्चात् राग बागेश्वरीको शास्त्रीय सङ्गीत लयमा नृत्य प्रदर्शनद्वारा सांस्कृतिक कार्यक्रमको शुभारम्भ हुन्छ । आजको मूल आकर्षण थियो । समको लेखन र निर्देशनमा प्रस्तुत नाटक पृथ्वीनारायण शाह, जसको मूल भूमिका पृथ्वीनारायण शाहको अभिनयमा थिए सम आफैँ । मैले गौरव गर्नुपर्ने कुरा के थियो भने मैले बालकृष्ण समको अभिनय हेर्ने सौभाग्य पाएँ जो यस पूर्वोत्तर भेकका विरलै व्यक्तिले पाएका हुनन् ।

भोलिपल्ट अपराह्णतिर कमलजीसित हाम्रा अर्का एक मनीषी कविवर धारणीधर कोइरालालाई भेट्न फर्पिङ जाने कुरो थियो । बिहान साथीहरूसित न्युरोड र नारायणहिटीदरबारसम्म डुलेर फर्क्यौं ।

हामी फर्पिङको डाँडातिर बढिरहेका थियौँ जहाँ कविवर धरणीधर कोइरालाको निवास थलो छ। कमलजी बाहेक साथमा थिए उही हास्यरसका महारथी वासुदेव लुइँटेल र तात्कालिक शिक्षा सचिव कवि धरणीधरका भाइ दीर्घराज कोइराला ।

बाटामा पर्ने डाँडा, पहाडी थुम्का, पहाड काटेर बनाएका खेतका गल्छी, बागमती र विष्णुमतिको सङ्गम थलो, मच्छेन्द्रनाथको रथयात्रा, सम्पूर्ण नेपाल खाल्डोको जल निकासा हुने दोभानको अलौकिक दृश्यसित कार अघि बढिरहेको छ । केही पर पुगेपछि एकातिर त्रिभुवन विश्वविद्यालयको झलक देखिन्छ भने अर्कातिर

कीर्तिपुर डाँडाका ससाना घरहरू। दक्षिणकाली पुग्नुभन्दा केही अघि कार थामेर हामीले अलि भिरालो ठाउँमा एउटा दुरुस्त गाईको कचौराको बान्की परेको ढुङ्गा हेऱ्यौं जसबाट अनवरत दूधका थोपा झर्छन् भन्ने किम्बदन्ती छ। दूध नझरोस्, पहाडी झर्नाबाट रसाएर झरेको दूधजस्तो सेतो पानीका थोपा त अवश्य झरेकै देखिन्छ। दक्षिणकालीमा, भक्त, साधुसन्त, महन्त, गाइने मगन्तेहरूको निकै ठूलो लस्कर देखा पर्छ। केही खुड्किला तल झरेपछि तीनतिर पर्खालले घेरिएको खुला ठाउँमा देवीको मूर्ति। बोका-पाठा, हाँस परेवाको बलिले मजेरी पर्खाल देवीको थान, प्रतिमा सबै रक्ताम्मे देखेपछि हाम्रो रुढीवादी मानसिकताभित्रै हामीले पनि देवीप्रति श्रद्धा व्यक्त गरी फर्क्यौं।

चारैतिर हरियो-भरियो प्रकृतिले शृङ्गारेको यो सुनसान विरान एकान्त थलो किन रोजे आफ्नो अन्तिम बासको निम्ति गुरुवर धरणीधरले जसले आफ्नो जीवनको लामो काल दार्जिलिङको निकै कोलाहलमय ठाउँमा विताएका हुन्। छेउमा उनीद्वारा सञ्चालित एउटा पाठशाला पनि रहेछ जहाँ आफ्नै प्रकारको शिक्षा दिइँदो रहेछ।

कविजीसित झन्डै दस वर्षपछि मेरो भेट हुँदै थियो। पहिलो भेट हाम्रो सन् १९५५ तिर गुवाहाटीमै भएको थियो जब म महाविद्यालयको छात्र थिएँ। गुवाहाटीका जनताले कविलाई दिएको अभिनन्दन समारोहको अध्यक्षता गर्ने सौभाग्य पनि मलाई मिलेको थियो। कविज्यूसित घन्टाभरको भलाकुसारीपछि हामी फर्क्यौं।

काठमाडौंको मेरो बसाइ पनि बिस्तारै टुङ्गिँदै आएको छ। भोलि बाटो लाग्ने विचार छ। आज गोर्खापत्रको निम्ति भैरव अर्यालले अन्तरवार्ता लिने कुरा। 'म दुई बजे लिन आउँछु र गोर्खापत्र संस्थानको कार्यालयमा जाउँला,' भनिराखेर अधिकारी कार्यालय जानुभो। म केही छिन ओछ्यानमा पल्टेको, निन्द्रा लाग्नको साटो छटपटी लागेर आयो।

मनमनै विचारेँ– काठमाडौं धेरै ठाउँ डुलियो र धेरैसित भेट पनि गरियो। रोयल नेपाल एकाडेमीमा (हाल प्रज्ञा-प्रतिष्ठान) भने पसिएको छैन र त्यहाँका प्राज्ञ विद्वान् साहित्यिकहरूसित भेटघाट

गरिएको छैन । एकेडेमीको विशाल अडिटरियम र भवनको निर्माण कार्य त्यसबेला चलिरहेको थियो । कमलपोखरीकै छेउमा पर्ने यो नवनिर्मित एकेडमी भवन हामी आउने-जाने बाटोमै पर्थ्यो र हामी सधैँ देख्ने गर्थ्यौं । त्यसेको छेउमा रहेको कोठै-कोठा भएको लामो टहरोजस्तो घरमा त्यसताक एकेडेमीको काम चल्ने गर्थ्यो ।

म डेराबाट निस्केर त्यही एकेडेमी भवनतिर लागेँ । भवनको बाहिरै रामशरण दर्नालसित भेट भो । दर्नालजीसित मेरो पुरानै परिचय थियो । एकेडेमीका अन्य सदस्य र कार्यकर्ता दुई बजेपछि मात्र आउँछन् भन्ने थाहा पाएपछि म फेरि बाहिर निस्कैं । समय कटाउन म नयाँसडकको एक फन्को मारेर फेरि प्रज्ञा भवनतिरै फर्कंदै थिएँ, अधिकारीजीसित बाटैमा भेट भयो । दुवै पूर्व निर्धारित कार्यक्रमअनुसार गोर्खापत्र संस्थान पुग्यौँ र भैरव अर्याललाई लिएर पारस होटल आयौँ । रेस्टोराँको एउटा मेचमा चियाचमेनासित हाम्रो अन्तरवार्ताको कार्यक्रम सुरु हुन्छ ।

नेपाली हास्य व्यङ्ग्य शैलीका महारथी मानिने भैरव अर्यालका प्रश्नहरूले भने हास्यव्यङ्ग्यको पुट कत्ति बोकेका थिएनन् । जीवन सम्बन्धी गहिरा र जटिल प्रश्न थिए, अनि थिए नेपाली साहित्यको घेरोबाट टाढाटाढा सुदूरपूर्व भारतमा रहेर पनि नेपाली साहित्यमा यस्तो आधिकारिक दखल कसरी प्राप्त भो ?

पारस होटलबाट निस्केपछि अधिकारी र अर्याल आआफ्नो कार्यालयतिर लागे, म फेरि प्रज्ञाभवन पुगेँ । त्यहाँ सर्वप्रथम तात्कालिक उपकुलपति बालचन्द्र शर्मासित भेट भयो । अस्ति बेलुकी राष्ट्रिय नाचघरको समारोहमा उनको स्वागत सम्भाषण सुन्ने मौका मिलेको थियो । मैले आफ्नो बाल्यकाल सम्झेँ जतिबेला बालचन्द्र शर्माद्वारा अनूदित गुलबकावली पढेको थिएँ । अनुवादकको नाउँपछि, एम.ए. साहित्य रत्न देख्दा कत्रा विद्वान् मानिस भनेर मनमनै प्रशंसा पनि गरेको थिएँ हो ! गुलबकावलीको घेरोबाट अग्लिएर नेपालको *ऐतिहासिक रूपरेखा, नेपाली शब्दकोश, भानुभक्तको समीक्षात्मक कृति* र अनेकौँ मूल्यवान् ग्रन्थका सर्जक बन्दै एकेडमीको उपकुलपति बन्न पुगेका बालचन्द्र शर्माभित्र एक जना प्रगाढ विद्वान् व्यक्तित्व लुकेको पाइन्छ ।

आज राष्ट्रकवि बनिसकेका नेपाली साहित्यका एक विभूति कविवर माधवप्रसाद घिमिरेसित पनि जीवनमा पहिलोचोटि त्यहीँ भेट भयो। कविजीले भनेका दुई कुरा अझ मलाई सम्झना छ। प्रथमत: 'बसाइँ म पनि पढाउँछु (कुन तालिकाम हो, बिर्सें) पढाउँदाखेरि आँखासामु तपाईंको चेहरा आउँदैनथ्यो, अब आउँछ।' अनि आर्को कुरा, 'तपाईं हामी टाढाटाढा रहे पनि नेपाली साहित्यको इतिहासका पानामा छेउछेउ नै छौँ। हामी एक अर्काबाट कहिले टाढिँदैनौँ।' त्यसपछि एकेडेमीले प्रकाश गरेको 'कविता' पत्रिकाको एकभारी सङ्कलन कविजीबाट उपहारमा पाएँ। त्यहाँ भेट हुनेमध्ये अहिले सम्झन सकेका अन्य साहित्यिक हुन्, भवानी भिक्षु, कृष्णप्रसाद पराजुली आदि।

मेरो काठमाडौँयात्राको आज अन्तिम साँझ। अङ्ग्रेजीमा फिनिसिङ टच भनेझैँ अधिकारीले, समेट्न सकिने केही ठाउँ लाजिम्पाट, भारतीय दूतावास, राजकीय अतिथिशाला आदिको फेरो मार्नुभो मलाई साथमा लिएर।

छेउका साथीहरूले भोजको आयोजना गरेका थिए। खाने-पिउने दुवै व्यवस्था थियो। म नपिउने मानिस। खानामा साथ दिएँ।

बिहान पानी परिरहेको भए तापनि जसोतसो हामी बसअड्डा आइपुग्यौँ। लक्ष्मण प्रधान, कृष्णप्रसाद ज्ञवाली, तथा अन्य निकै विद्यार्थीहरू बिदा दिन आएका थिए।

सबैसित बिदा भएपछि बस लाग्यो त्रिभुवनराजपथको बाटो आफ्नो गन्तव्यस्थान वीरगन्जतिर। डाँडा र काँडा, पाखा-पखेरा, टाढा देखिने हिमालचुलीको बर्फिलो टलक, कतै लुगलुग मुटु कपाउने पहाडको उचाइ अनि कतै पसिना चुहाउने समतल खाल्डो। प्राकृतिक सौन्दर्यको स्वाद लिनेलाई धेरै कुरा थिए। यी दृश्यहरूको आनन्दसितै। तर मेरो स्मृतिटलमा भने एउटा कुरो, बालाजु कृत्रिम हौजका ती अटेरी चुलबुले माछा खेलिरहेका थिए। यिनले एउटा गहिरो छाप छोडेको छ मेरो मनमस्तिष्कमा।

यसपछि कैयौँ चोटि काठमाडौँ पुगियो; कहिले गोष्ठीको सिलसिलामा त कहिले कुनै समारोहको निम्तोमा। कहिले त्यसै

डुलडाल र भेटघाट । तर बालाजु पुग्ने कहिले अनुकूल परेन । साहित्यिक भेटघाटमै धेरजसो समय बित्थ्यो ।

एकैचोटि झन्डै तीन दशकपछि सन् १९९५ तिर छोरीलाई लिएर म पुगेँ काठमाडौँ । सभासमारोह भेटघाटको बीचमै छोरी कृष्णालाई काठमाडौँ डुलाउने बाध्यता पनि थियो । एक दिन एउटा टेक्सी लिएर हामी निस्क्यौँ । पहिले बूढानीलकण्ठ पुगेर फर्कंदा बालाजुतिर लाग्यौँ । म बाटामा भन्दै गइरहेको थिएँ– बालाजुमा ससाना कृत्रिम हौजहरूको सङ्लो पानीमा कस्ता राम्रा माछा पालेका छन् ! माछाहरू चलपल, चलपल गर्दै यताउति सलल बगेको दृश्य कति राम्रो लाग्छ !

टिकट लिएर फाटकभित्र पस्यौँ । म ती जलमग्न पोखरी र माछाहरू खोजिरहेको थिएँ। खोइ ती, ससाना कृत्रिम पोखरी र तिनमा खेल्ने माछा ? हामी अर्कै ठाउँ त आएनौँ ? बालाजु त यही हो। अब ती पोखरीमा न जल थियो न माछा । तिनमा त झारपात उम्रिएर माटोले पुरिइसकेका छन् । चारैतिर सुक्खा उजाड । अघिका ती गुलाब फूलका बोटहरू पनि छैनन्। पहिलोचोटि म आउँदा बालाजुका नौओटाजति धारा त राम्रै बगेको देखेको हुँ; अहिले दुईओटा जति धारामा पानी सामान्य तुर्किएको छ । मास्तिरको प्राकृतिक वनस्पति वाग पनि खुइलिएजस्तो छ ! न त्यहाँ उत्तिसको रूख छ न ऐँसेलुका बुटा ।

बाटापारि लहरै चार-पाँचतले भव्य भवनहरू उभिएका छन् । वर मूल सडकको छेउछाउ अनेकौँ कारखाना, मिल र उद्योगधन्दाले भरिएको छ । मिलको धुवाँले नाक थुन्न कर लाग्छ ।

अब भानुभक्तको स्वर्गपुरी बालाजी त छैन नै, मैले तीस वर्षअघि देखेको बालाजी पनि रहेन ।

यता स्वयम्भूमा पनि धेरै परिवर्तन परिलक्षित हुन्छ। स्वयम्भूको ठाडो ढिस्को आफैँ तल खसेर बाक्लै घरहरू बनेजस्तो लाग्छ त्यहाँ। अब केको माथि अग्लो ठाउँबाट काठमाडौँ भञ्ज्याङको दृश्य हेर्नू ? त्यहाँ त कुनै चलचित्रको सुटिङ् चलिरहेको छ । मानिसहरू कुदाकुद गरिरहेका छन् । जताततै घुइँचो छ । अघि विस्तृत

भञ्ज्याङमा फैलिएको काठमाडौँ, माथिबाट हेर्दा फराकिलो थियो, तर अहिले घरैघर, तलैतला खप्टिएर एक अर्कोमा ओइलिएको र साँगुरिएको जस्तो लाग्यो ।

हामी तल झरेर आफ्नो टेक्सी पैल्याई बाटो लाग्यौँ ।

तीन दशकभित्र निकै परिवर्तन भएछ काठमाडौँमा । यो परिवर्तन उर्द्धगामी वा अद्योगामी, छुट्याउन भने सकिनँ ।

जे होस् ! बालाजीको हाल देखेको दृश्यले मेरो मानसपटमा खेलिरहने जलासयका ती अटेरी माछा भने मेटिएको छैन र नमेटिएला पनि ।

प्रकृति कवि वर्ड्सवर्थले आफ्नो धेरैजसो काव्य सृजनामा हो त यही सन्देश दिन खोजेका हुनन् कि सौन्दर्यमय वस्तु सदैवको निम्ति आनन्ददायक हुन्छ ।

✍

# नेपाली संस्कृतिका विशेषताहरू

*– विष्णु प्रभात*

## [ १ ]

नेपाली संस्कृतिको पहिलो विशेषता जाति र आस्थाको सम्मिलन हो । परस्पर भिन्दाभिन्दै आस्थामा अडिएर पनि आपसमा एकताबद्ध हुनु आर्य-अनार्य, शाक्त-शैव, वैष्णव-शङ्कर, बौद्ध-हिन्दु जस्ता भेदलाई भन्दा परोपकार, मानवकल्याण, समता र समावेशी शैलीलाई अङ्गीकार गर्नु नेपाली संस्कृतिको विशेषता रहिआएको छ । लैङ्गिक विभेदका विपक्षमा सम्पत्तिमा दम्पतिको हक भन्ने शोच पाइनु, नरनारी बराबरीको भावनाले अर्धनारीश्वरको उपस्थिति रहनु र शिव-पार्वती, लक्ष्मी-नारायण, बुद्ध-ताराजस्ता एकात्मक अस्तित्वमा देवदेवीका प्रतीक ठड्याई द्विलिङ्गी पात्रको साझा बिम्बले संस्कृति रङ्गिनु यसैको उदाहरण हो । आस्थाको सम्मिलनले गर्दा नै मञ्जुश्रीलाई हिन्दु र बौद्ध दुवै मतका अनुयायीहरूले पुज्दछन् । शैव, शाक्त र वैष्णव सम्प्रदायका अनुयायी पनि आदिबुद्ध मानी मञ्जुश्रीको आराधना सरस्वतीका रूपमा गर्छन्। हिन्दुहरूले इन्द्रका रूपमा पुज्ने मत्स्येन्द्रनाथलाई शैवहरू पनि पुज्छन् र बौद्धहरूले अवलोकेश्वर भनी उपासना गर्दछन् । तिब्बती जनश्रुतिअनुसार गोरखनाथ प्रथम बज्रयानी सन्त थिए । नाथसम्प्रदायका संस्थापक मानिने गोरखनाथले जातिभेदलाई गौण मान्दथे । सरहप्पा, कविर र गोरखनाथले सन्तपरम्परालाई हुर्काए । परन्तु गोरखनाथ प्रारम्भमा शिवमार्गी थिए र पछि मात्र उनले आफ्नै पन्थ विकास गरे ।

आर्य संस्कृतिमा सम्मिलित पहिलो आदिम जाति निग्रो थियो । निग्रेटाहरू अफ्रिकाबाट इरान हुँदै भारत आए र यहीँबाट हिन्देसियाभर फैलिएका थिए। यही जातिले पीपल (अश्वत्थ) पुज्ने संस्कार भारतीय समाजलाई दियो । लिङ्गपूजाको चलन र मृतात्माको बस्ती अर्थात् स्वर्गको कल्पना पनि निग्रोहरूले नै आरम्भ गरेका थिए। स्मरणीय छ, वेदमा लिङ्गपूजकहरूको निन्दा गरिएको छ। द्रविडहरूबाट आद्यशक्तिको रूपमा मातृपूजाको संस्कार आयो । उमा-महेश्वरको परिकल्पना र

नागपूजाजस्ता चलन द्रविडहरूबाटै आर्यहरूले अङ्गीकार गरेका हुन् । यसो हुनमा आर्य-अनार्यबीचको संसर्ग बढ्नु, अनार्य नारीहरूलाई आर्यहरूले पत्नी-उपपत्नीको रूपमा ग्रहण गर्नु र तिनीहरूका विश्वासलाई कदर गर्नु नै महत्त्वपूर्ण कारक बनेको थियो। वास्तवमा मानवसंस्कृतिमा विशुद्ध निक्खरापन खोज्नु अग्रगामी विचार त्याग्नु हो । जातीय सम्मिलन सांस्कृतिक सम्मिलनद्वारा उत्पन्न भावधारा हो । नेपाली समाज र संस्कृतिमा पनि यसको ऐतिहासिक उपस्थिति छ। भारद्वाज गोत्रमा ब्राह्मणसँगै क्षेत्री, नेवार, तामाङ, गुरुङ र मगरहरू रहेका छन् । यो जातीय सम्मिलनकै द्योतक उदाहरण हो । काठमाडौँ उपत्यकामा काश्यप गोत्रीय महर्जनहरू छन् । परम्परागत सनातनी विश्वासमा ब्राह्मण, क्षत्री र वैश्यलाई एउटै वृत्तमा राखेर द्विज मानिएको छ । उनीहरू कर्मका आधारमा ब्राह्मण बन्ने व्यवस्था छ र थुप्रै क्षत्री र वैश्यहरू आफ्नो ज्ञान र कर्मद्वारा ब्राह्मण बनेका घटना सांस्कृतिक ग्रन्थहरूमा उल्लेख छन्। व्यवहारमा पनि यो देख्न पाइन्छ। मनकामनादेवीको पूजारी थापा मगर र वज्राचार्य छन् भने मुक्तिनाथमा भोटेनी झुमा र सुवेदी बाहुन पूजारी छन्। बौद्धमार्गीहरूको सम्यक पूजामा मनकामनामाई मिसाएर शक्ति-पूजक संस्कारको समन्वय गरिन्छ । भनिन्छ शैवमार्गी शोचमा रहेको पञ्चमुख शिवको धारणाकै अनुगामी भएर बौद्धमार्गीहरूले पाँच ध्यानीबुद्धको धारणा बनाए । शैवमतले शिवलाई नटराज भनेझैँ बौद्धमतले चक्रसम्वरलाई पद्मनृत्येश्वर मानेको पाइन्छ । आस्थाको सम्मिलन झल्काउने यस्ता थुप्रै कुराहरू छन् र तिनको अध्ययन जरुरी छ । तन्त्रयानी धारामा हेर्दा षड्कोण शक्तिस्वरूपा योनीबिन्दु हो, सरस्वतीको प्रतीक हो तर बौद्धमतमा चक्रसम्वर र वज्रबाराहीको मिलनबिन्दुका रूपमा त्यसकै मध्य भागलाई पुजिन्छ। चाँगुनारायण जात्रामा क्षेत्री (भँडेल) र दलित (डुइयाँ) बीच बिहे गराइन्छ । शिवले विष्णुलाई शक्तिको आराधना स्वरूप भगवतीको पूजा गर्न लगाएको *हिमवत्खण्ड*को कथा र चाँगुनारायण स्थापनाको किंवदन्तीले पनि नेपाली संस्कृतिको सम्मिलित विकास प्रक्रियालाई दर्साउँछ। प्रताप मल्ल आफूलाई हिन्दू भन्थे तर उनले स्वयम्भूमा वज्र स्थापना गरे । चाँगुनारायण वैष्णव देवता मानिन्छ र वैष्णव सम्प्रदाय पशुहिंसाका विरोधमा अहिंसावादी मत

बनेर हुर्किएको हो। अहिंसा सबै धर्मको मूल हो। त्यहाँका पूजारीलाई जुठोसुतक नलाग्ने गरिएको छ । यी केही उदाहरणहरूले नेपाली संस्कृतिमा रहेको जाति र आस्थाको सम्मिलनलाई सङ्केत गर्दछन् र पहिलो विशेषता प्रकट गर्दछन् ।

## [ २ ]

नेपाली संस्कृतिको दोस्रो विशेषता सम्प्रदाय निरपेक्षता हो । यस तथ्यलाई लामो समयसम्म आफूलाई हिन्दू भन्ने सनातनी धाराले लुकाउने चेष्टा गऱ्यो । बुद्ध, जैन, सिख र शैव धारालाई आफ्नै सम्प्रदाय बताएर राष्ट्रलाई नै 'हिन्दू अधिराज्य' भनाउने काम गऱ्यो । वस्तुगत तथ्यले ती सबै धार्मिक धारणालाई पृथक्-पृथक् विश्वासका मतसम्प्रदाय साबित गरेको छ। नेपालमा इसाई र मुसाई धारालाई मात्र हिन्दूइतर मतका रूपमा सनातनीहरूले लिने गरेको देखिन्छ । परन्तु यी कुराहरूभन्दा पृथक् छ नेपाली संस्कृतिको वैशिष्ट्य । त्यसैले आज सारा नेपालीहरूको ठूलो हिस्साले सम्प्रदाय निरपेक्षताको पक्षपोषण गर्दछन्। धर्मनिरपेक्षताको तात्पर्य राज्यले सबै धर्मलाई समान व्यवहार गर्ने नभएर कुनै पनि धर्मलाई सहयोग नगरेर सङ्गठित रूपमा कसैलाई पनि परिचालन हुन नदिने गरी धार्मिक विश्वासलाई व्यक्तिको निजी मामिला बनाउनु हो भन्ने बुझिए पनि स्पष्टरूपमा यो विचार सरकारतर्फबाट आउन सकेको छैन । राजा मानदेव विष्णुमार्गी थिए, उनकी रानी शिवमार्गी थिइन् र छोरी शक्तिकी उपासक अर्थात् त्यसबेला पनि धार्मिक विश्वास भनेको व्यक्तिको निजी मामिला थियो । परिवारमा परस्पर सद्भाव थियो, हस्तक्षेप थिएन। मानदेवले बुद्धविहार पनि बनाएका छन्। पशुपतिस्थित हरिशङ्करको मन्दिरले धार्मिक विश्वासका साथै जातीय सम्मिलनलाई दर्साउँछ । त्यहाँ शिव र विष्णुको अर्थात् किरात र आर्यको एकात्मकतालाई स्थापित गरिएको छ। धार्मिक भ्रम हटाउन विष्णु र महादेवले आधा-आधा भई एउटै मूर्तिमा व्यक्त भएको भन्ने शिलालेखसमेत त्यहाँ उत्कीर्ण छ । यी कुराहरूले हाम्रो संस्कृतिमा सम्प्रदायनिरपेक्ष चिन्तन र व्यवहारको लामो परम्परा रहेको तथ्य अवलोकन गर्न हामीलाई प्रेरित गर्दछ ।

## [ ३ ]

नेपाली संस्कृतिको तेस्रो विशेषता लौकिकता हो । नेपाली समाजले जतिसुकै अलौकिक ईश्वरको भजन गाए पनि ती सबैको आधार लोकजीवन, प्रकृति र मानिस रहेका छन् । नेपाली संस्कृति आधारभूत रूपमा प्रकृतिपूजक छ । जल, वायु, अग्नि, आकाश र भूमि पुज्ने प्रथामा अडिएको हाम्रो संस्कृतिले शिवत्व, अपनत्व र समत्वलाई अँगालेको छ । मनुष्यबाट ईश्वर सृष्टि गर्ने र त्यही ईश्वरको आशीर्वाद थाप्ने परम्परा निर्माण गरेको छ । लोकविश्वासमा परलोक आरोहण गराउने पुरेतवादी शोचसँगै 'खानेबुद्धि शिला र मन्त्र' भन्ने लोकायती जनमत पनि एकै साथ छ । सप्तमातृका पूजा गर्ने परम्पराले मातृसत्तात्मक समाजव्यवस्थाको संस्कार बचेको देखाउँछ भने कुमारी आमालाई आदर्श मान्ने सिन्धुघाँटीको सरस्वती सभ्यताको प्रभाव पनि यहाँ देख्न पाइन्छ । यी सबै लौकिक कुराहरू नै हुन् । नेपाली संस्कृतिमा आस्तिकता र नास्तिकता सँगसँगै रहेका छन् । शरीर र मन सँगसँगै रहन्छन् । हिन्दू सनातनीहरू आत्मालाई अलौकिक अस्तित्व मानेर शरीरको सञ्चालक स्विकार्छन् तर दुवैले शरीर र मनको स्वस्थताका लागि योगको आवश्यकता दर्साउँछन् । योगशास्त्र पतञ्जलिको लौकिक चिन्तन हो । आफ्नै शरीरको पूजा गर्ने लौकिक चिन्तन हाम्रै संस्कृतिमा छ । त्यसैले हामीले सांस्कृतिक निरन्तरताका लागि मानव हितकारी विचार चुन्नुपर्छ र लौकिकतालाई नै अँगाल्नुपर्छ ।

## [ ४ ]

नेपाली संस्कृतिको चौथो विशेषता अन्तरजातीय एकता हो । शिव र पार्वतीको अनुकम्पा अर्थात् सुम्निमा-पारुहाङको मिलनबाट सृष्टि अघि बढ्यो भन्नुको तात्पर्य आर्यपुत्री पार्वती र किराती शिवको विाह प्रसङ्गमात्र होइन 'शिवको कुनै गोत्र र वंश हुँदैन' भन्ने कुरातर्फ पनि हामीलाई चिन्तनशील बनाउँछ । यसले अन्तरजातीय सम्मिलनको पक्षलाई ऐतिहासिकता प्रदान गरेको मात्र नभई कल्याणकार्यका लागि कुनै जाति, गोत्र वा वंशको सीमा आवश्यक छैन भन्ने भावतर्फ

डोऱ्याउँछ । शिवत्वको तात्पर्य सबैको मङ्गल हो । अन्तरजातीय सम्मिलनको परम्परा संसारका सबै क्षेत्रमा रहेको छ। एक जाति र अर्को जातिका बीच हुने सामाजिक सम्बन्धले मानवपरिवारको निर्माण गर्छ । अनुलोमद्रप्रतिलोम विवाहसँगै मिश्रित जातिको उपस्थिति पनि परापूर्वकालदेखि नै हाम्रो समाजमा पनि रहिआएको छ। महाभारतमा युधिष्ठिर भन्छन्– जन्मले कोही पनि शूद्र वा ब्राह्मण हुँदैन । वाल्मीकि स्वयं अनार्य (ब्याधा) थिए र व्यासकी आमा निषाद (माझी) थिइन् । भृकुटी र स्रङचङ गम्पोको सन्दर्भले मात्र होइन आज पनि थुप्रै राजनेता, विद्वान्-विदुषी र सर्वसाधारण नेपालीहरूले अन्तरजातीय विवाह गरिरहेका छन्। वास्तवमा 'वसुधैव कुटुम्बकम्' भनेको जातीय सम्मिलनलाई अँगाल्ने चिन्तन हो, परन्तु त्यसलाई कानुनी संरक्षण दिने काम भने अझै पनि हुन सकेको छैन । यसले गर्दा हाम्रो संस्कृतिमा रहेको एउटा असल परम्परा सबल बन्न सकेको छैन ।

[ ५ ]

नेपाली संस्कृतिको पाँचौँ विशेषता हो– साझापन । हामी जुनसुकै जाति-प्रजातिमा रहेका भए पनि जातीय संस्कृतिहरू बिना कुनै अपवाद अन्तरजातीय प्रभावद्वारा परस्पर परिष्कृत र अग्रचालित भई आएका हुन्छन् । परम्परागत संस्कृतिका रूपमा रहेको हिन्दू, बौद्ध, इसाई, मुसाई जुन विश्वासमा बाँधिएका भए पनि मानव सभ्यता र संस्कृति विश्वव्यापीरूपमा नै परस्पर प्रभावित छन् । आज हामीले नितान्त निजी सजातीय र आफ्नो ठानेका कैयौँ विश्वास, प्रथा र चलनहरू हिजो अर्कैका थिए र आज पनि ती प्रचलनहरू हाम्रो मात्र नभई विभिन्न जातिका मानिसहरूको साझा चलन बन्न पुगेका छन् । वैदिक कालमा आगो नै देवता मानिन्थ्यो तर आज आगोलाई देवता मान्ने प्रचलन लगभग सकिएको छ । तर पनि आगो सबैको साझा उपभोग्य साधन भने छँदै छ । नेपालीहरू जुन जातिका भए पनि उनीहरू सबै पितृपूजाको रूपमा कुलायन गर्दछन्। नयाँ वर्ष, उँधौली-उँभौली, दसैँ-तिहार, सङ्क्रान्ति, श्रीपञ्चमी आदि चाडपर्वहरू सबैले मनाउँछन् । बूढाबूढीको सम्मान, शान्ति-समृद्धिको कामना, बाल-बालिकाप्रति प्रेमजस्ता कुराहरू सबै जातीय संस्कृतिमा समान छन् ।

*मनुस्मृति*का धेरै कुराहरू मुन्धुममा पाइन्छन् भन्दै नारदमुनि थुलुङ लेख्छन्– "किरातहरू आफूलाई सूर्यको उपासक, मनुवंशी एवं प्राचीन हिन्दू सम्झन्छन् ।" त्यस्तै गणेश पुज्ने चलन बौद्ध र जैन समुदायमा पनि छ । सबैका आमोद-प्रमोदका विशेष परम्पराहरू छन् र सबैले आफ्ना जातिका गीत-सङ्गीत मीठो मान्दछन् । सबैले खाना, नाना र छानाको प्रबन्ध गरी जीवनयापन गरेका छन् । वर्गीय विषमताका बावजुद सांस्कृतिक साझापनले भाषा, साहित्य, सङ्गीत र कलाका बान्कीहरू निर्माण गरेका छन्, सिँगारेका छन् । एक जातिका मानिसहरू अर्को जातिका गीत-सङ्गीत र कलाकौशलहरूबाट उत्तिकै आनन्दित हुन्छन्, जतिको आफ्नो जातिको सिर्जनाबाट । त्यसैले नेपाली संस्कृतिमा साझापन महत्त्वपूर्ण विशेषताका रूपमा रहेको छ । यस तथ्यलाई देख्दा आजको सन्दर्भ पनि उत्तिकै महत्त्वपूर्ण छ । आज धेरै नेपालीहरूको खानपिन, पहिरन, बोलीचाली र बसोबासमा साझापनको सघन मात्रा निर्माण भएको छ । सांस्कृतिक सम्मिलनको प्रक्रिया दिनानुदिन बढ्दो छ । केही मानिसहरू पार्थक्यतालाई बढाउन चाहन्छन् तर पनि शिक्षा, यातायात र सञ्चारले यसलाई निरन्तर बढाउँदो छ । वैज्ञानिक प्रविधिको प्रयोगमा समानता रहेको छ र बिस्तारै अन्तर्राष्ट्रिय साझापनतर्फ हाम्रो जीवनशैली अग्रसर भइरहेको छ ।

## [ ६ ]

नेपाली संस्कृतिको छैटौँ विशेषता हो– श्रमको सम्मान । कर्मवादी संस्कारका आधारमा होस् वा धर्मवादी विश्वासमा होस् श्रमलाई सम्मान गर्ने शोच र व्यवहार नेपाली संस्कृतिको छैटौँ विशेषता हो । प्राचीन समयदेखि नै शिल्पीहरूको सम्मान गर्ने परम्पराका रूपमा विश्वकर्मालाई आदर व्यक्त गर्ने र स्रष्टाको रूपमा प्रजापति पुज्ने चलन रहेको पाइन्छ । रुद्रसूक्तका अनुसार "चर्मकारेभ्यो नमः, रथकारेभ्यो नमः" जस्ता आदरार्थी प्रयोगद्वारा त्यसबखतका शिल्पकार, कालीगढ र मूर्तिकारहरूलाई सम्मान गरिन्थ्यो । विद्वान् र पौरखीहरूलाई पगरी गुथाइन्थ्यो । हलो र फाली पुज्ने परम्परामा मात्र हैन गोरु र भ्यागुतो पुज्ने प्रथामा पनि श्रम

र सिर्जनालाई सम्मान गर्ने भावधारा नै प्रवाहित छ । कर्मले नै मानिसलाई उचनीच बनाउँछ, जातिले होइन भन्ने सनातनी धारासँग बुद्धले पनि सहमति व्यक्त गर्दै ब्राह्मण र शूद्रको भेद जन्मका आधारमा नहुने विचार व्यक्त गरेका छन् । राम्रो काममा स्याबासी दिने र नराम्रो कामको आलोचना गर्ने परम्पराले हामी सबैलाई श्रमप्रति निष्ठावान् हुनुपर्ने खाँचो दर्साउँछ । आज विज्ञान र प्रविधिको युगमा श्रमको महिमा झनै व्यापक भएको छ । श्रमले नै मानवसभ्यताको थालनी गर्‍यो र प्रकृतिलाई अधीनस्थ गर्दै संस्कृतिको उन्नयन गर्‍यो । श्रम संस्कृतिको व्यापकताले हाम्रो लोकजीवनलाई निकै सुन्दर बनाएको छ । पर्मा प्रथामा सामूहिक श्रमको संस्कृति झल्किन्छ । भाग्यवादको विरोध श्रमको सम्मान गर्ने चिन्तनसँग जोडिएको छ । 'भाग्यका भरले डोकामा दूध दुहिन्न' भन्ने आहानले उचित कर्म गर्ने धारणा नै अघि सार्दछ ।

## [ ७ ]

नेपाली संस्कृतिको सातौँ विशेषता हो– ज्ञानको प्रसार । आफूले जानेको कुरा अरूलाई बताउनु–सिकाउनु मानिसको सांस्कृतिक गुण हो । यही गुणले नै मानवसभ्यतामा ज्ञानको प्रसार गर्ने महत्त्वपूर्ण परम्परा विकसित भयो । हाम्रो नेपाली समाजमा पनि सबै जातिले यसलाई अँगालेका छन् । 'बूढा मरे भाषा सरे' जस्ता आहानले मात्र होइन, विभिन्न श्रुति-परम्परा, आर्ष साहित्य र आधुनिक शिक्षा व्यवस्थाले ज्ञानप्रसारणको यस संस्कृतिलाई नै अघि बढाएको छ । नेपालीहरूले चीन र भारत दुवै छिमेकी देशमा प्राचीन कालदेखि नै आफ्नो ज्ञान र सीपको प्रचार-प्रसार गरेका छन् र यो क्रम अहिले पनि जारी छ । आज त विश्वव्यापी रूपमा नै नेपाली विद्वान्हरू सक्रिय छन् । एसिया, युरोप, अमेरिका, अफ्रिका, अस्ट्रेलिया सबैतिर विभिन्न विषयका नेपाली विज्ञहरू छरिएका छन्, कार्यरत छन् । सङ्ख्यात्मक दृष्टिले थोरै भए पनि यो हाम्रो नेपाली संस्कृतिमा रहेको महत्त्वपूर्ण असल परम्पराकै निरन्तरता हो । पुरानो समयका भृकुटी, अरनिकोदेखि हालका नेपाली प्राध्यापकहरूसम्मले चिनियाँ भूमिमा आफ्ना ज्ञान र कौशलको प्रसारण गर्दै आइरहेजस्तै भारततर्फ पनि यो

क्रम चलिरहेको छ। विक्रमशील विहारमा अध्यापक भएर ज्ञान प्रसार गर्ने कनकश्री, रामकीर्ति र विरोचनहरूदेखि हाल भारतका विभिन्न विद्यालय-विश्वविद्यालयमा अध्यापन-प्राध्यापन गर्ने विद्वान्हरूसम्म नै यी क्रम विस्तारित छन् । ज्ञान प्रसारणका विषयहरू विविध छन् । गौतम बुद्धका विचारले संसारै ढाकेको छ भने व्यास र वाल्मीकि आदिका साहित्यले पनि दुनियाँलाई छक्क पारिरहेको छ। आज युरोप र अमेरिकामा घुमन्ते प्राध्यापक भएर, आध्यात्मिक गुरु भएर, योग साधक भएर वा अन्य विषयविज्ञका रूपमा पुग्ने नेपालीहरूले ज्ञानप्रसारणको यही विशेषतालाई निरन्तरता दिएका छन् । संयुक्त राष्ट्र सङ्घमा काम गरेका र गरिरहेका व्यक्तित्वहरू पनि यस सन्दर्भमा स्मरणीय छन् । सामुदायिक सञ्चार संस्था सञ्चालन गर्ने काममा एसियाकै पहिलो अनुभवी मुलुकका रूपमा समेत नेपालले आफ्ना अनुभवहरू बाँडेको छ । त्यसैले ज्ञानप्रसारकको यस परम्परालाई बलियो बनाउन थप ध्यान दिनु जरुरी छ ।

✍

# राहुल राँची देवकोटा र पागल कविता

–*प्रा.डा. विष्णुराज आत्रेय*

*नेपाली* त्रैमासिकको दुई सयौँ पूर्णाङ्कका लागि एउटा लेख मदन पुरस्कार गुठीका अध्यक्ष कमल दीक्षित तथा अतिथि सम्पादक डा. गोविन्द टण्डनजीको तागिता भैरहँदा मलाई लाजमर्दो भैसक्यो। आफू म.पु.पु. परिवार सदस्य भए पनि गुठीको स्वर्ण विशेषाङ्कमा लेख दिन सकिनँ मैले। प्रमादले भनौँ वा आलस्यले नभ्याएर भनौँ वा बिर्सेर के के भयो कुन्नि। यसपालि त नलेखी भएन भनेर लेख्न बसेको छु कम्मर कसेको छु। कुन परिकार पस्किउँ प्रिय पाठकलाई !

*नेपाली* त्रैमासिकको दुई सयौँ पूर्णाङ्कले मलाई यसै वर्ष मनाइने महाकवि लक्ष्मीप्रसाद देवकोटाको शताब्दी वर्षको पनि स्फुरण हुन्छ। यसैलाई पनि समेट्न पाए एक पन्थ दुई काम हुने लाग्यो। शीर्षकतिर घोत्लिँदा यस्तो पो फुर्न आयो– 'राहुल राँची देवकोटा र पागल कविता।' लौ त अब लागौँ त्यतैतिर।

राहुल साङ्कृत्यायन पटकपटक नेपाल आए। जतिपल्ट उनी आए यहाँका राजगुरु, दरबारी पण्डित, विशिष्ट साहित्यकार, नेपाल तिब्बत दुवैतिर व्यापारको कारोबार गर्ने घनाढ्य व्यक्तिसँग सम्पर्क गरे। उनको नेपाल आगमन र बसाइको मुख्य उद्देश्य यहाँका बौद्धग्रन्थ र गुम्बाको अवलोकन साथै एकपल्ट तिब्बतसम्म पुगेर त्यहाँका पुरातन ग्रन्थ र महत्त्वपूर्ण पाण्डुलिपि सङ्कलन गर्ने उद्देश्य पनि हुने गर्थ्यो। स्मरणीय छ राहुलले तिब्बतबाट बलिया-बलिया ७० ओटा खच्चडमा पुरातन पुस्तक र अभिलेखहरू लदाएर बोकाएर भारतको पटना पुऱ्याएका थिए। यी अभिलेखहरू त्यहाँका ग्रन्थागारमा अझै पनि केही देख्न पाइन्छन्।

राहुलले पटकपटक गरी सात पल्टसम्म नेपालको यात्रा गरे। शिवरात्रिमा मात्र काठमाडौँ छिर्न पाउने भारतीयहरूका लागि नेपाल आउनु र बस्नु सजिलो थिएन। राहुल त्यसै हुनाले राजगुरु र प्रतिष्ठित व्यक्तिको सम्पर्क र संरक्षणमा रहन चाहन्थे।

सन् १९५८ को जनवरी महिनाको ८ तारिखका दिन राहुल पाचौँ पल्ट नेपालको यात्रामा काठमाडौँ आए। यसपल्ट उनीसँग

उनकी नेपाली मूलकी दार्जिलिङे पत्नी कमला परियार पनि थिइन् । यसपालि उनको काठमाडौँ आउनुको उद्देश्य पत्नीलाई घुमाउनु र नेपालबारे पुस्तक तयार गर्नु थियो । यो कामलाई उनकी पत्नी सहयोगिनी बन्न सक्थिन् भन्ने उनलाई लागेको थियो । काठमाडौँ आएको पर्सिपल्ट अर्थात् १० जनवरी १९५३ का दिन राहुलको भेट महाकवि लक्ष्मीप्रसाद देवकोटासँग भयो ।

राहुल देवकोटालाई भेटेको निकपर्सि अर्थात् जनवरी १४ तारिखका दिन काठमाडौँ भेडासिङमा राहुलको व्यक्तित्वबाट प्रभावित व्यक्तिहरूको उनको सम्मानमा एउटा गोष्ठी गरे । स्वीकृति लिई सजिलोको लागि त्यसलाई साहित्य गोष्ठी नाउँ दिइयो । त्यसमा केदारमान व्यथितले राहुलको स्वागत गर्दै राहुल साङ्कृत्यायनजस्ता विदेशी विद्वान्को स्वागत गर्न पाउनु हाम्रो लागि सौभाग्यको कुरा हो भन्नुभयो ।

विद्वान् कविलेखक स्वयम्भू हुन्छ। उसले आफूलाई भूराजनैतिक सीमाभित्र परिसीमित गर्न चाहँदैन। ऊ आफूलाई देशका लागि क्रान्त व्यक्तित्व बनाउन खोज्दछ । राहुल पनि त्यसैभित्र पर्दथे । ती जहाँ जान्थे त्यहींको हुन्थे। त्यसै समाजमा घुल्नमिल्न सक्थे। बोल्न-हाँस्न सिक्थे । यतिमात्र होइन रसबस गर्दा-गर्दै लसपस पनि हुन्थ्यो । फलतः राहुलका धेरै श्रीमती भए । नेपालसँग बढी रमाएजस्तै नेपालीसँग पनि बढी रमाए, कमलासँग बढी रमाए । यो यथार्थ हो । परियार भए पनि राहुलकी परिवारकी मदन कमला उनै भइन्। त्यस गोष्ठीमा आफूलाई विदेशी विद्वान् भनेको राहुललाई मन परेन। उनले यसको प्रतिवाद पनि गरे। त्यहीँ नै।

नाटककार सम साह्रै चलाक र प्रखर व्यक्तित्व थिए। समय बुझ्न र तदनुसार आफूलाई ढाल्न खप्पिस। आफ्नो विज्ञापन गर्ने यो मौका उनी किन चुक्थे। १८ जनवरीका दिन उनले राहुल र आफ्ना अनुकूलका अरू व्यक्तिहरूलाई डाकेर ज्ञानेश्वरस्थित निवासमा प्रीतिभोजको आयोजना गरे । आफू र आफ्नासँग बसेर खाना खुवाउन खप्पिस महाकवि देवकोटा पनि के कम ! उनले पनि आफ्नो घर कविकुञ्ज मैतीदेवीमा २४ जनवरी १९५३ का दिन अर्को भोजको जमघट गरे।

यसरी यस यात्रामा राहुलले आफूसँग जनकलाल शर्मा र उनको सहयोगमा महाकवि देवकोटा, नाटककार बालकष्ण सम, लेखनाथ पौड्याल, कथाकार बी.पी. कोइराला, सिद्धिचरण श्रेष्ठ, डिल्लीरमण रेग्मी, इतिहासविद् खर्दार बाबुराम आचार्य, बालचन्द्र शर्मा, सुन्दरराज चालिसे, चित्तधर, धर्मरत्न यमी, धर्मराज थापा, चन्द्रमान मास्के, केदारमान व्यथित आदिसँग परिचय साट्ने प्रशस्त मौका पाए ।

यसरी नेपाली भाषा साहित्य र साहित्यकारसँग खुला परिचय र छलफल गर्ने अवसर राहुललाई यो पाँचौं पटकको नेपाल यात्राले दियो । यस यात्राको यज्ञान्त गर्दै उनी १ फरवरी १९५३ का दिन काठमाडौँबाट भारत फर्के ।

त्यसबेला दिल्लीको लोकप्रिय मासिक 'आजकल' पत्रिकाको मई १९५३ अङ्कको विश्वदर्शन स्तम्भमा 'नेपाली महाकवि देवकोटा' शीर्षकमा एउटा लेख प्रकाशित गरे राहुलले । नेपाली साहित्यको पृष्ठभूमिको उल्लेख गर्दै उनले देवकोटाको खुबै बखान गरेका थिए । खडीबोली हिन्दीले चार सय वर्षसम्म गरेको सङ्घर्ष नेपाली भाषा साहित्यले एक सय वर्षमै गर्नुपरेको कुराको उल्लेख पनि त्यसमा गरिएको थियो ।

राहुलले जस्तै राहुलको लेख भएको त्यस पत्रिकाले भारतको राजधानी दिल्लीबाट नेपाल राजधानीको डिल्लीबजारसम्मको यात्रा गर्‍यो । उसले आफ्नो प्रवासगृह बनायो त्यसबेलाको लप्टनको होटललाई । नेता, मन्त्री, इतिहासकार, लेखककवि, साहित्यकार तथा स्थानीय सम्भ्रान्त वर्गका व्यक्तित्वहरूको जमघट हुने त्यस होटलमा लक्ष्मीप्रसाद देवकोटा र जनकलाल शर्मा पनि धुलिखेलतिरबाट घुम्दै त्यसै बिसौनीमा आइबसेका थिए ।

प्रत्येक पुरुषलाई कसैसँग गोरु बेचेको साइनो लाउनुपर्‍यो भने सकभर मावली र ससुरालीको साइनो लाउन मन पर्छ त्यसैगरी प्रत्येक नारीलाई साइनो लाउने क्रममा माइतीकै साइनो लाउन पाए हुन्थ्यो भन्ने चाहना हुन्छ । जनकलालजी पनि देवकोटालाई यसै गरी भन्थे । उनी देवकोटाका भान्जा (दिदीको छोरा) का साथी थिए । यही थियो गोरु बेचेको नातो यी दुईमा ।

जनकलालको हातमा आजकलको अङ्क पऱ्यो । उनले भान्जा देवकोटालाई दिए । आफूलाई भारतका प्रसाद, पन्त, निराका र हरिऔध जस्ता साहित्यकारको समग्ररूप सिङ्गो देवकोटामा पाइन्छ भन्ने कुरा पढ्दा उनी आफूलाई अत्यन्त गौरवान्वित ठान्दै थिए । उनको मुहार फुल्दो-फक्रिँदो देखिँदै थियो। पढ्दै जाँदा उनले यो पनि पढ्न पुगे– "निरालालाई राँची लाने कुरा मात्र कतिपल्ट उठ्यो मात्र तर देवकोटालाई उनका परिवारका व्यक्तिले बहुलाहा भनेर राँची जाने कुरा गरे उनले कति पनि यसमा आपत्ति जनाएनन्, राँचीको पागलखानामा केही दिन बसेर पनि आए ।"

अब के थियो पहिलो वाक्य पढ्दा फक्रेका देवकोटा पछिल्लो वाक्य पढ्दा शीतले खाएजस्तै कक्रिए । प्रसाद, पन्त, निरालाको समन्वितरूप भएकोमा जति प्रफुल्ल थिए अनि, राँचीको कुराले त्यसै गरी सामसुमै ओइलाए। यो कुरा राहुललाई जनकलालले नै भनेको हुनुपर्छ भन्ने कुरामा अब देवकोटा विश्वस्त पनि थिए । किनभने जनकलाल बढी साखुल्ले हुन पुग्थे राहुलसँग ।

अब त मामा-भान्जाको गोरु बेचेको नातो पनि चिलिमको पाताको सल्केको तमाखु उडेजस्तै उडेर कता गयो कता ! उनले झर्किंदै फर्किंदै भने– "त्यस मूर्खलाई गलत सूचना दिने तैँ होस् अर्को मूर्ख !" सधैँसधैँ नङमासु भएर सँगै हिँड्ने मामा आफ्ना भान्जालाई टेर पुच्छर नै नलाई थोत्रो साइकल लतार्दै एक्लै घरतिर लागे ।

देवकोटा सामान्यतया रिसाउँदैनथे जब रिसाउँथे उनको आँखा रातापिरा हुन्थे। गाला फुक्क फुल्थे। हात थर्रर काम्थे। एउटा प्रलप एउटा दावानल र एउटा भूकम्पको पूर्व सङ्केत गरेको जस्तो हुन्थ्यो। थाहा छैन कविको यो ताण्डवडमरुले कस्तो अइउण् निकाल्ने हो ।

राहुलको पाँचौं नेपालयात्रा र उनको लेखमा देवकोटालाई पागल भएर राँची लगिएको उल्लेखले यो विषम स्थिति ल्यायो महाकविको यथास्थितिमा। उनले यसको जवाफमा त्यस राति 'तिमी' सर्वनामको ठाउँठाउँ प्रयोग गरेर– एउटा लामो कविता कोरे र शीर्षक दिए त्यसको 'पागल'। देवकोटा त्यसबखत जनकलालसँग पनि रिसाएका थिए राहुलसँग पनि त्यसै हुनाले उनले रिसको आवेश र

अभिमान सिंहको त्यस कवितामा प्रयोग नगरेको त्यो 'तिमी' सर्वनामको प्रसङ्गअनुसार कहिले राहुललाई त कहिले जनकलाललाई सङ्केत गरेको कुरा कविताको गहिरो अध्ययन गरे छर्लङ्ग हुन्छ । राहुल साङ्कृत्यायनको नाउँ त कवितामा प्रत्यक्ष उल्लेख गरे उनले । जनकलालको नाउँ भने उल्लेख गरेका छैनन् त्यसमा । त्यसरी अनुभूतिमात्र हुन्छ पाठकलाई । महापण्डित राहुलबाट राहुल शब्द हटाएर महापण्डित मात्र राख्ने अनुरोध मैले देवकोटालाई गरेँ र उनले त्यो शब्द हटाए भन्छन् जनकलाल । समयक्रमको सिंहावलोकन गर्दा राहुलको नेपाली महाकवि देवकोटा भन्ने लेख आजकलमा २०१० साल जेठ महिनामा छापियो । 'पागल' कविता सम्भवतः महाकविले २०१० सालको आषाढ महिनाको अन्त्यतिर लेखे । अनि त्यो पहिलोपल्ट प्रकाशित भयो २०१० सालको प्रगति त्रैमासिक वर्ष १ अङ्क ३ (भदौ–असोज) मा । आजकलको लेख पढेर जसरी देवकोटा रिसाए र यसका प्रत्यक्षदर्शी जनकलालजीले उनी रिसाएका बेलाको दुर्वासा रूपको वर्णन गरेका छन् जसरी, त्यसरी नै आफ्नो आवेश र आवेगको चित्रण गरेका छन् देवकोटाले पागल कवितामा । हेरौँ कवितांशका यी हरफहरू– यहाँ 'तिमी' सम्भवतः जनकलालजी नै हुन्–

*जब मानवले मानवलाई मानव ठान्दैन साथी*
*तब कडकडाउँछन् मेरा बत्तीस दन्ते बङ्गारा दुवै*
*जस्तो भीमसेनको दाँत*
*अनि प्रकोप पागल आँखाका लाललाल डल्ला*
*उफ्रिन्छन् मेरा कल पुर्जा खलबल खलबल*
*बल्दछ मेरो दिमागमा साथी !*
*बडवा तल फैँ दावानल फैँ*
*म बन खाने आगो फैँ बहुला हुन्छु*
*बहुला हा साथी !*
*काँचै निलूँ फैँ विश्व विशाल ।*

यस्ता थिए रिस उठ्दाका महाकवि देवकोटा । हो, देवकोटा पागल भए । उनले स्वयं पनि आफूलाई पागल भएँ भने । स्वीकारे त्यो कुरा त्यसको व्यङ्ग्यार्थ वाक्यार्थ जेसुकै होस् । देवकोटामात्र

पागल छैनन् । आफ्नो ईप्सिततमको प्राप्तिमा प्रत्येक मानिस पागल हुन्छ आफ्नो अभीष्टतमको धुनमा प्रत्येक व्यक्ति पागल हुन्छ । त्यो अभीष्टतम वा ईप्सिततम पद होस् वा पैसा प्रेमी होस् वा प्रेयसी राधा हुन् वा मीरा, देवकोटा हुन् वा निराला– पागल हिन्दी शब्द हो । कुछ पाय गयल तब पागल यस्तो व्युत्पत्ति दिन्छन् यस शब्दको सन्तमहन्तहरू । देवकोटाले पनि केही पाएका थिए, केही पाउन चाहन्थे, चन्द्रमामा पुग्न चाहन्थे उनी, चन्द्रमालाई चुम्न चाहन्थे उनी । अनि त उनलाई पागल भन्थे मानिस । हेरौँ देवकोटाका पागल कविताकै यी हरफहरू–

*म माघको ठण्डीमा*
*ताराको सेतो प्राथमिक रूप तापेर बसिरहेको थिएँ*
*दुनियाँले मलाई तरङ्ग भने*
*भस्मेश्वरबाट फर्कंदा सात दिन टोलाएको देखेर*
*भूत लागेको भने*
*मैले वसन्तको यहींको कोकिल सुनेर नाचेको देख्दा*
*बहुला भने*
*एक सुनसान औँसीले निरास भएर*
*म प्रलय वेदनाले उफ्रेँ*
*मूर्खहरूले मलाई त्यसबेला*
*ठिँगुरा हालेर राखे*
*म तुफानसँग एक दिन गीत गाउन लागेको थिएँ*
*मलाई राँचीमा बुज्रुकहरूले भेजिदिए*

उपर्युक्त पागल कवितामा पङ्क्तिहरूले देवकोटाले स्पष्टत: सङ्केत गरेका छन्– म पागल होइन मलाई पागल भन्ने दुनियाँ नै पागल हो ।

कविता लेखिनुभन्दा पहिले देवकोटाले जनकलाललाई ऋपारेका थिए लप्टनको होटलमै– 'त्यस मूर्खलाई गलत सूचना दिने तैँ होस् मूर्ख !' भनेर । यसबाट राहुल मूर्ख थियो थियो त्यस मूर्खलाई म बहुलाएको भन्ने गलत सूचना दिने तँ अर्को मूर्ख होस् । मूर्खमाथिको मूर्ख, महामूर्ख भन्ने कुरा पनि यसले सङ्केत गर्दछ । राहुललाई

कवितामा नै 'महापण्डित' भनेका छन् देवकोटाले भने जनकलाललाई घुमाउरो पाराले महामूर्ख। उनले रिसको झोँक भनेको 'महापण्डित' शब्दले व्यङ्ग्यार्थमा महामूर्खकै अर्थ दिन्छ। काशी विद्वद्सभाले राहुलजस्तो नास्तिक मानिसलाई अरू के ठूलो उपाधि दिनु भनेर महत शब्द जोडेको पण्डित शब्दको सम्मान दिए। पण्डित त त्यसै पण्डित छ माहाशब्द जोडेर महाबुद्धिमान् बनाउँदा त्यसबाट उल्टो महामूर्ख भन्ने अर्थ निस्कन्छ। पागल कविता लेख्ने क्रममा देवकोटाले महा पण्डित शब्दलाई त्यसै अर्थमा बुझेको कुरा उनका कविता पङ्क्तिबाटै यथार्थ हुन्छ। हेरौँ ल !

तिमी सर्वनाम देवकोटाले जनकलाल शर्मालाई दिएका छन्–

*तिम्रा महा पण्डित मेरा मूर्ख*
*तिम्रो स्वर्ग मेरो नर्क*
*तिम्रो सुन मेरो फलाम*
*जहाँ तिमी आफूलाई चलाक सम्झन्छौ*
*उहाँ म तिमीलाई देख्छु बिलकुल लाटा*
*साथी ! तिम्रो विश्व मेरो बाल*

कति रिसाएका रहेछन् जनकलालजीसँग पनि देवकोटा त्यसबेला म तँलाई र तेरो राहुल महा पण्डितलाई रौँ बराबर पनि गन्दिनँ भनिदिए। स्मरणीय बौद्धधर्मानुयायी सम्राट् अशोकलाई सनातनी वैदिक विद्वान्ले 'देवानां प्रिय' जस्ता उपाधिले व्यवहार गर्थे सामान्य रूपमा यसको अर्थ देवताहरूको प्यारो भन्ने हुन्छ तर त्यसो होइन। यसको व्यङ्ग्यार्थ हो– मूर्ख। पाणिनीय व्याकरण ग्रन्थमा यसैको लागि एउटा छुट्टै वार्तिक छ–

*'देवानां प्रिय' इति च मूर्खे।*

जब मानिसको रिस काबूमा हुँदैन नास्तिक त नास्तिक नै भयो आस्तिकले पनि आँखा देख्दैन, वेद पढ्दैन। अवगुण त व्यक्तिका अवगुण नै हुन्छन् गुणलाई पनि ऊ अबगुण देख्छ। जब राहुल नेपाल आए उनलाई नेपाली संस्कृत सनातनी विद्वान्का रूपमा राजगुरु हेमराज पण्डितले मात्र भेटे। राजगुरुहरूका हवेली भोगविलासमा राणाभन्दा कम हुँदैनथे। भोटिनी पनि त्यहाँ स्याहारे-सुसारे हुन्थे।

भोटेहरू बौद्धधर्मानुयायी र व्यापारी दुवै हुनाले राहुल बौद्ध भए पनि हेमराज त्यति घृणा गर्दैनथे । राहुललाई भोट जानु पनि त थियो ।

तिनताक काठमाडौँका विद्वान्हरूमा पण्डित पद्मनामकेशरी अर्ज्यालको पनि ठूलो धाक थियो । राजाबाट नायब बडागुरुज्यू खाने अनुरोध गर्दा बडागुरुज्यू पाए खान्छु नत्र अरू खान्नँ भनेर अड्डी लिने पद्मनामको व्यक्तित्व थाहा पाएपछि राहुलले उनीसँग भेट्ने धेरै प्रयास गरे तर पद्मनामकेशरीले भेट्न चाहेनन् राहुलसँग । अझ उनी कमला परियारका साथ आएका थिए झन् के भेट्थे । यो कुरा अवश्यै पनि देवकोटाबाट लुकेको थिएन । लप्टनको होटलमा यस्ता ताजा र ताता मसलाका परिकारहरू नसेलाउँदै जिब्रो पोल्दै पस्किसकिन्थे । यी सबै कुरा मगजमा छँदै थिए देवकोटाका ।

राहुल थिए– अनिश्वरवादी नास्तिक वेदनिन्दक शून्यवादी प्रवाहनित्यतावादी शून्यवादी मूर्ति वा ढुङ्गा पूजाका विरोधी । यसको ठीक उल्टो देवकोटा थिए कट्टर सनातनी वेद प्रशंसक, ईश्वरवादी मूर्ति वा पाञ्चायन पूजक आस्तिक "आखिर श्रीकृष्ण रहेछ एक" भन्ने खालका, "एक ब्रह्म, भन्ने खालका" उनी राहुलको धर्मलाई पाप भन्ने ठान्दथे भन्ने कुरा उनले पागल कवितामा प्रत्यक्ष भनेका छन्–

*तिम्रो धर्म मेरो पाप*

यतिमात्र होइन माथि उल्लिखित अन्य कुराहरूलाई पनि उनी यसरी सारांशमा आफ्ना कवितांशद्वारा भन्न भ्याउँछन् हेरौँ जस्ताको तस्तै–

*म शब्दलाई देख्छु...*
*आकाशभन्दा पातका कुरालाई छुन्छु*
*ती कुरा जसको अस्तित्व लोक मान्दैन*
*म देख्छु ढुङ्गालाई फूल*
*जसको आकार संसार जान्दैन*
*तिम्रो गणित क्षेत्र हर हमेशा चलिरहन्छ*
*मेरो गणितमा एक बाट एक झिके*
*एकै बाँकी रहन्छ ।*

राहुल हिन्दी र संस्कृत दुवै भाषामा कविता र लेख लेख्थे। उनी लोकमा कविभन्दा पनि गद्यकार निबन्ध लेखक र कथा आदिका लागि चर्चित भए। देवकोटा पनि गद्य, पद्य दुवै समानरूपमा लेख्थे। उनले नजुठ्याए नमुठ्याएको सहित्यको कुनै पनि विधा प्राय: थिएन। तथापि उनको प्रसिद्ध कविमा भयो महाकविमा भयो। पागल कवितामा राहुललाई अरू कुराले आक्षेप गर्दा गर्दा नपुगेर लेखनशैलीमा पनि आक्षेप गर्न थाले, खसाल्न थाले। कति रिसाएका रहेछन् त उनी राहुलबाट। फेरि पनि हेर्दा पागल कविताका यी हरफहरू जो आफैँ बोल्छन् यसमा 'तिमी' सर्वनाम राहुललाई हो भनिराख्नु परोइन जस्तो लाग्छ–

*तिम्रो गिदी छ साथी*
*मेरो मुटु*
*तिमी बलिया गद्य हौ*
*म तरल पद्य छु*
*तिमी जम्दछौ*
*जब म पग्लन्छु...*
*तिम्रो संसार ठोस छ*
*मेरो बाफ*

यसरी राँची, राहुल र देवकोटाको त्रिकोणात्मक यन्त्रको मध्यविन्दुमा पागल अर्थात् प्रप्तिरूपा कविताको आराधनामा सजाएर मैले माथिका हरफ कोर्ने प्रयास गरेँ।

कवि स्वयम्भू हो काव्य वा कविता वेद हो। यसको यथार्थ यत्ति नै हो भनेर कसले पो ठोकुवा गर्न सक्यो र! जसले जस्तो जस्तो छाप्यो त्यस्तैत्यस्तै बखान्यो। नेपाली द्विशताङ्कको र देवकोटा शतवार्षिकीको दुवैको संयोग पारेर स्मृति लेखिएको यो लेख पाठकका पोल्टामा टक्र्याउँदै बिदा हुन्छु। सबैको जय होस्।

# मानवतावादी विचारका अग्रदूत जयपृथ्वी

*– डा. वीणा पौड्याल*

## विषय प्रवेश

बझाङको चैनपुरजस्तो विकट स्थानमा जन्मेर विश्वभर नै चेतना, शिक्षा, मानवतावादको आवाज घन्काउने जयपृथ्वी सम्पूर्ण नेपालीका लागि सच्चा नायक हुन्। नेपाली भाषाको माध्यमबाट केटी र केटा दुवैलाई प्रारम्भिक शिक्षा दिनुपर्दछ भन्ने कुरामा जयपृथ्वी दत्तचित्त भएर लागेका थिए। त्यसैले अक्षर र अङ्क चिनाउन उनले अक्षराङ्क शिक्षा नामको पुस्तक रचना गरेर छपाए। वि.सं. १९५८ (सन् १९०१) मा पशुपत छापाखानामा १००० प्रति छापिएको यस पुस्तकले नेपाली समाजमा नयाँ क्रान्ति नै ल्यायो । जयपृथ्वी बालबालिकाको भबिष्यप्रति चिन्तित थिए। शिक्षाको ज्योतिबिना जीवन अन्धकार हुन्छ भन्ने कुरा सारै राम्ररी बुझेका थिए । सीपमूलक र व्यावहारिक शिक्षाको पक्षमा रहेका उनको पुस्तकबाट नाप-तौल, ऋतु, महिना, ग्रह-नक्षत्र सँगसँगै इस्लाम धर्मावलम्बीहरूको धार्मिक चाडपर्वबारे पनि उल्लेख छ ।

"स्कूलमा इलम पाएका मानिसहरूले मुलुकको धन हर किसिमले बढाउँछन्" भन्ने जयपृथ्वी आधा आकाश ढाक्ने महिला सीप र शिक्षाको पक्षमा थिए । व्यावसायिक शिक्षाको माध्यमद्वारा शैक्षिक क्षेत्रलाई उत्पादनमूलक बनाउन उनले नेपाली विद्यार्थीलाई जापान पठाउने व्यवस्था पनि मिलाए। विभिन्न जाति र धर्मका अनुयायी ती विद्यार्थीहरूले जापानमा शिक्षा हासिल गरेर नेपाल फर्किए। जयपृथ्वीमा भएको मौलिकताको स्वदेशी र विदेशी सबैले प्रशंसा गरेका छन् ।

## शिक्षाद्वारा समाजसुधार र प्रजातन्त्रको बीजारोपरण

बहुमुखी प्रतिभाका धनी जयपृथ्वीको गुणहरूबारे कुर्लेर बोल्न, लेख्न धक मान्नुपर्दैन । भाषणमा समाज सुधार गर्ने, दलित, महिला, निमुखाको नाममा अर्थ सङ्कलन गरेर घर-घडेरी जोड्नेजस्ता कार्य समाजमा हिजो थियो र आज पनि समाजमा छ्यापछ्याप्ती नै छन् । तर राजा-रजौटाको परिवारमा जन्मेर पनि जयपृथ्वीले

सर्वसाधारणको मर्का बुझेर त्यसलाई समाधान गर्ने नीति अवलम्बन गरे। कुनै पनि समस्या कथन जति सजिलो छ, त्यसको समाधानको बाटो देखाउन त्यत्ति नै कठिन हुन्छ। जयपृथ्वीले समस्यामात्रै औँल्याएनन्, उनले समाधानको बाटो पनि अवलम्बन गरे। समाज सुधार गर्न उनले विभिन्न क्षेत्रमा हात हाले।

प्रधानमन्त्री देवशमशेर जापानका जनताहरूको दृढ सङ्कल्प र आधुनिकीकरण तर्फको लम्काइबाट प्रभावित थिए। जयपृथ्वीले बेला-बेलामा जापानको विकासबारे देवशमशेरलाई बताउँथे। त्यसैले विभिन्न समुदायका ८ जना नेपालीलाई विशेष तालिम लिन समुद्र-मार्गबाट जापान पठाए। जापानबाट फर्केर ती युवाहरूले विभिन्न क्षेत्रमा महत्त्वपूर्ण योगदान दिए।

स्वामी पुरानन्द गिरीको नेत्तृत्वमा (वि.स. १९५९ मा) जापान पढ्न गएका नेपाली विद्यार्थीहरूको नाम यसप्रकार छन् :-

| | |
|---|---|
| १. क्या. जंगनसिंह राणा (उमेर २२) | हतियार इन्जिनियरिङ |
| २. क्या. भक्तबहादुर बस्न्यात (उमेर १९) | हतियार इन्जिनियरिङ |
| ३. देवनरसिंह राणा (उमेर २०) | खनिज |
| ४. वालनरसिंह रायमाझी (उमेर २०) | खनिज |
| ५. दीपनरसिंह राणा (उमेर १८) | कृषि |
| ६ हेमबहादुर राजभण्डारी (उमेर २२) | मेकानिकल इन्जिनियरिङ |
| ७. रुद्रलाल सिंह (उमेर २७) | ब्यावहारिक रसायनशास्त्र |
| ८. विचारमान सिंह (उमेर २५) रेशम खेती | सेरामिक्स तथा लेकर भेस |

जापानबाट फर्किएका ती युवकहरूले काठमाडौँमा मीठो स्वादको हलुवाबेद, नील लहर फूल, ठूलो आकारको कटुस, रङ्गीबिरङ्गी गोदावरी फूल, आदि फलफूल भित्र्याएर यहाँको वातावरण र सौन्दर्यमा नयाँ आयाम थपे।

यी सुन्दर फूलहरू र फलले नेपाली समाजको संस्कृतिमा विशेष स्थान बनाइसकेको छ।

जापान गएका आठ जना नेपाली विद्यार्थी, सत्र जना कामदार र एक जना पथप्रदर्शक (स्वामी पुरानन्द गिरी) ४६ दिनपछि योकोहामा पुगेका थिए।

समुद्री मार्ग कोलम्बो, रङ्गुन, सिङ्गापुर, हङकङ, कोबे हुँदै जापानको भूमिमा टेकेको अविस्मरणीय क्षणको वर्णन नेपाली विद्यार्थीहरूले गरेका छन् । सन् १९०२ मा प्रधानमन्त्रीको कार्यालय, मुन्सीखानाले लेखेको रोचक पत्र प्रकाशित छ । जसमा उल्लेख छ, "तिमीहरूलाई प्रधानमन्त्रीका कृपाले प्रधानमन्त्रीको सिफारिसमा चीननजिक रहेको एउटा मुलुक जापानमा मुलुकका लागि आवश्यक विषयको अध्ययन तथा तालिमका लागि जाने अनुमति दिइएको छ । तिमीहरूले २१ अप्रिलमा बम्बई पुगी थोमस कुक एन्ड सन्स लिमिटेडनामक जहाज कम्पनीमा सम्पर्क गर्नुपर्नेछ । त्यसैले तिमीहरूको त्यसपछिको यात्राको प्रबन्ध गर्नेछ । जहाज २९ अप्रिलमा जापानका लागि हिँड्ने छ । तिमीहरूको तयारीका लागि १००० भारतीय रुपियाँ पठाइसकिएको छ । नेपालबाट जापान जाने भ्रमण खर्चका लागि (१७ जना कामदारसमेतलाई) रु. ६ हजार ७०० छुट्याइएको छ । पैसा "थोमस कुक एन्ड सन्स लिमिटेढ" मा साट । जापानमा एक वर्ष बस्नका लागि अरू १२ हजार ८४० भा. रु. वीरगन्जस्थित खजानाबाट दिइनेछ । यो पनि बम्बईको थोमस कुक एन्ड सन्सबाट साट । तिमीहरूले जापानको बैंकमा पैसा राख्नुपर्छ, त्यसले राम्रो ब्याज दिन्छ । तिमीहरूले प्रत्येक महिना बैंकबाट रकम झिकी आफूहरूले मासिक रूपमा पाउनुपर्ने जति रमक बाँड्न सक्छौ । (वरुवा, २००२, पृ. ३०)

शिक्षाको ज्योतिबिना जीवन निरर्थक छ भन्ने तथ्यसँग मानव जाति परिचित भएको लामो समय भै सक्यो । एसिया, युरोप र अफ्रिकामा आ-आफ्ना ढङ्गका प्राचीन शिक्षा प्रणाली प्रचलनमा थिए । भारतवर्षमा (भारत, पाकिस्तान, बङ्लादेश, श्रीलङ्का र नेपाल) पनि मन्दिर, मठ, गुम्बा, बिहार, मदरसा मस्जिद र चर्चमा धार्मिक शिक्षाले निरन्तरता पाएको गौरवशाली इतिहास छ । धर्मको अभिन्न अङ्गको रूपमा शिक्षाले मान्यता पाएको थियो । समाजमा अनुशासित र सक्षम भएर अगाडि बढ्न धर्म र नैतिक शिक्षाको डोरीले डोराउन सक्ने विश्वास त्यसबेलाका अगुवाहरूले लिएका थिए । समाजका प्रत्येक नागरिकलाई, चरित्रवान्, समाजसुधारक, जिम्मेदार र कर्त्तव्य परायण हुने शिक्षा धार्मिक ग्रन्थका प्रमुख पात्रहरूको उदाहरण दिएर

सिकाइन्थ्यो । शिक्षाले अर्थ आर्जनभन्दा प्रतिष्ठा बढाउन मद्दत गर्ने कुरामा प्राचीन समाजका मानिसहरू विश्वस्त थिए। प्राचीन शिक्षाको उद्देश्य नै धर्मको माध्यमबाट चरित्रनिर्माण र परोपकारी भावनाको विकास गराउनु थियो । त्यसैले समजमा पढेका मानिसको विशेष कदर थियो ।

प्रामाणिक लिखित इतिहासको सुरुवात भएपछि पनि भारतका नालन्दा, विक्रमशिला, साँची र नेपालको जनकपुर, काठमाडौँको बिहार र मठ-मन्दिरमा निरन्तररूपमा पठन-पाठन चलिरहेको थियो। नेपालका विहारहरूमा भारत र तिब्बतबाट शिक्षाग्रहण गर्न आउँथे। बिस्तारै शिक्षा विहार र मन्दिरमा साधुँरिएर बस्यो। समाजका केही वर्गका लागि मात्रै शिक्षाको ढोका खुल्ला राखियो । विक्रमको अठारौँ, उन्नाइसौँ शताब्दीको प्रारम्भमा नेपालमा मात्र शिक्षाको अवसर सर्वसाधारणको लागि खुल्यो ।

कर्मकाण्ड गर्न र आध्यात्मिक ज्ञान प्राप्त गर्न धार्मिक पुस्तक अध्ययन गर्दथे । यस्तो परम्परा रहेको बेला जयपृथ्वीले जसरी प्राविधिक विषय अध्ययन गर्न जापानमा नेपाली विधार्थीलाई पठाए त्यो दूरदर्शी कदम थियो ।

## ह्युम्यानिस्टिक क्लब :

वि.स. १९८७ मा जयपृथ्वीले विभिन्न देशको भ्रमण गरेर प्रभावकारी भाषण गर्दै युरोपमा पनि मानवतावादी क्लब (ह्युम्यानिस्टिक क्लब) को स्थापना पनि गरे । बङ्गलौर चेट्टीरोडमा रहेको जया भवनमा वि.स. १९८५ मै जयपृथ्वीले मानवतावादी क्लब खोलेर प्रभावकारी कार्य प्रारम्भ गरिसकेका थिए । यसकै शाखाको रूपमा यिनले युरोपका विभिन्न स्थानमा मानवतावादी क्लब खोल्ने वातावरण बनाएर काम पनि गरे ।

सन् १९९५ मा नेपालमा खुलेको मानवतावाद र राजा जयपृथ्वीबहादुर सिँह (रफाज RAFHAJ) नामक संस्थाले विभिन्न जिल्लामा ह्युम्यानिस्टिक क्लब खोल्ने अनुमति प्रदान गरिसकेको छ। रफाजअन्तर्गत ह्युम्यानिस्टिक क्लब (HCN) विभिन्न जिल्लामा धमाधम खुल्दै छन् । जयपृथ्वीले बम्बैमा ह्युम्यानिस्टिक क्लबको

## पादटिप्पणी

१. **अमालको प्रणालीसँग सम्बन्धित शब्दहरू :**

सुब्बा, आगेसुब्बा, सुब्बा, राई, सुब्बा, तिरुवा सुब्बा, मिनाहा सुब्बा, ठिङ्गे सुब्बा, मझिया, गौरुङ, गोबा, राई, (राय), पगरी, कर्ता, कारबारी, भैयाद (डाके भाइ), थरी (तिरुवा थरी, मिनाहा थरी, राजथरी), जिम्मावाल, तालुकदार र पञ्च (भद्रभलाद्मी), रहबह, रैती, चारदामे, निसान, नगरा, पगरी, मौलो, मार (हान्नु) तथा किपट, रैकर, हुलाकी, जिउनी, खान्गी आदि ।

२. **सुभा र सुभाङ्गीसम्बन्धित शब्दहरू**

अमाल, अमाली, अदालत, अमानत, मालअड्डा, वादी, प्रत्येवादी, अर्जी, फिराद, उजुर, दण्ड, दण्डकुण्ड, सजाय, दसौंद, बिसौंद, प्यादा, सिपाही, हद, हदमुनि, हदमाथि, फैसला, मिलापत्र, पञ्चखत, गोबध, दाग लगाउने/खोप्ने, भातपानीमा काड्ने वा जात लिने, बहाली पूर्जी, दैदस्तुर, दस्तुर, मुद्दामामिला, हरौरी, जितौरी, बक्साउनी, ज्यानमारा, जारी, जारीखत, जरिवाना, खारिज, मातहत, मुलुकी ऐन, ऐनसवाल, हकवाला, नकल, सकल,, नामसारी, निल, निलडाम, पञ्चायत, सरकार, वादी, प्रतेवादी, फौजदारी, शिरउठौनी, ठिङ्ग्रो, ठिङ्गोमुङ्रो, ठेकी, आम्दामी, अंश, अपुताली, बैदार, तिलिङ्गा/प्यादा आदि ।

३. **तिरोभरोसँग सम्बन्धित शब्दावली**

छिन्तेफार्से, राजिनामा, तिरजा, मोठ, लगत, पजनी, मोही, कूत, अधिया, बाँकी-बक्यौता, पाटे, आस्मानी, थुम, वाबली, वलक, सभा ठेगथिति (ठेक्काथिति), ६० मुरी, ३० मुरी, सलामी, साढे सात, साढे छ, साढे पाँच, साढे तीन, भेडभारा, मेकचिन, नीतिकर, माल, झारा, ताले (कामी), सुजेरो (दमाई), पलेटी (सार्की), छिपो (नेवार), साउने, फागु, दामासाही, चरन, घाट, अबल, दोयम, सीम, चाहार, पाखो, खेत, चरन, खरचरी, हले, कोदाले (पाखोतर्फ), बेठी, ठेकी, भर्ना ठेकी, बिदा ठेकी, बिजिल्ला, झारलाङ्गी, जगर बगर, झारा, जिल्ला, जिम्मा, कान्लेपाटा, खेत, खेताला, खोरिया, मुरी, माटो मुरी, पाथी, माना, फुट, संक्राति, सोराना/नी, तिरो तथा राजअङ्क, सर्वअङ्क,

सर्वअङ्क, खुर्पा ठेक, खुवा, पाताल, सिद्धि पाताल, सरपट, नापी, चार दाम, चारदाम ठेकी, रकम, बिरता, खरचरी, बेठ, बेगार आदि ।

### ४. जग्गा र जग्गा लेनदेनसँग सम्बन्धित शब्दहरू

माल, अड्डा, घरायसी, कागज, साहू, असामी, ऋण, ऋणी, सावाँ, ब्याज, थैली, भाका, बन्धकी, भोगबन्धकी, कपाली, तमसुक कपाली तमसुक, चलनी, रैती, सोरआनी, दृष्टिबन्धकी, छिन्तेफार्स्ये, हक, भोग, बड्, मासी मासीकट्टा, मासी बडकारा, अठाइसा, अन्नेब्याज, बाँधा, दर्ता, दातामाता, धुरीपुर्जी, डिक, ओलने, ओलने मताने, सापटी, सिरतोक आदि ।

### ५. सामाजिक र सांस्कृतिक शब्दावली

नीति, साम्मृति, देवगुठी, कल्याण धन, आस्मानी, महन्त मण्डली, नीतिकर, भोर करनी, चन्द्रायण, दुबोढुङ्गो, कसम, किरिया, सपथ, चाकचकुई, मेकचिन, मरी अपुताली । मौंलो, मार हान्नु, गोबध, दाग लगाउने/खोप्ने, भातपानीमा काड्ने वा जात लिने, भेडभारा, कामीको ताल, सुजेरो (दमाईको), पल्रेटी (सार्कीको) र छिपोछापो (नेवारको) ।

### सामाजिक जीवनका अन्य शब्दावली

जिनी, पेवा, पुस्ता, पुर्खा, फिला, साँप्रो, सिसार, गोठ, चोक, गोठचोक, चरन आदि ।

### ६. केन्द्रीय प्रशासनसँग सम्बन्धित शब्दहरू

लालमोहर, रुक्का, पत्रम्, पन्जापत्र, खड्गनिशाना, दुईछापे, एकछापे, सवाल, सनद, इस्तिहार, मुलुकी ऐन, ऐनसवाल, छाप ।

### ७. प्राकृतिक सम्पदासँग सम्बन्धित शब्दहरू

सरकार र किपटियाको अधिकारमा गोश्वारा (वि.सं. १९१२ साल चैत्र वदी ३० रोज ५ को लालमोहर) – उडन्ता, गडन्ता, खानी, खनिज, हात्तीको दाँत, गैंडाको खाग, गौरी गाईको सिङ, बच्चा, जलकर, तार (घाट) वनकर (सिंग), बाघ आदि ।

### किपटियाको एकलौटी–

जिमी भूमि, घर-घडेरी, बारी-स्वाँरा, अलैंचीबारी, पाखो, खर्क, वनजङ्गल जगर बगर, भिरमौरी (महभीर), तितेमाछा (तिते द्वाली),

पानीआँत, तोता मैना, मोम, खयर, साल, सरङ्गा, कठैया, सखुवा लकडी, बेत, बाँस, गोलाको आम्दानी र दस्तुर आदि ।

**८. फारसी शब्दहरू**

नवाब, हुकुम, दिल्लीबादशाह, सुबिदार, फरसुत (फुर्सद), खजाना, जागीर आदि ।

**९. तिब्बती तथा नेवारी भाषाको शब्दहरू**

लामा, उर्गेन, पेमा, चम्देन्देन, क्याक्रा (क्याकार्) आदि ।

## सन्दर्भसूची


बैरागी काइँला, २०६३ : **बहाः जर्नल**, *हज्सन पाण्डुलिपिमा लिम्बू भाषासम्बन्धी सामग्रीको सङ्क्षिप्त विवरण,* **सोसल साइन्स बहाः** पाटनढोका, ललितपुर, पृ. १०५-१३५ ।

काजीमान कन्दङ्वा, २०५६ : **कन्दङ्वा वंशावली**, कन्दङ्वा वंशावली कोष, धरान, सुन्सरी, पृ. ७८ ।

इमानसिंह चेम्जोङ, १९६१, २०१८ **लिम्बू–नेपाली–अङ्ग्रेजी शब्दकोश**, भूमिका, २०१८, पृ. ७।

रिस्ले, एच.एच., १८९४, १९८९ **द गजेटिएर अफ सिक्किम**, पृ. ३७।

**जे. डी. हुकर**, १८५५, १९०५ **हिमालयन जर्नल**, भो. १, पृ. १२८, १९७-१९८ ।

हज्सन पाण्डुलिपि, १८४६-१९५८ भो. ७३, पृ. १५५-१५६, ६०, पृ. २४०, भो. ८४, पृ. २३८, पृ. २३९, पृ. २४१ क, पृ. २४१ ख, पृ. २१४ ।

**डा. ए. क्याम्बेल, इस्क**, १८४० **नोट् अन् द लिम्बुज् एन्ड अदर् हिल टाइब्स् हिदर टु अन्डेस्क्राइब्ड**, जर्नल अफ द एसियाटिक सोसाइटी अफ बेङ्गाल, भो. ९, पृ. ४९५-६०९ ।

# जगदम्बा–श्री तथा मदन पुरस्कारद्वारा सम्मानित व्यक्तित्वहरू : एक अध्ययन

*– शिव रेग्मी*

मदन पुरस्कार स्वर्णवर्ष समिति २०६२ को सन्दर्भमा तयार गर्न लगाइएका तीन पुस्तकहरूमध्ये आखिरी पुस्तक 'पुरस्कार जगदम्बा-श्री तथा मदन पुरस्कारद्वारा सम्मानित व्यक्तित्वहरू' नामक ग्रन्थको प्रकाशन २०६२ मङ्सिर जनिए पनि २०६३ साल असोजतिर मात्र निक्ल्यो रे भनेर धेरैपटक किन्न पठाएँ, तर पाउन सकिनँ, आखिर केही नलागेर ध.च. गोतामेज्यूको उपहार ग्रन्थ ल्याएर अध्ययन गरेँ ।

पुस्तकमा साजसज्जा र छपाइको स्तरअनुसार नभै बगरेल्ती त्रुटिहरू रहेकाले मन खिन्न भयो। ग्रन्थकर्ता डा. चेतबहादुर कुँवरको मेहनतलाई सरहनी गर्नै पर्छ, तर मेहनतअनुसार लेखन र प्रस्तुति भने त्यति चित्त बुझ्दो लागेन र तथ्यगत त्रुटि पनि धेरै निक्लिए। हुनसक्छ, विषय ग्रन्थकर्ताको विषयभन्दा बाहिरको विषय भएन पनि होला। प्रुफसम्बन्धी त्रुटि पनि त्यत्तिकै खरा उत्रेका छन्। आज यो कलम तिनै त्रुटि औँल्याउने दिशातिर अग्रसर भएको छ।

प्रकाशकीयमा आँखा पुगे– पढेँ। समितिका संयोजक स.र. यज्ञविक्रम राणाद्वारा लिखित प्रकाशकीय पुस्तक नपढीकन प्रशंसाका शब्दहरू मात्र रहेछन्। उहाँले एकपटक सरसर्ती पढिदिनुभएको भए यतिसाह्रो त्रुटि रहन पाउने थिएनन् कि !

ग्रन्थकारका विषय प्रवेशका दुई-चार शब्दबाट नै प्रवेश गरुँ–

"...सम्बन्धित क्षेत्रका ज्ञाताहरू, सान्दर्भिक पुस्तकहरू पत्रपत्रिका तथा बुलेटिनहरू र पुस्तकालय आदि विभिन्न स्रोतहरूको उपयोग गरेर पनि सीमित समयभित्र सङ्क्षिप्त रूपमा भए पनि विवरण तयार गर्ने प्रयत्न गरिएको परिणाम हो यो प्रस्तुति" दाबी छ ग्रन्थकर्ताको। अब केलाऊँ त्रुटिहरू–

❖ धन्यवादको क्रममा उल्लेख नाममा डा. विष्णुराज आत्रेय हुनुपर्नेमा बिष्णुप्रसाद आत्रेय भएको छ, हेर्दा सानो देखिए तापनि 'नाम'मा यस्तो हुनु क्षम्य मानिँदैन ।

❖ सत्यमोहन जोशीको लेखन क्रममा– "उनको दोस्रो लेखन नाटक क्षेत्र हो । २०१७ सालमा प्रकाशित सिपाही र रैती, दैलाको बत्ती, जब घाम लाग्छ, फर्केर हेर्दा" भनिएको छ जब कि यी कुनै पुस्तक यो सालमा छापिएको छैन ।

❖ चित्तरञ्जन नेपालीको लेखनयात्रा २००३ सालदेखि प्रारम्भ भएको भनिएको छ, एकातिर भने प्रकाशनचाहिँ अर्को २०१४ भनिएको छ। २०१३ सालको मदन पुरस्कार प्राप्त गर्ने व्यक्तिले कसरी २०१४ सालमा प्रकाशन भयो होला ?

❖ ध.च. गोतामेको लेखन कार्यमा लेखिएको छ– "वीरगन्जबाट प्रकाशित हुने *सेवा* मासिकमा २००३ सालतिर पर्दा शीर्षकको कथा प्रकाशित..." एउटै वाक्यमा दुई-दुईओटा त्रुटि देखिन्छन् । न त 'सेवा' २००३ प्रकाशित मासिक पत्रिका हो न त ध.च. गोतामे कथाको शीर्षक 'पर्दा' हो ? 'सेवा' २००८ मा प्रकाशित भएको थियो ध.च. को कथाको शीर्षक थियो– 'कहानीको प्लट' ! यस्तै ध.च. को सम्पादनमा निस्कने गरेको पत्रिका *बाञ्छिटा* हो । बरु पछि *रुङ्गार* का केही अङ्क सम्पादन गर्नुभयो ।

ग्रन्थकर्ताले उल्लेख गरेअनुसार सम्बन्धित क्षेत्रका ज्ञाता, सान्दर्भिक पुस्तकहरू, पत्रपत्रिका तथा बुलेटिनहरू र पुस्तकालय प्रयोग गरेको भए यस्ता त्रुटि कसरी रहन गए, आश्चर्य लाग्छ । वास्तवमा यस्ता ग्रन्थ तयार गर्न बढीभन्दा बढी परिश्रम, सतर्कता र सचेतता हुनै पर्छ, धैर्य लिनै पर्छ । बरु सम्मानित व्यक्तिहरूको परिचय सङ्कलनको क्रममा प्रयोग गरिएको ढाँचाअनुसार प्राप्त परिचयलाई उपयोग गरेर दिन सकेको भए पक्कै पनि यस्ता 'कसिङ्गर' मिसिने थिएन । परिचय प्रस्तुतिमा समेत एकरूपता आउने थियो । कसैको बढी परिचय र कसैको थोरै परिचय हुने थिएन। अब हेरूँ फेरि अरू केही उदाहरण–

❖ लीलाध्वज थापाको परिचय क्रममा उहाँको 'अमर माया' नाटक १९९८ भनिएको छ, त्यो होइन । त्यो नाटक २००२ साल शिवरात्रिमा प्रकाशन भएको भनिए पनि भूमिका भने २००३ सालको देखिन्छ । यस्तै उहाँको जन्मसाल १९८२ हुनुपर्नेमा १९७८ भएको पाइन्छ । लीलाध्वज थापाले २००४ सालमा नेपाली भाषा प्रकाशिनी समितिबाट उपन्यासका निमित्त पुरस्कार प्राप्त गरेको उल्लेख छ, तर प्रस्ट कतैबाट गरिएको छैन । मैले जानेअनुसार नेपाली भाषा प्रकाशिनी समितिले पुरस्कार सम्बन्धमा नेपाल गजेट २००८ साल माघ २१ गते एउटा सूचना प्रकाशित भएको देखिन्छ ।

"नेपाली भाषामा मौलिक उपन्यासको कमी भएको हुनाले पहिले यो अभावपूर्तिका निमित्त ने.भा.प्र. समितिमा एक जना लेखक राखी उपन्यास लेखाउने प्रबन्ध भइरहेकोमा ०८/९/२०/६ मा बसेको उप-समितिको सभामा सदस्यहरूको सदस्यहरूको सर्वसम्मतिबाट तलब लिई लेखाउनुभन्दा उत्तम उपन्यास-लेखकलाई योग्य पुरस्कार दिने गरी पुस्तक तयार गराउन मनासिब ठहरिएकोले यस विषयका उमेदवार लेखकहरूलाई विदित होस् भन्ने उद्देश्यले यो सूचना प्रकाश गरेको छ ।

उपन्यास सामाजिक पृष्ठभूमिमा लेखिएको र छापिँदा ४००-५०० पृष्ठसम्मको हुनुपर्दछ ।

उमेदवार लेखकहरूले २००९ आषाढ मसान्तसम्ममा पुस्तक ने.भा.प्र. समितिमा पठाउनुपर्दछ ।

पुस्तक जाँच्न नियुक्त भएको पञ्चले सर्वोत्तम ठहऱ्याएको उपन्यासका लेखकलाई मोरु ९००/ एक मुष्ट पुरस्कार दिइने छ ।

पुस्तक कागजको एकतर्फ स्पष्ट बुझिने अक्षरमा पदहरू छुट्याई लेखिएको हुनुपर्दछ ।"

२००४ सालमा ने.भा.प्र.स.ले लीलाध्वज थापालाई उपन्यासमा पुरस्कार दिइयो भन्ने तथ्य उल्लेख छ, त्यो भरपर्दो देखिँदैन । बरु मैले सुनेअनुसार दौलतविक्रम विष्टले आफ्नो उपन्यास 'मञ्जरी' ने.भा.प्र.स.को सूचनाबमोजिम बुझाएका थिए । तर त्यो पनि धेरै

वर्षसम्म त्यसै रोकिरहेकोमा २०१६ सालमा नेपाल-भारत सङ्घले प्रकाशित गरेको छ । भूमिका लेखक श्यामलाल वैष्णव हुन् । दौलतविक्रम विष्टले जीवनको पछिल्लो कालमा 'मञ्जरी' उपन्यासले ने.भा.प्र.स.बाट पुरस्कृत भएको तथ्य उल्लेख गरेका छन् एक अन्तरवार्ताको क्रममा । तर यसबारे जिज्ञाशा राख्दा श्यामलाल वैष्णवले अनभिज्ञता प्रकट गर्नुभयो । यही क्रममा उहाँले 'मञ्जरी'को परिमार्जनमा आफ्नो हात रहेको तथ्य भने खोल्नुभयो ।

❖ जनकलाल शर्माको जन्म सुरुमा १९८३ लेखिएको भेटिन्छ, तर प्रस्तुत ग्रन्थको शीर्षकमा १९९३ उल्लेख छ । जनकलाल शर्मा जागिरबाट अवकाश पाएपछि भने आफ्नो जन्मसाल १९७८ साल भनेर संशोधन गर्नुभएको छ। उहाँको लेखन विधालाई हेर्ने हो भने 'रुङ्कार' (पाक्षिक २००८), अङ्क चार, (कात्तिक २००८) मा "प्रजातन्त्र र साम्प्रदायिक शीर्षक लेखचाहिँ पढेको छु। अत: "उनको लेखन विधालाई हेर्ने हो भने २०११ सालमा प्रकाशित *जोसमनी सन्त परम्परा र साहित्य* नामक ग्रन्थ जीवनी समीक्षा हो" र "उनको प्रारम्भिक रचना गीत नै हो। यसलाई उनले २००८/०९ सालतिर 'रुङ्कार' नामक पत्रिकामा प्रकाशित गरेका थिए" जस्ता ग्रन्थ कर्ताका वाक्य भ्रामक र त्रुटिपूर्ण छन् ।

❖ "पारिजातको पहिलो रचना 'धरती' शीर्षकमा *कविता* नामक पत्रिकामा वि.सं. २०१३ सालमा प्रकाशित भएको थियो ।" कस्तो अनौठो कुरा । ग्रन्थकारले कहाँबाट लिनुभयो सन्दर्भ ? कस्तो भयङ्कर त्रुटि ? यसको शुद्धरूप हो– 'धरती' (मासिक वर्ष १ अङ्क २ चैत २०१३) मा सुश्री पारिजातको 'व्यर्थ प्रयास', 'आजको बिदाको दिन हो' तथा 'के हो त्यो ?' शीर्षकका तीन कविता प्रकाशित छन् ।

१ "वि.सं. २००३ सालमा निस्केको 'उद्योग' नामक पत्रिकाले 'नारीको मूल्य' शीर्षकको लेख पहिलोपटक उनले प्रकाशित गरेका थिए । शङ्कर लामिछानेका सम्बन्धमा लेखिएको वाक्यको सट्टा हुनुपर्थ्यो– उहाँको पहिलो लेख 'साहित्य-स्रोत' (मासिक वर्ष ३ अङ्क १, २००६ असार) मा "हाम्रो समाजमा नारी" लेख

प्रकाशित भएको छ । 'उद्योग' (१९९२, सुरुमा पाक्षिक, पछि मासिक) ले २००८ सालमा लेखक परिचयाङ्क प्रकाशित गरेको थियो ।

- ❖ राजेश्वर देवकोटाको पहिलो प्रकाशित रचना 'हचुवा'को बोलीमा लेखिएको देखिन्छ । "२००४ सालतिर उनले आफ्नो लेखन प्रारम्भ गरेका हुन् । त्यसबेला प्रवासमा छँदा दार्जिलिङबाट प्रकाशित हुने *भारती* पत्रिकामा पहिलोपल्ट कविता प्रकाशित भएको थियो ।" यो हो ग्रन्थकारको वाक्य । त्यसबेलाको अर्थ कसरी लगाउने ? मैले 'भारती' पल्टाउँदा उहाँको 'शान्ति' शीर्षकको ऐतिहासिक कथा *भारती* (मासिक वर्ष १ अङ्क ११ वैशाख २००७) मा प्रकाशित छ ।

सानातिना त्रुटिहरू पनि निकै नै देखिन्छन् ।

- ❖ गङ्गाविक्रम सिजापतिको कथासङ्ग्रह "मेरा मल्लार" नभैकन 'मेघ मल्लार' हो ।
- ❖ पारसमणि प्रधानको जन्मसाल पेट बोलीमा १९९५ भएको छ ।
- ❖ केशवप्रसाद उपाध्यायले २०११ सालदेखि त्रि.वि.वि. सेवा गरे उल्लेख छ ।
- ❖ राजेश गौतमले २०४६ सालको पुरस्कार २०४९ मा प्राप्त गरे उल्लेख छ ।
- ❖ विनोदप्रसाद धितालको पहिलो कविता १९९५ सालमा प्रकाशित भनिएको छ ।

पुस्तक प्रकाशित भएपछि पुस्तक परिचयसमेत प्रकाशित भएका छन् । तर अचेलको पुस्तकपरिचय पुस्तक नपल्टाई भूमिका र विषयसूचीमात्र पल्टाएर गरिने हुँदा यस्ता तथ्यगत त्रुटि दबेर बसेका हुन्छन् । वास्तवमा, पुस्तकपरिचय लेख्न बस्दा तथ्यगत अध्ययन गरेर मात्र लेख्ने गरेमा पुस्तकको उपयोगिता सत्य-तथ्यको आधारमा मूल्याङ्कन हुन्थ्यो कि ? पुस्तकपरिचय मात्र 'विज्ञापन' होइन, न हो पुस्तक पाउने आशाले लेखिने परिचय ?

सत्य-तथ्य कहिलेकाहीँ तीतो पनि हुन सक्छ । जगदम्बा प्रकाशनबाट प्रकाशित मैले पढेका पुस्तकहरूमध्ये यो जत्तिको त्रुटिपूर्ण पुस्तक अरू छैन । ग्रन्थकर्ताको आफ्नो रुचिको विषय नभएर पनि यस्तो भएको हुनसक्छ । दोस्रो तथ्य, ग्रन्थकर्ताले भन्नुभएजस्तो– ज्ञाता, पुस्तक-पत्रिका बुलेटिन तथा पुस्तकालय उपयोग गर्न पाउनुभएन । नत्र त मदन पुरस्कार पुस्तकालयजस्तो खानीभित्र बसेर अध्ययन गरेको भए, यस्तो नतिजा निक्लने थिएन होला कि ?

✍

# खोजेको के पाएको के ?

*– प्रा. शिवगोपाल रिसाल*

(यहाँ वर्तमान युगका जडभौतिक वादमा ज्यादा विश्वास गर्ने र आध्यात्मिक चिन्तनदेखि अत्यन्त टाढा भएका संसारी मानिसहरूले वास्तवमा के खोजेका छन् र के पाएका छन् भन्ने विषयमा सूत्रात्मक रूपमा प्रकाश पार्ने प्रयास गरिएको छ । – लेखक)

ब्रह्म खोजेको जगत्मानै भुलेको । आनन्द खोजेको, दु:ख पाएको । दु:खको अभाव खोजेको सुखको आभास पाएको । खोजेको राम, भेट भयो रावणसँग मुक्त हुन खोजेको, बन्धनमा परेको । लाभ खोज्दै जाँदा नोक्सान पो भएछ । न मर्न खोज्दाखोज्दै मर्न परेको । योग खोजेको वियोग भेटेको । जुटिरहन अनेक उपाय गर्दा पनि छुट्टिनु परेको । खोजेको त धनी हुन, भइयो गरिब । विद्वान् भइएला भनी नाना उपाय गरियो तर मूर्ख पो भइएछ । बूढो हुन नखोजेको घिन लाग्ने भइयो । मर्न नखोजेको डरलाग्ने भइयो आखिरमा बूढो पनि भइँदो रहेछ, मुत्यु पनि आउँदो रहेछ ।

हामी उज्यालो खोजिरहेका छौँ तर सूर्यलाई पीठ फर्काएर । हामी सुखसापेक्ष हुन धर्म-निरपेक्ष हुँदै छौँ- यो कसरी सम्भव होला ?

*धर्मस्य फल मिच्छन्ति धर्मं नेच्छन्ति मानवा: ।*
*पापस्य फल नेच्छन्ति पापं कुर्वान्ति यत्नत: ॥*

आजका मान्छेहरू धर्मको फल (सुख) खोज्दछन् तर धर्म गर्न खोज्दैनन् । त्यसैगरी पापको फल (दु:ख) पाउन इच्छा गर्दैनन् तर यत्न गरी-गरी अर्थात् खोजीखोजी पाप गर्दछन् ।

त्यसैकारण इष्ट खोजेका छन्, अनिष्ट पाएका छन् । बूढी आमैले सियो हराइछन् मजेरीमा, खोज्दै छिन् रे आँगनमा । अब कहिले भेट्टाउलिन् त ? कालो चस्मा लगाएर सेतो हिमाल खोज्दै छन् आजका तथाकथित सभ्य र शिक्षितहरू । कानमा घण्ट झुन्डयाएर हिँड्ने घण्टाकर्णहरूले भगवान्का नाम र गुणकीर्तन कसरी सुन्ने ? लुगा सेतो होस् भन्ठान्छन् कोइलाका खानीमा काम गर्नेहरू । मुखमा नुनको ढिको बोकेर हिँड्ने कमिलाले मिस्रीको पहाडमा पुगे पनि गुलियाको

स्वाद कसरी पाउला त ? मकै रोपेर भटमास फल्दैन, भोगटेको बोट रोपेर अनार फल्दैन । मान्छे प्रतिकूल काम गर्छ, अनुकूल फल खोज्छ । मान्छेले खोजेको छ शान्ति तर मारकाट, हत्या, आतङ्क, अत्याचार, रक्तपात अपहरण आदि उपाय अवलम्बन गरेको छ अनि सर्वत्र अशान्ति, अशान्ति ! यस्तो किन भयो भन्दा अज्ञानले, अविद्याले, अभिमानले, अहंकारले, स्वार्थन्धिताले, भ्रमज्ञानले, अविश्वासले र सङ्क्षेपमा भन्नुपर्दा भगवान्प्रति, ईश्वरप्रति पूर्वजन्म-परजन्मप्रति विश्वास नरहनाले, पापको डर नहुनाले नरकगामी बनिएला भन्ने कुरामा ख्याल नहुनाले ।

अज्ञानले गर्दा मूर्ख, पामर, अज्ञानी, संसारी मान्छे शरीरलाई साँचो मान्छ र बाँचिरहन खोज्छ । न त शरीर साँचो हो न त ऊ बाँचिरहन नै पाउँछ ।

अज्ञानकै परिणामले गर्दा–

कमलपित्त रोगीले सेतो शङ्खलाई पनि पहेँलो देख्छ । मूर्ख मृगले मरुभूमिमा पनि पानी देख्छ । विचार नभएको लम्फु मन्द अन्धकारमा डोरीमा सर्प देख्छ । उसैलाई सिपीमा चाँदीको भान हुन्छ ।

स्वार्थलाई नकुल्ची परमार्थ सप्रँदैन । जे रोप्यो त्यही फल्छ । अधर्म रोपेर धर्म फल्दैन । आनन्द सबैले खोजेका छन् तर सापेक्षताका दृष्टिले यसमा पनि न्यूनाधिकार हुन्छ । पढेलेखेको बलियो, निरोगी, जवान, धनी, युवकको आनन्दलाई मानुष आनन्द भनिन्छ । उसको आनन्दभन्दा मनुष्य-गन्धर्वको आनन्द सयगुणा बढी खालको हुन्छ । त्यस्तै देवगन्धर्वको पितृको, आजानदेवताको, कर्मदेवताको, देवताको, इन्द्रको, बृहस्पतिको, प्रजापतिको र ब्रह्माको आनन्द सयसय गुणा बढी भए तापनि ती सबैको आनन्द एकत्रित गर्दा हुने आनन्दभन्दा एक जना ब्रह्मज्ञानीको आनन्द उच्चकोटीको मानिएको छ । त्यसैले देवताहरू पनि मनुष्ययोनिको महानताको महिमा गाउँछन् । कारण के त भने मनुष्ययोनिमा नै ब्रह्मज्ञान गर्न सकिन्छ अरू योनिमा सम्भव छैन । त्यसैकारण सबैले खोजेको हो ब्रह्मज्ञान तर अल्मलिरहेका छन् सारा भ्रमज्ञानमा । किन यस्तो भयो त भन्दा “दु:ख पाइस् मङ्गले

आफ्नै ढङ्गले ।" यही हो अज्ञान, अविधा, अध्यास, माया, स्वरूपको विस्मृति, भ्रमज्ञान, मोह इत्यादि ।

'म ताक्छु मुढो, बन्चरो ताक्छ घुँडो' भइरहेछ संसारी, भोगकामीहरूको जीवन । हामी बढी बाठो हुन खोजेर पनि यसो भएको हुन सक्छ । त्यसैले त भनिन्छ– 'लाटो खान्छ एक बल्ड्याङ, बाठो खान्छ तीन बल्ड्याङ ।'

- हामी सदाकाल बाँचिरहन खोज्छौँ– आफू सत् स्वरूप भएको हुनाले ।
- हामी केही न केही कुरा जानिरहन खोज्छौँ चित् भएको हुनाले ।
- हामी सदासर्वदा आनन्दी हुन खोज्छौँ आनन्दस्वरूप भएको हुनाले ।
- अनि आफूजस्तो अर्को कोही नहोस् भन्ने ठान्दछौँ आफू अद्वितीय, अद्वय भएको हुनाले ।

तर अज्ञानले गर्दा–

- असत् देह-गेह आदिमा मोह भयो ।
- विषयादि जडवस्तुमा आस्था भयो ।
- दुःख रूप पुत्रदार-गृहादिमा प्रेम भयो ।

अनि त परिणाममा–

खोजेको 'माछो-माछो ! हातमा लाग्यो भ्यागुतो ।' हामीले खोजेको के त भन्दा वैदिक मन्त्रहरू भन्दछन्–

*असतोमा सद्गमय ।*
*तमसोमा ज्योतिर्गमय ।*
*मृत्योर्मा अमृतंगमय ।*

हे परमात्मा ! मलाई असत्यबाट सत्यमा लैजाऊ । हे परमात्मा ! मलाई अन्धकारबाट उज्यालोमा लैजाऊ । हे परमात्मा ! मलाई मृत्युबाट अमरतामा लैजाऊ । मान्छेले वास्तवमा खोजेको यही हो तर अज्ञानले गर्दा यसको ठीक विपरीत दिशातिर गइरहेको छ । अर्थात् असत्यतिर, जडतातिर, दुःखको खाडलतिर गइरहेको छ तापनि

उसलाई अझै थाहा छैन ऊ कतातिर लागिरहेको छ । यही आश्चर्य हो ।

बुढ्याइँ, रोग, दरिद्र, दुःख, अज्ञान, चिन्ता, शोक, भय, अशान्ति, अभाव, मृत्यु आदि मानिसले कहिल्यै खोजेकै छैन तर ऊ यी अवाञ्छनीय तत्त्वबाट रातदिन प्रताडित भइरहेको छ । त्यसैकारण उसले खोजेको हो मोक्ष, परेको छ बन्धनमा ।

आफू वास्तवमा परमार्थमा, यथार्थमा जाग्रत, स्वप्न र सुषुप्ति आदि तीन अवस्थादेखि अतीत हो, त्यस्तै सत्य, रज, तम आदि गुणदेखि अतीत हो। त्यसैगरी अन्तमय, प्राणमय, मनोमय, विज्ञानमय आनन्दमय आदि कोषातीत हो, अनि मायातीत, दुःखातीत, आधिभौतिक, आधिदैविक र आध्यात्मिक तापत्रयातीत हो । आफू अजर, अमर सच्चिदानन्द स्वरूप हो र जानेर होस् वा नजानेर, प्रत्यक्ष वा परोक्ष कुनै रूपले होस् खोजेको छ आफ्नो निजी स्वरूपमा पुग्न; खोजेको छ जीवात्मा र परमात्माको ऐक्यात्मक ज्ञानद्वारा परमपद मोक्ष स्वरूपको अनुभव गर्न तर पाएको छ दुःख, भय, मृत्यु आदि। यसको कारण स्पष्ट छ– भएको ठाउँमा खोजिएन । बूढी आमैले सियो हराइछन् मजेरीमा र खोजिरहेकी छन् आँगनमा आएर । अब यो सियो कहिले र कहाँ पाइएला त भन्दा जब हराएकै ठाउँमा बत्ती बालेर खोजिएला अनि अवश्य पाइएला । बूढी आमैसँग भित्र हराएको सियो किन बाहिर आँगनमा आएर खोजेकी त भनी सोध्दा उनले उत्तर दिइन् रे– “के गर्नु त बाबु भित्र अँध्यारो छ, फेरि म राम्ररी आँखा पनि देख्दिनँ, बाहिर घाम लागेकाले बाहिर आँगनमा खोजेको ।” हामीले भएको बेला, भएको वस्तु, भएका ठाउँमा, आँखा खोलेर उज्यालामा खोज्नु पर्‍यो अनि जे खोज्यो त्यही पाइन्छ । ब्रह्मज्ञान त पाइन्छ भने संसारी वस्तुको त कुरै छैन ।

‘खोदा पहाड, निकला चूहा, वह भी मरा हुआ ।’

केके न पाइएला भनी पहाडको चट्टान फोरियो, तर त्यहाँबाट भेटियो एउटा मुसो, त्यो पनि मरेको ! हाम्रो खोज ठीक यस्तै भएको छ ।

अमेरिका, बेलायत, जापान, साउदी अरेबिया, कोरिया, मलेसिया आदि-आदि मुलुकमा सुख पाइन्छ रे, पैसा बर्सन्छ रे भनेर हत्ते हालेर,

घरखेत बेचेर गएका तन्नेरी युवा-युवती आज राईरोई जेलको जिन्दगी बाँचिरहेका छन् । खोजेको के पाइयो के त ?

"स्वर्ग गयो धर्मसँगै, बर्मा गयो कर्मसँगै" भनेझैँ संसारै पाए पनि मनमा शान्ति आएन ! कारण संसारमा शान्ति छैन, शान्ति छ आफूभित्र ।

*भित्र छ ईश्वर बाहिर आँखा,*
*खोजी हिँड्छौ कुन पुर ?*
*ईश्वर बस्तछ गहिराइमा*
*सतह बहछौ कति दूर ?*

– महाकवि देवकोटा

सुनको पलङमा सुते पनि दर्दर भिखारी भएर, कचौरा थाप्दै माग्दै हिँडेको सपना देख्यो भने के काम ? मान्छे अनगिन्ती अनुकूल कुरा प्राप्त होस् र प्रतिकूल कुरा हटोस्, छुटोस्, आउँदै नआओस् भन्छ तर यस्तो चाहना गर्दागर्दै तिनको पूर्ति नहुँदै आयु समाप्त हुन्छ र मर्छ ।

खोजेको कुरा पाउने त ब्रह्मज्ञानी, मुक्ता महापुरुषले मात्र हुन् बाँकी संसारी, अज्ञानीले कहिल्यै पनि न त खोजेको कुरा पाउँछन् न त नखोजेको कुरा हटाउन वा पन्छाउन सक्तछन् । यसको कारण के हो त भने नाशवान् यथार्थमा अविनाशी वस्तु खोजे । विरागमा सुख छ रागमा खोजे, योगमा सुख छ भोगमा खोजे, आफूभित्र आत्मामा सुख छ बाहिर भौतिक वस्तुमा खोजे– त्यसैले शाश्वत, अविनाशी सुख ज्ञानवान्बाहेक अरू कसैले पाएकै छैनन्, पाउँदैनन् पनि ।

*खोज्दछन् सबै सुख भनी सुख त्यो कहाँ छ ?*
*आफू मिटाइ अरूलाई दिनु जहाँ छ ।*

– महाकवि देवकोटा

आजको भौतिक संसार र यस्तो संसारिक मान्छे दिएर सुख पाइन्छ भन्ने दर्शन मान्न तयार छैन बरु लिएर, खोसेर, रेटेर, मारेर सुख पाइन्छ भन्न लागेको छ । त्यसैले आजको विश्वदेखि सुख त डराएर टाढाटाढा भाग्दै छ । आजका मान्छेले भागेको सुख त सुखको आभास मात्र हो, सुखको भान मात्र हो– जाँड खाएर प्यास

मेटेझैँ, चुरोट खाएर थकाइ मेटेझैँ, पेनकिलर खाएर रोग निको भयो भन्ठानेझैँ ।

मरुभूमिमा घामले टल्केको बालुवाको मैदानलाई चारखुट्टे मृगले पानीको तलाउ भन्ने ठानेर पानी पिउने आशले दौडादौड गरेर मरेझैँ दुईखुट्टे मान्छे संसारमा भौतिक उपकरणहरूमा, पुत्रदार गृहादिमा सुख छ भन्ने ठानेर तिनलाई पाउन, तिनबाट सुख पाइएला भनी दौडादौड गर्दागर्दै आयु समाप्त हुन्छ र मर्छ । यही हो आजको भौतिक मान्छेको जिन्दगीको परिभाषा ।

जहाँ वस्तु (आत्मा, आनन्द) छ त्यहाँ खोजेकै छैन, जहाँ (संसारमा, भौतिक नाशवान् वस्तुमा) खोजेको छ त्यहाँ वस्तु (आत्मा आनन्द) छँदै छैन । त्यसैले आजको विश्व चिन्तामा, अशान्तिमा, अभावमा, शङ्कैशङ्कामा, डरैडरमा, अविश्वासमा, अज्ञानमा अन्धकारमा, दुःखैदुःखमा मरीमरी बाँचिरहेको छ वा बाँचीबाँची मरिरहेको छ ।

आँखामा मोहको, अविश्वासको, शङ्काको, अश्रद्धाको, अज्ञानको, स्वार्थान्धताको, द्वेषको, क्लेशको, कालोपट्टी बाँधेर देशदेशान्तरमा, जन्मजन्मान्तरमा, कल्पकल्पान्तरमा, युगयुगान्तरमा अनन्तकालसम्म रोजे पनि शाश्वत सुख, दुःखको सर्वथा अभावको सम्भावना नै छैन । किनभने सुख आफूभित्र छ अनि सुखस्वरूप त आफू नै हो । कस्तूरी मृगले आफ्नै नाभीस्थलमा रहेको बिनाको बासमा कहाँबाट आएको होला भनी खोज्दाखोज्दै तलतल आउँछ रे अनि सिकारीको फन्दामा पर्छ रे । त्यस्तै मान्छे पनि आफूभित्र भएको सुखलाई बाहिरी पदमा, प्रतिष्ठामा, पैसामा खोज्दाखोज्दै त्यसको यथार्थ अनुभव गर्न नपाउँदैमा कालरूपी सिकारीको (यमराजरूपी गोलीको) सिकार बन्दछ ।

दुःख खोजेको होइन, सबै दुःखी छन्; रोग रोजेको होइन, सबै रोगी छन्; मृत्यु छानेको होइन, सबै मरिरहेका छन्; पराजयलाई कसैले निम्तो दिएर बोलाएका होइनन्, तर सबैजसोले हारेकै छन् । खोजेको स्वर्गीय सुख, अनुभव भइरहेको छ नाटकीय दुःखको । खोजेको हो दैवीसम्पदको, अनुभव भइरहेको छ आसुरीसम्पदको । सबैले खोजेको सन्तुष्टि, तृप्ति तर सधैँ असन्तोष र अतृप्ति छ । प्राप्ति मात्र ठूलो कुरो होइन, तृप्ति ठूलो कुरो हो ।

सबैले खोजेको हो शान्ति, समुन्नति तर सर्वत्र अशान्ति र अधोगति छ । कारण बाटो अर्कै लिएका छन्– आजका क्रान्तिकारी, प्रगतिशील मान्छेहरूले । र चारैतिर क्रान्तिको, रक्तपातको, हत्याको, आतङ्कको, हल्लाको, नाराबाजीको, खबरदारीको, विरोधको, विस्फोटको आवाज सुनिन्छ, चित्कार र आर्तनाद सुनिन्छ ।

आजका मान्छेले खोजे एक थोक, पाए अर्को थोक। खोजेजस्तै पाउने हो भने शास्त्रले भनेको, सज्जनले बताएको अध्यात्मको मार्ग अवलम्बन गर्नुपर्‍यो । वेदले बताएको बाटो नै ठीक बाटो हो–

*सर्वे भवन्तु सुखिन...*

*भद्रं करोभिः श्रृणुयाम...*

अखण्ड आनन्द र शाश्वत शान्तिको लागि अर्को बाटो छैन ।

*'नाऽन्यपन्था विधतेऽयनाय ।'*

खोजेको पानी, भेटियो बालुवा; मानेको चाँदी, रहेछ सिपी; समातेको डोरी, परेछ सर्प; यी सबैबाट खोजेको सुख हो तर होइन रहेछ। त्यहाँ त दुःखै-दुःख पो रहेछ। विषय भनेको त बाघको छाला ओढेको स्याल पो रहेछ । सिकारी कुकुरको घाँटीमा बाँधिएको घण्टीको ध्वनिमा सङ्गीतमा लठि्ठएर मोहित भएको मृगलाई सिकारीको गोलीले यमलोक पुर्‍याएझैँ, कागजको वा स्याउलाको ढोईको नक्कली आकृतिमा लोभिएको कामुक मत्ता हात्तीले खाल्टामा जाकिएर माउतेको सिक्री र बन्चराको अधीनमा पर्नुपरेझैँ, बत्तीको उज्यालामा आसक्त भएर प्राण त्यागेका पुतलीहरूझैँ, कमलको फूलको रसमा प्रलोभित भमराले हात्तीको आहार बन्नुपरेझैँ, गडेउला वा अन्य किरा वा मासुका स्वादमा लोभिएर माछाले बल्छीमा परेर ज्यान गुमाउनु परेझैँ मान्छेले पनि शब्द, स्पर्श, रूप, रस र गन्धका बसमा परी आफ्नो सम्पूर्ण जीवनलाई बरबाद बनाइरहेको छ। तर सामान्य विषयी मान्छेलाई यस कुराको पटक्कै ज्ञान छैन। 'म जान्दिनँ' भन्ने कुरा मान्छेले जान्यो भने उसको कल्याणको, उद्धारको बाटो खुल्यो । कतिलाई आफ्नो अज्ञानको ज्ञानै छैन, कतिलाई थाहा छ तर स्वीकार गर्न अभिमानले दिँदैन र झन् गहिरो खाल्टामा खसिरहेका छन् । यसैकारण जे खोजेका थिए त्यो नपाएर चिन्तित छन्, दुःखी छन्, छटपटाएर मरिरहेका छन् ।

खोजेको पानी भेटियो बालुवा, कारण बालुवाको मैदान (मरुभूमि) मा पानी खोजिएछ । खोजेको चाँदी रहेछ सिपी, कारण सिपीलाई चाँदी पो ठानिएछ । खोजेको डोरी सर्प, कारण सर्पलाई डोरी पो मानिएछ। त्यस्तै नै खोजेको हो सुख तर दुःख पो भोग्नु परिरहेको छ, कारण जसलाई सुख भन्ने ठानेको त्यो दुःखैदुःखको भण्डार पो रहेछ। भस्मासुरले ठूलो तपस्या गरी भगवान् शिवबाट वरदान पायो (मागे अनुसारको)उसको हातले जसको शिरमा छोयो त्यो भस्म हुनेछ भनेर। जसबाट वरदान पायो उनै शिवको शिरमा हात राख्न खोज्यो, शिवले भागाभाग गर्नुपऱ्यो । आखिर परीक्षा गर्नका लागि आफ्नै शिरमा हात राख्यो र भस्म भयो । वर्तमान विज्ञानले आविष्कार गरेका एटम बम, हाइड्रोजन बम र अन्य संहारकारी आणविक अस्त्र-सस्त्र पनि यस्तै हुन्– खोजेको अर्कालाई मार्न तर आफैँ मरिरहेका छन् । समुद्रमन्थन गर्दा जसरी अमृत निस्क्यो त्यसैगरी हलाहल विष पनि त निस्क्यो नि ! मन्त्रको विधिपूर्वक शुद्धसँग उच्चारण गरिएन भने अनुकूल फल पाइँदैन। इन्द्रलाई मार्ने पुत्र उत्पन्न होस् भनी हवन गरिएकामा 'इन्द्रद्वारा मारिने पुत्र उत्पन्न भएको' कथा भागवतको छैटौँ स्कन्धमा आएको छ । छोरो पाउन खोज्दाखोज्दै आठ ओटी छोरीछोरी पाएर बाबुआमा थाकेका मात्र होइन छोरीछोरी पाइन् रे भनी स्वास्नीलाई लोग्नेले नै मट्टीतेल खन्याएर आगो लगाइदिएका सत्य घटना पनि छन्। अतः बुद्धि पुगेन, समझदारी भएन, अज्ञानले, वासनाले, मोहले ढपक्क ढाकिदियो भने खोजेको कुरो नपाइने मात्र होइन विपरीत फल पनि भोग्नुपर्ने हुन्छ । जबसम्म नयाँनयाँ खोज भइरहन्छ तबसम्म यथार्थ वस्तु भेटिँदैन । किनभने खोजमा, प्रयासमा, बुद्धिको सीमानासम्ममा पारमार्थिक वस्तु, ब्रह्मतत्त्व भेटिँदैन। त्यो त आफूभित्रै छ, अनि आफू नै हो। गलामा हराएको हार सेफमा, दराजमा, सिरानमुनि कतै खोजे पनि पाइँदैन । कट्टीमा साँचोको झुप्पो घुसारेर दिनभर सर्वत्र भौँतारिएका माताहरू हामीले देखेका छौँ । आफूसँग भएको चीज बाहिर खोजेर कसरी पाइने ? सेता परेवा उडाउँदैमा, शान्ति-सन्धिमा हस्ताक्षर गर्दैमा शान्ति आउने होइन । शान्ति त आफूभित्र छ, मनभित्र छ। आजको विश्व अशान्ति छ, दुःखी छ, तनाव (टेन्सन) ले

ग्रसित छ । भौतिक, नाशवान्, क्षणिक, आगमापायी, परिणामी विषयमा ज्यादा आस्था भयो, आसक्ति भयो, चाहना भयो भने परिणाम दु:खदायी हुन्छ। यो वैज्ञानिक, मनोवैज्ञानिक एवं आध्यात्मिक दृष्टिले हेर्दा सत्य साबित हुन्छ ।

सबैले आफ्नो खेतमा धान धेरै फलोस्, किराफट्याङ्ग्रा नलागोस्, मुसाले पनि नखाओस् भन्ठान्दछन् । के भनेको जस्तै हुन्छ त ? व्यापारमा खुब नाफा होस् ! रातारात करोडपति बन्न पाइयोस् ! खेलमा हार कहिल्यै नहोओस् ! राजनीतिमा सफलतामात्र मिलोस् ! मन्त्री, प्रधानमन्त्री, राष्ट्रपति बन्न पाइयोस् ! आदि इत्यादि कामना, इच्छा, आशा हुन्छ तर के परिणाम भनेकै जस्तो हुन्छ त ? कतै परमात्माका कृपाले अनुकूल परिणाम आउन पनि सक्छ । आयो परमात्माको कृपा भयो, आएन भने पनि आत्तिनुभएन। किनभने दुवै सम्भावना थिए नि । बुद्धिमान्, भक्त, वेदान्ती, ज्ञानी आपत्मा आत्तिँदैनन् सम्पत्तिमा मात्तिदैनन् ।

खोजुन्जेल तत्त्व फेला पर्दैन, जब खोजले पनि विश्राम लिन्छ बोधपूर्वक अनि तत्त्व फेला पर्छ। यसैलाई वेदान्तमा 'नेतिनेति' भन्ने वेदको मात्रको सार्थकता सिद्ध गरिएको छ। खोजले विश्राम लिएको बेला हो भक्तिको पराकाष्ठको वा ब्रह्मात्मैक्यबोधको । समाधिमा खोज हुँदैन । सुषुप्तिमा खोज हुँदैन । सुषुप्तिमा अबोधपूर्वक खोज छुट्तछ भने समाधिमा बोधपूर्वक। खोजुन्जेल पाइँदैन, पाएको वस्तु खोजेकै होइन ।

खोजलाई छोड्नु, सारा कुरा बिर्सनु, मन, बुद्धि, चित्त, अहङ्कारलाई परमात्माको पाउमा समर्पण गरिदिनु अनि जे पाइन्छ त्यो नै वास्तवमा खोजेको हो। त्यो हो आत्मा, त्यो हो ईश्वर, त्यो हो ब्रह्मा । वेद, उपनिषद्, गीता, ब्रह्मसूत्र आदि मोक्षपरकशास्त्रको निचोड पनि यही हो। भगवान्का परम भक्तले र ज्ञानवान् जीवमुक्त महापुरुषले मात्र जे खोजे त्यही पाए । बाँकी साराले खोज्दाखोज्दै जीवन गुमाए ।

शिवमस्तु

# नयाँ नेपालको इतिहासको संरचना गर्ने हो कि ?

*- डा. साफल्य अमात्य*

सन् १८१६ मा सुगौलीको सन्धि नहुन्जेलसम्म आजको नेपालको भूचित्र बनिरहेको थियो । त्यसभन्दा अगाडि 'नेपाल' भनी विश्वभर चिनिने 'नेपाल-मण्डल' अर्थात् काठमाडौँ उपत्यका नै हो । यस उपत्यकाभित्र उत्तरी भारतबाट ईशापूर्व छैठौँ शताब्दीदेखि नै विभिन्न धर्म, जातजाति तथा विभिन्न राज्यव्यवस्थाका अनुयायीहरू शरणार्थीको रूपमा पसेका थिए । ईश्वी संवत् १८५ को राजा जयवर्माको अभिलेखसहितको शालिकले ईश्वी शताब्दीको सुरुदेखि नै यस उपत्यकाभित्र राज्यव्यवस्थाको रूपमा राजसत्ता थियो भनेर प्रमाणित गरेको छ । पूर्व लिच्छविकालदेखि यस कालको अन्तसम्म यस उपत्यकाभित्र कुनै न कुनै रूपमा राजसंस्था कायमै रहेको देखिन्छ ।

छिमेकी राष्ट्र भारतमा पनि ईशापूर्व तेस्रो शताब्दीदेखि मौर्य, शुङ्ग, कुषाण र गुप्तहरूले आ-आफ्नो राज्यव्यवस्थाको लागि इतिहासको विभिन्न कालमा राजसंस्थालाई नै कायम राखेका थिए। भारतको यो राज्यव्यवस्थाको प्रभाव नेपालमा नपर्ने त कुरै भएन । अरू त्यसमा पनि त्यतिखेर नेपालको शासनको वागडोर तिनै भारतबाट पलायन भएर आएका शरणार्थीहरूकै हातमा थियो ।

मध्यकालिक नेपालमा लिच्छवि र यिनीहरू सँगसँगै नेपालभित्र पसेका अन्य जातजातिका मानिसहरूजस्तै गुप्त, वर्मा, मल्ल, देव आदि नामधारी वंशका मानिसहरूले ईश्वीको तेह्रौँ शताव्दीसम्म करिब-करिब पाँच सय वर्ष कर्णाटकी मल्लवंशको उदय नभएसम्म नेपालभित्र राज्य गरिरहेका थिए ।

जसरी युरोपमा सन् ८१४ मा चार्लम्यान (Charlemagne) को मृत्यु पछि Feudalism अर्थात् सामान्तीहरूको जगजगी सुरु भयो र त्यो ईश्वीको तेह्रौँ शताब्दीसम्म कुनै न कुनै रूपमा रही नै रह्यो। त्यसरी नै मध्यकालिक नेपालमा पनि शक्तिशाली राजाहरूको अभाव भएको कारणले गर्दा सामन्तीहरूको जगजगी रह्यो । यो मध्यकालिक नेपालको पाँच सय वर्ष नेपाल उपत्यकाभित्र पनि धेरै

सामन्तीहरूले आ-आफ्ना प्रभावक्षेत्रहरूमा आ-आफ्नै ढङ्गबाट राज्य गरेको देखिन्छ। एक आपसमा मिली अर्को सामन्तसँग लड्नु र सधैँ शक्ति र राज्यविस्तारको लागि लडाइँ गरिरहनु नै त्यसबेलाको सामन्तीहरूको क्रियाकलाप थियो। तर पनि यिनीहरूले आफ्ना पुर्खाले छोडेर गएका सांस्कृतिक धरोहराहरूलाई भने सधैँ अक्षुण्य राखी निरन्तरता मात्र प्रदान गरेनन् वल्की ती सांस्कृतिक सम्पदाहरूलाई अऊ समृद्ध र धनी तुल्याउनसमेत समर्थ भएका थिए। किनभने जुनजुन ठाउँ, गाउँ र नगरमा ती सामन्तीहरूको रजाइँ थियो ती ठाउँहरूमा त्यस समयदेखि आजसम्म पनि आ-आफ्नै मौलिकता भएको सांस्कृतिक नाचगान, रितिथिति, मेलापर्व आदि जीवितै रहेको देखिन्छ।

कर्णाटकी जयस्थिति मल्लले मल्ल राजवंशको सुरुवात गरे। यो वंशका राजाहरूले नेपाल राज्यको सीमानालाई केही बृहत् गरे। नेपालमा मल्लहरूको उदयको साथसाथै भारतमा मुगलराज्यको स्थापना भई विभिन्न प्रान्तका हिन्दूराज्यहरूलाई मुगलहरूले बिस्तारै-बिस्तारै आफ्नो राज्यभित्र गाभे। यस कालमा पनि भारतबाट पलायन भएर आएका मानिसहरू खास गरी हिन्दूहरूले नेपालको विभिन्न भागमा स-साना राज्यहरूको खडा गरी बस्न थाले। जसलाई हामी बाइसे, चौबीसे र सेनराज्य भनी चिन्दछौँ।

हाम्रो देशको इतिहास र हाम्रां देशबारे प्राचीन चिनियाँ यात्रुहरू तथा केही वौद्ध भिक्षुहरूले आ-आफ्नो भ्रमण वृतान्त तथा तिनीहरूले रचेका ग्रन्थहरूमा यदाकदा उल्लेखहरू भए तापनि इतिहास लेख्ने हिसाबबाट भने मल्लकालको उत्तरार्द्धमा नेपाल आएका केही पादरीहरूले वर्णनहरू लेख्न सुरुवात गरेको देखिन्छ। सन् ६२९ देखि ६४४ सम्म पश्चिमका देशहरूको भ्रमण गर्ने प्रसिद्ध चिनियाँ तीर्थयात्री ह्वान-साङ्ग नै नेपालबारेका सूचनाहरू सङ्कलन गर्ने पहिलो व्यक्ति थिए।

लिच्छविकाल र पूर्व लिच्छविकालको इतिहास रचन पुरातात्विक उत्खनन् र पुरातात्विक वस्तुहरूबाहेक हामीसँग खास कुनै अभिलेख, शिलापत्र र लेखौटहरू छैनन्। लिच्छविकालकै कुरा गर्ने हो भने धेरै थोरै अभिलेखहरू, पुरातात्विक वस्तुहरू र छिमेकी देशहरूको

इतिहास नै हाम्रो इतिहासको पनि स्रोत बन्न पुगेको छ। वंशावलीहरूमा लिच्छवि र पूर्व लिच्छविकालको उल्लेख भए तापनि ती कुराहरू धेरैजसो आजसम्म पनि काल्पनिक नै भएर रहेका छन्। नेपालको वंशावलीहरूमध्ये सबैभन्दा पुरानो र सत्यतथ्य मानिएको "गोपालराज वंशावली" राजा जयस्थिति मल्लको समय चौधौं शताब्दीमा लेखिएको हो।

नेपाल उपत्यकाका मल्ल राजाहरूले भारत र तिब्बतको बीचमा बसेर बन्द-व्यापारबाट ठूलो लाभ गर्नुका साथै उर्वरा भूमि, वनजङ्गल र खानीहरूबाट आ-आफ्ना राज्यहरूलाई धनाढ्यमात्र तुल्याएनन् बल्की कला र संस्कृतिले भरिपूर्ण र सुन्दर पनि बनाए। यी मल्ल राजाहरूको बीच पनि मध्यकालिक (अन्तरिमकालिक) नेपालका राजा र सामन्तीहरूको बीच झैझगडा, युद्ध र कलह भने भई नै रहन्थ्यो। फलस्वरूप सैनिक दृष्टिकोणले मात्र नभई राष्ट्रियताको दृष्टिकोणले समेत यिनीहरू कमजोर बन्दै गएका थिए। यसै अवस्थामा भारतका मुगलहरू पनि कमजोर हुँदै गए। व्यापार गर्न आएको इस्ट इन्डिया कम्पनीले सन् १८५७ को सिपाही विद्रोहलाई दबाई भारतमा करिब सय वर्षसम्म एकछत्र राज्य गरे। जब भारतमा अङ्ग्रेजहरूले इस्ट इन्डिया कम्पनीको नाममा धमाधम स-साना राज्य र कमजोर राज्यहरूलाई आफ्नो अधीनमा राख्न र गाभ्न थाले। त्योदेखि नेपाल उपत्यकाका मल्ल राजाहरूभन्दा पश्चिम नेपालका राजा-रजौटाहरू डराउन थाले। मुसलमानहरूले धपाएका हिन्दू राजाहरू अब इसाईहरूले पनि उठिबास गर्नेभयो भनी त्रसित भैरहेको अवस्थामा गोर्खाका राजा पृथ्वीनारायण शाहले ती सबै स-साना राज्यहरूलाई समेटी एउटा विशाल नेपाल राज्य स्थापना गरी चीन र भारतको बीचमा बेग्लै स्वतन्त्र अस्तित्व भएको राज्य स्थापना गर्ने आकाङ्क्षा राखी आफ्नो राज्यलाई चारै दिशामा फैलाउन विजय र एकताको अभियान सुरु गरे। यसै अभियानमा पृथ्वीनारायण शाहले नेपाल उपत्यका र अन्य धेरै स-साना राज्यहरू आफ्नो राज्यमा गाभ्न सफल भए। गोर्खालीहरूको विशाल नेपाल राज्यको अभियानमा उत्तरतिर हिमालय पर्वत शृङ्खला र दक्षिण-पूर्व र पश्चिममा बृटिस भारत राज्य टड्कारो भै उभिए। नेपालीहरूको

विजयअभियानले गर्दा भारतका अङ्ग्रेजहरूसँग शत्रुता हुनपुग्यो र सन् १८१४ नेपाल-अङ्ग्रेज युद्ध भयो, जुन युद्ध सन् १८१६ मा सुगौलीको सन्धिबाट टुङ्गियो ।

मल्लकालिक नेपालको पूर्वार्द्धको इतिहासबारे अभिलेख, मुद्रा र अन्य लिखौटहरूजस्तै शिलापत्र, ताम्रपत्र, ताडपत्र, हस्तलिखित-ग्रन्थहरूका पुष्पिकाहरू र पुरातात्त्विक वस्तुहरूका साथसाथै केही पादरीहरूको भ्रमण-वृतान्तहरू पाइए तापनि मल्ल राजाहरूमध्ये एक-दुई जनाले बाहेक अन्यले आफ्नो व्यक्तिगत गुणगान गरी काव्य, ग्रन्थ तथा वंशावलीहरू तयार गर्न लगाएनन् । उदाहरणस्वरूप पाटनका राजा श्रीनिवास मल्लको समयमा कुनु शर्माद्वारा रचित *कीर्तिपताका* ललितपुरको वर्णन हो ।

सन् १७६८ मा नेपाल उपत्यका विजय गरी शाहवंशका राजाहरूले राज्य गर्न थालेपछि गोर्खाबाट तिनीहरूसँगै नेपाल पसेका थरघरका मानिसहरूले राज्यव्यवस्थामा आफ्नो बोलवाला कायम नै राखे । केही समयसम्म भीमसेन थापा र पाण्डेहरूले राज्यव्यवस्थामा आफ्नो पकड राखेको भए तापनि शाहहरूको निरङ्कुश राज्यव्यवस्थाको अगाडि भीमसेन थापाले आत्महत्या गर्नुपर्‍यो। सन् १८४६ जङ्गबहादुर राणाले शाह राजाहरूको सम्पूर्ण शक्ति हत्याएपछि नेपालमा प्राचीन लिच्छविकालमा जैँ राणावंशको द्वैध शासन व्यवस्थालाई पूर्ण जीवित मात्र गरेनन् वल्की एकछत्र र निरङ्कुशसमेत बनाई करिब १०४ वर्षसम्म राज्यभोग गरे । यस अवधिको अर्थात् सन् १८४६ देखि १९५१ सम्मको नेपालको इतिहासमाथि प्रकाश पार्ने लिखित सामग्रीहरू– अभिलेखहरू, दस्तावेजहरू, नेपाल, भारत र बेलायतमा प्रशस्त छन् । भारतको राष्ट्रिय अभिलेखालयमा र बेलायत (लन्डन) को इन्डिया अफिस लाइब्रेरी, पब्लिक रिकर्ड अफिस, बृटिस म्युजियम आदिमा छन् । सुगौलीको सन्धिपछि नेपाल आएका बृटिस रेजिडेन्टहरूको टिप्पणी र डायरीहरूले नेपालको त्यसबेलाको परिस्थिति र इतिहास छर्लङ्ग्याउँछ । राणाहरूको उदय भएपछि शाहराजाहरू ओझेलमा परे । त्यसपछि नेपालको इतिहासमा शाहराजाहरूको व्यक्तिगत विवरणबाहेक अरू केही पनि उल्लेख गरिएन । राणा प्रधानमन्त्रीहरूले विदेशी इतिहासकारहरूलाई आ-आफ्नो गुणगान गराई नेपालको इतिहासको

संरचना गर्न थाले । यसै सिलसिलामा जङ्गबहादुरले आफ्नो बखान H. Ambrose Oldfield लाई लेखाए । जङ्गबहादुरको हत्यापछि उनको परिवारलाई समर्थन गरेर William Digby ले - 1857 A Friend in Need, 1887 Friendship and Forgotton : An Episode in Indian Foregin Office Administration (London, 1890) प्रकाशित गरे । चन्द्रशमशेरले Percival Landon लाई आफ्नो बखान गराई 'नेपाल' शीर्षक दिई ठूलो ग्रन्थ प्रकाशित गराए । त्यसरी नै जुद्धशमशेरले भारतका इतिहासकार ईश्वरीप्रसादलाई 'The Life and Time of Maharaja Juddha Shumsher Jung Bahadur Rana of Nepal", Allahabad, 1909 लेख्न लगाए । विदेशीहरूलाई मात्र होइन राणाहरूले नेपालीहरूलाई समेत आ-आफ्नो बखान र गुणगानमा ग्रन्थ तथा काव्यहरू लेख्न लगाए । जस्तै राणा पद्मजङ्गका Life of Maharaja Sir Jung Bhadur Rana र श्री ३ जङ्गको बेलायत भ्रमण, चन्द्रशमशेरले डिल्लीशमशेर थापा क्षेत्रीलाई 'युरोप यात्रा' र 'चन्द्र मयुख' भन्ने काव्यहरू लेख्न लगाए । त्यस्तै जुद्धशमशेरले कल्याणशमशेर राणालाई "श्री ३ जुद्ध महिमा" र मोहनशमशेरले मेघराजशमशेर राणालाई "नेपालका वर्तमान श्री ३ महाराज मोहनशमशेर जङ्गबहादुर राणा, काठमाडौं, १९४८ नामक ग्रन्थ लेख्न लगाए । यसरी आफ्नो गुणगान लेखाउनेमा राजा महेन्द्र पछाडि पर्ने कुरै भएन । उनले मैत्रदेव पाठकलाई अङ्ग्रेजीमा "Shah Kings of Nepal", Kathmandu 1958 र "श्री ५ महेन्द्रको भारत भ्रमण" नामक दुईओटा पुस्तक र विदेशी विद्वान् वाई.जी.कृष्ण मूर्तिलाई आफ्नो जीवनी लेख्न लगाए ।

नेपालको इतिहासको नाममा धेरै विदेशी तथा स्वदेशी विद्वान्हरूले धेरै दुःख, मेहनत र कष्ट सहेर धेरै वर्ष लगाई इतिहासहरू लेखे । तीमध्ये सबैभन्दा उल्लेखनीय चाहिँ Colonel Kirkpatrick को "An Account of the Kingdom of Nepaul: Being the Substance of Obeservations Made During a Misson to that Country in the Year 1793" नै हो । योभन्दा पहिले नेपालको विषयमा कुनै पनि विदेशी वा स्वदेशीले ग्रन्थको रूपमा लेखेको मैले चाहिँ देखेको छैन । कर्कप्याट्रिकले बसालेर गएको नेपालको विषय

अध्ययन गर्ने र इतिहासको संरचना गर्ने दिशातर्फ ठूलो योगदान गर्नेहरूमा सन् १८२५ मा असिस्टेन्ट भएर नेपाल आएका Brian Houghton Hodgson को नाम नै सर्वोपरि आउँदछ ।

सन् १८१६ को नेपाल-अङ्ग्रेजको युद्धपछि भएको सुगौली सन्धिअनुसार नेपालमा बृटिस रेजिडेन्सीको स्थापना भयो । यस रेजिडेन्सी अफिसमा हड्सन सन् १८२० मा सहायक रेजिडेन्ट भई आए । उनी नेपालमा आउनु नै नेपालको ठूलो सौभाग्य मान्नुपर्दछ । किनभने त्यसबेला युद्धप्रेमी नेपालीहरूमा उनले पहिलोपटक शिक्षाको जागरण ल्याई नेपालसम्बन्धी विभिन्न विषयहरूमा नेपालीहरूको सहायताद्वारा आफ्नो बौद्धिक विकासका साथै अनुसन्धानका कार्यहरू गरे । नेपालमा नै उनले यौवन, जोस, र उमङ्ग बिताएर नेपाल र नेपालीलाई सर्वप्रथम नजिकैबाट राम्ररी चिन्न कोसिस गरी नेपाल र नेपालीलाई विश्वसँग परिचय गराउन प्रयास गरे । हड्सन नै सर्वप्रथम त्यस्ता व्यक्ति थिए जसले नेपालको इतिहास, कला, साहित्य, प्रकृतिविज्ञान आदि विषयहरूमा अध्ययन-अनुसन्धान गरेर "नेपालिज् स्टडिज" भन्ने एउटा बेग्लै विज्ञान तथा अनुसन्धानको विषय बनाई आजको वैज्ञानिक युगको अगाडि राखिदिए । आफ्नो घरबाट टाढा, आफ्नो देशबाट टाढा, आफ्नो परिवारबाट टाढा, एक्लै एउटा अन्जान हिमालको मुलुकमा आई आफ्नो यौवन बिताइरहेको यस विद्वान् जसको अगाडि आजको जस्तो विश्वमा ठूला-ठूला पुस्तकालयहरू थिएनन्, वुद्धिजीवीहरू छैनन् त्यस व्यक्तिले यो रमणीय देश नेपाललाई नै आफ्नो पुस्तकालय, आफ्नो गुरु र आफ्नो अध्ययन तथा अनुसन्धानको विषय बनाई यसै काममा नमरुन्जेल दिलचस्पीका साथ गर्दै गए । त्यस व्यक्तिलाई आजको नेपालले कहिल्य पनि बिर्सन सक्दैन । यस व्यक्तिले नेपालको शान्त र एक्लोपनको वातावरणलाई नै आफ्नो अनुसन्धानकार्यको लागि उपयोग गरेर आज हामी सबैको आँखा खोलिदिएको छ ।

वी.एच.हड्सन को जन्म फेव्रुअरी १ तारिख सन् १८०० मा बेलायतको एउटा साधारण परिवारमा भएको थियो । उनी आफ्ना बुबा-मुमाका जेठो छोरा थिए । भारत आउनुभन्दा पहिले हेलब्रुरीमा कम्पनी सरकारको लागि पठाइने कर्मचारीहरूलाई ट्रेनिङ दिने केन्द्रमा

ट्रेनिङ हासिल गरी सन् १८१७ मा उनले त्यस ट्रेनिङमा सर्वप्रथम भई गोलमेडलसमेत प्राप्त गरे। नोकरीको फेरमा उनी भारततर्फ आए र त्यहाँ उनलाई उनकी काकीकी साथी लेडी ओलीले कम्पनी सरकारको नोकरी पाउनुमा मद्दत गरिन् । त्यसबेलाको गर्भनर जनरल लड हेस्टिङ्की पत्नीसित राम्रो जान-पहिचान भएको हुनाले लेडी ओलीले हड्सनलाई चाँडै नै कम्पनीसरकारको नोकरीमा भर्ना गरिदिए । सर्वप्रथम हड्सनलाई १८१८ मा कुमाउँको सहायक कमिश्नर गरी पठाए।  यसरी उनी सर्वप्रथम त्यहाँका पहाडी जनजीवनसँग परिचित भए। कुमाउँमा उनी पूरा एक वर्ष बसे र उनले त्यहाँको इतिहास जनजीवन, भूगोल र अरू विषयहरूमा अध्ययन पनि गरे। त्यसबेला युवकहरूले पहाडी इलाकामा खटिनु नै ठूलो यातना सम्झन्थ्ये तर हड्सनले भने यसकिसिमको कुनै भावना नराखी हर्षका साथ आफ्नो कार्यलाई स्वीकार गरे। किनभने बाल्यकालदेखि नै उनलाई कुनै नयाँ विषयको खोजीनीति र नयाँ चीजवीज तथा वस्तुस्थितिहरूसँग परिचित हुन ज्यादै मन लाग्दथ्यो । सन् १८२८ मा नेपालस्थित बृटिस रेजिडेन्ट मिस्टर एडवर्ड गार्डनरले राजीनामा दिएपछि उनी कायमुकायम रेजिडेन्ट भए । चारैतिर पहाडले घेरिएको काठमाडौंमा जताततै मन्दिर, देवालय, स्तूप आदि वास्तुकलाहरूले शृगारिएको नगरीमा बसी उनले यो देश र यहाँका जनताको विषयमा अध्ययन गर्ने सङ्कल्प गरे। आफ्नी बहिनी फेनीलाई लेखेका चिट्ठीहरूबाट उनको नेपाल र नेपालीप्रतिको प्रेमभावना खुलस्तरूपमा देखापर्दछ । उनले आफ्नो एउटा चिट्ठीमा लेखेका छन्– दिनहुँजसो एक्लै पुराना मन्दिरहरू र बुद्धिस्ट स्तूपहरू हेर्ने जाने गर्छु। जसरी पहिले पहिले रोमनहरू आफ्ना भग्नावशेषहरू हेर्न जाने गर्दथेँ। यी कुराहरूबाट उनको बुद्ध धर्म र कलासँग कतिको प्रेम रहेछ भनी देखाउँदछ। उनले आफ्नी बहिनीलाई चिट्ठीमा लेखेका छन्– म पढ्छु र लेख्छु र पढ्छु बस्। हड्सन नेपालमा बसुन्जेल उनको दैनिक जीवन यसरी नै बित्यो । आफ्नी आमाको ज्यादै मन पर्ने छोरो र Macclesfield म्याकलेस फिल्ड र रिचमोन्डमा शिक्षा पाएका व्यक्ति Malthus dfny; जस्ता ख्याति प्राप्त अर्थशास्त्री तथा विद्वान्को सहबासमा हुर्केको हड्सनले अध्ययन-अनुसन्धानमा आफ्नो जीवनलाई न्यौछावर गरेनन् होला भन्ने कुरामा

शङ्कै रहन्न । William Wilson Hunter हन्टर जसले हड्सनको जीवनबारे पुस्तक लेखी एक विद्वान्लाई उनले गरेका कार्यहरूप्रति कदर गरे । उनको भनाइअनुसार हड्सनलाई प्राध्यापक Henary Walter हेनरी वाल्टरले नै प्रकृति विज्ञान (जनावर र चरा चुरुङ्गी) हरू आदि विषयमा अध्ययन गर्न चाख दिलाए ।

हड्सन नेपाल आउनुभन्दा अगाडि धेरै-थोरै व्यक्तिहरूलाई मात्र नेपाल पनि बौद्ध धर्मसम्बन्धी अध्ययन र अनुसन्धानको ठूलो केन्द्र हो भनी थाहा थियो। हड्सनले धेरै मेहनत गरेर, बुद्ध धर्मसम्बन्धी निकै खोजीनीति गरेर नेपाललाई यस विषयको ठूलो केन्द्र हो भनी साबित गरिदिए । तसर्थ काउन्ट ऐन्जिलो दी गुवेरनिटिस्ले भनेका छन्– हड्सन नै हाम्रो यो आजको बुद्धिस्ट स्टडिजको जन्मदाता हुन् । किनभने उनले नै धेरै वर्षसम्म सुतिरहेको विषयलाई उठाई हाम्रो अगाडि राखिदिए। हड्सनले आफ्नी बहिनी फ्रान्सेस् फेनीलाई लेखेको पत्रमा भन्दछ- Or happy I go alone, for my Companions are no antiquaries and explore some old Buddhist temple and muse and meditate etc. (म खुसीसाथ एक्लै जान्छु किनभने मेरा साथीहरू पुरातत्त्वका ज्ञाता होइनन् । म केही पुराना बौद्ध मन्दिरहरूको अध्ययन गर्दछु तिनीहरूलाई टोलाएर हेर्दछु र तिनीहरूबारे चिन्तन गर्दछु।) यी कुराहरूबाट उनले बौद्ध धर्ममा कति चाख लिएर अध्ययन-अनुसन्धान गरेका थिए भन्ने कुरा स्पष्ट हुन्छ। उनले बौद्ध धर्म विषयमा यसरी मेहनत गरी काम गरिरहेकोमा सारा संसारले उनलाई तारिफ गरे। साथै तिब्बतको दलाइ लामासँग पनि यसै कारणले उनको मित्रता हुन गयो। हन्टरले लेखेका छन्– उनले यसरी मेहनत र कठिन परिश्रम गरेर नै बुद्ध धर्मको अध्ययनलाई उच्चकोटीमा पुऱ्याइदिए र यस विषयमा संसारभर फैलिरहेका रहस्यमय तथा गुप्ती कुराहरू खोली स्पष्ट गरी देखाइदिए। प्रसिद्ध विद्वान् वोर्नफले उनले वुद्धिस्ट स्टडिज माथि गरेका कार्यहरूप्रति यो संसार नै आभारी छ भनी आफ्नो पुस्तकमा लेखेका छन्– हड्सनले बुद्ध धर्मसम्बन्धी धेरै ग्रन्थहरू सङ्कलन गरे, पढे र आफूले अध्ययन गरिसकेपछि भविष्यमा यस विषयमा अनुसन्धान गर्नेहरूको मद्दतको लागि संसारका ठूलठूला म्युजियम, अभिलेखालय

तथा पुस्तकालयहरूमा ती ग्रन्थहरू तथा सामग्रीहरू संरक्षण र अध्ययनको लागि पठाइदिए । फलस्वरूप आजसम्म पनि हामीले ती ठाउँहरूमा गई ती ग्रन्थ तथा सामग्रीहरू अध्ययन गर्न र हेर्न सक्छौँ । हड्सनले आफूले सङ्कलन गरेका बुद्ध धर्मसम्बन्धी ग्रन्थ तथा अरू सामग्रीहरू राख्न निम्नलिखित छ ठाउँहरू रोजे । ती हुन्– एसियाटिक सोसाइटी अफ बङ्गाल, कलकत्तालाई सन् १८२४ मा ८४ थान संस्कृत भाषामा लेखिएका बौद्ध ग्रन्थहरू, कलेज अफ फोर्ट विलिएमलाई ६६ वटा ग्रन्थहरू, रोयल एसियाटिक सोसाइटी लन्डनलाई ७८ वटा ग्रन्थहरू, इन्डिया अफिस लाइब्रेरी लन्डनलाई ३० वटा ग्रन्थहरू, वोडलियन लाइब्रेरी अक्सफोर्डलाई ७ ओटा गरी जम्मा १४७ थान ग्रन्थहरू प्रदान गरे ।

हड्सनले पहिलोपटक आफूले लेखेको निबन्धहरू प्रकाशित गर्दा संसारभरिका बुद्धिजीवीहरूबीच होहल्ला मच्चियो। उनले बुद्ध धर्मसम्बन्धी निबन्ध पनि त्यसैबेला प्रकाशित गरे । जसले गर्दा बौद्धिक जगतबाट बिस्तारै सेलाउन लागेको बौद्ध धर्मसम्बन्धी अध्ययन र अनुसन्धानमा पुनः जागृति हुन थाल्यो । उनका यी निबन्धहरू विभिन्न किसिमका बौद्ध दर्शनका धाराहरूमा केन्द्रित थिए । यस विषयमा विद्वान् एलब्रेच वेभर भन्नुहुन्छ– एउटा सिङ्गो नयाँ क्षेत्र (बौद्ध दर्शन) खोलियो, पहिलोपटक बौद्धमार्गीहरूको दार्शनिक सिद्धान्तहरू तिनीहरूको प्राचीन तथा मौलिक ग्रन्थहरूबाट उद्गमन गरियो । (A wholly new field was opened, and the philosophical doctrines of the Buddhist were for the first time elucidated from their old original texts.) हड्सनको हिमालय विषयका अनुसन्धानको प्रमुख शत्रु हङ्गेरीका विद्वान् Cosma de Koros थिए। उनले समेत बुद्धधर्मसम्बन्धी गरेको अध्ययन अनुसन्धान कार्यहरूलाई तारिफ गर्दै भनेका छन्– मिस्टर हड्सनको बौद्ध साहित्य र बौद्ध धर्मको उद्भव बारेका उदाहरणहरूले एउटा गजबको नयाँ विषयको ज्ञानको समिश्रणको साथै गहिरो दार्शनिक परिकल्पनाले युरोपको जनतालाई अवाक बनाएको छ । (Mr. Hodgson's illustrations of the literature & origin of the Buddhist from a wonderful combination of knowledge on a new subject with the deepest philosophi-

cal speculations, and will astonish the people of Europe.) यसरी नेपाल र नेपालीलाई अध्ययन र अनुसन्धानको विषय बनाउने र नेपालीहरूलाई मात्र होइन सारा संसारलाई नै नेपाल र नेपाली विषयमा चाख पैदा गरिदिने सर्वप्रथम व्यक्ति हड्सनले करिब ५० वर्षजति यस देशमा बसी नेपाल र नेपालीको सेवा गरे। उनको यो कार्यलाई त्यसबेलाका कम्पनी सरकारको कोर्ट अफ डाइरेक्टर्सले पनि खुब तारिफ गरेका थिए। यी सबै कार्यहरू देखेर नै उनलाई कम्पनी सरकारले सन् १८३३ मा नेपालको लागि रेजिडेन्ट नियुक्त गर्‍यो। उनले गरेको अध्ययन-अनुसन्धान कार्यहरूको तारिफ गर्दै युरोपका ठूलठूला संस्थाहरूले उनलाई मान-पदवीहरूले विभूषित पनि गरेका थिए। वुद्ध धर्म, कला, संस्कृति र इतिहासको अध्ययन र अनुसन्धान गर्न हड्सनको सङ्ग्रह नहेरी कसैले पनि पूरा गर्न सक्दैन। यसै सिलसिलामा विद्वान् एलव्रेच बेलेरले भनेका छन्– उनले देखाइदिएको बाटोमा हरेक वर्ष धेरै व्यक्तिहरूले पाइला राख्ने छन्। उनको नेपालसँग यति धेरै प्रेम थियो कि उनले नेपाल छोडेर गएपछि आफ्ना सबै बुद्ध धर्मसम्बन्धी अध्ययन र अनुसन्धानका कार्यहरू बन्द गरे। सन् १८९४ सालमा उनको मृत्यु भयो। उनको मुत्युपछि रोयल एसियाटिक सोसाइटी लन्डनबाट प्रकाशित उनको समवेदना सन्देशमा भनेको छ– To him the world still owes the materials for a knowledge of the great proselytising faith which was the one civilizing influence in central Asia.

उनको बारेमा मैले धेरै अघि २०३३ साल जेष्ठ २०/२१ गतेको नयाँ समाज दैनिक पत्रिकामा "हड्सन र नेपालिज स्टडिज" शीर्षक दिएर लेखहरू छापेको थिएँ। उनको जीवनीकार W. W. Hunter ले सन् १८९६ मा नै उनको जीवनी लेखी नेपालको इतिहासका साथसाथै अन्य धेरै विषयमा हामीलाई जानकारी गराएका छन्। हडसनले नेपालबाट लिएर गएका इतिहास, धर्म, कला, वनस्पति र खनिज आदि विषयहरू बोध गराउने सामग्रीहरू आज युरोप र लन्डनका धेरै सङ्ग्रहालयहरू खासगरी बृटिस लाइब्रेरी, बृटिस म्युजियम, रोयल एसियाटिक सोसाइटी लाइब्रेरी, अस्मोलियन म्युजियम र क्याम्ब्रिज विश्वविद्यालय आदिमा छन्।

नेपालको विषयमा खास गरी सैनिक इतिहासको विषयमा अमूल्य योगदानचाहिँ सन् १८०२ देखि १८०३ सम्म नेपालमा बसेका Francis Buchnan Hamilton ले "An Account of the Kingdom of Nepal : And of the Territories Annexed to this Dominion by the House of Gorkha" हो । त्यस्तै सिल्भाँ लेबीको "Le Nepal : Etude Historique d'un Royamme Hindu" अति नै महत्त्वपूर्ण इतिहासका शोधर्पण ग्रन्थहरू हुन् । लेवी सन् १९९८ मा नेपाल आएका थिए । नेपालको इतिहास लेख्ने सिलसिलामा बृटिस सेनाका जनरल Sir Francis Tuker को "Gorkha : The Story of the Gorkhas of Nepal", London 1957, लाई पनि एउटा महत्त्वपूर्ण ग्रन्थ मानिन्छ । अन्य उल्लेखनीय ग्रन्थहरूमा Orfeur Cavenagh को Rough Notes on the state of Nepal : Its Government, Army and Resources (Calcutta, 1874), Daniel Wright ले सम्पादन गरेको मुन्सी शिवशंकर सिंह र पण्डित श्री गुणानन्दनले अनुवाद गरेको "नेपालको इतिहास" (क्याम्ब्रिज, १८७७) र Major w. Brook Northy को "The Land of the Gurkhas or the Himalyan Kingdom of Nepal (Cambridge, nd), Sirdar Ikbal Ali Shah को "Nepal : Home of Gods (London), 1938), Giuseppe Tucci को Nepal : The Diascovry of the Mallas (London, 1962) आदि हुन् ।

१०४ वर्षको राणा तानाशाहीबाट मुक्त भएको नेपाल र नेपालीहरूले पनि आफ्नो ढङ्गबाट इतिहास लेख्ने कामहरू भए । यसमा डा. डिल्लीरमण रेग्मीको नाम सर्वोपरि आउँदछ । उहाँका कृतहिरूमा सन् १९५० मा प्रकाशित "A Century of Family Autocracy in Nepal" "Whither Nepal", Kathmandu 1952 "Ancent Nepal" Part 1 & 2 "Medieval Nepal", Part 1 &2 र "Modern Nepal", Volume 1 & 2 । त्यसपछि संशोधन मण्डलको मुखपत्र "पूर्णिमा" र पुरातत्त्व विभागको मुखपत्र "प्राचीन नेपाल"का प्रयासहरू पनि सराहनीय छन् ।

त्रिभुवन विश्वविद्यालयको स्थापना भएपछि र देशभर कलेजहरू खुल्न थालेपछि नेपालीहरूमा पनि इतिहास विषय लिई विद्यावारिधि

गर्ने होड चल्न थाल्यो । सन् ७० को दशकसम्म नेपालीहरूले भारतका विभिन्न विश्वविद्यालयहरूबाट जस्तै अलाहावाद, बनारस, पटना, कलकत्ता, दिल्ली विश्वविद्यालय र दिल्लीकै जवाहरलाल नेहरू विश्वविद्यालयबाट केही व्यक्तिहरूले शाह र राणाकालिक इतिहासमा शोधकार्यहरू गरी विद्यावारिधिको उपाधि हासिल गर्न सफल भए। ती शोधग्रन्थहरूमध्ये प्राय: सबैजसो प्रकाशित भैसकेका छन् । सन् ८० को दशकदेखि त्रिभुवन विश्वविद्यालयले पनि विद्यावारिधिको कार्यक्रम सञ्चालन गर्न थालेपछि हालसम्म त्यस विश्वविद्यालयबाट इतिहास विषयमा करिब ३८/४० जवान व्यक्तिहरूले विद्यावारिधिको उपाधि हासिल गरेका छन् ।

तर गाँठी कुरा के हो भने, सामग्रीहरूको अभाव खासगरी उत्खननहरूको कमीले गर्दा पूर्व लिच्छविकाल, लिच्छविकाल, मध्यकाल र मल्लकालको इतिहासका धेरै पक्षहरू अझै हामीलाई थाहा छैन । उपत्यकाभित्रका केही लिच्छवि थलोहरूमा उत्खननहरू नभएका होइनन् । तर हाँडीगाउँको सत्यनारायण मन्दिरको नजिकै भएको उत्खननबाहेक अन्य उत्खननहरू निकै साना वा परिमाणका थिए । पुरातत्त्व विभाग र विश्वविद्यालयहरू काठमाडौँ उपत्यका र अन्य ठाउँहरूमा पूर्व लिच्छविकालिक, लिच्छविकालिक, अन्तरिमकाल (मध्यकालिक) र मल्लकालिक सभ्यताका धेरै कुराहरू पत्ता लगाउन उत्खननको सिलसिला जारी राख्नुपर्ने देखिन्छ । उपत्यकाभित्र यसरी उत्खनन गरेर हेर्नुपर्ने ठाउँहरू धेरै छन् जस्तै बूढानीलकण्ठ, ठिमी, टोखा, बनेपा, पनौती आदि ।

देशको राजनीतिले काँचुली फेरिसकेको छ । देश अहिले लोकतान्त्रिक गणतन्त्र अथवा प्रजातन्त्रको गन्तव्यतर्फ जाँदै छ। अब देशवासीहरूले राजा, रजौटाहरूको व्यक्तिगत विवरणमात्र होइन राष्ट्रको सच्चा इतिहास दुनियाँ, जनता, किसान, मजदुर, व्यापारी र सबै वर्गको इतिहास थाहा पाउनुपरेको छ । नेपालमा किसान आन्दोलन, मजदुर आन्दोलन र स्वतन्त्रताको सङ्ग्रामबारे थाहा पाउनुपरेको छ । वास्तवमा भन्ने हो भने देशमा नयाँ राजनैतिक व्यवस्था, संविधान र कानुनमात्र भएर पुग्दैन जनताले आफ्नो देश र देशवासीहरूको विषयमा पनि थाहा पाउनुपर्दछ । राणा प्रधानमन्त्री

जङ्गबहादुरको निरङ्कुशताको विरोधमा उत्रेका व्यक्तिहरू, लखन थापाहरू र अन्य शहीद तथा वीर, वीरङ्गनाहरूको इतिहास थाहा पाउनुपरेको छ । छिमेकी राष्ट्र भारतले पनि सन् १९४७ मा देश स्वतन्त्र भइसकेपछि राष्ट्रको इतिहासलाई नयाँ दिशा र गति प्रदान गर्न भारतको इतिहासको पुनर्लेखनको कार्यक्रमको सुरु गरेको थियो। "Re-writing The History of Freedom Movement of India" भनेर बेग्लै परियोजना खडा गरी वरिष्ठ इतिहासकारहरू जस्तै डा. ताराप्रसाद, डा. आर. सी. मजुमदार आदिलाई शोधकार्यहरू गराई नयाँ भारतको नयाँ दृष्टिकोणसहितको तथ्यसत्य इतिहास तयार पार्न लगाएका थिए । इतिहासको विषयलाई लिएर स्वतन्त्र भारतमा धेरै पटक राजनीतिज्ञ र इतिहासकारहरूबीच मतभेदहरू हुने गर्दछन्। यस किसिमका मतभेदहरू आजभोलि पनि भैरहेका सुनिन्छन् । भारतको राष्ट्रिय काङ्ग्रेस र भारतीय जनता पार्टीबीच भैरहने यस्ता मतभेदहरू टुङ्ग्याउन त्यति सजिलो पनि छैन । काङ्ग्रेसले हिन्दू अतिवादलाई सहँदैन भने भारतीय जनता पार्टी काङ्ग्रेसको मुसलमान पक्षधरको नीति मन पराउँदैन। यसकिसिमको धार्मिक भेदभाव र वैमनश्यताको वातावरण हाम्रो देशमा नभए तापनि सबै वर्ग, धर्म, जनजाति र सम्प्रदायका मानिसहरूको राष्ट्रप्रतिको योगदानलाई कदर गरी देशको सत्यतथ्य इतिहास तयार पार्न नयाँ नेपालको सरकारले "Re-writing The History of Nepal वा अन्य कुनै नाम दिएर बेग्लै एउटा अनुसन्धान परियोजना अविलम्ब अगाडि बढाउन उचित होला भन्ने मलाई लाग्छ, मात्र यो मेरो सानो सुझाव हो ।

# 'नेपाली'लाई शुभेच्छा

– *सुन्दरप्रसाद शाह 'दु:खी'*

मदन पुरस्कार गुठीद्वारा प्रकाशित, कमल दीक्षितको सम्पादनमा त्रैमासिक *नेपाली*का अङ्कहरू पढ्न म अत्यन्तै आहारिसे छु । सानो आकारको तर केही नयाँ केही पुरानो कुरा कथा छापिने हुँदा मलाई खोजीखोजी पढ्ने मन लाग्छ । तर *नेपाली*को प्राप्तिस्थान आफूलाई पायक नपर्ने हुँदा टाढो पुग्नुपर्ने हैरानीचाहिँ छ । सर्वसुलभ ठाउँमा पाउन सकिने नहुँदा यसका सबै अङ्कहरू चाहेर पनि क्रमबद्ध रूपले पढ्न भने पाएको छैन– यो सत्य हो । प्राप्तिस्थानमा पुगेको बखत त्यहाँ पुराना अङ्कजति प्राप्त छन् किन्ने गर्दछु ।

ख्यातिप्राप्त मदन पुरस्कार गुठीद्वारा प्रकाशित पत्रिका भए तापनि यो *नेपाली* किन दुब्लो भयो भन्ने मनमा गुनासो भने छ । पुरस्कार विवरण भएका महिना समेटिएको अङ्कबाहेक अरू महिनाको अङ्क मसिना हुन्छन् । *नेपाली*मा नै गुठीको आय-व्यय, वासलात पनि पढ्ने गर्दछु– *नेपाली* मोटो हृष्टपुष्ट भएर प्रकाशित होस् र सामाग्रीहरू अझ गहकिलो होस् मेरो मनको इच्छा छ ।

अटुटरूपले ५० वर्ष प्रवेश गरिरहेको *नेपाली*को २०० अङ्कको वयमा आफ्नो शुभेच्छाको दुई शब्द प्रकट गर्न पाउनुमा मलाई अत्यन्त हर्ष लाग्नु स्वभाविक हो। यसका सम्पादक एवं प्रकाशकलाई मुरीमुरी धन्यवाद अर्पण गर्न चाहन्छु । कम मेहनत कम लगनशील बिना *नेपाली* त्यहाँदेखि यहाँसम्म पुग्न सफल भएको छैन। पाठकलाई पढ्न पायो त्यसमा यसो-उसो भनी टीका-टीप्पणी गर्न पायो पुग्यो । गाह्रो-साँगुरो भोग्न पर्नेलाई पो सबै अनुभूति हुन्छ । तर *नेपाली* प्रकाशित गर्ने एवं सम्पादन गर्ने साधकहरूलाई जतिसुकै कष्टसाध्य भए तापनि आफ्ना परिश्रम सफल भएकोमा धेरैधेरै सन्तुष्टि चाहिँ हुन्छ, हुन्छ। *नेपाली*को पनि अब एउटा सानो संसार खडा भइसकेको छ, छुट्टै इतिहास बनिसकेको छ। अनुसन्धानकर्ताहरूलाई विचरण गर्न, पौडी खेल्न एवं शोधखोज गर्न प्रशस्त क्षेत्र मिलिसकेको छ । यात्रा सदियौँसम्म चलोस्, जाँगर अनन्तसम्म कायम रहोस् ।

अविच्छिन्नरूपले *नेपाली*ले निरन्तरता पाओस् मेरो हार्दिक शुभेच्छा छ ।

# मदन–जगदम्बा–श्री पुरस्कार र त्यसको गौरव

*– सुरेन्द्र केसी*

## लेखको सीमा र प्रयोजन

मदन पुरस्कार गुठीबाट त्यसका कार्यालय सचिव गजेन्द्रनाथ रेग्मीले डा. गोविन्द टण्डन हस्ताक्षरित "लेख उपलब्ध गराई सहयोग गरिदिनुहुन" विषयको एउटा पत्र प्राप्त भएको छ । पत्रले उल्लेख गरेअनुसार मदन पुरस्कार गुठीले यस वर्ष आफ्नो प्रकाशन नेपाली (त्रैमासिक)को २०० औँ अङ्कलाई 'विशेष अङ्क' को रूपमा प्रकाश गर्ने निधो गरेको छ । जो विशेष सामग्रीसहित बृहदाकारको हुने छ । उदारमना र त्यस 'विशेषाङ्क' का संयोजक रहेका विद्वान् डा. गोविन्द टण्डनले यसमा समावेश गर्ने विविध लेखकहरूको सूचीमा यस लेखकको नाम पनि समावेश गर्नुभएको रहेछ । सोही आग्रहको सम्मानका लागि प्रस्तुत आलेख तयार पारिएको छ ।

नेपाली वाङ्मय र साहित्यको श्रीवृद्धिमा मदन पुरस्कार (२०१२) र जगदम्बा-श्री (२०४५) पुरस्कारको अतुलनीय योगदान रहेको तथ्य सर्वविदितै छ । त्यसैले यी पुरस्कारहरूको समष्टिमाथि प्रकाश पार्दा प्राय: एउटा शोधपत्र नै तयार हुन जान्छ । अत: यस लेखले ती पुरस्कार द्वयको सर्वाङ्गीण पक्ष होइन तिनको स्थापनाको आशय, पुरस्कारको स्वरूप एवं गुठियार र पुरस्कृत व्यक्तिहरू एवं कृतिहरूका बारेमा सङ्क्षिप्त प्रकाश पार्नुमै यस लेखको सीमा रहनेछ ।

## पुरस्कारको स्थापना

चन्द्रशमशेर पुत्र मदनशमशेर जबराको स्मृतिमा निजकी पत्नी जगदम्बाकुमारीदेवीले संवत् २०१२ साल आश्विन १० गते मदन पुरस्कारको स्थापना हुने उद्घोष गरिन् । त्यसपछि सोही वर्षको मार्ग २८ गते मदन पुरस्कार गुठीसम्बन्धी दानपत्रमा हस्ताक्षर गरियो । त्यसैगरी पुस १ गतेका दिन ललितपुर पोता रजिस्ट्रेसन अड्डामार्फत् सो दानपत्रको रजिस्ट्रेसन पनि पास भयो । यसरी विधिवत् मदन पुरस्कार गुठीको स्थापना भई "म खाऊँ मै लाऊँ सुख सयल वा मोज म गरूँ..."को सांस्कृति चलेको नेपालमा एउटा नूतन परम्पराको

थालनी भयो । अन्ततः २०१३ सालबाट मदन पुरस्कार समर्पण गर्ने कार्य पनि शुभारम्भ भयो । यस पुरस्कारका प्रथम विजेता थिए– श्री सत्यमोहन जोशी । 'हाम्रो लोकसंस्कृति' पुस्तकका लागि उनलाई यो गौरवशाली पुरस्कार प्रदान गरिएको थियो । मदन पुरस्कार गुठीको प्रबन्धपत्रमा संस्थाको उद्देश्यमाथि यसरी प्रकाश पारिएको छ–

नेपाली भाषामा उच्चकोटिका ग्रन्थहरूको सिर्जनाद्वारा भाषा भण्डार बढाएर लेखक वर्गलाई प्रोत्साहन दिई नेपाली भाषाको साहित्य, ज्ञान र विज्ञानको विकास तथा उन्नति गर्ने यो संस्थाको मुख्य उद्देश्य हुनेछ । साथै, नेपाली भाषामा अनुकरणीय सेवा गर्ने व्यक्तिको यथोचित सम्मान गर्ने पनि यसको उद्देश्य रहनेछ ।

## पुरस्कार राशि

'मदन पुरस्कार गुठीको ज्ञापनपत्र र नियमावली' (२०६१) नामक पुस्तिकामा यी दुई पुरस्कारको वितरण विधि, गुठियार र संस्थाको मूलधनबारे सालनालसहितको व्याख्या पाइन्छ । जसअनुसार मूलधन कहिल्यै मासिनेछैन रु ४० लाख रहेको छ। उक्त नियमावलीमा उल्लेख भएबमोजिम संस्थाको खर्च सम्पन्न गरिन्छ । र संस्थाले यी सबै कार्यसम्पन्न गर्न एउटा ५ सदस्यीय प्रबन्ध-समिति पनि गठन गरेको छ। जसमा निम्नानुसारका व्यक्तिहरू रहेका छन् :

१. कमलमणि दीक्षित

२. नयनराज पाण्डे

३. श्रीधरशमशेर जबरा

४. कुन्द दीक्षित

५. यज्ञविक्रम राणा

उक्त २०१६ सालको संस्था रजिस्ट्रसन ऐनअनुसार यसलाई रजिस्ट्रेसन गराउँदा भने जगदम्बाकुमारी सहित १४ जना महानुभावहरू यसमा सम्मिलित भएका थिए, जो हालसम्म सामान्य हेरफेरपछि यसप्रकार कायम रहेका छन् :

१. कमलमणि दीक्षित

२. कनक दीक्षित

३. कुन्द दीक्षित– सदस्यसचिव
४. डा. गोविन्द टण्डन – सदस्य
५. डा. चूडामणि बन्धु – ”
६. डा. चेतबहादुर कुँवर – ”
७. प्रा. ठाकुर पराजुली – ”
८. नयराज पन्त – ”
९. डा नोबलकिशोर राई – ”
१०. डा. विष्णुराज आत्रेय – ”
११. माधवलाल कर्माचार्य – ”
१२. यज्ञविक्रम राणा – ”
१३. श्रीधरशमशेर जबरा– कोषाध्यक्ष

उक्त व्यवस्थापनसहितको मदन पुरस्कार र जगदम्बा-श्री पुरस्कारले आफ्नो उद्देश्य प्राप्तिका लागि निम्नानुसार कार्य गर्ने उल्लेख गरेको छ :

१. संस्थाको नियमावलीबमोजिम साहित्य, दर्शन वा विज्ञानतर्फ स्वदेशी वा विदेशी व्यक्तिले नेपाली भाषामा लेखी प्रकाशित भएको सालसालैको सर्वश्रेष्ठ ठहरिएको मौलिक ग्रन्थ लेख्नेलाई रु. २ लाख प्रदान गर्ने,

२. कुनै वर्ष वा लगातार केही वर्षसम्म उपर्युक्त पुरस्कार प्रदान हुन सकेन भने त्यसरी सञ्चित भएको रकमबाट साहित्य, दर्शन वा विज्ञानसम्बन्धी कुनै विधामा अनुसन्धानात्मक कार्य गर्न गराउन यो संस्थाको नियमावलीबमोजिम योग्य व्यक्तिलाई विद्वद्वृत्ति, मदन पुरस्कार विद्वद्वृत्ति भन्ने नामले प्रदान गर्ने,

३. श्रव्यदृश्य वा अरू किसिमका कृतित्वहरूबाट नेपाली वाङ्मयको श्रीवृद्धिमा उल्लेख्य योगदान गर्ने व्यक्ति र शैक्षिक, सामाजिक वा सांस्कृतिक माध्यमबाट नेपाली भाषाको समुन्नति उल्लेख्य योगदान गर्ने व्यक्तिहरूमध्येबाट वर्षैवर्ष छनोट गरी सम्मानयोग्य ठहरिएका व्यक्तिलाई मदन पुरस्कार संस्थापिका स्व. जगदम्बाकुमारीदेवीको स्मृतिमा 'जगदम्बा-श्री' नामले मदन पुरस्कारसरहको अर्को पुरस्कार प्रदान गर्ने ।

यसरी यी हरफहरूले मदन पुरस्कारबापत दिइने राशि रकम र जगदम्बा-श्री पुरस्कारको स्थापनाप्रक्रियाबारे पनि थोरै विवेचना हुनु आवश्यक देखिन्छ ।

२०१२ सालमा 'मदन पुरस्कार'को स्थापना गरिँदा प्रत्येक पुरस्कारको निम्ति रकम भारु २५०० तदनुसार रु ४ हजार निर्धारण गरिएको थियो। त्यसपछि संवत् २०२६ सालमा दुइटा मात्र ग्रन्थलाई पुरस्कार प्रदान गर्ने निर्णय भएपछि पुरस्कारको रकम प्रति पुरस्कार रु. १० हजार हुन गयो। त्यसैगरी २०३३ सालमा पुरस्कार सङ्ख्या एउटामा गरिएपछि पुरस्कार रकम रु. २५ हजार गरियो। २०४२ सालमा यस रकमलाई बढाएर रु. ४० हजार पारियो भने २०४३ सालमा यसमा अर्को १० हजार थपी रु. ५० हजार पारियो।

२०५२ सालमा यस रकमलाई रु. १ लाख गरियो। अनि मदन पुरस्कार गुठीको रजत वर्षको अवसर पारी २०६१ सालदेखि यो पुरस्कार राशि बढाई रु. २ लाख पारियो। यसमा अपवाद के छ भने २०५१ सालका पुरस्कार समर्पण कार्यक्रम २०५२ आश्विन १३ गतेमा आगामी वर्षदेखि पुरस्कार रकम ५० हजारबाट रु. १ लाख गरिने उद्घोष गर्नासाथ प्रबन्ध समितिका अध्यक्ष कमल दीक्षितले तत्काल उठेर सोही वर्ष पुरस्कार प्राप्तकर्ता द्वय– फादर विलियम वर्क (मदन पुरस्कार तर्फ) र इन्द्रबहादुर राई (जगदम्बा-श्रीतर्फ) लाई घाटाबाट बचाउन आफ्नै तर्फबाट जनही ५० हजारको चेक हस्ताक्षर गरेपछि वस्तुतः यो पुरस्कारको रकम २०५१ सालबाट रु. १ लाख हुन थालेको मान्नुपर्छ।

जहाँसम्म पुरस्कार जगदम्बा-श्रीतर्फको प्रश्न छ– यो पुरस्कार तिनै प्रातःस्मरणीय दानशील रानी जगदम्बाकुमारीको चिर स्मरणार्थ वा उनैको पुण्य स्मृतिमा २०४५ सालदेखि अर्पण गर्न थालिएको हो। ज्ञातव्य छ यिनको २०४५ श्रावण २९ गतेका दिन दुःखद निधन भएको थियो। गुठीले जगदम्बाको पुण्य स्मृतिमा २०४५ आश्विन १० गते 'मदन पुरस्कार' को सरह नै रहने गरी उनैको नाममा यो जगदम्बा-श्री पुरस्कार स्थापना गरेको थियो। जगदम्बाको जीवनकालभरि यी पुरस्कारहरूको श्रीवृद्धि एवं भरणपोषण स्वयम् जगदम्बाले गर्ने गरेकोमा अब यो कार्य स्वयं गुठीका अध्यक्ष

कमलमणि दीक्षितको हुन आएकोमा पहिलोपल्ट यिनले २०५२ देखि पुरस्कार राशिमा ५० हजारको बढोत्तरीका लागि रु १० लाखको अक्षय कोष खडा गरिदिए भने सोही वर्षका (२०५१) पुरस्कारबाट उल्लिखित २ जनाले वञ्चित हुनु नपरोस् भनी जनही ५० हजारको चेक हस्तान्तरण गरिएको बारे त अघि नै उल्लेख गरियो ।

## पुरस्कार विधि र विधा

सर्वप्रथम त्यस वर्षभित्र प्रकाशित भई मूल्याङ्कनको निम्ति मदन पुरस्कार गुठीमा प्राप्त ग्रन्थहरूमध्ये उत्कृष्ट ग्रन्थलाई नै यी २ पुरस्कारहरू दिइन्छ । स्वभावतः त्यस्ता 'उत्कृष्ट ग्रन्थ'हरू मूल्याङ्कन हेतु सम्बन्धित विषयका ज्ञाता एवं विशेषज्ञहरूकहाँ पठाइन्छ । तथापि यी पुरस्कारहरूको खटनपटनमा स्थापनाकालदेखि हालसम्म पटकपटक मनोनीत र थपघट भएका गुठियारहरूकै निर्णायक हात रह्यो । जो सुरुमा (२०१२ मङ्सिर २८) जगदम्बाकुमारी, केदारमणि आ.दी. भोगेन्द्रराज पण्डित र कमलमणि दीक्षित समेत ४ जना संस्थापक गुठियार रहे भने २०१३ पुष १ का दिन त्यसमा ब्रह्मशमशेर जबरा थपिए । त्यसैगरी स्थापनाकालमा यस मदन पुरस्कार गुठीमा निम्नानुसार ९ जना सल्लाहकार रहेका थिए ।

१. खडगमान मल्ल
२. नरेन्द्रमणि आदी
३. फणिन्द्रप्रसाद लोहनी
४ यदुनाथ खनाल
५ रामकृष्ण शर्मा
६ रुद्रराज पाण्डेय
७. शम्भुप्रसाद ज्ञवाली
८ सूर्यविक्रम ज्ञवाली
९. सोमनाथ सिग्द्याल

त्यसपछि २०१६ सालका रजिस्ट्रेसन पास हुँदा निम्नानुसारका १४ महानुभाव रहे–

१. रानी जगदम्बाकुमारीदेवी– अध्यक्ष
२. कमलमणि आदी– सदस्य-सचिव एवं गुठीका प्रबन्ध समिति सदस्य
३. केदारमणि आदी– सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य
४. खड्गमान मल्ल– सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य

५. प्रो. गोकुलचद्र– सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य
६. राजगुरु नयराज पाण्डे – सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य
७. सरदार नरेन्द्रमणि आदी– सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य
८. प्रि. पद्मप्रसाद भट्टराई– सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य
९. फणिन्द्रप्रसाद लोहनी– सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य
१०. बालकृष्ण सम– सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य
११. मे.ज. ब्रह्मशमशेर जबरा– सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य
१२. रामकृष्ण शर्मा– सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य
१३. शम्भुप्रसाद ज्ञवाली– सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य
१४. सूर्यविक्रम ज्ञवाली– सदस्य एवं गुठीका प्रबन्ध समिति सदस्य

त्यसैरी २०१३ देखि २०६१ सम्म यस गुठीमा जम्मा ४३ जनाको थपघट हेरफेर आदि भएको छ।[1] यही प्रक्रिया जगदम्बा–श्री छनोटको हकमा पनि लागू छ । २०४५ देखि २०६१ सम्मको पुरस्कार छनोट प्रक्रियामा सामेल त्यस्ता १०६ जनाको नाम गुठीले प्रकाशित पनि गरेको छ ।[2] जसमा अधिकांश मानिसहरू दोहोऱ्याई तेहऱ्याई र चौऱ्याई मात्र होइन, त्योभन्दा बढी १० पटकसम्म पनि पर्न गएको देखिन्छ ।

जहाँसम्म विधाको प्रश्न छ, आरम्भ वर्षताका यसमा गद्य, पद्य, सामाजिक शास्त्र र विज्ञान गरी ४ विधालाई पुरस्कृत गर्ने तय भएको देखिन्छ । त्यसबेलादेखि संवत् २०२५ सालसम्म यही नियम कायम रह्यो । त्यसपछि २०२६ सालदेखि यो पुरस्कार साहित्य र

---

१. *यसको सम्पूर्ण सूचीका लागि हेर्नू– **चित्तरञ्जन नेपाली** (संपा.), मदन पुरस्कार प्रवचनहरू, २०६२, पृ. ५७९ ।*

२. *ऐ., पृ. ५८०-५८१ ।*

दर्शन/विज्ञान गरी दुइटा मात्र उत्कृष्ट कृतिलाई प्रदान गरिने निर्णय गरियो । तर २०३३ सालदेखि चाहिँ एउटा मात्र ग्रन्थले पुरस्कार पाउने निर्णय गरिँदा सो वर्ष कुनै पनि ग्रन्थलाई पुरस्कार नदिए पनि २०३४ सालदेखि भने निरन्तररूपमा एउटा ग्रन्थ पुरस्कृत हुँदै आएको छ । तर २०४५ साल श्रावण २८ गते मदन पुरस्कार गुठीका संस्थापिका जगदम्बाकुमारीदेवीको निधनपश्चात उनको सम्झनामा २०४५ आश्विन १० गते स्थापित 'जगदम्बा-श्री' पुरस्कार पनि मदन पुरस्कारसरह वार्षिक एक जना उत्कृष्ट योगदान गरेको व्यक्तिलाई मात्र दिइने तय भएअनुसार हालसम्म २० व्यक्तित्वहरू यस पुरस्कारबाट पुरस्कृत भइसकेका छन् ।

## पुरस्कृत कृति र व्यक्तित्वहरू

मदन पुरस्कार गुठीले हालसम्म मदन पुरस्कार तर्फ ६३ र जगदम्बा-श्री तर्फ २० जनालाई पुरस्कृत तथा सम्मानित गरिसकेको छ ।[३] यी व्यक्ति र व्यक्तित्वका बारेमा कतिपय अवस्थामा कटु आलोचना र असहमति व्यक्त गरिने गरेको पाइए तापनि मूलतः यी व्यक्ति प्रतिभा र पुरस्कृत कृतिले नेपाली साहित्य, वाङ्मय र इतिहास संस्कृतिलाई निकै माथि उठाएको अनुभूति गरिँदा प्रकारान्तरले यी पुरस्कारहरूले नेपाली समाजमा ठूलो यश-प्रतिष्ठा आर्जन गरेका छन् । जसलाई २०२३ सालको 'मदन पुरस्कार' गद्यतर्फ 'स्रस्टा र साहित्य' कृतिका लागि पुरस्कृत व्यक्ति उत्तम कुँवरले "मदन पुरस्कार जस्तो आकाङ्क्षित पुरस्कार" भन्ने सङ्ज्ञा दिएको पाइन्छ भने २०३० सालको दर्शन/विज्ञानतर्फ 'लिच्छवि कालका अभिलेख'का लागि मदन पुरस्कारद्वारा पुरस्कृत व्यक्तित्व धनवज्र वज्राचार्यले यस पुरस्कारबारे अरु विस्तार ढङ्गले यी शब्दमा प्रशंसा गरेका छन्–

"...एकपटक मदन पुस्कारको वितरण समारोहमा संशोधन मण्डलको प्रतिनिधिको रूपमा मैले भाग लिने अवसर पाएथेँ । संयोगवश त्यो साल मेरा प्रिय लेखक मध्येका एक शंकर लामिछानेले

---

३. *त्यसरी पुरस्कृत दुवै तर्फका सम्मानित व्यक्तित्वहरूको नामावलीका लागि हेर्नू– चेतबहादुर कुँवर (संपा.), **जगदम्बा-श्री तथा मदन पुरस्कारद्वारा सम्मानित व्यक्तित्वहरू,** २०६२, विषय सूची ।*

पुरस्कार पाउनुभएथ्यो । सो समारोहमा लेखकको जसरी स्वागत सत्कार गरिँदो रहेछ, त्यो देख्दा म हर्षले पुलकित भएथेँ । मेरो दृष्टिमा पुरस्कारको मोटो रकम त्यति उल्लेखनीय लागेन, जति लेखकको सम्मान गर्ने उत्साहवर्द्धक वातावरणको अनुभव गरेँ । त्यसदिन कताकता मैले आफूले पनि सो मदन पुरस्कार पाउने अवसर पाए कति खुसीको कुरा हुने थियो भन्ने मनसुबा मनमा जाग्थ्यो ।"

यो २०२४ सालको प्रसङ्ग थियो। तर वज्राचार्यको यो मनसुवा पूर्ण हुन उनले एक दशक पर्खनुपरेन। गुठीले वर्ष २०३० को 'मदन पुरस्कार' उनैलाई दिने निर्णय गऱ्यो । यसरी धनवज्रजस्ता विशिष्ट विद्वान् पनि यस पुरस्कारबाट सम्मानित भए। सारमा यस पुरस्कारको हाम्रो देशमा ज्यादै ठूलो गरिमा छ । त्यसैले यसलाई "नेपालको नोबेल पुरस्कार" भन्ने उपनाम पनि प्राप्त छ । स्वभावत: यत्रो गरिमा प्राप्त पुरस्कारद्वारा सम्मानित व्यक्ति र तिनका कृतिको पनि त्यतिकै उल्लेख्य गरिमा रहन्छ। साँच्चि नै मदन पुरस्कारतर्फ ६३ र जगदम्बा-श्रीतर्फ २० गरी यी र ती व्यक्तित्व वा कृतिको नेपाली समाजमा उल्लेख्य गौरव नै छ । यीमध्ये पनि सत्यमोहन जोशी (२०१३), गोपालप्रसाद रिमाल (२०१९), बालकृष्ण पोखरेल (२०२१), मोदनाथ प्रश्रित (२०२३), शंकर लामिछाने (२०२४), ग्रीष्मबहादुर देवकोटा (२०२४), पारसमणि प्रधान (२०२५), ताना शर्मा (२०२६), महानन्द सापकोटा (२०२७), चूडामणि बन्धु (२०२८), धनवज्र वज्राचार्य (२०३०), मदनमणि दीक्षित (२०३९), नयराज पन्त (२०४३) आदिको साधना, योगदान र तिनका कृतिले त नेपाली संस्कृति, वाङ्मय, व्याकरण, साहित्य र इतिहासलाई सही अर्थमा राष्ट्रिय अन्तर्राष्ट्रिय क्षेत्रमै स्थापित गराउन सकेको छ। त्यसैले यिनका कृति र यिनको व्यक्तित्व नेपाल र नेपालीको लागि गौरवकै विषय बन्न पुगेका छन् ।

त्यसैगरी जगदम्बा-श्री तर्फका २० मध्ये पनि नारायण गोपाल गुरुवाचार्य (२०४५), मह जोडी (२०४६), तारादेवी (२०५०), अम्बर गुरुङ (२०५४), धर्मराज थापा (२०५७), अलिमियाँ (२०६०) र सङ्घसंस्थातर्फ नेपाली शिक्षा परिषद् (२०५६) र नेपाली साहित्य सम्मेलन दार्जिलिङजस्ता देशी विदेशी निकायहरूले साँच्चि नै नेपाली

भाषासाहित्य र वाङ्मयको श्रीवृद्धिमा उल्लेख्य योगदान गरे। जसले गर्दा नेपाली भाषा, साहित्य र इतिहासलाई श्रीवृद्धिमात्र होइन, प्राञ्जल एवं प्रामाणिक तुल्याउनमा समेत यिनको सार्थक योगदान रह्‍यो। त्यसैले धन्य छ यी पुरस्कारका संस्थापिका जगदम्बादेवी र यसका प्रेरक दीक्षित परिवार। जसको कारणले यस राष्ट्रले सामान्य नागरिकमा रहेको यो असामान्य एवं अजस्र प्रेरणाले एउटा स्रोतका रूपमा कार्य गर्न सम्भव भयो। यति एउटा उदाहरणले पनि सामान्य स्रोतभित्र पनि कत्रो शक्ति अर्न्तनिहित हुँदो रहेछ भन्ने एउटा भित्री रहस्य खुलेको छ र त्यसले मुलुकलाई भाषिक, सांस्कृतिक एवं ऐतिहासिक दृष्टिले थोरै भए पनि निजी क्षेत्रबाट सार्थक बल पुग्ने दृष्टान्त स्थापित हुनसकेको छ।

## उपसंहार

नेपाली समाज विषयगत राम्रो-नराम्रोभन्दा पनि एकपक्षीय गुणदोषवादी अगुणग्राही समाज हो। त्यसैले यहाँ गुण परम्परा होइन भने दोष परम्पराको मात्र बखानबाजी र टीका-टिप्पणी गरिने प्रवृत्तिले उल्लेख्य स्थान पाएको छ। त्यसैले हाम्रो समाज मान्छेमा या त राम्रो मात्र देख्छ, होइन भने नराम्रो मात्र ! अन्ततः समाजले राम्रो मान्छे होइन, हाम्रो मान्छेले बोक्ने, ढाक्ने र अघि बढाउने दुष्प्रवृत्तिलाई नै आफ्नो आदर्श बनाउँदै गरेको अवस्था छ। पुरस्कारको हकमा पनि यही दोषयुक्त दृष्टि र व्यवहार छ। त्यसैले कुनै पनि व्यक्ति दण्डित वा पुरस्कृत भयो भने हाम्रो समाजले त्यसका प्रति सामान्य तथा नकारात्मक प्रतिक्रिया नै व्यक्त गर्छ। कस्तो कृति होला र पुरस्कृत भयो होला होइन, कहाँ के भनसुन र टिकडम मिलायो होला अनि पुरस्कृत भयो। अथवा कसको नातागोता र वैचारिक समधर्मिता पो हो कि? हुँदाहुँदा च्याउसरी खुलेका हिजोआजका अनगिन्ती पुरस्कारले त मोलतोल र कमिसनमा सम्म पुरस्कार लिने-दिने गरिन्छ भन्ने आम विश्वास स्थापित हुँदै गएको अवस्था छ। त्यसप्रकार कमिसनका मोलतोल गरी यसप्रकारका पुरस्कार, नियुक्ति र अन्य अवसर लिनेदिने गरिन्छ भन्नेका दुष्प्रचारले हाम्रो बजार ढाकेका छन्। स्वभावतः मदन पुरस्कार पनि यस अपवादबाट बचेको छैन।

तर आमरूपबाट हेर्दा मदन पुरस्कार र जगदम्बा-श्री पुरस्कार तुलनात्मक कम विवादित पुरस्कार हुन्। पुरस्कृत व्यक्तित्व र तिनका कृतिले पनि यस भनाइसँग अत्यधिक तादात्म्यता राख्छन् । साँच्चि भनौँ भने एउटा अवधिसम्म त यी पुरस्कारविरुद्ध औँला ठड्याइएको दृष्टान्तसम्म पाइएनन्। पञ्चायतको उत्कृष्ट दिनमा राजेश्वर देवकोटा (२०४४) र त्यसैको अवशानपछि लोकेन्द्रबहादुर चन्दजस्ता खुँखार पञ्च (२०५४) हरूले समेत मदन पुरस्कारद्वारा पुरस्कृत हुँदासम्म मान्छेले त्यति औँला ठड्याएनन्। निश्चय नै यो गुठीको विश्वसनीयताको प्रमाण हो । यसको तात्पर्य यो पुरस्कार विवादभन्दा माथि छ, यसतर्फ मान्छेले विवाद राख्ने ठाउँ नै छैन भन्ने होइन । निकट विगतमा नारायण वाग्ले (२०६१) र दयाराम श्रेष्ठ (२०५३) हरूको सम्मान विषयमा निकै प्रश्न र विवादहरू उठे। तथापि यी विवादहरू स्रष्टाका कृतिभन्दा पनि पुरस्कार घोषणा प्रक्रियासम्बन्धी प्राविधिक विषयमा केन्द्रित थिए। त्यसैले यी लोकापदहरूबाट बच्दै आफ्नो सिङ्गो विगत नियालेर इतिहासबाट सिक्दै अगाडि बढेको खण्डमा यी दुई पुरस्कारका गौरव र गरिमालाई नेपाली समाजले प्रतिष्ठाका साथ लिने र प्रकारान्तरमा त्यसले नेपाली साहित्य, वाङ्मय र ज्ञानविज्ञानको क्षितिजलाई समृद्ध र विस्तारित पार्दै लाने विश्वास लिन सकिन्छ ।

✍

# पोखरा र पोखरेली गाउँघरका लोकपद्य

- *डा. हंसपुरे सुवेदी*

*यसको लेख्न पर्दैन काव्य वा चित्र वास्तव*
*पोखरा छ स्वयं काव्य, स्वयं अद्भुत चित्र छ ।*
*सम्पूर्ण दिव्य शोभाले पूर्ण छैनन् कहीँ धरा,*
*तर सम्पूर्ण शोभाले परिपूर्ण छ पोखरा*

(प्राकृत पोखरा)

हो, भावुक कविदृष्टिले हेर्दा यो अभिव्यक्ति केही हदमा साँच्चै पनि हुनसक्छ । वास्तवमा पोखरा नेपाल अधिराज्यकै सर्वाधिक रमणीय भूमि हो । प्रकृतिपूर्ण स्थल हो । यसको महिमा धेरै कवि-कलाकारहरूले गाएका छन् र तारिफसमेत गरेका छन् । पोखरा भेकको बयानमा प्रथमतः कविशिरोमणि लेखनाथका 'जन्मभूमिको स्मृति' 'मातृभूमिको स्मृति' आदि शीर्षकमा प्रशस्त पद्यहरू प्रकाशित छन्। जसमा मनोरम शैली र आकर्षक पदावलीमार्फत कविशिरोमणिज्यूको पोखरेली गाउँ अर्घौं-अर्चलेको, पोखरानगरको प्रकृतिमहिमा गाइएको पाइन्छ। त्यस्तै कतिपय कविहरूले पनि पोखराको प्रकृतिलाई आत्मसात् गरी यहाँको सौन्दर्यमा घुलमेल हुँदै- रमाउँदै फुटकर गीत-कविताहरू र 'प्राकृत पोखरा' (०२१) जस्तो सिङ्गै काव्यसमेत रचेको कुरा स्मरणीय छ ।

आज पोखरा नगर विस्तृत छ, झिलिमिली बनेको छ र भनिन्छ-'पोखरा उपमहानगरपालिका' । आजभन्दा पचास-साठीवर्ष अघि पोखराबजार सामान्य थियो, ज्यादै साँगुरो र सानो थियो । जनघनत्व खास थिएन। बजारिया घरहरू नै फाट्टफुट्ट थिए, साधारण थिए। अनि यहाँको गण्डकी तटवर्ती जमिन सेतीगङ्गाको जलप्रवाहले उहिले जमानैमा छोडेको ढुङ्गा-बलौटेखालको उर्वरभूमि थियो– केवल काँसघारी, सिरुघट्टारी र फाटफुट यताउता बाँसका गाँजले ओगटेको । यहाँ यस्ता अनुर्वर जमिनका खोरहरू यताउता प्रशस्त मिल्किएका जस्तै पाइन्थे । अनि बजार आसपासका गाउँ-बैदाम-मासवार, फूलबारी, काहुँ, कुडहर आदि काठमाडौं छेउछाउका काँठजस्तै अविकसित । निर्धा-दुब्ला र टीठलाग्दा साँगुरो सोचाइका असभ्यजस्ता

बस्ती बुझिन्थे । बिचारा, यिनीहरूलाई सदा पेटपूजाको नै धौधौ थियो । हम्मे-हम्मे पर्दथ्यो । अनि यिनको स्थिति प्राय: जीवनरक्षाको उपहारले नै तताएको पाइन्थ्यो ।

'वैदाम' पोखरा बजार निकटको प्रसिद्ध गाउँ हो । 'बैदाम' गाउँले गर्दा नै यहाँको सुप्रसिद्ध ताल 'फेवा' 'वैदामताल'को नामकरणमा समेत मुछिन पुगेको अनुभुत हुन्छ । यहाँको परम्परामा वैदामतालले वैदाम गाउँ बन्न पुगेको हो कि वैदाम गाउँले तालको समेत नामकरण हुनपुगेको हो, सो विचारणीय छ । जे होस्, वैदामतालको तिरमा रहेको यो गाउँ आज पर्यटकीय नगरी बन्न पुगेको साँचो हो । तर उहिले यो सामान्य गाउँ थियो, नगन्य बस्तीको रूपमा रहेको पाइन्थ्यो । पोखरा-वैदामलगायत गनितोमा आउने धनीमानी यहाँका ठूलाठालुहरूको मुख्य अन्न उब्जाउथलो बिरुवाखेत (फाँट) थियो । अनि यसको मुख्य कुलो थियो, वैदामतालको नहर । बर्सातको ठूलो भेलले गर्दा वा नहरको डिल भत्किँदा कैले कता नहर खोलिए, पानीको सतह भत्के-बिग्रे सारा खेत नै बाँझो रहने अवस्था आइलाग्थ्यो, धान-उब्जाउ नै रोकिन्थ्यो । वि. सं. २०१०/१२ सालतिर यस्तै समस्या आइलागी यस खेतका सारा मोही (खेतधनी) अलपत्र परेको चर्चा व्यापक थियो । यतिखेर यस भेकका लोककविमार्फत लोकगीत तथा लोककविता नै बनाएको सुनिन्थ्यो । यस भेकमा प्रचलित यतिखेरको प्रसिद्ध लोकगीत टुक्रा :

*"खोलियो वैदामे ताल,*
*बाँझो रह्यो चौरासी बिरुवा"* इत्यादि ।

पोखरा-वैदामबस्तीमा विशेष गरी बाहुनजाति, त्यसमा पनि पाहारी, बराल, भट्टराई आदि थरका रैथाने बुझिन्छन् । विशेषत: यिनै र यस्ताहरूको खेत नै वैदाम तालका नहरको पटनीमा पर्ने र दस-बाह्रसालतिर त्यस्तै समस्या आइलागेको बुझिन्थ्यो । तात्कालिक परिवेशमा अहिलेको जस्तो खाद्यान्न किन्नु साधारण सम्झिने अवस्था थिएन, अनि सहज र सुलभ बजारव्यवस्था पनि थिएन । घरानियाँ सम्झिने वैदामे ठूलाठालुको तात्कालिक गाउँले स्थिति अहंमानी बुझिन्थ्यो । अनि आफ्नै ढङ्गको रवाफ र ठाँटबाँटको देखिन्थ्यो । अत: उनीहरू अन्न किन्न थैलो लिई आफ्नो मानिस हिँडाउनु लाजमर्दो

व्यवहार सम्झन्थे । बरु उनीहरू भित्रभित्रै जनानाहरूमार्फत यहाँ उब्जेको साग सब्जी, घिरौँला-मूला आदि तरकारी बेच्थे र आटोपीठो खाई जीवन धान्ने काम गर्थे। अनि गफगाफ र लवाइले गर्ला बाहिर ठूलाठालु गनिन चुक्तैनथे। अत: आफन्त इष्टमित्र र पर-पाहुनाहरूप्रति उनीहरू उदास, पारिवारिक खानपान र व्यवहारमा कृपणता, इष्टमित्र र अन्य आदान-प्रदान वरव्याहारमा निकुत्याइँ इत्यादि उनका बाध्यता नै थियो । उनीहरूको यो मर्म छिमेकी गाउँघरका सचेतवर्गले, इष्टमित्रहरूले कति बुझेका हुन्थे, त्यो अर्को यथार्थता हो ।

वि. सं. १९८४/८५ तिरको कुरा : पोखरा वैदामकी कन्या चन्द्रकला (१९७३-२०४६) विवाहिता बनी हंसपुर भित्रिइन् । हंसपुर डाँडाकाँडाको गाउँले बस्ती हो। यहाँको सर्वोच्चशिखर हो, समुद्रसतहदेखि १४२० मि. उचाइको स्याकलुङ्कोट । जो पर्यटकहरूका लागि आज आकर्षणकेन्द्र बुझिन्छ। बेलायतका युवराज चाल्सको समेत पश्चिमाञ्चल भ्रमण क्रममा यहाँ सवारी भएकाले यस कोटमा विदेशी पर्यटक अझ बढी आकर्षित हुँदै छन्। यसबाहेक अर्को उचाइ थलो हो- भूमेथानको चुचुरो । यस शिखरमा भूमि (भूमे) देवताको मन्दिर छ । गाउँमा सहकाल होस्, कुनै प्रकारको दैवी अनिष्ट वा प्रकोप नपरोस् भनी हिउँदमा भूमिदेवता अर्थात् 'भूमे' को पूजा हुन्छ। यही यथार्थतालाई झल्काउँदै यहाँका कविहरू हंसपुरको चित्रणमा लेख्छन् :

*यौटा कोणमहाँ अवस्थित छ त्यो प्राचीन इन्द्रे दुलो*
*अर्कोतर्फ अकासिँदो शिखरिलो देखिन्छ 'भूमे' जुरो*

(तेजराज सुवेदी)

वैदामको समथर भूमिमा जन्मी-हुर्की एक दशकभन्दा बढी वर्ष बिताएकी चन्द्रकला बराल उकाली-ओरालीको हंसपुर गाउँ भित्रिँदा, यहाँका उचा डाँडाकाँडा र गाउँले रहनसहन, वेषभूषा-बोलीचाली अनुभूत गर्दा उनलाई खल्लो-नरमाइलो अनुभूति हुनु स्वाभाविकै हो । तात्कालिक अपठित समाजगत व्यावहारिक जीवनमा गुज्रँदै गयो- दिन, महिना र वर्ष बित्दै गए । तर उनी आफूलाई बाबुआमाले दुख्याहा हंसपुरको छातीमा सौँपेको भन्ने गुनासो पछिसम्म सुनाउँदै गर्थिन् । सम्भवत: यहाँको मादीनदीको पश्चिम र दोभानखोलाको पूर्वीभेकमा रहेको विस्तृत धरातललाई उनी हंसपुरकी धरतीमाता सम्झन्थिन् र

यही विस्तृत भूमिलाई सङ्केत गर्दै उनी भन्थिन्– 'हंसपुरको छाती' जो आज 'हंसपुर गाविस' कहलाइरहेछ। जे होस् यहाँको परिवेशमा घुलमिल हुँदै र मिल्दै भावनामा बगी चन्द्रकलाले हंसपुरको तात्कालिक चित्रण केलाउँछिन्– भूमेथानमुनिको पाखोमा रहेको हंसपुर, त्यहाँका बाहुन क्षेत्रीलगायत विविध जातजाति- गुरुङ, मगर, कामी, सार्की आदि गाउँले केटाहरू आफ्नो गाउँघरसमेतको बयान, मपाईंमा स्वाभिमानी देखिने स्वभाव, खानपानमा आफू निकुटो बनेर पनि अन्नपात बेच्ने चलन इत्यादि यथार्थता दर्साउँदै निरक्षर भए पनि मुखमुखै लोकपद्य रच्छिन् चन्द्रकला :

*भूमेथान्को निकास् हंसपुर्को जग्गा*
*हंसपुरका केटा त निकैका नग्गा*
*ठुला हुँ भनेर गफाडा गर्छन्*
*भकारीको धान्-कोदो गुरुमलाई भर्छन् ।*
*आफू भने मकैले गुजारा गर्छन् ...* इत्यादि ।

उहिले जमानामै स्व. चन्द्रकलाद्वारा कथिएको अधुरो-अपूरो लोकपद्य हो यो । यसरी आफ्नो जन्मथलो 'हंसपुर' अनि माइती हंसपुरेहरूलाई लडाई-होच्याई लोकपद्य गाएको सुन्दा हंसपुरका महिलाहरूलाई जङ चल्नु स्वाभाविकै हो। अत: जे जस्तो भए पनि उनका कथनीको जवाफ दिन हंसपुरका महिला उतर्सिए। तर कवि बन्न कविताशैली र सीपको खुबी पनि हुनुपर्‍यो । गाइँगुइँ चल्दा-चल्दै अन्तत: हंसपुरकै राधुकी नातिनी गुरुदत्त सुवेदीकी टुहुरी छोरी 'गर्मा' (हाल-तारकङ्) ले चन्द्रकलाको माइती गाउँ 'वैदाम-पोखरालाई उपहास गर्दै जवाफरूपमा लोकशैलीमा कविता कथिन्

*वैदाम् पोखरा त पार्दिका कुला*
*घिरंला बेचेर वैदामे ठुला,*
*घिरंला-चिचिन्डा पसलमा बोक्छन्*
*इष्टमित्र जाँदा तगारो ठोक्छन्*
*'ठुला हुँ' भनेर दौरा-सुर्वाल लगाँछन्*
*भान्सामा गएर थालमा खोले बगाँछन् ।*
*ठुला ति कस्ता त बकुल्ला जस्ता*
*रहँदैन इज्जत इष्टामित्र यस्ता ...* इत्यादि ।

वास्तवमा यहाँ सङ्कलित दुवै लोकपद्य अधुरा-अपूरा छन् । उमेर धर्केका चौरासी नाघिसकेका हंसपुरका बूढाबूढीहरूको मुखबाट सुनी यहाँ उतार गरिएका लोकपद्य हुन् यी। हाम्रो अनुरोध छ– यो आफ्नो प्रतिको पक्षपाती प्रेम हो– भावुक लहड हो। कतै-कसैप्रतिको आक्षेप वा होची-अर्घेली नठानियोस्। यो प्रस्तुति त केवल आजभन्दा पौनेशताब्दी (७५, ७६) वर्षअघिको पोखरेली भेकका ऐतिहासिकताको सानो चित्रण निम्तिमात्र हो। यिनको महत्त्व के कति छ- त्यो आफ्नै तहमा छ, सोभन्दा पनि गाउँले निरक्षर महिलाका भावनाको अभिव्यक्तिसीप तारिफलायक ठानिएको छ यहाँ। मुख्यत; उनीहरूको आफ्नो माइतीवर्ग र आफू जन्मे-हुर्केको थलोप्रतिको ममता गहिरो देखापर्छ यहाँ । यसबाहेक उनीहरूका ठोकान-सवाल जवाफको, रैथाने थातथलो उडाउने आफ्नै ढङ्गका शोचको भनाभन यहाँ रमाइलोसँग प्रस्तुत छ । आजभन्दा जुगौं अगिका निरक्षर यी गाउँले महिलाले व्यक्त गरेका अभिव्यक्ति-खुबी निकै सशक्त मान्नुपर्छ। जो स्मरणीय छ, प्रशंसनीय छ ।

अर्को प्रसङ्ग : वि. सं. २०१५-१६ सालतिरको कुरा हो । पोखरा संस्कृत पाठशालामा पूर्वमध्यमा पढ्दै थियौँ हामी। त्यतिखेर पनि पोखराक्षेत्र र पोखरेलीहरूको जीवनदशा दयनीय नै बुझिन्थ्यो । बजारविस्तारको, जनबसोबासका व्यापकताको खास चासो चाख त्यति देखिन्नथ्यो। यतिखेर जेनतेन भर्खर-भर्खर यहाँ ‘मल्टिपर्पस हाईस्कूल’ चल्दै थियो। खानेपानीको खास व्यवस्था थिएन– पानीको निकै दुःख थियो, हररोज मिरुवाको धारापानी पुगी हामी प्रातःकालिक स्नानसन्ध्या गरी पानी लिई फर्कन्थ्यौँ। यहाँको बजार कोठेसाँघुदेखि विन्ध्यवासिनीसम्मको साधारण दोहोरो लाइनको थियो। सडकमा ढुङ्गा छापिएका थिए। पोखरेलीहरूका जीवनस्तरको स्थिति सुधार्ने श्रम-साधन र आयस्रोतका उपाय खास केही देखिन्नथे । नेवारवर्गको आफ्नै व्यापारव्यवसाय थियो (बाहुनवर्ग चाहिँप्रायः काम नभएका बेरोजगार थिए, किसानी वा पठन-पाठनमा दिल दिने-लागिपर्ने लगनशील देखिन्नथे। तर छिमेकी गाउँघरबाट बजार आएका सोझा गाउँलेहरूको अगाडि पोखरेली रोव-रवाफ, फूर्तिफार्ती र मपाईंको गफचाहिँ निकै चल्थ्यो । यस्तै-यस्तै तात्कालिक स्थिति चित्रण गरिएको त्यतिखेरको समाजमा मुखमुखै

गाइँगुइँ चल्दै गरेको लेखिएको पढालेखा कुनै लोककविको लोकपद्य स्मरणीय छ :

*पोखेली सबमा मिठो वचन भै गर्छन् अइन्का कुरा*
*मुख्ले तेल घसे पनी हृदयमा लिन्छन् करौती छुरा,*
*पण्डित् भै मुखले बयान गरने काम् गर्न अल्छी अति*
*सूपारी मुखमा, चटक्क रूपमा पोखेलीको सम्पति । १*
*भोकै छन्-घरका जहान, दमडी क्यै छैन खाने कुरा*
*खोले सिस्नु र पानिका भरमहाँ कल्थेर बस्छन् बरा !*
*याक, गैंडा ति चुरोट सर्र मुखमा तानेर आफू भने*
*पस्छन् होटलमा बडा गफ गरी औलादका फूर्तिले । २*
*गफ गर्नू घनघोर फूर्ति झिक्दै जान्ने र सुन्ने गरी*
*बेलूका गइ स्वास्निलाई डसनू-डाट्नु अचाक्ली गरी*
*सिल्कन्का फरिया भिरे पनि कठै, साग्पात् भए बेचनू*
*कस्तो कर्म बरा जनानिहरूको सब् थाह भो के भनूँ । ३*

राम्रो हात चलेका सर्जक प्रतिभाबाट सिर्जित घतिला लोकपद्य बुझिन्छन् यी । 'शार्दूलविक्रीडित छन्द'को अयोगमा यहाँ कताकति व्याकरणनियम नाघेको पाइए पनि त्यसले लोकपद्यको मिठासमा कुनै पनि नोक्सान पुऱ्याएको बुझिन्न। यहाँ विचारणीय के छ भने यी तीनै सिलोक एकै कालका र व्यक्तिका नहुन सक्छन् । कारण यिनको सिर्जनकालमा धेरै अन्तर बुझिन्छ। यहाँको पहिलो सिलोक ०१५, १६ सालतिर हामीले सुने-जानेका हौँ । त्यसपछिका अन्य दुई सिलोक तात्कालिक पोखरेली समसामायिक वास्तविकता अनुभूत गरी यथार्थ चित्रण गर्दै प्रथम श्लोकको हाराहारी अर्थ- छन्द मिल्दो पारी केही वर्षपछि रचिएका बुझिन्छन्। पछिल्ला सिलोकको आधुनिकता यहाँका याक, गैँडा शब्द र औलादको फूर्तिसाथ होटल पस्नु व्यवहारले जनाउँछ । वास्तवमा पोखराबजारमा होटल थाप्ने विशेष चलन खासगरी २०२०/०२२ सालपछि नै चलेको हो। ०१६/१७ सालतिर हामी पोखरामा हुँदा होटल खासै थिएनन्, कता-कतै चिया र मिठाई पसल थिए। नालामुख- भीमसेनथानपछाडि बाहुनको एउटा होटल छ भन्थे। त्यहाँ भात खाने अडरअनुसार चोखोनितो गरी बाहुनले धोती फेरेर पकाइदिन्छन् भन्ने सुनिन्थ्यो। यहाँ 'कविता' मा भएको 'होटल'

शब्दको मतलब कस्तो हो, भोजनालय हो वा खाना, चिया, चुरोट खाई आराम लिने विश्रामस्थल हो मननीय छ ।

अर्को कुरा : याक, गैँडाको स्रोत जनकपुर चुरोट कारखाना हो । जो मित्रराष्ट्र रूस सरकारको सहयोगमा वि. सं. २०२१ मा स्थापित भएको हो। यहीँबाट नै वि. सं. २०२४ तिर चुरोट उत्पादन भएको थाहा हुन्छ । सर्वप्रथम उत्पादनको प्रारम्भमा चुरोटको नामकरण निम्ति नाटककार-कवि बालकृष्ण सम (१९५९-२०३८) लाई विशेष अनुरोध गरिएको र उनले गैँडा, याक, चौँरी, आशा, ज्वाला इत्यादि आठ-नौथरी नाम कारखानालाई दिएका थिए भन्ने जनश्रुति बाहिर चलेको सुनिन्थ्यो। जे भए पनि पद्यगत चुरोट चर्चाले गर्दा यी लोकपद्य याक, गैँडाको उत्पादनपछि नै गाइएका र मुखमुखै चलेका सिर्जना हुन् भन्ने कुरा स्पष्ट छ । जे होस्, उपर्युक्त लोकपद्यमार्फत मर्मस्पर्शी ढङ्गले तात्कालिक लोकस्थिति चित्रण प्रस्तुत छ यहाँ । हो, वि. सं. २०२५ सालको हाराहारीसम्म विपन्नताले पिल्सिएका पोखरेलीहरूलाई पृथ्वीराजमार्गको निर्माणले, देशविकासको स्वाभाविक लहर क्याम्पस-विद्यालय र क्षेत्रीय तहसमेतका विभिन्न कार्यालयहरू मित्रराष्ट चीनको सहयोगमा निर्मित सेतीनदीको बाँध आदिले ह्वात्तै उचालेको कुरो यही अविस्मरणीय छ । हाल पोखरेलीहरूमा बहुमूल्य बन्न पुगको पुर्ख्यौली अचल सम्पति र युवापुस्तामा आएको सामयिक चेतनाको प्रभावले विस्तारै महत्त्वाकाङ्क्षी बनाउँदै अगिबढाएको, सजग पार्दै लगेको यथार्थता स्पस्ट छ । यसरी केलाउँदा उक्त लोकपद्य करिब तीन-चार दशकअघिका बुझिन्छन् । तर पनि यो लोकचित्रण इतिहासको हो, जिज्ञासुको निम्ति अध्ययनीय विषय हो। यहाँ प्रयुक्त यस्ता शब्द-शब्दावली छन्, जो स्थानीयताको रू-रूल्को दिन सक्षम बुझिन्छन् :

- तेलघस्नु– चिप्ल्याइँ दल्नु, लोलोपोतो पार्नु
- करौँती छुरा (लिनु)– गला रेट्ने काम गर्नु, दयाधर्म नसम्झी दुष्टचाइँ चालले स्वार्थ पूरा गरिछाड्नु ।
- दमडी– चुनदाम, एक पैसाका चारभागको एक भाग ।
- औदाल– धन-सम्पत्ति, मान र इज्जतले सम्पन्न ।

- घनघोर फूर्ती– उत्पातको फूर्ती-फार्ती र ढस्सा देखाउनु ।
- डसनु-डाट्नु– टोकस्नु-विशेष हप्की-दप्की पार्नु ।
- फरिया– जनानाले कम्मरदेखि गोलीगाँठासम्म पैरने विशेषदर्जाको धोती ।
- बरो– दया-मायाको शब्द, विचरो, बबुरो इत्याबि कठैबरा
- जनानी (ना)– सीधासादा सरल स्वभावका सन्तोषी महिला, नारी वर्ग इत्यादि ।

जनजिब्रो प्रचलित यसप्रकारका स्थानीय शब्दहरूले पाठकवर्गलाई निकै लोभ्याउँछन्, अनि यस्तो प्रयोगले नेपाली लोककविहरूका कवित्वको विशेष खुबी दर्साउनुको साथै हृदयस्पर्शिताको सीपसमेत प्रकट गर्छन् । हाम्रा गाउँघरहरूमा प्राय: यसप्रकारको ठोकान प्रशस्त पाइन्छ । तर यसको वास्तविकता कसैप्रतिको होची-अर्घेली देखाई उनीहरूलाई उडाउनु र वैरभाव बढाउनुचाहिँ होइन, बरु दुर्गुण केलाउँदै पक्षान्तरबाट उनीहरूको कुलत सपार्न सुझाव दिनु र असल बानीबेहोराको बनाउनु हो, जो स्पष्ट नै छ। यतातिरको गाउँघरहरूमा मुखमुखै चलेका लोकपद्यहरूले अतीत कालिक ग्रामिण लोकजीवन र लोकसंस्कृतिको झल्को दिन ठूलो भूमिका खेलेको स्पष्ट नै छ । जसलाई गम्भीरतासाथ समर्पित बन्दै खोज्नु-खोतल्नु आवश्यक छ। अत: त्यसबारे हाम्रा लोकसाहित्यप्रेमी वर्गबाट सप्रेम सङ्कलन-प्रकाशन गरिदिन अनुरोध गर्दै हाललाई आफ्ना शब्दहरू टुङ्ग्याउने अनुमति चाहन्छु ।

## सन्दर्भस्रोत

हंसपुरे सुवेदी, *नेपाली लोकपद्य : परिचय विवेचना,* नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान, काठमाडौँ २०६०

जिल्ला पार्श्वचित्र जिल्ला पञ्चायत सचिवालय कास्की २०४६ ।

प्रा. बालकृष्ण पोखरेल र अन्य (सम्पा.)। *नेपाल बृहत् शब्दकोश,* ने. रा.प्र.. २०४० सानु दिदी (गौरादेवी पौडेल: ८५ वर्षकी वृद्धा) लोककविताकी स्रोत ।

# *नेपाली*सँग गाँसिएका मेरा केही यस्ता छन् अनुभवहरू

*– होम सुवेदी*

*नेपाली*को पूर्णाङ्क २०० निस्कँदै छ, केही कुरा लेख्नुपर्ने । गजेन्द्रजीले पत्र नै थमाइदिनुभएको छ । अन्यौलमा छु । के लेख्ने ? *नेपाली*का बारेमा मात्र लेख्ने कि यससँग सम्बन्धित यसको सेरोफेरोको र यसका बाहिरफेरको कुरो पनि लेख्ने ? *नेपाली* मात्रलाई आधार बनाएर लेख्ने कि ? यससँग जोडिएका मेरा सन्दर्भहरू पनि केही लेख्ने मलाई निकै फसादी पर्न लाग्यो । *नेपाली*मा मात्र सीमित बनूँ कि लागूँ यसको सीमाबाहिर ? *नेपाली* पत्रिकाको किशोरवय र म युवकवयका बीचको सामीप्यता र सम्पर्कका बारेमा पो लेखूँ कि ? म निकै दिन दोधारमा परेँ– परेँ म दोधारैमा भनेऊँ ।

माथिल्लो अनुच्छेदमा अन्तिम वाक्यको पनि अन्तमा आएको छ ऊ । यो ऊ बाहेक आज म अर्को ऊ लेख्न जान्दिनँ । कक्षामा विद्यार्थीहरू मेरो ऊ देखेर छक्क पर्छन् । अनि मैले पहिले यसलाई ‘खुट्टीझाऱ्यो झ भनेको अक्षर यही हो बाबु हो, शुद्ध नेपाली ऊ चाहिँ यही हो’ भनेर चिनाउनुपर्छ । मैले यो ऊ सिकेको *नेपाली*बाट हो । कमलबाबुको *मधुपर्क*को पहिलो अङ्कमा प्रकाशित लेखबाट हो । आफ्ना कम्प्युटरमा यही अक्षर लगाएर चलाउन सानो इच्छा थिएन, कमलबाबुसँग कतिपटक ऊ भएको फन्ट मागेँ, कसैले उहाँले समानता, कान्जिरोवा, कालिमाटी जस्ता फन्टमा यो ऊ छ भन्नेसम्म सुनेको छु तर यी फन्ट मेरा कम्प्युटरमा हाल्न थाल्यो खालि चारपाटे लाम्चा गोला मात्र हुन्छन् । मैले नजानेको नै हुनुपर्छ भनेर चूप लागेको छु । यसै वर्णका बारेमा पो लेखौँ कि ? केबारे लेखौँ हँ म *नेपाली* का लागि लेख ?

के लेख्ने-लेख्ने ? कि लेखौँ मैले गरेका चर्तिकलाका बारेमा ? बाबुले पो नराम्रो मान्नुहुन्छ कि ? माफी माग्छु अघिबाटै र लेख्छु मेरो चर्तिकलाबारे ।

म २०२९ साल चैत्र २० गतेदेखि जगदम्बा प्रेसको प्रुफरिडर भएको थिएँ । बासुदेव मास्टरसाहेबले मेरो कथाबेथा बुझेपछि मलाई बोलाउनुभएको थियो काममा । मलाई लाग्छ– त्यहाँ प्रुफ हेर्नका लागि मेरो परीक्षा लिएको पहिलो सामग्री वा जो मेरो परीक्षण गरिएको थियो, त्यो *नेपाली* पूर्णाङ्क ५३ को थियो । मेरो भाषिक शुद्धाशुद्धिको परीक्षण *नेपाली*बाटै भएको थियो र त्यसका लागि *नेपाली*को पूर्णाङ्क ५३ कै कुनै लेख थियो भन्ने मलाई लाग्छ । आज मलाई मेरो पहिलो परीक्षा लिएको प्रुफ कुन लेखको थियो त्यो कुराको राम्रोसँग प्रुफ नभए पनि अङ्कका बारेमा राम्रो हेक्का छ । त्यो अवश्य पनि पूर्णाङ्क ५३ नै थियो । त्रैमासिक *नेपाली*को ५३ अङ्क २०२९ सालको चैत्रमै निस्कनुपर्ने भन्ने केही थिएन, अङ्कको पूर्णताका लागि केही ढिलो-छिटो हुनु स्वाभाविक थियो ।

माथिल्लो अनुच्छेदको गन्थनको मैले सिद्ध गर्न खोजेको कुरा के हो भने काठमाडौँमा बस्दा मेरो मानो जुराउने जुटाउने पहिलो साधन *नेपाली* नै थियो । 'नयनाथ र सामनाथपछि अब होमनाथ आयो, पूर्वतिरको एउटा किराँती' बासुदेव मास्टरसाहेबले सायद मेरो जगदम्बा प्रेस प्रवेशसँगै यो वाक्य भन्नुभएको थियो । त्यस वाक्यमा मास्टरसाहेबले मलाई 'किराँती' भने पनि जसरी अरू-अरूमध्ये कसैलाई भुसतिघ्रे, कसैलाई वनमान्छे, कसैलाई चन्दने जस्ता नाम राख्नुहुन्थ्यो । त्यस्तो कुनै नाम मेरो राख्नुभएको मलाई थाहा भएन, मेरो मुखेन्जी नभनेर मेरो त्यस्तै कुनै नाम थियो भने मेरा पछिल्तिर भन्नुहुन्थ्यो कि ? बाबुलाई वा गजेन्द्रजीलाई थाहा हुनुपर्ने हो ? बाबु त त्योबेला मजस्तो उरन्ठेउलेलाई समेत 'होमनाथजी' नै भन्नुहुन्थ्यो ।

कुरा नबरालीकन म *नेपाली* तिर लाग्छु । ५४ औँ अङ्कको प्रुफ हेर्न मलाई निकै गाह्रो परेको हो । कम्पोज गर्ने सुशीला कार्की र सान्नानी श्रेष्ठले उक्त प्रुफ देख्लान् भनेर त्रास परेको थियो । अर्थात् 'हाम्रा लाज लाग्ने शब्दहरू' बारे महानन्द सापकोटाको लेखले मलाई बडो लाजमर्दो पारेको थियो । गणेश श्रेष्ठ वा कालेबहादुर मगरमध्ये कसैलाई एकान्तमा पारेर कम्पोज गर्नु भनेर कम्पोज गर्न दिएकोजस्तो लाग्छ ।

*नेपाली*को काम निरन्तर हुन्नथ्यो । यदाकदा । कहिलेकाहीँ । कहिले एकैचोटि २, ३ अङ्कको त कहिले धेरै महिनासम्म शून्य । *नेपाली*को काम नभए पनि अरू सामग्रीहरू प्रेसमा आउँथे छापिन, तिनैको प्रुफ हेरिन्थ्यो। नयनाथ र सोमनाथ हिँडेपछि एक्लै परेँ केही दिन। पछि 'सिस्नु ९७' का लेखक दाताराम शर्माका पुत्र माधवजीलाई साथी पाएको थिएँ। त्यही स्थानमा केहीपछि हालका *मधुपर्क*का प्रधान सम्पादक कपिल घिमिरेजीलाई पनि साथी पाएँ, कतिलाई त आफैँ सिकाएँ, कतिलाई सघाएँ पनि नेपाली भाषाको शुद्धाशुद्धि । जगदम्बा प्रेसबाट बिदा हुनहुन लाग्दै गर्दा स्व. शिव अधिकारी आएका थिए, उनलाई बढी काङ्ग्रेसी कुरा गर्नुपर्ने, मलाई उति चित्त नबुझ्ने, तैपनि म चूपै लागेर आफ्नो काममा थिएँ। उनी घमण्डी लाग्थे। पछि स्व. जीवन आचार्य पनि त्यही स्थानमा आएछन् । उनको र उनीपछिका अरूका बारेमा भने मलाई थाहा हुने कुरा पनि भएन र थाहा पनि छैन । अरूलाई मात्र किन गाली गर्नु ? म नै पनि निकै उट्पट्याङ् थिएँ । बरु *नेपाली*सँग सम्बन्धित मेरा उटपटाङबारे केही कुरा गरौँ कि ?

*नेपाली*ले लेखकलाई पारिश्रमिक दिन्थ्यो। रु. २५ वा १५ कति हो दिन्थ्यो अवश्य । कति दिन्थ्यो बिर्सिएँ । गजेन्द्रजी वा रामशरणजीलाई थाहा हुनुपर्छ । मलाई उटपटाङ बनाउनमा यो पारिश्रमिक पनि एक साधन बनेको छ । *नेपाली*का लागि आएका लेखको फायलिङ गर्न मलाई नै कमलबाबुले दिनुहुन्थ्यो । २०३१ सालतिरै हुनुपर्छ, मैले *नेपाली*का लागि केही लेखको कमी थाहा पाएपछि एउटा उटपटाङ गरेथेँ– *नेपाली*का लागि एउटा लेख हुलाकबाट पठाएर। मेरो हात बसिसकेको पनि थिएन, आलोकाँचो नै थिएँ, नेपालीमा त अनुसन्धानात्मक लेख न चाहिन्थे। दाजु राजेन्द्र त्यो बेला एम.ए. सकेर बनेपाको आजाद मा.वि.मा जागिरे हुनुभएको थियो। कोठामा म एक्लै थिएँ। मसँगै उहाँका एम.ए.का नोटस् कपी थिए। उहाँका नोटस्कपीबाट लेखनाथको 'तरुणतपसी' को नोटस् मैले मेरा होइनन् भन्ने जस्ता अक्षर पारेर सारेँ– जगदम्बा प्रेसबाटै ल्याएका सादा कागतमा धर्को नदिईकन लेखेँ। लेखकमा मेरा दाजुकै नाम राखेँ र उक्त लेख कमलबाबुकहाँ हुलाकबाट पठाएँ। हुलाकबाट

आएका पत्र मैले नै बुझ्नुपर्थ्यो र कमलबाबुलाई दिनुपर्थ्यो । बल्लबल्ल सुन्धारामा पोस्ट गरेका पत्र ३ दिनका दिन मदन पुरस्कार पाटनढोकामा पुग्यो । मैले आफैँ उक्त पत्र बुझेँ र कमल बाबुलाई दिएँ । उहाँले लेख राम्रो भएको कुरा बुझाउँदै *नेपाली*मा हाल्ने फायलमा राख्न तुरुन्तै मलाई नै पठाइदिनुभएको थियो । ५५ देखि ५८ मध्येका कुनै अङ्कमा सो लेख छापिएको छ । दाजुको पाउने पारिश्रमिक पनि मैले नै हस्ते गरेर लिएको र च्वाम पारेको कुरा सम्झँदा आज कम कुरीकुरी लाग्दैन । मलाई मेरो उटपटाङदेखि आज आफैँ लाज लाग्छ । यो पोल आज ३५ वर्षपछि खोल्दै छु ।

आर्थिक कुरा मलाई थाहा थिएन, त्योबाहेकका *नेपाली*लाई समस्या पर्ने कुरा केही थिए । लेखहरू त प्राप्त भइरहन्थे तर नेपालीको धर्मका भने कमैजसो आउँथे । कमलबाबुको व्यस्तताका कारण कहिलेकाहीँ 'म.पु.पु.को पाना'को सामग्री नभएर निकै हम्मे पर्दथ्यो । बाबुलाई पर्खनुपर्दथ्यो । कहिले सम्पादकीयले पनि बाबुकै व्यस्तताका कारणले केही दिनसम्म कुराउँथ्यो । कविता, कथा वा सिर्जनात्मक रचनाहरू *नेपाली*का लागि स्वीकार्य थिएनन् (सुरुका केही अङ्कमा सम, भिक्षुका कविताहरू छापिएका छन्) अनुसन्धानात्मक लेखहरू मात्र ग्राह्य थिए । यसैकारणले कहिलेकाहीँ लेखको पनि समस्या पर्दथ्यो । तर गर्जो टर्दथ्यो । नयनाथजी र सामनाथजी सरकारी र त्रि.वि.को सेवामा लागिसकेपछि जिम्मा मेरै थियो प्रुफ हेर्नेबारे । *नेपाली*बाहेक प्रेसमा छापिँदै गरेका पुस्तकहरूमा राममणि रिसालको 'नेपाली काव्य र कवि', वासुदेव त्रिपाठीको 'पाश्चात्य साहित्यको सैद्धान्तिक परम्परा', समको 'चिसो चुलो' (दो.सं. हुनुपर्छ) पनि थिए । राममणि रिसालले त आफ्नो किताबको भूमिकामा उक्त किताबको प्रुफ हेरिदिएकोमा मलाई धन्यवाद दिँदै मेरो नाम नै हाल्नुभएको थियो र म दङ परेको थिएँ । उता माया ठकुरीको 'गमलाको फूल', कुनै लेखकको 'बाग्मतीको किनार' जस्ता सामग्रीहरू पनि *नेपाली*कै साथ चल्दै थिए । यस्ता सबै किताब छापिएको र प्रुफ हेरिएको बेला 'चिसो चुलो'मा भने निकै अशुद्धि भएछ, बाबुले सच्याउन लगाउनुभएको थियो । १००० प्रति पुस्तकमा सच्याउँदाको सास्ती पनि सम्झनलायक नै छ ।

*नेपाली*को पार्श्ववर्ती भएर गरिएको *नेपाली*बाहेकका सन्दर्भका मेरा उटपटाङ पनि इतिहास भएको कुरा मैले अनुभव गरेको छु। त्योबेला मास्टरसाहेब (वासुदेव लुइँटेल) का अगाडि मैले गरेको फटाइँ नरनाथ लुइँटेलका मुखबाट उहाँ जीवित छँदै सुनाइदिन लगाएको थिएँ, सुनाइदिनुभएछ, धन्यवाद भन्छु। त्यसरी अर्काको मुखबाट भए पनि सुनाउन पाएकोमा वा उहाँले सुनाइदिनुभएकोमा म हलुको भएको अनुभव गर्दछु।

*नेपाली*का वरिपरि बसेर गरेको उटपटाङका बारेमा केही खोतलूँ न त। कौवा प्रकाशनबाट मास्टरसाहेबले 'उल्लीबिल्ली' र 'भालुपुराण' निस्किएको केही पछि 'डाढो' निकाल्ने तरखर गर्नुभयो। लेख बटुल्ने मान्छे आखिर म नै थिएँ। 'डाढो' का लागि श्रीधर खनालकहाँबाट लेख ल्याएँ, तारानाथ शर्मा त्योबेला जमलको विश्वविद्यालयको क्वार्टरमा बस्थे त्यहाँबाट, ल्याएँ। 'गोरखापत्र' संस्थानबाट केशवराज पिँडाली र भैरव अर्यालको लिएँ, *रूपरेखा*बाट बलम (मास्टरसाहेब बालमुकुन्ददेव पाण्डेलाई बलम भन्नुहुन्थ्यो)को ल्याएँ। 'डाढो'का अरू लेख-रचनाहरू कसरी आए मलाई थाहा भएन। तर त्यस सङ्ग्रहको स्वर्गीय जीवनकुमार शर्माको लेख कसरी आयो त्यो मलाई राम्ररी हेक्का छ।

सबैका हास्यलेखहरू पढिसकेपछि त्यत्तिको लेख त म किन नलेख्ने मेरा मनमा आयो र जगदम्बा प्रेसमै बसेर लुकीलुकी एउटा हास्य आफैँ लेखेँ। शीर्षक राख्न पऱ्यो हम्मे। तर भर्खर जस्तो भैरव अर्यालको एउटा 'हास्यव्यङ्ग्य एक नालीबेली' भन्ने लेख मैले २ दिन लगाएर उनकै कुर्सी अघिल्तिर गोपमा बसेर सफाइ गरेको र उनको त्यो लेख 'ज्ञनविज्ञानको दिशा' भन्ने सङ्ग्रहका लागि बनारस पठाएको थिएँ। मेरा लेखको टाउको हाल्न परेको समस्यालाई त्यही लेखको ठाउँको सम्झिएँ। त्यसै लेखको थाप्लोबाट मेरा लेखका लागि आधी शीर्षक तानेँ र शीर्षक जुराएँ– 'डाढो : एक नालीबेली'। अनि अक्षर पनि अर्कैका जस्ता पारेर धर्का नदिईकन लेखेर उही पहिलेकै जुक्ति भिडाएर हुलाकमार्फत पठाएँ मास्टरसाहेबका नाममा। त्यो लेखमा मेरो नामको साटो 'वनमान्छे' छद्मनाम लेखेँ। त्यो चिठी

पनि तीन दिनपछि पुग्यो जगदम्बा प्रेसमा । अनि भयो रमाइलो । मास्टरसाहेबको हातमा चिठी पुगेको हेरिरहेको छु । चिठी खोलेर पढ्न थालेको हेरिरहेको छु । मास्टरसाहेबका प्रतिक्रिया हेरिरहेको छु । तर म भने केही बोल्नेवाला छैन । लेख पढेर उहाँ आश्चर्यमा पर्नुभयो । कुन राँडीको छोरा र'छ यो वनमान्छे भनेर तिलमिलाउन थाल्नुभयो । तिनतिर्लोकको जुक्ति भिडाएर पनि वनमान्छेको कैरन थाहा पाउनुभएन, म रमिता हेरिरहेको छु । हाँसो उठ्छ, लुकेर हाँस्छु । प्रेसमा सधैँजसो आइरहने रामकुमार पाण्डेलाई सोध्नुभयो र पढ्न लाउनुभयो । दाताराम शर्मालाई सोध्नुभयो । तारानाथ शर्मालाई पनि सोधेको जस्तो लाग्छ । लीलाध्वज थापालाई त पढेरै सुनाउनुभयो । साम्बभक्त सुवेदीलगायतका सबैलाई सोध्नुभयो । केही सीप लागेन, वनमान्छे छद्मनाम राखेर लेख पठाउने को हो भन्ने कसरी कसैबाट पनि खुलाउन सक्नुभएन । मतिर कसैले शङ्कासम्म पनि गरेन । म भने रमाइलो मानेर हेरिरहेको थिएँ । पाप पो गरेँ कि भन्ने पनि भएको थियो । त्यस लेखमा 'कलल' भन्ने शब्द मैले हालेको थिएँ, (तर 'कालीपोके'मा कलकल बनाइदिएछ साझा प्रकाशनले) त्यस शब्दको अर्थ मैले गरुड पुराणबाट जानेको हुँदा नै बुझाइदिएको थिएँ । अब त यो लेख यसै मान्छेको हो कि भनेर शङ्का गरिहाल्छन् कि भन्यो, छैन बाबा ठाकुरे हो । अनि मैले त्यसै गरी श्रीधर खनालको हो क्यारे 'प्रतिनिधि' भन्ने पत्रिकामा "कौवा प्रकाशनमा वनमान्छेलाई लिएर निकै खैलाबैला चलेको छ अरे !" भन्ने खालको एउटा हास्य लेखेँ र फेरि पठाएँ । त्यो तत्काल छापियो । मास्टरसाहेब झन् छक्क ! अर्को हप्तातिर फेरि इन्दुकान्तको 'आरती' पत्रिकामा पनि त्यही बेहोराको अर्को लेख 'वनमान्छे' कै छद्मनामबाट पठाएको थिएँ त्यो पनि पो छापियो । अब त मास्टरसाहेब निकै रन्थनिनुभयो । निकै रिस उठेको हुनुपर्छ । यत्रो जगजगी कमलबाबुले भने थाहै पाउनुभएन । मेरा लेखले निकै जना *नेपाली* हास्यव्यङ्ग्यकारहरूका मगज खाएपछि एक दिन मेरै सामुन्ने मास्टरसाहेबले फोन गर्नुभयो–

"भैरवजी, म होमनाथका हातमा एउटा लेख पठाउँदै छु । 'डाढो' मा छाप्नुहुने नहुने हेरेर उसैका हातमा पठाइदिनुहोस् है ।"

भैरव अर्याललाई फोन गरेर भन्नुभयो। अनि मलाई मेरै लेख दिँदै भन्नुभयो- "बलमकोमा पनि मैले फोन गरेको छु। 'रूपरेखा' मा ढोकाटोल पनि लानू र भोलि लिएरै आउनू। लु बस भाडा।"

अब त झन् ठूलो नाटकको अभिनय मैले गर्नुपर्ने स्थिति आयो। अनि त्यही दिन गएँ 'गोरखापत्र'मा भैरवजीसँग। भैरवले निकै बेर लाएर चुरोट खाँदै पढे मेरो लेख। अनि मास्टरसाहेबलाई फोन गरे– "मास्टरसाहेब, लेख त राम्रो छ। हाले हुन्छ 'डाढो'मा । अब वनमान्छे-सनमान्छे जोसुकै होस्, हामीलाई चाहिएको रचना हो, हाल्दा केही फरक पर्दैन।" भैरवले मेरो लेख 'डाढो'मा हाल्ने पास गरेपछि म लागेँ त्यही लेख लिएर ढोकाटोलतिर। बालमुकुन्दलाई मास्टरसाहेबले अघि नै फोन गर्नुभएको रहेछ। म पुग्नेबित्तिकै उनले पनि अरू काम छोडेर गुनगुनाउँदै मेरै लेख पढ्न थाले। उनले पनि पढिसकेपछि फोन गरे मास्टरसाहेबलाई– "कुरा ता राम्रै लेखेछ, यत्तिको व्यङ्ग्य लेख्ने सीप भएको मान्छे निकै गतिलो हुनुपर्छ। तर कुन राँडीको छोराले यो गऱ्यो। त्यसका बाबुलाई किन लेख्नुपऱ्या वनमान्छे भनेर ? छाप्न त छाप्नै पर्छ मास्टरसाहेब।"

उनले पनि पास गरे। उनले प्रयोग गरेको 'राँडीको छोरो' शब्दले मलाई भित्रैदेखि कोक्यायो। किन लेख्नुपऱ्या वनमान्छे ? भन्ने उनको भनाइमा झोँक चलेर झन्डै आयो मेरा मुखमा...। "तिमीले चैँ बलमकनद, घटोत्कच शर्मा, फाँइँफुट्टीराज जस्ता उपध्रो नाम किन राखेका छौ नि ?" भनेर सोधौँ-सोधौँ लाग्यो। तर म चूप लागेँ र पास भएको मेरो लेख लिएर हिँडेँ।

भोलिपल्ट प्रेसमा कम्पोज गर्न गणेशका हातमा लेख दिनु भनेकोले लेख कम्पोज गर्न दिएँ। गणेशले लेख कम्पोज गऱ्यो। त्यसको प्रुफ मैले नै हेरेँ। केही चित्त नबुझेको ठाउँमा सुधार्ने मन भए पनि थाहा पाउलान् भन्ने डरले सुधार्न सकिनँ। मास्टरसाहेबले 'वनमान्छे' को ठाउँमा स्वर्गीय जीवनकुमार शर्मा नाम राख्तै त्यो लेख 'डाढो' नामक (कौवा प्रकाशनको हास्यव्यङ्ग्य रचनाहरूको सँगालो) कृतिमा छापियो। प्रेसमा छापिने अवस्थामा समेत गएर आफ्नै नाम हालौँ-हालौँ लागिरह्यो। तर डरले त्यसो गर्न सकिनँ।

त्यत्तिकै छापियो । त्यसरी छापिएको उक्त लेख मैले आफ्नै किताब 'कालीपोके'मा सङ्कलन गर्दा ता कमसे कम त्यो लेख मेरै थियो भन्ने थाहा पाउलान् भन्ने लागेको थियो तर कसैले वास्ता गरेन । मेरो पुस्तकको 'कालिपोके'को पहिलो लेख नै 'डाढो' स्वर्गीय जीवनकुमार शर्माको नाममा छापिएको त्यही लेख हो । यो चर्तिकलाको खुलासा ३१ वर्षपछि मैले पोखरामा नरनाथ लुइँटेलसँग गरेँ र मास्टरसाहेब जीवित छँदै उनैका मुखबाट उहाँसम्म पुऱ्याएँ । पछि ढुङ्गाअड्डामा उहाँसँगको भेटमा मेरो चर्तिकला थाहा पाएको कुरा भन्नुहुन्थ्यो र छक्कै परेको कुरा मसँग गर्नुहुन्थ्यो । अनि भन्नुभएको थियो– 'हाल्नुथियो नि आफ्नै नाम ?'

बिर्सिएँ त्यसको उत्तरमा मैले के भनेँ । यो लामो चर्तिकलाको समाप्ति गरूँ अब ।

कुरा *नेपाली*सँगका हुँदै थिए, बरालिएछन् । अलिकति उट्पटाङे स्वभावका कुरा आए । कमलबाबुसँग क्षमा माग्छु । कमलबाबुमाथि अत्यन्त श्रद्धा गर्छु । मेरो किताब 'मर्माहत'को पोखरामा समेत पुगेर विमोचन गरिदिनुभएको थियो । उहाँकै कारणले, *नेपाली* कै कारणले मैले *नेपाली*मा एम.ए. गर्न सकेको थिएँ । केही लेख्न र पढ्न मैले *नेपाली*बाटै सिकेको थिएँ। अरु ममा केही लेख्ने र केही पढ्ने बानीको विकास गराउने मूल स्रोत त *नेपाली* नै थियो । यसमा श्रद्धा नहुने कुरै भएन । जीवनका ५० वर्ष पार गर्न लागेको पत्रिकाको स्वरूप सम्झँदा र हेर्दा मलाई अर्को खुसी लाग्छ । २०० अङ्कसम्ममा हेरौँ बाहिरी कागत एकै छ, बाहिरी शीर्षक उही छ र उसै ठाउँमा छ, उही मसीमा छ, उही साइजमा छ यो पनि एउटा छक्कपर्दो विषय हो। कमलबाबुको यो पनि एउटा एकात्मकताको नमुना हो। जेसुकैले एकै आकारमा जीवनका ५० वर्ष पार गर्दैनन् । *मधुपर्क*कै कुरा गरौँ कहिले लामो आकारमा, कहिले सानो आकारमा, कहिले के त कहिले के ? *रूपरेखा*का अङ्कहरूमा पनि लगभग यो एकात्मकता थियो जस्तो लाग्छ। तर एकै कुरामा डेग नसरी जस्ताको तस्तै रहन सक्ने कुरामा सहजता हुँदैन । यसको बाहिरी आकार हेर्दा पहिलो अङ्क र १९९ वा २०० अङ्क एकै खालका देखिए भन्दैमा यो

नबढेको, ठिँगुरिएको ठानिएला, त्यसो पनि होइन। यो आफ्नो क्षेत्रमा उच्च रूपमा विकसित पनि हुँदै आएको छ। यसको आन्तरिक इच्छाअनुसारका सामग्रीहरूले यसको कायाकलेवरका हरेक अङ्कमा समृद्धताको परिचय दिने गरेका छन्। मदन पुरस्कार पुस्तकालयको त यो पत्रिका सानो आँखीझ्याल नै हो। पुस्तकालयमा कस्ता महत्त्वका र चकित पार्ने वा तारिफ गर्ने सामग्रीहरूको पौल छ भन्ने कुराको जानकारी यसको 'म.पु.पु. को पाना' मा हुन्छ। अब त कुनै अध्येताले *नेपाली* मात्र नभई *नेपाली*का हरेक अङ्कमा प्रस्तुत 'म.पु.पु.को पाना' मा मात्र पनि अनुसन्धान गर्दा हुन्छ। मदन पुरस्कार गुठीले नेपालमा कति डाक्टरको उत्पादन गरेछ, कलकत्ता मेडिकल कलेज र आर.जीकार मेडिकल कलेजमा पढेका के-कति डाक्टरहरू नेपालमा रहेछन् वा भएछन् भन्ने कुरा पनि *नेपाली*ले दिएको छ। म आफूलाई *नेपाली* पत्रिकाको किशोरावस्थाको साथीका रूपमा लिन मन लाग्छ। किशोरावस्था वा टिनएज भनेको छुकछुके हुन्छ। *नेपाली*मा त्यो बेला नै प्रौढता थियो भने ममा भने छुकछुके पन थियो। मेरो छुकछुकेपनलाई *नेपाली* का ३५-४० अङ्कका सङ्गतले र अर्तीले सुधारेका थिए। मेरो किशोरावस्थाको सन्धिकाल पार भइसकेको थियो। *नेपाली*मा पनि पूर्णाङ्क ८५ आइसकेको थियो। अनि मैले *नेपाली*लाई छाडेर आउनुपर्‍यो एक दूरदेशतिर। आज मलाई थकथक लागिरहेको छ। *नेपाली* का २०० अङ्कसँगै आफ्नो जीवनलाई कमलबाबुले पसिना चुहाएझैँ, गजेन्द्रजीले खियाएझैँ, चिरञ्जीवीले हेलेझैँ हेल्न पाएको भए पनि त हुने रहेछ। तर केही छैन, सबैले गरेका इच्छा सबै थोकमा पुग्दैनन् भन्छन्। मैले पनि चित्त बुझाएकै छु। मेरा पनि इच्छा पुगेनन्। अर्कै दिशातिर मोडिए। सबैका इच्छा सबैतिर कहाँ पुग्छन् र!

*नेपाली*ले मलाई लगाएको गुन, मदन पुरस्कार गुठी वा जगदम्बा प्रेसले मलाई र मेरो भविष्यलाई गरेको गोडमेल र सम्बन्धित संस्थाबाहेक *नेपाली*को मैले गरेको स्याहार-सुसारको स्मृति त मदन पुरस्कार गुठीलाई, *नेपाली*लाई कमलबाबुलाई, जगदम्बा प्रेसलाई अझै रहेछ! यो मेरा लागि अपूर्व छ। मलाई यसैमा भए पनि

सन्तोष लागिरहेको छ । अनावश्यक कुराहरू लागे पनि मेरा कुराले इतिहासको कुनै कालखण्डलाई दर्शन गराउन सके भने त्यसमा पनि सन्तोष लाग्नेछ ।

✍

> कमल बाबुमा नमस्कार।
> यसमा कति कुरा उपयुक्त भएनन् भने काट्ता म खुसी हुनेछु।
> बाबु, यसमा नेपाली ग्र हाल्नु आवश्यक छ।
> कुरा सबै यथार्थ नै हुन् भन्ने बाबुलाई थाहै छ।
> होम सुवेदी
> भद्रपुर, झापा
> २०६५ आषाढ, २३

# 'चहचहाउँदी अञ्जु'

*– हिरण्यकुमारी पाठक*

आज एकान्तमा विगतका पानाहरू पल्टाउन मन लागिरहेछ । दिन पनि बिहानदेखि नै झरी परिरहेछ । बादल भित्रभित्र आफ्ना बितेका जिन्दगीलाई सम्झना गर्न मन आतुर भएको छ । मन त मनै हो नि । कति बेला कता बहन्छ थाहा नै हुँदैन । यसै मनले गर्दा कति दिन कुइरो भित्रभित्र अल्झिएको हुन्छ जिन्दगी र यही मनले नै गर्दा वसन्त ऋतु आउनुभन्दा पहिले नै कहिलेकाहीँ मुस्काइहाल्छ जीवन । जेहोस् ओल्टाई, पल्टाई जसरी हेरे पनि यही शरीरभित्र नै छन् सबै कुराहरू, जसले मनलाई सिँगार्छ, हँसाउँछ, रुवाउँछ, भयानक पनि बनाउन पछि पर्दैन । सबै गुण, अवगुणले सुशोभित छ यो शरीरभित्रको मन, जसको सामु हामी सदैव नतमस्तक छौँ ।

सम्झनाका पानामा धेरै पहिलेको बालापनको भित्र अञ्जुको चित्र मेरो सामु आयो । अञ्जु ! हो मेरो स्कूले साथी । त्यो पनि बनारसमा वसन्त कन्या महाविद्यालय, कमच्छामा हामीसँगै पढेको साथी । भारतीयबीच हामी दुई नेपाली मित्रको कुरो मिल्थ्यो, मन मिल्थ्यो । भाषा मिल्थ्यो अनि स्वदेशको माटो मिल्दथ्यो । सानीसानी होची र अलि पातली अञ्जुको अनुहार जहिले पनि हँसिलो, चञ्चले आँखा र मधुर मुस्कानले उनमा विशेष आकर्षण थियो । मसिनो स्वरमा बिस्तारै बोल्ने उनको बानी थियो । उनी अत्यन्त सौम्य र आफ्नो घरपरिवारबारे केही कुरा नगर्ने बानी थियो अञ्जुको । उनको त्यतिबेला मैले सम्झेसम्म धेरै साथीहरू पनि थिएनन् । स्कूलको पढाइपछि उनी सीधै घर जान्थिन्, जान त म पनि सीधै घर जाने हो तर त्यसपछि स्कूलको समयभन्दा बाहिर हाम्रो कहिल्यै भेट भएन । तीन-चार वर्ष हामी एउटै स्कूलमा पढ्यौँ । मित्रताको गाँठो पनि कसिँदै गयो ।

अनि कक्षा आठपछि अञ्जु मेरो साथी कता गइन् कता । सायद उनी देश फर्किछन् होला । मेरो उनीसँग सम्पर्क भएन, किनकि आजको जस्तो त्यतिबेला ठेगाना लिएर साथीहरूसँग पत्र-व्यवहारको

चलन थिएन । हामी एक अर्काबाट अलग्गियौँ । न उनले मलाई खोजिन् न मैले नै खोज्ने प्रयास गरेँ ।

त्यसपछि अर्थात् म आई.एस.सी. मा पढ्दा मेरो पिताजी श्री तोत्रराज पाण्डेको अकस्मात् एकै दिनको व्यथाले बनारस हिन्दू विश्वविद्यालयभित्रको अस्पतालमा स्वर्गारोहण भयो र हामी पितृविहीन भएर आफ्नो स्वदेशमा फर्क्यौं । जिन्दगी त अविरल गतिले चली नै रहन्छ । म पद्मकन्या कलेजमा पढ्न थालेँ । अञ्जुको खोजखबर केही भएन । त्यतिबेलाका छोरीहरूको जिन्दगीका गोरेटामा अनेक बाधा अड्चनले भरिएको हुन्थ्यो । स्वेच्छाले बाहिर जाने वा कसैसँग सम्पर्क राख्ने आदि क्रियाकलापमा निषेध थियो । मैले बी.ए. पढ्दै गरेको बेला म विवाहबन्धनमा गाँसिन पुगेँ । तर मेरो पढाइ रोकिएन । त्यसबेला छोरी-बुहारीहरू धेरै पढ्न वा जागिरमा बाहिर जाँदैनथे । तर मेरो घरमा सासू–ससुराको उदारताले मलाई पढाइमा रोकिएन । मेरो विवाह भएको घर डिल्लीबजार धोबीधारा हो । मैले बी.ए. पास गरेँ । टोलमा गाइँगुइँ कुरा भयो । पाठकको घरकी बुहारी त बी.ए. पास भइन् रे । त्यतिबेला बुहारीले त्यति पढ्नु ठूलो कुरो थियो । यो कुरो हो, २०१७ सालको । एकदिन धोबीधाराकै एक जना वयोवृद्ध गुरु घरमा आउनुभयो । अहिले मलाई उहाँको नाम सम्झना भएन । उहाँले मलाई भन्नुभयो– “यसरी पढेपछि घरमा बस्नुहुँदैन । स्कूलमा पढाउनुपर्छ । म लैजान्छु जगदम्बा स्कूलमा । म पनि त्यहीँ म्युजिक सिकाउछु हिँड नानी” भन्नुभयो । म त छक्क परेँ । एकाएक आफूलाई जागिर खान बोलाएकोमा भित्रभित्र गद्गद भएँ । तर त्यतिबेला आफ्नो इच्छाको कुरो घरमा जाहेर गर्ने मेरो हिम्मत भएन । हाम्रो संस्कारमा सासू-ससुरासमक्ष दोहोरो कुरा गर्नुहुन्न भनेर सिकाइएको हुन्थ्यो । अत: मैले केही बोलिनँ अनि गुरुजी आफैँ गई मेरो सासू-ससुराज्यूसँग कुरो राख्नुभयो । मेरा सासूज्यू र ससुराज्यू त्यतिबेला उदारवादी हुनुभयो । उहाँहरूले सहर्ष स्वीकार गर्नुभयो र मलाई पढाउन जाने स्वीकृतिमात्र हैन, विशेष आग्रह पनि गर्नुभयो ।

म गुरुजीसँगै जीवनमा पहिलोपल्ट जागिरमा गएँ । जगदम्बा स्कूल मेरो जीवनको पहिलो खुड्किला हो जागिरको । त्यतिबेला म

आजको जस्तो थिइनँ। अत्यन्तै सोझी, लाज मान्ने र आफ्नो कामभन्दा बढी नबोल्ने प्रकृतिकी थिएँ। मलाई गुरुले खै कुनकुन ढोकाबाट भित्र लानुभयो र एउटा कोठामा राखेर त्यहाँका मानिससँग खै के-के कुरा गर्नुभयो । सबैले मलाई आदर र स्नेहका नजरले हेरेको पाएँ । केही बेरपछि मलाई ६-७ कक्षामा नेपाली पढाउनू भन्ने जानकारी गराए। भित्रको अर्को कोठामा मलाई लगियो। त्यहाँ तुरुन्तै मलाई कक्षा ६ मा नेपालीको क्लास लिन पठाए । म अलि अलमलिएँ। एकाएक यस्तो परिवेशमा मलाई अत्यन्त कठिन भइरहेको थियो । मलाई आज पनि त्यस दिनको सम्झना छ, म अलि आत्तिएँ, अलिकति डराएँ र असजिलोपनले मलाई घेरिरेको थियो । तैपनि म संयमित भएर दरिलो आँटले जीवनमा पहिलोचोटि आफू शिक्षिकाको रूपमा ६ कक्षामा एउटा नेपालीको किताब बोकी पसेँ । सबै विद्यार्थीले मलाई स्वागत गरे । नयाँ टिचर आएकोमा कौतूहलवश मलाई खुबै निहारिरहेका थिए। त्यस दिन मैले आफ्नो परिचय दिने र विद्यार्थीहरूको परिचय लिने काम गरेँ। भोलिपल्टलाई पुस्तकबाट एउटा पाठ पनि दिएँ । त्यसैबेला घण्टी बज्यो, जसको आवाजले डर-त्रासले अलमलिएकी मलाई शान्तिको लामो सास फेर्ने मौका दियो । जसको आजसम्म सम्झना छ । त्यहाँबाट शिक्षिकाहरू बस्ने कोठामा आउँदा त मलाई अत्यन्तै आनन्द आयो । छक्क परेँ म, मेरो बाल्यकालको मित्र अञ्जुलाई देख्दा । 'अञ्जु' भन्दै म अघी सरेँ । अञ्जु खुसी त भइन् तर पहिलेजस्तो खुलस्त भइनन् धेरै । मजस्तो उत्साहित धेरै देखिइनन्। उनी पनि त्यही स्कूलमा पढाउने रहिछन् । अरु स्कूल नै उनकै हो भन्ने पनि सुने । अञ्जु मेरी प्यारी अञ्जु भएकोले म दोस्रो दिन पनि उत्साहित भएर स्कूल पढाउन गएँ । मलाई अचम्म लाग्यो, यस्तो किन होला भन्ने पनि मनमा नमीठो लाग्यो। पछिपछि दुई-चार दिनमा मलाई थाहा भयो, स्कूलको अनुशासन एकदमै कडा रहेछ । धेरै कसैसँग कुरा गर्न नहुने । आफ्नो कामभन्दा बढ्ता कसैसँग सम्पर्क गर्न नहुने । केटा मानिससँग वार्तालाप गर्नु बेठीक हुने । स्कूल ठीक समयमा पुग्नुपर्ने र पूरा समय सकिएपछि मात्र घर फर्कन स्कूलको ढोका खुल्ने, बाहिरका मानिस स्कूलमा आवत-जावत गर्न नपाउने आदि इत्यादि

अनेकौँ नियमहरू रहेछन् स्कूलमा र त्यो सबैले पालन गर्नु नै पर्ने। अञ्जुको त त्यहीभित्रको कम्पाउन्डमा घर रहेछ । उनी कताबाट आइन्, कता गइन् र कहिले गइन् थाहा नै नहुने रहेछ । त्यसकारण धेरै समयपछि भेटेको साथीसँग पनि मैले धक फुकाएर कुरा गर्न पाइनँ र उनी पनि सायद नियमको परिधिभित्रै अलमलिइन्जस्तो मलाई लाग्छ आजभोलि। वास्तवमा अनुशासन हुनु र त्यसलाई लागू गर्नु एउटा पक्ष हो भने ज्यादै बन्देजमा पिँजडाको सुगाजस्तो बनाउनु पनि त ठीक होइन नि । तर त्यतिबेला मलाई यी सबै शोच आएन। जे-जे भने गर्दै गरेँ, पढाउँदै गएँ। तर बीचबीचमा मनमा विद्रोहको भावचाहिँ उर्लिरहन्थ्यो। आखिर एक दिन त्रिभुवन विश्वविद्यालयमा भर्ना खुल्यो अब म नेपाली विषय लिएर एम.ए.गर्ने भनेर त्यहाँबाट उम्किने बाटो बनाएँ र उम्कँे पनि। यसरी झन्डै १५-२० दिन मैले अञ्जुको स्कूल जगदम्बा कन्या विद्यालयमा अनुभव बटुल्न पाएँ। त्यो मेरो लागि सौभाग्यको कुरा हो ।

विदुषी अङ्गुरबाबा जोशीको घर मेरो मामाससुराको घर हो । पछि उहाँको छोरा किरण जोशीको विवाह भएपछि मैले थाहा पाएँ हाम्री अञ्जु साथी त साहित्यकार श्री कमलमणि दीक्षितकी अर्धाङ्गिनी पो रहिछन् र उहाँकै सुपुत्री रूपासँग किरणको विवाह भएछ। अञ्जु त्यतिबेला प्रसन्न भेटिइन् र त्यसबेलाको परिवेश अर्कै भैसकेकोले होला, अञ्जुसँगको पुनर्मिलनले त्यसबेला मलाई आनन्द दिलायो । हाम्रो बेलाबेलामा भेट पनि हुन थाल्यो । अञ्जु र म पूर्वमित्र, बाल्यस्कूले कुराहरूको सम्झना गर्दै रमाउँदै थियौँ ।

त्यसपछि समयसमयमा श्री कमलमणिज्यूसँग पनि भेट भइरहन्थ्यो, साहित्यिक कार्यक्रमहरूमा। एक दिन मैले मेरो स्व. बुबा श्री तोत्रराज पाण्डेको स्मृति ग्रन्थ प्रकाशित गर्न लागेकोले केही लेखिदिन उहाँसँग आग्रह गरेँ। श्री कमलमणिज्यू प्रसन्न हुनुभयो र म पनि बनारसमा नै पढेको मेरो त उहाँ गुरु नै हो, म अवश्य पनि लेख्छु केही सम्झनाका हरफहरू भनी प्रसन्न हुनुभयो । उहाँका सम्झनाका पाताहरू *तोत्र-प्रेम वृत्तान्त*मा छापिएको छ ।

तर आज मेरो मित्र अञ्जु विस्मृत रोगले पीडित छिन्। सुन्न पनि मन छैन के भएको भनेर । मेरो मित्र हँसमुख र मसिनो स्वरले बोल्दा सङ्गीतको लहर गुन्जिन्थ्यो । आज त्यही मित्र मेरी अञ्जुको अवस्था कसैलाई चिन्ने पनि छैन, के-कसो गरे भन्ने होस पनि छैन । बराबर छोरी रूपासँग सोधिरहन्छु । दुःखदायी हालचाल बुझ्न तर के गर्नु सुधार छैन। श्री कमलमणिज्यूसँग पनि भेटको बेला खबर लिन्छु । उहाँ अञ्जुलाई देवीजी भन्नुहुन्छ, "खै उस्तै हो, यो रोग नै यस्तै हो" भन्नुहुन्थ्यो । आफ्नी जीवनसँगिनीको साथ विक्षिप्त अवस्थामा साथ दिन पर्दाको पीडा दीक्षितज्यूलााई नै छ र यो कसैले बाँड्न सक्तैन, आफै नै आत्मसात् गर्न सक्नुपर्छ र उहाँले गरिरहनुभएको छ ।

अञ्जुसँगको भेटदेखि अहिलेसम्मको मेरो सम्झनामा रहेका पाताहरू यिनै हुन् । भगवान्सँग प्रार्थना छ, अञ्जु उर्फ देवीजीलाई भगवान्ले चमत्कार गरी उनको स्मृति यथावत् नै गरिदिऊन् र पुनः एकपटक हामी उही चहचहाउँदै मधुर स्वरकी धनी अञ्जुको हाँसो हेर्न पाऔँ ।

✍

# दण्ड र न्यायको प्राचीन तथा अर्वाचीन रूप

– *हर्षनाथ भट्टराई*

*मनुस्मृति*मा दण्डलाई पनि देवताको रूप मानेका छन् । यिनको वर्ण कालो, आँखा रातो हुन्छ । यिनलाई प्रजापतिले धर्मको अवतार र आफ्ना पुत्रको रूपमा जन्माएका हुन् भन्ने छ । - *मनु.* ७।२५

दण्ड नै विश्वमा शान्तिको रक्षक तथा स्थापक हो । यसको अनुपस्थितिमा शक्तिशालीले निर्बलियाहरूलाई सताउँछन् र मत्स्य न्याय फैलिन्छ (जस्तै– ठूलो माछाले साना भुरा माछाहरूलाई निलेजस्तै ठूला-बलियाले निर्बलियाहरूको अस्तित्व मेटाउँदछन् ।)

दण्ड शब्दको व्युत्पति यस्तो छ– दमनम् वा दमनात् इति दण्डः– जो अथवा जेले दमन गर्छ, प्रतिपक्षलाई बाध्य गराउँदछ, यसै गर, यसको विरुद्ध नगर भन्ने बाध्यता गराउँदछ भने यही नै दण्डशक्ति हो ।

दण्ड नै वास्तवमा राजा तथा शासन हो, हुन त यसको प्रयोग राजा अथवा जिम्मेदार अधिकारीद्वारा हुन्छ । अपराधको तुलनामा बढी कठोर दण्ड दिएमा प्रजाहरू रुष्ट हुन्छन् र कम स्तरको दण्ड दिएमा त्यसले राजा वा सम्बन्धित कर्मचारीको उपेक्षा वा हेला गर्दछन् । यसकारण राजा वा सम्बन्धित कर्मचारीले ठीकसँग जाँची-बुझी उचित दण्डको विधान प्रस्तुत गर्नुपर्दछ । यदि अपराधीलाई अपराधमाफिकको दण्ड नगर्ने हो भने तिनै अर्थात् राजा वा दण्डाधिकारी त्यस अपराध र पापको भागी हुन्छन् । दण्डको महात्म्यमा मनुको उद्गार यस्तो छ–

*दण्डः शास्ति प्रजाः सर्वा दण्ड एवा भिरक्षति ।*
*दण्डः सप्तेषु जागर्ति दण्डं धर्म विदुबुधाः ॥*

*मनु. ७।१८ ॥*

(दण्ड नै शासन गर्दछ, दण्ड नै सबैको रक्षा गर्दछ । दण्ड नै सुतेकालाई जगाउँदछ । अतएव विद्वान्हरूले दण्डलाई धर्म मानेका हुन्) ।

यस दण्डको आधारमा व्यवहार चलाउने शास्त्र वा नीतिलाई दण्डनीति भनेका छन् । यो शास्त्र अति प्राचीन हो । *महाभारत*को शान्तिपर्वको ५८ औँ अध्यायमा के बताएका छन् भने– सत्ययुगमा धेरै समयसम्म न राजा थिए, न दण्ड थियो । प्रजा कर्मानुगामिनी थियो, केही समयपछि काम, क्रोध, लोभादि दुर्गुण उत्पन्न भए । कर्तव्या-कर्तव्यको ज्ञान नष्ट भयो, अनि मत्स्यन्यायको बोलवाला भयो । यस्तो स्थिति सृजना भएपछि देवताहरूको प्रार्थनामा ब्रह्माले एक लाख श्लोक भएको 'दण्डनीति' नामको नीतिशास्त्र वा न्यायशास्त्र रचना गरे । यसैको, आवश्यकता र समयानुसार सङ्क्षिप्त गरिँदै विशालाक्ष, बाहुदन्तिक, बार्हस्पत्य, औशनसादि नीतिशास्त्र, मानवशास्त्र, अर्थशास्त्र, कामन्दकीय नीति र शुक्रनीतिसार नामका नीतिशास्त्रहरू निर्माण भए । दण्डनीतिको प्रयोग राजाबाट हुन्थ्यो । यो राजधर्मको नै एक प्रमुख अङ्ग हो ।

कौटिल्यले अर्थशास्त्रको 'विद्यासमुद्देश्य' नामक प्रकरणमा विद्याहरूको सूची दिएका छन्, त्यसमा दण्डनीतिको गणना यसरी गरेका छन् :-

*"आन्विक्षिकी- त्रयी-वार्ता-दण्डनीति श्वेति विद्या: ॥"*

कौटिल्यले वर्णन गरेका राजनीतिक सम्प्रदायहरूमा औशनस सम्प्रदायको उल्लेख गरेका छन्– जो चार विद्यामध्ये केवल दण्डनीतिलाई नै प्रमुख विद्या मान्ने पक्षमा छ ।

अर्थशास्त्रमा दण्डनीतिका निम्नाङ्कित ४ कार्य बताएका छन्–

१ अलब्ध लामार्था– पाउन नसकिने वस्तु प्राप्त गराउने ।

२ लब्धस्य परिरक्षिणी– प्राप्त भएका वस्तुको सुरक्षा गराउने ।

३ रक्षितस्य विवर्धिनी– रक्षित वस्तुको वृद्धि गराउने ।

४ वृद्धस्य पात्रेषु प्रतिपादिनी– वृद्धि भएका वस्तु पात्र र योग्य स्थानमा उचित प्रकारले विभाजन (प्रयोग) गराउने ।

अब यहाँ दण्ड शब्दको विषयमा विचार गरिन्छ–

दण्ड (लट्ठी वा दण्ड) यस शब्दको प्रयोग प्राय: सर्वमान्य अर्थमा नै गरेको पाइन्छ । उदाहरणका लागि– पशुहरूलाई नियन्त्रण गर्न अथवा एक अस्त्रको रूपमा । *शतपथ ब्राह्मण*को कथनअनुसार–

प्रतिष्ठापनको समयमा असुरहरूलाई भगाउनका लागि दण्ड (दण्डा) दिइन्थ्यो । ब्राह्मण बटु वयस्क भएपछि 'उपनयन' संस्कारको समयमा पनि दण्डग्रहणको महत्त्व गाएका छन् ।

दण्डको आशय लौकिक शाक्तिको रूपमा राजाहरूबाट दण्डको व्यवहार हुन्थ्यो (राजप्रेषितो दण्डाः) । तर आधुनिक शब्दावलीमा राजा नै दण्ड-विधानको उद्‌गम हुन्थ्यो र पछिसम्म पनि विधानको यो पक्ष स्पष्टतः राजाकै हितमा केन्द्रित थियो। पंचविंश ब्राह्मणमा अब्राह्मणवादी व्रात्यहरूको एक चारित्रिक विशेषताको रूपमा अनपराधीहरू (अदण्डय)लाई पनि दण्ड दिने उल्लेख छ ।

दण्ड पनि सत्त्व, रज, तम र अव्यक्त गुणको अनुकूल चार प्रकारको मानेका छन् । जस्तैः–

१ अतितामस– अधम पशु-प्रकृति र पाशव घोर साहस अपराधका लागि विविध प्रकारका शारीरिक दण्ड– छेदन, भेदन, ताडन आदि ।

२ लोभी (तामस) प्रकृति र अपराधका लागि धनदण्ड (जरिवाना) आदि

३ उद्धत (राजस) को पनि केही प्रकारका अरू दुवै, अनि काराबासमा बन्धन, सपरिश्रम, दासता आदि ।

४ केही सात्त्विक– मृदुस्वभावका लागि, जसबाट यस्तै कुनै विशेष कारणबाट, अचानक मूलबाट, सहसाक्रोध, सहसा कामबाट अपराध भएको छ भने, जो पश्चात्ताप र प्रख्यापन गर्दछ, आफूबाट भएको वा आफूले गरेकोमा लाज मान्दछ र प्रायश्चित गर्न तयार हुन्छ भने यस्ताको लागि तीन, पाँच, सात, पन्ध्र, एक्काइस दिनको उपवास, चान्द्रायण, कच्छ्रेसांतपन आदि, सूचित वा विहित र उचित छन् । यी उपवास सरल छैनन्, शरीर र मनमा निकै सन्ताप गराउँदछन् र भविष्यका लागि सदाचारमा निष्ठित र शुद्ध पनि मान्दछन् ।

ऋग्वैदिक कालमा धर्म, धर्मन् शब्द  अनिपछि 'विधान' अथवा प्रचलनका लागि व्यवहृत नियमित शब्द हुन् । तर न्यायिक व्यवस्था

र प्रचलित विधान-संहिताको सम्बन्धमा प्रारम्भिक साहित्यमा पाइने प्रमाण ज्यादै कम छन् । आर्कोतर्फ *धर्मसूत्र*मा यिनको पूरा विवरण पाइन्छ ।

दण्ड विधान (फौजदारी कानुन) महत्त्वको दृष्टिले वैदिक साहित्यमा मान्य अपराधहरूमा अतिविविधता छ। वास्तविक अपराध र जसलाई आज काल्पनिक शारीरिक दोष वा केवल परम्परागत प्रचलनको उल्लङ्घनलाई मानिन्छ, तिनका बीचमा कुनै स्पष्ट विभेदकरणको भेद गरेको पाइँदैन। यहाँ शारीरिक दोषमा (दूषित नङ, कुरूप दाँत), अनि जेठी बहिनी छँदै कान्छीको विवाह हुनुलाई हत्याका साथ राखिएको छ, यद्यपि त्यसका साथ समीकृत भएको छैन। वर्णित अपराधहरूमा भ्रूणहत्या, मनुष्यहत्या, स्त्रीहत्या अनि गम्भीर अपराधमा ब्राह्मणहत्यालाई पनि लिएका छन् । ब्राह्मणहत्याको पाप अश्वमेघ यज्ञबाट मात्र छुट्दछ । पछि गएर पञ्चविंश ब्राह्मणमा भ्रूणलाई पनि ब्राह्मणसमान मानेका छन्। यही क्रममा विश्वासघातको दण्ड मृत्यु बताएका छन्। यो क्रम केही पछिसम्म रह्यो। तर राजा वा जनताको अधिकारको अन्तर्गत स्थापित कुनै विशेष न्याय व्यवस्थाको उल्लेख पाइँदैन। वैर-शोधन प्रथाको विषय पनि बताएका छन्, जुन यस कुराको प्रमाण के हो भने– न्याय त्यस्ताको हातमा थियो, जसबाट तिनको हानि हुन्थ्यो । आर्कोतिर सूत्रहरूमा अपराधबाट राजाको शान्ति भङ्ग हुने उल्लेख छ, अनि त्यस्तो क्रियाकलापमा दण्ड दिने अधिकार पनि निर्देश गरेका छन् ।

देवानी (सिविल) कानुन वा विधि– वैदिक साहित्यमा देवानी कानुनको उल्लेख कम छ । कुटुम्बका सम्बन्धीहरू र कुटुम्बका सम्पत्तिको विवरणमा उर्वराक्षेत्र आदि पतिको मानिन्छ (उर्वरा, उर्वरा-क्षेत्र र उर्वरा-पति)। यिनको बन्डा वा अंशको भागबन्डालाई दाय भनिन्थ्यो। भू-सम्पत्तिको विक्री-वितरण निषिद्ध थियो, तर दानको रूपमा वा दक्षिणा भनी दिन-लिन सकिन्थ्यो, यो पनि पछि गएर रोकिदिए । *शतपथ ब्राह्मण*मा यस्तो व्यवस्था दिए– दान र क्रय, जसमा विनिमय सम्मिलित थियो । भूमिमा प्रारम्भिक अधिकार त नि:सन्देह कब्जाबाट र जातिका मानिसमा विभाजन हुन्थ्यो, जब कि स्थावर सम्पत्ति सामान्यतया कब्जाबाटै अधिकारमा आउँथ्यो, कसरी

भने आफ्नै जमिनमा बढेकोबाट पाइएको होस्, वा अनधिकृत (बेवारिसी) धरतीमा पाइएको होस् वा त्यो कुनै व्यक्तिको नभएर ऐलानी पर्ती होस् । *धर्मसूत्र*मा सम्पत्तिको वितरणसम्बन्धी विधानमा के स्पष्ट छ भने (*गौतम ध.सू.* १०.३६ मा) हराएको सम्पत्ति पाइएमा त्यो राजालाई सुम्पिनु भन्ने सङ्केत छ, जहाँ त्यसको एक अंश पाउनेलाई दिनुपर्ने तर यदि त्यो पाउने मानिस ब्राह्मण हो भने, त्यो सबै उसैलाई दिनु । वैदिक साहित्यमा ऋणसम्बन्धी संविदा (लेख) बाहेक अरू विषयको संविदा पाइँदैन, यस्तो हुनु तात्कालिक समाजको प्रारम्भिक अवस्थामा स्वाभाविक नै थियो ।

प्रक्रियाको सम्बन्धमा उल्लेख नभए पनि यजुर्वेद ३०, १० मा र ब्रै. तै. ३.४.६. र १ मा प्रश्नि, अभिप्रश्नि र प्रश्न-विवाकको उल्लेख छ, जुन क्रमशः वादी, प्रतिवादी र न्यायाधीश मानेका छन् । यी शब्द प्रारम्भिक अवस्थाका न्यायिक प्रक्रियाका सूचक हुन्, जुन हुन सक्छ यिनैबाट पञ्चहरूको फैसला हुन्थ्यो । यही भाव मध्यमशी= मध्यस्थ भन्ने शब्द प्रयोग भएको छ । मध्यमशीको अर्थ कसैले न्यायाधीश पनि गरेका छन् ।

पछि आएर त राजा नै प्रमुख सिविल (देवानी) का न्यायाधीश बनेका देखिन्छन्, हुन सक्छ पहिले पनि यही व्यक्ति नै मुख्य जज भएको होला । आफ्नासम्बन्धी पुरुषहरूको सल्लाहबाट न्याय गर्थे होलान्, तर यी सब अनुमानमा आधारित हुने कुरा हुन् । *(गौ.ध.सू., बौ.ध.सू.आ.)* ।

साक्षीको निमित्त ज्ञात र सरकारी पुलिसको परिचय दिँदा 'उग्र' पनि प्रयोग गरेका छन्, तर उत्तरकालमा यो शब्द त्यति प्रचलित भएन ।

वास्तवमा पुलिस शब्द नै प्राचीन प्राकृत शब्द हो । यो शब्द वेदमा प्रयोग गरेको नपाइए पनि शब्द भने प्राचीन हो । संस्कृत *मृच्छकटिक* नाटकमा 'राज पुलिसै' भन्ने वाक्य प्रयोग भएको छ । *ऋग्वेद*मा 'जीवगृम' शब्द प्रयोग छ । यो सहीरूपमा अपराधीलाई हानि-नोक्सानी नपुऱ्याई जिउँदै पक्रने पुलिको अर्थमा लिएका छन् ।

*पञ्चविंश ब्राह्मण*मा अग्निपरीक्षाको प्रसङ्ग पनि छ । त्यहाँ बत्सनामका व्यक्तिले आफ्नो ब्राह्मणत्व जोगाउन दण्डको रूपमा अग्निको ज्वालाबाट नजलीकन पार भएर आफ्नो ब्राह्मणत्व प्रमाणित गरेका थिए । सम्भव छ, यो अग्निपरीक्षा आपसी झगडा सुल्झाउनका लागि सपथको रूपमा लिने प्रथा होला । यो जटिल तथा कठोर परीक्षा रामायणकालमा श्रीरामले पनि सीताजीको शुद्धता प्रमाणित गर्न प्रयोग गरेका थिए । यस प्रसङ्गमा यति त अवश्य भन्न सकिन्छ– न्यायको क्षेत्रमा एक ब्राह्मणलाई अब्राह्मण भनेर नसीहत भने अवश्य दिइन्थ्यो । (*तै.सं.*२.५.११.८) ।

नैतिकताको अन्तर्गत शिशुको त्याग, वृद्ध-वृद्धाको त्याग, वेश्यावृत्ति, व्यभिचार, अनाचार आदिको पनि उल्लेख पाइन्छ । *काठक संहिता*को एकस्थलमा बाल-बालिका र शिशुहरूको परित्यागको उल्लेख गरेका छन् । परित्याग मात्र होइन, तिनलाई कहीँ निर्जन स्थानको कुनामा सुताएर वास्ता नगर्नु पनि त्याग हो । जब कुनै, कसैको एक बालकलाई लिएर धर्मपुत्र पनि बनाउन सक्थे । तैपनि तिनताका बालिकाको जन्म लोकप्रिय थिएन । यो कुरा आरम्भिक समयमा चलेको देखिन्छ । *ऋग्वेद* र *अथर्ववेद*मा प्रयुक्त “उद्-ह्विता:” शब्दको अर्थ परित्यक्त वृद्ध व्यक्ति भन्ने गरेका छन् ।

ऋग्वैदिक कालमा वेश्यावृत्तिको अस्तित्व थियो, तर कति र कस्तो थियो भन्ने विषयमा एक मत छैन । परिवारमा भ्रातृ-विहीन कन्याहरू प्राय: वेश्या बन्नका लागि विवश हुन्थे। एक अवैध सन्तान त्याग्ने सन्दर्भ *ऋग्वेद*मा पाइन्छ । पुंश्चली र महानग्नी आदि शब्दबाहेक, जसको निश्चित रूपले ‘वेश्या’ अर्थ नै हो। अत: वेश्यावृत्तिका अरू सन्दर्भ पनि पाइन्छन् । कुमारी-पुत्र र अविवाहिता कन्याका पुत्र (अग्रू) को *ऋग्वेद*मा दिएअनुसार परित्याग र तिनका उपर पशुको आक्रमण हुनु पनि, यही कुराको सङ्केत गरेको मानिन्छ ।

व्यभिचारको विषयमा आर्यजातिमा प्रभावित स्त्रीका पतिको विरुद्ध गरिएको गम्भीर अपराध मानिन्थ्यो। यसर्थ पुराना धर्मशास्त्रहरूमा यस विषयमा विविध नियमहरू उद्धृत गरिएका छन् । व्यभिचारका समयमा पक्रिएका व्यभिचारीको वैधताअनुसार बधसम्म पनि दिन सक्थे। ‘वरुण-प्रधासस्’ नामक संस्कार, यसमा एक पत्नी आफ्ना प्रेमी

अथवा प्रेमीको नामोल्लेख गर्दछे भने, वास्तवमा पतिता पत्नीको कारण परिवारमा लागेको लाञ्छनाको प्रभावलाई बहिष्कृत गर्ने एक पवित्र माध्यम मानिएको देखिन्छ ।

आर्य पुरुष र शूद्र स्त्रीको सम्बन्धको विषयमा *यजुर्वेद*मा उपलब्ध सन्दर्भ अनि एक श्रोत्रिय (ब्रह्मनिष्ठ धार्मिक ब्राह्मण)की पत्नीका साथ भएको सम्बन्धको प्रायश्चितका निमित्त *बृहदारण्यक उपनिषद्*मा दिएको मन्त्र धेरै नै उपयुक्त निष्कर्षतर्फ सङ्केत गर्दछ ।

अनाचार– परिवारमा एकोदरा भाइ तथा बहिनीको विवाहलाई अनाचार मानेका छन् । जस्तै: *ऋग्वेद*मा वर्णित यम र यमी, दाजु-बहिनीको त्यो आख्यानबाट व्यक्त हुन्छ, जुन स्पष्टरूपमा सङ्केत गर्दछ– यसकिसिमको विवाह वैदिक कालिक भावनामा पनि अनुमोदित थिएन । *ऋग्वेद*मा अर्को एक सूक्त पनि छ– जसमा यसकिसिमका अनाचारसम्बन्धी सन्दर्भ निहित प्रतीत हुन्छ । *ऋग्वेद*मा प्रजापति र उनकी पुत्रीको बीचमा पनि विवाह-सम्बन्धको उल्लेख भए पनि यसलाई रूपक मानेर आकाश, पृथ्वी र वर्षाको प्रतीक वा रूपक कल्पना मान्दछन् । यही कुरा उत्तरकालमा वैदिक सन्दर्भ अर्थात् अथर्ववेदीय सूत्रको आधारमा अनाचार नै मानिन्थ्यो र एक पक्षमा दण्डनीय नै थियो ।

अब सूत्रकालमा ओर्लेर हेर्ने हो भने दण्ड शब्दले कुनै अपराधका लागि न्यायालयद्वारा जुन रुपियाँ आदि जरिवाना गरिन्थ्यो, त्यसलाई दण्ड मानिएको छ । पाणिनिको प्रसिद्ध अष्टाध्यायी सूत्रमा– दण्ड व्यवसर्गयोश्च– ५ ।४ ।२ । जस्तै– द्विपदिकां दण्डित: द्विशतिकां दण्डित:, अर्थात् चाँदीका द्विपाद, द्विपादमुद्रा वा दुई सय, रुपियाँको जरिवाना । तर दण्ड शब्दको योभन्दा पनि विस्तृत अर्थ थियो– जसको अन्तर्गत शारीरिक दण्डको पनि गणना हुन्थ्यो । जस्तै– दण्डमर्हति दण्य: ५ ।१ ६६ । यास्कले । यस अर्थमा दण्डय शब्दको प्रयोग गरेका छन् । मुसलको मार खान योग्य अपराधीलाई मुसल्य वा मौसल्य भनेका छन् ।

कुमारघात (बाल हत्या), शीर्षघात (३ ।२ ।५१), भ्रूणहत्या (६ ।४ ।१७४), ब्रह्महत्या (ब्रह्महा ३ ।२ ।८७) आदि महापातकको पनि उल्लेख गरेका छन् ।

यसपछि हामी पौराणिककालमा आएर विचार गर्दा वैदिक कालदेखि नै क्रमशः सर्दै आएका नैतिकता र अनाचार विषयमा निर्दिष्ट सामाजिक विविध-विधान, नियमका आधारमा निषेधित कार्यहरूलाई नै दण्ड्य अपराध मानेका छन् । *मनुस्मृति, याज्ञवल्क्य स्मृति* र अरू स्मृतिका पछि पौराणिक कालमा *शुक्रनीति, कामन्दकीय नीति, विदुर नीति, धौम्यनीति* र *कणिकनीति* आदि छन् । यी नीतिहरूमा अरू सामाजिक नीतिभन्दा विशेष गरी राजनीतिलाई प्राधान्यता दिएका छन्। पौराणिक नीतिमा माथि बताइएका अनाचारसम्बन्धी नीतिहरूमा– गुरुजल्पगामी, परस्त्री-गामी, घटीबढी वर्णमा विवाह हुनु, दाजु-बहिनीमा विवाह हुनु, सगोत्रमा विवाह हुनु, पात्र बहिष्कृत जातिको स्पर्शमा शुद्धता नहुनु, विभिन्न नीच जातिका स्थान र त्यस्तो देशाटन गर्नु, तिनीहरूले स्पर्श गरेको खानु आदिलाई लिएका छन् । शूद्रान्न पनि ग्रहण नगर्नु भनेका छन्। जस्तै– शूद्रान्न ब्रह्मवर्चसं (शूद्रान्नले ब्रह्मत्व नाश हुन्छ) आदिआदि छन् । यहाँ निषिद्ध देशाटन नगर्नु भनेकोमा– गण्डकी बाहुतरणात् पुनः संस्कार मर्हति (अर्थात् गण्डकीको शाखा नदी तरेमा दण्डस्वरूप फेरि व्रतबन्धादि गर्नुपर्छ) आदि ।

नैतिक पक्षमा भ्रूणहत्या, गोहत्या, ब्राह्मणहत्या, शिशुहत्या, गर्भिणीहत्या, शिशुत्याग, विनाकारण पत्नी त्याग आदि अनेक प्रकारका पापहरू दण्डित पापका क्षेत्रभित्र पर्दछन् । पुराणकालमा चलेका अनन्त कथाका विभिन्न प्रसङ्गभित्र देखिने सामाजिक अपराधहरू सबै दण्डित मानिएका छन्। कन्याहरण पनि एक दण्डनीय अपराध मानेका छन् ।

हामी नेपाली बुद्धिजीवीहरू न्याय भनेर जुन अर्थबोध गर्दछौँ, त्यो वास्तवमा प्राचीन कालमा वेद, ब्राह्मण, उपनिषद् र योगसूत्र, ब्राह्मणसूत्र आदि ग्रन्थहरूमा अध्यात्म र अनध्यात्म विषयको ज्ञानलाई न्याय वा दर्शन भनेर निर्देशन गरेको छ। यसमा प्रमाण, प्रमेय आदि १६ युक्तिहरू छन् । फेरि प्रत्यक्ष, अनुमान, उपमान र शाब्द (श्रुति) प्रमाणहरू सबै जीव र ब्रह्मको अनुसन्धानादि विषयमा आधारित छन् । अतः यहाँ हाम्रो समाजमा न्याय शब्दले नयाँ अर्थ ग्रहण गरेको हुनाले यस विषयमा केही विवेचन गरिन्छ ।

न्यायको अर्थ हो– वास्तविक वस्तुस्थितिको अन्तस्तलसम्ममा जेले पुऱ्याउँदछ वा त्यस स्थानमा पुऱ्याउने प्रक्रिया वा युक्ति। यसको विग्रह यस्तो छ– नयति अनेन– नि+इ+घञ्=न्याय। यसले प्रणाली, तरिका, रीति, नियम, पद्धति, योजना आदिलाई बुझाउँदछ। हाम्रो प्रस्तुत विषय यस्तो छ– वैदिक कार्यप्रणाली (कानुनी कारबाही), कानुनअनुसारको निर्णय, दण्ड आदि लिइएको छ।

न्याय समाज दर्शनको एक यस्तो आधारभूत धारणा हो, जसमा सामाजिक चिन्तनको आरम्भदेखि नै विचार हुँदै आएको छ। इतिहासमा न्यायका अनेकौँ व्याख्या भएका छन्। आधुनिक न्यायशास्त्रमा न्यायको अर्थ– सामाजिक जीवनको त्यो अवस्था हो, जसमा व्यक्तिको आचरण समाजको व्यापक कल्याणका साथ समन्वय गरिन्छ।

यो त्यस्तो मानदण्ड हो, जसको आधारबाट मानवीय सम्बन्धको सन्दर्भमा उचित र अनुचितको निर्णय गर्दछ। कानुन (विधि) को परिधिमा जुन पक्षको हानि वा क्षति भएको छ, त्यसलाई उचित अधिकार दिनु, दिलाउनु र अपराधीलाई उचित दण्डको प्रावधान हुनु न्यायको वास्तविक उद्देश्य रहेको हुन्छ।। नैतिकता र सामाजिक जीवनको सन्दर्भमा न्यायको सङ्कल्पनाले उचित-अनुचितको गहन विश्लेषण गर्दछ र यस्तो मानदण्ड निर्धारित गर्दछ, जसबाट त्यहाँ उचितको प्रतिष्ठा र अनुचितको निराकरण गर्न धेरै सुविधा हुनेछ।

न्यायले अपराधीलाई दण्डको निर्देशन गर्नुका साथै व्यथित पक्षलाई उसको मौलिक अधिकार पनि दिलाउँछ। समाजको औपचारिक जीवनमा न्यायलाई निश्चित कानुन र प्रक्रियामा ढालेर तदनुरूप न्याय गर्ने कार्य न्यायिक निकायलाई सुम्पिदिन्छ। तर न्यायको वास्तविक समस्या धेरै नै गम्भीर हुन्छ र त्यसलाई सम्पूर्ण सामाजिक सम्बन्धको परिप्रेक्ष्यमा हेर्नुपर्दछ।

सामान्यत: न्यायको प्रक्रियागत स्वरूपको विचार युगविशेषमा, सामाजिक परिवेशमा प्रचलित मूल्य र मानदण्डका साथ जेलिएर रहन्छ, यिनै मूल्य र मान्यताहरूले प्रचलित समाज-व्यवस्थालाई सहयोग गर्दछन्। व्यवस्था परिवर्तन र सामाजिक चेतनाको विकासका साथ-साथै न्यायको मानदण्ड पनि बदलिँदै जान्छ। परम्परागत

समाजमा न्यायको उद्देश्य पहिलेदेखि कायम भएर आएको व्यवस्थालाई यथावत् कायम राख्नु नै ठीक हुन्छ, तर आधुनिक समाजमा न्यायको मुख्य सरोकार यस्तो समस्यासित हुन्छ, जुन वर्ग सामाजिक स्थितिको विवशताले गर्दा आफ्नो प्राप्तव्यबाट वञ्चित हुन पुगेको छ, यस्तालाई उचित अधिकार कसरी दिन वा दिलाउन सकिन्छ । अत: आजको समाजमा न्यायको समस्या मुख्यत: सामाजिक न्यायको समस्या बनेको छ ।

पौराणिक कालमा वर्णित न्याय र दण्डको व्यवस्था पुराणकालभन्दा पनि धेरै प्राचीन कालको हो । जस्तै– एक दिन सनकादि चार कुमारहरू भगवान् नारायणको दर्शन गर्न वैकुण्ठ गएका थिए । जय-विजय नाम गरेका वैकुण्ठका द्वारपालले ती सनकादि चार कुमारलाई ढोकामा नै रोके। यत्तिकैमा रिसाएका ती चार कुमारहरूले आफूहरूलाई रोकेकोमा ती द्वारपालेलाई श्राप वा दण्ड दिए। त्यो श्राप कस्तो थियो भने तीन जन्मसम्म राक्षसकुलमा राक्षस भएर जन्म लिनुपरोस् भन्ने श्राप दिएका थिए। भित्र जान रोकेको यत्ति सानो कुरामा पनि यत्ति ठूलो श्राप (दण्ड) दिएको, भित्र बसेका नारायणले थाहा पाए। यी सनकादि कुमारहरूलाई अभिमान चढेछ, अत: यिनलाई वैकुण्ठमा प्रवेश गराउनहुन्न भनेर भगवान् स्वयं द्वारमा नै आएर दर्शन दिई कृतार्थ गराएर फर्काइदिए । यता वैकुण्ठमा भित्र नलगी द्वारबाट नै फर्काइदिनु पनि उनीहरूलाई दण्डकै बरावर थियो ।

हामीले प्राचीन समयको अर्थात् सत्य, त्रेता आदि युगको व्यवहारतर्फ दृष्टि दियौँ भने के थाहा पाइन्छ– त्यसबखत सत्य, धर्म, न्याय आदिका निमित्त आफ्नो प्राण, सर्वस्व आदि आहुति दिन पनि हिचकिचाउँदैनथे । आफ्नो सत्यवादिता कायम राख्नका निमित्त हरिश्चन्द्रले कस्तो दु:ख भोगे, यो कुरा उनका जीवनी पढ्ने सबैले बुझेकै छन्। उनले आफूलाई मसानको काम गर्ने चाण्डालको हातमा बेचिदिए, तैपनि सत्यको मार्गबाट उनी कहिल्यै विचलित भएनन्।

प्राचीन शास्त्रकारहरू बताउँछन्– सत्ययुगमा धर्मका चार पाउ थिए। त्रेतामा धर्मको तीन भागमात्र बाँकी रह्यो, त्यो एक भागमा राजनीतिको प्रभाव परेको थियो। श्रीराम त्रेतायुगमा नै थिए।

उनको प्रजावात्सल्यको आर्को कुनै उदाहरण अन्त कहीँ पाइँदैन । धोबीले गरेको दोषारोपण सबैले बुझेकै छन् । तिनताका प्रजाको हितमा पूरा ध्यान दिइन्थ्यो, एक मामुली धोबीको भनाइमा पत्नी सीतालाई त्यस्तो अवस्थामा बनमा पठाइदिए, सदाको लागि त्यागिदिए, जसको कल्पनासम्म पनि गर्न सकिँदैन । यो कुरा सत्य हो, तथापि माता सीतालाई रामले लङ्कामा अग्निपरीक्षा गरेर नै लिएर आएका थिए, परन्तु प्रजाको त्यस वर्गको भावनालाई सम्झनु के सानो कुरा थियो त ?

वनबासको समय, त्यसमा पनि रावणले सीता हरिँदा श्री राम अति विह्वल भएर जङ्गलका लहरा, वृक्षहरू, चराचुरुङ्गी, मृग, भमरा आदिसित अत्यन्त दुःखी भएर के तिमीहरूले सीतालाई देखेका थियौ भनेर बारम्बार सोधिरहेका थिए । त्यस्ता रामले पछि पूर्ण गर्भा भएकी सीतालाई कुन मनले कसरी वनमा पठाए । उनले आफ्नो मनलाई कसरी नियन्त्रण गरे होलान् । यसैलाई भन्दछन् प्रजावात्सल्य ।

त्यसबेला अर्थात् श्रीरामको शासनकालमा त एक सामान्य गल्लीको भुस्याहा कुकुरलाई पनि यस्तो अधिकार थियो, जसको आधारमा त्यसले पनि सरासर श्रीरामको समक्ष आफ्नो पीर-मर्काको बारेमा उजुर गर्न सक्थ्यो । यो कुरा *बाल्मीकिरामायण*को एक कथाको प्रसङ्ग यहाँ दिइन्छ । यो कथा *बा.रा.* उत्तरकाण्ड ५८ अध्यायमा छ । भगवान् रामले आफ्ना प्रजाको निमित्त यस्तो नियम बनाइदिएका थिए– यदि कुनै व्यक्ति वा प्राणी कुनै समयमा पनि द्वार खटखटाएर न्यायको गुहार माग्न सक्थ्यो ।

एक दिन भगवान् राम आफ्ना सभासद्हरूका साथ कुनै गम्भीर विषयमा छलफल गरिरहेका थिए । अचानक उनले लक्ष्मणलाई भने “लक्ष्मण ! बाहिर गएर हेर त, कोही न्याय पाउने आशाले खडा भएको त छैन ।” लक्ष्मणले बाहिर गएर हेरे, बाहिर त त्यस्तो कोही थिएन ।

भगवान् रामले लक्ष्मणलाई फेरि हेर्न भने । यसपटक लक्ष्मणले बाहिर द्वारमा त केवल एक कुकुरमात्र खडा छ भने । श्रीरामको आज्ञामुताविक त्यस कुकुरलाई अविलम्ब लक्ष्मणले रामका सामुन्ने

हाजिर गराए । अनि रामले कुकुरसित उसको व्यथा सोधे– कुकर भन्दछ– "महाराज म हजुरको राज्यमा रहने एक कुकुर हुँ । हिजो राति म सडकमा घुमिरहेको थिएँ, विनाकारण एक भिक्षुले मेरो शिरमा डन्डाले बेसरी हान्यो । हजुर हेरिबक्सियोस्– अहिलेसम्म पनि यसरी रगत बगिरहेको छ । म निर्दोषीलाई अनाहकमा प्रताडित गर्ने त्यस व्यक्तिलाई सजाय हुनै पर्छ ।"

भगवान् रामको आज्ञामुताविक त्यस भिक्षुलाई समाएर उपस्थित गराए । अनि भिक्षुसित कारण सोधियो । भिक्षु भन्दछ– हिजो राति भ्रमण गरेर म फर्कंदै थिएँ, मेरो मानसिक स्थिति पनि ठीक थिएन । अचानक मेरो पछिपछि भुक्तैभुक्तै मलाई टोक्न आयो, अनि मैले यसलाई डन्डाले ठटाएको हुँ । भगवान् राम कुकुरलाई भन्दछन्– "ए श्वान ! तँमाथि अन्याय भएको रहेछ । भुक्नु तेरो स्वाभाविक कर्म हो । प्रताडित गर्नु मानिसको स्वाभाविक कर्म होइन । अब तँ नै बता यस भिक्षुलाई केकस्तो दण्ड दिने ?"

कुकुर भन्दछ– "हे भगवान्, यदि हजुर स्वार्थसिद्धिनामक त्यस भिक्षुलाई सजाय दिन चाहिबक्सन्छ भने, त्यसलाई कालन्जर मठको महन्त बनाइबक्सियोस् ।" भगवान् त वचनबद्ध थिए, उनले त्यसै गरिदिए । परन्तु उनले यस कुराको कारण पनि सोधे– "आखिर त्यसलाई सजायको बदलामा पुरस्कार दिन किन चाहेको ?" कुकुर भन्दछ– "त्यहाँ प्रशस्त भेटीघाटीहरू चढाउँछन्, धेरै प्रकारका वस्तुहरू चढाउँदछन् । त्यसबाट मानिसहरू ती वस्तुहरू खाने लोभबाट आफूलाई बचाउन सक्तैनन् । म पनि पहिले अर्थात् अघिल्लो जुनीमा त्यहाँको महन्त थिएँ । मैले नखानका लागि आफूलाई रोक्तारोक्तै पनि पूजाको धन लिएँ, खाएँ, त्यसैको फलस्वरूप आज मेरो यो अधोगति हुनाको कारण हो ।"

यहाँ प्रश्न यो होइन कि– स्वार्थसिद्धिनामक भिक्षुलाई सजाय मिल्यो वा मिलेन अथवा मिल्यो होला– यहाँ त त्यसबेला कुकुरलाई पनि यस्तो अधिकार थियो, अर्थात् कुकुरजस्तो क्षुद्र प्राणीले पनि न्याय पाउनका लागि कहीं कतै अलमलिनुपर्दैनथ्यो ।

भगवान् रामको समयमा वर्षमा दुईपटक यस्तै महासभाको आयोजन हुन्थ्यो, जसमा त्यसबेला चलेको विधि (कानुन) को औचित्य

र अनौचित्य अनि प्रासङ्गिकता छ-छैन भन्ने विषयमा पनि बहस हुन्थ्यो र हरेक वर्ष घटेका घटनाहरूको आलोकमा विधिको संशोधन पनि हुन्थ्यो। प्राचीन कालका यस्ता विधि-विधानहरू प्रशस्त छन्। तर यहाँ यही एउटाबाट नै यस विषयमा प्रशस्त हुनेछ।

एक दिन राजाको दरबारबाट चोरहरूले मालसामान चोरेर ल्याए, पक्राउको डरले जङ्गलमा तपस्या गरेर बसिरहेका माण्डव्य ऋषिको आश्रममा छोडेर भागे। पछि राजाका प्रहरीले ती ऋषिलाई चोर ठानी राजाकहाँ लगे। त्यसबेलाको नियम-कानुनअनुसार चोरलाई फाँसी वा शूलीमा चढाउने गर्थे, ऋषिलाई चोर ठानी त्यही सजाय दिँदा ऋषिको तपोबलले उनलाई त्यस सजायको कुनै असर परेन। यस्ता सजायहरू युगअनुसारका कथा वर्णनका सिलसिलामा पुराणहरूमा प्रशस्त पाइन्छन्।

पौराणिक कालपछिको एक प्रमुख ग्रन्थ चाणक्यको *कौटलीय अर्थशास्त्र* छ। यस ग्रन्थको एक प्रकरणमा न्याय र दण्ड विषय दिएको छ। त्यसमा धर्मस्थ भनेर न्यायाधीशलाई जनाएका छन्। तिनताका जनपद सन्धि न्यायालय, सङ्ग्रहण न्यायालय, द्रोणमुख न्यायालय र स्थानीय (इलाका) न्यायालय हुन्थे। यी न्यायालयहरू पनि दुई प्रकारका हुन्थे– धर्मस्थीय (देवानी) र कण्टक शोधन (फौजदारी) न्यायालय प्रचलित थिए। धर्मस्थीय न्यायालय धर्मस्थले सञ्चालन गर्थे, कण्टशोधन न्यायालयमा भने प्रदेष्टा र अमात्यले पनि काम गर्थे।

धर्मस्थीय न्यायालयमा प्रायः सामान्य व्यक्तिहरूको पारस्परिक लेन-देन, झगडा-तगडा र आपसी विरुद्धको अपराधसम्बन्धी विचार गर्थे। यसमा हुने दण्ड सामान्य खालको जरिमाना नै हुन्थ्यो। कण्टक शोधनमा त्यस्ता अभियोग (मुद्दा) को विचार हुन्थ्यो, जहाँ राज्यको विरुद्धसम्बन्धी वा घूसखोरी, दुराचार वा हत्या आदिसित सम्बधित हुन्थे, यस्ताबाट राज्यमा प्रभाव पर्ने हुनाले, यस्ता मुद्दामा भारी जरिमाना वा कैदको सजायमात्र नभई प्राणदण्ड पनि दिन सक्थे। 'कण्टक शोधन'को अर्थ हो, राज्य वा प्रजाको कण्टक (काँडो वा षड्यन्त्र, आतङ्क आदि) लाई हटाउनु वा निर्मूल पार्नु। यस्ता मुद्दाहरूलाई आजकाल सरकारवादीमा गणना गरिन्छ।

साधारण जनसमूहको लेनदेनसम्बन्धी अर्थात् आर्थिक कारोबारका मुद्दाहरू धर्मस्थीय न्यायालयबाट हेरिन्थ्यो, भने अरू शिल्पीहरूको रक्षा, व्यापारीको र तिनबाट रक्षा, कन्या र स्त्रीका उपर बलात्कार गर्ने, अतिचार (सामाजिक नियम उल्लङ्घन) गर्नेसम्बन्धी मुद्दाहरू कण्टक शोधन अदालत अर्थात् अहिलेको फौजदारी अदालतको समान अदालतमा विचार गरिन्थ्यो ।

न्याय गर्ने नियमको आधार– जुन नियम वा कानुनको आधारमा अभियोग (मुद्दा)को निर्णय गरिन्छ– त्यसका आधारको सम्बन्धमा यस्तो बताएका छन्– धर्म, व्यवहार, चरित्र र राजाज्ञा यी न्यायका चार पाउ (अर्थात् आधार) हुन्। यीमध्ये धर्म त्यही हो– जुन सत्य छ; व्यवहार त्यसलाई भनिन्छ, जुन कुराको साक्षीद्वारा निर्णय गरिन्छ। चरित्र त्यो हो– पुरुषको सामूहिक आचरण वा प्रचलनमा निर्भर हुन्छ; राजाज्ञाको अर्थ हो– राजकीय शासन ।

कौटिल्यको समयमा दण्डका स्वरूप कस्ता थिए, जस्तै–

*"परं पापकर्मणां नववेत्रलता:, द्वादशकं द्वावूरुवेष्टौ...*
*अष्टादर्शक कर्म ॥"*

*४।८।२८ कौ. अ. ॥*

नौ हाते लामो बेतको लट्ठीले बाह्र बेत लगाउनु, दुई खुट्टा जोडेर बाँध्नु र टाउको पनि बाँध्नु, टाङ फट्टाएर बाँध्नु, त्यस्तै दाहिने हात दाहिने खुट्टाका साथ बाँध्नु, दुवै हात बाँधी झुन्ड्याइदिनु, दुवै खुट्टा बाँधी झुन्ड्याइदिनु। हातका नङको जोर्नी वा अन्तर (नङछुरी) मा सुइरो रोप्नु। जौका पीठोको फाँडो खुवाएर पिसाब गर्न नदिनु; औँलाका सन्धि-सन्धिमा अर्थात् औँलाका गाँठामा आगोले डाम्नु, घिउ खुवाएर एक दिनसम्म (आगोको सामने वा घाममा) तपाउनु, जाडोको समयमा भिजेको ओछ्यानमा सुताउनु। यही प्रकरणमा कैद, जरिवाना, अङ्ग-भङ्ग र प्राणदण्डको पर्याप्त उल्लेख पनि छ ।

*...चतुर्थे यथाकामी बध: ॥ ४।५०।९ (कौ.अ.)।*

चोरीको अपराधमा अधिकारीलाई पनि दण्डको व्यवस्था गरेका छन् । राजकर्मचारीलाई चोरीको बात लागेमा कालो खरानी घसेर सहर घुमाउने पनि बताएका छन्। दसीसहितको चोरलाई सश्रम दण्ड

दिनुपर्ने बताएका छन्। चोरी, तीर्थाघात आदि गर्ने अपराधीलाई पहिले औँला काट्ने, फेरि वा चौथोपटक पनि अपराध गर्ने पटके अपर ाधीलाई प्राणदण्डसम्म पनि दिन सकिन्छ भनेका छन्।

*अर्थशास्त्र*को ४।८।४ ... ४४ सम्म न्यायाधीशमाथि पनि नियन्त्रण गर्नुपर्ने बताएका छन्। धर्मस्थ वा प्रदेष्टा यदि कुनै निरपराधीलाई सुवर्ण दण्ड गर्दछ भने त्यस (धर्मस्थ)लाई त्यसको दुना दण्ड गर्नू। यदि उचितभन्दा कम वा अधिक दण्ड गर्दछ भने त्यसको आठगुना दण्ड गर्नू। शारीरिकदण्ड दिनुपर्ने स्थितिको भए उसलाई पनि त्यही शारीरिक दण्ड गर्नू।

दण्ड र न्यायको निष्पक्षतामा कौटिल्यको विचार यस्तो छः–

*दण्डो हि केवलो लोकं परं चेमं च रक्षति।*
*राज्ञा पुत्रे च शत्रौ च यथा दोषं समं धृतः॥*

*कौ.अ. ३।१।५४॥*

न्यायाधीश न्यायकार्य ठीकसित निर्वाह गरून्, कसैलाई पनि चाहिँदोभन्दा घटी-बढी दण्ड नदिऊन्। उनको भनाइ छ– कसैका साथ कुनै किसिमले पनि पक्षपात नहोस्। यस विषयमा राजाको सम्बन्धमा बताएका निम्नलिखित उपदेशहरू पनि अविस्मरणीय छन्। जस्तैः- धर्मपूर्वक प्रजाको रक्षा गर्ने राजाको धर्म स्वर्गप्राप्तिको साधन हुन्छ, यसको विपरीत प्रजाको रक्षा नगर्ने, मिथ्या (अनपराधीलाई) दण्ड दिने राजा वा धर्मस्यलाई कदापि सुख हुँदैन। पुत्र र शत्रुलाई तिनको अपराधअनुसार राजाबाट दिएको समान दण्डले नै यस लोक र परलोकमा पनि रक्षा गर्दछ। कौटिल्य जब पुत्र र शत्रु तकलाई समान दण्ड दिने व्यवस्था गर्दछन् भने धनी र गरिब आदिको त भेद नरहने नै भयो।

*दण्ड र वर्ण व्यवस्थामा उनले यस्तो लेखेका छन् :-*
*पूर्वेणा परस्प द्विपणा धराः॥३।१८।१४॥ (कौ.अ.)॥*

यदि चाण्डालले शूद्रको निन्दा गऱ्यो भने ३ पण, वैश्यको गऱ्यो भने ६ पण, क्षत्रियको गऱ्यो भने ८ पण अनि ब्राह्मणको गऱ्यो भने १२ पण दण्ड गर्नु। यदि ब्राह्मणले चाण्डालको निन्दा गऱ्यो भने २ पण, शूद्रको गरेमा ४ पण अनि वैश्यको गरेमा ६ पण

दण्ड र क्षत्रियको गरेमा १० पण दण्ड गर्ने व्यवस्था थियो । कौटिल्यको विचारमा ब्राह्मण पनि दोषी छ भने दण्डको भागी गराउँथे ।

*...ब्राह्मणं त : प्रवेशयेत् ॥४ १८।१८ कौ.अ. ॥*

क्रान्तिकारीको विषयमा कौटिल्यको भनाइ यस्तो छ– राज्यको कामना गर्ने (क्रान्ति गर्ने वा राज्य ताक्ने) अन्त:पुरमा बलात्कार गर्ने, अटवीचर (जङ्गलीजात), पुलिन्द आदिलाई र जङ्गली शत्रुलाई उचाल्ने, किल्लामा बस्ने र सेनालाई चिढ्याउनेलाई, यस्तो गर्नेको टाउको र हातखुट्टामा आगो लगाई सास्ती दिनु अर्थात् मारिदिनु । यदि यस्तो काम कुनै ब्राह्मणले गऱ्यो भने त्यसलाई आजीवन कालकोठरीमा बन्द गरिदिनु ।

दण्ड र स्त्रीजातिको विषयमा– स्त्रीजातिका विषयमा कौटिल्यको विचार यस्तो छ:- स्त्रीहरूलाई पुरुषको अपेक्षा दण्ड कम वा आधा गर्नुपर्दछ, अनि कुनकुन अवस्थामा तिनलाई दण्ड नदिनू पनि भनेका छन्– गर्भिणी र एक महिनाभन्दा कम समयकी प्रसूता स्त्रीलाई दण्ड नदिनू भन्ने छ। समान अपराधमा स्त्रीलाई पुरुषको भन्दा आधा दण्ड दिनू भनेर स्पष्टसँग उल्लेख गरेका छन् । जस्तै:-

*...स्त्रियास्त्वर्ध कर्म वाक्यानु योगो वा ॥४।८ १७॥ कौ.अ. ॥*

कहीं-कहीं केवल वाग्दण्ड (अपशब्द, गाली, बेइज्जती जस्ता शब्द) मात्र पनि प्रयोग गर्नू भनेका छन्, जसबाट तिनलाई आफ्नो अपराधको कारणले आत्मग्लानी होस् ।

यसरी उनले त्यसबेलाको परिस्थितिअनुसार तोकेको दण्ड आदि आजको वैज्ञानिक युगमा पनि अनुकूल नै देखिन्छन् । कौटिल्य न्यायाधीशहरूको ध्यान यतातिर खिँचेर बताउँछन्–

*मन्दापराधं, बालं, बृद्धं, व्याधितं, मत्त मुन्मत्तं क्षुत्पिपासाध्वक्लान्त मत्याशित मात्मकाशितं दुर्वलं वा न कर्म कारयेत् ॥४।८।१७ कौ.आ.*

न्यायाधीशहरू विचार पुऱ्याएर दण्ड दिऊन् । कहीं यस्तो पनि देखिन्छ सास्ती खाने डरले चोर नभए पनि चोरीको कबुल गर्दछ, अनि जो चोर छ, ऊ साधु बनेर बच्ने उपाय गर्दछ, यस्तो स्थितिमा

खूब बुद्धि पुऱ्याएर न्याय गर्न सक्नुपर्दछ। सानो वा थोरै अपराध गर्ने, बालक, बूढो, बिरामी, विक्षिप्त, उन्मादको रोगी, भोको, प्यासी, थाकेको, धेरै खाएको, अजीर्णको रोगी र बलहीन अर्थात् निर्बलियोलाई शारीरिक (कोर्रा प्रहार र शरीरमा पीडा पर्ने) दण्ड नदिनू। ...जसको अपराध निश्चित भएको छ, त्यसलाई मात्र दण्ड दिनू।

यस विषयमा अर्थशास्त्रको निम्नलिखित उद्धरण उपयोगी र शिक्षाप्रद छ– कुनै पनि पुरुषलाई उसको अपराधअनुसार नै दण्डको तर्जुमा गर्नुपर्दछ। दानी, तपस्वी, बिरामी, परदेशी, अनेक पटक दण्ड भोगेको र निर्धन व्यक्तिमाथि सदा अनुग्रह गर्नुपर्दछ। धर्मस्थ अधिकारी (न्यायाधीश) हरूको कर्तव्यको विषयमा उनको भनाइ छ– ती देव, ब्राह्मण, तपस्वी, स्त्री, बालक, बूढो, बिरामी र आफ्नो दुःख बताउन नसक्ने वा दुःख भन्न नजान्ने र अनाथको कार्य स्वयं गरिदिऊन् र जसको विद्या, बुद्धि, पौरुष, कुल र उत्तम कार्यहरूको कारण मर्यादा बढेको छ, यस्ता व्यक्तिको सदा मान, मर्यादा, प्रतिष्ठा गरून्। यस किसिमले धर्मस्थ व्यक्ति छल-कपटरहित भएर आफ्नो कर्तव्यसम्बन्धी सबै कार्यहरू सुचारुरूपले सम्पादन गरून् र जनमानसको विश्वासपात्र तथा लोकप्रिय बन्ने प्रयास गरून्।

*‥एवं कार्याणि धर्मस्थाः कुर्यु रच्छल दशिनः।*
*समा सर्वेषु भावेषु विश्वास्या लोक संप्रिया॥३।२०।३१॥ कौ.अ॥*

कौटिल्यकालिक न्यायव्यवस्थाको विशेषता– यहाँ पूर्वोक्त कथनहरूबाट के स्पष्ट हुन्छ भने त्यसबेला न्यायसम्बन्धी कार्य उत्तम ढङ्गले सम्पादन गर्थे। यसमा शासक वर्गको हस्तक्षेप हुँदैनथ्यो, परन्तु अधिकारीहरूको विरुद्ध अभियोग लागेको स्थितिमा उनीहरूलाई पनि नियमानुसार दण्ड हुन्थ्यो, जुन साधारण जनताको अपेक्षा बढी नै हुन्थ्यो। धनीहरूका निमित्त न्यायकार्यमा विशेष सुविधा थिएन, तिनका साथ कुनै खुसामद हुँदैनथ्यो। गरिब वा निर्धनहरूका लागि न्यायालयको ढोका समानरूपले खुला रहन्थ्यो। अपराधीलाई दण्ड दिँदा मनगढन्त ढङ्गले दिइँदैनथ्यो, त्यसमा न्यायाधीशहरूले खूब शोच-विचार गरेर नै दिने गर्थे। अपराधीको परिस्थिति, गुण, स्वभाव, प्रकृति आदिको राम्रोसँग विचार गर्थे। आचार्य कौटिल्यले दण्डसम्बन्धी नियमहरू

समुचित रीतिले पालन गराउन कडा व्यवस्थाको पनि निर्देशन दिएका छन् ।

प्राचीन भारतवर्षका आचार्यहरूले न्याय र दण्डलाई धर्मको अवतार मानेका छन् । परन्तु पश्चिमी चिन्तक, विचारकहरूले न्यायमूर्तिको कल्पना गर्दा आँखामा पट्टी बाँधेर हातमा तराजु लिएकी महिलाको रूप देखाउँछन् । यसमा महिलाकै रूप किन कल्पना गरियो– एक पक्षमा स्त्रीजाति भन्नु नै मातृभावना हो– जसको अभावमा सृष्टिको सन्तुलन धराशायी हुन्छ, सर्वत्र अव्यवस्था र अन्धकार व्याप्त हुन्छ, चेतनशील प्राणी पनि पूर्वावस्थामा दीन-हीन मूकप्राय: हुन्छ, अत: यस्तो अवस्थामा त्यस्ता प्राणीको संरक्षणका निमित्त यो मातृजाति हुनु अनिवार्य छ ।

अर्को पक्षमा स्त्रीजातिमा जति क्रूरता भरिएको हुन्छ, त्यति पुरुषमा हुँदैन । आजसम्म संसारका प्राचीन कालदेखि मध्यकालतकका इतिहासमा जति ठूला-ठूला साम्राज्यहरू बने, बिलाए, लडाइँ भए, कति साम्राज्यहरू बने, कति बिग्रे सबै स्त्रीलाई लिएर भएको पाइन्छ । यसरी विचार गर्दा स्त्रीजातिमा दुवै प्रकारका गुण अर्थात् दयालुता, कोमलता र क्रूरता, कठोरता, दानवता आदि गुणहरू सम्मिलित रहने हुनाले न्यायिक प्रक्रिया सञ्चालनमा तिनैको प्रतीक रूपमा महिलारूप कल्पना गरिएको हुनसक्छ । त्यसमा पनि आँखामा पट्टी बाँधेको आधारमा विचार गर्ने हो भने– यसको विभिन्न प्रकारले व्याख्या हुन सक्छ। मेरो विचारमा के लाग्छ भने– आँखामा पट्टी बाँध्नुको तात्पर्य हो– न्यायसित सम्बन्धित व्यक्तिले आफ्नो अन्तर्हृदयको दृष्टिका दिव्यदृष्टि अथवा प्रज्ञादृष्टि जगाएर विवेकपूर्वक समान न्याय प्रदान गर्न सक्नु हो। तुला वा तराजुको मतलव हो– भेदभाव, पक्षपातरहित विधि (कानुन) र न्यायको समान व्यवहार, समान न्याय, समान निर्णय आदि गर्नु हो । यस विषयमा जति व्याख्या गरे पनि यसको टुङ्गो लाग्न सक्तैन। यस्तो गूढ रहस्यमय न्यायमूर्तिको कल्पना गर्ने पुरुष पनि अवश्य नै प्रज्ञाचक्षुवाला हुनुपर्दछ र धन्यवादका पात्र मान्नै पर्दछ ।

यहाँ उपर्युक्त न्यायको मूर्ति महिलाको कल्पना गरेकोमा पश्चिमी कल्पना भनियो, तर यसमा पूर्वीय परम्पराको आभास पनि

झल्कन्छ । कसरी भने– ज्योतिषको १२ राशि चक्रमा सातौँ स्थान जाया अर्थात् स्त्रीको स्थान मानिन्छ । त्यसको चिह्न तुला हो । पश्चिमी ज्योतिषीले पनि यसलाई मानेका छन् । अतः यी दुवैको समन्वय वा एकात्मरूप तुला लिएकी अन्धी बनाइएकी नारीलाई दूधको दूध, पानीको पानी छुट्ट्याउन न्याय प्रक्रियामा लिएको हुनसक्छ ।

न्यायाधीशमा वा न्याय सञ्चालकमा दिव्यदृष्टि हुनु अनिवार्य छ भन्ने विषयमा एक प्रसङ्ग दिनु उपयुक्त नै होला–

एक राजा थिए, उनी न्यायको प्रशंसकका साथै स्वच्छ न्यायप्रिय पनि थिए। एक दिन ती राजाकहाँ एक अपरिचित सैनिक आयो र बिन्ती चढायो– महाराज ! म हजुरको छिमेकी राज्यबाट आएको हुँ। त्यहाँ अनिकाल पऱ्यो, यसकारण तिनलाई मेरो आवश्यक परेन। महाराज मेरो खूबी यस्तो छ– म हजुरलाई जस्तोसुकै आइपर्ने सङ्कटबाट पनि सावधान गराउन सक्ने विद्या जान्दछु । मलाई राजाको निमित्त गस्ती प्रहरीको काम बक्सियोस्। राजाले पनि त्यस सैनिकको चेहरामा अद्भुत आत्मविश्वास झल्केको देखे। अतः उसलाई रातको गस्ती गर्ने प्रहरीको नोकरीमा नियुक्त गरे ।

ऊ नोकरीमा लागेको हप्ता दिन पनि नबित्दै राजाको समक्ष उपस्थित भएर बिन्ती गऱ्यो– “महाराज हजुर कुनै अर्को राजाको छोरीको विवाहोत्सवमा भोलि नै आफ्नो देशबाहिर सवारी होइबक्सिँदै छ जस्तो लाग्यो, हो के ?” राजाले भने– “हो । तर तिमीलाई यो कुरा कसरी थाहा भयो ?” प्रहरी भन्दछ– “महाराज आज गए राति मलाई निद्रा लाग्यो, अनि मैले यस्तो सपना देखेँ– हजुर कहीँ सवारी भइरहेको थियो । जब हजुर अर्को राजाको राज्यको सीमा नजिक पुगिबक्सिन्छ, अनि त्यहाँको एक मन्दिरबाहिर त्यहाँको राजाले हजुरलाई सत्कार गर्ने निहुँले रोक्छ र हजुरमाथि आक्रमण गर्छ । उसका साथ २४ जवान सिपाही मात्र थिए। हजुर सबारी होस्, तर सुरक्षाको समुचित प्रबन्ध पनि गरिबक्सियोस् ।”

राजाले पनि त्यसै गरे । जब राजा मन्दिरको समीपमा पुगे अनि अकस्मात् आक्रमण भयो । राजाको साथमा १०० जवान सुरक्षाकर्मी थिए। अतः राजा बच्न सफल भए। फर्किएर आएपछि

राजाले त्यस प्रहरीलाई धेरै नै असर्फी दिए, अनि तुरुन्त नोकरीबाट हटाई पनि दिए ।

रातको त्यो गस्ती प्रहरीले पर्याप्त धन त पायो, तर उसले राजासँग एक प्रश्न पनि गऱ्यो– "महाराज ! हजुरलाई महान् न्यायप्रिय भन्दछन् । म हजुरको धेरैधेरै आभारी छु, हजुरबाट मैले प्रशस्त धन पाएँ तर हजुरको ज्यान बचाइदिएबापत के मलाई सटीक न्याय बक्सियो त, ऊन् मेरो आशा, इच्छाको विपरीत नोकरी नै गयो । महाराज ! निगाह पूर्वक मेरो जिज्ञासा शान्त गरिबक्सियोस् ।"

राजाबाट आज्ञा भयो– "म तिम्रो आभार मान्दछु, तिमीले नै मेरो ज्यान बचाउने उपाय बतायौ, म यो कुरा मान्दछु । मेरो ज्यानको बदलामा जुन धन दिइयो, त्यो पर्याप्त नै छ । अब हेर जहाँतक न्याय र अन्यायको प्रश्न छ, मैले तिम्रो साथ कुनै अन्याय गरेको छैन । मेरो ज्यान बचाएबापत पुरस्कार तिमीले पायौ, तर रातको गस्ती वा निगरानीको काममा खटिएको प्रहरी सुतोस् र सपना देखोस्, यो कुरा न्यायिक जगत्मा कदापि मान्य वा स्वीकार्य हुने छैन । न्याय यही भन्दछ, त्यस्तालाई नोकरीमा अयोग्य ठहराई नोकरीबाट हटाइदिनू ।"

यहाँ राजाले आफ्नै रक्षा गर्ने व्यक्तिको निमित्त पनि कुनै मर-मुलाहिजा नगरी न्याय गरेको वा न्याय गर्न सकेको हुनाले नै यसैलाई भनिएको हो– न्यायाधीशमा न्यायको प्रमुख बिन्दुको प्रकाशको निमित्त यसरी नै–

*"दिव्य-दृष्टि सदा स्फुरण र जाग्रत भइरहनुपर्दछ ।"*

अब दण्डको अर्वाचीन रूपमा पाश्चात्य मुलुकहरूमा दण्ड कस्तो र कसरी चल्दथ्यो यसको सङ्क्षिप्त रूप दिइन्छ–

आजकाल विश्वका प्राय: धेरै देशमा मृत्युदण्डलाई कायम नै राख्ने कि समाप्त गर्ने भन्ने विषयमा बहस जारी रहेको छ । साथै मृत्युदण्ड दिने तरिकाको विषयमा पनि बहस चलिरहेकै छ । मानिसको मानसिक स्थिति बडो विचित्रको छ । एक थरी समाप्त गर्ने कुरामा आनाकानी गर्दछ तर सहानुभूतिको रूपमा मृत्युदण्डको यस्तो

प्रक्रियाको खोजीमा पनि छ, जुन प्रक्रियाद्वारा मृत्युदण्ड दिँदा मर्ने व्यक्तिलाई कष्ट अत्यन्त कम होस् । मृत्युदण्ड पाउने व्यक्तिका प्रति आखिरीमा यस्तो सहानुभूति किन ? दण्ड त आखिरमा दण्ड नै हो, चाहे त्यो जसरी होस् । तैपनि दण्ड भोग्नमा कष्टको अनुभव त हुनै पर्छ, यदि कष्टको अनुभूति भएन भने त्यो दण्ड नै कहाँ भयो र ।

प्राचीन समयमा 'मृत्युदण्ड' दिनका लागि बढीभन्दा बढी यातनाले भरिएको तरिकाको प्रयोग गर्ने होडबाजी चलिरहन्थ्यो । तिनताका मृत्युदण्ड पाउने वा मृत्युदण्ड पाएको व्यक्तिलाई तमासा बनाउँथे । सार्वजनिक रूपमा मृत्युदण्ड दिने प्रथा धेरै नै प्रचलित थियो । मृत्युदण्ड दिने तरिकामा बलेको आगोमा हालिदिनु, अग्लो टाकुराबाट धकेलिदिनु, उम्लेको तेलको कराहीमा हालिदिनु, हात्तीले कुल्चाउनु, भोको बाघको खोरमा हालिदिनु, हात-गोडा बाँधेर घोडाले लतार्दै, घिसार्दै दौडाउनु, पोलेर आगोजस्तो ऋर्ऋराउँदो भएको सिक्रीले हान्नु, एक-एक अङ्ग काटेर टुक्रा-टुक्रा पार्नु, विषालु सर्पले डसाउनु, बाँसका सूलीमा जवर्जस्ती बसाउनु, नङछुरीमा सिन्का वा सुइरोले रोप्नु, टाउको काट्नु, रथको पछाडि बाँधी घिसार्नु, विष पिउन लगाउनु, भित्तामा तीनैतिरबाट गाह्रो लगाएर बन्द गर्नु, हात-गोडामा भित्तामा अडिने गरी क्रूरतापूर्वक कीला ठोक्नु इत्यादि अनेक प्रकारले मृत्युदण्ड दिने गर्थे । फाँसीबाट मृत्युदण्ड दिने प्रथा भने अद्यापि छँदै छ ।

पश्चिमी जगत्को प्राचीन कालमा ग्रीस (युनान)का चिन्तक तथा महात्मा मानिएका सुकरातलाई तात्कालिक धर्मको विरोध गरेको भनी हेमलक (विष) पिउन लगाएर आजभन्दा २५ सय वर्षअघि प्राणदण्ड दिएका थिए। अर्का जेरुसेलमका इसुक्राइस्टलाई पनि धर्मको विरोध गरेको भनी क्रसमा हात-गोडामा कीला ठोकी मृत्युदण्ड दिए (२००७ वर्ष अघि) । यस्तै आज पनि केही इस्लामिक मुलुकहरूमा कुनै-कुनै अपराध गर्ने अपराधीलाई पत्थरले हानेर मार्ने चलन भएको सुनिन्छ ।

सार्वजनिकरूपमा मृत्युदण्ड दिनुको मतलव के थियो भने– मारिने व्यक्तिको याताना देखेर अरू अपराधी अपराध गर्न

डराउनेछन् । तर वास्तवमा यस्तो भएन । अठारौँ शताब्दीमा इङ्ग्लान्ड बगली मार्ने जस्तो मामुली अपराधको निमित्त पनि खुला सार्वजनिक स्थानमा नै फाँसीमा झुन्ड्याइदिन्थे, तर त्यसैबेला त्यहाँ फाँसीको दृश्य हेर्नेहरूमा अनेक व्यक्तिको जेब सफा भएको थियो । यस्तो सार्वजनिक स्थलमा दण्ड दिने प्रथाले के सिद्ध गऱ्यो भने– सार्वजनिक रूपमा दिएको फाँसीलाई 'चेतावनीको रूपमा कम र मनोरञ्जनको रूपमा बढी मान्थे । जनसङ्ख्या जति तीव्र गतिले बढ्यो, त्योभन्दा धेरै बढी मात्रामा घातक अपराध पनि बढ्दै गयो । आखिरमा यस्तो किन भयो ? मृत्युदण्डको व्यवस्थाले अपराधलाई रोक्न किन असमर्थ भयो ? यस विषयमा कहिल्यै गम्भीरतापूर्वक विचार भएन ।

आज पनि अनेकौँ देशमा मृत्युदण्डलाई सार्वजनिक रूप दिइन्छ । देशअनुसार विभिन्न देशमा मृत्युदण्डका भिन्नभिन्न तरिका देखिन्छन् । इङ्ग्ल्यान्डमा सन् १९१० सम्म ३५० प्रकारले मृत्युदण्ड दिन्थे । सन् १९४१ मा ती तरिकाहरूको सङ्ख्या घटेर २० मात्र रह्यो । अनि १९६१ मा त केवल चार प्रकारमात्र कायम रह्यो । यसपछि १९६७ मा त्यहाँ मृत्युदण्डलाई उन्मूलन नै गरिदिए । आज पूरा विश्वमा मृत्युदण्डका जे-जति तरिका चलेका छन्, तीमध्ये सरल र कम दुःखदायी तरिकाको खोजी जारी नै छ, जुन 'मानवीय' होस् रे । तर यस विषयमा हास्यास्पद कुरा के छ भने– सर्वप्रथम एक मानवलाई दिइने मृत्युदण्ड भनेकै अमानवीय हो, त्यसका लागि 'मानवीयं तरिकाको खोजी गरिनु एक विडम्बनाजस्तो लाग्दछ ।

आजकाल मृत्युदण्डका जुन तरिका प्रचलित छन्, तिनमा फाँसीको फन्दा, जहरको इन्जेक्सन, बन्दुकले गोली मार्नु र ग्यास च्याम्बरमा हाल्नु, आदि केही तरिका प्रचलनमा छन् । उच्च शक्तिको बिजुली करेन्टको प्रयोग पनि मृत्युदण्डका लागि प्रयोग गर्दछन् ।

न्युयोर्कमा गठित समितिले मृत्युदण्डको निमित्त बिजुलीको मेचको सिफारिस गरेको थियो । वैज्ञानिक एडिसनले यस कामको शोधको निमित्त आफ्नो प्रयोगशाला उपयोग गर्नलाई इजाजत पनि दिएका थिए । यसमा एडिसनको भनाइ के थियो भने ए.सी. करेन्ट अत्यधिक मारक छ । बिजुलीबाट मृत्युदण्ड दिनका लागि कैदीलाई

मेचमा बसाएर पेटीले बाँधिदिन्छन् । त्यसपछि एक इलेक्टोड उसको मस्तकको शिखामा अनि आर्को उसको गोडामा लगाइदिन्छन् अनि २००० देखि २२०० सम्मको भोल्टेजको र सात देखि १२ आम्पियर को धारा प्रवाहित गराइदिन्छन् । दुई मिनटमा पूरा प्रक्रिया समाप्त गर्दछन् । आवश्यक देखिएमा डाक्टरको सल्लाह लिएर फेरि बिजुलीको प्रवाह चालू गर्दछन् ।

न्युयोर्कमा पहिलोपटक ६ अगस्त १८९० मा विलियम केमलर नामक व्यक्तिलाई बिजुलीबाट मुत्युदण्ड दिइएको थियो । बिजुलीको करेन्ट छोडेपछि १५ सेकेन्डमा कैदीको चेहरा कालो भएको थियो, डाक्टरले अब यो मऱ्यो भन्ने घोषणा गऱ्यो, तर त्यहाँ उपस्थित साक्षी र अरू व्यक्तिहरूले आफूमा असहनीय पीडाको अनुभव गरे, अनि त्यसको शरीर कालो भएपछि डाक्टरले मरेको पुष्टि गरे पनि एक साक्षीको मुखबाट 'अरू यो मरेको छैन भन्ने शब्द निस्कियो । अर्कोले भन्यो सास फेरिरहेको छ । तेस्रोले फेरि बिजुली चलाऊ भन्यो । यसपछि चौथोको भनाइ थियो– भाइ ! जसरी हुन्छ, यसलाई चाँडो खतम गर । यो दृश्य हेर्नेहरूमा केही व्यक्तिको मानसिक स्थिति यति बिग्रियो कि ती अकस्मात् मूर्च्छित भए ।

यसरी १९४६ मा बिजुलीको मेचमा करेन्ट प्रवाहित गरेपछि पनि बाँच्ने १७ वर्षको 'बिल फ्रासिस'ले आफ्नो अनुभवमा यस्तो बताएको थियो– करेन्ट छोडेपछि सर्वप्रथम असहनीय कष्ट भयो । आँखाका वरिपरि पहेँलो, नीलो, रातो र पछि हरियो रङ्गका कणहरू देखिएका थिए । शिरमा ठूलो जलन र बायाँ गोडामा पीडाको अनुभव भयो । अनि ऊ मेचमा बाँधेको भए पनि मेचैसमेत दौडेको थियो । यो घटना भएको एक वर्षपछि त्यसलाई फेरि बिजुलीको मेचमा बसाएर नै मृत्युदण्ड दिए ।

करेन्टको प्रवाह शरीरमा प्रवाहित हुँदा श्वास र रक्तसञ्चार प्रक्रिया तत्काल बन्द हुन्छ । यस विषयमा फोरेन्सिक विशेषज्ञहरूको मत के छ भने यस प्रक्रियाबाट मनुष्यको मृत्युमा निश्चय नै बढी समय लाग्दछ । यसबाहेक फेरि मर्मान्तक पीडा पनि धेरै बेर रहन्छ ।

ग्यास च्याम्बरमा 'मृत्युदण्ड' दिनलाई कैदी वा अपराधीलाई एक सानो कोठाको मेचमा बसाएर बाँधिदिन्छन्, अनि त्यस कोठालाई पूरै बन्द गरिदिन्छन्। बन्द गर्नुभन्दा पहिले कोठामा राखेको टच्युबमा एसिड राखेर त्यसमा साइनाइडको गोली राखिदिन्छन्, जसबाट ग्यास निक्लन लाग्दछ र अन्दाजी १५ सेकेन्डमा नै दण्डित व्यक्ति बेहोस हुन्छ र मृत्युले आक्रमण गर्दछ। त्यस व्यक्तिले यदि केहीबेर श्वास रोक्यो भने निश्चय नै केही समयसम्म उसको मानसिक स्थिति अत्यन्त दयनीय हुन्छ। अनि फेरि उसको मृत्युपूर्वको स्थितिको कल्पना गर्दा पनि जीउ रोमाञ्चित हुन्छ।

इन्जेक्सनबाट 'मृत्युदण्ड'को प्रचलन केही देशमा प्रचलित छ। न्युयोर्कमा गठित समितिले जब मृत्युदण्डको लागि मर्किनको इन्जेक्सन दिने कुरामा विचार गर्दा एक डाक्टरले स्पष्ट शब्दमा के भनेको थियो भने– यो औषधि मृत्युदण्ड दिनको निमित्त प्रयोग गर्ने इजाजत भएमा निश्चय नै सबै डाक्टरहरू आफ्ना रोगीलाई यसको प्रयोग बन्द गरिदिन्छन् किनभने यस औषधिका प्रति सन्देह र भयको भावना फैलनेछ। मृत्युदण्डका लागि मर्फिनको प्रयोग जथाभावी हुनेछ जबकि त्यहाँ चिकित्सक आफ्ना रोगीहरूलाई यसको आवश्यक परे पनि प्रयोग गर्ने छैनन्। यसो भयो भने यो चिकित्सकीय आदर्शको सर्वथा विरुद्ध वा प्रतिकूल हुनेछ।

कुनैकुनै देशमा जहर (विष) को इन्जेक्सन दिएर मृत्युदण्ड दिने चलन छ। यसको प्रयोग पनि अमेरिकामा नै गरेका थिए। यो इन्जेक्सन गर्ने हत्यारा खूबै योग्य र विशेषज्ञ हुनुपर्छ। डाक्टरहरू यस्तो हत्यारा बन्न मानेनन्, किन रे भने (डाक्टरहरूलाई के कस्तो शपथ दिलाएको हुन्छ भने ऊ कसैको जीवन समाप्त गर्ने छैन र बचाउन पनि कुनै क्रिया-प्रक्रिया बाँकी राख्ने छैन)। यसबाहेक अत्याधुनिक किसिमका अति कडा जहरिला इन्जेक्सन उपलब्ध गराउनु पनि एक कठिन समस्या छ, तर यदि यो जहर कडा भएन भने त त्यस व्यक्तिले धेरै समयसम्म दुःख भोग्नुपर्ने हुन्छ।

अमेरिकामा जब डाक्टरहरूले जहरको इन्जेक्सन दिन इन्कार गरे अनि सबै क्रिया एक मेसिनबाट नियन्त्रित गर्ने अठोट गरे,

अनि यस्तो व्यक्तिको खोजी गरे, जो यो मेसिनको स्विच खोल्न सकोस् ।

केही देशमा 'मृत्युदण्ड' फायरिङ दलद्वारा गोली मार्ने गर्दछन् । गोलीले उडाउनु पनि कम कष्टदायक र कम बीभत्स हुँदैन । यसमा पनि मृत्यु तत्कालै हुँदैन । यसका लागि पनि कुशल निशानाबाजको साथै तीव्रगतिले गोली चलाउनेको आवश्यक पर्दछ, जसको प्रहारबाट गोली तीव्रताका साथ मर्माङ्गमा लागोस् र त्यस व्यक्तिको तुरुन्तै मृत्यु होस् ।

चीनमा मृत्युदण्ड दिनुपर्नेहरूलाई घोप्टो पारेर सुताउँछन् र टाउकाको पछिल्तिर बूढीखोप्री (खप्परभन्दा अलिमुन्तिर, गर्धनभन्दा माथि) मा गोली हानेर मृत्युदण्ड दिने चलन भएको कुनैकुनै पत्रिकाले बताएका छन् ।

सन् २००४ मा (२०६१ भाद्र १५ गते) कामको खोजीमा इराक पुगेका निर्दोषी १२ जवान नेपालीहरूलाई इराकका आतङ्कवादीहरूले ती नेपालीहरूलाई लहरै घोप्टो पारेर सुताएपछि पछाडिपट्टि गोली प्रहार गरी हत्या गरेका पत्रपत्रिकामा प्रकाशित चित्रबाट स्पष्टसँग थाहा पाइन्छ ।

कुनै देशमा आज पनि तरबार वा धारिलो हतियारले शरीरबाट शिर अलग पार्ने वा छुट्ट्याउने गर्दछन् । यसमा पातलो धार भएको ब्लेड वा त्यस्तै धारिलो हतियारले शरीर गिँडलाई छुट्ट्याइदिन्छन्, तर शरीर भने धेरैबेरसम्म छटपटाइरहन्छ ।

मृत्युदण्ड दिनका लागि फाँसीको फन्दा नै अत्यधिक प्रचलित प्रक्रिया हो । फन्दाबाट फाँसी दिनु पनि कम अमानवीय होइन । यसमा त्यस व्यक्तिको दुवै हात पछिल्तिर लगेर कम्मरमा बाँधिदिन्छन् । यसपछि दुवै गोडालाई टेकेको तखतामा बाँधिदिन्छन् अनि फाँसी दिने हत्याराले कालो झोलाजस्तो कपडाले मुख छोपिदिन्छ र घाँटीमा फाँसी सुर्केनी (पासो) हालिदिन्छ । अनि सजाय पाउने व्यक्ति जुन तखतामा उभिएको हुन्छ, त्यो तखता हत्यारा (बधक) ले लिवर (ह्यान्डिल) थिच्नासाथ तलतिरको आडा हट्तछ र सो व्यक्ति हावामा झुन्डिएको (झुलेको) जस्तो भएर तलतिर बनेको अन्दाजी १५ फिट गहिरो इनारजस्तो गहिरो खाडलमाथि झुन्डिइरहन्छ ।

फाँसी दिनका लागि हत्यारा (बधक) लाई २४ घण्टाअगाडि नै बोलाउँदछन् । त्यसले फाँसीको तखता, लिवर र डोरीको जाँच गर्दछ । डोरीको लम्बाइ १५-१६ मिटर वा घटी पनि हुनसक्दछ । त्यसमा साबुन, बोसो र ग्रीज आदि दल्दछ, यसले गर्दा गाँठो वा सुर्केनी सजिलैसित सर्दछ र सो व्यक्तिको प्राण जान धेरै बेर लाग्दैन । यदि गाँठो बीचमा नै अड्कियो भने प्राण जान धेरै समय लाग्दछ ।

२००२ सालमा सार्वजनिक रूपमा ललितपुरमा साढेचार जीउको हत्याको अभियुक्त व्यक्तिलाई दिएको फाँसीबाट उसको प्राण जान बीसौँ मिनेट लागेको थियो । कुनै दिन वर्षाको कारणबाट भिजेको डोरीको पासोले गर्दा व्यक्तिको प्राण जान दसौँ, बीसौँ मिनेट पनि लाग्न सक्दछ, यसैकारणले गर्दा त्यो व्यक्ति धेरैबेर छटपटाइरहेको थियो ।

यदि गम्भीरतापूर्वक विचार गर्ने हो भने– यस्ता दृश्य हेर्ने वा यस्ता विषयका लेखहरू पढ्ने पाठकहरूलाई के अनुभव हुन्छ भने– मृत्युदण्डमा मानवीय भावनाको आधारमा सरल विधिको खोजी गर्नुभन्दा संसारबाट ‘मृत्युदण्ड’ समाप्त गर्नु नै मानवीय भावनाको सर्वोत्तम उपाय हो । सजाय भनेको त त्यो हो, जुन व्यक्ति आफू नै अनुभव र विश्वास पनि गरोस्, उसले जे-जस्तो काम गऱ्यो, त्यो गलत वा गर्न नहुने काम गऱ्यो । अपराधीलाई मृत्युदण्डको सजाय दिएमा, त्यस सजायको परिणाम त उसका आश्रयमा रहने उसका पत्नी र बालबच्चालाई पो दिएको जस्तो हुन्छ, पत्नी विधवा र बालबच्चा आजीवन टुहुरा वा अनाथ हुनुका साथै मानसिक भावनाले पीडित भइरहन्छन् ।

मृत्युदण्ड दिने तरिकाको विषयमा खोजी गर्दै हिँड्नेले अमेरिकामा मृत्युदण्डका निमित्त फाँसीको भन्दा अरू विधि नै बढी मानवीय मान्दछन् । तिनीहरूको विचारमा बिजुलीको मेच, ग्यासच्याम्बर वा इन्जेक्सन आदिलाई नै अधिक मानवीय मान्दछन् र यस विषयमा केही विशेषज्ञको मान्यता केमा देखिन्छ भने– उपर्युक्त प्रचलित विधिहरूमा फाँसीको फन्दा नै सबभन्दा कम कष्टदाय र कम कष्टसाध्य छ, तर वास्तवमा भन्ने हो भने फाँसीको फन्दा नै सबभन्दा ठूलो अमानवीय तरिका हो ।

२००२ सालतिरको घटना हो– खूब बेगका साथ आएको रिसल्ला चढेको घोडा सिंहदरबारको ढोकाको अपसाइडमा ठोकिएर घोडा लड्यो। टाउकोमा ठूलो चोट लागेको हुनाले नाकबाट रगतको धारा बग्न लाग्यो। रिसल्ला ८-१० हात परतिर पुगेर पछारियो, उठाएर अस्पताल पुऱ्याए। घोडा ज्यादै दयनीय र असहनीय तबरले छटपटाइरह्यो। नबाँच्ने ठहऱ्याई आधाघण्टा पछि इन्जेक्सन दिए अनि घोडा मऱ्यो। यस्तै स्थितिमा इन्जेक्सन अति उपयोगी सिद्ध हुन्छ। यो दृश्य यस लेखकका आँखाले नै देखेको हो।

**यो लेख तयार गर्दा सहयोग लिइएका ग्रन्थहरू–**

| | |
|---|---|
| अथर्ववेद | शुक्रनीति |
| ऋग्वेद | शुक्रसार |
| यजुर्वेद | बृहत् मानव धर्मसार |
| काठकसंहिता | पुराण विमर्श |
| तैत्तिरीय ब्राह्मण | कामन्दकीय नीतिसार: |
| शतपथ ब्राह्मण | वैदिक इन्डेक्स |
| बृहदारण्यक उपनिषद् | वैदिक इन्डेक्स |
| मनुस्मृति | वैदिक कोष: |
| याज्ञवल्क्य स्मृति | " |
| वाल्मीकि रामायण | वाचस्पत्यम् |
| विदुरनीति | हिन्दुत्व |
| धौम्यनीति | हिन्दूधर्म कोष |
| कणिक नीति | प्रशासकीय तथा कानुनी शब्दकोश |
| कौटिल्य अर्थशास्त्र | संस्कृत हिन्दी कोश |
| निरुक्तम् | संस्कृत नेपाली शब्दकोश |
| नीतिशतक | अमरकोश (रामाश्रमी) |
| पुराणकोष | |
| महाभारतकोष | ....आदि |
| वात्स्यायन कामसूत्र | |

*(पृष्ठ १ को बाँकी)*

त्यसमा पुरस्कार 'जगदम्बा-श्री' श्री रामशरण दर्नाललाई र 'मदन पुरस्कार' 'एक हातको ताली'का लागि श्री युवराज नयाँघरेलाई अर्पण गरियो ।

समारोहका 'एमसी' सभाका 'हर्ताकर्ता'-द्वय सुधा ओझा तथा ज्ञाननिष्ठ ज्ञवालीले ठीक ३:१५ मा सभा प्रारम्भ भएको घोषणा गर्नुभयो । अनि मङ्गलधुन-मालसिरी बाँसुरीमा प्रस्तुत गर्नुभयो श्री रविन्द्र महर्जन, प्रेम वाइवा र चन्द्र लामाले । उहाँहरूलाई तबलामा साथ दिनुभयो श्री मुकेश शाक्यले । तत्पश्चात् गुठीका अध्यक्ष श्री कमलमणि दीक्षितलाई स्वागत-भाषण गर्न आह्वान गरियो । अध्यक्ष दीक्षितले साविकबमोजिम वैद्धिक मन्त्रोच्चारण गर्दै आफ्नो मुद्रित भाषण यसप्रकार पढ्नुभयो–

**"ॐ असतोमा सद्‌गमयः तमसोमा ज्योतिर्गमयः**
**मृत्योर्मा अमृतम् गमयः ॐ शान्तिः शान्तिः शान्तिः**

**माननीय नीलाम्बर आचार्यज्यू, आदरणीय तथा सम्मानित 'ब्यौलाद्वय', तथा सभ्यगण,**

घुम्दैफिर्दै मालसिरीको धुनले फेरि आएर हामीलाई आह्लादित पार्दै छ। यस रमाइलो बेला म तपाईंहरू सबैलाई यो समारोहस्थलमा स्वागत निवेदन गर्दछु ।

२०१३ सालका पुरस्कारहरू २०१४ सालका नौरथामा पुरस्कार-संस्थापिका रानी जगदम्बाले सत्यमोहन जोशी र चित्तरञ्जन नेपालीलाई अभ्यर्चना गर्दै अर्पण गरेको दृश्य ऐले मेरो आँखामा आइरहेको छ । ५३ वर्ष भैसक्यो, उहाँले स्थापित गरिराखेको परम्परा हामी पालना गर्दै छौं, छाडेका छैनौं । त्यसै हुँदा आज यहाँ उपस्थित सबैले एकपटक उहाँलाई सम्झिदिऊँ अनि जसका कारणले यो परम्परा कायम भयो, जर्नेल मदनशमशेर, उहाँलाई पनि स्मरण गरौं भन्ने म आग्रह गर्दछु ।

नीलाम्बरज्यू, तपााईंको काँधमा कत्रो अभिभारा आइपरेको छ, त्यो हामी सबैले बुझेका छौँ। त्यस्तो व्यस्त कार्यबाट पनि हाम्रो लागि समय छुट्याई आइदिनुभएकोमा गुठी-परिवार तपाईंप्रति अत्यन्त आभारी छ। म तपाईंलाई हार्दिक स्वागत अभिवादन गर्दछु।

रामशरण दर्नालज्यू, तपाईंलाई आज यसरी 'ब्यौला'का रूपमा देख्न पाउँदा मलाई साँच्चै नै अत्यधिक आनन्द लागेको छ। तपाईंको यस गुठीसँगको दशकौँ लामो सम्बन्ध यसरी टुङ्गोमा पुग्नु हामी सबैको सौभाग्य हो। म तपाईंलाई साधुवाद गर्दै स्वागत गर्दछु।

युवराज नयाँघरेज्यू, हुन त मदन पुरस्कार युवाहरूले नै पाउने परम्परा रहेको पुरस्कार हो। हाम्रा सत्यमोहनजी, चित्तरञ्जनजी, मोदनाथ प्राश्रितजी, उत्तम कुँवर, शङ्कर लामिछानेहरू सबै कलिलै उमेरमा मदन पुरस्कार पाउने व्यक्तिहरू हुनुहुन्छ तापनि हाल आएर हाम्रो गुठीको उमेर बढ्दै जाँदा त्यसको छाप परेर हो कि, किन हो बूढाहरूको पुरस्कार ठानिन थालेको छ यो। त्यो ठीक होइन भन्ने देखाउन यसपटक तपाईं देखा परिदिनुभएकोमा सर्वप्रथम म तपाईंलाई धन्यवाद भन्छु। तपाईंले भन्नुभएको जस्तै 'असत्यको पासा खेल्नेहरूका मूर्खता हेरी हाँसिरहने कोतपर्वको त्यो दर्शक अझै हामीलाई नियालिरहेछ' भन्ने कसैले बिर्सने छैन। यो देश हाँक्नेहरूलाई यसरी सतर्क गराउने तपाईंलाई म स्वागत गर्दछु। तपाईंको कलमले कैले विश्राम नलेओस् भन्ने प्रार्थना पनि गर्दछु।

मित्रहरू, तपाईंहरूले यहाँ आएर आज हाम्रो उत्साह बढाइदिनुभएको छ। मैले सधैँ भन्ने गरेजस्तो- तपाईंहरूको यो सानो समूहभित्र हामी नेपाली साहित्यिकहरू समग्रको छवि देख्ने गर्छौं। नेपाली कवि, लेखक, बुद्धिजीवीहरूका प्रतिनिधिस्वरूप म तपाईंहरूलाई एकमुष्ट स्वागत निवेदन गर्दछु। स्वागत छ। यो औपचारिक स्वागतपछि अलिकति अनौपचारिक कुरा पनि भन्ने अनुमति चाहन्छु। त्यो के भने, मदन पुरस्कार गुठीले महाकवि देवकोटाको सम्मान गर्न पाएन कतिपय कारणले। त्यसैले अहिले उहाँको जन्मशतवार्षिकीका अवसरमा महाकविको सम्झनामा 'गुरुभेटी, महाकविमा'भन्ने एउटा पुस्तक

श्रद्धास्वरूप प्रकाशित गरेको छ मदन पुरस्कारले । त्यो आज यसै समारोहमा लोकार्पण गरिँदै छ ।

पुनः एकपटक सबैलाई स्वागतम् ।

सबैको जय होस् ।"

त्यसपछि पुरस्कारहरू समर्पण गर्ने कार्य प्रारम्भ भयो । पहिले 'जगदम्बा-श्री' सम्मानित हुने 'ब्यौला' श्री रामशरण दर्नाललाई ओल्क्याई दुई जना विद्वान्हरू श्री माधवलाल कर्माचार्य तथा डा. हर्कबहादुर बुढाले गुठीका अध्यक्षसामु ल्याउनुभयो। अध्यक्ष श्री कमलमणि दीक्षितले उहाँलाई कपुरको बत्तीले आरती गर्नुभयो अनि पुरस्कारको प्रमाणपत्र चढाउनुभयो अनि 'भेटी' स्वरूप दुई लाख रुपियाँ नगद अर्पण गर्नुभयो आफ्नो हात तल पारेर । श्री रामशरण दर्नालले सो स्वीकार गरी ड्यासमा आसन ग्रहण गर्नुभयो । त्यसपछि 'एक हातको ताली'का लागि मदन पुरस्कार प्राप्त गर्नुहुने श्री युवराज नयाँघरेलाई उसैप्रकार दुई जना विद्वान्हरू श्री डा. गोविन्द टण्डन तथा डा. दयाराम श्रेष्ठ 'सम्भव' ले ओल्क्याई अध्यक्षसामु ल्याउनुभयो । उसैप्रकार अभ्यर्चना गरी अध्यक्षले उहाँलाई प्रमाणपत्र तथा पुरस्कार रकम अर्पण गर्नुभयो। यति गरी सबै यथास्थानमा बसिसकेपछि माननीय श्री नीलाम्बर आचार्यलाई विद्वद् प्रवचन गर्न आह्वान गरियो । माननीय आचार्यले आफ्नो मुद्रित प्रवचन यसप्रकार गर्नुभयो–

**"मदन पुरस्कार गुठीका अध्यक्ष कमलमणि दीक्षितज्यू, 'मदन पुरस्कार'बाट सम्मानित युवराज नयाँघरेज्यू, 'जगदम्बा-श्री'बाट विभूषित रामशरण दर्नालज्यू, 'मदन पुरस्कार' र 'जगदम्बा-श्री'का विभिन्न वर्षका आदरणीय विजेताहरू, मदन पुरस्कार गुठीसित सम्बन्धित महानुभावहरू, यस विद्वद्सभाका सहभागी विद्वान् र विदुषीहरू, उपस्थित सबै मित्रहरू,**

**नमस्कार, जय होस् !**

नेपाली भाषा, साहित्य, कला एवं संस्कृतिका लागि गौरवमय समारोह, 'जगदम्बा-श्री' तथा 'मदन-पुरस्कार' समर्पण गर्ने आजको समारोहमा मलाई आमन्त्रण गरेर केही कुरा राख्ने सम्मानजनक अवसर दिनुभएकोमा गुठीका अध्यक्ष श्री कमलमणि दीक्षित र अन्य सदस्यहरूप्रति आभार व्यक्त गर्न चाहन्छु। आजको अवसरमा म यस गुठीका संस्थापक

अध्यक्ष श्री जगदम्बाकुमारीलाई श्रद्धासाथ सम्झन्छु। साथै स्थापनाकालदेखि यस गुठीको क्रियाकलापमा संलग्न सबैप्रति र सम्पूर्ण गुठी परिवारप्रति सम्मान व्यक्त गर्न चाहन्छु ।

नेपाली वाङ्मयको संरक्षण र विकासमा मदन पुरस्कार गुठीले पुऱ्याएको योगदान अद्वितीय छ र अत्यन्त सराहनीय छ। सहस्र धन्यवाद छ गुठीलाई। विभिन्न अप्ठेराहरूसँग जुध्दै नेपाली भाषा एवं साहित्यको उन्नयनमा लाग्नुभएका सबै महिला र पुरुषहरू, नेपालका अन्य भाषा एवं साहित्यका सबै सेवीहरू सँगसँगै, नेपाल राष्ट्र निर्माणका महत्त्वपूर्ण स्तम्भ हुनुहुन्छ। नेपालको समय, जीवन, एवं त्यसको परिवेश चित्रण गर्न एवं त्यसलाई पहिचान र आकार दिनमा, भावनात्मक एकता निर्माण गर्न एवं सुदृढ पार्नमा र नेपालको व्यक्तित्वको विकास गर्नमा वाङ्मयको विकास एक महत्त्वपूर्ण कारक रहेको छ र रहने छ। नेपालबाहिर रहेर नेपाली वाङ्मयको विकासमा योगदान पुऱ्याउने महिला एवं पुरुषहरूलाई पनि म सधन्यवाद सम्झन चाहन्छु। वाङ्मयको एउटा विशेषता के पनि हो भने यसले जति दिँदै जान्छ, त्यति यो समृद्ध हुँदै जान्छ। अन्य वाङ्मयसित आफ्नो सम्बन्ध जति बढाउँदै जान्छ, त्यति हुर्कँदै जान्छ। दिएर रित्तिन्न यो, अन्य भाषा एवं साहित्यको सम्पर्कमा आएर खुम्चिन्न यो। नेपालका सबै भाषा एवं साहित्य आपसी सम्बन्धका साथसाथै विश्वका वाङ्मयहरू, साहित्य र चिन्तनसँगको बढ्दो सम्पर्कमा हुर्कँदै आएका हुन् र यो प्रक्रिया अरू समृद्ध हुँदै जाने छ।

नेपाल विश्वबाट बेग्लिएर बाँच्न र एक्लिएर हुर्कन सक्दैन। विश्व-सम्बन्धबाट हामी लाभान्वित भएका छौँ र राष्ट्रिय स्वाभिमानको श्रीवृद्धि गर्दै विश्वसमुदायमा आफ्नो सम्मानजनक स्थानका लागि अभिप्रेरित र क्रियाशील रहेका छौँ। साहित्य-स्रष्टा र चिन्तकहरू राष्ट्रिय स्वाभिमानका समेत स्रष्टा हुने गर्दछन्। देशको नामबाट मानिस चिनिन्छ र मानिसको नाममा देशले गौरव गर्ने गर्दछ। यसरी गाँसिएका हुन्छन् देश र मानिस। एक जना अग्रणी स्रष्टाले असङ्ख्य मानिसहरूको व्यक्तित्व निर्माणमा योगदान पुऱ्याएको हुन्छ। पुस्तकहरू मानवीय जीवन एवं व्यवहार, अनुभूति एवं अनुभव, आरोह एवं अवरोह, उपलब्धि र अप्ठेराबाट पृथक् होइनन्, तिनकै निष्कर्ष हुने गर्दछन्। ज्ञान र विज्ञान, चिन्तन र दर्शन, शिल्प र कला, अनुभूति र पर्यवेक्षण, अतीतको अनुभव,

वर्तमानका वास्तविकता र भविष्यका आशाहरूका नौनी ग्रन्थ हुन् पुस्तक, अर्थात् जीवनको ज्यूँदो भण्डार र प्रगतिका प्रणेता हुन् पुस्तक। तिनको प्रभाव समय एवं स्थानको सीमामा सीमित हुँदैन। म हाम्रो राष्ट्रका स्रष्टा र चिन्तकहरूप्रति, साहित्य, कला, संस्कृति, ज्ञान र विज्ञानका अगुवाहरूप्रति आभार एवं सम्मान व्यक्त गर्न चाहन्छु। साथै नेपाली वाङ्मयको विकासका लागि समर्पित व्यक्ति र संस्थाहरू स्तुत्य रहेको कुरासमेत निवेदन गर्न चाहन्छु।

'जगदम्बा-श्री'बाट पुरस्कृत हुने रामशरण दर्नालज्यू, तपाईंलाई मेरो हार्दिक बधाई र धन्यवाद छ। लोकसङ्गीत र लोकबाजाको क्षेत्रमा अध्ययन, अन्वेषण, सङ्कलन र कृति लेखनका लागि तपाईं सम्मानित हुनुभएकोमा खुसी हुँदै तपाईंको योगदान अरू बढ्दै जाने विश्वास व्यक्त गर्न चाहन्छु।

'मदन पुरस्कार'बाट पुरस्कृत हुने युवराज नयाँघरेज्यू, तपाईंलाई मेरो हार्दिक बधाई र धन्यवाद छ। आधुनिकतातिरको यात्रामा नेपाली मानिसका भोगाइ र हेराइ, आशा र व्यथा, अनुभव र अनुभूति, चिन्ता र चिन्तनलाई चित्रित गर्दै 'एक हातको ताली' जस्तो उन्नत कृतिद्वारा नेपाली साहित्यलाई समृद्ध पार्नुभएकोमा खुसी हुँदै तपाईंको योगदान अरू बढ्दै जाने विश्वास व्यक्त गर्न चाहन्छु।

स्रष्टाहरू सुन्दर, सुखद, सुरक्षित र समृद्ध भविष्यतिरको अविरल यात्रामा नयाँपनका वाहक हुने गर्दछन् र परिवर्तनका प्रणेता हुने गर्दछन्। साथै उनीहरू स्थायित्वका स्तम्भ पनि हुने गर्दछन्। स्थायित्व र परिवर्तनको सोझो सम्बन्ध छ। बीजको विनाश होइन, परिवर्तन, बीजको विकास हो। हो, उम्रँदो बिरुवावरिपरिका झारपात भने उखेलेर फयाँक्नै पर्दछ, गोडमेल गर्नै पर्दछ। परिवर्तन पुर्खाहरूलाई वा तिनका उपलब्धिहरूलाई अस्वीकार वा परित्याग गर्ने क्रिया होइन, नयाँ उपलब्धिहरूको लागि तिनलाई बीजको रूपमा वा प्रस्थान आधारको रूपमा स्वीकार गर्ने संस्कृति हो। मानिसले बोल्न सिक्यो, सोच्न सिक्यो, गुफावासी अवस्थामै त्यहीं चित्र कोर्न सिक्यो, अक्षरको आविष्कार गऱ्यो, लेख्न सिक्यो, छापा-प्रविधि पत्ता लगायो, पुस्तक छाप्न सिक्यो, समय र स्थानहरूको दूरी नाघ्दै सञ्चार र संयोजन गर्न थाल्यो। मानवजातिका उपलब्धिहरूको शृङ्खला बढ्दै गयो। सुख, सुरक्षा, समृद्धि र सुन्दरताको खोजीमा

मानिसले एकपछि अर्को ऐतिहासिक पाइला चाल्दै गयो। भौतिक अवस्था र चिन्तन परम्पराका लामा शृङ्खलाहरूसित जोडिएका छन्, हाम्रा सबै परिवर्तनहरू। परिवर्तन र स्थायित्व, सृष्टि र स्थिति एक अर्काबिना सम्पन्न हुँदैनन् । परिवर्तका लागि धरती चाहिन्छ, पूर्वावस्था चाहिन्छ, सामल चाहिन्छ, मात्राको निर्धारण चाहिन्छ, चरणको विभाजन चाहिन्छ, शक्ति एवं साधनको लोखाजोखा चाहिन्छ। साथै अरू परिवर्तनको लागि, अरू विकासका लागि ठाउँ रित्तिने कुरा हुँदैन भन्ने पनि बुझ्नै पर्दछ। परिवर्तन र निरन्तरताको उपयुक्त समायोजन आवश्यक पर्दछ, अगाडि बढ्न ।

हामी संवैधानिक सङ्क्रमणकालमा छौँ । नेपाल राष्ट्रको नवनिर्माणको सङ्घारमा छौँ हामी। हामी हाम्रो समयको नयाँ पहिचानको खोजीमा छौँ । हामी हाम्रो समाजभित्रका सम्बन्धहरूलाई र राज्य, नागरिक, समुदायबीचका सम्बन्धहरूलाई पुनः परिभाषित गर्न खोज्दै छौँ। अविकास, अभाव, भेदभाव र मानवीय गरिमालाई चोट पुऱ्याउने अवस्था एवं व्यवहारबाट मुक्त समाजको निर्माण गर्ने आकाङ्क्षा र समतामूलक समाजको परिकल्पनाले हामीलाई परिवर्तनका लागि अभिप्रेरित गरेका छन् । हालै हामीले भोगेका निरङ्कुशतन्त्र र सशस्त्र द्वन्द्वका पीडाले परिवर्तनको आवश्यकतालाई झन् टड्कारो र जरुरी बनाइदिएका छन् । तर हामी नयाँ देश होइनौँ, नयाँ राष्ट्र होइनौँ, नयाँ राज्य पनि होइनौँ। हाम्रो पहिचान, हाम्रो चिन्तन, हाम्रो संस्कृति, हाम्रो सभ्यता भर्खरै पलाएको कुरा होइन। हजारौँ वर्षका गहिराइमा पुगेका छन् हाम्रो पहिचान र हाम्रो संस्कृतिका जराहरू। साथसाथै हामी २१ औँ शताब्दीमा छौँ र सङ्घीय लोकतान्त्रिक गणतन्त्रको युगमा प्रवेश गरेका छौँ। निर्वाचित संविधानसभाको २०६५ साल जेठ १५ गतेको पहिलो बैठकले यही दिशा निर्देश गरेको छ ।

हाम्रो देश र संस्कृतिको मुहान हजारौँ वर्ष बलियो छ। लोकतान्त्रिक आन्दोलनको मुहानसमेत सात दशक वर्ष बलियो छ । नेपाल प्रजापरिषद्को स्थापनादेखिको राजनीतिक पार्टीको इतिहास छ । ९७ सालका चार अमर शहीदले उद्घाटित गरेको लोकतन्त्रको यात्रा विभिन्न अवरोधहरूलाई जित्दै सात साल, १५ साल, ४६ साल, ६३ साल हुँदै निर्वाचित संविधानसभा र सङ्घीय लोकतान्त्रिक गणतन्त्रको चरणसम्म आइपुगेको छ । हामीले नवनिर्माणका लागि हाम्रो देश उभिएको जग

अरू सुदृढ पार्नु जरुरी छ । हामीले अझ उचाइ प्राप्त गर्न हाम्रा जराहरू बलिया हुनुपर्दछ । त्यसलाई उपेक्षा गऱ्यौँ भने, अतीतसितको सम्बन्ध दुर्बल तुल्यायौँ भने हाम्रो आजको चरणसमेत कमजोर हुन्छ, हामी कमजोर हुन्छौँ । हामीले हाम्रो राष्ट्रको मुहानमा हिलो छ्याप्न थाल्यौँ भने हाम्रो आजको प्रवाह पनि दुषित हुन पुग्दछ । अग्रगामी परिवर्तनका लागि नेपालको स्थायित्व चाहिएको छ। नेपालको स्थायित्वको लागि अग्रगामी परिवर्तन चाहिएको छ ।

सुन्दर सम्बन्धहरूको समुन्नत नेपाल निर्माणका आवश्यकताले मात्र होइन, अन्तरराष्ट्रिय कारणले गर्दा पनि हामीले गर्व गर्नुपर्ने सकारात्मक कुराहरूलाई खोजी-खोजी गर्व गर्नुपर्ने र आफ्ना जराहरू अरू बलियो पार्नुपर्ने अवस्था छ। २००१ सेप्टेम्बर ९ मा अमेरिकामाथि आतङ्कवादी हमलाले त्यस यताका वर्षहरूलाई प्रभावित पारिरहेका छन् । कमजोर राष्ट्र, अनियन्त्रित द्वन्द्वहरू, अराजकता र दण्डहीनता भोगिरहेका देश, आफ्नो कानुन कार्यान्वयन गर्न कमजोर भैरहेका राज्यबाट शक्तिशाली राष्ट्रहरू तर्सिन थालेका छन् । त्यस्ता देशहरूमा विदेशी चलखेल र हस्तक्षेपको खतरा बढेको छ । आज अन्तरराष्ट्रिय सम्बन्धको प्रणाली नै फेरिएको जस्तो छ। कमजोर, विभाजित, बढ्दा रूपमा कानुनविहीन राज्यको सार्वभौमसत्ता खतरामा पर्दै आएको छ। कैयौँ उदाहरण हाम्रा सामु छन् ।

अगामी संविधानले स्थायित्व र अग्रगामी परिवर्तन दुवैको आधार निर्माण गर्नुपर्ने छ। यसले हाम्रा सबै विविधतालाई समेट्न सक्नुपर्ने छ। सबै सामाजिक र राजनीतिक शक्तिहरू अटाउने र सबैको साझा आस्था पाउने संविधान हुनुपर्ने छ । नेपाल राष्ट्रको सबलीकरण र नवनिर्माण गर्ने कार्यमा, सुन्दर, सुखद, सुरक्षित र समृद्ध भविष्य निर्माण गर्ने दिशामा नेपाली वाङ्मयको ठूलो भूमिका छ। यो भूमिका अरू बढ्दै जाने निश्चित छ । वाङ्मयको भूमिका बढ्दै जानु भनेको नागरिक सशक्त हुँदै जानु, लोकतन्त्र बलियो हुँदै जानु र राष्ट्र माथि उठ्दै जानु हो ।

आज पुरस्कृत दर्नालज्यू र नयाँघरेज्यूलाई, मदन पुरस्कार गुठीलाई, यहाँहरू सबैलाई धन्यवाद छ, साधुवाद छ, साथै शुभकामना पनि ।

नमस्कार, जय होस् ।”

माननीय नीलाम्बर आचार्य 'जय होस्' भनेर बस्नुभएपछि सभाका हर्ताकर्ताले 'जगदम्बा-श्री' द्वारा सम्मानीत रामशरण दर्नाललाई आफ्नो मन्तव्य राख्न भन्नुभयो अनि श्री दर्नालले अस्वस्थताका कारण आफ्नो मुद्रित उद्गारका केही अंश मात्र पाठ गर्नुभयो। उहाँको मन्तव्यको पूरा पाठ भने यो थियो–

**"आदरणीय अध्यक्षज्यू, माननीय नीलाम्बर आचार्यज्यू, युवराज नयाँघरेज्यू, मदन पुरस्कार गुठीका सञ्चालकहरू, उपस्थित स्रष्टा, पत्रकार बन्धु तथा गण्यमान्य व्यक्तित्व !**

मेरो सानो मन्तव्य राख्ने अनुमति चाहन्छु–

वैदिककाल अघिका सङ्गीतलाई प्रागैतिहासिक कालको सङ्गीत भनिएको छ। यस कालका बारेमा त्यति थाहा पाइँदैन तैपनि उत्खननबाट केही कुरा पत्ता लाग्छन्। यसबाट त्यतिबेला पनि सङ्गीत कलाको अस्तित्व रहेका प्रमाण पाइन्छन्। वीणा, वंशी र मृदङ्ग अनि नृत्यमूर्तिहरूले ती कुराको पुष्टि गर्दछन्। ती मूर्ति र वाद्य यन्त्रहरूले त्यतिबेलाका तारबाजा, सुषिर बाजा र आनद्ध बाजाको प्रतिनिधित्व गर्दछन्। नृत्य मूर्तिले नृत्यकलाको प्रतिनिधित्व गरेको छ।

### *प्रजातन्त्रपछिको नेपाली सङ्गीत*

करिब एक शताब्दीसम्म अन्धकारमा बन्द रहेको नेपालले क्रान्तिकारी वीर शहीदहरूको त्याग र बलिदानले गर्दा वि.सं. २००७ साल फागुन ७ गतेका दिन बल्ल उज्यालो किरण देख्न पायो। नेपाली जनता यो अपूर्व उपलब्धिले गद्गद थिए। गर्वले उनीहरूको छाती उचालिएको थियो। ती आफूलाई विश्वको सर्वोच्च शिखर सगरमाथासरह सम्झन्थे।

२००७ सालपछि उदाएको प्रजातन्त्रले नेपाली सङ्गीतमा पनि एउटा ठूलो उत्साह र जागरण ल्याइदियो। प्रजातन्त्रसँगसँगै रेडियो नेपालको जन्मले नेपाली सङ्गीतजगत्मा एउटा नौलो आयाम थपियो। प्रजातान्त्रिक युगको थालनीसाथै अनेकौं गायकगायिका, वादक-कलाकार, सङ्गीतकार आदि नेपाली सङ्गीतमा देखापर्न थाले। यसका साथै जनस्तरबाट अनेकौं साङ्गीतिक र सांस्कृतिक संस्थाहरू स्थापना हुन थाले। सुषुप्त अवस्थामा रहेका लोकसङ्गीत र राष्ट्रिय सङ्गीत जुर्मुराउन थाले। सङ्गीतका विविध विधाहरूले फस्टाउने अवसर पाउन थाले। पहिले सेनामा मात्र ब्यान्ड

थियो। अब प्रहरी (रक्षादल) को पनि आफ्नै ब्यान्ड स्थापना भयो। यसका संस्थापक ब्यान्ड मास्टर क्याप्टेन काले सुनाम थिए। अब शास्त्रीय सङ्गीतबाहेक लोकसङ्गीत, सुगम सङ्गीत र अर्केस्ट्राहरूको पनि अस्तित्व देखिन थाल्यो। वि.सं.२००७ सालमै सितारवादक लक्ष्मीनारायणले सितार चन्द्रिका प्रकाशित गरे। सङ्गीत शिक्षाका लागि पं. यज्ञराज शर्माको सक्रियतामा वि.सं.२०१२ सालमा नेपाल सङ्गीत महाविद्यालयको स्थापना भयो। यही वर्ष चन्द्रकुमार उपाध्यायले 'बाल सङ्गीत शिक्षा' प्रकाशित गरे।

२०१३ सालको राजा महेन्द्रको शुभराज्याभिषेकदेखि राष्ट्रिय संस्कृतिले गति लिन थालेको बुझिन्छ। यही अवसरमा देशमा पहिलोपल्ट नेपालका विभिन्न जिल्लाहरूबाट लोक-कलाकार झिकाइएका थिए। उनीहरूले राजधानीमा प्रथमपटक आफ्नो कलाको परिचय दिने अवसर पाएका थिए। यसै वर्ष राजा महेन्द्रबाट पं. यज्ञराज शर्मालाई सङ्गीतकलाको उत्कृष्ट उपाधि सङ्गीतशिरोमणि प्रदान गरिएको थियो। यो वर्षमा परशुरामभक्त माथेमाद्वारा लिखित सङ्गीत प्रवेशिका प्रकाशित गरिएको थियो। यसले सङ्गीत शिक्षणमा केही मात्रामा भए पनि योगदान पुऱ्याएको थियो।

२०१४ सालमा राजा महेन्द्रबाट नेपाली कला, साहित्य र संस्कृतिको आधारशिला 'नेपाली एकेडेमी' को स्थापना भयो। प्रथम कुलपतिका रूपमा स्वयम् राजा महेन्द्रबाट चान्सलर पद ग्रहण भयो। यसका उद्देश्यहरूअन्तर्गत सङ्गीतकला र नृत्यकलाको सिर्जना र अनुसन्धानलाई प्रोत्साहित गर्नु रहेको थियो। सर्वप्रथम सङ्गीत शिरोमणि पं. यज्ञराज शर्माले सङ्गीत विधाको प्रतिनिधित्व गरी यसको सदस्य हुनुभएको थियो।

२०१५ सालमा उ. गोविन्दलालको निर्देशनमा कवि तथा गीतकार म.वि.वि. शाहद्वारा रचित गीतको रेकर्डिङ्ग नारायणहिटी राजदरबारमै सम्पन्न भएको थियो। तीमध्ये 'हे वीर हिँड अघि सरी' र 'गर्छिन् पुकार आमा' ज्यादै लोकप्रिय भएका थिए। पछि अरू नेपाली तथा भारतीय सङ्गीतकारहरूले समेत 'उसैका लागि' गीत-सङ्ग्रहबाट सङ्गीतबद्ध गरेका थिए। यसै वर्ष होमनाथ पौड्यालद्वारा लिखित 'नेपाल गान मञ्जरी' स्वरलिपिसहित प्रकाशित भएको थियो।

२०१६ सालमा तत्कालीन सरकारले संस्कृति विभागको गठन गर्‍यो । यसै वर्ष काठमाडौँमा आधुनिक वाद्य-वादनको स्थापना गरियो। वि.सं. २०१६ सालसम्म नेपाली सङ्गीत र संस्कृतिको उत्थान र विकासको उद्देश्य लिएर धेरै संस्थाहरूको स्थापना भइसकेको थियो। यिनमा नेपाल नाटक सङ्घ, नेपाल कला केन्द्र, नवीन कलामण्डल, नासः खलः, जननाट्य परिषद् र ललितकला केन्द्र आदि मुख्य थिए। यीबाहेक विद्यालय र महाविद्यालयहरूमा आयोजना हुने सांस्कृतिक कार्यक्रमहरूले पनि आ-आफ्नो क्षेत्रबाट सघाउ पुऱ्याउँदै आए। यसै वर्ष नेपाल एकेडेमीको प्रथम जन्मजयन्ती नारायणहिटी राजदरबारमै तीन दिने भव्य कार्यक्रमका साथ सम्पन्न भएको थियो । नेपाल एकेडेमीले पहिलोपल्ट त्रिभुवन पुरस्कार र इन्द्रराज्यलक्ष्मी पुरस्कारद्वारा वैज्ञानिक नरबहादुर भारती र उस्ताद गणेशलाल श्रेष्ठलाई पुरस्कृत गरेको थियो । प्रारम्भमा यो पुरस्कारको रकम रु.१०,०००।- र रु. ५,०००।- को थियो ।

२०१८ सालमा नेपाली सङ्गीतको व्यापक प्रचार-प्रसार र संवर्द्धनको उद्देश्य लिएर रत्न रेकर्डिङ ट्रस्टको स्थापना भयो। केही वर्षपछि यसले संस्थानको रूप लियो । अब यसलाई रत्न रेकर्डिङ संस्थान भनियो । वि.सं.२०१९ सालमा राजा महेन्द्रबाट उस्ताद गणेशलाल श्रेष्ठलाई वाद्यशिरोमणि र नरराज ढकाललाई सङ्गीतप्रवीण उपाधि प्रदान गरियो। नेपाली वाद्यवादन क्षेत्रमा वाद्यशिरोमणि सबभन्दा उच्च उपाधि हो ।

नेपाली सङ्गीत प्रशिक्षणको इतिहासमा सम्बन्धित निकायबाट प्रारम्भ गरिएको प्रशिक्षण कार्य सर्वप्रथम नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानले वि.सं. २०२१ र २०२६ सालमा सञ्चालन गरेको त्रिवर्षीय योजना र पञ्चवर्षीय योजनाअन्तर्गतको तालिम योजना थियो। यसअन्तर्गत गायन, वादन र नृत्य गरी सङ्गीतका तीनै विधामा कलाकारहरू तयार गरिन्थे। यसबाहेक नाटकमा पनि तालिम दिइन्थ्यो। यसप्रकारको तालिम योजना केही वर्षअघिसम्म पनि सञ्चालित थियो। सांस्कृतिक संस्थानमा पनि यसप्रकारको तालिमको व्यवस्था थियो। केही वर्षदेखि त्यहाँ पनि यो कार्यक्रम बन्द गरिएको थियो। नेपाल अधिराज्यका विभिन्न भागमा रहेका कला-प्रतिभाहरूलाई एक वर्षदेखि दुई वर्षसम्म छात्रवृत्ति प्रदान गरिने त्यसप्रकारको विशेष तालिमले स्थानीय प्रतिभाहरू प्रशिक्षित भई

आ-आफ्नो क्षेत्रमा गएर स्थानीय प्रतिभालाई तयार गर्न सघाउने गर्दथे। त्यस्ता प्रशिक्षित प्रतिभाहरू आज लोकप्रिय कलाकार र सङ्गीतकार बन्न पुगेका र उनीहरूमध्ये कतिपय कलाकार निर्देशकसमेत भएका उदाहरणहरू पनि दिन सकिन्छ।

वि.सं. २०२७ सालमा नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानले राष्ट्रको उपहारस्वरूप प्रज्ञा-भवन पाउनु एउटा अविस्मरणीय सुखद घटना थियो। पहिले उसले भाषा, साहित्य, संस्कृति, कला, ज्ञान र विज्ञानको प्रतिनिधित्व गरेको थियो भने नवगठित प्रज्ञा-प्रतिष्ठानको संस्कृति, कला, ज्ञान र विज्ञानको प्रतिनिधित्व गरेको थियो। नवगठित प्रज्ञा-प्रतिष्ठानको विधेयकअनुसार भाषा-साहित्य, सङ्गीत, नाट्य, कला-कौशल र संस्कृति-सामाजिक शास्त्रको प्रतिनिधित्व गर्छ। पहिले छ विधा थियो भने हाल आठ विधा समावेश गरिएको छ। समानुपातिक ढङ्गले सबै विधाको विकास होस् भनेर ती आठ विधालाई चार विभागमा बाँडिएको छ। पाँच कुलपति र छ उपकुलपतिलगायत धेरै सदस्यहरू देखिसकेको वर्तमान प्रज्ञा-भवनले आफ्नो पज्ञा-ज्योति देशका कुनाकाप्चासम्म पुऱ्याउन सके यसको सार्थकता र महत्त्व अझै बढ्ने थियो।

प्रज्ञा-भवनको विशाल रङ्गमञ्चमा धेरै राष्ट्रिय र अन्तर्राष्ट्रिय साङ्गीतिक र सांस्कृतिक कार्यक्रमहरू सम्पन्न हुँदै आएका छन्। विशिष्ट पाहुनाहरूदेखि लिएर राष्ट्राध्यक्ष र सरकार प्रमुखहरूमा नेपालको साङ्गीतिक र सांस्कृतिक झलक प्रदर्शन गर्ने एक मात्र रङ्गमञ्च बन्न पुगेको छ। राष्ट्रको सांस्कृतिक धरोहरको रूपमा रहेको प्रज्ञा-भवनले धेरै कुराको सुधारको अपेक्षा राखेको छ।

वि.सं.२०४१ सालदेखि नेपाली सङ्गीतजगत्मा एउटा नयाँ प्रविधि देखा पऱ्यो। श्रोताहरू जहाँ रङ्गमञ्चमा गएर कला प्रदर्शन हेर्थे, रेडियो खोलेर गीत-सङ्गीत सुन्थे, अबदेखि टेलिभिजनको पर्दामा गाएको, बजाएको, नाचेको प्रत्यक्ष दृश्य देख्न सकिने भयो। नेपाल टेलिभिजनको स्थापना नेपाली सङ्गीतको प्रचार-प्रसारमा एउटा टेवाको रूपमा लिन सकिन्छ। विश्वभर चलेको विद्युतीय सञ्चार प्रणालीबाट नेपाल मात्र अलग्गिन सक्तैनथ्यो। अब त नेपालमै पनि अरू च्यानलहरू देखा पर्दै छन्। नेपाल टेलिभिजनले आफ्नो छोटो जीवनकालमै नेपाली सङ्गीतकलालाई जसरी प्रस्तुत गर्दै आएको छ– क्षमतालाई हेरेर निकै प्रभावी रहेको अनुभव गर्न सकिन्छ।

### *राष्ट्रिय सङ्गीत*

वास्तवमा प्रजातन्त्रको उदयपछि मात्र नेपाली सङ्गीतमा राष्ट्रिय भावनाका गीतहरू देखा पर्न थालेका हुन्। वि.सं. २००७ सालपछि देखिएको राष्ट्रिय जागरण र सांस्कृतिक लहरको वातावरण नेपाली मानसिकतामा अभूतपूर्व उत्साह थियो ।

राष्ट्रकवि माधवप्रसाद घिमिरेको 'गाउँछ गीत नेपाली' ले एकातिर तहल्का मच्चाएको थियो भने म.वि.वि. शाहको 'हे वीर हिँड अघि सरी' पनि लोकप्रिय रहेको थियो । कवि भूपि शेरचनको 'यो नेपाली शिर उचाली' ज्यादै लोकप्रिय राष्ट्रिय गीतहरूमध्येको थियो । नेपाली कवि तथा गीतकारहरूले थुप्रै राष्ट्रियगीतको रचना गरे । नेपाली राष्ट्रियगीतहरू तत्कालीन राजनीतिबाट पनि प्रभावित नरहेका हैनन् । तर शुद्ध राष्ट्रिय भावनाबाट प्रभावित गीतले नै अमरता प्राप्त गर्दछन् । रेडियो नेपाल र टेलिभिजनले राष्ट्रिय गीत भनेर प्रसारण गरेका राष्ट्रिय गीतहरूमध्ये कतिपयलाई वास्तवमा राष्ट्रिय गीत भन्न सकिने-नसकिने अनुसन्धानकै विषय बनेको छ । जुनसुकै देशले पनि राष्ट्रगान (सलामी) र राष्ट्रिय गीत निर्धारण गरेको हुन्छ ।

सङ्गीतकलामा राष्ट्रियताको कुरा उठ्दा यसका सबै विधा र पक्षमा विचार गर्न कर लाग्छ। भनाइको तात्पर्य नेपाली राष्ट्रिय सङ्गीतमा केवल गीतका शब्द मात्र राष्ट्रिय भावनाका भएर पुग्दैन। त्यो गीतको भावभूमि, पृष्ठभूमि, सङ्गीत, वादन आदि पनि नेपालीत्वले भरिएको हुनु आवश्यक छ। केवल शब्दले मात्र हैन, अपितु लय, ताल र वादनमा पनि नेपालीपन हुनु जरुरी हुन्छ। गीतकार, सङ्गीतकार, गायक, वादक सबैले आफ्नो मौलिकता र नेपालीपनको रक्षा गर्नुपर्छ। नेपाली शब्दका गीत, विदेशी वा फिल्मी धुन, बाहिरी प्रभावको गायन, विदेशी वाद्ययन्त्रहरूको बाहुल्य आदिले नेपाली मौलिक सङ्गीतको प्रतिनिधित्व गर्दैनन् । यसैले हाम्रा गीतकार, सङ्गीतकार, वादक, कलाकार, गायक र गायिकाहरूले नेपालीपनको मौलिकतामा गम्भीरतापूर्वक ध्यान दिनु आवश्यक हुन्छ । नेपालीपन र शैलीको रक्षा गरिएन भने भविष्यमा पछुताउनुबाहेक बाँकी केही रहने छैन। नेपाली राष्ट्रिय गीत वा सङ्गीत शुद्ध हुँदैन भन्ने आग्रह हुनु अस्वाभाविक हैन । यतिमात्र हैन, हाम्रो मानसिकता र चेतनामा पनि नेपाल र नेपालीत्वले पूर्ण स्थान पाउनुपर्छ

अनि मात्र नेपाली राष्ट्रिय सङ्गीतको कल्पना गर्न सकिन्छ। यसमा सङ्गीतप्रेमी श्रोताहरूको पनि त्यत्तिकै महत्त्वपूर्ण भूमिका रहनु आवश्यक छ ।

आफ्नो अस्तित्वप्रति सजग र सचेत नभई कसैले पनि स्वयम्को वास्तविक परिचय दिन सक्दैन। सर्वप्रथम हामीले आफूलाई एक स्वाभिमानी नेपाली नागरिकको रूपमा चिनाउनु आवश्यक छ। यसो भएमा हामी आफ्नो स्वत्वको रक्षा गर्न समर्थ हुनेछौँ ।

सङ्गीतकलाको विविध विधामा ग्रन्थ प्रकाशन हुन बाँकी नै रहेको छ। सामान्यत: अहिले टड्कारो अभाव अनुभव गरिएका विषय हुन्-नेपाली सङ्गीत कोश, सङ्गीत इतिहास, नेपाली सङ्गीतशास्त्र, अन्वेषण र अध्ययनका आधारमा तयार पारिएका नेपाली सङ्गीतका विविध विधा यी सब विधा पूर्ण भएमा मात्र नेपाली सङ्गीत शिक्षणमा केही प्रगति हुन सक्ने आशा गर्न सकिन्छ। यसले गर्दा साङ्गीतिक जगत्को प्राज्ञिक क्षेत्र पनि फराकिलो हुँदै जाने आशा गर्न सकिन्छ ।

### *सङ्गीत विधा*

नेपाली सङ्गीतमा मुख्यत: चार विधामध्ये गायन, वादन र नर्तन (नृत्य) को अनुभव गर्न सकिन्छ । यसरी विचार गर्दा गायनमा-लोकसङ्गीत, शास्त्रीय सङ्गीत । वादनमा-लोक वादन, शास्त्रीय वादन। नर्तनमा-लोकनाच, शास्त्रीय नृत्य। यी मुख्य विधाअन्तर्गत अरू पनि धेरै विषय समावेश हुन सक्छन् ।

### *लोकसङ्गीत*

नेपाली लोकसङ्गीत हजारौँ वर्षअघिदेखि गाइँदै आएको छ। प्राचीन सङ्गीतको प्रतीक भएकाले यसलाई ‘अपौरुषेय’ भनिएको छ। त्यसबेलादेखि गाउँदै आएका लोकगीतका रचनाकारहरू को-को हुन् भन्ने अनभिज्ञ छ। यसैले त्यस्ता लोकगीतलाई अपौरुषेय भनिएको हुन सक्छ। तर अध्ययन र अन्वेषण भएमा केही त अवश्य नै फेला पर्ने छन् । प्राचीनकालदेखि नेपाली लोकसङ्गीतमा गाउँदै आएका त्यस्ता लोकगीत जन-जनको कण्ठबाट निस्कँदै ठाउँ-ठाउँमा अलग-अलग किसिमले गाइन्छन् । लोकसङ्गीतमा निश्चित व्याकरण र नियम नभई श्रुतिपरम्परामा एक-अर्काले गाउने भएकाले एकै प्रकारको नहुनु

स्वाभाविकै छ। लोकगीत नै देशको ढुकढुकी र आत्मा हो। यसैबाट शास्त्रीय सङ्गीतले पनि नियमबद्ध भई जन्म लिने आधार पाएको छ। कतिपय राग लोकगीतबाटै जन्मेका छन्।

नेपाल लोक-सङ्गीत र संस्कृतिले समृद्ध देश हो। अनेकौँ जात, जाति र जनजातिहरू बसोबास गर्ने प्रकृतिमय नेपाल साँच्चि नै एउटा सुन्दर फूलबारी हो। मेचीदेखि महाकालीसम्म मात्र नभई नेपाली जाति जहाँसुकै रहे पनि आफ्नो सङ्गीत, संस्कृति, बिर्सेका हुँदैनन्। देउरालीपिच्छे भाका फेरिने हाम्रो लोकगीत विश्वको अद्वितीय साङ्गीतिक भण्डार हो। यहाँ केही जातिले आफूलाई यसैमा समर्पित गरी लोकलाई मनोरञ्जन दिलाउँदै आएका छन्। त्यस्ता जातिहरूमध्ये मुख्यत: गाइने र वादी देखा पर्दछन्। यसो त दमाईं र हुड्केहरूलाई पनि यस सन्दर्भमा सम्झिन नसकिने हैन, तर उनीहरूका पेसा अरू पनि छन्। नेपाली लोकसङ्गीतको संरक्षण र संवर्द्धनका लागि धेरै काम गर्न बाँकी छ। सर्वप्रथम त यसलाई मासिन नदिन लोप हुन लागेका दुर्लभ भाकाहरूको सङ्ग्रह आवश्यक छ। म्युजिक नेपालले यसतर्फ देखाएको अभिरुचिलाई सकारात्मक मान्नुपर्छ।

### *शास्त्रीय सङ्गीत*

शास्त्रीय सङ्गीतलाई अर्को अर्थमा वैदिक सङ्गीत पनि भनिन्छ। वेदबाट उत्पत्ति भई व्याकरण र शास्त्रवद्ध सुर-तालमा कठोर नियमपूर्वक गाइने भएकाले यसलाई शास्त्रीय सङ्गीत भनिएको हो। ऋषि-मुनि र सङ्गीतका पारङ्गत सङ्गीतज्ञहरूबाट यसलाई गाइँदै आएको पाइन्छ। नेपाली सङ्गीत इतिहासमा मल्लकालदेखि नै शास्त्रीय सङ्गीतको महत्त्व रहिआएको छ। मल्ल राजाहरूले शास्त्रीय सङ्गीतमा पुस्तक मात्र लेखेनन्, उनीहरूले आफ्नो प्रशस्तिमा सङ्गीतको विशेषण पनि थपे। आफूले रचेका रचनामा राग र तालको उल्लेख गरी शिलालेखसमेत तयार गराए। शास्त्रीय सङ्गीतका गायक पं. यज्ञराज शर्मा सङ्गीतशिरोमणिको उच्च पदवीले विभूषित हुनुभयो। उहाँले त्रिभुवन प्रज्ञा-पुरस्कारसमेत प्राप्त गर्नुभयो। नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानको सङ्गीत विधाका संस्थापक सदस्य हुने सौभाग्य पनि उहाँलाई नै प्राप्त भएको थियो। वि.सं. २०२२ सालमा उहाँले अवकाश पाएपछि सङ्गीत विधा खाली नै रहेको थियो। हालको नयाँ व्यवस्थाअनुरूप

सङ्गीतप्रवीण नरराज ढकाल सङ्गीत विधाको सदस्यको रूपमा आसीन हुनुहुन्थ्यो ।

नेपाली शास्त्रीय सङ्गीतमा केही पुस्तक प्रकाशित भए, केही प्रकाशित हुने तरखरमा छन् । यसो हुँदाहुँदै पनि ती पुस्तकहरूले पाठ्यपुस्तकबाहेकको उपयोगिता हासिल गर्न सकेका छैनन् । शास्त्रीय सङ्गीतको उच्चतम आदर्शलाई तिनले प्रतिनिधित्व गर्न सकेका छैनन् । यसैले नेपाली शास्त्रीय सङ्गीतको प्राचीन परम्परादेखि आजसम्मका सन्दर्भलाई जोडेर शोधग्रन्थहरू अध्ययन गरी प्रकाशित गर्न आवश्यक भएको छ। यसो भएमा सङ्गीतशास्त्रको मूल आधार शास्त्रीय सङ्गीतमा केही ठोस उपलब्धि हुने थियो ।

***लोक वादन***

नेपाली लोकसङ्गीतमा लोकवाद्य र वाद्यवृन्द समृद्धिशाली रहेको छ। वादनका चारै श्रेणी तत्, सुषिर, आनद्ध र घन नियमा विद्यमान छन तारका बाजाहरूमा गजले रेटेर बजाइने र कोट्याएर बजाइने दुवै थरी लोक-वाद्य नेपाली सङ्गीत वाद्यमा रहेका छन्। फुकेर बजाइने बाजाहरूमा बाँस, काठ, तामा, पित्तलबाहेक सिङ र मानव नली हाडका सुषिर वाद्यसमेत रहेका छन्। तीमध्ये कतिपय बाजा छिद्रविहीन छन् भने कतिपय छिद्रसहितका छन्। यसैगरी आनद्ध श्रेणीका तालबाजाहरू लोकवाद्यमा प्रचुर रहेका छन्। तिनमा खरी हालेका र नहालेका दुवै बाजा पर्दछन्। ढोल, डम्फु, मादल प्रकृतिका अनेकौँ बाजा नेपाली लोक-सङ्गीत वाद्यमा प्रचलित छन्। घनवाद्यमा कतिपय बाजा धातुका, कतिपय बाजा इँटका र कतिपय बाजा माटाले बनेका पनि छन्। यी लोकबाजाहरू विभिन्न जाति र समूहहरूमा बज्दै आएका छन्। कतिपय जातिहरूले यिनलाई आफ्नो पुर्ख्यौली र पेसेवर वाद्ययन्त्र ठानेका छन्। लोकबाजा (समूह) का विभिन्न समूहहरू चाडपर्व, जात्रा-मात्रा र राष्ट्रिय उत्सवहरूमा प्रत्यक्ष अनुभव गर्न सकिन्छ। सबै बाजाको आ-आफ्नो महत्त्व र इतिहास रहेको छ ।

***शास्त्रीय वादन***

नेपाली सङ्गीतमा गायनमा भन्दा बढी सङ्ख्या वादनमा देखा पर्छ । नेपाली शास्त्रीय वादनमा बाँसुरी, तबला, सितार, सरोद,

इसराज, सन्तुर, जलतरङ्ग, सनई, हार्मोनियम आदि बज्दै आएका छन्। ती बाजाहरू एकाकी र समूहमा पनि बज्ने गर्दन्। वादनमा पनि सबभन्दा बढी सङ्ख्या सितारको देखिन्छ।

प्रारम्भमा वाद्यशिरोमणि गणेशलाल श्रेष्ठले शास्त्रीय वाद्यवृन्दको संरचना गर्नुभयो। उहाँको शेषपछि कृष्णनारायण श्रेष्ठले धेरै शास्त्रीय वाद्यवृन्दको रचना गरेका थिए। त्यसपछि केही वाद्यवृन्द गोपालनाथले तयार पारेका थिए। आजकाल त्यो पनि एकप्रकारले बन्दजस्तै हुन पुगेको छ। एकाकी, युगल, वादन भने रेडियो र टेलिभिजनबाट बराबर प्रसारण हुने गरेका छन्। यतिका सङ्ख्यामा देखिने वादक कलाकारहरूबाट एउटा भव्य शास्त्रीय सङ्गीतको वाद्यवृन्द रचना हुन सक्थ्यो। केही व्यावसायिक समूहबाट यस्तो प्रयास भएको बुझिन्छ तर संस्थागत रूपमा भने उदासीन नै देखापरेको छ। विज्ञ, सङ्गीतज्ञ र सङ्गीतकारहरूलाई यसतर्फ उत्साहित गरी विशेष सङ्गीत रचना (वाद्यवृन्दका लागि) तयार पार्न सकिने थियो।

### *लोकनृत्य*

नेपाली लोकसङ्गीतमा लोकनृत्यको ज्यादै ठूलो भूमिका रहेको छ। आफ्नो जीवनमा एकफेरा नगाएको र ननाचेको मान्छे नेपाली हुँदैन भन्ने भनाइ, नेपाली लोकनृत्यको प्रवृत्तिलाई विचार गर्दा हो नै जस्तो लाग्छ। नेपाली लोकनृत्य प्राचीनकालदेखि अनेकौँ जातजाति र जनजातिहरूमा प्रचलित हुँदै आएको छ। तीमध्ये कतिपय लोकनाच लोप पनि भइसके कतिपय नयाँ किसिमका लोकनाचहरू देखा पर्दै छन्। केही लोकप्रिय नाचहरू भने अद्यावधि नाचिँदै आएका छन्। ती लोकनाचका नाम मात्र लिँदा पनि सैकडौँको सङ्ख्या पुग्न सक्छ। नेपालको कुनाकाप्चामा रहेका अनेकौँ लोकनाचहरूलाई प्रकाशमा ल्याउन अझै बाँकी रहेको देखिन्छ। नेपाली लोकनाचको समग्र अध्ययनका लागि सबभन्दा पहिले तिनको सचित्र सङ्कलन र पूर्ण विवरण प्राप्त गर्नु आवश्यक हुन्छ। यसरी सङ्कलित लोकनाचहरूलाई अन्वेषणको आधारमा सर्वसाधारणमा प्रदर्शन गर्नुका साथै पुस्तकाकारमा प्रकाशन गर्नु पनि आवश्यक हुन जान्छ। नेपाली लोकनाचमा आधिकारिक ग्रन्थको आवश्यकता रहेको छ।

***शास्त्रीय नृत्य***

नेपाली शास्त्रीय नृत्यको सन्दर्भमा विचार गर्दा हाम्रो नृत्यशास्त्रीहरूले कुन चाहिँ नृत्यलाई शास्त्रीय नृत्य भनेका हुन् ? त्यो शास्त्रीय ग्रन्थको कमीले वा सर्वसम्मत आधारको कमीले हो यसै भन्ने स्थिति देखापरेको छैन । प्रधान नाट्यमण्डलले यसतर्फ केही प्रयास गरेको देखिन्छ तर त्यो विषय सर्वसम्मत भइसकेको देखिँदैन। शास्त्रीय नृत्यको रूपमा भरतनाट्यम, कत्थक, कुचिपुडी, मणिपुरी आदिलाई नै मानिएको छ । नृत्य शिक्षण पनि यिनैको आधारमा चल्दै आएको छ। ती शास्त्रीय नृत्यहरू बराबर प्रदर्शन पनि भइरहेछन्। तर नेपालको समृद्ध नृत्यपरम्परामा शास्त्रीय आधार भएका हजारौँ वर्षअघिदेखिका नृत्यहरू नहोलान् भन्न सकिन्न। शोध र अनुसन्धान गरेमा नेपालका नृत्यहरूमा प्रशस्त शास्त्रीय आधारहरू भेट्न सक्दछन् । यसका लागि नेपाली नृत्यशास्त्रीहरूको प्रयास अघि सर्नुपर्ने देखिन्छ। नृत्यका विविध विधा र प्रकरणहरूका नृत्यशास्त्रीहरूले सर्वसम्मत भएर एक-एक आधारभूत शास्त्र नृत्यकलामा दिनसकेमा परम्परागत नेपाली नृत्यहरूले पनि शास्त्रीयता प्राप्त गर्न सक्ने आधार तयार हुनेछ ।

अन्तमा नेपाली सङ्गीतकलाको विकासका लागि राष्ट्रियस्तरका स्वदेशी र विदेशी वाद्ययन्त्रहरूले पूर्ण राष्ट्रिय वाद्यवृन्द र अन्तर्राष्ट्रिय वाद्यवृन्दको आवश्यकताबारे यस पङ्क्तिका लेखकले धेरै लेखमा कुरा उठाएको हो। तर यसतर्फ कसैको ध्यान गएजस्तो लागेन ।

नेपाली सङ्गीतका विविध पक्ष र विधा ती वाद्यवृन्दहरूविना पूर्ण हुन सकिरहेका छैनन्। सक्षम संस्थाहरूले यसतर्फ ध्यान दिनु आवश्यक छ । राष्ट्रिय वाद्यवृन्दहरूले स्वदेशी सङ्गीतको प्रतिनिधित्व गर्छन् भने अन्तर्राष्ट्रिय वाद्यवृन्दहरूले विश्वसङ्गीतको परिचय दिलाउँछन्। आजको विश्वमा यी दुवैको नितान्त आवश्यकता छ। यी दुवै वाद्यवृन्दहरूको निर्माणले नेपाली सङ्गीतका सबै विधाको विकास सम्भव हुन जान्छ । यसो भएमा नेपाली सङ्गीतले एउटा नयाँ आयाम पाउनेछ, यसको विकासको मार्ग प्रशस्त हुनेछ। राष्ट्रको गौरवको रूपमा रहेको नेपाली सङ्गीत-संस्कृतिको प्रभाव देशान्तरमा समेत बढ्नेछ ।

अन्तमा मेरो जीवनभरको योगदानलाई मनन गरी 'मदन पुरस्कार' गुठीले मलाई पुरस्कृत गरेकोमा गुठीका अध्यक्ष श्री कमल

दीक्षितज्यू प्रति कृतज्ञतासाथ आभार प्रकट गर्दछु। गुठीका निर्णायकहरू प्रति पनि हार्दिक आभार व्यक्त गर्न चाहन्छु । 'जगदम्बा-श्री' जस्तो उच्चकोटीको पुरस्कार ग्रहण गर्न पाएकोमा आफूलाई भाग्यमानी सम्झेको छु। पुरस्कारले मेरो जीवनमा एउटा ठूलो प्रेरणा मिलेजस्तो अनुभव भइरहेछ । यसबाट मलाई ठूलो हौसला मिलेको छ । यहाँ उपस्थित स्रष्टाहरूप्रति फेरि एकपटक धन्यवाद ज्ञापन गर्दै विश्राम लिन्छु ।

धन्यवाद !"

श्री रामशरण दर्नाल 'धन्यवाद' भनेर बसेपछि 'मदन पुरस्कार' विजेता ग्रन्थका स्रस्टा श्री युवराज नयाँघरेलाई आफ्नो उद्गार पोख्न आग्रह गरियो र उहाँले भन्नुभयो–

"**मान्यवर अध्यक्षज्यू, माननीय नीलाम्बर आचार्यज्यू, आदरणीय रामशरण दर्नालज्यू, महिला तथा सज्जनवृन्द** !

सर्वप्रथम अग्रज साहित्यिक रामशरण दर्नालज्यूमा साधुवाद अर्पिंदै बोल्छु ।

अक्षर संसारका अनवरत यात्रामा हिँडिरहेँ म । त्यो हिँडाइलाई प्रेम, प्रोत्साहन र पुरस्कारका अनन्त पाहुरहरू पाइरहेँ मैले। ती सबै स्नेही मन र भावनाहरूप्रति आदरभाउ त छ नै, हर्षको बोली पनि सुम्पन चाहन्छु ।

'एक हातको ताली' पुरस्कारको आँखामा पऱ्यो। हाम्रो वाङ्मयको अग्लो सम्मान-शिखर हो- 'मदन पुरस्कार' । यसै गौरवशाली पुरस्कारले 'एक हातको ताली' स्वीकृत भएपछि मेरो निबन्ध लेखन झन् ठूलो राजमार्गको यात्रु हुने चेष्टामा लागेको छ ।

मेरो धन्यवाद छ– गुठीलाई । 'एक हातको ताली'का पढालु हृदयलाई । 'एक हातको ताली'का विषयलाई । भोक्ता र सामाजिक मान्यतालाई ।

केही निर्बन्ध कुरा राख्ने मन छ ।

यो गजबकै संयोग भो– आफू जन्मेकै अञ्चल र जिल्लाका स्रष्टा तारानाथ शर्माले पाएपछि पछिल्लो पुरस्कृत लेखक मै भएँ। म जन्मेकै सालमा त्यस निबन्ध र नियात्राको सम्मानपछि २०६५ सालमा मेरो लेखनले यो पुरस्कार प्राप्त गर्नु अर्को सुखद संयोग मानेँ मैले ।

निबन्ध प्रिय भइदियो मेरा लागि। जति लेख्यो उति नयाँ विषय, नवीन चरित्र र नौलो शिल्पको आग्रह भएर आइरह्यो यो विधा। थकाइ कदापि लागेन। हो, सबैले अदेखा र छेउकुना छोडेको निबन्धले मलाई बोलाइरह्यो अनवरत। मै नि उसको वरिपरि रहिरहेँ।

भाषा, विषय र पाठक– यी तीन अनुहारले मेरो लेखनमा सर्वाधिक महत्त्व पाउँछन्। नेपाली ऱ्रर्रा र ठेट शब्दभित्र सुकोमल छवि बोकेर बसेको सुन्दरताको अघि कायल छु म। तिनको प्रयोग गरेर को थाक्ला र? थाक्दिनँ म त।

छिन-छिनको ठूलो परिवर्तन बोकिरहेको समयको साक्षी छु म। हजार घटना र तीभन्दा कठोर अनि शक्तिशाली प्रतिक्रियालाई निबन्धमा उतार्न अझै सकिनँ। धेरैमा कुन छान्ने अथवा नछानी नहुने कुनचैँ विषय पऱ्यो? प्रश्न भेट्छु। मेरा निबन्धले अन्योल, असङ्गत र असह्य दृश्यमा आशाको सञ्चार गर्न थाकेनन् कहिल्यै।

पाठक- ठूलो हिस्सा हो त्यो गर्व। लेख्नुको प्रतिक्रिया र ऊर्जा त्यही वरपर शक्तिमान् ठान्छ हरेक लेखकले, अक्षरकर्मीले।

मेरो लेखाइले समाजलाई नचिन्ने? व्यक्तिसत्तालाई घुऱ्यानमा मिल्काउने? रूपान्तरणको सौन्दर्यलाई किनारतिर धकेल्ने? स्थितिलाई नपढीकन पोगटा प्रमाण भेला गर्न दगुर्ने?

विपक्षमा बसेँ म।

अन्यौलका उखर्माउलाहरू निबन्धका विषय बने। आफ्नै सामु विसङ्गत चरित्रका पङ्क्तिहरूले घाइते समाजका अनुहार निबन्धका चरित्र भए। जितिसकेर पनि हार्नुको ऐँठन बोकी-बोकी चल्ने अनुहारको दुखेसो सुने मेरा निबन्धले।

सिङ्गो देश अनेक प्रसङ्गमा जीवित छ। कति भयानक रोग, शोक र भोकको शृङ्खलाले आक्रान्त नपारेको होइन। निबन्धको अन्तर्यात्रा तिनै शृङ्खलाको आवाज, सुर र लयभन्दा पनि हुन्छ। बेमेलको अर्को नाम भएर बितिरहेको समय चिन्ने र पढ्ने प्रयास 'एक हातको ताली'ले पनि गरेकै हो।

अरू धेरै थोकको चाहना होइन। सुखले, खुसीले र सानै सम्पन्नताले बाँच्न पाऊँ, नेपाली अपेक्षा त्यहाँभन्दा अतिशय ठूलो होलाजस्तो त लाग्दैन। तर भइरहेको त देखिएन– न्याय, स्याहार वा ममता।

यसो भन्छु–

नागरिक एकातिर, सत्ता अर्कातिर । समाज एकातिर, शक्ति अर्कातिर। अपेक्षा एकातिर, पूरक पक्ष अर्कातिर। यी दुर्दान्त अवस्थाको किचाघान देखिरहेको छु ।

अनि यो 'एक हातको ताली' बज्न पुग्यो ।

नमिलेको मन छ। नहाँसेको समाजले रुवाइको मूल्यसमेत तिर्न सक्तैन। एकै हातको संयोजन राम्रो छैन भने दुवै हात कसरी मिल्छन् र ? प्रतीकात्मकताको सहारामा भनेँ मैले– 'रुग्ण छ हाम्रो हालखबर !'

नेपाली निबन्धको हिजो सिँढी धेरैपटक मनमौजी चढ्ने गरेँ, झर्ने गरेँ। कति उज्यालो चाहना र शब्द-संसारको मूल्य बोकेको ? दर्बिलो र गर्बिलो छ– त्यो विधाको इतिहास। छातीभरि निबन्धको महत्ताले मलाई अझै आफ्नो काममा लागिरहन उज्यालो बिहानीले दैलो घरक्क खोलेको सङ्केत सुनाउँछ ।

अनन्त भूदृश्य र भू-परिवेशले लट्ठिन्छु। मलाई निबन्धका बाली लाउन र फसल उठाउन भ्याईनभ्याई हुन्छ। सधैँको हतारो, सधैँको घचारो ।

सनातन संस्कृतिलाई गमेर नलेखी भएकै छैन। जातीय महिमाका चरित्र नउतारी भएकै छैन। क्षेत्रीय कथाका फग्लेटा नछिचोली भएकै छैन। प्राकृतिक वैभवका रहस्य नटिपी भएकै छैन।

मेरो निबन्धकारिता यिनै परिवेशलाई पर्गेल्ने योजनामा आतुर छ, एकनासले ।

जर्जियाली राष्ट्रपति अर्थात् तत्कालीन सोभियत सङ्घका विदेशमन्त्री एड्वर्ड सेभनार्जेले कतै भनेको सम्झिरहेको छु– 'जीवनमा एउटा रूख रोपी हुर्काउनु, एउटा बालक जन्माएर हुर्काउनु र एउटा ग्रन्थ लेख्नु ! असली जीवनको परीक्षा त्यहीँ हुन्छ !'

तीनै कार्य सम्पन्न भए पनि अघिल्ला दुईभन्दा पछिल्लो एउटामा मैले गतिलै सामाजिक स्वीकारोक्ति पाएँ, प्रतिक्रिया पाएँ र प्रशंसा पाएँ ।

'मदन पुरस्कार' त्यही स्वीकार, त्यही प्रतिक्रिया र त्यही प्रशंसाको एक प्रमाणको रूपमा लिएको छु मैले ।

नेपाली निबन्धको संसार लर्तरो छैन। अघिल्ला कालखण्ड हेर्दा मनग्गे प्राप्ति देख्न सकिन्छ। त्यही प्राप्तिलाई असन्तोष मान्ने मान्छेमा परेँ म। अनि निबन्धको अरू उपलब्धिका निम्ति यात्रा गर्ने जाँगर देखाउँदै छु।

यी प्रश्नहरू उठिरहन्छन्–

किन कम लेखिन्छन् निबन्धहरू? किन कम सहभागिता भइरहेछ निबन्ध विधामा। किन यसको मूल्यबोध थोरै भएको? किन फुक्न नसकेको निबन्धको धरातल। किन हाउभाउ, कटाक्ष थोरै देखिन्छ निबन्धको? तर यी सबै प्रश्नहरूको जवाफ मदन पुरस्कारले यसपटक दिएको छ – 'कम नआँकौं निबन्धलाई !'

त्यसैले विधागत रूपमै समग्र हिसाबले नयाँ, प्रयोगशील र आजको निबन्ध स्वीकृत भएको छ। अविश्रान्त, निरन्तरता र गतिशीलताको फेरि एकपटक खैखबरी भएको छ।

नेपाली निबन्धले संरक्षकत्व पाएको हो– यो पुरस्कार !

२५ वर्षको साहित्यिक मार्चपासमा सम्झौताविहीन भएर निबन्धहरूको जोहोमा लागिरहेँ। सातओटा निबन्धका कृतिहरूले आ-आफ्नै स्वर दिएर निबन्धका सिँढी उक्लेको सम्झन्छु यतिबेला।

मेरो कर्तव्य हो– यस धारणाबाट प्रेरित छु म।

राष्ट्रसेवा भन्नोस्, भाषासेवा भन्नोस्, भावनासेवा भन्नोस्, शिल्पसेवा भन्नोस् वा चेतनासेवा भन्नोस्– 'एक हातको ताली'ले निबन्धको गति पछ्याएर लम्केकै हो।

अरू दर्शन मनमा पाल्न सकिनँ- देशको सग्लो मन जीवनभरि वेगवान् भएर लेखिरहन सकूँ।

बधाईका शब्द कानभरि गुन्जिँदा नि माथिको दर्शन घरीघरी प्रतिध्वनि भएर आइजाइ गरिरह्यो ... गरिरह्यो ...।

बिसौनीमा, निबन्धको मूल्यलाई स्वीकार्नेहरूप्रति आभार भन्दछु। मेरो सम्झौताहीन लेखन– मर्मलाई बुझिदिनुहुने प्राज्ञिकवर्गलाई सम्झन चाहन्छु।

अध्यक्षज्यू मेरो 'मनफूल' तपाईंलाई !

नमस्कार छ, सबै-सबैमा।

धन्यवाद !"

यति भनेर युवराजजी बसेपछि अघि अध्यक्ष दीक्षितजीले भनेको मदन पुरस्कारद्वारा प्रकाशित पुस्तक 'गुरुभेटी (महाकविमा)' को लोकार्पण गरियो यो कार्य सभाका 'हर्ताकर्ता-द्वय'का आग्रहबमोजिम कुमारी ईशा भुजेलले ल्याई तीन जना प्रमुख व्यक्तित्वहरू (श्री नीलाम्बर आचार्य तथा ब्यौलाद्वय) लाई टक्र्याइन् । अनि उहाँहरूले पाहुनाकापी दस्तखत गर्नुभयो। त्यति भएपछि सो पुस्तकको विमोचन या लोकार्पण भएको मानियो भनेर सुधा ओझाले बताउनुभयो अनि ज्ञाननिष्ट ज्ञवालिले सभालाई जानकारी दिँदै भन्नुभयो आज समारोहमा उपस्थित सबैलाई उक्त पुस्तक एक-एकप्रति उपलब्ध हुनेछन्। तल प्राङ्गणमा राखिएको पाहुनाकापीमा सही गरेर सो लिनुहोला भन्ने पनि अनुरोध गर्नुभयो। त्यसपछि सभाको अन्त्यमा धन्यवाद ज्ञापनको कार्यक्रम थियो सदस्य-सचिवको। सचिवजी कुन्द दीक्षित देशबाहिर हुनुभएकाले सो पढ्ने काम गुठीका सदस्य कनक दीक्षितले गर्नुभयो र भन्नुभयो–

**"आदरणीय अध्यक्षज्यू, नीलाम्बर आचार्यज्यू, आजका सम्मानित 'ब्यौला'द्वय तथा अतिथिज्यूहरू,**

मदन पुरस्कार गुठीको परम्परा हो अन्त्यमा धन्यवाद ज्ञापन गर्ने काम सदस्य-सचिवको हुन्छ। म त्यसैका लागि उभिएको छु।

सधैँ म धन्यवाद ज्ञापन अध्यक्षज्यूलाई धन्यवाद दिएर सुरु गर्थें। यसपटक अध्यक्षभन्दा पहिले नेपालका मिडियालाई धन्यवाद भन्न मन लाग्यो। अध्यक्षज्यूलाई धन्यवाद दिने त सधैँभरि अन्तरनिहित छँदै छ। मिडिया अर्थात् पत्रकार बन्धुहरूलाई धन्यवाद दिनुचाहिँ मेरो स्वार्थभित्र पनि पर्छ, किनभने म आफै पत्रकारसमेत भएकाले यो गुठीले दिएको धन्यवादको केही अंश मेरो भागमा पनि पर्छ। भए पनि यसपटक पत्रपत्रिकामा हाम्रा दुई पुरस्कारका बारेमा निकै राम्रा टिप्पणीहरू पढ्न सुन्न पाइयो। पत्रकार बन्धुहरूलाई धेरै धन्यवाद छ।

यसपलि पत्रकार बन्धुहरूलाई यसरी सकारात्मक बनाइदिने भने तपाईंहरू दुई जना सज्जनहरू नै हुनुहुन्छ। त्यसैले तपाईंहरू दुवै जना श्री रामशरण दर्नाल र श्री युवराज नयाँघरेलाई म विशेष धन्यवाद अर्पण गर्छु। माननीय नीलाम्बर आचार्यज्यू, तपाईंलाई त धन्यवाद मात्र भनेर पनि पुग्दैन, म कृतज्ञता ज्ञापन गर्छु। आफ्नो व्यस्त समय अलिकति



*श्री रामशरण दर्नालको अभ्यर्चना गर्दै गुठीका अध्यक्ष श्री कमलमणि दीक्षित, साथमा देखिनुहुन्छ बायाँबाट गुठीका कार्यालय-सचिव श्री गजेन्द्रनाथ रेग्मी, माननीय श्री नीलाम्बर आचार्य, डा. गोविन्द टण्डन र डा. दयाराम श्रेष्ठ 'सम्भव'।*



*श्री रामशरण दर्नाल पुरस्कार रकम स्वीकार गर्दै।*



श्री युवराज नयाँघरेलाई ओल्क्याई गुठीका अध्यक्षसमक्ष ल्याउँदै विद्वान् माधवलाल कर्माचार्य तथा डा. हर्षबहादुर बूढा । बायाँ गुठीका कार्यालय-सचिव श्री गजेन्द्रनाथ रेग्मी, कवचमा बसेका श्री रामशरण दर्नाल ।



पुरस्कार रकम स्वीकार गर्दै श्री युवराज नयाँघरे । अरू देखिएका बायाँबाट श्री गजेन्द्रनाथ रेग्मी, श्री कमलमणि दीक्षित, श्री माधवलाल कर्माचार्य र डा. हर्षबहादुर बूढा । कवचमा बसेका अलिकति मात्र देखिने माननीय नीलाम्बर आचार्य ।



पुरस्कार संस्थापिका र पुरस्कारका कारणीका फोटोमन्तिर गुठीका अध्यक्ष श्री कमलमणि दीक्षित तथा समारोहका विद्वान् प्रवक्ता माननीय नीलाम्बर आचार्य ।



समारोहस्थल रातो बङ्गला स्कूलको 'कमलमणि थिएटर'मा समावेश विद्वान्वर्ग ।



*समारोहमा उपस्थित केही विद्वान्‌हरू– दायाँबाट श्री राजेश्वर देवकोटा, श्री ॐकारप्रसाद गौचन, श्री सुशील प्याकुर्‍याल, श्री शिवप्रसाद श्रेष्ठ तथा मोदनाथ प्रश्रित ।*




*"ग्रुप फोटो मदन पुरस्कार २०६५" बायाँबाट श्री कनकमणि दीक्षित, समारोहका 'एमसी' (सभाका हर्ताकर्ता-द्वय) सुधा ओझा तथा ज्ञाननिष्ठ ज्ञवाली, श्री युवराज नयाँघरे, माननीय नीलाम्बर आचार्य, श्री रामशरण दर्नाल, श्री कमलमणि दीक्षित तथा श्री गजेन्द्रनाथ रेग्मी ।*

हामीलाई बाँडेर यति सारगर्भित र मीठो विद्वद्प्रवचन तयार पारिदिनुभयो, यहाँसम्म आई त्यो प्रस्तुत गरिदिनुभयो। मदन पुरस्कार गुठीको तर्फबाट म आभार प्रकट गर्दछु ।

आज हाम्रा दुई 'ब्यौला'हरूलाई ओल्क्याउनुहुने चार जना वयोवृद्ध र ज्ञानवृद्ध विद्वान्हरूलाई पनि हार्दिक धन्यवाद टक्राउँछु। अनि, आज बिदा भएको दिनमा पनि आफ्ना चाडबाडको कामकाज छाडेर यस समारोहमा उपस्थित भई हाम्रो हौसला बढाइदिनुहुने तपाईं महिला तथा सज्जनवृन्दमा पनि म कृतज्ञतापूर्वक धन्यवाद निवेदन गर्दछु ।

रातो बङ्गला स्कूलले गुठीमाथि सद्भाव राखी यो भव्य 'कमलमणि थिएटर' यस कार्यक्रमका लागि उपलब्ध गराइदियो, गुठी परिवार कृतज्ञ छ । म यस स्कूलका अधिकारीवर्गप्रति आभार प्रकट गर्दछु । यसका सबै बन्दोबस्त गर्ने स्टाफहरूलाई पनि हाम्रो धन्यवाद छ ।

रातो बङ्गला भान्छाघरका कर्मचारीहरूले नै ऐले एकैछिनपछि हामीले खाने चियाचमेनाको चाँजो मिलाएकोमा उहाँहरूलाई म अग्रिम धन्यवाद भन्छु । तर तल गएर यसको रसास्वादन गरेपछि त्यो तपाईंहरूलाई मनपर्‍यो भने तपाईंहरूले पनि उहाँहरूलाई धन्यवाद दिनुहोला भन्ने आशा गर्दछु ।

यो औपचारिक धन्यवादको कार्य सकिएपछि म अलिकति अनौपचारिक कुरा पनि राख्न चाहन्छु । त्यो के भने, मदन पुरस्कार गुठी र मदन पुरस्कार पुस्तकालय भन्ने दुईओटा स्वसासित संस्थाहरू छन् हाम्रा। तिनका काम कर्तव्य अलग-अलग छन् तापनि यी दुवै संस्थाको मूल उद्देश्य भनेको नेपाली भाषाको सेवा नै हो र यसको सञ्चालनको जिम्मा पनि सम्बन्धित एकै थरीबाट भैआएको छ। अब यी दुवै संस्थाको कानुनतः अस्तित्व पृथक्पृथक् रहे पनि एउटै छातासंस्था 'मदन पुरस्कार' अन्तर्गत गर्न सकिन्छ कि भन्नेतर्फ पनि हामीहरू विचार गरिरहेका छौं । दाइले लेखेर छाडी गएको यो औपचारिक धन्यवाद ज्ञापनको अन्तिम हरफहरू पढ्नुभन्दा पहिले म पनि अलिकति अनौपचारिक कुरा थप्न चाहन्छु 'मदन पुरस्कार' छाता संस्थाको सुरुवात त हामीले आज विमोचन भएको 'गुरुभेटी' पुस्तकबाटै गरिसक्यौं। अब अरू केके गर्नुपर्छ त्यतापट्टि हामी हेर्दै छौं। सर्वप्रथम त यी दुवै संस्थालाई

एकै छानामुनि बस्ने व्यवस्था गर्न खोज्दै छौँ हामीहरू। त्यसका लागि हाम्रा बुबा (अध्यक्षज्यू) ले २०४१ सालमा लालमोहर गरी मपुपुलाई दान दिएको अहिलेको भाउले करोडौँ पर्ने घरजग्गामा आधुनिक पाराले सर्वसम्पन्न एउटा भवन निर्माण गर्न सकिन्छ कि भनी प्रयास गर्दै छौँ। त्यसका लागि मपुपुको सदस्य सागरशमशेर राणाको संयोजकत्वमा मसमेत रहेको एउटा समिति बनेको छ। त्यसले रकम जुटाउन सक्यो भने भाषा, साहित्य र संस्कृति (पुस्तकालय र अडिटोरियमसमेत भएको) समेट्ने बहाल पाराको एउटा सुविधायुक्त घर बनाउने छ। हामी अहिले नै धेरै अशावादी त भइहाल्न सक्दैनौँ तर हामी प्रयासरत छौँ भन्ने नम्र निवेदन गर्दछु।

यति भन्दै म यो मेरो वक्तव्य टुङ्ग्याउँछु। धन्यवाद !

अब अध्यक्षज्यूको आज्ञाबाट यो सभा विसर्जन भएको जानकारी पनि गराउँदछु।"

यसपछि तल स्कूलको प्राङ्गणमा चियाखाजाको कार्य चल्यो साथै 'गुरुभेटी' पुस्तक वितरण पनि भयो। साँझ साढे पाँच बजेसम्म सबै पाहुना अतिथिहरू बिदा भइसक्नुभएको थियो।

– गजेन्द्रनाथ रेग्मी
कार्यलय-सचिव, मपुगु

*(पृष्ठ २ को बाँकी)*

'बाच्छाईबाजा' बजाउन आएकाहरू तथा बग्गी र हात्तीलाई गएका दस्तुर-खर्चका रकम पनि परेका छन् ।

यो स्रेस्ताबाट एक सय पाँच वर्षअघिको नेपालका सम्भ्रान्त परिवारका (बाहुन क्षेत्रीका) घरमा हुने व्रतबन्ध क्रिया कसरी सम्पन्न हुन्थे भन्ने कुराको अत्यन्त सूक्ष्म तरिकाले अध्ययन गर्न सकिन्छ भने त्यसबेलाको बेसाहा बजारभाउको सत्यतथ्य समेत ज्ञान पाइन्छ । उदाहरणार्थ भनौं– नेपाली छाता, भन्नाले धार्मिक क्रियाकलापमा प्रयोग हुने काठ बाँसको डाडा-भाटा हुने, कपडाको रङ्गीन चित्र भएको छाता, एउटा ४० पैसामा आउँदो रहेछ । बुकुवा बनाउने सर्जाम जम्मा छ पैसाको किनिएको देखिन्छ– २ पैसाको तोरी, २ पैसाको जटामसी १ पैसाको हलेदो। आलु १ धार्नी ५ पैसामा किनेको देखिन्छ भने प्याज १५ पैसा धार्नीमा किनिएको छ। दान गर्ने सुनको प्रतिमा एउटाको पच्चीस पैसाका दरले ७५ पैसामा किनिएको छ । ठाउँठाउँमा पूजा पठाउँदा हाल्ने भेटी- ४/४ पैसाका दरले १४ ठाउँमा पठाउँदा ५६ पैसा हालिएको रहेछ, त्यस व्रतबन्धमा । सबभन्दा बढी रकम केमा खर्च भएछ भनी हेर्दा 'लंबरी पण्डितहरू'लाई भूयसी दक्षिणा दिन रु. २२८/५० गएको देखियो । रुपियाँपैसाकै कुरामा अल्झेर नियाल्दा सबभन्दा अचम्म लाग्ने एउटा दस्तुर देखिन्छ । त्यस व्रतबन्धमा निम्ता गरिएकाले श्री ५ महाराजधिराज पनि आए (पृथ्वीवीरविक्रम) र उनकी मुमा (श्री ५) पनि आइन् । राजा आएपछि उनलाई दर्शन भेटी चढाउनुपर्छ– रिवाज हो । तर त्यहाँ अचम्म देखिन्छ । लेखिएको छ, "श्री ५ र श्री ५ मुमावडामहारानी सिंहदरबार सवारी हुँदा श्री ३ बाट भेट सलामी राखिबक्सेको रु. ८/५० ।" तर व्रतबन्ध गर्ने 'वटुक' कृष्णशमशेरले भने त्यस्तै भेट सलामी १० रुपियाँ राखेको लेखेको छ। यो फरक किन र कसरी भयो बुझिँदैन । त्यस्तै अचम्म लाग्ने फरक दस्तुर 'बाच्छाईबाजा' बजाउनेहरू र पञ्चेबाजा बजाउनेहरूलाई बाँडिएको रकममा देखिन्छ– अघिल्लोलाई १२१ रुपियाँ, पछिल्लोलाई १० रुपियाँ मात्र ! व्रतबन्धका दिन निम्तामा आएकाहरूलाई 'भोजभाग' दिनुपर्थ्यो। ... त्यसमा पनि भएका खर्चको लगत चाखलाग्दो छ । जस्तो "निमता भै सामेल भयाका ज्वाई भांजीको रु. ११७।, नीमता

भयाका र उर्दीले सामेल भयाका जंगीका अफिसर पगरी देषी वानादार समेत के गयाको रु. ५७५। ५० उर्दी भै सामेल भयाका नीजामती अफीसर देखि कामदार कारीन्दा लगायत के रु. २४१। २५"। यस्ता चाख लाग्ने र उदेक लाग्ने अनेक प्रसङ्ग छन् सय वर्ष पुरानो त्यो लामो स्रेस्तालगतमा, यस पानामा त त्यतापट्टि 'चञ्चुप्रवेश' मात्र गर्न सकियो।

त्यस्तै 'चञ्चुप्रवेश' यस सिलसिलामा मपुपुमा रहेको अर्को अभिलेख, ह-३८७ मा पनि गरेर आजलाई यो पाना टुङ्ग्याऊँ। कृष्णशमशेरको व्रतबन्ध भएको पाँच वर्ष जतिपछि १९६५ साल मङ्सिरमा उनको विवाह भएको हो। त्यस विवाहको त्यस्तै मुठा-लगत खर्चको लिखत हो, यो पछिल्लो अभिलेख। यसभित्र ऐले हामी प्रवेश गर्दैनौँ। एकैनासे कुरा भएकाले, थप खोतलखातल गर्नुपरेमा मात्र पछि पसिएला।

## सम्पादकीय

समय कसरी बित्दो रहेछ पत्तै भएन । नेपाली सुरुवात गर्दा पीर लागेको थियो। यसलाई राम्ररी हिँडाउन सकिएला कि नसकिएला; बीचैमा अरूलाई लागेको जस्तो सुकेनासको रोगले, घातक क्षयरोगले पो छोप्ने हो कि ! आदि, इत्यादि । धन्न सबैको माया, स्नेह, सहानुभूति पाइँदै गयो। अब त यो चवन्न वर्षको तन्नेरी बन्न पुगेको छ । अङ्कको हिसाबले हेर्ने हो भने २०० औँ अङ्क हो यो। सम्झँदा पनि कहिलेकाहीँ त साँच्चै नै हो २०० अङ्क पुगेको जस्तो हुन्छ। कतै स्वप्न त होइन यो भनेजस्तो पनि लाग्छ। नहोस् पनि किन पत्र-पत्रिकाको लामो इतिहासको कालखण्डमा कत्रा-कत्रा महान् उद्देश्य राखेर कति निक्ले। थोरै यति थोरै कि औँलामा गन्न हुने मात्र बाँचेका छन्, इतिहास रच्न पाएका छन् । आफूले देख्दा-देख्दै, हेर्दा-हेर्दै कति आफूभन्दा जेठा पत्र-पत्रिकाहरू विलुप्त बने, आफ्नै वयका, हाराहारीका पनि कति त्यसै बिलाए । कहिलेकाहीँ आफूले आफैलाई चिमोटेर के साँचो हो भनेर हेर्नुपर्ने हो कि जस्तो पनि लाग्छ। तर नेपाली २०० औँ अङ्क यहाँको हातमा छ यसैले यो सही हो भन्नै पर्छ ।

यस अङ्कका लागि कसैलाई विषय तोकेर अनुरोधपत्र नपठाई जे चाहनुहुन्छ आफ्नो दृष्टिले उपयोगी सम्झेको विषयमा लेखी दिनुहोस् भन्यौँ । विषय स्वतन्त्रताको कारण भिन्न-भिन्न विषयमा लेखहरू आए, तीमध्ये धेरैजसो संस्मरणात्मक लेख छन्; कुनै इतिहासपरक, कुनै संस्कृतिपरक त कुनै सामाजिक परिवेशसम्बद्ध भिन्नाभिन्नै स्वादका लेखहरू छन् । एककिसिमले क्वाँटीजस्तो छ भनौँ न । कुनै एकको

स्वादमा मात्र रमाउन पाइनेभन्दा पनि सबैको स्वाद आउने किसिमको पूर्तिदायक ! सुरुमा ५०० पृष्ठसम्मको तयार पार्नुपर्ला यो २०० औँ अङ्क किनभने १८५ औँ अङ्क साढे चार सय पृष्ठको हाराहारीको थियो । त्योभन्दा कम पृष्ठको त हुनु होला जस्तो लागेन । एककिसिमले प्रतिस्पर्द्धात्मक भावनाले स्थान पायो मनमा । मनै त हो त्योभन्दा कममा त जानै हुन्न भन्ने विचारले जरो गाड्यो अनि त यत्रो बृहदाकार अङ्क बन्न पुग्यो २०० औँ अङ्क । नेपालीका अझ भनौँ मदन पुरस्कार गुठीका शुभेच्छुक विद्वान्, विदुषीहरूकै देन हो यो यत्रो विशालकाय कलेवर हुनुको रहस्य । उहाँहरू सबैलाई कृतज्ञता ज्ञापन गर्नै पर्छ । यस्तै किसिमको सहयोग अक्षुण्ण रहिरहोस् नेपाली भाषाको श्रीवृद्धिमा । नेपालीलाई आजको अवस्थासम्म ल्याइपुऱ्याउन मद्दत गर्ने अतीतका विद्वान्, विदुषी तथा स्रष्टाहरूलाई पनि यस अवसरमा धन्यवाद दिनै पर्छ । नेपालीको जन्म हुँदादेखि अहिलेसम्म जस-जसले, जुन रूपमा जे-जसरी सहयोग पुऱ्याउनुभयो त्यो स्तुत्य छ ।

मदन पुरस्कार गुठीको मुखपत्रजस्तो गरेर आजसम्म जति नेपाली अङ्कहरू प्रकाशित भए त्यसले नेपाली साहित्यको इतिहासमा जरुर केही इँटा थप्ने काम गरेको छ होला जस्तो लाग्छ । हुन त यो हामीले भन्दा पनि नीरक्षीरविवेकी समीक्षक, अध्येता एवं पाठकहरूले भन्ने कुरा हो । कसैले तपाईं भनोस् कि नभनोस् आफै मपाईं हुन खोजेको चाहिँ जरुर होइन । नेपाली भाषा-साहित्यको सेवा गर्न मदन पुरस्कार गुठीको स्थापनाले सिर्जना गरेको उपयुक्त परिस्थितिको स्रोतको रूपमा सदैव प्रेरणाको खानीतुल्य बनेर रहने सम्माननीया रानी जगदम्बादेवी र ले.ज. मदनशमशेर ज.ब.रा.लाई पनि सम्झनै पर्ने हुन्छ । उहाँहरूको कीर्तिलाई यसले बढायो बढाएन त्यो अरूले भन्ने कुरा हो तापनि हामी भने सदैव ऋणी छौँ उहाँहरूप्रति । उहाँहरूको नामले स्थापित मदन पुरस्कार गुठीको नामबाट नेपाली भाषा, साहित्यको क्षेत्रमा विविध रूपले सेवा गर्ने अवसर जुटेको छ, जुटाइदिएको छ । त्यसो त "नेपाली भाषामा उच्चकोटीका ग्रन्थहरूको सिर्जना भई भाषा भण्डार उत्तरोत्तर बढ्दै जाओस् र त्यसको लागि लेखक वर्गलाई प्रोत्साहन मिलोस्" भन्ने उद्देश्य नै मदन पुरस्कार

गुठीको रहेको छ । यसले जे-जति कार्य गर्छ त्यसैलाई दृष्टिगत गरेरै गर्छ ।

समालोचना र सम्पादनका क्रममा जीवित तथा मृत दुवै थरी कवि, लेखक तथा महामनाहरूलाई 'तपाईं' नभनी ऐतिहासिक 'तिमी' नै प्रयोग गर्ने विधि नेपालीले अपनाइआएकोमा त्यसलाई यस २०० औँ अङ्कमा त्यही रूपमा ग्रहण नगरिएको सादर जानकारी गराउँदछौँ ।

यो २०० औँ अङ्कलाई बृहदाकार र महनीय बनाउन सघाउ पुऱ्याउने सबै लेखक, स्रस्टाहरूप्रति आभार व्यक्त गर्दै लगन र परिश्रमका साथ दिनरात नभनी खटिने जगदम्बा प्रेसका कर्मचारी, मदन पुरस्कार गुठीका कार्यालय-सचिवलगायत प्रत्यक्ष, अप्रत्यक्षरूपले सहयोग पुऱ्याउने सबैप्रति धन्यवाद ज्ञापन गर्दछौँ ।

(– गो.ट.)

## यो अङ्क

कसैले तपाईं भनोस् नभनोस् आफै मपाईं बन्नु उचित होइन । त्यो जान्दाजान्दै पनि, बुझै पचाएर, क्षमा माग्दै भन्नुपरेको छ– 'नेपाली'को यो पूर्णाङ्क २०० अनेक प्रकारले ऐतिहासिक भएर फुल्किएको छ । पैलो त के भने ('गोर्खापत्र' बाहेक) कुनै नेपाली पत्रपत्रिका निरन्तर रूपमा पचास वर्षसम्म एकनास निस्केको छैन । 'नेपाली'ले यो अभिलेख कायम गरेको छ यस अङ्कबाट । कैल्यै नरोकिई, कुनै अङ्क संयुक्ताङ्कसम्म नगरी 'नेपाली'ले आफ्नो पचास वर्ष पूरा गरेको छ । त्यसबाट हामीले केही आत्मसन्तुष्टि प्राप्त गरेका छौँ । अरु अङ्क १ देखि २०० सम्म पुग्दा पनि 'नेपाली'ले आफ्नो रूपरङ्गमा समेत परिवर्तन गरेको छैन। समजीले बनाइदिएको 'नेपाली'को लोगो-नाम अगाडि मुखपृष्ठमा र पछाडि एकै जना सम्पादकको नाम यति दिन बोकेर यो देखा परिरहेको छ। त्यो पनि एउटा 'रेकर्ड' नै हो भनिन्छ । त्यो होस् ।

तर, 'नेपाली' एउटा सानो आकारको पत्रिका हो, साधारणत: ४०-५० पृष्ठमात्र लिएर निस्कन्छ यो । हो, कैलेकाहीं पृष्ठसङ्ख्या सयसम्म पनि पुग्छ, त्यो अपवाद हो । त्यस हिसाबले हाम्रो मदन

पुरस्कार स्वर्ण जयन्ती विशेषाङ्क पूर्णाङ्क १८५ अभूतपूर्व ठूलो भएको थियो । त्यसलाई पनि आकारमा उछिनेर यो अङ्क आएको छ । त्यो आफैमा त्यति महत्त्वपूर्ण कुरा होइन, तैपनि त्यसले हाम्रो यत्तिका वर्षको पृष्ठमा कन्जुस्याइँको बेजो पुऱ्याउँछ कि भन्ने तर्क गर्न मन लाग्छ ।

अरू अर्को इतिहास पनि रचिएको छ यसपटक– 'नेपाली'को यो पूर्णाङ्क एकै साथ मुद्रित रूपमा र डिजिटल प्रविधिबाट 'सी.डी.' का रूपमा समेत एकै साथ विमोचित हुँदै छ, (स्व.मदनशमशेरको ८१ औँ जन्मजयन्तीका दिन) मङ्सिर १ गते । अनि त्यसै दिन यसलाई 'अन-लाइन' पनि पठाइँदै छ मदन पुरस्कारको 'वेब-साइट', इन्टरनेटमा । त्यसबाट संसारमा छरिएर रहेका लाखौँ नेपाली पाठकलाई यो ऐतिहासिक प्रति तत्काल उपलब्ध हुनेछ ।

'अन-लाइन' पठाइएको 'नेपाली' पूर्णाङ्क २०० कामलाग्दो देखियो भने यसका पछिपछिका अङ्क पनि त्यसै गरी पठाउन हामीलाई उत्साह जाग्नेछ ।

यत्ति ।